# अथ अष्टमः स्कन्धः

## अथ प्रथमोऽध्यायः

### स्वायम्भुव आदि मन्वन्तरहरूको वर्णन

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**स्वायम्भुवस्येह गुरो वंशोऽयं विस्तराच्छ्रुतः ।**

**यत्र विश्वसृजां सर्गो मनूनन्यान् वदस्व नः ॥ १ ॥**

**पदार्थ–**
**गुरो** = हे गुरु शुकदेवजी
**इह** = यहाँ
**स्वायम्भुवस्य** = स्वायम्भुव मनुको
**अयं** = यो
**वंशः** = वंश
**विस्तरात्** = विस्तारपूर्वक
**श्रुतः** = सुनियो
**यत्र** = जुन वंशमा
**विश्वसृजां** = मरीचि आदि प्रजापतिहरूको
**सर्गः** = सृष्टि (भयो, अब)
**नः** = हामीलाई
**अन्यान्** = अरू
**मनून्** = मनुहरूको वंश
**वदस्व** = बताउनुहोस्

**वाक्यार्थ–** हे शुकदेवजी ! हजुरबाट मैले स्वायम्भुव मनुको वंशपरम्पराको बारेमा विस्तारपूर्वक सुनैं जुन वंशमा मरीचि आदि प्रजापतिहरूको सृष्टि भएको थियो। अब अरू मनुहरूको वंशपरम्परा बताउनुहोस्।

**यत्र यत्र हरेर्जन्म कर्माणि च महीयसः ।**

**गृणन्ति कवयो ब्रह्मंस्तानि नो वद शृण्वताम् ॥ २ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे शुकदेवजी
**कवयः** = ज्ञानीहरू
**यत्र यत्र** = जुन-जुन मन्वन्तरमा
**महीयसः** = महान्
**हरेः** = भगवान् श्रीहरिका
**जन्म** = अवतार र
**कर्माणि च** = लीलाहरूसमेत
**गृणन्ति** = वर्णन गर्दछन्
**तानि** = ती-ती मन्वन्तरमा भएका लीलाहरू
**शृण्वताम्** = सुन्न चाहने
**नः** = हामीहरूका लागि
**वद** = बताउनुहोस्

**वाक्यार्थ–** हे शुकदेवजी ! ज्ञानीहरू विभिन्न मन्वन्तरमा भगवान् श्रीहरिद्वारा लिइएका अनेक अवतार र लीलाहरूको वर्णन गर्दछन्। हामीलाई सर्वश्रेष्ठ भगवान्‌का ती-ती मन्वन्तरमा भएका लीलाहरू सुन्ने इच्छा छ, त्यसैले ती लीलाहरू बताउनुहोस्।

**यद् यस्मिन्नन्तरे ब्रह्मन् भगवान् विश्वभावनः।**
**कृतवान् कुरुते कर्ता ह्यतीतेऽनागतेऽद्य वा॥ ३॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे परमज्ञानी शुकदेवजी
**हि** = निश्चय नै
**विश्वभावनः** = विश्वात्मा
**भगवान्** = भगवान् श्रीहरिले
**अतीते** = बितेका
**अनागते** = आउनेवाला
**अद्य वा** = अथवा अहिलेका
**यस्मिन्** = जुन-जुन
**अन्तरे** = मन्वन्तरमा
**यत्** = जुन-जुन लीला
**कृतवान्** = गर्नुभयो
**कुरुते** = गर्दै हुनुहुन्छ र
**कर्ता** = गर्नुहुनेछ
(ती सबै सुनाउनुहोस्)

**वाक्यार्थ–** हे शुकदेवजी ! विश्वात्मा भगवान् श्रीहरिले विभिन्न मन्वन्तरमा अनेक लीलाहरू गर्नुहुन्छ। उहाँले बितेका मन्वन्तरमा जे लीला गर्नुभयो, अहिलेको मन्वन्तरमा जे गर्दै हुनुहुन्छ र आउनेवाला मन्वन्तरमा जे गर्नुहुनेछ ती सबै लीलाहरू मलाई सुनाउनुहोस्।

**ऋषिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**मनवोऽस्मिन् व्यतीताः षट् कल्पे स्वायम्भुवादयः।**
**आद्यस्ते कथितो यत्र देवादीनां च सम्भवः॥ ४॥**

**पदार्थ–**
**अस्मिन् कल्पे** = यो कल्पमा
**षट्** = छ ओटा
**स्वायम्भुवादयः** = स्वायम्भुव आदि
**मनवः** = मनुहरू
**व्यतीताः** = बितिसके
**यत्र च** = जुन मन्वन्तरमा
**देवादीनां** = देवताहरूको
**सम्भवः** = उत्पत्ति भयो
**आद्यः** = त्यो पहिलो
(स्वायम्भुव मन्वन्तर)
**ते** = तपाईंलाई
**कथितः** = सुनाइयो

**वाक्यार्थ–** हे राजा ! यो अहिलेको कल्पसम्ममा स्वायम्भुव आदि छ ओटा मनुहरूको समय बितिसक्यो। तीमध्ये पहिलो स्वायम्भुव मन्वन्तरमा देवताहरूको उत्पत्ति भएको थियो। यो प्रसङ्ग मैले तपाईंलाई सुनाइसकें।

**आकूत्यां देवहूत्यां च दुहित्रोस्तस्य वै मनोः।**
**धर्मज्ञानोपदेशार्थं भगवान् पुत्रतां गतः॥ ५॥**

**पदार्थ–**
**तस्य** = ती
**मनोः** = स्वायम्भुव मनुका
**दुहित्रोः** = दुई छोरीहरू
**आकूत्यां** = आकूति र
**देवहूत्यां च** = देवहूतिमा पनि
**वै** = निश्चय नै
**भगवान्** = भगवान् विष्णु
**धर्मज्ञानोपदेशार्थं** = उनीहरूलाई धर्म र ज्ञानको उपदेश गर्न
**पुत्रतां** = पुत्रको रूपमा
**गतः** = प्रकट हुनुभएको थियो

**वाक्यार्थ–** स्वायम्भुव मनुका दुई छोरीहरूमध्ये आकूतिलाई धर्मको र देवहूतिलाई ज्ञानको उपदेश गर्न भगवान् विष्णु उनीहरूको पुत्रको रूपमा प्रकट हुनुभएको थियो।

**कृतं पुरा भगवतः कपिलस्यानुवर्णितम् ।**

**आख्यास्ये भगवान् यज्ञो यच्चकार कुरूद्वह ॥ ६ ॥**

| **पदार्थ–** | **कृतं** = लीलाचरित्र | **यज्ञः** = यज्ञावतार लिएर |
|---|---|---|
| **कुरूद्वह** = हे कुरुश्रेष्ठ परीक्षित् | **पुरा** = पहिले नै | **यत्** = जे लीला |
| **भगवतः** = भगवान् | **अनुवर्णितम्** = बताइयो | **चकार** = गर्नुभयो (त्यो) |
| **कपिलस्य** = कपिलदेवको | **भगवान्** = भगवान्ले | **आख्यास्ये** = बताउँछु |

**वाक्यार्थ–** हे परीक्षित् ! भगवान् कपिलदेवका पवित्र लीलाचरित्रहरू मैले पहिले (तृतीय स्कन्धमा) नै बताइसकेको छु। अब म यज्ञावतार भगवान्को लीलाचरित्र सुनाउँछु।

**विरक्तः कामभोगेषु शतरूपापतिः प्रभुः ।**

**विसृज्य राज्यं तपसे सभार्यो वनमाविशत् ॥ ७ ॥**

| **पदार्थ–** | **विरक्तः** = विरक्त भएर | **तपसे** = तपस्या गर्नका लागि |
|---|---|---|
| **शतरूपापतिः** = शतरूपाका पति | **राज्यं** = आफ्नो राज्य | **वनम्** = जङ्गलमा |
| **प्रभुः** = राजा स्वायम्भुव | **विसृज्य** = छोडी | **आविशत्** = गए |
| **कामभोगेषु** = विषयभोगहरूबाट | **सभार्यः** = पत्नीसहित भई | |

**वाक्यार्थ–** शतरूपाका पति स्वायम्भुव मनुले विषयभोगहरूबाट विरक्त भई आफ्नो राज्य छाडिदिए। अनि उनी आफ्नी पत्नीसहित भएर तपस्या गर्नका लागि जङ्गलमा गए।

**सुनन्दायां वर्षशतं पदैकेन भुवं स्पृशन् ।**

**तप्यमानस्ततो घोरमिदमन्वाह भारत ॥ ८ ॥**

| **पदार्थ–** | **एकेन पदा** = एक पाउले | **तप्यमानः** = तपस्या गर्दै |
|---|---|---|
| **भारत** = हे परीक्षित् | **भुवं** = पृथिवीमा | **इदम्** = यसो |
| **ततः** = त्यसपछि | **स्पृशन्** = टेकेर | **अन्वाह** = भने |
| **सुनन्दायां** = सुनन्दा नदीको किनारमा | **वर्षशतं** = सयौँ वर्षसम्म | |
| | **घोरम्** = कठोर | |

**वाक्यार्थ–** हे परीक्षित् ! स्वायम्भुवले सुनन्दा नदीको किनारमा गई एक पाउले मात्र पृथिवीमा टेकी सयौँ वर्षसम्म अत्यन्त कठोर तपस्या गरे। तपस्या गर्दागर्दै उनले यसप्रकार भगवान्को स्तुति गरे।

**मनुरुवाच** (मनुले भने)

**येन चेतयते विश्वं विश्वं चेतयते न यम् ।**

**यो जागर्ति शयानेऽस्मिन्नायं तं वेद वेद सः ॥ ९ ॥**

**पदार्थ–**
**येन** = जुन परमात्माद्वारा
**विश्वं** = संसार
**चेतयते** = चेतन बन्दछ र
**विश्वं** = संसारले चाहिँ
**यम्** = जसलाई
**न चेतयते** = चेतन बनाउँदैन
**अस्मिन्** = यो सम्पूर्ण संसार
**शयाने** = निदाउँदा
**यः** = जो
**जागर्ति** = जागिरहनुहुन्छ
**तं** = ती परमात्मालाई
**अयं** = यो कुनै पनि प्राणीले
**न वेद** = जान्न सक्दैन
**सः** = उहाँले चाहिँ
**वेद** = सबैलाई जान्नुहुन्छ

**वाक्यार्थ–** यो सम्पूर्ण संसार परमात्माद्वारा नै चेतन बनेको (प्रकाशित भएको) छ तर परमात्मा चाहिँ संसारद्वारा चेतन बन्नुभएको (प्रकाशित हुनुभएको) छैन। सम्पूर्ण प्राणीहरू निदाउँदा पनि परमात्मा जागिरहनुहुन्छ तर प्राणीहरूले उहाँलाई जान्न सक्दैनन्। उहाँले चाहिँ सबैलाई जान्नुहुन्छ।

**विवरण–** यस श्लोकमा ज्ञानस्वरूप आत्माको प्रकाशद्वारा सम्पूर्ण विश्वप्रपञ्च प्रकाशित र सत्तावान् हुन्छ भन्ने बताइएको छ। कुनै पनि वस्तु छ भन्न त्यसको सत्ता सिद्ध हुनुपर्दछ, सत्ताको सिद्धि ज्ञानद्वारा मात्र हुन्छ। संसारमा हामीले थाहै नपाएका अनगिन्ती पदार्थहरू होलान्। ती पदार्थहरूको सत्ता हाम्रो लागि छैन। यसर्थ संसारलाई सिद्ध हुन ज्ञानस्वरूप आत्माको आवश्यकता पर्छ, तर आत्मालाई सिद्ध हुन संसारको आवश्यकता छैन। आत्मा स्वयंप्रकाश र ज्ञानस्वरूप हो। आफैँ ज्ञानरूप भएको हुनाले यसको सत्ता स्वतः सिद्ध छ। सामान्य मानिसहरू पनि आफू छु कि छैन भनी आफ्नो विषयमा सन्देह गर्दैनन्। यसबाट के थाहा हुन्छ भने ज्ञानस्वरूप आत्मा स्वतः सिद्ध सत्य हो। प्राणीहरू गाढा निद्रामा निदाउँदा पनि यो साक्षी आत्माले उनीहरूको गाढा निद्रालाई प्रकाशित गरिरहेको हुन्छ। नत्र म भुसुक्कै निदाएछु भन्ने स्मरण हुने थिएन। सदा जागा रहिरहने यही साक्षीले प्राणीहरूका हरेक अवस्थालाई प्रकाशित गर्दछ, तर उनीहरू यसलाई बुझ्न सक्दैनन्। श्लोकमा आएको **अयं** यस पदले जीवलाई बुझाएको छ भने **तं** पदले साक्षीलाई बुझाएको छ। हुन त जीव र साक्षी छुट्टाछुट्टै होइनन् किनभने जीवभाव केवल अज्ञानको कारणले खडा भएको हो तर व्यवहारमा सबै प्राणीहरूले कर्ता-भोक्ता जीवात्मालाई मात्र आफू भनी जानेका हुन्छन्, आफ्नो असली स्वरूप साक्षीलाई चाहिँ उनीहरूले जानेका हुँदैनन्। व्यवहारकालको यही भेदलाई लिएर शास्त्रहरूले जीवलाई **अयं** र परमात्मालाई **तत्** भनी छुट्टाछुट्टै शब्दद्वारा बताएका हुन्। अज्ञानका कारणले भिन्न-भिन्न रूपमा देखिएका जगत् र जीव सबैलाई प्रकाशित गर्ने साक्षी नै परम चैतन्य र परम सत्ता हो।

**आत्मावास्यमिदं विश्वं यत्किञ्चिज्जगत्यां जगत्।**
**तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद् धनम्॥ १०॥**

**पदार्थ–**
**इदं** = यो
**विश्वं** = विश्व र
**जगत्यां** = विश्वमा रहने
**यत्किञ्चित्** = जति पनि
**जगत्** = प्राणीहरू छन् ती
**आत्मावास्यम्** = परमात्माद्वारा ढाकिएका छन्
**तेन** = त्यसैले
**त्यक्तेन** = परमात्मालाई अर्पण गरेर मात्र
**भुञ्जीथाः** = भोग गर

**कस्यस्वित्** = कसैको पनि | **धनम्** = सम्पत्तिमा | **मा गृधः** = आसक्ति नगर

**वाक्यार्थ–** यो सम्पूर्ण विश्व एवं यहाँ रहने सबै प्रकारका प्राणीहरू परमात्माद्वारा ढाकिएका छन्। उनै परमात्मालाई समर्पण गरेर मात्र प्राणीहरूले संसारका पदार्थहरूको भोग गर, अनि अरूको सम्पत्तिमा आसक्ति नगर।

**विवरण–** यो श्लोक ईशावास्योपनिषद्को पहिलो मन्त्रसँग मिल्दछ। ईशावास्योपनिषद्मा **ईशावास्यम्** पद छ भने यहाँ **आत्मावास्यम्** पद छ अनि उता **सर्वं** छ भने यहाँ **विश्वं** छ, अन्य सबै पद समान छन्।

प्रस्तुत श्लोकमा संसारका सबै पदार्थहरू आत्माद्वारा व्याप्त भएको बताइएको छ। जसरी घैँटोमा माटो व्याप्त छ र कपडामा धागो व्याप्त छ त्यसै गरी सम्पूर्ण पदार्थहरूमा परमात्मा व्याप्त हुनुहुन्छ। **आत्मावास्य** शब्दको अर्थ हुन्छ– **आत्मना आवास्यम्, सत्ताचैतन्याभ्यां व्याप्तम्** अर्थात् आत्माद्वारा ढाकिएको (आत्माको सत्ता र चैतन्यद्वारा व्याप्त भएको)। सबै पदार्थहरूलाई सत्ता र चैतन्य (प्रकाश) आत्माबाट नै प्राप्त छ। जसरी माटोको सत्तालाई छाडिदिने हो भने घैँटो नामको कुनै वस्तु सिद्ध हुन सक्दैन त्यसै गरी आत्माको सत्ता नपाई कुनै पनि पदार्थको अस्तित्व हुन सक्दैन, अनि आत्माबाट चैतन्य नपाई कुनै पदार्थ प्रकाशित हुन सक्दैनन्।

**तेन त्यक्तेन भुञ्जीथाः** यो पदावलीको अर्थ अनेक प्रकारले गर्न सकिन्छ। **तेन** पदले परमात्मालाई लिने हो भने परमात्माद्वारा प्रदान गरिएका पदार्थहरूको भोग गर भन्ने अर्थ निस्कन्छ। सबै प्राणीहरूलाई भिन्नाभिन्नै परिवेश र समयअनुसार अनेक पदार्थहरू प्रदान गर्ने परमात्मा नै हुनुहुन्छ। त्यसैले हरेक पदार्थको भोग गर्दा यो परमात्माको कृपाले नै प्राप्त भएको हो भन्ने भावना हुनुपर्दछ। **तेन त्यक्तेन भुञ्जीथाः** यसको अर्को अर्थ यसरी गर्न सकिन्छ– **तेन** त्यसैले **त्यक्तेन** परमात्मालाई समर्पण गरेर मात्र **भुञ्जीथाः** भोग गर। यसर्थ सर्वव्यापक र सर्वान्तर्यामी परमात्मालाई अर्पण नगरी केवल आफ्नो लागि मात्र भोग गर्नुहुन्न भन्ने यसको अर्को अर्थ हुन्छ।

ईशावास्योपनिषद्को भाष्यमा शङ्कराचार्यले यस श्लोकको अर्थ यस प्रकार गर्नुभएको छ– आत्मा अर्थात् आफू नै परिपूर्ण ब्रह्मतत्त्व हो र यसैद्वारा सबै पदार्थ सत्तावान् हुन्छन्। मिथ्या र जड जगत् पनि यसकै सत्ता र चैतन्यलाई पाएर सत् रूपले देखिन्छ। यस्तो विचार गर्नाले असत् वस्तुतर्फ मानिसको दृष्टि जाँदैन, आत्मातिर मात्र दृष्टि जान्छ। पदार्थहरू असत्य हुन् भनी तिनीहरूको चिन्तन र वास्ता नगर्नु नै असली त्याग हो र यही त्यागद्वारा मात्र आफूलाई संसारदेखि जोगाउन सकिन्छ। **भुज्** धातुको अर्थ जोगाउनु या रक्षा गर्नु भन्ने पनि हुन्छ, यसकारण **भुञ्जीथाः** यस पदको अर्थ जोगाऊ या रक्षा गर भन्ने पनि हुन्छ। संसारका पदार्थहरूलाई साँचो सम्झेर तिनीहरूमा आसक्ति गर्नाले जन्म–मृत्युको चक्करमा फस्नुपर्दछ। यसर्थ यसबाट आफूलाई जोगाउने उपाय त्याग नै हो। त्यसकारण सांसारिक वस्तुहरूको त्याग गरेर ती वस्तुहरूबाट आफूलाई जोगाऊ भन्ने यस श्लोकको अर्थ हो। त्यसैले व्यवहार गर्दा पनि मानिसले **कस्यस्वित्** अर्थात् अरू कसैको सम्पत्तिमाथि लोभ गर्नु हुँदैन किनभने सम्पत्ति **कस्यस्वित्** अर्थात् कसको नै हुन सक्छ र? सम्पत्ति आदि सबै वस्तु मिथ्या भएकाले ती कसैका पनि होइनन्। त्यसैले ती मिथ्या पदार्थहरूको ग्रहण गर्नु हुँदैन भन्ने यस श्लोकको आशय हो।

**यं पश्यति न पश्यन्तं चक्षुर्यस्य न रिष्यति ।**
**तं भूतनिलयं देवं सुपर्णमुपधावत ॥ ११ ॥**

**पदार्थ–**
**पश्यन्तं** = सबैलाई प्रकाशित गरिरहने
**यं** = जुन परमात्मालाई
**न पश्यति** = (प्राणीले) देख्न सक्दैन
**यस्य** = जुन परमात्माको चाहिँ
**चक्षुः** = दृष्टिशक्ति
**न रिष्यति** = कहिल्यै नष्ट हुँदैन
**तं** = त्यस्ता
**भूतनिलयं** = प्राणीहरूको हृदयभित्र बस्ने
**सुपर्णम्** = जीवसँगै रहेर पनि आसक्तिरहित भएका
**देवं** = स्वयंप्रकाश परमात्माको
**उपधावत** = शरणमा जाऊ

**वाक्यार्थ–** परमात्माले सबैलाई प्रकाशित गरिरहनुभएको छ, तर प्राणीहरू उहाँलाई देख्न सक्दैनन्। उहाँको दृष्टिशक्ति चाहिँ कहिल्यै नष्ट हुँदैन। जीवात्मासँगै हृदयभित्र रहेर पनि आसक्तिरहित भएर रहने त्यस्ता परमात्माको शरणमा जानुपर्दछ।

**विवरण–** यहाँ चक्षु आदि इन्द्रियले परमात्मालाई ग्रहण गर्न नसक्ने हुनाले आँखा भएर पनि प्राणीहरू उहाँलाई देख्न सक्दैनन् भनिएको हो।

**शोभनं पर्णं यस्य सः** यस विग्रहबाट व्युत्पन्न **सुपर्ण** शब्दको अर्थ हुन्छ– राम्रो प्वाँख भएको वा राम्रोसँग उड्न सक्ने। यहाँ **सुपर्ण** शब्द स्वयंप्रकाश परमात्माको विशेषणका रूपमा प्रयोग भएको छ। परमात्मा संसारका सबै पदार्थहरूसँग टाँसिनुहुन्न। उहाँ असङ्ग रहनुहुन्छ। यसर्थ संसारभन्दा माथि भएकाले परमात्मालाई सुपर्ण भनिएको हो। मुण्डकोपनिषद् (३/१/१)मा शरीरलाई रुख मानेर त्यहाँ रहने राम्रो प्वाँख भएका दुई चरा भनी जीवात्मा र साक्षीलाई बताइएको छ। जीवात्मा पनि परमात्माकै अंश भएकाले उपनिषद्मा जीवात्मालाई पनि सुपर्ण भनिएको हो। त्यसै गरी यस श्लोकमा परमात्मालाई सुपर्ण भनिएको छ। सधैँ जीवात्मासँगै बसिरहने परमात्मा जीवको नित्य साथी हो। यही परम तत्त्वको शरणमा जीवहरू जानुपर्दछ, संसारतिर लाग्नुहुँदैन भनी यस श्लोकमा उपदेश गरिएको छ।

**न यस्याद्यन्तौ मध्यं च स्वः परो नान्तरं बहिः ।**
**विश्वस्यामूनि यद् यस्माद् विश्वं च तदृतं महत् ॥ १२ ॥**

**पदार्थ–**
**यस्य** = जसको
**आद्यन्तौ** = आदि, अन्त र
**मध्यं च** = मध्य पनि
**न** = छैन
**स्वः** = आफ्नो
**परः** = पराइ
**अन्तरं** = भित्र
**बहिः** = बाहिर पनि
**न** = छैन
**यस्मात्** = जसबाट
**विश्वस्य** = संसारको
**अमूनि** = आदि, मध्य र अन्त हुन्छ र
**विश्वं च** = संसार पनि
**यत्** = जुन परमात्मस्वरूप छ
**तत्** = त्यो
**महत्** = सर्वव्यापक तत्त्व नै
**ऋतम्** = एक मात्र सत्य छ

**वाक्यार्थ–** परमात्माको उत्पत्ति र विनाश अनि यी दुई बीचको अवस्थिति पनि कहिल्यै हुँदैन। आफ्नो-पराइ, भित्र-बाहिरको भेदले रहित परमात्मा नै संसारको रूपमा देखिनुहुन्छ। संसारको उत्पत्ति, नाश आदि परमात्माबाट नै हुन्छन्। यो संसार कारणरूपले परमात्मस्वरूप नै छ। त्यही सर्वव्यापक परमात्मतत्त्व मात्र सत्य छ।

**स विश्वकायः पुरुहूत ईशः सत्यः स्वयंज्योतिरजः पुराणः।**

**धत्तेऽस्य जन्माद्यजयात्मशक्त्या तां विद्ययोदस्य निरीह आस्ते॥ १३॥**

**पदार्थ–**
**विश्वकायः** = विश्वरूप
**पुरुहूतः** = अनेक नामद्वारा पुकारिने
**सत्यः** = सत्य
**स्वयंज्योतिः** = स्वयंप्रकाश
**अजः** = अजन्मा
**पुराणः** = पुराणपुरुष
**सः** = उनै
**ईशः** = परमात्मा नै
**अजया** = मायारूपी
**आत्मशक्त्या** = आफ्नै शक्तिद्वारा
**अस्य** = यस संसारको
**जन्मादि** = उत्पत्ति, पालन र संहार आदिलाई
**धत्ते** = धारण गर्नुहुन्छ र
**तां** = त्यही मायालाई
**विद्यया** = स्वरूपज्ञानद्वारा
**उदस्य** = नाश गरेर
**निरीहः** = निष्क्रिय भएर
**आस्ते** = रहनुहुन्छ

**वाक्यार्थ–** परमात्मा विश्वरूप हुनुहुन्छ, उहाँका अनेक नामहरू छन्। सत्य, स्वयंप्रकाश, अजन्मा, पुराणपुरुष आदि नाम भएका उहाँले आफ्नै मायाशक्तिलाई लिएर जगत्को उत्पत्ति, पालन र संहार गर्नुहुन्छ, अनि जगत्प्रतीतिको कारण भएको त्यही मायालाई आफ्नो स्वरूपज्ञानद्वारा नष्ट गरेर स्वयं निष्क्रिय भई रहनुहुन्छ।

**अथाग्रे ऋषयः कर्माणीहन्तेऽकर्महेतवे।**

**ईहमानो हि पुरुषः प्रायोऽनीहां प्रपद्यते॥ १४॥**

**पदार्थ–**
**अथ** = त्यसैले
**ऋषयः** = ऋषिहरूले पनि
**अकर्महेतवे** = मोक्षका लागि
**अग्रे** = पहिले
**कर्माणि** = कर्महरू
**ईहन्ते** = आचरण गर्दछन्
**प्रायः** = धेरैजसो
**ईहमानः** = कर्म गर्ने
**पुरुषः हि** = व्यक्तिले नै (पछि)
**अनीहां** = नैष्कर्म्यभाव
**प्रपद्यते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** त्यसैले ऋषिमुनिहरूले पनि मोक्षका लागि पहिले वेदोक्त कर्महरूको आचरण गर्दछन्। किनभने वेदोक्त कर्म गर्ने व्यक्तिले नै पछि बिस्तारै नैष्कर्म्यभाव (मोक्ष) प्राप्त गर्न सक्दछ।

**विवरण– अनीहा** पदको अर्थ सामान्यतः इच्छारहितता वा अकर्म हुन्छ। यसलाई शास्त्रहरूमा मोक्ष वा नैष्कर्म्य पनि भनिएको छ। यसर्थ यहाँ पनि नैष्कर्म्य वा मोक्षलाई बुझाउन **अनीहा** पद आएको हो। वेदले बताएका वर्ण र आश्रमअनुसारका नित्य-नैमित्तिक कर्महरू गरी चित्त शुद्ध भएपछि मात्र मोक्ष प्राप्त गर्न सकिन्छ। यद्यपि कर्मद्वारा कर्मकै विरोधी अकर्मभावमा पुग्नु

असम्भव जस्तो लाग्छ, तर शास्त्रको रहस्य यही हो। शास्त्रीय कर्महरू गर्दागर्दै चित्तशुद्ध भएपछि व्यक्तिले आफूलाई कर्तृत्व, भोक्तृत्व र प्रमातृत्व भावदेखि माथि रहेको आत्माको रूपमा बुझ्न थाल्दछ। यसर्थ सबै कर्म गरिरहँदा पनि ती सबैदेखि भिन्न, असङ्ग-अकर्ता आत्मतत्त्वको रूपमा आफूलाई अनुभव गर्ने अवस्था नै नैष्कर्म्यभाव हो।

**ईहते भगवानीशो न हि तत्र विसज्जते।**
**आत्मलाभेन पूर्णार्थो नावसीदन्ति येऽनु तम्॥ १५॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**आत्मलाभेन** = आत्मज्ञानद्वारा
**पूर्णार्थः** = कृतकृत्य हुनुभएका
**ईशः** = सर्वशक्तिमान्
**भगवान्** = परमात्मा पनि
**ईहते** = कर्म गर्नुहुन्छ (तर पनि)
**तत्र** = त्यस कर्ममा
**न विसज्जते** = आसक्त बन्नुहुन्न
**ये** = जो मानिसहरू
**तं अनु** = त्यस्ता परमात्माको अनुकरण गर्दछन् (ती पनि)
**न अवसीदन्ति** = कर्ममा फस्दैनन्

**वाक्यार्थ—** हुन त सर्वशक्तिमान् परमात्मा पनि सृष्टि आदि अनेकौँ कर्महरू गरिरहनुहुन्छ, तर पनि उहाँ ती कर्महरूमा आसक्त हुनुहुन्न किनभने उहाँ आत्मज्ञानद्वारा कृतकृत्य भइसक्नुभएको छ। जुन मानिसहरू निष्काम भावले कर्म गर्ने परमात्माको अनुकरण गर्दछन् तिनीहरू पनि कर्मबन्धनबाट छुट्छन्।

**विवरण—** यहाँ **आत्मलाभ** पदले आफ्नो स्वरूपको ज्ञान भन्ने अर्थ बुझ्नुपर्दछ। आत्मा सधैँ प्राप्त वस्तु नै भएकाले त्यसको प्राप्ति सम्भव छैन। त्यसको प्राप्ति भनेको त त्यसलाई जान्नु नै हो। अज्ञानको कारणले मानिसहरू नित्यप्राप्त आत्मालाई पनि प्राप्त नभएको ठान्दछन्, तर अपरोक्ष ज्ञानद्वारा आफ्नो स्वरूप बुझेपछि यो भ्रमको कारण भएको अज्ञान आफैँ हट्दछ। भगवान्मा कहिल्यै अज्ञान नरहने हुँदा उहाँलाई आफ्नो स्वरूपको सधैँ अनुभव रहन्छ।

**तमीहमानं निरहङ्कृतं बुधं निराशिषं पूर्णमनन्यचोदितम्।**
**नॄन् शिक्षयन्तं निजवर्त्मसंस्थितं प्रभुं प्रपद्येऽखिलधर्मभावनम्॥ १६॥**

**पदार्थ—**
**नॄन्** = मानिसहरूलाई
**शिक्षयन्तं** = शिक्षा दिने
**निजवर्त्मसंस्थितं** = आफ्नै मर्यादामा रहेर
**ईहमानं** = कर्महरू गर्ने
**निरहङ्कृतं** = अहङ्कारशून्य
**बुधं** = सर्वज्ञ
**निराशिषं** = कामनारहित
**पूर्णम्** = सर्वव्यापक
**अनन्यचोदितम्** = अरू कसैद्वारा प्रेरित नहुने
**अखिलधर्मभावनम्** = सबै प्रकारका सद्धर्मलाई प्रवर्तन गर्ने
**तं प्रभुं** = ती सर्वसमर्थ भगवान्को
**प्रपद्ये** = शरणमा जान्छु

**वाक्यार्थ—** भगवान् मानिसहरूलाई शिक्षा दिनका लागि आफ्नै मर्यादाभित्र रहेर विभिन्न अवतार लिनुहुन्छ र कर्महरू गरिरहनुहुन्छ। उहाँमा अहङ्कार छैन र कामना पनि छैन, अनि उहाँ सर्वज्ञ र सर्वव्यापक हुनुहुन्छ। अरू कसैको प्रेरणाको अधीनमा नरहने उहाँ नै सबैथरी सद्धर्मका प्रवर्तक

हुनुहुन्छ। म त्यस्ता सर्वसमर्थ प्रभुको शरणमा जान्छु।

**विवरण—** यहाँ अनेक विशेषणद्वारा परमात्माको स्वरूपलाई बताइएको छ। भगवान् अनेक अवतारअनुसार आफ्नो कर्तव्यमार्गमा स्थित हुनुहुन्छ र कर्महरू गर्नुहुन्छ। भगवान् पनि आफ्नो कर्तव्यमार्गमा स्थित रहेर कर्महरू गर्नुहुन्छ र जीवहरू पनि आफ्नो कर्तव्यमा रहेर कर्म गर्दछन् भने भगवान् र जीवमा के फरक पऱ्यो त ? भगवान् पनि जीवात्मा जस्तै हुनुभयो नि त ? यस शङ्काको समाधान यस श्लोकमा गरिएको छ। यस श्लोकमा भगवान्लाई जीवात्माभन्दा छुट्टै रूपमा बताउन चार ओटा विशेषणको प्रयोग गरिएको छ। ती हुन्— **निरहङ्कृतः** (अहङ्काररहित), **निराशिषः** (कामनारहित), **अनन्यचोदितः** (अरू कोहीद्वारा प्रेरित नभएका) र **बुधः** (सर्वज्ञ)। जीवहरू कुनै पनि काम गरिसकेपछि त्यसबारे अहङ्कार गर्दछन्। उनीहरूलाई के भ्रम हुन्छ भने मैले गरेका महत्त्वपूर्ण कामहरू म विना रोकिन्थे या ठिकसँग गरिँदैनथे। संसारको व्यवस्था कोही विना कत्ति पनि रोकिँदैन, तर हरेक मानिसहरू यही भ्रममा बाँचेका हुन्छन् कि म नभए त खत्तमै भइहाल्छ। भगवान्मा यस्तो भ्रमपूर्ण अहङ्कार हुँदैन। जीवहरू आसक्तिले युक्त हुन्छन्, तर भगवान् आसक्तिशून्य भई कर्म गर्नुहुन्छ। जीवलाई ती-ती कार्यक्षेत्रमा प्रेरित गर्ने कोही न कोही व्यक्ति हुन्छन्, तर भगवान्लाई प्रेरित गर्ने अर्को कोही छैन। अनि भगवान् सर्वज्ञ हुनुहुन्छ, तर जीव अल्पज्ञ हुन्छ। यसैले भगवान् कर्म गर्दा पनि जीवहरूभन्दा छुट्टै हुनुहुन्छ। भगवान् किन अहङ्कारशून्य हुनुहुन्छ ? किनभने उहाँ **बुधः** अर्थात् सर्वज्ञ हुनुहुन्छ। उहाँ कामनारहित हुनुहुन्छ किनभने उहाँ पूर्ण हुनुहुन्छ। अपूर्ण व्यक्तिहरू नै विभिन्न किसिमका अभावहरूको परिपूर्तिका लागि विभिन्न किसिमका वस्तुहरूको चाहना गर्दछन्। भगवान् सर्वसमर्थ हुनुहुन्छ त्यसकारण उहाँ अरूद्वारा प्रेरित हुनुहुन्न। असमर्थ व्यक्तिहरूलाई मात्र अरूले प्रेरणा र सहयोग दिई समर्थ बनाउँछन्।

भगवान्ले विभिन्न किसिमका कर्महरू किन गर्नुहुन्छ त ? यसको उत्तर हो— मानिसहरूलाई आफ्नो आचरणबाट शिक्षा दिनका लागि। **अखिलधर्मभावनः** अर्थात् सम्पूर्ण सत्कर्महरूको सुरुवात भगवान्बाट नै हुन्छ। उहाँले आचरण गरेर त्यसलाई नसिकाए जीवहरूले धर्मलाई बुझ्न सक्दैनन्। त्यसैले भगवान् अनेक कर्म गर्नुहुन्छ। श्रीमद्भगवद्गीता (३/२३-२४)मा पनि भगवान् श्रीकृष्ण अर्जुनलाई भन्नुहुन्छ— हे अर्जुन ! मैले कर्म गरिनँ भने सम्पूर्ण प्राणीहरू मलाई हेरी केही कर्म नगरीकन बस्दछन्, त्यसकारण म कर्म गर्दछु। मानिसहरूलाई शिक्षा दिनका लागि नै भगवान्ले कर्म गर्नुभएको हो भन्ने यही कुरा प्रस्तुत श्लोकमा बताइएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति मन्त्रोपनिषदं व्याहरन्तं समाहितम्।**

**दृष्ट्वासुरा यातुधाना जग्धुमभ्यद्रवन् क्षुधा॥ १७॥**

पदार्थ—

**इति** = यसप्रकार
**समाहितम्** = एकाग्र भएका
**मन्त्रोपनिषदं** = मन्त्रमय उपनिषद्‌रूप स्तोत्र
**व्याहरन्तं** = पढिरहेका मनुलाई
**दृष्ट्वा** = देखेर
**असुराः** = दैत्य र
**यातुधानाः** = राक्षसहरू

**क्षुधा** = भोकले छट्पटिएर
**जग्धुम्** = उनलाई खान
**अभ्यद्रवन्** = उनी भएतिर दौडिए

**वाक्यार्थ–** यसप्रकार एकाग्र भएका स्वायम्भुव मनुले मन्त्रमय उपनिषद्रूप यो स्तोत्रको पाठ गर्दै थिए, भोकाएका दैत्य र राक्षसहरू असहाय ठानेर उनलाई खान भनी उनी भएतिर दौडिए।

**तांस्तथावसितान् वीक्ष्य यज्ञः सर्वगतो हरिः।**
**यामैः परिवृतो देवैर्हत्वाशासत् त्रिविष्टपम्॥ १८॥**

**पदार्थ–**
**तथा** = त्यसप्रकार
**अवसितान्** = खाने निश्चय गरेका
**तान्** = ती दैत्य र राक्षसहरूलाई
**वीक्ष्य** = देखेर
**सर्वगतः** = सर्वव्यापक
**यज्ञः** = यज्ञावतार
**हरिः** = श्रीहरि भगवान्ले
**हत्वा** = (तिनलाई) मारेर
**यामैः** = आफ्ना छोरा
**देवैः** = देवताहरूद्वारा
**परिवृतः** = युक्त भई
**त्रिविष्टपम्** = स्वर्गमा
**अशासत्** = शासन गर्नुभयो

**वाक्यार्थ–** मनुलाई खाने निश्चय गरेर झम्टिन आएका ती दैत्य र राक्षसहरूलाई देखेर सर्वव्यापक यज्ञावतार भगवान् श्रीहरिले ती दुष्टहरूलाई मारी आफ्ना छोरा देवताहरूलाई साथ लिई स्वर्गमा शासन गर्नुभयो।

**स्वारोचिषो द्वितीयस्तु मनुरग्नेः सुतोऽभवत्।**
**द्युमत्सुषेणरोचिष्मत्प्रमुखास्तस्य चात्मजाः॥ १९॥**

**पदार्थ–**
**द्वितीयः** = दोस्रा
**मनुः तु** = मनु चाहिँ
**अग्नेः** = अग्निका
**सुतः** = छोरा
**स्वारोचिषः** = स्वारोचिष नामका
**अभवत्** = भए
**तस्य** = ती मनुका
**द्युमत्सुषेणरोचिष्मत्प्रमुखाः** = द्युमान्, सुषेण र रोचिष्मान् आदि
**आत्मजाः च** = छोराहरू पनि (भए)

**वाक्यार्थ–** दोस्रा मनु स्वारोचिष भए। उनी अग्निका छोरा थिए र उनका द्युमान्, सुषेण र रोचिष्मान् आदि छोराहरू भए।

**तत्रेन्द्रो रोचनस्त्वासीद् देवाश्च तुषितादयः।**
**ऊर्जस्तम्भादयः सप्त ऋषयो ब्रह्मवादिनः॥ २०॥**

**पदार्थ–**
**तत्र** = त्यस मन्वन्तरमा
**इन्द्रः तु** = इन्द्र चाहिँ
**रोचनः** = रोचन नामका
**आसीत्** = थिए
**देवाः च** = देवताहरू पनि
**तुषितादयः** = तुषित आदि थिए
**ऊर्जस्तम्भादयः** = ऊर्ज, स्तम्भ आदि
**ब्रह्मवादिनः** = ब्रह्मज्ञानीहरू
**सप्त ऋषयः** = सप्तर्षि थिए

**वाक्यार्थ–** त्यस दोस्रो मन्वन्तरमा रोचन नाम गरेका इन्द्र र तुषित आदि नाम भएका देवताहरू थिए। सप्तर्षिमा चाहिँ ऊर्ज, स्तम्भ आदि ब्रह्मज्ञानी ऋषिहरू थिए।

**ऋषेस्तु वेदशिरसस्तुषिता नाम पत्न्यभूत्।**
**तस्यां जज्ञे ततो देवो विभुरित्यभिविश्रुतः॥ २१॥**

पदार्थ–
**वेदशिरसः** = वेदशिरा
**ऋषेः तु** = ऋषिकी
**तुषिता नाम** = तुषिता नामकी
**पत्नी** = पत्नी
**अभूत्** = भइन्
**ततः** = ती वेदशिराबाट
**तस्यां** = ती तुषितामा
**विभुः इति** = विभु यो नामले
**अभिविश्रुतः** = प्रसिद्ध
**देवः** = भगवान्
**जज्ञे** = जन्मिनुभयो

**वाक्यार्थ–** वेदशिरा नामक ऋषिकी पत्नी तुषिता थिइन्। उनबाट विभु नामले प्रसिद्ध भगवान् जन्मिनुभयो।

**अष्टाशीतिसहस्राणि मुनयो ये धृतव्रताः।**
**अन्वशिक्षन् व्रतं तस्य कौमारब्रह्मचारिणः॥ २२॥**

पदार्थ–
**ये** = जो
**अष्टाशीतिसहस्राणि** = अठासी हजार
**धृतव्रताः** = व्रतनिष्ठ
**मुनयः** = मुनिहरू (थिए उनीहरूले)
**कौमारब्रह्मचारिणः** = आजन्म नैष्ठिक ब्रह्मचारी रहने
**तस्य** = ती विभुबाट
**व्रतं** = ब्रह्मचर्यव्रत
**अन्वशिक्षन्** = सिके

**वाक्यार्थ–** विभु आजीवन नैष्ठिक ब्रह्मचारी नै रहनुभयो। उहाँबाट नै व्रतनिष्ठ अठासीहजार ऋषिहरू (बालखिल्य आदि)ले पनि ब्रह्मचर्यव्रत सिके।

**तृतीय उत्तमो नाम प्रियव्रतसुतो मनुः।**
**पवनः सृञ्जयो यज्ञहोत्राद्यास्तत्सुता नृप॥ २३॥**

पदार्थ–
**नृप** = हे राजा
**प्रियव्रतसुतः** = प्रियव्रतका छोरा
**उत्तमः नाम** = उत्तम नामका
**तृतीयः** = तेस्रा
**मनुः** = मनु भए
**तत्सुताः** = उनका छोराहरू
**पवनः** = पवन
**सृञ्जयः** = सृञ्जय र
**यज्ञहोत्राद्याः** = यज्ञहोत्र आदि भए

**वाक्यार्थ–** हे राजा ! तेस्रा मनु उत्तम नामका थिए। उनी प्रियव्रतका छोरा थिए। उनका चाहिँ पवन, सृञ्जय र यज्ञहोत्र आदि छोराहरू भए।

**वसिष्ठतनयाः सप्त ऋषयः प्रमदादयः।**
**सत्या वेदश्रुता भद्रा देवा इन्द्रस्तु सत्यजित्॥ २४॥**

**पदार्थ–**
**वसिष्ठतनयाः** = वसिष्ठका छोरा
**प्रमदादयः** = प्रमद आदि
**सप्त ऋषयः** = सप्तर्षि (थिए)
**सत्याः** = सत्य
**वेदश्रुताः** = वेदश्रुत र
**भद्राः** = भद्र आदि
**देवाः** = देवताहरू थिए
**सत्यजित् तु** = सत्यजित् चाहिँ
**इन्द्रः** = इन्द्र थिए

**वाक्यार्थ–** तेस्रो मन्वन्तरमा वसिष्ठका पुत्र प्रमद आदि ऋषिहरू सप्तर्षि थिए। सत्य, वेदश्रुत र भद्र आदि देवताहरू थिए भने सत्यजित् चाहिँ इन्द्र थिए।

**धर्मस्य सूनृतायां तु भगवान् पुरुषोत्तमः।**
**सत्यसेन इति ख्यातो जातः सत्यव्रतैः सह॥ २५॥**
**सोऽनृतव्रतदुःशीलानसतो यक्षराक्षसान्।**
**भूतद्रुहो भूतगणांस्त्ववधीत् सत्यजित्सखः॥ २६॥**

**पदार्थ–**
**धर्मस्य** = धर्मकी
**सूनृतायां तु** = सुनृता पत्नीमा
**सत्यसेनः इति** = सत्यसेन यो नामले
**ख्यातः** = प्रसिद्ध
**भगवान्** = भगवान्
**पुरुषोत्तमः** = श्रीहरि
**जातः** = जन्मिनुभयो
**सत्यजित्सखः** = सत्यजित् इन्द्रलाई साथी बनाउनुभएका
**सः** = उहाँले
**सत्यव्रतैः सह** = सत्यव्रत नामका देवताहरूलाई साथमा लिएर
**अनृतव्रतदुःशीलान्** = असत्यमा लागेका र नराम्रो बानी भएका
**असतः** = दुष्ट
**यक्षराक्षसान्** = यक्ष, राक्षस तथा
**भूतद्रुहः** = प्राणीलाई दुःख दिने
**भूतगणान् तु** = भूतगणहरूलाई चाहिँ
**अवधीत्** = मार्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीहरिले धर्मकी पत्नी सुनृतामा सत्यसेनको रूपमा अवतार लिनुभयो। त्यस वेलामा उहाँले सत्यजित् नामक इन्द्रको साथी भई सत्यव्रत आदि देवताहरूलाई पनि साथ लिई यक्ष, राक्षस एवं भूतगणहरूको संहार गर्नुभयो। असत्यमा लागेका तिनीहरू दुष्ट स्वभावका थिए र उनीहरू प्राणीहरूलाई दुःख दिने गर्दथे।

**चतुर्थ उत्तमभ्राता मनुर्नाम्ना च तामसः।**
**पृथुः ख्यातिर्नरः केतुरित्याद्या दश तत्सुताः॥ २७॥**

**पदार्थ–**
**चतुर्थः** = चौथा
**मनुः च** = मनु चाहिँ
**उत्तमभ्राता** = उत्तमका भाइ
**नाम्ना तामसः** = तामस नामका थिए
**पृथुः** = पृथु
**ख्यातिः** = ख्याति
**नरः** = नर
**केतुः** = केतु
**इत्याद्याः** = इत्यादि
**दश** = दश जना
**तत्सुताः** = उनका छोराहरू थिए

**वाक्यार्थ–** चौथा मनु तामस नामका थिए। उनी तेस्रा मनु उत्तमका भाइ हुन्। यिनै तामसका

पृथु, ख्याति, नर, केतु आदि दश छोराहरू थिए।

**सत्यका हरयो वीरा देवास्त्रिशिख ईश्वरः।**

**ज्योतिर्धामादयः सप्त ऋषयस्तामसेऽन्तरे॥ २८॥**

**पदार्थ–**
**तामसे** = तामस
**अन्तरे** = मन्वन्तरमा
**सत्यकाः** = सत्यक
**हरयः** = हरि र
**वीराः** = वीर नामका
**देवाः** = देवताहरू थिए
**ईश्वरः** = इन्द्र चाहिँ
**त्रिशिखः** = त्रिशिख थिए
**ज्योतिर्धामादयः** = ज्योतिर्धाम आदि
**सप्त ऋषयः** = सप्तर्षि थिए

**वाक्यार्थ–** तामस मन्वन्तरमा त्रिशिख नामका इन्द्र थिए, देवताहरू चाहिँ सत्यक, हरि र वीर थिए। त्यसै गरी ज्योतिर्धाम आदि ऋषिहरू सप्तर्षि थिए।

**देवा वैधृतयो नाम विधृतेस्तनया नृप।**

**नष्टाः कालेन यैर्वेदा विधृताः स्वेन तेजसा॥ २९॥**

**पदार्थ–**
**नृप** = हे राजा
**विधृतेः** = विधृतिका
**तनयाः** = छोराहरू
**वैधृतयः नाम** = वैधृति नामका
**देवाः** = देवताहरू पनि भए
**यैः** = जुन देवताहरूले
**कालेन** = समयको कारण
**नष्टाः** = लुप्तप्राय भएका
**वेदाः** = वेदहरूलाई
**स्वेन** = आफ्ना
**तेजसा** = तेजले
**विधृताः** = धारण गरे

**वाक्यार्थ–** हे राजा ! यस मन्वन्तरमा विधृतिका पुत्र वैधृति आदि नाम गरेका अरू देवताहरू पनि भए। समयको कारणले लुप्त हुन लागेका वेदहरूलाई आफ्नो तेजले धारण गरेकाले नै यिनलाई वैधृति भनिएको थियो।

**तत्रापि जज्ञे भगवान् हरिण्यां हरिमेधसः।**

**हरिरित्याहृतो येन गजेन्द्रो मोचितो ग्रहात्॥ ३०॥**

**पदार्थ–**
**तत्र अपि** = त्यस मन्वन्तरमा पनि
**हरिमेधसः** = हरिमेधाकी
**हरिण्यां** = हरिणी नामकी पत्नीमा
**हरिः इति** = हरि नामले
**आहृतः** = प्रसिद्ध भएर
**भगवान्** = साक्षात् भगवान्
**जज्ञे** = जन्मिनुभयो
**येन** = जुन हरि भगवान्द्वारा
**ग्रहात्** = गोहीबाट
**गजेन्द्रः** = गजेन्द्र
**मोचितः** = जोगाइयो

**वाक्यार्थ–** त्यस मन्वन्तरमा पनि साक्षात् भगवान्ले हरिमेधाकी पत्नी हरिणीको गर्भबाट हरि अवतार धारण गरी जन्म लिनुभयो जसले गोहीको आक्रमणबाट गजेन्द्रलाई बचाउनुभयो।

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**बादरायण एतत् ते श्रोतुमिच्छामहे वयम् ।**

**हरिर्यथा गजपतिं ग्राहग्रस्तममूमुचत् ॥ ३१ ॥**

**पदार्थ—**
**बादरायण** = हे शुकदेवजी
**हरिः** = हरि भगवान्‌ले
**यथा** = जसरी
**ग्राहग्रस्तम्** = गोहीद्वारा
समातिएका
**गजपतिं** = गजराजलाई
**अमूमुचत्** = छुटाउनुभयो
**वयम्** = हामीहरू
**ते** = हजुरबाट
**एतत्** = यो प्रसङ्ग
**श्रोतुम्** = सुन्न
**इच्छामहे** = चाहन्छौँ

**वाक्यार्थ—** हे शुकदेवजी ! भगवान् हरिले गोहीद्वारा समातिएका गजराजलाई त्यो आपत्तिबाट जसरी छुटाउनुभएको थियो, त्यो सबै प्रसङ्ग म हजुरबाट विस्तारपूर्वक सुन्न चाहन्छु।

**तत्कथा सुमहत्पुण्यं धन्यं स्वस्त्ययनं शुभम् ।**

**यत्र यत्रोत्तमश्लोको भगवान् गीयते हरिः ॥ ३२ ॥**

**पदार्थ—**
**यत्र यत्र** = जुन-जुन कथामा
**उत्तमश्लोकः** = पवित्रकीर्ति
**भगवान् हरिः** = भगवान् हरि
**गीयते** = वर्णित हुनुहुन्छ
**तत्कथा** = ती कथाहरू नै
**सुमहत्पुण्यं** = महान् पुण्यमय
**धन्यं** = प्रशंसनीय
**स्वस्त्ययनं** = ज्यादै
कल्याणकारक र
**शुभम्** = शुभ हुन्छन्

**वाक्यार्थ—** जुन कथामा पवित्रकीर्ति भएका भगवान् हरिका निर्मल यशहरू गाइन्छन्, ती कथाहरू महान् पुण्यमय, प्रशंसनीय, शुभ र कल्याणकारक हुन्छन्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**परीक्षितैवं स तु बादरायणिः प्रायोपविष्टेन कथासु चोदितः ।**

**उवाच विप्राः प्रतिनन्द्य पार्थिवं मुदा मुनीनां सदसि स्म शृण्वताम् ॥ ३३ ॥**

**पदार्थ—**
**विप्राः** = हे शौनक आदि
ऋषिहरू
**एवं** = यसप्रकार
**प्रायोपविष्टेन** = आमरण निराहार
बसेका
**परीक्षिता** = परीक्षित्‌द्वारा
**कथासु** = भगवान्‌सम्बन्धी
कथाप्रसङ्गहरूमा
**चोदितः** = प्रेरित गरिएका
**सः तु** = ती
**बादरायणिः** = शुकदेवजीले
**पार्थिवं** = राजालाई
**प्रतिनन्द्य** = अभिनन्दन गरेर
**शृण्वताम्** = सुनिरहेका
**मुनीनां** = अरू मुनिहरूसमेतको
**सदसि** = सभामा
**मुदा** = प्रसन्नतापूर्वक
**उवाच स्म** = यसो भन्नुभयो

**वाक्यार्थ–** हे शौनक आदि ऋषिहरू ! आमरण निराहार व्रत बसेका राजा परीक्षित्‌ले भगवान्‌सम्बन्धी कथाप्रसङ्ग सुनाउन प्रेरित गरेपछि शुकदेवजी अत्यन्त प्रसन्न हुनुभयो र उहाँको निष्ठालाई भित्रैदेखि अभिनन्दन गर्दै कथा सुन्न इच्छुक मुनिहरूले भरिभराउ भएको सभामा प्रसन्नतापूर्वक भन्न थाल्नुभयो।

**इति श्रीमद्‌भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**मन्वन्तरानुचरिते प्रथमोऽध्यायः ॥ १ ॥**

# अथ द्वितीयोऽध्यायः

## गजेन्द्रमाथि गोहीको आक्रमण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**आसीद् गिरिवरो राजँस्त्रिकूट इति विश्रुतः।**
**क्षीरोदेनावृतः श्रीमान् योजनायुतमुच्छ्रितः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**क्षीरोदेन** = क्षीर सागरद्वारा
**आवृतः** = घेरिएको
**योजनायुतम्** = दश हजार योजन
**उच्छ्रितः** = अग्लो
**त्रिकूटः इति** = त्रिकूट नामले
**विश्रुतः** = प्रसिद्ध
**श्रीमान्** = अत्यन्त सुन्दर
**गिरिवरः** = श्रेष्ठ पर्वत
**आसीत्** = थियो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! क्षीरसागरको बीचमा एउटा त्रिकूट नामको प्रसिद्ध पर्वत थियो। त्यो पर्वत दश हजार योजन अग्लो, अत्यन्त सुन्दर र श्रेष्ठ थियो।

**तावता विस्तृतः पर्यक् त्रिभिः शृङ्गैः पयोनिधिम्।**
**दिशः खं रोचयन्नास्ते रौप्यायसहिरण्मयैः॥ २॥**

**पदार्थ–**
**पर्यक्** = चारै तिरबाट
**तावता** = त्यति नै
**विस्तृतः** = फैलिएको त्यो पर्वत
**रौप्यायसहिरण्मयैः** = चाँदी, फलाम र सुनका
**त्रिभिः** = तीन ओटा
**शृङ्गैः** = चुचुराहरूले
**पयोनिधिम्** = पूरा समुद्रलाई
**दिशः** = सम्पूर्ण दिशालाई र
**खं** = आकाशलाई नै
**रोचयन्** = चम्काउँदै
**आस्ते** = रहेको थियो

**वाक्यार्थ–** त्यस पर्वतको वरिपरिको लम्बाइ र चौडाइ पनि दश-दश हजार योजन नै थियो। त्यसमा सुन, चाँदी र फलामका चमचम गर्ने तीन चुचुराहरू थिए जसको प्रकाशले सम्पूर्ण समुद्र, दिशा र आकाश नै चमचमाए झैँ हुन्थ्यो।

**अन्यैश्च ककुभः सर्वा रत्नधातुविचित्रितैः।**
**नानाद्रुमलतागुल्मैर्निर्घोषैर्निर्झराम्भसाम्॥ ३॥**

**पदार्थ–**
**नानाद्रुमलतागुल्मैः** = अनेक रुख, लहरा र झाडीले युक्त
**निर्झराम्भसां** = झरनाहरूको पानीको
**निर्घोषैः** = आवाजले र
**रत्नधातुविचित्रितैः** = अनेक रत्न र धातुहरूबाट बनेका रङ्गीविरङ्गी
**अन्यैः च** = अरू थुम्काहरूले पनि
**सर्वाः** = सम्पूर्ण
**ककुभः** = दिशालाई चम्काउँथे

**वाक्यार्थ–** त्यस पर्वतमा अरू पनि कैयौँ थुम्काहरू थिए। यिनमा अनेक प्रकारका रुख, लहरा र झाडीहरू थिए। त्यहाँ झरनाहरूको पानी बग्दा सधैँ झरझर आवाज आइरहन्थ्यो, अनेकौँ रत्न र धातुद्वारा बनेका रङ्गीविरङ्गी शोभायुक्त थुम्काहरूले सम्पूर्ण दिशालाई चम्काउँथे।

**स चावनिज्यमानाङ्घ्रिः समन्तात् पयऊर्मिभिः।**
**करोति श्यामलां भूमिं हरिन्मरकताश्मभिः॥ ४॥**

**पदार्थ–**
**पयऊर्मिभिः** = समुद्रका छालहरूद्वारा
**समन्तात्** = चारैतिरबाट
**अवनिज्यमानाङ्घ्रिः** = पाउ (फेदी) पखालिएको
**सः** = त्यो पर्वतले
**हरिन्मरकताश्मभिः** = हरिया मरकतमणि (पन्ना)का पत्थरहरूद्वारा
**भूमिं** = पूरा क्षेत्रलाई नै
**श्यामलां** = हरियो (उब्जाउले भरिएको जस्तो)
**करोति** = बनाइरहेको थियो

**वाक्यार्थ–** चारैतिरबाट समुद्रका छालहरूद्वारा फेदी पखालिएको त्यो पर्वतले हरिया मरकतमणि (पन्ना)का पत्थरहरूले गर्दा वरिपरिका क्षेत्रलाई उब्जाउले भरिएको भूमि जस्तो हराभरा बनाइरहेको थियो।

**सिद्धचारणगन्धर्वविद्याधरमहोरगैः।**
**किन्नरैरप्सरोभिश्च क्रीडद्भिर्जुष्टकन्दरः॥ ५॥**

**पदार्थ–**
**क्रीडद्भिः** = खेलिरहेका
**सिद्धचारणगन्धर्वविद्याधर-महोरगैः** = सिद्ध, चारण, गन्धर्व, विद्याधर, नाग
**किन्नरैः** = किन्नर र
**अप्सरोभिः च** = अप्सराहरूद्वारा
**जुष्टकन्दरः** = पर्वतका गुफाहरू भरिइरहन्थे

**वाक्यार्थ–** त्यस पर्वतका गुफाहरूमा सिद्ध, चारण, गन्धर्व, विद्याधर, नाग, किन्नर र अप्सरा आदि देवसमूह सधैँ घुमिरहन्थे।

**यत्र सङ्गीतसन्नादैर्नदद्गुहममर्षया।**
**अभिगर्जन्ति हरयः श्लाघिनः परशङ्कया॥ ६॥**

**पदार्थ–**
**यत्र** = जहाँ रहने
**श्लाघिनः** = ठुला
**हरयः** = सिंहहरू
**सङ्गीतसन्नादैः** = सङ्गीतको ध्वनि
**नदद्गुहम्** = गुफामा घन्किँदा
**परशङ्कया** = अर्को सिंहको गर्जना सम्झेर
**अमर्षया** = त्यो ध्वनिको ईर्ष्याले (त्यो ध्वनिलाई सहन नसकी)
**अभिगर्जन्ति** = झन् बढी गर्जना गर्दथे

**वाक्यार्थ–** जब देवसङ्गीतको ध्वनि गुफामा ठोकिएर प्रतिध्वनित हुन्थ्यो, तब त्यस पर्वतका गुफाहरूमा बस्ने ठुला सिंहहरू त्यो प्रतिध्वनिलाई अर्को सिंहको गर्जना सम्झेर ईर्ष्याले त्यस आवाजलाई सहन नसकी झन् बढी गर्जना गर्थे।

**नानारण्यपशुव्रातसङ्कुलद्रोण्यलङ्कृतः ।**

**चित्रद्रुमसुरोद्यानकलकण्ठविहङ्गमः ॥ ७ ॥**

**पदार्थ–**
(त्यस पर्वतको वरिपरि)
**नानारण्यपशुव्रातसङ्कुल-द्रोण्यलङ्कृतः** = अनेक जङ्गली पशुहरूको बथानले फेदी भरिएको थियो र
**चित्रद्रुमसुरोद्यानकलकण्ठ-विहङ्गमः** = अनेक वृक्षले भरिएका देवताका बगैँचाहरूमा मिठा स्वर भएका चराहरू सधैँ कराइरहन्थे

**वाक्यार्थ–** त्यो पर्वतको फेदी अनेक जङ्गली पशुहरूको बथानले भरिएको थियो र त्यहाँ अनेकौँ प्रकारका वृक्षहरूले सजिएका देवताका बगैँचाहरू थिए, जुन बगैँचामा मिठा स्वर भएका चराहरू सधैँ कराइरहन्थे।

**सरित्सरोभिरच्छोदैः पुलिनैर्मणिवालुकैः ।**

**देवस्त्रीमज्जनामोदसौरभाम्ब्वनिलैर्युतः ॥ ८ ॥**

**पदार्थ–**
(त्यो पर्वत)
**मणिवालुकैः** = मणिजस्तो टल्किने बालुवाले युक्त
**पुलिनैः** = किनार भएका
**देवस्त्रीमज्जनामोदसौरभा-म्ब्वनिलैः** = देवाङ्गनाहरूले डुबुल्की लगाउँदा सुगन्धित भएका जलकणलाई साथमा लिएर बग्ने वायुले युक्त
**अच्छोदैः** = अत्यन्त स्वच्छ जल भएका
**सरित्सरोभिः** = नदी र तालले
**युतः** = युक्त थियो

**वाक्यार्थ–** त्यो पर्वत मणिजस्तो टल्किने बालुवाले युक्त किनार भएका अनेकौँ नदी र तालहरूका अत्यन्त स्वच्छ जलमा स्नान गर्ने देवाङ्गनाहरूले डुबुल्की लगाउँदा सुगन्धित भएका जलकणलाई साथमा लिएर बग्ने वायुले युक्त थियो।

**तस्य द्रोण्यां भगवतो वरुणस्य महात्मनः ।**

**उद्यानमृतुमन्नाम आक्रीडं सुरयोषिताम् ॥ ९ ॥**

**सर्वतोऽलङ्कृतं दिव्यैर्नित्यं पुष्पफलद्रुमैः ।**

**मन्दारैः पारिजातैश्च पाटलाशोकचम्पकैः ॥ १० ॥**

**चूतैः प्रियालैः पनसैराम्रैराम्रातकैरपि ।**

**क्रमुकैर्नालिकेरैश्च खर्जूरैर्बीजपूरकैः ॥ ११ ॥**

**मधुकैः शालतालैश्च तमालैरसनार्जुनैः ।**

**अरिष्टोदुम्बरप्लक्षैर्वटैः किंशुकचन्दनैः ॥ १२ ॥**

**पिचुमन्दैः कोविदारैः सरलैः सुरदारुभिः ।**
**द्राक्षेक्षुरम्भाजम्बुभिर्बदर्यक्षाभयामलैः ॥ १३ ॥**
**बिल्वैः कपित्थैर्जम्बीरैर्वृतो भल्लातकादिभिः ।**

**पदार्थ—**
**तस्य** = त्यस पर्वतको
**द्रोण्यां** = फेदीमा
**महात्मनः** = महाशक्तिशाली
**वरुणस्य** = वरुण
**भगवतः** = देवताको
**ऋतुमन्नाम** = ऋतुमान् नामको
**उद्यानं** = बगैँचा थियो (जुन)
**सुरयोषिताम्** = देवाङ्गनाहरूको
**आक्रीडं** = विहारस्थल थियो र
**नित्यं** = सधैँ
**सर्वतः** = सबैतिरबाट
**दिव्यैः** = दिव्य
**पुष्पफलद्रुमैः** = फलफूलले युक्त भएका रुखहरूले
**अलङ्कृतं** = सुसज्जित थियो (त्यो पर्वत)
**मन्दारैः** = बकाइनो
**पारिजातैः** = पारिजात
**पाटलाशोकचम्पकैः च** = गुलाफ, अशोक र चम्पा
**चूतैः** = आँप
**प्रियालैः** = चिरौँजी
**पनसैः** = रुखकटहर
**आम्रैः** = आँप
**आम्रातकैः** = अमारो
**क्रमुकैः** = सुपारी
**नालिकेरैः च** = नरिवल
**खर्जूरैः** = खजूर (छोकडा)
**बीजपूरकैः** = बिमिरो
**मधुकैः** = महुवा
**शालतालैः च** = साल, ताल
**तमालैः** = तमाल
**असनार्जुनैः** = असन, अर्जुन
**अरिष्टोदुम्बरप्लक्षैः** = रिट्ठो, डुम्री, पाखरी
**वटैः** = वर
**किंशुकचन्दनैः** = पलास, चन्दन
**पिचुमन्दैः** = नीम
**कोविदारैः** = कोइरालो
**सरलैः** = सल्लो
**सुरदारुभिः** = देवदारु
**द्राक्षेक्षुरम्भाजम्बुभिः** = दाख, उखु, केरा र जामुन
**बदर्यक्षाभयामलैः** = बयर, रुद्राक्ष, हर्रो र अमला
**बिल्वैः** = बेल
**कपित्थैः** = कैथ
**जम्बीरैः** = कागती
**भल्लातकादिभिः अपि** = भलायो आदि रुखहरूद्वारा पनि
**वृतः** = ढाकिएको थियो

**वाक्यार्थ—** त्यस पर्वतको फेदीमा महाशक्तिशाली वरुण देवताको ऋतुमान् नाम गरेको बगैँचा थियो। देवाङ्गनाहरूको विहारस्थलका रूपमा रहेको जुन बगैँचा सधैँ सबैतिर फलफूलहरू लटरम्म भइरहने दिव्य रुखहरूले सुसज्जित थियो। त्यो पर्वत बकाइनो, पारिजात, गुलाफ, अशोक, चम्पा, आँप, चिरौँजी, रुखकटहर, अमारो, सुपारी, नरिवल, छोकडा, बिमिरो, महुवा, साल, ताल, तमाल, असन, अर्जुन, रिट्ठो, डुम्री, पाखरी, वर, पलास, चन्दन, नीम, कोइराला, सल्ला, देवदारु, दाख, उखु, केरा, जामुन, वयर, रुद्राक्ष, हर्रो, अमला, बेल, कैथ, कागती, भलायो आदि अनेकौँ रुखहरूद्वारा ढाकिएको थियो।

**तस्मिन् सरः सुविपुलं लसत्काञ्चनपङ्कजम् ॥ १४ ॥**
**कुमुदोत्पलकह्लारशतपत्रश्रियोर्जितम् ।**

**मत्तषट्पदनिर्घुष्टं शकुन्तैश्च कलस्वनैः ॥ १५ ॥**

**हंसकारण्डवाकीर्णं चक्राह्वैः सारसैरपि ।**

**जलकुक्कुटकोयष्टिदात्यूहकुलकूजितम् ॥ १६ ॥**

**मत्स्यकच्छपसञ्चारचलत्पद्मरजःपयः ।**

**कदम्बवेतसनलनीपवञ्जुलकैर्वृतम् ॥ १७ ॥**

**पदार्थ–**
**तस्मिन्** = त्यस पर्वतमा
**लसत्काञ्चनपङ्कजम्** = सुनौला कमल फुलेर सुशोभित
**कुमुदोत्पलकह्लारशतपत्र-श्रियोर्जितम्** = कुमुद, उत्पल, कह्लार, शतपत्र आदि विशेष प्रकारका कमलको शोभाले युक्त
**मत्तषट्पदनिर्घुष्टं** = मदमत्त भँवराहरू गुन्गुनाउने
**कलस्वनैः** = मिठो आवाज गर्ने
**शकुन्तैः च** = चराहरू पनि भएको
**हंसकारण्डवाकीर्णं** = हाँस, कणेरहरूले युक्त
**चक्राह्वैः** = चखेवा र
**सारसैः अपि** = सारसहरूद्वारा पनि
**जलकुक्कुटकोयष्टिदात्यूहकुल-कूजितम्** = पानी-कुखुरा, हुटिट्याउँ र पानी नजिक बस्ने ठुला कागहरू कराइरहने
**मत्स्यकच्छपसञ्चारचलत्पद्म-रजःपयः** = माछा र कछुवा हिँड्दा हल्लिएर झरेका कमलका परागले पानी सुगन्धित बनेको
**कदम्बवेतसनलनीपवञ्जुलकैः वृतम्** = कदम, वेत, नल, कदम्बलता, आदि साना रुखहरूद्वारा घेरिएको
**सुविपुलं** = ठुलो
**सरः** = ताल थियो

**वाक्यार्थ–** त्यस पर्वतमा कुमुद (सेतो चन्द्रकमल), उत्पल (चन्द्रकमल), कह्लार (साँझमा फुल्ने सेतो कमल), शतपत्र (सामान्य कमल) आदि सुनौला कमलहरूको शोभाले युक्त एवं कदम, वेत, नल, कदम्बलता आदि अनेक साना वृक्षहरूद्वारा घेरिएको एउटा विशाल ताल थियो। त्यहाँ सधैँ गुन्गुनाइरहने मदमत्त भँवराहरू, मिठो आवाज गर्ने चराहरू, हाँस, कणेर, चखेवा, सारस, कराइरहने पानी-कुखुरा, हुटिट्याउँ र पानी-काग रहन्थे। माछा र कछुवा हिँड्दा हल्लिएर झरेका कमलका परागले त्यस तालको पानी सुगन्धित बनेको थियो।

**कुन्दैः कुरबकाशोकैः शिरीषैः कूटजेङ्गुदैः ।**

**कुब्जकैः स्वर्णयूथीभिर्नागपुन्नागजातिभिः ॥ १८ ॥**

**मल्लिकाशतपत्रैश्च माधवीजालकादिभिः ।**

**शोभितं तीरजैश्चान्यैर्नित्यर्तुभिरलं द्रुमैः ॥ १९ ॥**

**पदार्थ–**
**कुन्दैः** = कुन्द
**कुरुबकाशोकैः** = रातो कटसरैया, अशोक
**शिरीषैः** = शिरीष
**कूटजेङ्गुदैः** = कुट्की, चिउरी

**कुब्जकैः** = कुब्जक
**स्वर्णयूथीभिः** = सुनजुही
**नागपुन्नागजातिभिः** = सिन्दुर, चिलाउने, चमेली
**मल्लिकाशतपत्रैः च** = बेली, सयपत्री
**माधवीजालकादिभिः** = वासन्ती, जालक आदि र
**अन्यैः च** = अरू पनि
**तीरजैः** = तीरमा उत्पन्न
**नित्यर्तुभिः** = सबै ऋतुहरूमा हरिया रहने
**द्रुमैः** = रुखहरूद्वारा पनि
**अलं शोभितं** = ताल अत्यन्तै शोभित भएको थियो

**वाक्यार्थ–** त्यो ताल कुन्द, कुरबक (रातो कटसरैया), अशोक, कुट्की, चिउरी, कुब्जक, सुनजुही, सिन्दुर, चिलाउने, चमेली, बेली, सयपत्री, वासन्ती, जालक आदि फूलहरू एवं सबै ऋतुहरूमा हरिया रहिरहने विभिन्न रुखहरूद्वारा अत्यन्तै सुशोभित भएको थियो।

**तत्रैकदा तद्गिरिकाननाश्रयः करेणुभिर्वारणयूथपश्चरन्।**
**सकण्टकान् कीचकवेणुवेत्रवद्विशालगुल्मं प्ररुजन् वनस्पतीन्॥ २०॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**तद्गिरिकाननाश्रयः** = त्यही पर्वतको जङ्गलमा बस्ने
**वारणयूथपः** = मदमत्त हात्तीहरूको राजा (गजेन्द्र)
**करेणुभिः** = आफ्ना हत्तिनी (ढोई)हरूका साथ
**सकण्टकान्** = काँडा भएका
**कीचकवेणुवेत्रवद्विशालगुल्मं** = बाँस, वेत आदि झाङ्गिएका ठुला झाडीहरूलाई र
**वनस्पतीन्** = ठुला रुखहरूलाई
**प्ररुजन्** = नष्ट गर्दै
**तत्र** = त्यही वनमा
**चरन्** = घुम्दै (आइपुग्यो)

**वाक्यार्थ–** एक दिन त्यही त्रिकूट पर्वतको जङ्गलमा बस्ने मदमत्त हात्तीहरूको राजा (गजेन्द्र) आफ्ना हत्तिनी (ढोई)हरूलाई साथ लिई घुम्दै एवं काँडा भएका बाँस, वेत आदिका झाडीहरू र ठुला रुखहरूलाई नष्ट गर्दै त्यही वनमा आइपुग्यो।

**यद्गन्धमात्राद् हरयो गजेन्द्रा व्याघ्रादयो व्यालमृगाः सखड्गाः।**
**महोरगाश्चापि भयाद् द्रवन्ति सगौरकृष्णाः शरभाश्चमर्यः॥ २१॥**
**वृका वराहा महिषर्क्षशल्या गोपुच्छशालावृकमर्कटाश्च।**
**अन्यत्र क्षुद्रा हरिणाः शशादयश्चरन्त्यभीता यदनुग्रहेण॥ २२॥**

**पदार्थ–**
**यद्गन्धमात्रात्** = जसको मदगन्ध सुँघेर मात्र
**गजेन्द्राः** = ठुला मदमत्त हात्तीहरू र
**हरयः** = सिंहहरू
**सखड्गाः** = गैंडासमेतका
**व्याघ्रादयः** = बाघ आदि
**व्यालमृगाः** = हिंस्रक जन्तुहरू
**महोरगाः च** = ठुला नागहरू
**सगौरकृष्णाः** = सेता, काला
**शरभाः** = मृगहरू र
**चमर्यः अपि** = चौंरी गाईहरू पनि
**भयात्** = डरले काँप्दै
**द्रवन्ति** = भागाभाग गर्दछन्
**यदनुग्रहेण** = जसको अनुग्रह पाएका कारण
**वृकाः** = ब्वाँसा
**वराहाः** = बँदेलहरू
**महिषर्क्षशल्याः** = राँगा, भालु,

दुम्सीहरू
**गोपुच्छशालावृकमर्कटाः** = लङ्गुर, वनकुकुर, बाँदरहरू
**हरिणाः** = हरिणहरू र
**शशादयः च** = खरायो आदि
**क्षुद्राः** = स-साना प्राणीहरू
**अभीताः** = (अरू ठुला जन्तुबाट) नडराई
**अन्यत्र** = जसदेखि टाढा नै
**चरन्ति** = हिँडडुल गर्दछन्

**वाक्यार्थ–** त्यस गजेन्द्रको मदगन्धलाई सुँघेर मात्र पनि ठुला मदमत्त हात्तीहरू, सिंहहरू, गैँडा, बाघ आदि हिंस्रक जन्तुहरू, ठुला नागहरू, सेता-काला थरीथरीका मृगहरू र चौँरीहरू समेत सबै जन्तुहरू डरले काँप्दै भागाभाग गर्दथे। जङ्गलमा जति पनि अरू ब्वाँसो, बँदेल, भैँसी, भालु, दुम्सी, लङ्गुर, वनकुकुर, बाँदर, हरिण र खरायो आदि स-साना प्राणीहरू रहन्थे, ती सबै गजराजबाट जीवनदानको अनुग्रह पाएर नै अरू ठुला जन्तुसँग नडराई वनमा हिँडडुल गर्दथे।

**स घर्मतप्तः करिभिः करेणुभिर्वृतो मदच्युत्कलभैरनुद्रुतः।**
**गिरिं गरिम्णा परितः प्रकम्पयन् निषेव्यमाणोऽलिकुलैर्मदाशनैः॥ २३॥**

**पदार्थ–**
**मदाशनैः** = मदपान गर्न आएका
**अलिकुलैः** = भँवराको समूहले
**निषेव्यमाणः** = सेवित भएको
**कलभैः** = स-साना हात्तीहरूद्वारा
**अनुद्रुतः** = पिछा गरिएको
**करिभिः** = ठुला हात्ती र
**करेणुभिः** = हत्तिनीहरूद्वारा
**वृतः** = घेरिएको
**मदच्युत्** = मदजल बगाउने
**सः** = त्यो हात्ती
**गिरिं परितः** = पर्वतको वरिपरि
**गरिम्णा** = आफ्नो भारले
**प्रकम्पयन्** = (पहाड नै) हल्लाउँदै (हिँडिरहँदा, त्यसलाई)
**घर्मतप्तः** = घामको रापले पोल्न थाल्यो

**वाक्यार्थ–** गालाबाट बग्ने मदजल पान गर्न आएका भँवराहरूद्वारा सेवित, स-साना हात्तीहरूद्वारा पिछा गरिएको, ठुला हात्ती र हत्तिनीहरूको बथानद्वारा घेरिएको अनि पर्वतको वरिपरि डुल्दा पर्वतलाई नै हल्लाउँदै गरेको त्यस हात्तीलाई घामको रापले पोल्न थाल्यो।

**सरोऽनिलं पङ्कजरेणुरूषितं जिघ्रन् विदूरान्मदविह्वलेक्षणः।**
**वृतः स्वयूथेन तृषार्दितेन तत्सरोवराभ्यासमथागमद् द्रुतम्॥ २४॥**

**पदार्थ–**
**अथ** = यसपछि
**मदविह्वलेक्षणः** = मदका कारण आँखा फुलाएको
**तृषार्दितेन** = तिर्खाले व्याकुल भएका
**स्वयूथेन** = आफ्नो बथानद्वारा
**वृतः** = घेरिएको
**पङ्कजरेणुरूषितं** = कमलपरागको सुगन्धले युक्त
**सरोऽनिलं** = तालबाट आएको हावा
**विदूरात्** = टाढैबाट
**जिघ्रन्** = सुँघ्दै (त्यो हात्ती)
**द्रुतम्** = झटपट
**तत्सरोवराभ्यासम्** = त्यस तालको नजिक
**आगमत्** = आइपुग्यो

**वाक्यार्थ–** मदका कारण आँखा फुलाएको, तिर्खाले व्याकुल भएका अन्य हात्तीहरूद्वारा घेरिएको त्यो हात्ती तालमा फुलेका कमलको परागले युक्त भएको वायुको सुगन्धलाई टाढैबाट सुँघ्दै झटपट त्यस तालको नजिकमा आइपुग्यो।

**विगाह्य तस्मिन्नमृताम्बु निर्मलं हेमारविन्दोत्पलरेणुरूषितम् ।**
**पपौ निकामं निजपुष्करोद्धृतमात्मानमद्भिः स्नपयन् गतक्लमः ॥ २५ ॥**

**पदार्थ–**
**तस्मिन्** = त्यस तालभित्र
**विगाह्य** = पसेर
**अद्भिः** = तालको पानीले
**आत्मानम्** = आफैँलाई
**स्नपयन्** = नुहाउँदै
**गतक्लमः** = थकाइ मेटाएको (त्यो हात्तीले)
**निजपुष्करोद्धृतम्** = आफ्नै सुँडद्वारा उठाइएका
**हेमारविन्दोत्पलरेणुरूषितम्** = सुनौला र राता कमलका फूलका परागहरूले सुगन्धित भएको
**निर्मलं** = सफा
**अमृताम्बु** = अमृतजस्तो जल
**निकामं** = तिर्खा मेटिने गरी
**पपौ** = पियो

**वाक्यार्थ–** त्यस हात्तीले तालभित्र पसेर त्यहाँको पानीले नुहाई थकाइ मेटायो अनि सुनौला र राता थरीथरीका कमलका फूलका परागले सुगन्धित भएको सफा अमृतजस्तो जल तिर्खा मेटिने गरी पियो।

**स पुष्करेणोद्धृतशीकराम्बुभिर्निपाययन् संस्नपयन् यथा गृही ।**
**घृणी करेणूः कलभांश्च दुर्मदो नाचष्ट कृच्छ्रं कृपणोऽजमायया ॥ २६ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**गृही** = गृहस्थ पुरुष
**घृणी** = मोहग्रस्त हुन्छ (त्यसै गरी)
**पुष्करेणोद्धृतशीकराम्बुभिः** = सुँडद्वारा निकालिएका पानीका फोहराद्वारा
**करेणूः** = हत्तिनीहरूलाई र
**कलभान् च** = बच्चाहरूलाई पनि
**निपाययन्** = पानी पियाउँदै
**संस्नपयन्** = नुहाइदिँदै
**दुर्मदः** = असाध्यै मात्तिरहेको
**कृपणः सः** = विचरा त्यो हात्ती
**अजमायया** = परमात्माको मायाले मोहित भएकाले
**कृच्छ्रं** = (नजिकै रहेको) विपत्ति
**न आचष्ट** = थाहै पाएन

**वाक्यार्थ–** मोहग्रस्त गृहस्थ पुरुष झैँ त्यो हात्ती आफ्नो सुँडद्वारा निकालिएका पानीका फोहराद्वारा हत्तिनी र बच्चाहरूलाई पानी पिलाउँदै र नुहाइदिँदै थियो। परमात्माको मायाले मोहित भएकाले असाध्यै मात्तिरहेको विचरा त्यस हात्तीले आफ्नो नजिकै विपत्ति आइपुगेको थाहै पाएन।

**तं तत्र कश्चिन्नृप दैवचोदितो ग्राहो बलीयांश्चरणे रुषाग्रहीत् ।**
**यदृच्छयैवं व्यसनं गतो गजो यथाबलं सोऽतिबलो विचक्रमे ॥ २७ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**तत्र** = त्यस तालमा (रहँदा नै)
**तं** = त्यस हात्तीलाई
**कश्चित्** = कुनै
**दैवचोदितः** = प्रारब्धद्वारा प्रेरित
**बलीयान्** = असाध्यै बलियो
**ग्राहः** = गोहीले
**रुषा** = क्रोधपूर्वक
**चरणे** = खुट्टामा
**अग्रहीत्** = समात्यो
**एवं** = यसप्रकार

**यदृच्छया** = अकस्मात्
**व्यसनं** = आपत्तिमा
**गतः** = पुगेको
**अतिबलः** = अत्यन्त बलवान्
**सः** = त्यो
**गजः** = हात्तीले
**यथाबलं** = आफ्नो शक्तिअनुसार
**विचक्रमे** = (आफूलाई छुटाउन) प्रयत्न गऱ्यो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसप्रकार तालमा रहेको त्यस हात्तीलाई प्रारब्धवश कुनै असाध्यै बलियो गोहीले खुट्टामा बेसरी समात्यो। अकस्मात् आफूमाथि आइपरेको यस आपत्तिलाई छुटाउन अत्यन्त बलवान् त्यस हात्तीले पनि सक्दो प्रयत्न गऱ्यो।

**तथातुरं यूथपतिं करेणवो विकृष्यमाणं तरसा बलीयसा।**
**विचुक्रुशुर्दीनधियोऽपरे गजाः पार्ष्णिग्रहास्तारयितुं न चाशकन्॥ २८॥**

**पदार्थ–**
**बलीयसा** = बलियो गोहीद्वारा
**तरसा** = वेगपूर्वक
**तथा** = त्यसरी
**विकृष्यमाणं** = घिसारिएको अनि
**आतुरं** = आत्तिएको
**यूथपतिं** = हात्तीको बथानको मालिक (गजेन्द्र)लाई देखी
**दीनधियः** = खिन्न मन भएका
**करेणवः** = हत्तिनीहरू
**विचुक्रुशुः** = कराउन थाले
**अपरे** = अरू
**पार्ष्णिग्रहाः** = वरिपरिबाट तान्न सहयोग गर्ने
**गजाः च** = हात्तीहरूले पनि
**तारयितुं** = निकाल्न
**न अशकन्** = सकेनन्

**वाक्यार्थ–** बलियो गोहीद्वारा बलपूर्वक घिसारिएकाले आत्तिएको त्यस गजेन्द्रलाई देखेर हत्तिनीहरू कराउन थाले, वरिपरिबाट तान्न सहयोग गर्ने अन्य हात्तीहरूले पनि उसलाई तानेर त्यहाँबाट निकाल्न सकेनन्।

**नियुध्यतोरेवमिभेन्द्रनक्रयोर्विकर्षतोरन्तरतो बहिर्मिथः।**
**समाः सहस्रं व्यगमन् महीपते सप्राणयोश्चित्रममंसतामराः॥ २९॥**

**पदार्थ–**
**महीपते** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**इभेन्द्रनक्रयोः** = गजेन्द्र र गोही
**मिथः** = एकआपसमा
**अन्तरतः** = भित्र र
**बहिः** = बाहिर
**विकर्षतोः** = तान्न खोज्दै
**नियुध्यतोः** = युद्ध गर्दागर्दै
**सहस्रं समाः** = हजारौँ वर्ष
**व्यगमन्** = बिते (तर पनि)
**सप्राणयोः** = दुबै ज्युँदै देखेर
**अमराः** = देवताहरूले
**चित्रम्** = आश्चर्य
**अमंसत** = माने

**वाक्यार्थ–** हे परीक्षित् ! यसप्रकार गजेन्द्र र गोही एकअर्कालाई तालभित्र र बाहिरतिर तान्न खोज्दै युद्ध गरिरहँदा हजारौँ वर्ष बिते, तैपनि दुबै ज्युँदै रहेको देखेर देवताहरूले आश्चर्य माने।

**ततो गजेन्द्रस्य मनोबलौजसां कालेन दीर्घेण महानभूद् व्ययः।**
**विकृष्यमाणस्य जलेऽवसीदतो विपर्ययोऽभूत् सकलं जलौकसः॥ ३०॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**जले** = तालभित्र

**दीर्घेण कालेन** = धेरै समयसम्म
**विकृष्यमाणस्य** = लगातार तानिएको
**अवसीदतः** = थाकेको
**गजेन्द्रस्य** = त्यस गजेन्द्रको
**मनोबलौजसां** = मनको उत्साह, शरीरको बल र इन्द्रियको शक्तिको
**महान्** = असाध्यै धेरै
**व्ययः** = क्षय
**अभूत्** = भयो
**जलौकसः** = पानीमैं रहने गोहीको चाहिँ
**सकलं** = यी सबै
**विपर्ययः** = विपरीतरूपले (वृद्धि)
**अभूत्** = भयो

**वाक्यार्थ–** लामो समयसम्म तालभित्र लगातार तानिएकाले थाकेको त्यस गजेन्द्रको मनमा रहेको उत्साह, शरीरमा रहेको बल र इन्द्रियमा रहेको शक्ति पनि धेरै क्षीण भइसकेका थिए। पानीमैं रहने गोहीको चाहिँ उत्साह, बल र इन्द्रियशक्तिको झन्–झन् वृद्धि भयो।

**इत्थं गजेन्द्रः स यदाप सङ्कटं प्राणस्य देही विवशो यदृच्छया।**
**अपारयन्नात्मविमोक्षणे चिरं दध्याविमां बुद्धिमथाभ्यपद्यत॥ ३१॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**यदृच्छया** = अकस्मात्
**विवशः** = (आपत्तिको अघि) विवश बनेको
**देही** = शरीरलाई आफू ठान्ने
**सः** = त्यो
**गजेन्द्रः** = गजेन्द्र
**यदा** = जुन समयमा
**प्राणस्य** = प्राणको नै
**सङ्कटं** = सङ्कटमा
**आप** = पऱ्यो, तब
**आत्मविमोक्षणे** = सङ्कटबाट आफूलाई छुटाउन
**अपारयन्** = असमर्थ भएपछि
**चिरं** = धेरै बेरसम्म
**दध्यौ** = विचार गऱ्यो
**अथ** = अनि
**इमां** = यस्तो
**बुद्धिं** = निश्चयमा
**अभ्यपद्यत** = पुग्यो

**वाक्यार्थ–** यसप्रकार अकस्मात् आइपरेको आपत्तिको अघि विवश बनेको एवं शरीरलाई आफू ठान्ने गजेन्द्र जब प्राणसङ्कटमा पऱ्यो त्यस वेला अरू उपायले यस प्राणसङ्कटबाट आफूलाई छुटाउन नसकेपछि उसले यस विषयमा धेरै बेरसम्म विचार गऱ्यो र अन्त्यमा यस्तो निश्चयमा पुग्यो।

**न मामिमे ज्ञातय आतुरं गजाः कुतः करिण्यः प्रभवन्ति मोचितुम्।**
**ग्राहेण पाशेन विधातुरावृतोऽप्यहं च तं यामि परं परायणम्॥ ३२॥**

**पदार्थ–**
**आतुरं** = सङ्कटमा परेर आत्तिएको
**माम्** = मलाई
**मोचितुम्** = छुटाउन
**इमे** = यी
**ज्ञातयः** = मेरा सम्बन्धी
**गजाः अपि** = हात्तीहरू पनि
**न प्रभवन्ति** = सक्दैनन् भने
**करिण्यः** = यी हत्तिनीहरू
**कुतः** = कसरी सक्लान्
**विधातुः** = विधाताको
**पाशेन** = पासोजस्तो
**ग्राहेण** = गोहीद्वारा
**आवृतः** = ग्रस्त भएको
**अहं च** = म चाहिँ
**परं** = सबैभन्दा श्रेष्ठ
**परायणम्** = सबैका आश्रयस्थल
**तं** = ती परमात्माकै शरणमा
**यामि** = जान्छु

**वाक्यार्थ–** सङ्कटमा परेर आत्तिरहेको मलाई यस आपत्तिबाट छुटाउन मेरा आफन्त हात्तीहरूले

पनि सकेनन् भने यी हत्तिनीहरूले कसरी सक्लान् र? यो गोही विधाताले मलाई समात्न फ्याँकेको पासो नै रहेछ। अब म चाहिँ सबैका अन्तिम आश्रयस्थल उनै परमात्माको शरणमा जान्छु।

**विवरण–** यस श्लोकमा सांसारिक वस्तुहरूमाथि गरिएको भ्रमपूर्ण भरोसा कसरी नष्ट हुन्छ भनी बताइएको छ। अनादि कालदेखि सबै प्राणीहरू सांसारिक वस्तुहरूलाई नै सत्य मान्दै त्यसमा नै विश्वस्त हुँदै आएका छन्। मृत्युलाई म आफ्नै बलले जित्न सक्छु भनी जीव सकेसम्म मृत्युलाई जित्ने प्रयास गर्दछ। तर जब ऊ आफ्नो प्रयासबाट थाक्दछ अनि ऊ आफूमा रहेको भ्रमबाट झल्याँस्स हुन्छ। यहाँ गजेन्द्रले पनि आफ्ना आफन्त, बन्धु, पुत्र, पत्नीहरूले दुःखबाट आफूलाई बचाउन नसक्ने कुरा बुझेर नै अब म चाहिँ सबैका अन्तिम आश्रयस्थल उनै परमात्माको शरणमा जान्छु भनेको छ।

**यः कश्चनेशो बलिनोऽन्तकोरगात् प्रचण्डवेगादभिधावतो भृशम्।**
**भीतं प्रपन्नं परिपाति यद्भयान्मृत्युः प्रधावत्यरणं तमीमहि॥ ३३॥**

**पदार्थ–**
**चण्डवेगात्** = प्रबल वेगसँग
**भृशम्** = बारम्बार
**अभिधावतः** = आफ्नो पछि लागेको
**बलिनः** = बलियो
**अन्तकोरगात्** = कालरूपी सर्पबाट
**भीतं** = डराउँदै
**प्रपन्नं** = शरणमा आउनेलाई
**यः कश्चन** = जो-कोहीले
**परिपाति** = जोगाउँछ
**ईशः** = त्यही परमात्मा हो
**यद्भयात्** = जसको डरले गर्दा
**मृत्युः** = मृत्यु पनि
**प्रधावति** = आफ्नो काममा लागिरहन्छ
**तं** = उनै परमात्माको
**अरणं** = शरणमा
**ईमहि** = जान्छौँ (जान्छु)

**वाक्यार्थ–** असाध्यै बलियो र सर्पजस्तो झम्टेर प्राणीहरूको पछि लाग्ने कालबाट डराई आफ्नो शरणमा आउनेलाई जोगाउन परमात्मा मात्र समर्थ हुनुहुन्छ। परमात्माकै डरले गर्दा मृत्युसमेत आफ्नो काममा लागिरहन्छ। अब म उनै परमात्माको शरणमा जान्छु।

**विवरण–** यस अध्यायमा गजेन्द्रको प्रसङ्गबाट सम्पूर्ण संसार र त्यसमा रहने जीवहरूको जीवनको यथार्थलाई प्रकट गर्न खोजिएको छ। संसार नै त्रिकूट पर्वत हो। यस त्रिकूट पर्वतमा रहेका चाँदी, सुन र फलामका तीन चुचुराहरू क्रमशः सत्त्वगुण, रजोगुण र तमोगुणका प्रतीक हुन्। गजेन्द्र भनेको जीवात्मा हो, जो आफ्नो इष्टमित्र, परिवारजनद्वारा घेरिई मलाई कसैले केही गर्न सक्दैन भन्ने भ्रमपूर्ण अहङ्कारमा मस्त भई यता-उति डुलिरहन्छ। संसारमा प्राणीहरूलाई जबसम्म दुःख आइपर्दैन तबसम्म उनीहरू असाध्यै उन्मत्त हुन्छन्। गजेन्द्रले त्यो जङ्गल परिसरलाई थर्काउँदै र रुखहरूलाई भाँच्दै हिँड्नु जीवात्माहरू मदमत्त भई हिँड्छन् भनेको हो। आपत्तिकालमा मलाई मेरा परिवारले बँचाइहाल्नेछन् भन्ने सोचेर पनि जीवहरू ढुक्क भएका हुन्छन्। तर रोग, दुःख र मृत्यु कोहीसँग बाँडिने वस्तु होइनन्, यिनलाई त आफू एक्लैले भोग्नुपर्दछ। सरोवरमा नुहाउन गएको मदमत्त हात्तीलाई अचानक एउटा गोहीले समात्यो। गजेन्द्रले त्यसबाट फुत्कन अनेक प्रयास गर्‍यो

तर उसको बलले केही काम गरेन। उसले आफ्ना सहयोगी र परिवारजनबाट मुक्तिको आशा गरेको थियो। उनीहरूले पनि गजेन्द्रलाई बचाउन प्रयास गरे, तर सकेनन्। हत्तिनीहरू गजेन्द्रको मृत्यु हुने शङ्कामा रुन थाले, तर उसलाई जोगाउन केही गर्न सकेनन्। यसपछि जीवनमा प्राणी कति दुर्बल र निरीह हुन्छ भन्ने कुराको ज्ञान गजेन्द्रलाई भयो र त्यही वेला उसमा सर्वाधार परमात्माको शरणमा जाने विचार आयो। प्रारब्धले मृत्युरूपी पासो त सबै प्राणीहरूमाथि फाल्दछ, तर त्यसबाट आत्तिएर परमात्माको शरणमा पुग्ने सौभाग्यशाली त कोही-कोही मात्र हुन्छन्। अनादि कालदेखि प्राणीहरूको हृदयभित्र रही उनीहरूको सबै व्यवहारलाई प्रकाशित गरिरहने परमात्माबाहेक अरू कसैले पनि मृत्युभयलाई नाश गर्न सक्दैन। मृत्युरूपी गोहीले नछाड्ने गरी पक्डिएपछि संसारका अनित्य सम्बन्धहरूको आसक्ति र अहङ्काररूपी दुबै भ्रमबाट मुक्त भएर परमात्माको शरणमा जाने गजेन्द्रको कथा सम्पूर्ण जीवात्माहरूको कथा हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे मन्वन्तरानुवर्णने गजेन्द्रोपाख्याने द्वितीयोऽध्यायः ॥ २ ॥**

# अथ तृतीयोऽध्यायः

## गजेन्द्रद्वारा भगवान्को स्तुति र गजेन्द्रको सङ्कटमोचन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं व्यवसितो बुद्ध्या समाधाय मनो हृदि ।**

**जजाप परमं जाप्यं प्राग्जन्मन्यनुशिक्षितम् ॥ १ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार (गजेन्द्रले)
**बुद्ध्या** = बुद्धिद्वारा
**व्यवसितः** = निश्चय गरेर
**मनः** = मनलाई
**हृदि** = हृदयमा
**समाधाय** = एकाग्र गरी
**प्राग्जन्मनि** = पूर्वजन्ममा
**अनुशिक्षितम्** = सिकेको
**परमं** = श्रेष्ठ
**जाप्यं** = स्तोत्र
**जजाप** = पाठ गरे

**वाक्यार्थ–** बुद्धिले यसप्रकार निश्चय गरेर गजेन्द्रले आफ्नो मनलाई एकाग्र पारे र पूर्वजन्ममा सिकेको श्रेष्ठ स्तोत्रद्वारा भगवान्को स्तुति गर्न थाले।

**टिप्पणी–** गजेन्द्रको पूर्वजन्मको प्रसङ्ग श्रीमद्भागवतको ८/४/७ मा बताइएको छ।

**गजेन्द्र उवाच** (गजेन्द्रले भने)

**ॐ नमो भगवते तस्मै यत एतच्चिदात्मकम् ।**

**पुरुषायादिबीजाय परेशायाभिधीमहि ॥ २ ॥**

**पदार्थ–**
**यतः** = जहाँबाट
**एतत्** = यो (प्राणीजगत्)
**चिदात्मकम्** = चेतन बन्दछ
**तस्मै** = त्यस्ता
**पुरुषाय** = सबैको हृदयभित्र रहने
**आदिबीजाय** = प्रकृतिपुरुषरूप
**परेशाय** = सम्पूर्ण जगत्का स्वामी
**भगवते** = भगवान्
**ॐ** = ॐकारवाच्य परमात्मालाई
**नमः** = प्रणाम
**अभिधीमहि** = मनमनै गर्दछु

**वाक्यार्थ–** परमात्माबाट नै सम्पूर्ण प्राणीजगत् चेतन बनेको छ। उहाँ नै सबैका हृदयभित्र बस्नुहुन्छ, प्रकृतिपुरुषरूप हुनुहुन्छ एवं सम्पूर्ण जगत्का स्वामी हुनुहुन्छ। त्यस्ता सर्वशक्तिमान् ॐकारवाच्य परमात्मालाई मनमनै प्रणाम गर्दछु।

**यस्मिन्निदं यतश्चेदं येनेदं य इदं स्वयम् ।**

**योऽस्मात् परस्माच्च परस्तं प्रपद्ये स्वयम्भुवम् ॥ ३ ॥**

**पदार्थ–**
**इदं** = यो जगत्
**यस्मिन्** = जहाँ (अडिएको छ)

| | | |
|---|---|---|
| **इदं** = यो जगत् | **इदं** = यो जगत् (बनेको छ) | **तं** = त्यस्ता |
| **यतः** = जहाँबाट (उत्पन्न हुन्छ) | **यः** = जो | **स्वयम्भुवम्** = स्वयंसिद्ध |
| **इदं** = यो जगत् | **अस्मात्** = यो कार्यरूप जगत् र | परमात्माको |
| **येन** = जसद्वारा (बन्दछ) | **परस्मात् च** = जगत्को कारण | **प्रपद्ये** = शरणमा पर्दछु |
| **यः च** = जो | प्रकृतिभन्दा पनि | |
| **स्वयम्** = आफैं नै | **परः** = टाढा छ | |

**वाक्यार्थ–** यो सम्पूर्ण जगत् जहाँ अडिएको छ, यो जगत् जसद्वारा बन्दछ, जो स्वयं नै जगत्को रूपमा प्रकट हुनुभएको छ, जो कार्यरूप जगत् र त्यसको कारण प्रकृति आदिभन्दा पनि पर हुनुहुन्छ म त्यस्ता स्वयंसिद्ध परमात्माको शरणमा पर्दछु।

**यः स्वात्मनीदं निजमाययार्पितं क्वचिद् विभातं क्व च तत् तिरोहितम्।**
**अविद्धदृक् साक्ष्युभयं तदीक्षते स आत्ममूलोऽवतु मां परात् परः॥ ४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **क्व च** = कहिले चाहिँ | **आत्ममूलः** = आफैं आफ्ना |
| **यः** = जसले | **तिरोहितम्** = नदेखिने | प्रकाश भएका |
| **निजमायया** = आफ्नो मायाद्वारा | **तत् तत्** = ती–ती | **परात् परः** = इन्द्रिय आदिभन्दा |
| **स्वात्मनि** = आफैंमा | **उभयं** = कार्यकारणात्मक दुबै | पर रहनुभएका |
| **अर्पितं** = अध्यस्त | किसिमका पदार्थहरूलाई | **सः** = ती परमात्माले |
| **इदं** = यस जगत्लाई | **अविद्धदृक्** = नित्य दृष्टि भएका | **मां** = मलाई |
| **क्वचित्** = कहिले | **साक्षी** = साक्षी रूप परमात्मा | **अवतु** = रक्षा गर्नुहोस् |
| **विभातं** = देखिने र | **ईक्षते** = प्रकाशित भइरहनुहुन्छ | |

**वाक्यार्थ–** जसले आफ्नै मायाद्वारा आफैंमा कहिले (सृष्टि र स्थिति कालमा) देखिने र कहिले (प्रलय कालमा) नदेखिने यो सम्पूर्ण कार्यकारणात्मक जगत् अध्यस्त गर्नुभएको छ, जसको दृष्टिशक्ति नित्य छ, जो पदार्थहरू रहँदा या नरहँदा साक्षी रूपमा प्रकाशित भइरहनुहुन्छ, जो स्वयंप्रकाश हुनुहुन्छ र इन्द्रिय आदिभन्दा पर हुनुहुन्छ त्यस्ता परमात्माले मेरो रक्षा गर्नुहोस्।

**विवरण–** माथिका दुई श्लोकमा परमात्मालाई जगत्को अभिन्न निमित्तोपादानकारणको रूपमा बताइएको छ। सामान्यतया हरेक कार्यमा चेतन कर्ता निमित्तकारण हुन्छ भने जुन पदार्थबाट कार्यको उत्पत्ति हुन्छ त्यो वस्तु उपादानकारण हुन्छ। जस्तै घैंटोको लागि चेतन कर्ताको रूपमा रहेको कुमाले निमित्तकारण हो भने कार्यरूप घैंटोको उत्पत्तिस्रोतको रूपमा रहेको माटो उपादान कारण हो। कार्य उपादान कारणसँग छुट्टिएर रहन सक्दैन तर निमित्तकारण नभए पनि कार्य छुट्टै रहन सक्छ। वेदान्त सिद्धान्त अनुसार ब्रह्म नै जगत्को उपादान र निमित्तकारण हो। चेतन कर्ता भएकाले ब्रह्म निमित्तकारण हो र जगत्को रूपमा आफैं बनेको हुनाले ब्रह्म नै उपादानकारण पनि हो।

यस श्लोकमा आएको **यस्मिन्** पदले अधिष्ठानलाई बुझाएको छ, **यतः** पदले उपादानलाई

बुझाएको छ भने **येन** पदले कर्तालाई बुझाएको छ। अधिष्ठान भनेको आधार हो, जहाँ बसेर रचना गरिन्छ। जुन वस्तुको प्रयोग गरी कार्यको रचना गरिन्छ त्यसलाई उपादान भनिन्छ। जस्तै— घैंटोको लागि माटो। घैंटो बनाउनका लागि उपादान माटो र अधिष्ठान जमिन भएजस्तो जगत् बनाउँदा अर्को कुनै अधिष्ठान र उपादान थिएन, अपितु यी दुबै रूपमा परमात्मा नै हुनुहुन्थ्यो। आफैँमा बसेर आफैँलाई नै सामग्री बनाई जगत् बनाउनुको तात्पर्य परमात्मा स्वयम् नै जगत्को रूपमा देखिनुभएको हो भन्ने सिद्ध हुन्छ। जसरी स्वप्नावस्थामा मन नै नदी, पहाड, सूर्य अनेक प्राणी आदि रूपमा देखिन्छ त्यसै गरी परमात्मा आफैँ नै जगत्को रूपमा देखिनुभएको हो। यही अर्थलाई यहाँ **यः इदं स्वयम्** भन्ने पदावलीले बुझाएको छ।

एउटा वस्तु अर्को रूपमा देखिनका लागि कि त त्यसमा परिवर्तन आएको हुनुपर्दछ कि त त्यो भ्रमवश अर्को रूपमा देखिएको हुनुपर्दछ। दूध दहीको रूपमा परिणत भए झैँ ब्रह्म जगत्को रूपमा परिवर्तन भएको होइन। ब्रह्म सर्वव्यापी, नित्य एवं अपरिवर्तनीय छ। ब्रह्म मायाद्वारा जगत्को रूपमा देखिएको हो। यस श्लोकमा आएको **निजमायया अर्पितं** यस पदावलीले यही कुरालाई बुझाएको छ। मायाद्वारा वा भ्रमद्वारा देखिनुको अर्थ हुन्छ— वास्तवमा नहुनु। यसको सिधा अर्थ जगत् भन्ने कुनै वस्तु छैन, ब्रह्म नै आफ्नो स्वरूपलाई नछाडीकन जगत्को रूपमा देखिएको हो। यसैले यहाँ ब्रह्म आफूले आफैँमा आफैँद्वारा आफूलाई जगत्को रूपमा बनाउँछ भनिएको हो। बृहदारण्यकोपनिषद् (१/४/७)मा पनि मायाद्वारा सृष्टिकल्पना रचाई त्यहीँभित्र जीवरूपले पसी जगत्का भेदव्यवहारहरूलाई प्रकाशित गर्ने एउटै चेतन तत्त्व परमात्मा हो भनिएको छ। त्यसै गरी यहाँ पनि परमात्मालाई जगत्को अभिन्न निमित्तोपादानकारणको रूपमा स्तुति गरिएको हो।

**कालेन पञ्चत्वमितेषु कृत्स्नशो लोकेषु पालेषु च सर्वहेतुषु।**
**तमस्तदासीद् गहनं गभीरं यस्तस्य पारेऽभिविराजते विभुः॥ ५॥**

**पदार्थ—**
**कालेन** = प्रलयकाल भएपछि
**लोकेषु** = लोकहरू
**पालेषु** = लोकपालहरू र
**सर्वहेतुषु च** = यी सबैका कारण पनि
**कृत्स्नशः** = सम्पूर्ण वस्तु
**पञ्चत्वम्** = मृत्युमा
**इतेषु** = प्राप्त भएपछि
**तदा** = त्यस प्रलय अवस्थामा
**गहनं** = गाढा
**गभीरं** = अनन्त
**तमः** = अन्धकार मात्र
**आसीत्** = रहन्छ
**यः विभुः** = जुन परमात्मा चाहिँ
**तस्य** = त्यस अन्धकारको पनि
**पारे** = पारिपट्टि
**अभिविराजते** = रहिरहनुहुन्छ

**वाक्यार्थ—** प्रलयकालमा (पृथिवी आदि सम्पूर्ण) लोकहरू, (इन्द्र आदि) लोकपालहरू र यी सबैका कारण महत्तत्त्व आदि पनि नष्ट भएपछि त्यस वेला केवल गाढा र अनन्त अन्धकार मात्र रहन्छ। तर परमात्मा चाहिँ त्यो अज्ञानरूप अन्धकारभन्दा पनि माथि त्यसको पनि प्रकाशक रूपले रहिरहनुहुन्छ।

**न यस्य देवा ऋषयः पदं विदुर्जन्तुः पुनः कोऽर्हति गन्तुमीरितुम्।**
**यथा नटस्याकृतिभिर्विचेष्टतो दुरत्ययानुक्रमणः स मावतु॥ ६॥**

**पदार्थ–**
**आकृतिभिः** = अनेक वेशभूषाले
**विचेष्टतः** = अनेक अभिनय गर्ने
**नटस्य यथा** = अभिनेताको झैँ
**यस्य** = जुन परमात्माको
**पदं** = रहस्यलाई
**देवाः** = देवताहरू र
**ऋषयः** = ऋषिहरूले समेत
**न विदुः** = जान्न सक्दैनन् भने
**पुनः कः** = फेरि कुन चाहिँ
**जन्तुः** = प्राणीले
**गन्तुम्** = त्यसलाई पाउन र
**ईरितुम्** = त्यसको वर्णन गर्न
**अर्हति** = सक्ला र
**दुरत्ययानुक्रमणः** = जसको लीलारहस्य बुझिनसक्नु छ
**सः** = त्यस्ता परमात्माले
**मा** = मलाई
**अवतु** = रक्षा गर्नुहोस्

**वाक्यार्थ–** अभिनेताले अनेक वेशभूषा बदलेर अनेक प्रकारले अभिनय गरे झैँ परमात्मा पनि अनेक रूपले लीला गर्नुहुन्छ। देवता र ऋषिहरूले पनि उहाँको लीलारहस्यलाई बुझ्न सकेनन् भने अरू कुन चाहिँ प्राणीले त्यो रहस्य थाहा पाउन र त्यसलाई बताउन सक्ला। यस्ता बुझिनसक्नु लीलारहस्य भएका परमात्माले मेरो रक्षा गर्नुहोस्।

**दिदृक्षवो यस्य पदं सुमङ्गलं विमुक्तसङ्गा मुनयः सुसाधवः।**
**चरन्त्यलोकव्रतमव्रणं वने भूतात्मभूताः सुहृदः स मे गतिः॥ ७॥**

**पदार्थ–**
**यस्य** = जसको
**सुमङ्गलं** = परम मङ्गलमय
**पदं** = स्वरूपलाई
**दिदृक्षवः** = जान्ने इच्छा गर्ने
**सुसाधवः** = साधु स्वभाव भएका
**भूतात्मभूताः** = सबैका आत्मरूप
**सुहृदः** = सबैका परम हितकारी
**मुनयः** = मुनिहरू
**विमुक्तसङ्गाः** = सबै आसक्ति र सम्बन्धलाई छाडी
**वने** = वनमा (गई)
**अव्रणं** = अखण्ड
**अलोकव्रतम्** = ब्रह्मचर्य आदि अलौकिक व्रतहरू
**चरन्ति** = पालन गर्दछन्
**सः** = तिनै परमात्मा
**मे** = मेरो
**गतिः** = शरण हुनुहुन्छ

**वाक्यार्थ–** परमात्माको परम मङ्गलमय स्वरूपलाई जान्ने इच्छाले सबै प्राणीहरूलाई आत्मरूपमा देख्ने र सबैको हित चाहने साधु स्वभाव भएका मुनिहरू सम्पूर्ण आसक्ति र स्नेहसम्बन्धलाई परित्याग गरी वनमा जान्छन् अनि अखण्ड ब्रह्मचर्य आदि अलौकिक व्रतहरूको पालना गर्दछन्। त्यस्ता परमात्मा मेरो शरण हुनुहोस्।

**न विद्यते यस्य च जन्म कर्म वा न नामरूपे गुणदोष एव वा।**
**तथापि लोकाप्ययसम्भवाय यः स्वमायया तान्यनुकालमृच्छति॥ ८॥**

**पदार्थ–**
**यस्य** = जुन परमात्माको
**जन्म कर्म वा** = जन्म र कर्म

**न विद्यते** = छैनन्
**नामरूपे च** = नाम र रूप अनि
**गुणदोषः वा** = गुण र दोष पनि
**न एव** = छैनन्
**तथा अपि** = तर पनि
**यः** = जसले
**लोकाप्ययसम्भवाय** = लोकहरूको उत्पत्ति र नाश गर्नका लागि
**स्वमायया** = आफ्नो मायाद्वारा
**अनुकालं** = त्यो-त्यो समयमा
**तानि** = ती-ती गुणहरूलाई
**ऋच्छति** = स्वीकार गर्नुहुन्छ

**वाक्यार्थ–** परमात्माका जन्म, कर्म, नाम, रूप, गुण र दोष केही पनि छैनन्। तर पनि लोकहरूको उत्पत्ति-नाश आदि गर्नका लागि उहाँले ती-ती वेलामा ती-ती विशेष गुणहरूलाई आफ्नो मायाद्वारा स्वीकार गर्नुहुन्छ।

**विवरण–** माथिका दुई श्लोकमा परमात्मालाई पाउने वा साक्षात्कार गर्ने उपायको वर्णन गरिएको छ। परमात्मालाई पाउनका लागि जुन साधनको प्रयोग गरिन्छ त्यो **अव्रण** अर्थात् छिद्ररहित हुनपर्दछ। खोट या टुटफुट भएका कुनै साधनले परमसत्ताको दर्शन गर्न सकिँदैन। परमात्मालाई पाउनका लागि विभिन्न व्रत र नियमहरू सहयोगी बन्दछन्। यस्ता व्रतहरूमध्ये **अलोकव्रत** अर्थात् ब्रह्मचर्यव्रतलाई प्रमुख मानिएको छ। छान्दोग्योपनिषद् (८/४/१३)मा ब्रह्म प्राप्त गर्ने उपायको रूपमा ब्रह्मचर्यव्रतलाई बताइएको छ। ब्रह्मचर्यव्रत चित्तशुद्धिको प्रधान साधन हो। चित्त शुद्ध भइसकेपछि सम्पूर्ण पदार्थहरूमा आत्मभावनाद्वारा आत्मतत्त्वको अनुभूति गर्न सकिन्छ। माथि सातौँ श्लोकमा आएको **भूतात्मभूताः** यस पदले सबै प्राणीहरूमा आत्मभावना गर्ने भन्ने अर्थलाई नै बुझाएको छ। माण्डूक्योपनिषद् (७)मा **एकात्मप्रत्ययसार** अर्थात् ब्रह्मतत्त्वलाई जान्न एक मात्र आत्मचिन्तन नै प्रमाण हो भनी बताइएको छ। निरन्तरको चिन्तनले जब यो अर्थ अन्तःकरणमा दृढ हुन्छ तब यही अर्थ नै अखण्ड आत्मसाक्षात्कारको रूपमा प्रत्यक्ष हुन्छ। माथि आठौँ श्लोकमा चाहिँ परमात्माले मायाद्वारा अनेक अवतार धारण गर्नुहुने हुँदा उहाँलाई देख्न सकिने कुरा बताइको छ। वास्तवमा त परमात्मा नाम-रूपात्मक, जन्म-कर्म आदिले रहित नै हुनुहुन्छ तर जगत्को सृष्टि, स्थिति आदि व्यवस्था मिलाउन उहाँ समय-समयमा आफ्नो मायाद्वारा अनेक नाम-रूप अवतारहरू लिनुहुन्छ। निर्गुण आत्मतत्त्वको चिन्तन गर्न गाह्रो हुन्छ। त्यसैले भक्तहरूलाई कृपा गर्न धारण गरिएका यी अनेक नामद्वारा परमात्माको पुकार गर्न र रूपहरूद्वारा परमात्माको दर्शन गर्न सकिन्छ। यसरी माथिका दुई श्लोकमा निर्गुण र सगुण दुबै रूपमा परमात्माको दर्शन गर्न सकिने कुरा बताइएको छ।

**तस्मै नमः परेशाय ब्रह्मणेऽनन्तशक्तये।**
**अरूपायोरुरूपाय नम आश्चर्यकर्मणे॥ ९॥**

**पदार्थ–**
**अरूपाय** = रूपरहित भएर पनि
**उरुरूपाय** = अनेक रूप लिने
**आश्चर्यकर्मणे** = आश्चर्य लाग्दा कर्म गर्ने भगवान्लाई
**नमः** = प्रणाम छ
**अनन्तशक्तये** = अनन्त शक्ति भएका
**परेशाय** = सबैका परम मालिक
**तस्मै** = त्यस्ता
**ब्रह्मणे** = परमात्मालाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** जो रूपरहित भएर पनि अनेक रूप धारण गर्नुहुन्छ र आश्चर्य लाग्दा कर्महरू पनि गर्नुहुन्छ। त्यस्ता अनन्त शक्ति भएका सबैका मालिक र सर्वव्यापक परमात्मालाई प्रणाम छ।

**नम आत्मप्रदीपाय साक्षिणे परमात्मने।**
**नमो गिरां विदूराय मनसश्चेतसामपि ॥ १० ॥**

| पदार्थ– | **परमात्मने** = परमात्मालाई | **चेतसाम् अपि** = चित्तको पनि |
|---|---|---|
| **आत्मप्रदीपाय** = आफ्नो प्रकाश आफैँ हुनुहुने | **नमः** = प्रणाम छ | **विदूराय** = टाढा रहने भगवान्लाई |
| **साक्षिणे** = साक्षीरूप | **गिरां** = वाणीको | **नमः** = नमस्कार छ |
| | **मनसः** = मनको र | |

**वाक्यार्थ–** जो आफैँ आफ्ना प्रकाशक हुनुहुन्छ र जो सबैका साक्षी हुनुहुन्छ त्यस्ता परमात्मालाई प्रणाम छ। अनि वाणी, मन र चित्तले पनि जसलाई भेट्न सक्दैनन् त्यस्ता परमात्मालाई नमस्कार छ।

**सत्त्वेन प्रतिलभ्याय नैष्कर्म्येण विपश्चिता।**
**नमः कैवल्यनाथाय निर्वाणसुखसंविदे ॥ ११ ॥**

| पदार्थ– | **प्रतिलभ्याय** = पाउन सकिने | मालिकलाई |
|---|---|---|
| **विपश्चिता** = विवेकीहरूद्वारा | **निर्वाणसुखसंविदे** = मोक्षसुखका अनुभवरूप | **नमः** = प्रणाम छ |
| **सत्त्वेन** = विशुद्ध | **कैवल्यनाथाय** = मोक्षका | |
| **नैष्कर्म्येण** = संन्यासद्वारा | | |

**वाक्यार्थ–** जसलाई विवेकीहरू विशुद्ध संन्यासद्वारा पाउन सक्छन्, जो मोक्षसुखको अनुभव-स्वरूप हुनुहुन्छ र जो मोक्षपदका मालिक पनि हुनुहुन्छ यस्ता परमात्मालाई प्रणाम छ।

**विवरण–** यस श्लोकमा परमात्मालाई विशुद्ध संन्यास वा नैष्कर्म्यद्वारा प्राप्त हुने भनी बताइएको छ। नैष्कर्म्य शब्दको अर्थ कर्मरहितता हो। नैष्कर्म्य शब्दको सान्दर्भिक अर्थ यहाँ संन्यास हो। संन्यास आत्मज्ञानको साधन हो कि होइन भन्ने विषयमा विभिन्न मतहरू रहेका छन्।

मुण्डकोपनिषद् (३/२/६)मा भनिएको छ–

**वेदान्तविज्ञानसुनिश्चितार्थाः संन्यासयोगाद् यतयः शुद्धसत्त्वाः।**
**ते ब्रह्मलोकेषु परान्तकाले परामृताः परिमुच्यन्ति सर्वे।।**

अर्थात्, संन्यासरूपी योगबाट चित्त शुद्ध भएका र वेदान्तको अर्थलाई निश्चयपूर्वक बुझेका सर्वस्वत्यागीहरू मोक्ष प्राप्त गर्दछन् र उनीहरूको यही मृत्यु नै अन्तिम हुन्छ। यहाँ वेदान्तको अर्थ बुझ्न चित्तशुद्धिको साधनको रूपमा संन्यासयोगको विधान गरिएको छ। सर्वकर्मसंन्यासपूर्वक आत्मज्ञाननिष्ठाबाट मात्र मोक्ष प्राप्त हुन्छ भनी शङ्कराचार्यले श्रीमद्भगवद्गीताको उपोद्घात भाष्यमा उल्लेख गर्नुभएको छ– **गीताशास्त्रस्य प्रयोजनं परं निःश्रेयसं, तच्च सर्वकर्मसंन्यासपूर्वकात् आत्मज्ञाननिष्ठारूपाद् धर्माद् भवति** अर्थात्, गीताशास्त्रको प्रयोजन परम

निःश्रेयस वा मुक्ति हो र त्यो मुक्ति सर्वकर्मसंन्यासले युक्त आत्मज्ञाननिष्ठारूपी धर्मबाट प्राप्त हुन्छ।

संन्यास विना पनि ज्ञानद्वारा मोक्ष प्राप्त हुन सक्छ भन्ने अर्को मत छ। यसको उदाहरणको रूपमा रहनुभएको छ राजर्षि जनक। जनकले संन्यास ग्रहण गर्नुभएन तर उहाँले मोक्ष प्राप्त गर्नुभयो। त्यसकारण संन्यासलाई कसरी ज्ञानको साधन मान्न सकिन्छ ? यो प्रश्न उठ्छ। यहाँ के कुरा बुझ्नु आवश्यक छ भने संन्यास दुई प्रकारका हुन्छन्— बाह्य र आन्तरिक। बाह्य संन्यास भनेको सम्पूर्ण कर्म र त्यसका साधन शिखा-सूत्र आदिलाई त्याग्नु र घर छाड्नु हो भने आन्तरिक संन्यास भनेको अन्तःकरणको वृत्तिले बाहिरी दृश्य पदार्थहरूको पूर्णतः त्याग गरिदिनु हो। असली संन्यास यही आन्तरिक संन्यास हो। राजर्षि जनकले संन्यास विना नै मोक्ष प्राप्त गर्नुभयो भन्दा बाह्य संन्यासलाई लिएर भनिएको हो, आन्तरिक संन्यासलाई लिएर भनिएको होइन। आन्तरिक रूपमा त उहाँ पूर्णतः दृश्यचिन्तनले रहित हुनुहुन्थ्यो। शरीर रहँदा-रहँदै पनि शरीरको भान नभएका कारणले नै उहाँलाई विदेहसमेत भनिएको हो। उहाँ आन्तरिक संन्यासी भएकैले परमहंस शुकदेव समेत उहाँकहाँ ज्ञान सिक्न जानुभएको प्रसङ्ग आउँछ (देवीभागवत, १/१६/४४-४५, महाभारत शान्तिपर्व, ३२६/१०-११)। बाह्य संन्यास लिनुको मुख्य उद्देश्य भनेको पनि यही दृश्यपरित्याग नै हो। दृढ आत्मप्रत्ययबाट अनात्मभावनालाई पूर्णतः बिर्सन नै संन्यास लिइन्छ।

संन्यास लिएपछि के फाइदा हुन्छ भने नित्य-नैमित्तिक कर्महरूको झन्झटमा पर्नुपर्दैन र अहर्निश आत्मचिन्तन गर्ने समय पाइन्छ। गृहस्थ आदि आश्रममा रहँदा चाहिँ लोकशिक्षाका लागि पनि नित्य-नैमित्तिक कर्महरू गर्नै पर्ने हुन्छ। नचाहँदा नचाहँदै पनि कर्म, व्यवहार आदिका अनेक विघ्नहरू आइरहन्छन्, जसबाट अखण्ड आत्मभावना हुन कठिन हुन्छ। कर्महरूलाई छाडी आत्मचिन्तनतिर लाग्दा पनि कर्तव्यत्याग गरेको पाप लागिरहन्छ। हुन त निष्काम भावले कर्म गरिरहँदा परमात्मातिर दृष्टि लगी त्यही तत्त्वकै चिन्तन गर्न नसकिने होइन, तर व्यवहारको झमेलामा कुन सामान्य प्राणीले आफूलाई अकर्ता आत्मा भनी सम्झन सक्ला र ? यस्तो दृढता ब्रह्मज्ञानी महापुरुषमा बाहेक अरूमा पाउन सकिँदैन। त्यसैले गृहस्थमा भन्दा संन्यासमा नै आत्मचिन्तनको बढी सम्भावना रहन्छ। संन्यासी भएर चाहिँ प्रत्यक्तत्त्व परमात्माको चिन्तन र वेदान्त-श्रवण गरेन भने त्यो पतित हुन्छ भनी बताइएको छ।

संन्यासको अर्को थरी भेद पनि प्रसिद्ध छ— विविदिषासंन्यास र विद्वत्संन्यास। आत्मज्ञान गर्ने इच्छाले लिइएको संन्यास नै विविदिषासंन्यास हो। यही इच्छाले सम्पूर्ण कर्म एवं तिनका साधन शिखासूत्र आदिलाई पनि त्याग गरी ब्रह्मनिष्ठ गुरुको शरणमा गई वेदान्तवाक्यको श्रवण गरेर ज्ञान प्राप्त गर्ने प्रयास गरिन्छ। अर्को विद्वत्संन्यास चाहिँ जीवन्मुक्तिको सुख भोग्न ज्ञानीहरूद्वारा लिइन्छ। यसको उदाहरण महर्षि याज्ञवल्क्य हुनुहुन्छ। शरीरमा आत्मबुद्धिको परित्याग भइसक्दा पनि घरायसी व्यवहारले आत्मानन्दको अनुभूतिमा केही न केही व्यवधान गरिरहन्छ। त्यसैले याज्ञवल्क्यले आफ्ना दुई पत्नीहरूलाई सम्पूर्ण सम्पत्ति भाग लगाई संन्यास धारण गर्न खोज्नुभएको प्रसङ्ग बृहदारण्यकोपनिषद् (२/४/१)मा आउँछ। शरीर, इन्द्रिय आदिमा अहङ्कार, आसक्ति आदि छोड्नु मुख्य संन्यास हो। यसलाई देहसंन्यास भनिन्छ। यसका लागि

गेहसंन्यास अर्थात् घर छोड्नु पनि एउटा साधन हो। शरीरबाट संन्यास भएन भने चाहिँ घरबाट मात्र संन्यास लिएर केही फाइदा छैन र जतिसुकै वेदान्तसिद्धान्तलाई बुझ्ने भए तापनि त्यसले मोक्ष पाउँदैन भनी शङ्कराचार्यले विवेकचूडामणि (१६४)मा उल्लेख गर्नुभएको छ। यसरी ज्ञानका लागि स्थूल, सूक्ष्म र कारण तीन ओटै शरीरमा आसक्ति छोडी आन्तरिक देहसंन्यास लिनु अनिवार्य छ। त्यसैले भागवतको यस श्लोकमा विशुद्ध संन्यासयोगबाट मोक्ष प्राप्त हुन्छ भनिएको हो।

**नमः शान्ताय घोराय मूढाय गुणधर्मिणे।**

**निर्विशेषाय साम्याय नमो ज्ञानघनाय च ॥ १२ ॥**

**पदार्थ–**
**गुणधर्मिणे** = गुणहरूका धर्मलाई लिँदा
**शान्ताय** = शान्त
**घोराय** = घोर र
**मूढाय** = मूढरूप बन्नेलाई
**नमः** = प्रणाम छ
**निर्विशेषाय** = गुणका भेदहरूलाई नलिँदा
**साम्याय** = समभावमा रहने
**ज्ञानघनाय च** = ज्ञानस्वरूप परमात्मालाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** परमात्मा नै सत्त्वगुणलाई स्वीकार गर्दा शान्त, रजोगुणलाई लिँदा घोर र तमोगुणलाई लिँदा मूढ अवस्थावाला बन्नुहुन्छ। त्यस्तै गुणहरूको भेदलाई निरस्त गरी समभावमा रहने ज्ञानस्वरूप प्रभु पनि उहाँ नै हुनुहुन्छ। त्यस्ता परमात्मालाई बारम्बार प्रणाम छ।

**विवरण–** यहाँ परमात्मालाई सत्त्व आदि गुणका धर्महरू स्वीकार गर्ने भनी बताइएको छ। सर्वस्वरूप परमात्मा अन्तःकरणका सात्त्विक, राजस र तामस वृत्तिहरूको रूपमा पनि प्रकट हुनुभएको छ। संसारमा भएका राम्रा-नराम्रा सबै वस्तुहरू परमात्मरूप हुन् र परमात्माविना ती वस्तुहरूको छुट्टै सत्ता छैन। त्यसैले यस श्लोकमा अन्तःकरणका शान्त, घोर र मूढ वृत्तिहरूलाई पनि परमात्मरूप बताइएको हो। अन्तःकरणको सात्त्विक वृत्तिलाई शान्त वृत्ति, राजसलाई घोर वृत्ति तथा तामसलाई मूढ वृत्ति भनिन्छ। ब्रह्मका सत्, चित्, आनन्द अंश एवं मायाका असत्, जड एवं दुःख अंश भिन्न-भिन्न पदार्थमा भिन्न-भिन्न रूपमा रहन्छन्। शान्तवृत्तिमा ब्रह्मको सत्, चित्, आनन्द तीन अंश अभिव्यक्त हुन्छन्, मायाका कुनै पनि अंश त्यहाँ हुँदैनन्। घोर वृत्तिमा ब्रह्मको सत् र चित् एवं मायाको दुःख अंश अभिव्यक्त हुन्छन्। तमोगुणी वृत्तिमा ब्रह्मको सत् अंश अनि मायाको दुःख अंश प्रकट हुन्छन् भने बन्ध्यापुत्र आदि असत् पदार्थमा मायाको असत् अंश मात्र अभिव्यक्त हुन्छ। शान्त वृत्ति भन्नाले वैराग्य, उदारता, क्षमा आदिलाई बुझ्नुपर्छ। तृष्णा, राग, लोभ आदि रजोगुणी घोर वृत्ति हुन् भने मूर्च्छा, भय आदि तमोगुणी मूढ वृत्ति हुन्। यी सबै रूपमा परमात्मा प्रकट हुनुभएको छ र उहाँ यी सबैदेखि पर, निर्विशेष र सम हुनुहुन्छ।

**क्षेत्रज्ञाय नमस्तुभ्यं सर्वाध्यक्षाय साक्षिणे।**

**पुरुषायात्ममूलाय मूलप्रकृतये नमः ॥ १३ ॥**

**पदार्थ–**
**सर्वाध्यक्षाय** = सबैका स्वामी
**क्षेत्रज्ञाय** = क्षेत्रहरूलाई

प्रकाशित गर्ने
**साक्षिणे** = सर्वसाक्षी
**तुभ्यं** = हजुरलाई
**नमः** = प्रणाम छ
**आत्ममूलाय** = सबै जीवात्माका उत्पत्तिस्थल
**मूलप्रकृतये** = मूलप्रकृतिस्वरूप
**पुरुषाय** = परमात्मालाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** सबैका स्वामी र सम्पूर्ण क्षेत्रहरूलाई प्रकाशित गर्ने सर्वसाक्षी हजुरलाई प्रणाम छ। सबै जीवात्माहरूका उत्पत्तिस्थल र मूलप्रकृतिस्वरूप परमात्मालाई बारम्बार प्रणाम छ।

**सर्वेन्द्रियगुणद्रष्ट्रे सर्वप्रत्ययहेतवे ।**
**असताच्छाययोक्ताय सदाभासाय ते नमः ॥ १४ ॥**

**पदार्थ–**
**सर्वेन्द्रियगुणद्रष्ट्रे** = सम्पूर्ण इन्द्रिय र तिनका विषयहरूका द्रष्टा
**सर्वप्रत्ययहेतवे** = सबैथरी ज्ञानहरूका आधार
**छायया** = आफ्नै प्रतिबिम्बरूप
**असता** = काल्पनिक अहङ्कार आदिद्वारा
**उक्ताय** = लक्षित हुने
**सदाभासाय** = सम्पूर्ण वस्तुहरूको रूपमा प्रकट हुने
**ते** = हजुरलाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** जो सम्पूर्ण इन्द्रिय र तिनका विषयहरूलाई पनि प्रकाशित गर्नुहुन्छ, जो सबैथरी ज्ञानहरूका आधार हुनुहुन्छ, जो आफ्नै प्रतिबिम्बरूप काल्पनिक अहङ्कार आदिद्वारा लक्षित हुनुहुन्छ र जो सम्पूर्ण संसारको रूपमा प्रकट हुनुहुन्छ यस्ता परमात्मा हजुरलाई प्रणाम छ।

**विवरण–** यस श्लोकमा आएको **सर्वेन्द्रियगुणद्रष्ट्रे** यस पदको अर्थ हुन्छ– **सर्वेन्द्रियाणां ये गुणाः विषयाः तेषां द्रष्ट्रा तस्मै** अर्थात् सम्पूर्ण इन्द्रियका विषयहरूलाई प्रकाशित गर्नेलाई। सम्पूर्ण इन्द्रिय र तिनका विषयहरूलाई पनि प्रकाशित गर्ने साक्षी चैतन्यका रूपमा परमात्मा रहनुभएकाले यहाँ यस पदलाई पनि परमात्माको विशेषणका रूपमा प्रयोग गरिएको छ। कुनै पनि वस्तुको प्रत्यक्ष ज्ञान हुनका लागि सबभन्दा पहिले इन्द्रियको माध्यमबाट अन्तःकरणको वृत्ति बाहिर निस्कन्छ। अन्तःकरणको वृत्ति स्वच्छ भएकाले त्यसमा साक्षी चैतन्यको प्रतिबिम्ब परिरहेको हुन्छ त्यसैलाई चिदाभास भनिन्छ। त्यो वृत्ति जब विषय भएको ठाउँमा पुग्छ तब त्यसले त्यस विषयको अज्ञानलाई नष्ट गरिदिन्छ अनि अन्तःकरणको वृत्तिमा अभिव्यक्त चैतन्य वा चिदाभासले विषयलाई प्रकाशित गरिदिन्छ। अन्तःकरण र त्यसको वृत्ति जड भएकाले त्यसले कुनै वस्तुलाई प्रकाशित गर्न सक्दैन। यसका लागि साक्षी चैतन्यकै आवश्यकता पर्दछ। जसलाई हामी आँखा, कान, छाला आदि इन्द्रियले थाहा पाएको भन्छौं त्यो विषयलाई प्रकाशित गर्ने पनि साक्षी नै हो। इन्द्रियले ग्रहण गर्न नसक्ने धर्म-अधर्म, सुख-दुःख आदि पदार्थहरूलाई चाहिँ स्वयं साक्षी मात्रले प्रकाशित गर्दछ। यसैले साक्षी चैतन्यलाई नै **सर्वप्रत्ययहेतवे** अर्थात् सबैथरी ज्ञानहरूको आधार भनिएको हो। श्लोकमा आएको **असता छायया** यस पदले अहङ्कार आदिलाई लिनुपर्दछ। अहङ्कार आदिलाई ब्रह्मकै काल्पनिक प्रतिबिम्बरूप मानिएकाले यसलाई **छाया** भनिएको हो भने मायाकल्पित रूप भएकाले **असत्** भनिएको हो। तर यो असद्रूप अहङ्कारलाई हेरेर त्यसको प्रकाशक सद्रूप ब्रह्मलाई चिन्नुपर्दछ। जड अन्तःकरणमा परेको ब्रह्मचैतन्यको आभास नै चिदाभास

या अहङ्कार हो। यही नै प्रमाता या जीव हो। यो अहङ्कार साक्षी आत्माबाट प्रकाशित छ। यसर्थ जहाँ-जहाँ अहङ्कार प्रकाशित छ त्यहाँ-त्यहाँ साक्षी चैतन्यको प्रकाश छ। त्यसैले अहङ्कार आदि पदार्थद्वारा साक्षीको ज्ञान हुन्छ भनिएको हो। यसरी विभिन्न दृश्यहरूद्वारा आत्माको अनुमान गर्नुपर्ने भएकाले यहाँ परमात्मा आफ्नै प्रतिबिम्बरूप काल्पनिक अहङ्कार आदिद्वारा लक्षित हुनुहुन्छ भनिएको हो।

**नमो नमस्तेऽखिलकारणाय निष्कारणायाद्भुतकारणाय।**
**सर्वागमाम्नायमहार्णवाय नमोऽपवर्गाय परायणाय॥ १५॥**

**पदार्थ–**
**अखिलकारणाय** = सबैका कारण भएका (तर) **निष्कारणाय** = आफ्नो चाहिँ कुनै कारण नभएका **अद्भुतकारणाय** = अद्भुत प्रकारका कारण **ते** = हजुरलाई **नमः नमः** = बारम्बार प्रणाम छ **सर्वागमाम्नायमहार्णवाय** = वेद आदि सम्पूर्ण शास्त्रहरूका समुद्र झैँ परम आश्रय **अपवर्गाय** = मोक्षरूप **परायणाय** = सबैका अन्तिम आश्रयरूप हजुरलाई **नमः** = प्रणाम छ

**वाक्यार्थ–** हजुर अद्भुत प्रकारका कारण हुनुहुन्छ किनभने हजुर सबैका कारण हुनुहुन्छ तर हजुरको कारण कोही छैन। त्यस्ता हजुरलाई बारम्बार प्रणाम छ। सम्पूर्ण नदीहरूको आश्रय सागर भए झैँ वेद आदि सम्पूर्ण शास्त्रहरूको अन्तिम आश्रय भएका, सबैका परम आश्रय, मोक्षरूप यस्ता हजुरलाई प्रणाम छ।

**गुणारणिच्छन्नचिदुष्मपाय तत्क्षोभविस्फूर्जितमानसाय।**
**नैष्कर्म्यभावेन विवर्जितागमस्वयंप्रकाशाय नमस्करोमि॥ १६॥**

**पदार्थ–**
**गुणारणिच्छन्नचिदुष्मपाय** = जसको ज्ञानरूपी अग्नि मायाका गुणरूपी अरणिले छोपिएको छ **तत्क्षोभविस्फूर्जितमानसाय** = गुणहरूको क्षोभद्वारा नै सृष्टिविस्तारको सङ्कल्प गर्ने **नैष्कर्म्यभावेन** = शास्त्रीय विधिले कर्मलाई त्यागेर **विवर्जितागमस्वयंप्रकाशाय** = वेदोक्त कर्मबन्धनको नियमभन्दा माथि उठेकाहरूको अघि स्वयं प्रकट हुनुहुने हजुरलाई **नमः** = नमस्कार **करोमि** = गर्दछु

**वाक्यार्थ–** जसको नित्यज्ञानरूपी अग्नि संसारावस्थामा मायाका गुणरूपी अरणिद्वारा ढाकिएको छ, जो मायाका गुणहरूको क्षोभद्वारा प्रलयकालपछि सृष्टिविस्तारको सङ्कल्प गर्नुहुन्छ अनि जो शास्त्रीय विधिले कर्मत्याग गरेर वेदोक्त कर्मबन्धनको नियमभन्दा माथि उठ्ने व्यक्तिको हृदयभित्र आत्माको रूपमा प्रकट हुनुहुन्छ यस्ता हजुरलाई म प्रणाम गर्दछु।

**मादृक्प्रपन्नपशुपाशविमोक्षणाय**
**मुक्ताय भूरिकरुणाय नमोऽलयाय।**

**स्वांशेन सर्वतनुभृन्मनसि प्रतीत-**
**प्रत्यग्दृशे भगवते बृहते नमस्ते ॥ १७ ॥**

**पदार्थ–**
**मादृक्प्रपन्नपशुपाशविमोक्षणाय** = शरणमा आएको मजस्तो पशुको बन्धनलाई छुटाइदिने
**मुक्ताय** = नित्यमुक्त
**भूरिकरुणाय** = परम करुणामय
**अलयाय** = भक्तहरूको दुःख नष्ट गर्न जागरुक रहनेलाई
**नमः** = प्रणाम छ
**स्वांशेन** = आफ्नो अंशभूत चैतन्यद्वारा
**सर्वतनुभृन्मनसि** = सम्पूर्ण प्राणीहरूको हृदयभित्र
**प्रतीतप्रत्यग्दृशे** = प्रत्यगात्माको रूपमा उपलब्ध हुने
**बृहते** = सर्वव्यापक
**भगवते** = भगवान्
**ते** = हजुरलाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** जो भक्तहरूको दुःख नष्ट गर्न सधैँ जागरुक रहनुहुन्छ अनि जो दयालु व्यक्तिले पासोमा परेको पशुको बन्धनलाई छुटाए झैँ शरणमा आएका मजस्ता अज्ञानीहरूको बन्धन छुटाइदिनुहुन्छ यस्ता परमकरुणामय र नित्यमुक्त हजुरलाई प्रणाम छ। हजुरकै चैतन्यांश सम्पूर्ण प्राणीहरूको हृदयभित्र साक्षीरूपले प्रकाशित रहन्छ, सर्वव्यापक यस्ता परमात्मालाई प्रणाम छ।

**विवरण–** अज्ञानी जीवहरू नै पशु हुन् अनि तिनको अज्ञानरूपी पासो चुँडाल्न भगवान् समर्थ हुनुहुन्छ भन्ने कुरा यो श्लोकमा बताइएको छ। परमेश्वरले नै आफ्नो शरणमा आएका पशुरूप जीवात्माहरूको पासोलाई फुकाइदिनुहुन्छ। परमात्माले कहीँ बाहिरबाट आएर अज्ञान-बन्धन छिनाउनुपर्ने पनि होइन किनभने उहाँ आफ्नो अंशद्वारा सबैको हृदयभित्र प्रत्यक् रूपले रहनुभएको छ। यहाँ आफ्नो अंश भनेर अन्तर्यामी रूपले भन्ने अर्थ बुझ्नुपर्दछ। हुन त सर्वव्यापक वस्तुमा अंश-अंशीभाव सम्भव छैन। तर सर्वव्यापक तत्त्व नै हरेक अन्तःकरणपिच्छे छुट्टाछुट्टै अन्तर्यामी रूपले प्रकाशक बन्ने हुँदा साक्षीलाई अंश भनी बताइएको हो। परमात्मा **प्रत्यक्** अर्थात् सम्पूर्ण बुद्धिवृत्तिका साक्षी हुनुहुन्छ। **प्रत्यक्** शब्द गत्यर्थक **अञ्चु** धातुमा प्रति उपसर्ग लागेर बन्दछ। प्रति उपसर्गले यहाँ विपरीत भन्ने अर्थ दिएको छ। विपरीत रूपले रहने भएकाले आत्मालाई प्रत्यक् भनिएको हो। **प्रति– प्रातिलोम्येन, अञ्चति– गच्छति, असज्जडदुःखरूपाहङ्कारविलक्षणतया सच्चिदानन्दरूपेण भासते इति प्रत्यक्**। अर्थात् अहङ्कार असत्, जड र दुःखरूप छ, तर आत्मा त्योदेखि विपरीत सत्, चित् र आनन्दस्वरूप छ। त्यसैले आत्मालाई प्रत्यक् भनिएको हो। सबैको मनभित्र प्रकट हुँदा पनि परमात्मा बृहत् अर्थात् सर्वव्यापक हुनुहुन्छ। त्यस्ता परमात्मालाई यहाँ प्रणाम गरिएको छ।

**आत्मात्मजाप्तगृहवित्तजनेषु सक्तै-**
**र्दुष्प्रापणाय गुणसङ्गविवर्जिताय।**

**मुक्तात्मभिः स्वहृदये परिभाविताय**
**ज्ञानात्मने भगवते नम ईश्वराय॥ १८ ॥**

**पदार्थ–**
**आत्मात्मजाप्तगृहवित्तजनेषु** = शरीर, पुत्र, मान्यजन, घर, सम्पत्ति र आफन्तहरूमा
**सक्तैः** = आसक्त रहनेहरूद्वारा
**दुष्प्रापणाय** = पाउन नसकिने
**गुणसङ्गविवर्जिताय** = गुणहरूका आसक्तिले रहित
**मुक्तात्मभिः** = मुक्त व्यक्तिहरूद्वारा
**स्वहृदये** = आफ्नो हृदयमा
**परिभाविताय** = साक्षात्कार गरिने
**ज्ञानात्मने** = ज्ञानस्वरूप
**ईश्वराय** = सबैका नियन्त्रक
**भगवते** = भगवान्लाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** शरीर, पुत्र, मान्यजन, घर, सम्पत्ति र आफन्तहरूमा आसक्त रहने व्यक्तिहरूले जसलाई पाउन सक्दैनन्, जसमा गुणहरूको आसक्ति छैन अनि मुक्त व्यक्तिहरू सधैँ आफ्नो हृदयभित्र जसको साक्षात्कार गर्दछन् यस्ता सबैका नियन्त्रक ज्ञानस्वरूप हजुरलाई प्रणाम छ।

**यं धर्मकामार्थविमुक्तिकामा भजन्त इष्टां गतिमाप्नुवन्ति।**
**किं चाशिषो रात्यपि देहमव्ययं करोतु मेऽदभ्रदयो विमोक्षणम्॥ १९ ॥**

**पदार्थ–**
**धर्मकामार्थविमुक्तिकामाः** = धर्म, अर्थ, काम र मोक्ष चाहनेहरूले
**यं** = यसलाई
**भजन्तः** = भजन गरेर नै
**इष्टां** = चाहेको
**गतिम्** = फल
**आप्नुवन्ति** = पाउँछन्
**किं च** = (हजुरले चाहिँ) अरु
**आशिषः** = सुख र
**अव्ययं** = नाशरहित
**देहम् अपि** = पार्षद आदि दिव्य शरीर पनि
**राति** = दिनुहुन्छ (त्यस्ता)
**अदभ्रदयः** = परम दयालु प्रभुले
**मे** = मेरो
**विमोक्षणम्** = मोक्षण (मुक्ति)
**करोतु** = गर्नुहोस्

**वाक्यार्थ–** धर्म, अर्थ, काम र मोक्ष चाहनेहरूले हजुरको भजन गरेर मात्र आफूले चाहेको फल पाउन सक्दछन्। हजुर चाहिँ तिनीहरूले इच्छा गर्न पनि नसक्ने सुख र पार्षद आदि दिव्य शरीरहरू समेत दिनुहुन्छ। यस्ता परमदयालु भगवान्ले मलाई मुक्त गर्नुहोस्।

**एकान्तिनो यस्य न कञ्चनार्थं वाञ्छन्ति ये वै भगवत्प्रपन्नाः।**
**अत्यद्भुतं तच्चरितं सुमङ्गलं गायन्त आनन्दसमुद्रमग्नाः॥ २० ॥**
**तमक्षरं ब्रह्म परं परेशमव्यक्तमाध्यात्मिकयोगगम्यम्।**
**अतीन्द्रियं सूक्ष्ममिवातिदूरमनन्तमाद्यं परिपूर्णमीडे॥ २१ ॥**

**पदार्थ–**
**यस्य** = जुन परमात्माको
**अत्यद्भुतं** = अत्यन्त आश्चर्यमय
**सुमङ्गलं** = परम मङ्गलमय
**तच्चरितं** = उनै भगवान्को

लीला चरित्रलाई
**गायन्तः** = गाउँदै
**आनन्दसमुद्रमग्नाः** = त्यही आनन्दको समुद्रमा डुबिरहने
**ये** = जो
**भगवत्प्रपन्नाः** = भगवान्मा पूरा समर्पित
**एकान्तिनः** = एकनिष्ठ भक्तहरू
**वै** = निश्चय नै
**कञ्चन अर्थं** = कुनै पनि पदार्थलाई
**न वाञ्छन्ति** = चाहँदैनन्
**तं** = त्यस्ता
**परेशं** = परम मालिक
**अव्यक्तं** = अव्यक्त
**आध्यात्मिकयोगगम्यम्** = आत्मचिन्तनद्वारा पाउन सकिने
**अतीन्द्रियं** = इन्द्रियद्वारा अगम्य
**अतिदूरम् इव** = अज्ञानीहरूको लागि ज्यादै टाढा भए झैँ
**सूक्ष्मम्** = सबैभन्दा सूक्ष्म
**परिपूर्णम्** = सबैतिर व्याप्त रहने
**अनन्तम्** = अनन्त
**आद्यं** = सनातन
**अक्षरं** = अविनाशी
**परं ब्रह्म** = परमात्मालाई
**ईडे** = स्तुति गर्दछु

**वाक्यार्थ–** भगवान्का अत्यन्त आश्चर्यपूर्ण र परम मङ्गलकारी लीला चरित्रहरू गाउँदै आनन्दको समुद्रमा डुबिरहने एवं भगवान्मा नै पूर्ण रूपमा समर्पित रहने भक्तहरू अरू कुनै सांसारिक पदार्थहरूलाई चाहँदैनन्। सबैका स्वामी भएर पनि अव्यक्त रहनुहुने उहाँलाई इन्द्रियद्वारा भेट्न सकिन्न, केवल आत्मचिन्तनद्वारा मात्र फेला पार्न सकिन्छ। अत्यन्त सूक्ष्म हुनुभएकाले अज्ञानीहरू उहाँलाई भेट्न सक्दैनन्, त्यसैले उनीहरूका लागि भगवान् असाध्यै टाढा हुनुहुन्छ, तर जान्नेहरूका लागि जताततै व्यापक हुनुहुन्छ। अनन्त, सनातन र अविनाशी त्यस्ता परमात्मात्माको म स्तुति गर्दछु।

**यस्य ब्रह्मादयो देवा वेदा लोकाश्चराचराः।**
**नामरूपविभेदेन फल्व्या च कलया कृताः॥ २२॥**

**पदार्थ–**
**यस्य** = जुन परमात्माको
**फल्व्या** = अति सामान्य
**कलया** = कलाद्वारा
**नामरूपविभेदेन** = भिन्नभिन्न नाम र रूप भएका
**ब्रह्मादयः** = ब्रह्मा आदि
**देवाः** = देवताहरू
**वेदाः** = वेदहरू
**चराचराः** = चर र अचर
**लोकाः च** = लोकहरू पनि
**कृताः** = बनेका छन्

**वाक्यार्थ–** परमात्माको अति सामान्य अंश या कलाबाट नै भिन्न-भिन्न नाम र रूप भएका ब्रह्मा आदि देवताहरू, ऋग्वेद आदि वेदहरू अनि चर र अचर प्राणीहरू पनि उत्पन्न हुन्छन्।

**यथार्चिषोऽग्नेः सवितुर्गभस्तयो निर्यान्ति संयान्त्यसकृत् स्वरोचिषः।**
**तथा यतोऽयं गुणसम्प्रवाहो बुद्धिर्मनः खानि शरीरसर्गाः॥ २३॥**

**पदार्थ–**
**यथा** = जसरी
**अग्नेः** = आगोबाट
**अर्चिषः** = ज्वालाहरू र
**स्वरोचिषः** = चम्केको
**सवितुः** = सूर्यबाट
**गभस्तयः** = किरणहरू
**असकृत्** = बारम्बार
**निर्यान्ति** = निस्कन्छन् र
**संयान्ति** = त्यहीँ लीन हुन्छन्
**तथा** = त्यसै गरी
**बुद्धिः** = बुद्धि
**मनः** = मन
**खानि** = इन्द्रियहरू
**शरीरसर्गाः** = शरीरको प्राप्ति

**अयं** = यो
**गुणसम्प्रवाहः** = गुणको प्रवाह
**यतः** = जुन परमात्माबाट हुन्छ

**वाक्यार्थ–** जसरी दन्केको आगोबाट अनेक ज्वालाहरू अनि चम्केको सूर्यबाट अनेक किरणहरू निस्किरहन्छन् र फेरि त्यहीँ लीन भइरहन्छन् त्यसै गरी बुद्धि, मन, इन्द्रिय र शरीरहरूको उत्पत्ति आदि गुणहरूको प्रवाह परमात्माबाट नै हुन्छ (तिनीहरू फेरि परमात्मामैँ लीन हुन्छन्) ।

**स वै न देवासुरमर्त्यतिर्यङ् न स्त्री न षण्ढो न पुमान् न जन्तुः ।**
**नायं गुणः कर्म न सन्न चासन्निषेधशेषो जयतादशेषः ॥ २४ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**सः** = ती परमात्मा
**देवासुरमर्त्यतिर्यक्** = देवता, असुर, मानिस र पशु पनि
**न** = हुनुहुन्न
**स्त्री न** = स्त्री हुनुहुन्न
**पुमान् न** = पुरुष हुनुहुन्न
**षण्ढः न** = न नपुंसक हुनुहुन्छ
**जन्तुः न** = न त प्राणी हुनुहुन्छ
**अयं** = उहाँ
**गुणः** = गुण र
**कर्म च** = कर्म पनि
**न** = हुनुहुन्न
**सत् न** = सत् हुनुहुन्न
**असत् न** = असत् पनि हुनुहुन्न
**निषेधशेषः** = सबै कल्पनालाई निषेध गर्दा बाँकी रहने अनि
**अशेषः** = मायाद्वारा सम्पूर्ण रूपमा प्राप्त पनि हुने परमात्मा (मेरो उद्धारार्थ)
**जयतात्** = प्रकट हुनुहोस्

**वाक्यार्थ–** निश्चय नै परमात्मा देवता, असुर, मानिस र पशुरूप हुनुहुन्न। उहाँ स्त्री, पुरुष र नपुंसकरूप पनि हुनुहुन्न। उहाँ गुण, कर्म, सत्, असत् रूप पनि हुनुहुन्न। काल्पनिक रूपहरूको निषेध गर्दा उहाँ एक मात्र बाँकी रहनुहुन्छ अनि मायाद्वारा अनेकौँ काल्पनिक रूपहरूमा अभिव्यक्त हुन पनि सक्नुहुन्छ। यस्ता परमात्मा मेरो उद्धारार्थ प्रकट हुनुहोस्।

**विवरण–** माथिका श्लोकमा मायागत उपाधिहरूलाई स्वीकार गर्दा परमात्मा सर्वरूप हुनुहुन्छ अनि वास्तवमा चाहिँ निर्विशेष हुनुहुन्छ भनी बताइएको छ। ब्रह्मलाई बताउने उपनिषद् वाक्यहरू पनि दुई थरी पाइन्छन्। एकथरी वाक्यहरूले ब्रह्मबाट जगत्को उत्पत्ति भएको, परमात्मा सर्वरूप र सच्चिदानन्दरूप भएको वर्णन गर्छन्। यस्ता वाक्यहरूलाई विधिपरक वाक्य भनिन्छ। निषेधपरक वाक्यहरूले चाहिँ औपाधिक धर्महरूको निषेध गरी ब्रह्मलाई अद्वितीय तत्त्वको रूपमा बुझाउँदछन्। यहाँ पनि तेइसौँ श्लोकमा विधिपरक दृष्टिले परमात्माबाट जगत् निस्किएको अथवा ती-ती रूपमा सर्वस्वरूप उहाँ नै प्रकट हुनुभएको बताइएको छ। आगोबाट झिल्का निस्किए झैँ शरीर, इन्द्रिय, मन, बुद्धि आदि सबै ब्रह्मबाटै निस्किएका बताइएको छ। चौबीसौँ श्लोकमा चाहिँ वास्तविक रूपमा ब्रह्मलाई कुनै पनि औपाधिक धर्म या पदार्थको आधारमा बुझाउन नसकिने बताइएको छ। न उहाँ देवता, दानव र मानव हुनुहुन्छ, न स्त्री-पुरुष, न गुण-कर्म, न त सत् र असत् नै। यी सबै मायाका कारणले खडा भएका कल्पित रूप हुन्। यी सबैको निषेध गर्दा बाँकी रहने तत्त्व, जो संसारको अत्यन्ताभावले युक्त छ त्यही तत्त्व नै ब्रह्म हो भनी निषेधशेष रूपमा ब्रह्मलाई बुझाइएको छ। श्लोकमा आएको **निषेधशेषः** पदले निषेधपरक दृष्टिबाट ब्रह्म बताएको छ भने **अशेषः** अर्थात् परमात्मा सर्वरूप हुनुहुन्छ भन्ने पदले पहिलो श्लोकमा बताइएको विधिपरक दृष्टि अँगालेको छ।

**जिजीविषे नाहमिहामुया किमन्तर्बहिश्चावृतयेभयोन्या ।**
**इच्छामि कालेन न यस्य विप्लवस्तस्यात्मलोकावरणस्य मोक्षम् ॥ २५ ॥**

**पदार्थ–**
**इह** = यस संसारमा
**अमुया** = यो
**अन्तः** = भित्र र
**बहिः च** = बाहिर पनि
**आवृतया** = अज्ञानद्वारा ढाकिएको
**इभयोन्या** = हात्तीको जुनिद्वारा
**किं** = के हुन्छ र
**अहं** = म
**न जिजीविषे** = बाँच्न चाहन्नँ
**यस्य** = जसको
**कालेन** = कालद्वारा
**विप्लवः न** = नाश हुँदैन
**तस्य** = त्यही
**आत्मलोकावरणस्य** = आफ्नो स्वरूपलाई ढाकिदिने अज्ञानको
**मोक्षम्** = नाश
**इच्छामि** = चाहन्छु

**वाक्यार्थ–** बाहिर-भित्र सबैतिर अज्ञानले नै ढाकिएको यस हात्तीको जुनिबाट खासै केही प्रयोजन सिद्ध गर्न सकिन्न। यसैले म हात्तीको शरीरमा बाँच्न पनि चाहन्नँ, बरू भगवान्‌को कृपाद्वारा आफ्नो स्वरूपलाई ढाकिदिने अज्ञानरूप आवरणबाट छुट्‌न चाहन्छु, जसको नाश गर्न काल पनि समर्थ छैन।

**सोऽहं विश्वसृजं विश्वमविश्वं विश्ववेदसम् ।**
**विश्वात्मानमजं ब्रह्म प्रणतोऽस्मि परं पदम् ॥ २६ ॥**

**पदार्थ–**
**सः अहं** = त्यस्तो म
**अविश्वं** = विश्वातीत भएर पनि
**विश्वम्** = विश्वको रूपमा प्रकट हुने
**विश्वसृजं** = विश्वका रचयिता
**विश्वात्मानम्** = संसारका पदार्थभित्र अन्तर्यामी भई पस्ने र
**विश्ववेदसम्** = ती अनेक सामग्रीद्वारा क्रीडा गर्ने
**अजं** = अजन्मा
**परं पदम्** = परम पदस्वरूप
**ब्रह्म** = ब्रह्मलाई
**प्रणतः अस्मि** = प्रणाम गर्दछु

**वाक्यार्थ–** विश्वातीत भएर पनि विश्वको रूपमा प्रकट भई विश्वको रचना समेत गर्ने परमात्मा संसारभरका सम्पूर्ण पदार्थभित्र अन्तर्यामीरूपले पस्नुभएको छ र ती-ती पदार्थहरूलाई खेलौना जस्तो बनाएर क्रीडा गर्नुहुन्छ, त्यस्ता अजन्मा परम पदस्वरूप परमात्मालाई म प्रणाम गर्दछु।

**योगरन्धितकर्माणो हृदि योगविभाविते ।**
**योगिनो यं प्रपश्यन्ति योगेशं तं नतोऽस्म्यहम् ॥ २७ ॥**

**पदार्थ–**
**योगरन्धितकर्माणः** = योगद्वारा संस्कारसहित कर्मलाई नाश गर्ने
**योगिनः** = योगीहरूले
**योगविभाविते** = योगद्वारा शुद्ध
**हृदि** = चित्तमा
**यं** = जसलाई
**प्रपश्यन्ति** = देख्दछन्
**तं** = ती
**योगेशं** = योगेश्वरलाई
**अहम्** = म
**नतः अस्मि** = प्रणाम गर्दछु

**वाक्यार्थ—** योगसाधनद्वारा सम्पूर्ण कर्म र त्यसका संस्कारहरूलाई नाश गर्ने योगीहरू त्यही योगसाधनद्वारा शुद्ध भएको चित्तमा जसको अनुभव गर्दछन् त्यस्ता योगेश्वर परमात्मालाई म प्रणाम गर्दछु।

**नमो नमस्तुभ्यमसह्यवेगशक्तित्रयायाखिलधीगुणाय।**

**प्रपन्नपालाय दुरन्तशक्तये कदिन्द्रियाणामनवाप्यवर्त्मने॥ २८॥**

**पदार्थ—**
**असह्यवेगशक्तित्रयाय** = जसको त्रिगुणात्मिका शक्तिको राग आदि वेग असह्य छ
**अखिलधीगुणाय** = सम्पूर्ण इन्द्रिय र विषयको रूपमा प्रकट हुने
**प्रपन्नपालाय** = शरणागत रक्षक
**दुरन्तशक्तये** = अनन्त शक्तिशाली
**कदिन्द्रियाणां** = इन्द्रिय अनियन्त्रित भएकाहरूद्वारा
**अनवाप्यवर्त्मने** = बाटो पनि नभेट्टाइने
**तुभ्यम्** = हजुरलाई
**नमः नमः** = बारम्बार प्रणाम छ

**वाक्यार्थ—** जसको त्रिगुणात्मिका शक्तिको राग आदि वेग असह्य छ, जो सम्पूर्ण इन्द्रिय र विषयहरूको रूपमा प्रकट हुनुहुन्छ, इन्द्रियहरूलाई नियन्त्रण गर्न नसक्ने मानिसले जसलाई प्राप्त गर्ने बाटो पनि फेला पार्दैनन् अनि जो शरणमा आउने प्राणीको रक्षा गर्नुहुन्छ यस्ता अनन्त शक्तिशाली हजुरलाई बारम्बार प्रणाम छ।

**नायं वेद स्वमात्मानं यच्छक्त्याहंधिया हतम्।**

**तं दुरत्ययमाहात्म्यं भगवन्तमितोऽस्म्यहम्॥ २९॥**

**पदार्थ—**
**यच्छक्त्या** = जसको मायाशक्तिद्वारा उत्पन्न हुने
**अहंधिया** = अहङ्कारद्वारा
**हतम्** = ढाकिएको
**स्वं** = आफू
**आत्मानं** = आत्मालाई
**अयं** = यो प्राणीले
**न वेद** = जान्न सक्दैन
**तं** = त्यस्ता
**दुरत्ययमाहात्म्यं** = अपार महिमा भएका
**भगवन्तम्** = भगवान्को शरणमा
**अहं** = म
**इतः अस्मि** = आएको छु

**वाक्यार्थ—** जसको मायाशक्तिद्वारा उत्पन्न हुने अहङ्कारले आत्माको स्वरूपलाई ढाकिदिएपछि प्राणीहरूले आफ्नो स्वरूपलाई बुझ्न सक्दैनन् त्यस्ता अपार महिमा भएका भगवान्को शरणमा म पर्दछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं गजेन्द्रमुपवर्णितनिर्विशेषं**

**ब्रह्मादयो विविधलिङ्गभिदाभिमानाः।**

**नैते यदोपससृपुर्निखिलात्मकत्वात्**
**तत्राखिलामरमयो हरिराविरासीत् ॥ ३० ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**उपवर्णितनिर्विशेषं** = निर्विशेष परमात्माको स्तुति गर्ने
**गजेन्द्रं** = गजेन्द्रलाई (बँचाउन)
**विविधलिङ्गभिदाभिमानाः** = अनेक विशेष नाम र रूपहरूमा मात्र आत्मबुद्धि गर्ने
**एते** = यी
**ब्रह्मादयः** = ब्रह्मा आदि देवताहरू
**यदा** = जब
**न उपससृपुः** = अघि बढेनन्
**तत्र** = त्यहाँ
**निखिलात्मकत्वात्** = सर्वात्मक हुनुभएकाले
**अखिलामरमयः** = सर्वदेवतामय
**हरिः** = श्रीहरि भगवान्
**आविः आसीत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** यसप्रकार नाम-रूपले रहित निर्विशेष परमात्माको स्तुति गर्ने गजेन्द्रलाई बँचाउनका लागि नामरूपमा आत्मबुद्धि गर्ने ब्रह्मा आदि देवताहरू अघि नबढेपछि सर्वात्मक र सर्वदेवतामय भगवान् श्रीहरि नै गजेन्द्रको अघि प्रकट हुनुभयो।

**विवरण–** गजेन्द्रले गरेको स्तुतिबाट ब्रह्मा आदि देवता प्रकट नभई किन भगवान् हरि नै प्रकट हुनु भयो भन्ने कुरा यस श्लोकले स्पष्ट गरेको छ। गजेन्द्रले **निर्विशेषः** अर्थात् कुनै पनि गुण, धर्म र जातिले रहित परमतत्त्वको स्तुति गरे। ब्रह्मा, इन्द्र आदि सम्पूर्ण देवताहरू व्यष्टि चेतनाले युक्त छन्। विशेष नाम, विशेष रूप र विशेष गुणधर्ममा अभिमान गर्ने देवताहरूले गजेन्द्रद्वारा गरिएको निर्विशेष परमात्माको स्तुतिलाई आफ्नो स्तुति गरिएको हो भन्ने ठानेनन्, यसै कारण गजेन्द्रलाई आपत्तिमा परेको देख्दा-देख्दै पनि उनीहरू गजेन्द्रलाई बचाउन गएनन्।

**तं तद्वदार्तमुपलभ्य जगन्निवासः**
**स्तोत्रं निशम्य दिविजैः सह संस्तुवद्भिः।**
**छन्दोमयेन गरुडेन समुह्यमान-**
**श्चक्रायुधोऽभ्यगमदाशु यतो गजेन्द्रः ॥ ३१ ॥**

**पदार्थ–**
**जगन्निवासः** = विश्वाधार परमात्माले
**तं** = ती गजेन्द्रलाई
**तद्वत्** = त्यसरी
**आर्तम्** = अत्यन्त पीडित भएको
**उपलभ्य** = थाहा पाएर
**स्तोत्रं** = कारुणिक पुकार पनि
**निशम्य** = सुनेपछि
**चक्रायुधः** = चक्र हातमा लिई
**छन्दोमयेन** = वेदमय
**गरुडेन** = गरुडद्वारा
**समुह्यमानः** = बोकिएर
**संस्तुवद्भिः** = स्तुति गर्ने
**दिविजैः सह** = देवताहरूसँगै
**यतः** = जतातिर
**गजेन्द्रः** = गजेन्द्र थिए, त्यतै
**आशु** = झटपट
**अभ्यगमत्** = जानुभयो

**वाक्यार्थ–** विश्वाधार परमात्माले गजेन्द्र असाध्यै पीडित भएको थाहा पाउनुभयो। उनको करुण

पुकार पनि सुनिसकेपछि उहाँ चक्र हातमा लिई वेदमय गरुडमाथि चढेर स्तुति गरिरहेका देवताहरूसँगै जता गजेन्द्र थिए, झटपट त्यतैतिर जानुभयो।

**सोऽन्तःसरस्युरुबलेन गृहीत आर्तो**
**दृष्ट्वा गरुत्मति हरिं ख उपात्तचक्रम्।**
**उत्क्षिप्य साम्बुजकरं गिरमाह कृच्छ्रान्**
**नारायणाखिलगुरो भगवन् नमस्ते॥ ३२॥**

**पदार्थ–**
**अन्तःसरसि** = तालभित्र
**ऊरुबलेन** = ज्यादै बलियो गोहीद्वारा
**गृहीतः** = समातिएकाले
**आर्तः** = पीडित बनेका
**सः** = ती गजेन्द्रले
**खे** = आकाशमा
**गरुत्मति** = गरुडमाथि
**उपात्तचक्रम्** = हातमा चक्र लिई आउनुहुने
**हरिं** = भगवान् श्रीहरिलाई
**दृष्ट्वा** = देखेर
**साम्बुजकरं** = कमलको फूल लिएको सुँडलाई
**उत्क्षिप्य** = उठाई
**कृच्छ्रात्** = कष्टका साथ
**नारायण** = हे नारायण
**अखिलगुरो** = हे जगद्गुरु
**भगवन्** = हे भगवान्
**ते** = हजुरलाई
**नमः** = प्रणाम छ भनी
**गिरम्** = वचन
**आह** = बोले

**वाक्यार्थ–** तालभित्र ज्यादै बलियो गोहीद्वारा समातिएकाले पीडित बनेका गजेन्द्रले आकाशबाट चक्रधारी भगवान् श्रीहरि गरुडमाथि चढी आफैँतिर आइरहनुभएको देखेर तत्काल सुँडले कमलको फूल उठाई अत्यन्त कष्टका साथ हे नारायण ! हे जगद्गुरु ! हे भगवान् ! हजुरलाई प्रणाम छ भनेर स्तुति गरे।

**तं वीक्ष्य पीडितमजः सहसावतीर्य**
**सग्राहमाशु सरसः कृपयोज्जहार।**
**ग्राहाद् विपाटितमुखादरिणा गजेन्द्रं**
**संपश्यतां हरिरमूमुचदुस्त्रियाणाम्॥ ३३॥**

**पदार्थ–**
**अजः** = अजन्मा परमात्माले
**तं** = ती गजेन्द्रलाई
**पीडितं** = दुःखी
**वीक्ष्य** = देखेर
**सहसा** = अकस्मात्
**अवतीर्य** = (गरुडबाट) ओर्लेर
**कृपया** = कृपापूर्वक
**आशु** = छिट्टै नै
**सग्राहं** = गोहीसहित गजेन्द्रलाई
**सरसः** = तालबाट (बाहिर)
**उज्जहार** = निकाल्नुभयो
**हरिः** = श्रीहरिले
**उस्त्रियाणाम्** = देवताहरूले
**संपश्यतां** = हेर्दाहेर्दै नै
**अरिणा** = चक्रद्वारा
**विपाटितमुखात्** = मुख च्यातिएको
**ग्राहात्** = गोहीको फन्दाबाट
**गजेन्द्रं** = गजेन्द्रलाई
**अमूमुचत्** = छुटाउनुभयो

**वाक्यार्थ–** अजन्मा परमात्माले गजेन्द्रलाई अत्यन्त दुःखी देख्नुभयो र अकस्मात् गरुडबाट ओर्लेर झटपट कृपापूर्वक गोहीसहित गजेन्द्रलाई पनि तालबाट बाहिर निकाल्नुभयो। श्रीहरिले आफ्नो चक्रद्वारा गोहीको मुख च्यातिदिनुभयो र सम्पूर्ण देवताहरूले हेर्दाहेर्दै गजेन्द्रलाई त्यो महान् विपत्तिबाट छुटाउनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे गजेन्द्रमोक्षणे तृतीयोऽध्यायः॥ ३॥**

# अथ चतुर्थोऽध्यायः

## गजेन्द्र र गोहीको पूर्वजन्म

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तदा देवर्षिगन्धर्वा ब्रह्मेशानपुरोगमाः ।**

**मुमुचुः कुसुमासारं शंसन्तः कर्म तद्धरेः ॥ १ ॥**

| **पदार्थ–** | **शंसन्तः** = प्रशंसा गर्दै | गन्धर्वहरूले |
|---|---|---|
| **तदा** = त्यो समयमा | **ब्रह्मेशानपुरोगमाः** = ब्रह्माजी र | **कुसुमासारं** = पुष्पवृष्टि |
| **हरेः** = भगवान् श्रीहरिको | भगवान् शङ्करलाई अगाडि | **मुमुचुः** = गरे |
| **तत्** = त्यो | लगाएका | |
| **कर्म** = कर्मलाई | **देवर्षिगन्धर्वाः** = देवता, ऋषि र | |

**वाक्यार्थ–** त्यस समयमा ब्रह्माजी र भगवान् शङ्करलाई अगाडि लगाई सम्पूर्ण देवता, ऋषि र गन्धर्वहरूले आफ्नो भक्तको रक्षा गर्ने भगवान्को त्यस कर्मको प्रशंसा गर्दै पुष्पवृष्टि गर्न थाले।

**नेदुर्दुन्दुभयो दिव्या गन्धर्वा ननृतुर्जगुः ।**

**ऋषयश्चारणाः सिद्धास्तुष्टुवुः पुरुषोत्तमम् ॥ २ ॥**

| **पदार्थ–** | **जगुः** = गाए र | **पुरुषोत्तमम्** = भगवान् |
|---|---|---|
| **दिव्याः** = स्वर्गीय | **ननृतुः** = नाचे | पुरुषोत्तमलाई |
| **दुन्दुभयः** = दुन्दुभि (दमाहा)हरू | **ऋषयः** = ऋषिहरू | **तुष्टुवुः** = स्तुति गरे |
| **नेदुः** = बज्न थाले | **चारणाः** = चारणहरू र | |
| **गन्धर्वाः** = गन्धर्वहरूले | **सिद्धाः** = सिद्धहरूले | |

**वाक्यार्थ–** त्यस समयमा स्वर्गमा दिव्य दुन्दुभि (दमाहा)हरू बज्न थाले। ऋषि, चारण र सिद्धहरू मिली पुरुषोत्तम भगवान्को स्तुति गान गर्न थाले भने गन्धर्वहरू नाच्न-गाउन थाले।

**योऽसौ ग्राहः स वै सद्यः परमाश्चर्यरूपधृक् ।**

**मुक्तो देवलशापेन हूहूर्गन्धर्वसत्तमः ॥ ३ ॥**

| **पदार्थ–** | **सः** = त्यो | **देवलशापेन** = देवल ऋषिको |
|---|---|---|
| **यः** = जुन | **वै** = निश्चय नै | श्रापबाट |
| **असौ** = यो | **सद्यः** = तत्काल (भगवान्को | **मुक्तः** = मुक्त भई |
| **ग्राहः** = गोही थियो | स्पर्श हुनेबित्तिकै) | **परमाश्चर्यरूपधृक्** = अति |

आश्चर्यमय रूपवाला
**गन्धर्वसत्तमः** = गन्धर्वश्रेष्ठ
**हूहूः** = हूहू बन्यो

**वाक्यार्थ—** गजेन्द्रलाई समात्ने त्यो गोही भगवान्‌को स्पर्श हुनेबित्तिकै देवल ऋषिको श्रापबाट मुक्त भयो र अत्यन्त आश्चर्यजनक दिव्य शरीर धारण गर्ने हूहू नामको श्रेष्ठ गन्धर्वको रूपमा परिणत भयो।

**प्रणम्य शिरसाधीशमुत्तमश्लोकमव्ययम्।**
**अगायत यशोधाम कीर्तन्यगुणसत्कथम्॥ ४॥**

**पदार्थ—**
**अधीशम्** = सबैका मालिक
**उत्तमश्लोकम्** = उत्तम कीर्तियुक्त
**अव्ययम्** = अविनाशी
परमात्मालाई
**शिरसा** = शिरले
**प्रणम्य** = प्रणाम गरी
**कीर्तन्यगुणसत्कथम्** = कीर्तनीय गुणकथा हुनुभएका
**यशोधाम** = सम्पूर्ण यशका आश्रय परमात्माको
**अगायत** = स्तुतिगान गर्‍यो

**वाक्यार्थ—** जसका गुण र लीलाकथाहरू कीर्तन गर्न योग्य छन्, जसको कीर्ति उत्तम छ र जो सम्पूर्ण कीर्तिका एक मात्र आश्रय हुनुहुन्छ त्यस्ता सबैका मालिक उनै अविनाशी परमात्मालाई शिर झुकाएर प्रणाम गरी त्यस हूहू नामको गन्धर्वले उहाँको स्तुतिगान गर्‍यो।

**सोऽनुकम्पित ईशेन परिक्रम्य प्रणम्य तम्।**
**लोकस्य पश्यतो लोकं स्वमगान्मुक्तकिल्बिषः॥ ५॥**

**पदार्थ—**
**ईशेन** = परमात्माद्वारा
**अनुकम्पितः** = कृपा पाएर
**मुक्तकिल्बिषः** = पापबाट छुटेको
**सः** = त्यसले
**तम्** = उहाँ भगवान्‌लाई
**परिक्रम्य** = परिक्रमा गरी
**प्रणम्य** = प्रणाम गरी
**लोकस्य** = सबै प्राणीले
**पश्यतः** = देख्दादेख्दै
**स्वं लोकं** = आफ्नो लोकतिर
**अगात्** = गयो

**वाक्यार्थ—** भगवान्‌को कृपाद्वारा आफ्नो पापबाट मुक्त भएको उसले भगवान्‌को परिक्रमा गर्‍यो र उहाँलाई प्रणाम गरी सबै प्राणीले हेर्दाहेर्दै आफ्नो गन्धर्वलोकतिर गयो।

**गजेन्द्रो भगवत्स्पर्शाद् विमुक्तोऽज्ञानबन्धनात्।**
**प्राप्तो भगवतो रूपं पीतवासाश्चतुर्भुजः॥ ६॥**

**पदार्थ—**
**भगवत्स्पर्शात्** = भगवान्‌को स्पर्शद्वारा
**अज्ञानबन्धनात्** = अज्ञानको बन्धनबाट
**विमुक्तः** = छुटेका
**गजेन्द्रः** = गजेन्द्रले चाहिँ
**चतुर्भुजः** = चतुर्भुज र
**पीतवासाः** = पीताम्बरधारी भई
**भगवतः** = भगवान्‌कै
**रूपं** = रूपलाई
**प्राप्तः** = प्राप्त गरे

**वाक्यार्थ—** भगवान्‌को स्पर्शद्वारा गजेन्द्र पनि अज्ञानबन्धनबाट छुटे। चतुर्भुज र पीताम्बरधारी भई उनले भगवान्‌कै रूप प्राप्त गरे।

**स वै पूर्वमभूद्‌ राजा पाण्ड्यो द्रविडसत्तमः।**

**इन्द्रद्युम्न इति ख्यातो विष्णुव्रतपरायणः॥ ७॥**

**पदार्थ—**
**वै** = निश्चय नै
**सः** = ती गजेन्द्र
**पूर्वम्** = पहिलो जन्ममा
**द्रविडसत्तमः** = द्रविडश्रेष्ठ
**पाण्ड्यः** = पाण्ड्यवंशी
**इन्द्रद्युम्नः इति** = इन्द्रद्युम्न नामले
**ख्यातः** = प्रसिद्ध
**विष्णुव्रतपरायणः** = विष्णु भगवान्‌का अनन्य उपासक
**राजा** = राजा
**अभूत्** = थिए

**वाक्यार्थ—** गजेन्द्र पूर्वजन्ममा द्रविड देशका प्रसिद्ध पाण्ड्यवंशी राजा इन्द्रद्युम्न थिए। उनी भगवान् विष्णुका अनन्य उपासक थिए।

**स एकदाराधनकाल आत्मवान् गृहीतमौनव्रत ईश्वरं हरिम्।**

**जटाधरस्तापस आप्लुतोऽच्युतं समर्चयामास कुलाचलाश्रमः॥ ८॥**

**पदार्थ—**
**एकदा** = एक दिन
**कुलाचलाश्रमः** = मलयाचल पर्वतमा आश्रम भएका
**सः** = ती इन्द्रद्युम्नले
**जटाधरः** = जटा धारण गरी
**तापसः** = तपस्वी बनेका
**गृहीतमौनव्रतः** = मौनव्रत लिएका
**आप्लुतः** = तीर्थस्नान गरी
**आत्मवान्** = एकाग्र चित्त भएका
**आराधनकाले** = पूजा गर्ने वेलामा
**ईश्वरं** = सबैका मालिक
**हरिम्** = श्रीहरि
**अच्युतं** = भगवान्‌लाई
**समर्चयामास** = पूजा गरे

**वाक्यार्थ—** मलयाचल पर्वतमा आश्रम भएका, जटाधारण गरी तपस्वीको भेष बनाएका, मौनव्रत लिएका, तीर्थस्नान गरी एकाग्रचित्त भएका ती राजा इन्द्रद्युम्न एक दिन भगवत्पूजनको समयमा सर्वेश्वर श्रीहरि भगवान्‌को पूजा गर्न लागेका थिए।

**यदृच्छया तत्र महायशा मुनिः समागमच्छिष्यगणैः परिश्रितः।**

**तं वीक्ष्य तूष्णीमकृतार्हणादिकं रहस्युपासीनमृषिश्चुकोप ह॥ ९॥**

**पदार्थ—**
**तत्र** = त्यहीँ
**यदृच्छया** = दैवसंयोगले
**शिष्यगणैः** = शिष्यहरूद्वारा
**परिश्रितः** = युक्त भई
**महायशाः** = ठुलो कीर्ति भएका
**मुनिः** = अगस्त्य मुनि
**समागमत्** = आइपुग्नुभयो
**अकृतार्हणादिकं** = गृहस्थोचित अतिथिपूजन आदि कर्म छोडी
**तूष्णीम्** = चुपचाप
**रहसि** = एकान्तमा
**उपासीनं** = उपासना गर्ने
**तं** = ती राजालाई
**वीक्ष्य** = देखेर
**ऋषिः** = अगस्त्य ऋषि
**ह** = असाध्यै
**चुकोप** = रिसाउनुभयो

**वाक्यार्थ—** त्यही समय त्यहाँ आफ्ना अनेकौँ शिष्यहरूका साथमा महायशस्वी अगस्त्य मुनि

आइपुग्नुभयो। गृहस्थोचित अतिथिपूजन आदि स्वधर्मलाई छाडी एकान्तमा गई चुपचाप उपासना गर्ने ती राजालाई देखी अगस्त्य मुनि असाध्यै रिसाउनुभयो।

**तस्मा इमं शापमदादसाधुरयं दुरात्माकृतबुद्धिरद्य।**
**विप्रावमन्ता विशतां तमोऽन्धं यथा गजः स्तब्धमतिः स एव॥ १०॥**

| पदार्थ– | **दुरात्मा** = दुर्जन राजा | **विशतां** = जाकियोस् |
|---|---|---|
| **अकृतबुद्धिः** = मान्यजनबाट शिक्षा नलिने | **अद्य** = आज | **इमं** = यस्तो |
| **विप्रावमन्ता** = ब्राह्मणको अपमान गर्ने | **गजः यथा** = हात्ती झैं बसेको | **शापं** = श्राप |
| **स्तब्धमतिः** = जडबुद्धि भएको | **अयं** = यो | **तस्मै** = ती इन्द्रद्युम्नलाई |
| **असाधुः** = खराब बानी भएको | **सः एव** = त्यही हात्ती नै भएर | **अदात्** = दिनुभयो |
| | **अन्धं तमः** = अज्ञानरूप अन्धकारमय योनिमा | |

**वाक्यार्थ–** आफ्ना मान्यजनबाट स्वधर्मको शिक्षा नलिने एवं ब्राह्मणहरूको अपमान गर्ने खराब बानी भएको यो जडबुद्धिवाला दुर्जन राजा आज हात्ती झैं धुमधुम्ती बसिरहेको छ, त्यसैले यो त्यही अज्ञानरूप अन्धकारमय हात्तीको योनिमा जाकियोस् भनी अगस्त्य मुनिले इन्द्रद्युम्नलाई श्राप दिनुभयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं शप्त्वा गतोऽगस्त्यो भगवान् नृप सानुगः।**
**इन्द्रद्युम्नोऽपि राजर्षिर्दिष्टं तदुपधारयन्॥ ११॥**
**आपन्नः कौञ्जरीं योनिमात्मस्मृतिविनाशिनीम्।**
**हर्यर्चनानुभावेन यद् गजत्वेऽप्यनुस्मृतिः॥ १२॥**

| पदार्थ– | **राजर्षिः** = राजर्षि | **योनिम्** = योनिमा |
|---|---|---|
| **नृप** = हे राजा | **इन्द्रद्युम्नः अपि** = इन्द्रद्युम्न पनि | **आपन्नः** = पुगे |
| **एवं** = यसप्रकार | **तत्** = त्यो श्रापलाई | **यत्** = तर |
| **शप्त्वा** = श्राप दिएर | **दिष्टं** = भाग्य सम्झी | **हर्यर्चनानुभावेन** = पहिले भगवान्को सेवा गरेको प्रभावले |
| **सानुगः** = शिष्यहरू सहित | **उपधारयन्** = स्वीकार गर्दै | **गजत्वे अपि** = हात्ती हुँदा पनि |
| **भगवान्** = योगैश्वर्यशाली | **आत्मस्मृतिविनाशिनीम्** = आत्मस्वरूपलाई बिर्साइदिने | **अनुस्मृतिः** = परमात्माको स्मरण भइरह्यो |
| **अगस्त्यः** = अगस्त्य मुनि | **कौञ्जरीं** = हात्तीको | |
| **गतः** = जानुभयो | | |

**वाक्यार्थ–** यसप्रकार राजालाई श्राप दिएर आफ्ना शिष्यहरूसहित अगस्त्य मुनि जानुभयो।

राजर्षि इन्द्रद्युम्नले पनि यसलाई आफ्नो प्रारब्ध नै ठानी स्वीकार गरे। उनी अर्को जन्ममा आत्मस्वरूपको विस्मरण गराइदिने अज्ञानमय हात्तीको योनिमा पुगे तर पूर्वजन्ममा गरिएको भगवत्सेवाको प्रभावले उनलाई हात्तीको जुनीमा पनि परमात्मस्मरण भइरह्यो।

**एवं विमोक्ष्य गजयूथपमब्जनाभ-**
**स्तेनापि पार्षदगतिं गमितेन युक्तः।**
**गन्धर्वसिद्धविबुधैरुपगीयमान-**
**कर्माद्भुतं स्वभवनं गरुडासनोऽगात्॥ १३॥**

**पदार्थ–**
**अब्जनाभः** = कमलनाभ भगवान्ले
**एवं** = यसप्रकार
**गजयूथपम्** = गजेन्द्रलाई
**विमोक्ष्य** = छुटाएर
**पार्षदगतिं** = पार्षदको स्वरूप
**गमितेन** = बनेको
**तेन अपि** = ती गजेन्द्रले समेत
**युक्तः** = युक्त भई
**गन्धर्वसिद्धविबुधैः** = गन्धर्व, सिद्ध, देवताहरूद्वारा
**उपगीयमानकर्मा** = यशोगान गरिँदै
**गरुडासनः** = गरुडमाथि बस्नुभएका भगवान्
**अद्भुतं** = अलौकिक
**स्वभवनं** = आफ्नो धाममा
**अगात्** = जानुभयो

**वाक्यार्थ–** यसप्रकार कमलनाभ भगवान् बन्धनबाट छुटाएर आफ्नो पार्षद बनाइएका गजेन्द्रलाई साथ लिई गन्धर्व, सिद्ध र देवताहरूद्वारा यशोगान गरिँदै गरुडमाथि चढी आफ्नो दिव्य धाममा जानुभयो।

**एतन्महाराज तवेरितो मया कृष्णानुभावो गजराजमोक्षणम्।**
**स्वर्ग्यं यशस्यं कलिकल्मषापहं दुःस्वप्ननाशं कुरुवर्य शृण्वताम्॥ १४॥**

**पदार्थ–**
**महाराज** = हे महाराज परीक्षित्
**मया** = मद्वारा
**तव** = तपाईंका लागि
**गजराजमोक्षणम्** = गजेन्द्रको मोक्ष र
**कृष्णानुभावः** = भगवान् कृष्णको महिमासम्बन्धी प्रसङ्ग
**ईरितः** = सुनाइयो
**कुरुवर्य** = हे कुरुकुलश्रेष्ठ
**एतत्** = यो चरित्र
**शृण्वताम्** = सुन्नेहरूको
**दुःस्वप्ननाशं** = दुःस्वप्नलाई नाश गर्ने
**कलिकल्मषापहं** = कलिको दोषलाई नष्ट पार्ने
**स्वर्ग्यं** = स्वर्ग दिने र
**यशस्यम्** = यश बढाउनेवाला छ

**वाक्यार्थ–** हे महाराज परीक्षित्! मैले तपाईंलाई भगवान् श्रीकृष्णको महिमाले युक्त यो गजेन्द्रमोक्षको प्रसङ्ग सुनाएँ। हे कुरुश्रेष्ठ! यो आख्यान सुन्नेहरूको दुःस्वप्नलाई र कलिका दोषहरूलाई नाश गर्ने एवं स्वर्गको प्राप्ति गराउने र यश बढाउनेवाला छ।

**यथानुकीर्तयन्त्येतच्छ्रेयस्कामा द्विजातयः।**

**शुचयः प्रातरुत्थाय दुःस्वप्नाद्युपशान्तये॥ १५॥**

**पदार्थ–**
**श्रेयस्कामाः** = कल्याण चाहने
**द्विजातयः** = द्विजातिहरू
**दुःस्वप्नाद्युपशान्तये** = दुःस्वप्न आदिलाई नाश गर्न
**प्रातः** = बिहान
**उत्थाय** = उठेर
**शुचयः** = पवित्र भई
**यथा** = विधिपूर्वक
**एतत्** = यो चरित्रलाई
**अनुकीर्तयन्ति** = पाठ गर्दछन्

**वाक्यार्थ–** कल्याण चाहने द्विजातिहरू दुःस्वप्न शान्ति आदिका लागि बिहान उठी पवित्र भई यस स्तोत्रको पाठ गर्दछन्।

**इदमाह हरिः प्रीतो गजेन्द्रं कुरुसत्तम।**

**शृण्वतां सर्वभूतानां सर्वभूतमयो विभुः॥ १६॥**

**पदार्थ–**
**कुरुसत्तम** = हे कुरुश्रेष्ठ
**सर्वभूतमयः** = सम्पूर्ण प्राणीरूप
**विभुः** = सर्वव्यापक
**हरिः** = भगवान् श्रीहरिले
**प्रीतः** = प्रसन्न भई
**सर्वभूतानां** = सबै प्राणीले
**शृण्वतां** = सुन्ने गरी
**गजेन्द्रं** = गजेन्द्रलाई
**इदं** = यसो
**आह** = भन्नुभयो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित्! भगवान् श्रीहरि सम्पूर्ण प्राणीस्वरूप एवं सर्वव्यापक हुनुहुन्छ। गजेन्द्रको स्तुतिबाट प्रसन्न भई उहाँले सबै प्राणीले सुन्ने गरी गजेन्द्रलाई यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीहरि भगवान्‌ले भन्नुभयो)

**ये मां त्वां च सरश्चेदं गिरिकन्दरकाननम्।**

**वेत्रकीचकवेणूनां गुल्मानि सुरपादपान्॥ १७॥**

**शृङ्गाणीमानि धिष्ण्यानि ब्रह्मणो मे शिवस्य च।**

**क्षीरोदं मे प्रियं धाम श्वेतद्वीपं च भास्वरम्॥ १८॥**

**श्रीवत्सं कौस्तुभं मालां गदां कौमोदकीं मम।**

**सुदर्शनं पाञ्चजन्यं सुपर्णं पतगेश्वरम्॥ १९॥**

**शेषं च मत्कलां सूक्ष्मां श्रियं देवीं मदाश्रयाम्।**

**ब्रह्माणं नारदमृषिं भवं प्रह्लादमेव च॥ २०॥**

**पदार्थ–**
**ये** = जो मानिसहरू
**मां** = मलाई

**त्वां च** = तिमी (गजेन्द्र)लाई पनि
**इदं** = यो
**सरः** = तालनाई
**गिरिकन्दरकाननम् च** = पर्वत, गुफा र यहाँका वनलाई
**वेत्रकीचकवेणूनां** = बेत, बाँस, निगाला आदिका
**गुल्मानि** = झाडहरूलाई
**सुरपादपान्** = यहाँका देववृक्षहरूलाई
**इमानि** = यी
**शृङ्गाणि** = पर्वतका चुचुराहरूलाई
**मे** = मेरो
**शिवस्य** = भगवान् शिव र
**ब्रह्मणः च** = ब्रह्माजीका
**धिष्ण्यानि** = निवासस्थानलाई
**मे** = मेरो
**प्रियं** = प्यारो
**धाम** = स्थान
**क्षीरोदं** = क्षीर समुद्रलाई
**भास्वरम्** = प्रकाशमान
**श्वेतद्वीपं च** = श्वेतद्वीपलाई
**मम** = मेरा
**श्रीवत्सं** = श्रीवत्स चिह्न
**कौस्तुभं** = कौस्तुभ मणि
**मालां** = वनमाला
**कौमोदकीं गदां** = कौमोदकी गदा
**सुदर्शनं** = सुदर्शन चक्र
**पाञ्चजन्यं** = पाञ्चजन्य शङ्खलाई
**पतगेश्वरम्** = पक्षीराज
**सुपर्णं** = गरुडलाई
**सूक्ष्मां** = सूक्ष्म
**मत्कलां** = मेरा कला भएका
**शेषं** = शेषलाई
**मदाश्रयाम्** = ममा आश्रित
**देवीं** = भगवती
**श्रियं च** = लक्ष्मीलाई र
**ब्रह्माणं** = ब्रह्माजीलाई
**ऋषिं नारदं** = देवर्षि नारदलाई
**भवं** = भगवान् शङ्करलाई
**प्रह्लादम् एव च** = प्रह्लादलाई समेत (स्मरण गर्दछन्, तिनीहरू पापबाट मुक्त हुन्छन्)

**वाक्यार्थ–** जो मानिसहरू मलाई, तिमी (गजेन्द्र)लाई, यहाँका ताल, पर्वत, गुफाकन्दरा, वनहरू, बेत, बाँस, निगाला आदिका झाडहरू, देववृक्षहरू र पर्वतका यी चचुराहरूलाई स्मरण गर्दछन्, त्यसै गरी भगवान् शिव, ब्रह्मा र मेरा निवासस्थानलाई, मेरो प्यारो धाम क्षीरसागर र प्रकाशमय श्वेतद्वीपलाई, मेरो श्रीवत्स चिह्न, कौस्तुभ मणि, वनमाला, कौमोदकी गदा, सुदर्शन चक्र, पाञ्चजन्य शङ्ख र पक्षीराज गरुडलाई अनि मेरा सूक्ष्म कला भएका शेषलाई, ममा आश्रित देवी लक्ष्मीलाई, ब्रह्माजी, देवर्षि नारद, भगवान् शङ्कर र प्रह्लादलाई समेत स्मरण गर्दछन् (ती मानिसहरू सबै पापबाट मुक्त हुन्छन्) ।

**मत्स्यकूर्मवराहाद्यैरवतारैः कृतानि मे ।**
**कर्माण्यनन्तपुण्यानि सूर्यं सोमं हुताशनम् ॥ २१ ॥**
**प्रणवं सत्यमव्यक्तं गोविप्रान् धर्ममव्ययम् ।**
**दाक्षायणीर्धर्मपत्नीः सोमकश्यपयोरपि ॥ २२ ॥**
**गङ्गां सरस्वतीं नन्दां कालिन्दीं सितवारणम् ।**
**ध्रुवं ब्रह्मऋषीन् सप्त पुण्यश्लोकांश्च मानवान् ॥ २३ ॥**

**उत्थायापररात्रान्ते प्रयताः सुसमाहिताः।**
**स्मरन्ति मम रूपाणि मुच्यन्ते ह्येनसोऽखिलात्॥ २४॥**

**पदार्थ–**
**मत्स्यकूर्मवराहाद्यैः** = मत्स्य, कूर्म, वराह आदि
**अवतारैः** = अवतारहरूद्वारा
**कृतानि** = गरिएका
**मे** = मेरा
**अनन्तपुण्यानि** = अनन्त पुण्यमय
**कर्माणि**= लीलाचरित्रहरूलाई
**सूर्यं** = सूर्यलाई
**सोमं** = चन्द्रमालाई
**हुताशनम्** = अग्निलाई
**प्रणवं** = ओङ्कारलाई
**सत्यं** = सत्यलाई
**अव्यक्तं** = मूल प्रकृतिलाई
**गोविप्रान्** = गाई र ब्राह्मणहरूलाई
**अव्ययम्** = अविनाशी
**धर्मम्** = सनातन धर्मलाई
**सोमकश्यपयोः अपि** = सोम र कश्यपका अनि
**धर्मपत्नीः** = धर्मका पत्नीहरू
**दाक्षायणीः** = दक्षकन्याहरू
**गङ्गां** = गङ्गालाई
**सरस्वतीं** = सरस्वती नदीलाई
**नन्दां** = अलकनन्दालाई
**कालिन्दीं** = यमुनालाई
**सितवारणम्** = सेतो हात्ती
**ध्रुवं** = ध्रुव
**सप्त ब्रह्मऋषीन्** = सात ब्रह्मर्षिहरू
**पुण्यश्लोकान्** = पवित्र कीर्ति भएका
**मानवान् च** = श्रेष्ठ महापुरुषहरूलाई पनि
**अपररात्रान्ते** = रातको अन्तिम प्रहर ब्रह्ममुहूर्तमा
**उत्थाय** = जागेर
**प्रयताः** = इन्द्रियनिग्रहपूर्वक
**सुसमाहिताः** = एकाग्रचित्त भई
**मम** = मेरा
**रूपाणि** = स्वरूपहरूलाई
**स्मरन्ति** = स्मरण गर्दछन् भने
**हि** = निश्चय नै
**अखिलात्** = सम्पूर्ण
**एनसः** = पापबाट
**मुच्यन्ते** = मुक्त हुन्छन्

**वाक्यार्थ–** मत्स्य, कूर्म, वराह आदि अवतारहरूले गरेका मेरा अनन्तपुण्यमय लीलाचरित्रहरू, सूर्य, चन्द्र, अग्नि, ओङ्कार, सत्य, मूल प्रकृति, गाई, नियमनिष्ठ ब्राह्मण, अविनाशी सनातन धर्म, सोम र कश्यप अनि धर्मका पत्नीहरू, दक्षकन्याहरू, गङ्गा, सरस्वती, अलकनन्दा, यमुना यी नदीहरू, सेतो ऐरावत हात्ती, ध्रुव, सप्तर्षिहरू र पवित्र कीर्ति भएका महापुरुषहरू यी सबै मेरा नै रूपहरू हुन्। जो मानिसहरू रातको अन्तिम प्रहर ब्रह्ममुहूर्तमा जागेर इन्द्रियनिग्रहपूर्वक एकाग्रचित्त भई यी मेरा स्वरूपहरूको स्मरण गर्दछन्, तिनीहरू निश्चय नै सम्पूर्ण पापबाट मुक्त हुन्छन्।

**ये मां स्तुवन्त्यनेनाङ्ग प्रतिबुध्य निशात्यये।**
**तेषां प्राणात्यये चाहं ददामि विमलां मतिम्॥ २५॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय गजेन्द्र
**निशात्यये** = रात बितेपछि
**प्रतिबुध्य** = जागेर
**ये** = जो मानिसहरू
**अनेन** = यो स्तोत्रद्वारा
**मां** = मलाई
**स्तुवन्ति** = स्तुति गर्दछन्
**तेषां** = तिनीहरूको
**प्राणात्यये च** = प्राणान्तको समयमा
**अहं** = म
**विमलां** = निर्मल
**मतिम्** = बुद्धि
**ददामि** = दिन्छु

**वाक्यार्थ–** हे प्रिय गजेन्द्र ! जो मानिसहरू रातको अन्त्य ब्रह्ममुहूर्तमा जागी यो स्तोत्रद्वारा मेरो स्तुति गर्दछन् भने म पनि तिनीहरूको प्राणान्त समयमा तिनीहरूलाई निर्मल बुद्धि दिन्छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यादिश्य हृषीकेशः प्राध्माय जलजोत्तमम्।**

**हर्षयन् विबुधानीकमारुरोह खगाधिपम्॥ २६॥**

**पदार्थ–**
**हृषीकेशः** = हृषीकेश भगवान्
**इति** = यस्तो
**आदिश्य** = भनेर
**जलजोत्तमम्** = पाञ्चजन्य शङ्ख
**प्राध्माय** = बजाई
**विबुधानीकम्** = देवताहरूलाई
**हर्षयन्** = आनन्दित गर्दै
**खगाधिपम्** = पक्षीराज गरुडमाथि
**आरुरोह** = चढ्नुभयो

**वाक्यार्थ–** गजेन्द्रलाई यसो भनी भगवान्ले आफ्नो पाञ्चजन्य शङ्ख बजाउनुभयो र देवताहरूलाई आनन्दित पार्दै पक्षीराज गरुडमाथि चढ्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**गजेन्द्रमोक्षणं नाम चतुर्थोऽध्यायः॥ ४॥**

# अथ पञ्चमोऽध्यायः

## रैवतक मन्वन्तरको वर्णन र देवताहरू सहित ब्रह्माजीद्वारा भगवान्‌को स्तुति

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**राजन्नुदितमेतत् ते हरेः कर्माघनाशनम्।**
**गजेन्द्रमोक्षणं पुण्यं रैवतं त्वन्तरं शृणु॥ १॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**हरेः** = भगवान् श्रीहरिको
**गजेन्द्रमोक्षणं** = गजेन्द्र मोक्ष गर्ने
**पुण्यं** = पवित्र
**अघनाशनम्** = पापनाशक
**एतत्** = यो
**कर्म** = लीला
**ते** = तपाईंलाई
**उदितं** = बताइयो
**रैवतं** = रैवत नामको
**अन्तरं** = मन्वन्तर
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ—** हे राजा परीक्षित्! गजेन्द्रलाई मुक्त गर्ने, परमपवित्र र पापनाशक भगवान्‌को यो लीला मैले तपाईंलाई सुनाएँ। अब रैवत मन्वन्तरको कथा सुन्नुहोस्।

**पञ्चमो रैवतो नाम मनुस्तामससोदरः।**
**बलिविन्ध्यादयस्तस्य सुता अर्जुनपूर्वकाः॥ २॥**

**पदार्थ—**
**तामससोदरः** = तामसका भाइ
**रैवतः नाम** = रैवत नामका
**पञ्चमः** = पाँचौं
**मनुः** = मनु थिए
**तस्य** = उनका
**अर्जुनपूर्वकाः** = जेठा अर्जुन समेतका
**बलिविन्ध्यादयः** = बलि, विन्ध्य आदि (अरू पनि)
**सुताः** = छोराहरू थिए

**वाक्यार्थ—** पाँचौं मनु रैवत नामका थिए। उनी चौथा मनु तामसका भाइ थिए। रैवतका जेठा छोरा अर्जुन र अरू बलि, विन्ध्य आदि छोराहरू थिए।

**विभुरिन्द्रः सुरगणा राजन् भूतरयादयः।**
**हिरण्यरोमा वेदशिरा ऊर्ध्वबाह्वादयो द्विजाः॥ ३॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**विभुः** = विभु नामका
**इन्द्रः** = इन्द्र थिए
**भूतरयादयः** = भूतरय आदि
**सुरगणाः** = देवताहरू थिए
**हिरण्यरोमा** = हिरण्यरोमा
**वेदशिरा** = वेदशिरा र
**ऊर्ध्वबाह्वादयः** = ऊर्ध्वबाहु आदि
**द्विजाः** = सप्तर्षिहरू थिए

**वाक्यार्थ—** हे राजा परीक्षित्! त्यस मन्वन्तरमा विभु नामका इन्द्र थिए। भूतरय आदि नामका

देवताहरू थिए अनि हिरण्यरोमा, वेदशिरा र ऊर्ध्वबाहु आदि सप्तर्षि थिए।

**पत्नी विकुण्ठा शुभ्रस्य वैकुण्ठैः सुरसत्तमैः।**
**तयोः स्वकलया जज्ञे वैकुण्ठो भगवान् स्वयम्॥ ४॥**

**पदार्थ–**
**शुभ्रस्य** = शुभ्र ऋषिकी
**पत्नी** = पत्नी
**विकुण्ठा** = विकुण्ठा थिइन्
**तयोः** = ती दुईको (पुत्ररूपमा)
**स्वयम्** = साक्षात्
**भगवान्** = भगवान् नारायण नै
**वैकुण्ठैः** = वैकुण्ठ नामका
**सुरसत्तमैः** = श्रेष्ठ देवताहरूको साथमा
**स्वकलया** = आफ्नो अंशद्वारा
**वैकुण्ठः** = वैकुण्ठ अवतारको रूपमा
**जज्ञे** = जन्मिनुभयो

**वाक्यार्थ–** शुभ्र ऋषिकी पत्नीको नाम विकुण्ठा थियो। उनीहरूको पुत्ररूपमा साक्षात् नारायण भगवान्ले नै वैकुण्ठ नामका श्रेष्ठ देवताहरूको साथमा वैकुण्ठ अवतार धारण गर्नुभयो।

**वैकुण्ठः कल्पितो येन लोको लोकनमस्कृतः।**
**रमया प्रार्थ्यमानेन देव्या तत्प्रियकाम्यया॥ ५॥**

**पदार्थ–**
**देव्या** = भगवती
**रमया** = लक्ष्मीद्वारा
**प्रार्थ्यमानेन** = प्रार्थना गरिएपछि
**येन** = जुन भगवान्द्वारा
**तत्प्रियकाम्यया** = लक्ष्मीको प्रसन्नताका लागि
**लोकनमस्कृतः** = सबै लोकहरूमध्ये श्रेष्ठ
**वैकुण्ठः** = वैकुण्ठ नामको
**लोकः** = लोक
**कल्पितः** = बनाइएको थियो

**वाक्यार्थ–** वैकुण्ठ भगवान्ले आफ्नी पत्नी भगवती लक्ष्मीको प्रार्थनाअनुसार उहाँको प्रसन्नताको लागि सबै लोकहरूमध्ये श्रेष्ठ वैकुण्ठ लोकको रचना गर्नुभएको थियो।

**विवरण–** ब्रह्मलोक, वैकुण्ठ या कैलाश यी सबै दिव्य लोकहरू पनि मायाद्वारा नै खडा भएका हुन्, कल्पना गरिएका हुन्। निर्विशेष ब्रह्मतत्त्व मात्रै निरपेक्ष एवं नित्य तत्त्व हो। अरू सबै देवता, ऋषि, लोक-लोकान्तर आदि मायासापेक्ष भएकाले अनित्य वस्तु हुन्। मायाका सत्त्व, रज र तमोगुणका नियन्त्रक ब्रह्मा, विष्णु र महेश्वर यी रूपसमेत औपाधिक हुन्। संसारको सृष्टि, स्थिति र संहार गर्नका लागि परम तत्त्वले नै मायाद्वारा ब्रह्मा, विष्णु र महेश्वरको रूप ख्यालख्यालमा लिएको मात्र हो (भागवत २/७/३९)। यी विभिन्न रूप तथा यिनका लोक-लोकान्तरहरूलाई आग्रहवश नित्य मान्ने हो भने परमतत्त्वमा विभाजन या द्वैत भएको भ्रम हुन्छ। अखण्ड परमात्मतत्त्वमा यो विभाजन सम्भव छैन। त्यसैले मुमुक्षुहरूले मुक्तिका लागि अरू लोक-लोकान्तरको भर पर्नु हुँदैन किनभने यी सबै मायाका कार्य भएकाले विनाशी हुन्। अविनाशी लोक त स्वयंप्रकाश आत्मतत्त्व नै हो र त्यसकै उपासना गर्नुपर्दछ (**आत्मानमेव लोकमुपासीत**) भनी बृहदारण्यकोपनिषद् (१/४/१५)मा बताइएको छ। यस श्लोकमा स्पष्ट शब्दमा वैकुण्ठ लोकलाई विकुण्ठाका पुत्र भएर जन्मनुभएका वैकुण्ठावतार भगवान्ले कल्पना गर्नुभएको हो भनी बताइएको छ। त्यसैले भक्तहरूले भगवान्सँग आफ्नो लोकमा लिएर जान होइन, अपितु मायाको

कारणले ढाकिएको परमात्माको यथार्थ स्वरूपको रहस्यलाई प्रकट गरिदिन प्रार्थना गर्नुपर्दछ।

**तस्यानुभावः कथितो गुणाश्च परमोदयाः।**
**भौमान् रेणून् स विममे यो विष्णोर्वर्णयेद् गुणान्॥ ६॥**

**पदार्थ–**
**तस्य** = ती वैकुण्ठ भगवान्को
**अनुभावः** = प्रभाव
**कथितः** = बताइयो
**परमोदयाः** = परम समृद्धि र
**गुणाः च** = भक्तवत्सलता आदि गुणहरू पनि बताइयो
**यः** = जसले
**भौमान्** = पृथिवीका
**रेणून्** = धूलिकणहरूलाई
**विममे** = गनिसक्ला
**सः** = उसले मात्र
**विष्णोः** = सर्वव्यापक विष्णुका
**गुणान्** = गुणहरूलाई
**वर्णयेत्** = वर्णन गर्न सक्ला

**वाक्यार्थ–** वैकुण्ठनाथ भगवान्को दिव्य प्रभाव, परम समृद्धि र अनन्त गुणहरूको बारेमा मैले सङ्क्षेपमा पहिल्यै बताइसकेँ। जसले पृथिवीका धूलिकणहरूलाई गनिसक्ला उसले मात्र सर्वव्यापक विष्णुका गुणहरूलाई वर्णन गर्न सक्ला (सर्वव्यापक भगवान्का अनन्त गुणहरूको पूरा वर्णन गर्नु भनेको पृथिवीका सबै धुलाका कणहरूलाई गन्नु जस्तो हो)।

**षष्ठश्च चक्षुषः पुत्रश्चाक्षुषो नाम वै मनुः।**
**पूरुपूरुषसुद्युम्नप्रमुखाश्चाक्षुषात्मजाः॥ ७॥**

**पदार्थ–**
**षष्ठः** = छैटौँ
**मनुः** = मनु
**वै** = निश्चय नै
**चक्षुषः** = चक्षुषका
**पुत्रः** = छोरा
**चाक्षुषः नाम** = चाक्षुष नामका थिए
**चाक्षुषात्मजाः च** = चाक्षुषका छोराहरू पनि
**पूरुपूरुषसुद्युम्नप्रमुखाः** = पूरु, पूरुष, सुद्युम्न आदि थिए

**वाक्यार्थ–** छैटौँ मनुको नाम चाक्षुष थियो। उनी चक्षुषका छोरा थिए। चाक्षुषका छोराहरू चाहिँ पूरु, पूरुष, सुद्युम्न आदि थिए।

**इन्द्रो मन्त्रद्रुमस्तत्र देवा आप्यादयो गणाः।**
**मुनयस्तत्र वै राजन् हविष्मद्वीरकादयः॥ ८॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्र** = त्यस चाक्षुष मन्वन्तरमा
**वै** = निश्चय नै
**मन्त्रद्रुमः** = मन्त्रद्रुम नामका
**इन्द्रः** = इन्द्र थिए
**आप्यादयः** = आप्य आदि
**गणाः** = गणहरू
**देवाः** = देवता थिए
**तत्र** = त्यहाँ
**हविष्मद्वीरकादयः** = हविष्मान्, वीरक आदि
**मुनयः** = सप्तर्षि थिए

**वाक्यार्थ–** हे राजा परीक्षित्! चाक्षुष मन्वन्तरमा मन्त्रद्रुम नामका इन्द्र थिए। आप्य आदि गणहरू देवता थिए। त्यस वेलामा हविष्मान्, वीरक आदि मुनिहरू सप्तर्षि थिए।

**तत्रापि देवः सम्भूत्यां वैराजस्याभवत् सुतः ।**

**अजितो नाम भगवानंशेन जगतः पतिः ॥ ९ ॥**

**पदार्थ–**
**तत्र अपि** = त्यहाँ पनि
**जगतः** = संसारका
**पतिः** = मालिक
**देवः** = सबैका प्रकाशक
**भगवान्** = परमात्मा
**अंशेन** = आफ्नो अंशद्वारा
**वैराजस्य** = वैराजकी
**सम्भूत्यां** = सम्भूति नामकी पत्नीमा
**अजितः नाम** = अजित नामका
**सुतः** = छोरा
**अभवत्** = बन्नुभयो

**वाक्यार्थ–** चाक्षुष मन्वन्तरमा सबैका मालिक र प्रकाशक परमात्मा आफ्नो अंशद्वारा वैराज र उनकी सम्भूति नामकी पत्नीको छोराको रूपमा अजित अवतार धारण गरी प्रकट हुनुभयो ।

**पयोधिं येन निर्मथ्य सुराणां साधिता सुधा ।**

**भ्रममाणोऽम्भसि धृतः कूर्मरूपेण मन्दरः ॥ १० ॥**

**पदार्थ–**
**येन** = जुन भगवान्ले
**अम्भसि** = समुद्रजलमा
**भ्रममाणः** = मदानी बनाई घुमाइएको
**मन्दरः** = मन्दर पर्वतलाई
**कूर्मरूपेण** = कछुवाको स्वरूपले
**धृतः** = धारण गर्नुभएको थियो
**पयोधिं** = समुद्रलाई
**निर्मथ्य** = मन्थन गरी
**सुराणां** = देवताहरूलाई
**सुधा** = अमृत
**साधिता** = दिलाइदिनुभएको थियो

**वाक्यार्थ–** उनै भगवान्ले समुद्रमन्थनको वेलामा मदानी बनाई घुमाइएको मन्दरपर्वतलाई कछुवा बनी तलबाट धारण गर्नुभएको थियो र समुद्रमन्थन गरी देवताहरूलाई अमृत दिलाइदिनुभएको थियो ।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**यथा भगवता ब्रह्मन् मथितः क्षीरसागरः ।**

**यदर्थं वा यतश्चाद्रिं दधाराम्बुचरात्मना ॥ ११ ॥**

**यथामृतं सुरैः प्राप्तं किं चान्यदभवत् ततः ।**

**एतद् भगवतः कर्म वदस्व परमाद्भुतम् ॥ १२ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे शुकदेवजी
**भगवता** = भगवान्द्वारा
**क्षीरसागरः** = क्षीर सागर
**यथा** = जसरी
**मथितः** = मथन गरियो
**यदर्थं वा** = जुन उद्देश्यले अनि
**यतः च** = जुन कारणले
**अम्बुचरात्मना** = पानीमा रहने कछुवाको शरीरले
**अद्रिं** = मन्दराचललाई
**दधार** = धारण गर्नुभयो

**सुरैः** = देवताहरूद्वारा
**यथा** = जसरी
**अमृतं** = अमृत
**प्राप्तं** = पाप्त गरियो
**ततः च** = त्यसपछि
**अन्यत्** = अरू
**किं** = के काम
**अभवत्** = भयो
**एतत्** = यो सबै
**भगवतः** = भगवान्को
**परमाद्भुतम्** = अत्यन्त आश्चर्यजनक
**कर्म** = लीलाचरित्र
**वदस्व** = बताउनुहोस्

**वाक्यार्थ—** हे शुकदेवजी ! भगवान्ले कसरी क्षीर सागरको मथन गर्नुभयो ? उहाँले कच्छपरूप धारण गरी मन्दराचललाई किन धारण गर्नुभएको थियो र के उद्देश्यले त्यसो गर्नुभएको थियो ? त्यहाँ देवताहरूले अमृत कसरी पाए ? अनि त्यसपछि के-के भयो ? यी सबै भगवान्का परम आश्चर्यमय लीलाचरित्र मलाई सुनाउनुहोस्।

**त्वया सङ्कथ्यमानेन महिम्ना सात्वतां पतेः।**
**नातितृप्यति मे चित्तं सुचिरं तापतापितम्॥ १३॥**

**पदार्थ—**
**त्वया** = हजुरद्वारा
**सङ्कथ्यमानेन** = बताइएको
**सात्वतां पतेः** = साधुपुरुषहरूका स्वामी भगवान्को
**महिम्ना** = महिमाद्वारा
**सुचिरं** = लाामो समयदेखि
**तापतापितम्** = तापले तप्त भइरहेको
**मे** = मेरो
**चित्तं** = चित्त
**न अतितृप्यति** = पूरा तृप्त हुँदैन

**वाक्यार्थ—** हे शुकदेवजी ! हजुरबाट सत्पुरुषहरूका स्वामी भगवान्को महिमा जति सुन्दा पनि लामो समयदेखि अनेक तापले तप्त भइरहेको मेरो चित्त पूरा तृप्त हुँदैन।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**सम्पृष्टो भगवानेवं द्वैपायनसुतो द्विजाः।**
**अभिनन्द्य हरेर्वीर्यमभ्याचष्टुं प्रचक्रमे॥ १४॥**

**पदार्थ—**
**द्विजाः** = हे ऋषिहरू
**एवं** = यसप्रकार
**सम्पृष्टः** = सोधिनुभएका
**द्वैपायनसुतः** = द्वैपायन (व्यास)का पुत्र
**भगवान्** = भगवान् शुकदेवजीले
**अभिनन्द्य** = प्रश्नलाई प्रशंसा गरेर
**हरेः** = श्रीहरि भगवान्को
**वीर्यम्** = पराक्रम
**अभ्याचष्टुं** = बताउन
**प्रचक्रमे** = थाल्नुभयो

**वाक्यार्थ—** हे शौनकादि ऋषिहरू ! परीक्षित्ले यसप्रकार प्रश्न सोधेपछि द्वैपायन (व्यास)का पुत्र भगवान् शुकदेवजीले त्यस प्रश्नको प्रशंसा गर्दै श्रीहरि भगवान्को पराक्रमको विषयमा बताउन थाल्नुभयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**यदा युद्धेऽसुरैर्देवा बाध्यमानाः शितायुधैः ।**

**गतासवो निपतिता नोत्तिष्ठेरन् स्म भूयशः ॥ १५ ॥**

**पदार्थ–**
**यदा** = जुन समयमा
**युद्धे** = युद्धमा
**शितायुधैः** = तीखा हतियार लिने
**असुरैः** = दानवहरूद्वारा
**बाध्यमानाः** = पीडित गराइएका
**देवाः** = देवताहरू
**गतासवः** = प्राणविहीन भई
**निपतिताः** = रणभूमिमैं ढली
**भूयशः** = फेरि
**न उत्तिष्ठेरन् स्म** = उठ्न सकेनन्

**वाक्यार्थ–** त्यस समयमा दानवहरूद्वारा तीखा हतियारले पीडित बनाइएका देवताहरू प्राणविहीन भई रणभूमिमैं लड्थे र फेरि उठ्न सक्दैनथे।

**यदा दुर्वाससः शापात् सेन्द्रा लोकास्त्रयो नृप ।**

**निःश्रीकाश्चाभवंस्तत्र नेशुरिज्यादयः क्रियाः ॥ १६ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**यदा** = जब
**दुर्वाससः** = दुर्वासा ऋषिको
**शापात्** = श्रापबाट
**सेन्द्राः** = इन्द्रसमेतका
**त्रयः** = तीनै
**लोकाः** = लोकहरू
**निःश्रीकाः** = श्रीविहीन
**अभवन्** = भए
**तत्र** = त्यहाँ
**इज्यादयः** = यज्ञ आदि
**क्रियाः च** = कर्महरू समेत
**नेशुः** = नष्ट भए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यस समयमा दुर्वासा ऋषिको श्रापको कारणले तीनै लोकहरू र स्वयं इन्द्र पनि श्रीविहीन भएका थिए। यस्तै तीनै लोकहरूबाट यज्ञ आदि सम्पूर्ण क्रियाहरू पनि नष्ट भएका थिए।

**निशाम्यैतत् सुरगणा महेन्द्रवरुणादयः ।**

**नाध्यगच्छन् स्वयं मन्त्रैर्मन्त्रयन्तो विनिश्चयम् ॥ १७ ॥**

**पदार्थ–**
**महेन्द्रवरुणादयः** = इन्द्र, वरुण आदि
**सुरगणाः** = मुख्य देवताहरूले
**एतत्** = यो कुरा
**निशाम्य** = सुनेर
**स्वयं** = आपसमा
**मन्त्रैः** = सल्लाह गर्दै
**मन्त्रयन्तः** = विचार गर्दा
**विनिश्चयम्** = कुनै उपाय
**न अध्यगच्छन्** = पाउन सकेनन्

**वाक्यार्थ–** यस विषयमा के उपाय गर्ने भनी इन्द्र, वरुण आदि श्रेष्ठ देवताहरूले आपसमा धेरै सल्लाह र विचार गरे, तर उनीहरू कुनै पनि निश्चयमा पुग्न सकेनन्।

**ततो ब्रह्मसभां जग्मुर्मेरोर्मूर्धनि सर्वशः।**

**सर्वं विज्ञापयाञ्चक्रुः प्रणताः परमेष्ठिने ॥ १८ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सर्वशः** = सबै देवताहरू
**मेरोः** = सुमेरु पर्वतको
**मूर्धनि** = चुचुरोमाथि रहेको
**ब्रह्मसभां** = ब्रह्माजीको सभामा
**जग्मुः** = गए
**प्रणताः** = शिर झुकाई
**परमेष्ठिने** = ब्रह्माजीलाई
**सर्वं** = सबै कुरा
**विज्ञापयाञ्चक्रुः** = बताए

**वाक्यार्थ–** त्यसपछि सबै देवताहरू मिली सुमेरु पर्वतको चुचुरोमाथि रहेको ब्रह्माजीको सभामा गए र उनीहरूले शिर झुकाई ब्रह्माजीलाई सबै कुरा बताए।

**स विलोक्येन्द्रवाय्वादीन् निःसत्त्वान् विगतप्रभान्।**

**लोकानमङ्गलप्रायानसुरानयथा विभुः ॥ १९ ॥**

**समाहितेन मनसा संस्मरन् पुरुषं परम्।**

**उवाचोत्फुल्लवदनो देवान् स भगवान् परः ॥ २० ॥**

**पदार्थ–**
**विभुः** = समर्थ र
**परः** = श्रेष्ठ
**सः** = ती
**भगवान्** = भगवान् ब्रह्माजीले
**इन्द्रवाय्वादीन्** = इन्द्र, वायु आदि देवताहरूलाई
**विगतप्रभान्** = कान्तिहीन एवं
**निःसत्त्वान्** = बलहीन भएका
**लोकान्** = सम्पूर्ण प्राणीहरूलाई
**अमङ्गलप्रायान्** = सङ्कटग्रस्त बनेका र
**असुरान्** = दैत्यहरूलाई चाहिँ
**अयथा** = यस विपरीत बढिरहेका
**विलोक्य** = देखेर
**सः** = उहाँले
**समाहितेन** = एकाग्र
**मनसा** = मनले
**परं** = सर्वश्रेष्ठ
**पुरुषं** = पुरुषोत्तम प्रभुलाई
**संस्मरन्** = स्मरण गरेर
**उत्फुल्लवदनः** = प्रसन्न अनुहारयुक्त भई
**देवान्** = देवताहरूलाई
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** समर्थ र श्रेष्ठ भगवान् ब्रह्माजीले त्यस वेला कान्तिहीन एवं निर्बल भएका इन्द्र, वायु आदि देवताहरू, सङ्कटग्रस्त सम्पूर्ण प्राणीहरू र यसको विपरीत समृद्ध भइरहेका असुरहरूलाई देखेर उहाँले केही समय मनलाई एकाग्र गरी परम पुरुष भगवान्को स्मरण गर्नुभयो र प्रसन्न अनुहारयुक्त भई देवताहरूलाई भन्न थाल्नुभयो।

**अहं भवो यूयमथोऽसुरादयो मनुष्यतिर्यग्द्रुमघर्मजातयः।**

**यस्यावतारांशकलाविसर्जिता व्रजाम सर्वे शरणं तमव्ययम् ॥ २१ ॥**

**पदार्थ–**
**अहं** = म (ब्रह्मा)
**भवः** = भगवान् शङ्कर

**यूयं** = तिमी देवताहरू
**अथो** = त्यसै गरी
**असुरादयः** = असुर आदि
**मनुष्यतिर्यग्द्रुमघर्मजातयः** = मानिस, पशु-पक्षी, वृक्ष र पसिनाबाट जन्मिने जुम्रा समेतका
**सर्वे** = सबै प्राणीहरू
**यस्य** = जुन भगवान्को
**अवतारांशकलाविसर्जिताः** = विराट् अवतारको अंशको अंश भागबाट बनेका हुन्
**तं** = त्यही
**अव्ययं** = अविनाशी परमात्माको
**शरणं** = शरणमा
**व्रजाम** = जाऔँ

**वाक्यार्थ–** म, भगवान् शङ्कर, देवता तिमीहरू तथा असुर, मानिस, पशु-पक्षी, वृक्ष र पसिनाबाट जन्मिने जुम्रा समेतका सबै प्राणीहरू भगवान्कै विराट् स्वरूपको अंशांश भागबाट बनेका हौँ। त्यसैले हामी सबै उहाँ अविनाशी परमात्माकै शरणमा जाऔँ।

**न यस्य वध्यो न च रक्षणीयो नोपेक्षणीयादरणीयपक्षः।**
**तथापि सर्गस्थितिसंयमार्थं धत्ते रजःसत्त्वतमांसि काले॥ २२॥**

**पदार्थ–**
**यस्य** = जुन भगवान्को लागि
**न वध्यः** = कोही वध्य छैन
**रक्षणीयः च** = रक्षा गर्नुपर्ने पनि
**न** = छैन
**उपेक्षणीयादरणीयपक्षः** = उपेक्षा गर्नुपर्ने र आदर गर्नुपर्ने पनि
**न** = कोही छैन
**तथा अपि** = तर पनि
**सर्गस्थितिसंयमार्थं** = सृष्टि, स्थिति र संहार गर्नका लागि
**काले** = ती-ती समयमा
**रजःसत्त्वतमांसि** = सत्त्व, रज र तमोगुणलाई
**धत्ते** = स्वीकार गर्नुहुन्छ

**वाक्यार्थ–** भगवान्को लागि मार्नुपर्ने वा रक्षा गर्नुपर्ने कोही पनि छैन। न त उहाँले उपेक्षा या आदर गर्नुपर्ने नै कोही छ। तर पनि सृष्टि, स्थिति र संहार गर्नका लागि उहाँले ती-ती समयमा सत्त्व, रज र तमोगुणलाई स्वीकार गर्नुहुन्छ।

**अयं च तस्य स्थितिपालनक्षणः सत्त्वं जुषाणस्य भवाय देहिनाम्।**
**तस्माद् व्रजामः शरणं जगद्गुरुं स्वानां स नो धास्यति शं सुरप्रियः॥ २३॥**

**पदार्थ–**
**देहिनाम्** = प्राणीहरूको
**भवाय** = कल्याणका लागि
**सत्त्वं** = सत्त्व गुणलाई
**जुषाणस्य** = स्वीकार गरेका
**तस्य** = ती भगवान्को
**अयं च** = यो
**स्थितिपालनक्षणः** = (जगत्को) मर्यादाको रक्षा गर्ने समय हो
**तस्मात्** = त्यसैले
**जगद्गुरुं** = सम्पूर्ण जगत्का गुरु भएका (उहाँको)
**शरणं** = शरणमा
**व्रजामः** = जाऔँ
**सुरप्रियः** = देवताहरूका प्यारा
**सः** = उहाँले नै
**स्वानां** = आफन्त भएका
**नः** = हाम्रो
**शं** = कल्याण
**धास्यति** = गर्नुहुनेछ

**वाक्यार्थ–** अहिले प्राणीहरूको कल्याणका लागि सत्त्व गुणलाई स्वीकार गरेका भगवान्को जगत्को मर्यादारक्षाको समय हो। त्यसैले सबैका गुरु भएका उहाँको शरणमा जाऔँ। सम्पूर्ण देवताहरूलाई प्रेम गर्ने उहाँले हामी आफन्तको अवश्य नै कल्याण गर्नुहुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्याभाष्य सुरान् वेधाः सह देवैररिन्दम।**
**अजितस्य पदं साक्षाज्जगाम तमसः परम्॥ २४॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुनाशक परीक्षित्
**वेधाः** = ब्रह्माजीले
**सुरान्** = देवताहरूलाई
**इति** = यस्तो
**आभाष्य** = भनेर
**देवैः सह** = देवताहरूसँग
**तमसः परं** = तमोगुणभन्दा पर रहेको
**अजितस्य** = अजित भगवान्‌को
**साक्षात् पदं** = मुख्य धाममा
**जगाम** = जानुभयो

**वाक्यार्थ–** हे परीक्षित्! देवताहरूलाई यसो भनेर ब्रह्माजी उनीहरूलाई पनि साथमा लिएर अजित भगवान्‌को तमोगुणभन्दा पर रहेको मुख्य धाममा जानुभयो।

**तत्रादृष्टस्वरूपाय श्रुतपूर्वाय वै विभो।**
**स्तुतिमब्रूत दैवीभिर्गीर्भिस्त्ववहितेन्द्रियः॥ २५॥**

**पदार्थ–**
**विभो** = हे राजा परीक्षित्
**वै** = निश्चय नै
**तत्र** = त्यहाँ
**अवहितेन्द्रियः** = एकाग्र चित्त भएका ब्रह्माजीले
**श्रुतपूर्वाय** = शास्त्रहरूबाट स्वरूपको विषयमा सुनिएका
**अदृष्टस्वरूपाय** = स्वरूप नदेखिएका (भगवान्‌लाई)
**दैवीभिः** = दिव्य
**गीर्भिः** = वेदवाणीहरूद्वारा
**स्तुतिं** = स्तुति
**अब्रूत** = गर्नुभयो

**वाक्यार्थ–** हे परीक्षित्! शास्त्रहरूबाट भगवान्‌को स्वरूपको विषयमा सुने पनि त्यहाँ पुग्दा भगवान्‌को स्वरूप देख्न नसकेपछि ब्रह्माजीले एकाग्र चित्त भई दिव्य वेदवाणीहरूद्वारा भगवान्‌को स्तुति गर्नुभयो।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**अविक्रियं सत्यमनन्तमाद्यं गुहाशयं निष्कलमप्रतर्क्यम्।**
**मनोऽग्रयानं वचसानिरुक्तं नमामहे देववरं वरेण्यम्॥ २६॥**

**पदार्थ–**
**गुहाशयं** = सबैको हृदयरूप गुफाभित्र बस्ने
**मनः अग्रयानं** = मनभन्दा छिटो गति भएका
**वचसा** = वाणीद्वारा
**अनिरुक्तं** = स्वरूप बताउन नसकिने
**अप्रतर्क्यं** = चिन्तन गर्न नसकिने
**अविक्रियं** = विकाररहित
**सत्यं** = सत्स्वरूप
**अनन्तं** = अनन्त
**निष्कलं** = अखण्ड
**आद्यं** = आदिपुरुष
**वरेण्यं** = वरणीय (उत्कृष्ट)

**देववरं** = देवश्रेष्ठ परमात्मालाई
**नमामहे** = प्रणाम गर्दछौँ

**वाक्यार्थ–** जो सबैको हृदयरूप गुफाभित्र बस्नुहुन्छ, जसको गति मनको भन्दा छिटो छ, जसको स्वरूपलाई वाणीद्वारा बताउन सकिन्न र मनद्वारा चिन्तन गर्न पनि सकिन्न अनि जो विकाररहित सत्स्वरूप, अनन्त, अखण्ड र आद्य हुनुहुन्छ यस्ता वरणीय परमात्मालाई प्रणाम गर्दछौँ।

**विवरण–** यहाँ अनेक विशेषणहरूद्वारा परमात्मस्वरूपको व्याख्या गरिएको छ। परमात्मा **देववरः** अर्थात् देवाधिदेव हुनुहुन्छ। उहाँ सर्वश्रेष्ठ हुनुको कारण बुझाउन **सत्यम्** पद आएको छ। अरू सबै रूपहरू कल्पित हुन् भने मायाका अधिष्ठान परमात्मा मात्र सत्यस्वरूप हुनुहुन्छ। सत्य भएकैले उहाँ **अविक्रियः** अर्थात् विकाररहित हुनुहुन्छ। विकार भनेका मुख्यतः जन्म र मृत्यु हुन्। त्यसैले **अनन्त** शब्दले मृत्युविकार र **आद्य** शब्दले जन्मरूप विकारको निषेध गरी परमात्माको निर्विकार स्वरूप बुझाएका छन्। उहाँ निरुपाधिक हुनुहुन्छ तापनि उहाँ सबैको हृदयरूपी गुफाभित्र अन्तर्यामी रूपले रहनुभएको छ। अनि तर्क वा विचारद्वारा उहाँलाई भेट्टाउन नसकिने भएकाले उहाँ **अप्रतर्क्य** हुनुहुन्छ। अप्रतर्क्य हुनमा दुई कारण छन्– एउटा **मनोऽग्रयानः** र अर्को **वचसा अनिरुक्तम्**। परमात्मा **मनोऽग्रयानः** अर्थात् मन जहाँ पुग्छ त्यहाँ पहिल्यै पुग्नुभएको हुन्छ। परमात्मा सर्वव्यापक हुनु भएकाले सधैँ जहाँसुकै पुग्नुभएको हुन्छ। फेरि उहाँलाई वाणीद्वारा बताउन पनि सकिँदैन। मन र वाणीको विषय नहुने भएकाले अप्रतर्क्य हुनुभएका परमात्माको यहाँ स्तुति गरिएको छ।

**विपश्चितं प्राणमनोधियात्मनामर्थेन्द्रियाभासमनिद्रमव्रणम्।**
**छायातपौ यत्र न गृध्रपक्षौ तमक्षरं खं त्रियुगं व्रजामहे ॥ २७ ॥**

**पदार्थ–**
**प्राणमनोधियात्मनां** = प्राण, मन, बुद्धि र अहङ्कारका
**विपश्चितं** = ज्ञाता भएका
**अर्थेन्द्रियाभासं** = शब्द आदि पदार्थ र श्रोत्र आदि सबै इन्द्रियका प्रकाशक
**अनिद्रं** = अज्ञान-निद्राले रहित
**अव्रणं** = जन्मने मर्ने शरीर नभएका
**यत्र** = जहाँ
**गृध्रपक्षौ** = जीवमा रहने
**छायातपौ** = ज्ञान र अज्ञान
**न** = छैनन्
**तं** = त्यस्ता
**त्रियुगं** = तीनै युग (सत्य, त्रेता र द्वापर)मा स्पष्ट रूपमा अभिव्यक्त हुनुहुने
**अक्षरं** = अविनाशी
**खं** = सर्वव्यापक परमात्माको
**व्रजामहे** = शरण पर्दछौँ

**वाक्यार्थ–** जो प्राण, मन, बुद्धि र अहङ्कारलाई पनि जान्नुहुन्छ, जो शब्द आदि विषय र श्रोत्र आदि इन्द्रियहरूलाई प्रकाशित गर्नुहुन्छ, जो अज्ञाननिद्राले रहित हुनुहुन्छ, जसको जीवहरूको जस्तो जन्मने र मर्ने शरीर छैन, जसमा जीवमा रहने ज्ञान र अज्ञान दुबै छैनन्, जो तीनै युगमा आफ्नो स्पष्ट स्वरूपमा प्रकट हुनुहुन्छ यस्ता अविनाशी सर्वव्यापक परमात्माको शरणमा हामी जान्छौँ।

**अजस्य चक्रं त्वजयेर्यमाणं मनोमयं पञ्चदशारमाशु।**
**त्रिणाभि विद्युच्चलमष्टनेमि यदक्षमाहुस्तमृतं प्रपद्ये ॥ २८ ॥**

**पदार्थ–**
**मनोमयं** = मन प्रधान भएको
**पञ्चदशारं** = पन्ध्र ओटा अरा

**त्रिणाभि** = तीन ओटा नाभि भएको
**विद्युच्चलं** = बिजुली झैँ चञ्चल
**आशु** = छिटो हिँड्ने
**अष्टनेमि** = आठ घेरा भएको
**अजया** = मायाद्वारा
**ईर्यमाणं** = प्रेरित
**अजस्य** = जीवको
**चक्रं** = रथचक्रजस्तो शरीर छ
**यत्** = जसलाई यो पाङ्ग्राको
**अक्षं** = धुरा
**आहुः** = भन्दछन्,
**तं** = त्यस्ता
**ऋतं** = सत्स्वरूप परमात्माको
**प्रपद्ये** = शरणमा जान्छु

**वाक्यार्थ–** जसमा सबभन्दा मुख्य तत्त्वका रूपमा मन रहेको छ, जसमा पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच प्राण गरी पन्ध्र ओटा अराहरू (पाङ्ग्रा र रथनाभिलाई जोड्ने स-साना तारहरू) रहेका छन्, जसका केन्द्रबिन्दु भनेका सत्त्व, रज र तम यी तीन गुणहरू हुन्, जसलाई पृथिवी, जल, तेज, वायु, आकाश, मन, बुद्धि र अहङ्कार यी आठ आवरणले घेरेका छन्, जो अनादि मायाद्वारा प्रेरित भई बिजुलीजत्तिकै असाध्यै छिटो जन्ममृत्युरूप संसारमा चलिरहन्छ त्यस्तो रथको पाङ्ग्रो जस्तै जीवको यस शरीरलाई अड्याउने धुरा चाहिँ सत्स्वरूप परमात्मा नै हुनुहुन्छ। म उहाँको शरणमा जान्छु।

**य एकवर्णं तमसः परं तदलोकमव्यक्तमनन्तपारम्।**
**आसाञ्चकारोपसुपर्णमेनमुपासते योगरथेन धीराः॥ २९॥**

**पदार्थ–**
**यः** = जो
**अनन्तपारं** = कुनै पनि किसिमको सीमा नभएका
**एकवर्णं** = केवल ज्ञानस्वरूप तथा
**तमसः परं** = प्रकृतिभन्दा पर
**अलोकं** = अदृश्य
**अव्यक्तं** = निर्विकल्प रूप
**तत्** = उहाँ परमात्मा नै
**उपसुपर्णं** = जीवसँगै
**आसाञ्चकार** = हृदयभित्र बस्नुभएको छ
**एनम्** = यस्ता परमात्मालाई
**धीराः** = धीर व्यक्तिहरू
**योगरथेन** = भक्ति, ज्ञान आदि प्राप्तिसाधनहरूद्वारा
**उपासते** = उपासना गर्दछन्

**वाक्यार्थ–** जसको कुनै पनि किसिमको (देश, काल र वस्तुकृत) सीमा छैन, जो केवल ज्ञानस्वरूप हुनुहुन्छ, जो प्रकृतिभन्दा पर, अदृश्य र निर्विकल्प हुनुहुन्छ र जो जीवसँग हृदयभित्र साक्षी रूपले बस्नुभएको छ यस्ता परमात्मालाई धीर व्यक्तिहरू भक्ति, ज्ञान आदि प्राप्तिसाधनहरूद्वारा उपासना गर्दछन्।

**न यस्य कश्चातितितर्ति मायां यया जनो मुह्यति वेद नार्थम्।**
**तं निर्जितात्मात्मगुणं परेशं नमाम भूतेषु समं चरन्तम्॥ ३०॥**

**पदार्थ–**
**यस्य** = जुन परमात्माको
**मायां** = मायालाई
**कः च** = कसैले पनि
**न अतितितर्ति** = तर्न सक्दैन
**यया** = जसद्वारा
**जनः** = प्राणी
**मुह्यति** = मोहित हुन्छ र
**अर्थम्** = आफ्नो स्वरूपलाई
**न वेद** = जान्दैन
**निर्जितात्मात्मगुणं** = आफ्नो शक्तिरूप माया र त्यसका गुणहरूलाई पनि नियन्त्रित गर्ने
**भूतेषु** = सबै प्राणीहरूभित्र
**समं** = बराबर

**चरन्तं** = अन्तर्यामीरूपले रहने
**तं** = त्यस्ता
**परेशं** = परमात्मालाई
**नमाम** = प्रणाम गर्दछौँ

**वाक्यार्थ–** जसको मायालाई कसैले पनि जित्न सक्दैन, जसको मायाद्वारा सम्पूर्ण प्राणीहरू मोहित भई आफ्नो वास्तविक स्वरूपलाई बिर्सन्छन्, जो आफ्नो शक्तिरूप माया र त्यसका गुणहरूलाई पनि नियन्त्रित गर्नुहुन्छ अनि जो सबै प्राणीहरूभित्र अन्तर्यामीरूपले रहनुहुन्छ त्यस्ता परमात्मालाई हामी प्रणाम गर्दछौँ।

**इमे वयं यत्प्रिययैव तन्वा सत्त्वेन सृष्टा बहिरन्तराविः।**
**गतिं न सूक्ष्मामृषयश्च विद्महे कुतोऽसुराद्या इतरप्रधानाः॥ ३१॥**

**पदार्थ–**
**यत्प्रियया** = जुन भगवान्‌को प्रिय
**तन्वा** = विराट् शरीरद्वारा
**सत्त्वेन** = सत्त्वगुणबाट नै
**सृष्टाः** = उत्पन्न भएका
**वयं** = हामी देवता र
**ऋषयः च** = ऋषिहरू पनि
**बहिः** = बाहिरी पदार्थहरूको सत्तारूपमा
**अन्तः** = भित्र स्वयंप्रकाशरूपमा
**आविः** = प्रकट रहने
**सूक्ष्मां गतिं** = वास्तविक स्वरूपलाई
**न विद्महे** = जान्दैनौँ
**इतरप्रधानाः** = रज र तमोगुण प्रधान भएका
**इमे** = यी
**असुराद्याः** = असुर आदिले त
**कुतः एव** = कसरी जान्लान् र

**वाक्यार्थ–** भगवान्‌को प्रिय विराट् शरीरद्वारा सत्त्वगुणबाट उत्पन्न भएर पनि हामी ऋषि र देवताहरू संसारका सबै बाहिरी पदार्थहरूलाई सत्ता दिँदै अनि भित्र चाहिँ स्वयंप्रकाश रूपमा प्रकट रहने परमात्माको त्यो वास्तविक स्वरूपलाई बुझ्न सक्दैनौँ भने रजोगुण र तमोगुण प्रधान मात्रामा भएका असुर आदि प्राणीहरूले त कसरी जान्लान् र ?

**पादौ महीयं स्वकृतैव यस्य चतुर्विधो यत्र हि भूतसर्गः।**
**स वै महापूरुष आत्मतन्त्रः प्रसीदतां ब्रह्म महाविभूतिः॥ ३२॥**

**पदार्थ–**
**स्वकृता** = आफैँले बनाएको
**इयं** = यो
**मही एव** = पृथिवी नै
**हि** = निश्चय नै
**यस्य** = जसको
**पादौ** = दुई पाउ हो
**यत्र** = जुन पृथिवीमा
**चतुर्विधः** = चार प्रकारको
**भूतसर्गः** = प्राणीहरूको सृष्टि चल्दछ
**सः** = त्यस्ता
**आत्मतन्त्रः** = स्वतन्त्र
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**महापूरुषः** = परम पुरुष
**ब्रह्म** = परमात्मा
**वै** = निश्चय नै
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जुन पृथिवीमा स्वेदज, अण्डज, उद्‌भिज्ज र जरायुज गरी चार प्रकारका प्राणीहरू हुन्छन् त्यो पृथिवीको सृष्टि परमात्माले गर्नुभएको हो र यही नै विराट्‌रूप उहाँको पाउ हो। त्यस्ता परम ऐश्वर्यशाली, स्वतन्त्र परमपुरुष परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**अम्भस्तु यद्रेत उदारवीर्यं सिध्यन्ति जीवन्त्युत वर्धमानाः ।**
**लोकास्त्रयोऽथाखिललोकपालाः प्रसीदतां ब्रह्म महाविभूतिः ॥ ३३ ॥**

**पदार्थ—**
**अथ** = यसै गरी
**त्रयः लोकाः** = तीनै लोक
**उत अखिललोकपालाः** = र सम्पूर्ण लोकपालहरू समेत
**सिध्यन्ति** = जसबाट उत्पन्न हुन्छन्
**जीवन्ति** = बाँच्दछन् र
**वर्धमानाः** = बढ्छन् (यस्तो)
**उदारवीर्यं** = परम शक्तिशाली
**अम्भः तु** = जल चाहिँ
**यद्रेतः** = जुन परमात्माको वीर्य हो
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**ब्रह्म** = परमात्मा
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ—** तीनै लोकसहित सम्पूर्ण लोकपालहरू जहाँबाट उत्पन्न हुन्छन्, जसद्वारा बाँच्छन् र बढ्दछन् त्यस्तो परम शक्तिशाली जल जुन परमात्माको वीर्य हो, त्यस्ता परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**सोमं मनो यस्य समामनन्ति दिवौकसां वै बलमन्ध आयुः ।**
**ईशो नगानां प्रजनः प्रजानां प्रसीदतां नः स महाविभूतिः ॥ ३४ ॥**

**पदार्थ—**
**नगानां** = वृक्षहरूका
**ईशः** = सम्राट्
**प्रजानां** = प्रजाहरूका
**प्रजनः** = जन्मदाता
**दिवौकसां** = देवताहरूका
**बलं** = बल
**अन्धः** = अन्न र
**आयुः** = आयु भएका
**सोमं** = चन्द्रमालाई
**यस्य** = जसको
**मनः** = मन हो भनेर
**वै** = निश्चय नै
**समामनन्ति** = भन्दछन्
**सः** = त्यस्ता
**महाविभूतिः** = परम ऐश्वर्यशाली परमात्मा
**नः** = हामीमाथि
**प्रसीदताम्** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ—** वृक्षहरूका सम्राट्, प्रजाहरूका जन्मदाता एवं देवताहरूका अन्न, बल र आयु भएका चन्द्रमा पनि जुन परमात्माको मन हो भनी श्रुतिहरू गाउँछन्, त्यस्ता परम ऐश्वर्यशाली प्रभु हामीमाथि प्रसन्न हुनुहोस्।

**अग्निर्मुखं यस्य तु जातवेदा जातः क्रियाकाण्डनिमित्तजन्मा ।**
**अन्तःसमुद्रेऽनुपचन् स्वधातून् प्रसीदतां नः स महाविभूतिः ॥ ३५ ॥**

**पदार्थ—**
**अन्तःसमुद्रे** = पेटभित्र र समुद्रमा रही
**स्वधातून्** = अन्न, जल आदिलाई
**अनुपचन्** = पचाउने र
**क्रियाकाण्डनिमित्तजन्मा** = यज्ञ आदि कर्मको लागि उत्पन्न भएको
**जातवेदाः** = समस्त द्रव्यको कारण
**अग्निः तु** = आगो

| | | |
|---|---|---|
| **यस्य** = जसको | **महाविभूतिः** = परम ऐश्वर्यशाली | **नः** = हामीमाथि |
| **मुखं जातः** = मुख हो | **सः** = ती परमात्मा | **प्रसीदताम्** = प्रसन्न हुनुहोस् |

**वाक्यार्थ–** व्यष्टि पेटभित्र जठराग्निको रूपमा रही अन्न पचाउने र समष्टि समुद्रभित्र वडवानलको रूपमा पानी सोसिरहने, यज्ञ आदि कर्मको लागि उत्पन्न भएको र समस्त द्रव्यहरूको उत्पत्तिकारणका रूपमा रहेको अग्नि जसको मुख हो, त्यस्ता परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**यच्चक्षुरासीत् तरणिर्देवयानं त्रयीमयो ब्रह्मण एष धिष्ण्यम्।**
**द्वारं च मुक्तेरमृतं च मृत्युः प्रसीदतां नः स महाविभूतिः॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **देवयानं** = अर्चिरादि मार्गका देवता | **मुक्तेः** = क्रममुक्तिको | **आसीत्** = हुन् |
| **त्रयीमयः** = ऋक्, साम र यजुर्वेदमय | **द्वारं** = द्वारभूत | **महाविभूतिः** = परम ऐश्वर्यशाली |
| **ब्रह्मणः** = निर्गुण परम तत्त्वको | **अमृतं** = अमृतस्वरूप र | **सः** = ती परमात्मा |
| **धिष्ण्यं** = ध्यानस्थल | **मृत्युः च** = कालस्वरूप पनि भएका | **नः** = हामीमाथि |
| | **एषः तरणिः** = यी सूर्य | **प्रसीदतां** = प्रसन्न हुनुहोस् |
| | **यच्चक्षुः** = जसका आँखा | |

**वाक्यार्थ–** अर्चिरादि (देवयान) मार्गका देवता, ऋक्, साम र यर्जुवेदमय, निर्गुण परम तत्त्वका ध्यानस्थल, क्रममुक्तिको द्वार भएका, अमृतस्वरूप र कालस्वरूप सूर्य जुन परमात्माका आँखा हुन्, ती ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**प्राणादभूद् यस्य चराचराणां प्राणः सहो बलमोजश्च वायुः।**
**अन्वास्म सम्राजमिवानुगा वयं प्रसीदतां नः स महाविभूतिः॥ ३७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यस्य** = जसको | **ओजः च** = इन्द्रियशक्तिरूप | **अन्वास्मः** = (त्यही प्राणकै) पछि लाग्दछौँ |
| **प्राणात्** = प्राणबाट | **वायुः** = वायु | **महाविभूतिः** = परम ऐश्वर्यशाली |
| **चराचराणां** = चर, अचर सबै प्राणीहरूको | **अभूत्** = उत्पन्न भयो | **सः** = ती परमात्मा |
| **प्राणः** = पञ्चप्राणरूप र | **अनुगाः** = सेवकहरूले | **नः** = हामीमाथि |
| **सहः** = मानसिक क्षमतारूप | **सम्राजं इव** = सम्राट्को पछि लागे झैँ | **प्रसीदतां** = प्रसन्न हुनुहोस् |
| **बलं** = शारीरिक बलरूप | **वयं** = हामी इन्द्रिय आदिका अधिष्ठाता देवताहरू | |

**वाक्यार्थ–** जसरी सेवकहरू सम्राट्को पछि लाग्छन्, त्यसै गरी हामी इन्द्रियहरूका अधिष्ठाता देवताहरू पनि जसको प्राणबाट चराचर सम्पूर्ण प्राणीहरूका लागि प्राण, मानसिक क्षमता, शारीरिक बल र इन्द्रियशक्तिरूप वायु उत्पन्न भयो त्यही प्राणकै पछि लाग्छौँ। यस्ता परम

ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**श्रोत्राद् दिशो यस्य हृदश्च खानि प्रजज्ञिरे खं पुरुषस्य नाभ्याः।**
**प्राणेन्द्रियात्मासुशरीरकेतं प्रसीदतां नः स महाविभूतिः॥ ३८॥**

**पदार्थ–**
**यस्य** = जसको
**श्रोत्रात्** = कानबाट
**दिशः** = दिशाहरू
**हृदः च** = हृदयबाट
**खानि** = इन्द्रिय गोलकहरू
**प्रजज्ञिरे** = उत्पन्न भए
**पुरुषस्य** = परमात्माको
**नाभ्याः** = नाभिबाट
**प्राणेन्द्रियात्मासुशरीरकेतं** = पञ्च प्राण, दश इन्द्रिय, मन, पाँच उपप्राण र शरीरको आश्रयभूत
**खं** = आकाश जन्मियो
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**सः** = ती परमात्मा
**नः** = हामीमाथि
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जसको कानबाट दिशाहरू र हृदयबाट इन्द्रियगोलकहरू उत्पन्न भए, जसको नाभिबाट पाँच प्राण (प्राण, अपान, समान, व्यान र उदान), पाँच उपप्राण (नाग, कूर्म, कृकल, देवदत्त र धनञ्जय), दश इन्द्रिय (वाणी, हात, पाउ, मलद्वार, मूत्रद्वार, कान, छाला, आँखा, जिब्रो र नाक), मन र शरीरसमेतको आश्रय भएको आकाश जन्मियो। यस्ता परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**बलान्महेन्द्रस्त्रिदशाः प्रसादान्मन्योर्गिरीशो धिषणाद् विरिञ्चः।**
**खेभ्यस्तु छन्दांस्यृषयो मेढ्रतः कः प्रसीदतां नः स महाविभूतिः॥ ३९॥**

**पदार्थ–**
**बलात्** = (जसको) बलबाट
**महेन्द्रः** = ठुला इन्द्र
**प्रसादात्** = प्रसन्नताबाट
**त्रिदशाः** = देवताहरू
**मन्योः** = रिसबाट
**गिरीशः** = भगवान् शङ्कर
**धिषणात्** = बुद्धिबाट
**विरिञ्चः** = ब्रह्माजी
**खेभ्यः तु** = इन्द्रियहरूबाट चाहिँ
**छन्दांसि** = वेदहरू र
**ऋषयः** = ऋषिहरू
**मेढ्रतः** = लिङ्गबाट
**कः** = प्रजापति (उत्पन्न भए)
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**सः** = ती परमात्मा
**नः** = हामीमाथि
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जसको बलबाट इन्द्र, प्रसन्नताबाट देवताहरू, रिसबाट भगवान् शङ्कर, बुद्धिबाट ब्रह्माजी, इन्द्रियहरूबाट वेद र ऋषिहरू अनि लिङ्गबाट प्रजापतिसमेत उत्पन्न भए, ती परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**श्रीर्वक्षसः पितरश्छाययासन् धर्मः स्तनादितरः पृष्ठतोऽभूत्।**
**द्यौर्यस्य शीर्ष्णोऽप्सरसो विहारात् प्रसीदतां नः स महाविभूतिः॥ ४०॥**

**पदार्थ–**
**वक्षसः** = छातीबाट
**श्रीः** = लक्ष्मी
**छायया** = छायाबाट
**पितरः** = पितृहरू
**आसन्** = भए

**स्तनात्** = स्तनबाट
**धर्मः** = धर्म र
**पृष्ठतः** = पिठ्युँबाट
**इतरः** = अधर्म
**अभूत्** = उत्पन्न भयो
**यस्य** = जसको
**शीर्ष्णः** = शिरबाट
**द्यौः** = आकाश र
**विहारात्** = विहारबाट
**अप्सरसः** = अप्सराहरू (पैदा भए)
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**सः** = ती परमात्मा
**नः** = हामीमाथि
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जसको छातीबाट लक्ष्मी, छायाबाट पितृहरू, स्तनबाट धर्म, पिठ्युँबाट अधर्म, शिरबाट आकाश र विहारबाट अप्सराहरू उत्पन्न भए, यस्ता परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस् ।

**विप्रो मुखाद् ब्रह्म च यस्य गुह्यं राजन्य आसीद् भुजयोर्बलं च ।**
**ऊर्वोर्विडोजोऽङ्घ्रिरवेदशूद्रौ प्रसीदतां नः स महाविभूतिः ॥ ४१ ॥**

**पदार्थ–**
**यस्य** = जसको
**मुखात्** = मुखबाट
**विप्रः** = ब्राह्मण र
**गुह्यं** = रहस्यमय
**ब्रह्म च** = वेदवाणी अनि
**भुजयोः** = भुजाहरूबाट
**राजन्यः** = क्षत्रिय र
**बलं च** = उनीहरूको वृत्ति बल
**आसीत्** = प्रकट भयो
**ऊर्वोः** = तिघ्राबाट
**विट्** = वैश्य र
**ओजः** = कुशलतारूपी वृत्ति
**अङ्घ्रिः** = चरणबाट
**अवेदशूद्रौ** = शूद्र र तिनको वेदमन्त्ररहित सेवा आदि वृत्ति भयो
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**सः** = ती परमात्मा
**नः** = हामीमाथि
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जसको मुखबाट ब्राह्मण र रहस्यमय वेदवाणी, भुजाहरूबाट क्षत्रिय र उसको बल, तिघ्राबाट वैश्य र उसको व्यापारकुशलता, चरणबाट शूद्र र तिनको वेदमन्त्ररहित सेवा उत्पन्न भए, त्यस्ता परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस् ।

**लोभोऽधरात् प्रीतिरुपर्यभूद् द्युतिर्नस्तः पशव्यः स्पर्शेन कामः ।**
**भ्रुवोर्यमः पक्ष्मभवस्तु कालः प्रसीदतां नः स महाविभूतिः ॥ ४२ ॥**

**पदार्थ–**
**अधरात्** = (जसको) तल्लो ओठबाट
**लोभः** = लोभ
**उपरि** = माथिल्लो ओठबाट
**प्रीतिः** = प्रीति
**नस्तः** = नासिकाबाट
**द्युतिः** = कान्ति
**स्पर्शेन** = स्पर्शबाट
**पशव्यः** = पशुहरूलाई मन पर्ने
**कामः** = कामभाव
**भ्रुवोः** = आँखीभौँबाट
**यमः** = यमराज
**अभूत्** = उत्पन्न भयो
**कालः तु** = काल चाहिँ
**पक्ष्मभवः** = परेलाबाट उत्पन्न भएको हो
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**सः** = ती परमात्मा
**नः** = हामीमाथि
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जसको तल्लो ओठबाट लोभ, माथिल्लो ओठबाट प्रीति, स्पर्शबाट पशुहरूलाई मन पर्ने कामवृत्ति, नाकबाट कान्ति, आँखीभौँबाट यमराज र परेलाबाट काल उत्पन्न भए त्यस्ता परम

ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**द्रव्यं वयः कर्म गुणान् विशेषं यद्योगमायाविहितान् वदन्ति।**
**यद्दुर्विभाव्यं प्रबुधापबाधं प्रसीदतां नः स महाविभूतिः॥ ४३॥**

**पदार्थ–**
**यत् यत्** = जे-जे (पदार्थहरू छन् ती सबै)
**प्रबुधापबाधं** = ज्ञानीहरूद्वारा बाध गरिने
**दुर्विभाव्यं** = अनिर्वचनीय (छन्)
**द्रव्यं** = पञ्चमहाभूत
**वयः** = काल
**कर्म** = कर्म
**गुणान्** = सत्त्व आदि गुणहरू र
**विशेषं** = जति पनि अरू विशेष पदार्थ छन्, ती
**योगमायाविहितान्** = जुन परमात्माको योगमायाद्वारा बनेका हुन् (भनेर)
**वदन्ति** = भन्दछन्
**महाविभूतिः** = परम ऐश्वर्यशाली
**सः** = ती परमात्मा
**नः** = हामीमाथि
**प्रसीदतां** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** संसारका सम्पूर्ण पदार्थहरू अनिर्वचनीय छन् र ज्ञानीहरूद्वारा तत्त्वज्ञान गरिएपछि बाधित हुन्छन्। पञ्चमहाभूत, काल, कर्म, सत्त्व, रज र तमोगुण आदि सबै प्रकारका ती पदार्थहरू परमात्माकै योगमायाबाट उत्पन्न भएका हुन् भनी शास्त्रहरू बताउँछन्। त्यस्ता परम ऐश्वर्यशाली परमात्मा हामीमाथि प्रसन्न हुनुहोस्।

**नमोऽस्तु तस्मा उपशान्तशक्तये स्वाराज्यलाभप्रतिपूरितात्मने।**
**गुणेषु मायारचितेषु वृत्तिभिर्न सज्जमानाय नभस्वदूतये॥ ४४॥**

**पदार्थ–**
**उपशान्तशक्तये** = सम्पूर्ण शक्तिहरू शान्त हुने
**स्वाराज्यलाभप्रतिपूरितात्मने** = आत्मानन्दको लाभबाट सम्पूर्ण कामनाहरू पूरा भएका
**मायारचितेषु** = मायाबाट निर्मित
**गुणेषु** = पदार्थहरूमा
**वृत्तिभिः** = दर्शन, श्रवण आदि इन्द्रियका वृत्तिहरूद्वारा
**न सज्जमानाय** = आसक्त नहुने
**नभस्वदूतये** = वायु झैँ असङ्ग
**तस्मै** = ती परमात्मालाई
**नमः अस्तु** = प्रणाम छ

**वाक्यार्थ–** जसमा सम्पूर्ण शक्तिहरू शान्त हुन्छन्, जो आत्मानन्दको लाभबाट पूर्णकाम बन्नुभएको छ, जो मायानिर्मित पदार्थहरूमा दर्शन, श्रवण आदि इन्द्रियवृत्तिहरूद्वारा आसक्त बन्नुहुन्न, वायु झैँ असङ्ग त्यस्ता परमात्मालाई प्रणाम छ।

**स त्वं नो दर्शयात्मानमस्मत्करणगोचरम्।**
**प्रपन्नानां दिदृक्षूणां सस्मितं ते मुखाम्बुजम्॥ ४५॥**

**पदार्थ–**
**सः** = त्यस्ता
**त्वं** = हजुरले
**प्रपन्नानां** = शरणमा आएका
**दिदृक्षूणां** = दर्शन चाहने
**नः** = हामीहरूलाई
**ते** = हजुरको
**सस्मितं** = मन्दहासयुक्त
**मुखाम्बुजं** = मुखकमल

| | |
|---|---|
| **अस्मत्करणगोचरं** = हाम्रा आँखाले देख्न सकिने गरी | **आत्मानं** = आफूलाई<br>**दर्शय** = देखाइदिनुहोस् |

**वाक्यार्थ–** हामी त्यस्ता परमात्मा हजुरको शरणमा आएका छौँ र हजुरको दर्शन चाहन्छौँ। हजुरको मन्दहास्ययुक्त मुखकमल जसरी हामीले देख्न सक्छौँ त्यसै गरी हामीलाई दर्शन दिनुहोस्।

**तैस्तैः स्वेच्छाधृतै रूपैः काले काले स्वयं विभो।**

**कर्म दुर्विषहं यन्नो भगवांस्तत् करोति हि॥ ४६॥**

| | | |
|---|---|---|
| पदार्थ– | धारण गरेका | **कर्म** = कर्म छ |
| **विभो** = हे परमात्मा | **तैः तैः** = ती–ती | **तत्** = त्यसलाई |
| **भगवान्** = अनन्त ऐश्वर्यशाली | **रूपैः** = रूपहरूद्वारा | **हि** = निश्चय नै |
| **स्वयं** = हजुर आफैँले नै | **नः** = हाम्रो लागि | **करोति** = गरिदिनुहुन्छ |
| **काले काले** = समय–समयमा | **दुर्विषहं** = गर्नै नसकिने | |
| **स्वेच्छाधृतैः** = आफ्नै इच्छाले | **यत्** = जुन | |

**वाक्यार्थ–** हे परमात्मा ! अनन्त ऐश्वर्यशाली हजुर समय–समयमा आफ्नै इच्छाले अनेक रूप धारण गर्नुहुन्छ र ती रूपहरूद्वारा हामीले गर्नै नसक्ने कर्महरू पनि गरिदिनुहुन्छ।

**क्लेशभूर्यल्पसाराणि कर्माणि विफलानि वा।**

**देहिनां विषयार्तानां न तथैवार्पितं त्वयि॥ ४७॥**

| | | |
|---|---|---|
| पदार्थ– | परिश्रम र थोरै फलवाला | **तथा** = त्यसरी |
| **विषयार्तानां** = विषयमा मोहित | **विफलानि वा** = अथवा निष्फल | **न एव** = निष्फल या |
| **देहिनां** = प्राणीहरूका | हुन्छन् | अल्पफलदायक हुँदैन |
| **कर्माणि** = कर्महरू | **त्वयि** = हजुरमा | |
| **क्लेशभूर्यल्पसाराणि** = धेरै | **अर्पितं** = समर्पित कर्म | |

**वाक्यार्थ–** विषयमा मोहित भएका प्राणीहरूका कर्महरू धेरै दुःख दिने तर फल चाहिँ कम दिने हुन्छन्, अथवा फल नै नदिने खालका हुन्छन् तर हजुरमा समर्पित गरिएका कर्महरू त्यसरी निष्फल वा अल्पफलदायक हुँदैनन्।

**नावमः कर्मकल्पोऽपि विफलायेश्वरार्पितः।**

**कल्पते पुरुषस्यैष स ह्यात्मा दयितो हितः॥ ४८॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अवमः** = सानोभन्दा सानो | **न कल्पते** = हुँदैन, किनभने |
| **ईश्वरार्पितः** = भगवान्मा | **कर्मकल्पः अपि** = कर्माभास पनि | **सः** = ती कर्मफलदाता |
| समर्पित | **विफलाय** = निष्फल | **एषः** = यी परमात्मा |

**पुरुषस्य** = जीवका
**दयितः** = प्रिय
**हितः** = हितकारक र
**आत्मा हि** = आत्मा नै हुनुहुन्छ

**वाक्यार्थ–** भगवान्मा समर्पित गरिएको सानोभन्दा सानो कर्माभास पनि व्यर्थ हुँदैन किनभने कर्मफलदाता परमात्मा जीवहरूका परमप्रिय, हितैषी र आत्मा नै हुनुहुन्छ।

**यथा हि स्कन्धशाखानां तरोर्मूलावसेचनम्।**

**एवमाराधनं विष्णोः सर्वेषामात्मनश्च हि ॥ ४९॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**यथा** = जसरी
**तरोः** = रुखको
**मूलावसेचनं** = फेदमा पानी हाल्नु
**स्कन्धशाखानां** = साना–ठुला हाँगाहरूका लागि पनि हुन्छ
**एवं** = यसै गरी
**विष्णोः** = परमात्माको
**आराधनं** = सेवा
**आत्मनः** = आफूलाई र
**सर्वेषां च हि** = सबैलाई पनि हुन्छ नै

**वाक्यार्थ–** जसरी रुखको फेदमा पानी हाल्दा त्यसका साना–ठुला हाँगाविँगाहरूलाई पनि हुन्छ त्यसै गरी परमात्माको आराधना गर्नु आफ्ना लागि र सबैका लागि पनि हुन्छ।

**नमस्तुभ्यमनन्ताय दुर्वितर्क्यात्मकर्मणे।**

**निर्गुणाय गुणेशाय सत्त्वस्थाय च साम्प्रतम्॥ ५०॥**

**पदार्थ–**
**दुर्वितर्क्यात्मकर्मणे** = जसको लीलारहस्य तर्कभन्दा पर छ
**निर्गुणाय** = निर्गुण (भएर पनि)
**गुणेशाय** = सबै गुणका मालिक
**साम्प्रतं च** = अहिले स्थितिकालमा
**सत्त्वस्थाय** = सत्त्वगुणमा रहने
**अनन्ताय** = अनन्तस्वरूप
**तुभ्यं** = हजुरलाई
**नमः** = प्रणाम छ

**वाक्यार्थ–** जसको लीलारहस्य तर्कभन्दा पर छ, जो निर्गुण भएर पनि सबै गुणहरूका एक मात्र मालिक हुनुहुन्छ अनि जो अहिले स्थितिकालमा सत्त्वगुणलाई स्वीकार गरी रहनुभएको छ त्यस्ता अनन्तस्वरूप परमात्मालाई प्रणाम छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहिताया-**

**मष्टमस्कन्धेऽमृतमथने पञ्चमोऽध्यायः॥ ५॥**

# अथ षष्ठोऽध्यायः

## देवता र दैत्यहरूद्वारा समुद्रमन्थन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं स्तुतः सुरगणैर्भगवान् हरिरीश्वरः।**

**तेषामाविरभूद् राजन् सहस्रार्कोदयद्युतिः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**सुरगणैः** = देवताहरूद्वारा
**एवं** = यसप्रकार
**स्तुतः** = स्तुति गरिएका
**ईश्वरः** = सर्वसमर्थशाली
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**सहस्रार्कोदयद्युतिः** = हजारौँ सूर्य चम्के झैँ
**तेषां** = उनीहरूका सामु
**आविः** = अघि
**अभूत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! देवताहरूले यसप्रकार स्तुति गरेपछि सर्वसमर्थशाली भगवान् श्रीहरि उनीहरूका सामु हजारौँ सूर्य चम्केजस्तो चम्किलो स्वरूपले प्रकट हुनुभयो।

**तेनैव महसा सर्वे देवाः प्रतिहतेक्षणाः।**

**नापश्यन् खं दिशः क्षोणीमात्मानं च कुतो विभुम्॥ २॥**

**पदार्थ–**
**तेन एव** = त्यही
**महसा** = तेजद्वारा नै
**प्रतिहतेक्षणाः** = आँखा बन्द भएका
**सर्वे** = सबै
**देवाः** = देवताहरूले
**खं** = आकाश
**दिशः** = दिशाहरू
**क्षोणीं** = पृथिवी र
**आत्मानं च** = आफ्नै शरीरलाई समेत
**न अपश्यन्** = देख्न सकेनन् भने
**विभुम्** = परमात्मालाई
**कुतः** = कसरी (देख्न सक्थे)

**वाक्यार्थ–** त्यो असाधारण तेजद्वारा सम्पूर्ण देवताहरूको आँखा बन्द भयो। उनीहरूले पृथिवी, आकाश, दिशाहरू र आफ्नै शरीरलाई समेत देख्न सकेनन् भने परमात्मालाई त के देख्न सक्थे?

**विरिञ्चो भगवान् दृष्ट्वा सह शर्वेण तां तनुम्।**

**स्वच्छां मरकतश्यामां कञ्जगर्भारुणेक्षणाम्॥ ३॥**

**तप्तहेमावदातेन लसत्कौशेयवाससा।**

**प्रसन्नचारुसर्वाङ्गीं सुमुखीं सुन्दरभ्रुवम्॥ ४॥**

**महामणिकिरीटेन केयूराभ्यां च भूषिताम्।**

**कर्णाभरणनिर्भातकपोलश्रीमुखाम्बुजाम् ॥ ५ ॥**
**काञ्चीकलापवलयहारनूपुरशोभिताम् ।**
**कौस्तुभाभरणां लक्ष्मीं बिभ्रतीं वनमालिनीम् ॥ ६ ॥**
**सुदर्शनादिभिः स्वास्त्रैर्मूर्तिमद्भिरुपासिताम् ।**
**तुष्टाव देवप्रवरः सशर्वः पुरुषं परम् ॥**
**सर्वामरगणैः साकं सर्वाङ्गैरवनिं गतैः ॥ ७ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**विरिञ्चः** = ब्रह्माजीले
**शर्वेण सह** = शिवजीसँग
**स्वच्छां** = अत्यन्त स्वच्छ
**मरकतश्यामां** = मरकतमणि (पन्ना)समान अलिअलि कालो वर्णका
**कञ्जगर्भारुणेक्षणाम्** = कमलका रेशाजस्ता राता-राता आँखा
**तप्तहेमावदातेन** = तताइएको सुनजस्तो चम्किलो
**लसत्कौशेयवाससा** = सुन्दर रेशमी पीताम्बर लगाएकाले
**प्रसन्नचारुसर्वाङ्गीं** = सम्पूर्ण अङ्ग अत्यन्त सुन्दर र हँसिला भएका
**महामणिकिरीटेन** = महामणिमय मुकुट र
**केयूराभ्यां च** = बाजुहरूले
**भूषिताम्** = अलङ्कृत
**सुन्दरभ्रुवम्** = सुन्दर आँखीभौँ र
**सुमुखीं** = साह्रै मिलेको मुखमण्डल
**कर्णाभरणनिर्भातकपोलश्री-मुखाम्बुजाम्** = कानका आभूषणद्वारा गाला चम्किनाले सुन्दर मुखमण्डलयुक्त
**काञ्चीकलापवलयहारनूपुर-शोभिताम्** = रत्नमय कन्धनी, बाला, हार र पाउजु यी आभूषणले युक्त
**कौस्तुभाभरणां** = कौस्तुभमणिले शोभित भएकी
**लक्ष्मीं** = लक्ष्मीजीलाई
**बिभ्रतीं** = धारण गर्ने अनि
**वनमालिनीम्** = वनमाला लगाउने
**सुदर्शनादिभिः** = सुदर्शन आदि
**स्वास्त्रैः** = आफ्ना अस्त्रहरूद्वारा
**मूर्तिमद्भिः** = देहधारी भई
**उपासिताम्** = सेवा गरिएको
**तां** = त्यो
**तनुम्** = दिव्य शरीरलाई
**दृष्ट्वा** = देखेपछि
**सशर्वः** = शिवजीसहित भई
**देवप्रवरः** = देवश्रेष्ठ ब्रह्माजीले
**सर्वाङ्गैः** = आफ्ना सम्पूर्ण अङ्गहरूलाई
**अवनिं** = पृथिवीमा
**गतैः** = झुकाएका
**सर्वामरगणैः** = सबै देवताहरूका
**साकं** = साथमा
**परम्** = सर्वश्रेष्ठ
**पुरुषं** = पुरुषोत्तमलाई
**तुष्टाव** = स्तुति गर्नुभयो

**वाक्यार्थ–** ब्रह्माजी र भगवान् शङ्करले भगवान्‌को त्यस दिव्य शरीरलाई देख्नुभयो। त्यतिखेर उहाँको शरीर स्वच्छ र मरकतमणि (पन्ना)समान अलिअलि कालो वर्णको थियो। उहाँको अलि-अलि रातो वर्णको आँखामा कमलका भित्री रेशाजस्तै राता-राता रेखाहरू देखिन्थे। उहाँले खारिएको सुनजस्तो चम्किलो सुनौलो वर्णको पीताम्बर धारण गर्नुभएको थियो, त्यसले गर्दा उहाँका अङ्गहरू अत्यन्त सुन्दर र हँसिला देखिन्थे। उहाँले महामणिमय मुकुट र बाजु

लगाउनुभएको थियो। उहाँका आँखीभौँ सुन्दर थिए र मुख मिलेको थियो, अरु कानका गहना चम्केर गाला टल्किँदा उहाँको मुखशोभा झन् बढ्थ्यो। उहाँको कम्मरमा रत्नमय कन्धनी थियो, हातमा बाला थिए, गलामा सुन्दर हार थियो भने पाउमा पाउजु बाँधिएको थियो। उहाँको वक्षःस्थलमा लक्ष्मीजी हुनुहुन्थ्यो, त्यहाँ कौस्तुभमणि र वनमाला पनि शोभित थिए। त्यो दिव्य शरीरको वरिपरि सुदर्शन चक्र आदि अस्त्रहरू मूर्तिमान् भई उहाँको सेवा गर्दथे। भगवान्को त्यस्तो दिव्य शरीरलाई देखेपछि ब्रह्माजीले आफ्ना सबै अङ्गहरूलाई पृथिवीमा झुकाई साष्टाङ्ग दण्डवत् प्रणाम गरिरहेका शङ्कर भगवान् एवं अन्य देवताहरूलाई पनि साथ लिई परम पुरुष परमात्माको स्तुति गर्नुभयो।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**अजातजन्मस्थितिसंयमायागुणाय निर्वाणसुखार्णवाय।**
**अणोरणिम्नेऽपरिगण्यधाम्ने महानुभावाय नमो नमस्ते॥ ८॥**

**पदार्थ–**
**अजातजन्मस्थितिसंयमाय** = जन्म, स्थिति र नाशरहित
**अगुणाय** = गुणभन्दा माथि
**निर्वाणसुखार्णवाय** = मोक्षरूप परमानन्दका महान् समुद्र जस्ता
**अणोः** = सूक्ष्मभन्दा पनि
**अणिम्ने** = सूक्ष्मतर अनि
**अपरिगण्यधाम्ने** = अनन्त स्वरूप हुनुहुने
**महानुभावाय** = परम ऐश्वर्यशाली
**ते** = हजुरलाई
**नमः नमः** = बारम्बार प्रणाम छ

**वाक्यार्थ–** जसको स्वरूप जन्म, स्थिति र नाशरहित छ, जो गुणभन्दा माथि हुनुहुन्छ एवं मोक्षस्वरूप परमानन्दका विशाल समुद्र हुनुहुन्छ, जो सूक्ष्मभन्दा पनि सूक्ष्म हुनुहुन्छ र जसको विग्रह अनन्त छ त्यस्ता परम ऐश्वर्यशाली हजुरलाई बारम्बार प्रणाम छ।

**रूपं तवैतत् पुरुषर्षभेज्यं श्रेयोऽर्थिभिर्वैदिकतान्त्रिकेण।**
**योगेन धातः सह नस्त्रिलोकान् पश्याम्यमुष्मिन्नु ह विश्वमूर्तौ॥ ९॥**

**पदार्थ–**
**पुरुषर्षभ** = हे पुरुषोत्तम
**तव** = हजुरको
**एतत्** = यो
**रूपं** = रूपलाई
**श्रेयोऽर्थिभिः** = कल्याण चाहनेहरूले
**वैदिकतान्त्रिकेण** = वैदिक र तान्त्रिक
**योगेन** = विधिले
**इज्यं** = पूजा गर्नुपर्दछ
**धातः** = सबैका कारण भएका हे भगवान्
**अमुष्मिन्** = यो
**विश्वमूर्तौ** = विश्वरूपमय विग्रहमा
**नु ह** = निश्चय नै
**त्रिलोकान् सह** = तीनै लोक सहित
**नः** = हामी सम्पूर्ण देवताहरूलाई पनि
**पश्यामि** = झल्झली देखिरहेको छु

**वाक्यार्थ–** हे पुरुषोत्तम ! कल्याण चाहने व्यक्तिहरूले हजुरको यो स्वरूपलाई वैदिक र तान्त्रिक

दुबै विधिले पूजा गर्नुपर्दछ। हे सबैका कारण ! म त यो विश्वरूपमय हजुरको विग्रहमा तीनै लोक र हामी सम्पूर्ण देवताहरूलाई पनि छर्लङ्ग देखिरहेको छु।

**त्वय्यग्र आसीत् त्वयि मध्य आसीत् त्वय्यन्त आसीदिदमात्मतन्त्रे।**
**त्वमादिरन्तो जगतोऽस्य मध्यं घटस्य मृत्स्नेव परः परस्मात्॥ १०॥**

पदार्थ–
**इदं** = यो जगत्
**अग्रे** = उत्पत्ति हुनुभन्दा पहिले
**आत्मतन्त्रे** = परम स्वतन्त्र
**त्वयि** = हजुरमा नै
**आसीत्** = थियो
**मध्ये** = बीचमा पनि
**त्वयि** = हजुरमा नै
**आसीत्** = अडिएको छ
**अन्ते** = नाशपछि पनि
**त्वयि** = हजुरमा नै
**आसीत्** = रहनेछ
**परस्मात्** = कारणभन्दा पनि
**परः** = पर रहने
**त्वं** = हजुर नै
**घटस्य** = घटको लागि
**मृत्स्ना इव** = माटो झैँ
**अस्य** = यो
**जगतः** = जगत्को लागि
**आदिः** = सुरुवात
**मध्यं** = बीचमा रहने ठाउँ र
**अन्तः** = नासिने ठाउँसमेत हुनुहुन्छ

**वाक्यार्थ–** यो जगत् उत्पन्न हुनुभन्दा पहिले अव्यक्तरूपमा हजुरमा नै थियो, बीचमा पनि हजुरमा नै अडिएको छ र अन्त्यमा पनि हजुरमैं गई लीन हुन्छ। हजुर कार्यकारणभन्दा पर र परम स्वतन्त्र हुनुहुन्छ। जसरी घैंटोका लागि माटो नै आदि, मध्य र अन्त्य हुन्छ त्यसै गरी यो जगत्को सुरुवात, रहने ठाउँ र नासिने ठाउँ सबै हजुर नै हुनुहुन्छ।

**त्वं माययात्माश्रयया स्वयेदं निर्माय विश्वं तदनुप्रविष्टः।**
**पश्यन्ति युक्ता मनसा मनीषिणो गुणव्यवायेऽप्यगुणं विपश्चितः॥ ११॥**

पदार्थ–
**त्वं** = हजुर
**आत्माश्रयया** = आफूमा आश्रित
**स्वया** = आफ्नै
**मायया** = मायाद्वारा
**इदं** = यो
**विश्वं** = विश्वलाई
**निर्माय** = बनाएर
**तत्** = त्यहाँ
**अनुप्रविष्टः** = प्रविष्ट हुनुभएको छ
**मनसा** = विचार शक्तिले
**युक्ताः** = सम्पन्न
**विपश्चितः** = शास्त्रज्ञ
**मनीषिणः** = विवेकीहरूले
**गुणव्यवाये अपि** = गुणहरूको परिणामको बीचमा पनि
**अगुणं** = गुणरहित हजुरलाई
**पश्यन्ति** = देख्दछन्

**वाक्यार्थ–** हजुर आफूमा आश्रित आफ्नै मायाद्वारा यो विश्वलाई बनाएर त्यसभित्र अन्तर्यामीरूपले पस्नुभएको छ। सूक्ष्म वस्तुलाई विचार गर्न सक्ने शास्त्रज्ञ विवेकी व्यक्तिहरूले गुणहरूको परिणामको बीचमा पनि गुणरहित साक्षीको रूपमा हजुरलाई देख्दछन्।

**यथाग्निमेधस्यमृतं च गोषु भुव्यन्नमम्बूद्यमने च वृत्तिम्।**
**योगैर्मनुष्या अधियन्ति हि त्वां गुणेषु बुद्ध्या कवयो वदन्ति॥ १२॥**

**पदार्थ–**
**यथा** = जसरी
**एधसि** = दाउरामा
**अग्निं** = आगो
**गोषु च** = गाईहरूमा
**अमृतं** = घिउ
**भुवि** = पृथिवीमा
**अन्नं** = धान, जौ आदि अन्न र
**अम्बु च** = पानी अनि
**उद्यमने** = परिश्रममा
**वृत्तिम्** = जीविका प्रकट हुन्छ
**हि** = निश्चय नै (त्यसै गरी)
**कवयः** = विवेकी
**मनुष्याः** = व्यक्तिहरूले
**बुद्ध्या** = आफ्नो बुद्धिद्वारा
**योगैः** = योगहरूद्वारा
**त्वां** = हजुरलाई
**गुणेषु** = गुणहरूमा
**अधियन्ति** = प्राप्त गर्दछन् र
**वदन्ति** = त्यही अनुसार वर्णन गर्दछन्

**वाक्यार्थ–** जसरी दाउराबाट आगो, गाईहरूबाट घिउ, पृथिवीबाट अन्न, जल अनि परिश्रमद्वारा आजीविकाको प्राप्ति हुन्छ त्यसै गरी विवेकी व्यक्तिहरू पनि आफ्नो बुद्धिद्वारा अनेक किसिमका योगहरूद्वारा हजुरको स्वरूपलाई प्राप्त गर्दछन् र त्यस कुराको वर्णन पनि गर्दछन्।

**तं त्वां वयं नाथ समुज्जिहानं सरोजनाभातिचिरेप्सितार्थम्।**
**दृष्ट्वा गता निर्वृतमद्य सर्वे गजा दवार्ता इव गाङ्गमम्भः॥ १३॥**

**पदार्थ–**
**सरोजनाभ** = हे कमलनाभ
**नाथ** = हे प्रभु
**अतिचिरेप्सितार्थम्** = चिरप्रतीक्षित हुनुभएका
**तं** = यस्ता
**त्वां** = हजुरलाई
**समुज्जिहानं** = साक्षात् आविर्भूत हुनुभएको
**दृष्ट्वा** = देखेर
**अद्य** = आज
**वयं** = हामी
**सर्वे** = सबै
**दवार्ताः** = डढेलोबाट आत्तिएका
**गजाः** = हात्तीहरूले
**गाङ्गं** = गङ्गाजीको
**अम्भः** = जलद्वारा
**इव** = झैँ
**निर्वृतं** = परम शान्ति
**गताः** = पाएका छौँ

**वाक्यार्थ–** हे कमलनाभ प्रभु ! धैरै अघिदेखि प्रतीक्षा गरिएका हजुर आज हाम्रो अघि साक्षात् आविर्भूत हुनुभएको देखेर जसरी डढेलोले पोलेको हात्ती गङ्गाजीको जलमा चुर्लुम्म डुबी शान्ति पाउँछ, त्यसै गरी हामी पनि हजुरको दर्शन गरेर परम शान्ति पाइरहेका छौँ।

**स त्वं विधत्स्वाखिललोकपाला वयं यदर्थास्तव पादमूलम्।**
**समागतास्ते बहिरन्तरात्मन् किं वान्यविज्ञाप्यमशेषसाक्षिणः॥ १४॥**

**पदार्थ–**
**सः** = यस्ता
**त्वं** = हजुरले
**वयं** = हामी
**अखिललोकपालाः** = सम्पूर्ण लोकपालहरू
**यदर्थाः** = जुन उद्देश्य लिएर
**तव** = हजुरको
**पादमूलम्** = चरणमा
**समागताः** = आएका छौँ
**विधत्स्व** = त्यो काम गर्नुहोस्
**अन्तरात्मन्** = हे अन्तर्यामी
**अशेषसाक्षिणः** = सबैका साक्षी
**ते** = हजुरभन्दा
**बहिः** = बाहिरको
**अन्यविज्ञाप्यं** = अरू कसैले जनाइदिनुपर्ने
**किं वा** = कुन पदार्थ छ र

**वाक्यार्थ–** हामी सम्पूर्ण लोकपालहरू जुन उद्देश्यले हजुरको चरणमा आएका छौँ, त्यो काम हजुरबाट सम्पन्न हुनेछ। हे अन्तर्यामी परमात्मा ! हजुर त सबैका साक्षी हुनुहुन्छ। हजुरभन्दा बाहिरको कुन चाहिँ पदार्थ संसारमा छ र त्यसलाई अरूले जनाइदिनुपरोस् ?

**अहं गिरित्रश्च सुरादयो ये दक्षादयोऽग्नेरिव केतवस्ते ।**
**किं वा विदामेश पृथग्विभाता विधत्स्व शं नो द्विजदेवमन्त्रम् ॥ १५ ॥**

**पदार्थ–**
**ईश** = हे सर्वेश्वर
**अहं** = म
**गिरित्रः** = भगवान् शङ्कर
**सुरादयः** = देवताहरू र
**ये** = जो
**दक्षादयः च** = दक्ष आदि प्रजापतिहरू समेत
**अग्नेः** = आगोका
**केतवः इव** = फिलिङ्गाहरू झैँ
**ते** = हजुरभन्दा
**पृथक्** = भिन्नै
**विभाताः** = देखिएका छौँ
**नः** = आफ्नो
**शं** = कल्याणको कुरो
**किं वा** = के नै
**विदाम** = जान्दछौँ र
**द्विजदेवमन्त्रम्** = ब्राह्मण र देवताहरूको कल्याणको उपाय
**विधत्स्व** = (हजुरले नै) गर्नुहोस्

**वाक्यार्थ–** हे सर्वेश्वर ! म, भगवान् शङ्कर, देवता, ऋषि र दक्ष आदि हामी सबै आगोबाट निस्केका फिलिङ्गासमान हौँ, तर हामी आफूलाई हजुरभन्दा भिन्न ठान्दछौँ। हामी आफ्नो कल्याणको विषयमा के नै जान्दछौँ र ? त्यसैले देवता र ब्राह्मणहरूको कल्याणको उपाय हजुरले नै गर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं विरिञ्चादिभिरीडितस्तद् विज्ञाय तेषां हृदयं यथैव ।**
**जगाद जीमूतगभीरया गिरा बद्धाञ्जलीन् संवृतसर्वकारकान् ॥ १६ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**विरिञ्चादिभिः** = ब्रह्मा आदिद्वारा
**ईडितः** = स्तुति गरिनुभएका भगवान्ले
**तेषां** = उनीहरूको
**तत्** = त्यो
**हृदयं** = अभिलाषालाई
**यथा एव** = जस्ताको तस्तै
**विज्ञाय** = जानेर
**संवृतसर्वकारकान्** = सम्पूर्ण इन्द्रियका वृत्तिहरू रोकी
**बद्धाञ्जलीन्** = हात जोडी उभिएका उनीहरूलाई
**जीमूतगभीरया** = बादलको जस्तो गम्भीर
**गिरा** = वाणीले
**जगाद** = भन्नुभयो

**वाक्यार्थ–** यसप्रकार ब्रह्मा आदि देवताहरूद्वारा स्तुति गरिनुभएका भगवान्ले उनीहरूको अभिलाषालाई जस्ताको तस्तै जान्नुभयो र बादलको जस्तो गम्भीर वाणीले आफ्ना सम्पूर्ण इन्द्रियका वृत्तिहरूलाई रोकी हात जोडेर उभिरहेका उनीहरूलाई भन्नुभयो।

**एक एवेश्वरस्तस्मिन् सुरकार्ये सुरेश्वरः।**

**विहर्तुकामस्तानाह समुद्रोन्मथनादिभिः॥ १७॥**

**पदार्थ—**
**सुरेश्वरः** = सम्पूर्ण देवताहरूका अधिपति भगवान्
**तस्मिन्** = त्यो
**सुरकार्ये** = देवताहरूको कार्यमा
**एकः एव** = एक्लै नै
**ईश्वरः** = समर्थ भएर पनि
**समुद्रोन्मथनादिभिः** = समुद्र-मन्थन आदि लीलाले
**विहर्तुकामः** = खेल्न इच्छा गरी
**तान्** = ती देवताहरूलाई
**आह** = भन्नुभयो

**वाक्यार्थ—** सम्पूर्ण देवताहरूका पनि अधीश्वर भगवान् यद्यपि देवताहरूको त्यो कार्य एक्लै पूरा गर्न समर्थ हुनुहुन्थ्यो, तर पनि समुद्रमन्थन आदि लीलाहरू गरी खेल्ने इच्छाले उहाँले ती देवताहरूलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**हन्त ब्रह्मन्नहो शम्भो हे देवा मम भाषितम्।**

**शृणुतावहिताः सर्वे श्रेयो वः स्याद् यथा सुराः॥ १८॥**

**पदार्थ—**
**हन्त** = अहो
**ब्रह्मन्** = हे ब्रह्मा
**अहो शम्भो** = हे शिवजी
**हे देवाः** = हे देवताहरू
**अवहिताः** = सावधान भई
**सर्वे** = सबै
**सुराः** = देवताहरूले
**मम** = मेरो
**भाषितम्** = भनाइ
**शृणुत** = सुन
**यथा** = जुन उपायले
**वः** = तिमीहरूको
**श्रेयः** = कल्याण
**स्यात्** = हुनेछ

**वाक्यार्थ—** अहो ! हे ब्रह्मा ! हे शिवजी ! हे देवताहरू हो ! सबैले मेरो भनाइलाई ध्यानपूर्वक सुन। जुन उपाय गर्नाले तिमीहरूको कल्याण अवश्य हुनेछ।

**यात दानवदैतेयैस्तावत् सन्धिर्विधीयताम्।**

**कालेनानुगृहीतैस्तैर्यावद् वो भव आत्मनः॥ १९॥**

**पदार्थ—**
**यात** = जाओ
**यावत्** = जबसम्म
**वः** = तिमीहरूको
**आत्मनः** = आफ्नो
**भवः** = उन्नतिको वेला आउँदैन
**तावत्** = तबसम्म
**कालेन** = समयको प्रभावले
**अनुगृहीतैः** = बलशाली भएका
**तैः दानवदैतेयैः** = ती दानव र दैत्यहरूसँग
**सन्धिः** = मिलाप
**विधीयताम्** = गर

**वाक्यार्थ—** जबसम्म तिमीहरूको उन्नतिको वेला आउँदैन तबसम्मको लागि कालक्रमको प्रभावले बलशाली भएका ती दानव र दैत्यहरूसँग मेलमिलाप गर।

**अरयोऽपि हि सन्धेयाः सति कार्यार्थगौरवे ।**

**अहिमूषिकवद् देवा ह्यर्थस्य पदवीं गतैः ॥ २० ॥**

**पदार्थ–**
**देवाः** = हे देवताहरू
**हि** = निश्चय नै
**कार्यार्थगौरवे सति** = ठुलो काम गर्नुपर्दा
**अरयः अपि** = शत्रुहरूसँग पनि
**सन्धेयाः** = सन्धि गर्नुपर्दछ
**अर्थस्य** = उद्देश्यको
**पदवीं गतैः** = सिद्धि भइसकेपछि चाहिँ
**अहिमूषिकवत्** = सर्प र मुसा जस्तो हुन पनि सकिन्छ

**वाक्यार्थ–** हे देवताहरू ! ठुलो काम सम्पन्न गर्नुपर्दा शत्रुहरूसँग पनि मेलमिलाप गर्नुपर्दछ। आफ्नो उद्देश्य पूरा भइसकेपछि भने सर्प र मुसा जस्तो हुन पनि सकिन्छ।

**टिप्पणी–** प्राकृतिक शत्रुताको दृष्टान्तको रूपमा यहाँ सर्प र मुसाको उदाहरण दिइएको हो। सर्पले मुसा खान्छ त्यसैले मुसा सर्पदेखि भाग्छ।

**अमृतोत्पादने यत्नः क्रियतामविलम्बितम् ।**

**यस्य पीतस्य वै जन्तुर्मृत्युग्रस्तोऽमरो भवेत् ॥ २१ ॥**

**पदार्थ–**
**अविलम्बितम्** = चाँडो भन्दा चाँडो
**अमृतोत्पादने** = अमृत निकाल्न
**यत्नः** = प्रयास
**क्रियताम्** = गरिहाल
**यस्य** = जसको
**पीतस्य** = पान गरेपछि
**मृत्युग्रस्तः** = मर्न लागेको
**जन्तुः** = प्राणी पनि
**वै** = निश्चय नै
**अमरः** = अमर
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** आपसमा मेलमिलाप गरिसकेपछि चाँडोभन्दा चाँडो अमृत निकाल्न प्रयास गरिहाल। त्यो अमृत पिएपछि मर्न लागेको प्राणी पनि अमर हुन्छ।

**क्षिप्त्वा क्षीरोदधौ सर्वा वीरुत्तृणलतौषधीः ।**

**मन्थानं मन्दरं कृत्वा नेत्रं कृत्वा तु वासुकिम् ॥ २२ ॥**

**सहायेन मया देवा निर्मन्थध्वमतन्द्रिताः ।**

**क्लेशभाजो भविष्यन्ति दैत्या यूयं फलग्रहाः ॥ २३ ॥**

**पदार्थ–**
**देवाः** = हे देवताहरू
**क्षीरोदधौ** = क्षीरसागरमा
**सर्वाः** = सम्पूर्ण
**वीरुत्तृणलतौषधीः** = घाँस, लहरा र औषधिहरू
**क्षिप्त्वा** = हालेर
**मन्दरं** = मन्दराचललाई
**मन्थानं** = मदानी
**कृत्वा** = बनाई
**वासुकिम् तु** = वासुकि नागलाई चाहिँ
**नेत्रं** = नेती
**कृत्वा** = बनाएर
**मया** = मेरो

| | | |
|---|---|---|
| **सहायेन** = सहायताद्वारा | **क्लेशभाजः** = दुःखको मात्र भागिदार | **फलग्रहाः** = फल प्राप्त गर्नेवाला हुनेछौ |
| **अतन्द्रिताः** = अल्छी नगरी | **भविष्यन्ति** = हुनेछन् | |
| **निर्मन्थध्वं** = मन्थन गर | **यूयं** = तिमीहरू | |
| **दैत्याः** = दैत्यहरू | | |

**वाक्यार्थ—** हे देवताहरू ! क्षीर सागरमा सबैथरी घाँस, लहरा र औषधिहरू हाल। त्यसपछि मन्दराचललाई मदानी बनाऊ र वासुकि नागलाई नेती बनाएर मेरो सहायताले अल्छी नगरी समुद्रको मन्थन गर। यसमा दैत्यहरूले केवल कष्ट मात्र पाउनेछन् भने तिमीहरूले चाहिँ फल पाउनेछौ।

**यूयं तदनुमोदध्वं यदिच्छन्त्यसुराः सुराः।**
**न संरम्भेण सिध्यन्ति सर्वेऽर्थाः सान्त्वया यथा॥ २४॥**

| पदार्थ— | | |
|---|---|---|
| **सुराः** = हे देवताहरू | **तत्** = त्यो कुरालाई | **सर्वे** = सम्पूर्ण |
| **असुराः** = दानवहरूले | **यूयं** = तिमीहरूले | **अर्थाः** = प्रयोजनहरू |
| **यत्** = जे | **अनुमोदध्वं** = अनुमोदन गर | **सिध्यन्ति** = पूरा हुन्छन् |
| **इच्छन्ति** = चाहन्छन् | **यथा** = जसरी | **संरम्भेण** = रिसाएर |
| | **सान्त्वया** = शान्तिद्वारा | **न** = हुँदैनन् |

**वाक्यार्थ—** हे देवताहरू ! असुरहरूले जे-जे चाहन्छन् ती सबै कुराहरूलाई तिमीहरूले स्वीकार गर, किनभने शान्तिबाट जति सजिलै आफ्नो प्रयोजन पूरा हुन्छ, रिसाएर त्यसरी सजिलै पूरा हुँदैन।

**न भेतव्यं कालकूटाद् विषाज्जलधिसम्भवात्।**
**लोभः कार्यो न वो जातु रोषः कामस्तु वस्तुषु॥ २५॥**

| पदार्थ— | | |
|---|---|---|
| **जलधिसम्भवात्** = समुद्रबाट उत्पन्न हुने | **वः** = तिमीहरूले | र |
| **कालकूटात्** = कालकूट | **वस्तुषु** = (मन्थनबाट प्राप्त) वस्तुहरूमा | **रोषः तु** = पाइएन भने रिसाउने काम त |
| **विषात्** = विषबाट | **लोभः** = लोभ | **जातु** = गर्नै हुँदैन |
| **न भेतव्यं** = डराउनु हुँदैन | **न कार्यः** = गर्नुहुँदैन | |
| | **कामः** = ती वस्तुहरूको चाहना | |

**वाक्यार्थ—** समुद्रमन्थन गर्दा उत्पन्न हुने कालकूट विषबाट तिमीहरू डराउनुहुँदैन। मन्थनबाट प्राप्त हुने वस्तुहरूमा तिमीहरूले लोभ गर्नु हुँदैन। अरु ती वस्तुहरूको चाहना गर्ने र प्राप्त नहुँदा रिसाउने काम त झन् गर्नै हुँदैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति देवान् समादिश्य भगवान् पुरुषोत्तमः।**

**तेषामन्तर्दधे राजन् स्वच्छन्दगतिरीश्वरः॥ २६॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**इति** = यसप्रकार
**देवान्** = देवताहरूलाई
**समादिश्य** = आदेश दिएर
**स्वच्छन्दगतिः** = स्वतन्त्र गति भएका
**ईश्वरः** = सर्वसमर्थ
**पुरुषोत्तमः** = पुरुषोत्तम
**भगवान्** = प्रभु
**तेषां** = उनीहरूकै सामु
**अन्तर्दधे** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! देवताहरूलाई यसप्रकार आदेश दिएर स्वतन्त्र गति भएका सर्वसमर्थ पुरुषोत्तम भगवान् श्रीहरि उनीहरूकै सामु अन्तर्धान हुनुभयो।

**अथ तस्मै भगवते नमस्कृत्य पितामहः।**

**भवश्च जग्मतुः स्वं स्वं धामोपेयुर्बलिं सुराः॥ २७॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**पितामहः** = ब्रह्माजी र
**भवः च** = भगवान् शङ्कर पनि
**तस्मै** = त्यस्ता
**भगवते** = भगवान्लाई
**नमस्कृत्य** = प्रणाम गरेर
**स्वं स्वं** = आ–आफ्नो
**धाम** = धाममा
**जग्मतुः** = जानुभयो
**सुराः** = देवताहरू चाहिँ
**बलिं** = बलिकहाँ
**उपेयुः** = गए

**वाक्यार्थ–** त्यसपछि ब्रह्माजी र भगवान् शङ्करले पुरुषोत्तम प्रभुलाई प्रणाम गरेर आ–आफ्नो धाममा जानुभयो। देवताहरू चाहिँ बलिको नजिक गए।

**दृष्ट्वारीनप्यसंयत्तान् जातक्षोभान् स्वनायकान्।**

**न्यषेधद् दैत्यराट् श्लोक्यः सन्धिविग्रहकालवित्॥ २८॥**

**पदार्थ–**
**सन्धिविग्रहकालवित्** = सन्धि र युद्धको अवसरलाई जान्ने
**श्लोक्यः** = पवित्रकीर्ति भएका
**दैत्यराट्** = दैत्यका राजा बलिले
**असंयत्तान्** = युद्धका लागि तयार नभएका
**अरीन्** = शत्रु देवताहरूलाई
**दृष्ट्वा अपि** = देखेर पनि
**जातक्षोभान्** = युद्धका लागि उत्साहित भएका
**स्वनायकान्** = आफ्ना सेनापतिहरूलाई
**न्यषेधत्** = रोके

**वाक्यार्थ–** पवित्र कीर्तिसम्पन्न एवं सन्धि र युद्धका अवसरलाई जान्ने दैत्यराज बलिले यसप्रकार देवताहरूलाई युद्धका लागि तयार नभई आफ्नो अघि आएको देखेर युद्धका लागि उत्साहित भएका आफ्ना सेनापतिहरूलाई रोके।

**ते वैरोचनिमासीनं गुप्तं चासुरयूथपैः।**

**श्रिया परमया जुष्टं जिताशेषमुपागमन्॥ २९॥**

**पदार्थ–**
**ते** = तिनीहरू
**असुरयूथपैः** = असुर सेनानायकहरूद्वारा
**गुप्तं** = सुरक्षित भएका
**परमया** = सर्वोत्कृष्ट
**श्रिया च** = वैभवद्वारा
**जुष्टं** = सेवित भएर
**आसीनं** = राजसिंहासनमा बस्ने
**जिताशेषं** = सर्वलोकविजेता
**वैरोचनिं** = विरोचनपुत्र बलिको
**उपागमन्** = नजिक गए

**वाक्यार्थ–** ती देवताहरू असुरका सेनानायकहरूद्वारा सुरक्षित भई सर्वोत्कृष्ट वैभवद्वारा सेवित भएर राजसिंहासनमा बसिरहेका सर्वलोकविजेता बलिको नजिक गए।

**महेन्द्रः श्लक्ष्णया वाचा सान्त्वयित्वा महामतिः।**

**अभ्यभाषत तत्सर्वं शिक्षितं पुरुषोत्तमात्॥ ३०॥**

**पदार्थ–**
**महामतिः** = महाबुद्धिशाली
**महेन्द्रः** = देवराज इन्द्रले
**श्लक्ष्णया** = मिठो
**वाचा** = वाणीले
**सान्त्वयित्वा** = बलिलाई सम्झाउँदै
**पुरुषोत्तमात्** = भगवान् विष्णुबाट
**शिक्षितं** = सिकेको
**तत्सर्वं** = त्यो सबै कुरा
**अभ्यभाषत** = सुनाए

**वाक्यार्थ–** महाबुद्धिशाली देवराज इन्द्रले मिठो वचनले राजा बलिलाई सम्झाए र भगवान् विष्णुले सिकाउनुभएका सबै कुरा सुनाए।

**तदरोचत दैत्यस्य तत्रान्ये येऽसुराधिपाः।**

**शम्बरोऽरिष्टनेमिश्च ये च त्रिपुरवासिनः॥ ३१॥**

**पदार्थ–**
**दैत्यस्य** = दैत्यराज बलिलाई
**तत्** = त्यो कुरा
**अरोचत** = मन पर्‍यो
**शम्बरः** = शम्बर
**अरिष्टनेमिः** = अरिष्टनेमि
**तत्र** = त्यहाँ रहेका
**अन्ये च** = अरू पनि
**ये** = जो-जो
**असुराधिपाः** = असुरसेनापतिहरू थिए
**ये च** = जति पनि
**त्रिपुरवासिनः** = त्रिपुरवासीहरू थिए (ती सबैलाई यो कुरा मन पर्‍यो)

**वाक्यार्थ–** दैत्यराज बलिलाई यो कुरा मन पर्‍यो। त्यहाँ रहने शम्बर, अरिष्टनेमि आदि अरू सेनापतिहरू र सम्पूर्ण त्रिपुरवासी दैत्यहरूलाई पनि यो कुरा मन पर्‍यो।

**ततो देवासुराः कृत्वा संविदं कृतसौहृदाः।**

**उद्यमं परमं चक्रुरमृतार्थे परन्तप॥ ३२॥**

**पदार्थ–**
**परन्तप** = हे परम तपस्वी परीक्षित्

**ततः** = त्यसपछि
**कृतसौहृदाः** = सन्धि गरेका
**देवासुराः** = देवता र असुरहरूले
**संविदं** = मेलमिलाप
**कृत्वा** = गरी
**अमृतार्थे** = अमृतका लागि
**परमं** = पूरा
**उद्यमं** = प्रयत्न
**चक्रुः** = गरे

**वाक्यार्थ–** हे परम तपस्वी परीक्षित्! यसप्रकार देवता र दानवहरूले आपसमा सन्धि गरे र आपसमा मिलीजुली उनीहरू सबैले अमृतप्राप्तिका लागि पूरा प्रयत्न गरे।

**ततस्ते मन्दरगिरिमोजसोत्पाट्य दुर्मदाः।**
**नदन्त उदधिं निन्युः शक्ताः परिघबाहवः॥ ३३॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**परिघबाहवः** = परिघ (फलामे लौरो)समान बलियो हात भएका
**शक्ताः** = अत्यन्त बलवान् र
**दुर्मदाः** = मदमत्त
**ते** = तिनीहरूले
**ओजसा** = बलपूर्वक
**मन्दरगिरिं** = मन्दराचललाई
**उत्पाट्य** = जुरुक्क उचालेर
**नदन्तः** = गर्जना गर्दै
**उदधिं** = समुद्रतिर
**निन्युः** = लगे

**वाक्यार्थ–** परिघ (फलामे लौरो)समान बलियो हात भएका र अत्यन्त बलवान् र बलको मदले मत्त भएका तिनीहरूले बलपूर्वक मन्दराचललाई नै जुरुक्क उचालेर ठुलो स्वरले गर्जना गर्दै क्षीरसमुद्रतिर लगे।

**दूरभारोद्वहश्रान्ताः शक्रवैरोचनादयः।**
**अपारयन्तस्तं वोढुं विवशा विजहुः पथि॥ ३४॥**

**पदार्थ–**
**दूरभारोद्वहश्रान्ताः** = टाढासम्म भारी बोकेर थकित भएका
**शक्रवैरोचनादयः** = इन्द्र र बलि आदिले
**तं** = त्यो पर्वतलाई
**वोढुं** = थाम्न
**अपारयन्तः** = नसकी
**विवशाः** = विवशतापूर्वक
**पथि** = बाटैमा
**विजहुः** = छोडिदिए

**वाक्यार्थ–** इन्द्र र बलि आदि सबै वीरहरू टाढासम्म भारी बोक्नाले थकित भइसकेका थिए। यसैले उनीहरूले त्यस पर्वतको भारलाई थेग्न सकेनन् र विवश भई त्यसलाई बाटैमा छोडिदिए।

**निपतन् स गिरिस्तत्र बहूनमरदानवान्।**
**चूर्णयामास महता भारेण कनकाचलः॥ ३५॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (बाटामा)
**निपतन्** = खस्दाखस्दै
**सः** = त्यो
**कनकाचलः** = सुवर्णमय
**गिरिः** = मन्दराचलले
**महता** = गह्रुङ्गो
**भारेण** = भारद्वारा
**बहून्** = धेरै
**अमरदानवान्** = देवता र दानवहरूलाई
**चूर्णयामास** = चकनाचुर बनायो

**वाक्यार्थ–** असाध्यै गह्रुङ्गो सुवर्णमय त्यस मन्दराचलले बाटोमा खस्दाखेरि अनेक देवता र दानवहरूलाई चकनाचुर बनायो।

**तांस्तथा भग्नमनसो भग्नबाहूरुकन्धरान्।**

**विज्ञाय भगवांस्तत्र बभूव गरुडध्वजः॥ ३६॥**

**पदार्थ–**
**तान्** = ती देवता र दानवहरूलाई
**तथा** = यसप्रकार
**भग्नबाहूरुकन्धरान्** = हात, कम्मर, काँध टुटेका र
**भग्नमनसः** = उत्साहशून्य भएको
**विज्ञाय** = जानेर
**गरुडध्वजः** = गरुड वाहन हुने
**भगवान्** = श्रीहरि
**तत्र** = त्यहाँ
**बभूव** = प्रकट हुनुभयो

**वाक्यार्थ–** ती देवता र दानवहरू हात, कम्मर र काँध भाच्चिनाले उत्साहहीन भई बसिरहेका छन् भन्ने थाहा पाएर भगवान् श्रीहरि गरुडमाथि चढी त्यहाँ प्रकट हुनुभयो।

**गिरिपातविनिष्पिष्टान् विलोक्यामरदानवान्।**

**ईक्षया जीवयामास निर्जरान् निर्व्रणान् यथा॥ ३७॥**

**पदार्थ–**
**अमरदानवान्** = देवता र दानवहरूलाई
**गिरिपातविनिष्पिष्टान्** = पर्वत खस्नाले पिसिएको
**विलोक्य** = देखेर
**निर्जरान्** = देवताहरूलाई
**निर्व्रणान् यथा** = घाउ नै नलागे झैँ गरी
**ईक्षया** = आफ्नो हेराइले नै
**जीवयामास** = बचाउनुभयो

**वाक्यार्थ–** भगवान्ले देवता र दानवहरूमाथि पूरा पहाड खसेर उनीहरू पिसिएको देख्नुभयो। उहाँले आफ्नो अमृतमय हेराइद्वारा देवताहरूलाई घाउ नै नलागे झैँ गरी बचाइदिनुभयो।

**गिरिं चारोप्य गरुडे हस्तेनैकेन लीलया।**

**आरुह्य प्रययावब्धिं सुरासुरगणैर्वृतः॥ ३८॥**

**पदार्थ–**
**एकेन** = एउटै
**हस्तेन** = हातले
**लीलया** = खेलाँची झैँ
**गिरिं च** = पूरा पहाडलाई
**गरुडे** = गरुडमाथि
**आरोप्य** = राखेर
**आरुह्य** = (आफैँ पनि) चढेर
**सुरासुरगणैः** = देवता र दानवगणहरूद्वारा
**वृतः** = घेरिई
**अब्धिं** = समुद्रतिर
**प्रययौ** = जानुभयो

**वाक्यार्थ–** भगवान्ले त्यो पूरा पहाडलाई नै खेलाँचीमैँ एकै हातले उठाई गरुडमाथि राखेर आफू पनि त्यहीँ चढ्नुभयो। अनि देवता र दानवहरू सबैलाई साथ लिई उहाँ समुद्रतिर जानुभयो।

**अवरोप्य गिरिं स्कन्धात् सुपर्णः पततां वरः।**
**ययौ जलान्त उत्सृज्य हरिणा स विसर्जितः॥ ३९॥**

**पदार्थ—**
**सः** = ती
**पततां** = पक्षीहरूमध्ये
**वरः** = सर्वश्रेष्ठ
**सुपर्णः** = गरुडले
**गिरिं** = मन्दराचललाई
**स्कन्धात्** = आफ्नो काँधबाट
**अवरोप्य** = उतारी
**जलान्ते** = समुद्रतटमा
**उत्सृज्य** = छाडी
**हरिणा** = श्रीहरि भगवान्‌द्वारा
**विसर्जितः** = पठाइएपछि
**ययौ** = गए

**वाक्यार्थ—** पक्षीराज गरुडले मन्दराचललाई आफ्नो काँधबाट उतारी समुद्रको तटमा लगी राखिदिए र श्रीहरि भगवान्‌ले पठाउनुभएपछि उनी त्यहाँबाट गए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धेऽमृतमथने मन्दराचलानयनं नाम षष्ठोऽध्यायः॥ ६॥**

# अथ सप्तमोऽध्यायः

## भगवान् शङ्करद्वारा कालकूट विषको पान

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**ते नागराजमामन्त्र्य फलभागेन वासुकिम् ।**
**परिवीय गिरौ तस्मिन् नेत्रमब्धिं मुदान्विताः ॥ १ ॥**
**आरेभिरे सुसंयत्ता अमृतार्थे कुरूद्वह ।**
**हरिः पुरस्ताज्जगृहे पूर्वं देवास्ततोऽभवन् ॥ २ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुश्रेष्ठ परीक्षित्
**ते** = ती देवता र दानवहरूले
**फलभागेन** = प्राप्त हुने फललाई भाग लगाउने वचनले
**नागराजं** = नागराज
**वासुकिम्** = वासुकिलाई
**आमन्त्र्य** = फकाएर
**तस्मिन्** = त्यो
**गिरौ** = पर्वतमा
**नेत्रं** = नेतीको रूपमा
**परिवीय** = बाँधेर
**अमृतार्थे** = अमृतप्राप्तिको लागि
**सुसंयत्ताः** = तत्पर र
**मुदान्विताः** = प्रसन्न भई
**अब्धिं** = समुद्रलाई (मथ्न)
**आरेभिरे** = थाले
**पूर्वं** = पहिल्यै
**हरिः** = भगवान् श्रीहरिले
**पुरस्तात्** = मुखपट्टि
**जगृहे** = समात्नुभयो
**देवाः** = देवताहरू पनि
**ततः** = त्यतैपट्टि (मुखतिर) नै
**अभवन्** = गए

**वाक्यार्थ–** हे परीक्षित् ! देवता र दानवहरूले समुद्रमन्थनबाट आउने अमृत तिमीलाई पनि भाग लगाउँला भनी नागराज वासुकिलाई पनि फकाएर मन्दराचलको बीचमा बेरेर नेती झैं बनाए र अत्यन्त तत्पर र प्रसन्नचित्त भई अमृतप्राप्तिका लागि समुद्रमन्थन गर्न थाले। यस क्रममा पहिला भगवान् श्रीहरिले वासुकिको मुखपट्टि समात्नुभयो, त्यसैले देवताहरूले पनि मुखतिर नै समात्न गए।

**तन्नैच्छन् दैत्यपतयो महापुरुषचेष्टितम् ।**
**न गृह्णीमो वयं पुच्छमहेरङ्गममङ्गलम् ॥ ३ ॥**
**स्वाध्यायश्रुतसम्पन्नाः प्रख्याता जन्मकर्मभिः ।**
**इति तूष्णीं स्थितान् दैत्यान् विलोक्य पुरुषोत्तमः ।**
**स्मयमानो विसृज्याग्रं पुच्छं जग्राह सामरः ॥ ४ ॥**

**पदार्थ–**
**तत्** = त्यो
**महापुरुषचेष्टितम्** = भगवान्को

चेष्टालाई
**दैत्यपतयः** = दैत्यसेनापतिहरूले
**न ऐच्छन्** = मन पराएनन्
**स्वाध्यायश्रुतसम्पन्नाः** = वेदशास्त्रको अध्ययन गरेका
**जन्मकर्मभिः** = उत्तम कुलमा जन्म र वीरतापूर्ण कर्महरूद्वारा
**प्रख्याताः** = प्रसिद्ध भएका
**वयं** = हामी
**अहेः** = सर्पको
**अमङ्गलम्** = अमङ्गलरूप
**अङ्गं** = अवयव
**पुच्छं** = पुच्छरलाई
**न गृह्णीमः** = समात्दैनौँ
**इति** = यसो भनी
**तूष्णीं** = चुपचाप
**स्थितान्** = बसेका
**दैत्यान्** = दैत्यहरूलाई
**विलोक्य** = देखेर
**स्मयमानः** = मन्दमन्द हाँस्दै
**पुरुषोत्तमः** = भगवान् श्रीहरिले
**अग्रं** = मुखतिरको भाग
**विसृज्य** = छोडी
**सामरः** = देवताहरूको साथमा
**पुच्छं** = पुच्छर
**जग्राह** = समात्नुभयो

**वाक्यार्थ—** भगवान्‌को यो व्यवहार दैत्यसेनापतिहरूलाई मन परेन। उनीहरूले भने— 'हामीले वेद आदि शास्त्रहरूको विधिपूर्वक अध्ययन गरेका छौँ, हाम्रो जन्म उत्तम कुलमा भएको छ र वीरतापूर्ण कर्महरूका कारणले पनि हाम्रो जगत्भर प्रसिद्धि छ। त्यसैले हामी सर्पको पुच्छरजस्तो अमङ्गल अङ्गलाई समात्दैनौँ।' यति भनी दैत्यहरू चुपचाप बसे। त्यो देखी भगवान्‌ले मन्द-मन्द हाँस्दै वासुकिको मुखतिरको भाग छोडिदिनुभयो र देवताहरूको साथमा पुच्छरतिर समात्नुभयो।

**कृतस्थानविभागास्त एवं कश्यपनन्दनाः।**
**ममन्थुः परमायत्ता अमृतार्थं पयोनिधिम्॥ ५॥**

**पदार्थ—**
**एवं** = यसप्रकार
**कृतस्थानविभागाः** = आ-आफ्नो स्थान निश्चित गराएका
**ते** = ती
**कश्यपनन्दनाः** = कश्यपका सन्तान देवता र दानवहरूले
**अमृतार्थं** = अमृत पाउनका लागि
**परमायत्ताः** = अत्यन्त तत्परतापूर्वक
**पयोनिधिम्** = समुद्रलाई
**ममन्थुः** = मन्थन गरे

**वाक्यार्थ—** यसप्रकार आ-आफ्नो स्थान निश्चित भएपछि ती कश्यपका सन्तान देवता र दानवहरूले अमृत पाउने आशाले अत्यन्त तत्परतापूर्वक समुद्रमन्थन गर्न थाले।

**मथ्यमानेऽर्णवे सोऽद्रिरनाधारो ह्यपोऽविशत्।**
**ध्रियमाणोऽपि बलिभिर्गौरवात् पाण्डुनन्दन॥ ६॥**

**पदार्थ—**
**पाण्डुनन्दन** = हे पाण्डुनन्दन परीक्षित्
**अर्णवे** = समुद्र
**मथ्यमाने** = मन्थन हुन थालेपछि
**बलिभिः** = बलिया देवता र दानवहरूले
**ध्रियमाणः अपि** = थाम्दाथाम्दै पनि
**हि** = निश्चय नै
**सः** = त्यो
**अनाधारः** = तलपट्टि कुनै आधार नभएको
**अद्रिः** = मन्दराचल
**गौरवात्** = गह्रुङ्गो भएकाले
**अपः** = पानीभित्र
**अविशत्** = डुब्यो

**वाक्यार्थ–** हे परीक्षित् ! यसप्रकार समुद्रमन्थन हुन थालेपछि त्यहाँ बलिया-बलिया दैत्य र दानवहरूले मन्दराचललाई थाम्दै थिए, तर असाध्यै गह्रुङ्गो भएको र त्यसलाई अड्याउने आधार पनि नभएकाले त्यो पर्वत समुद्रभित्र डुब्यो।

**ते सुनिर्विण्णमनसः परिम्लानमुखश्रियः।**
**आसन् स्वपौरुषे नष्टे दैवेनातिबलीयसा ॥ ७॥**

**पदार्थ–**
**अतिबलीयसा** = असाध्यै बलियो
**दैवेन** = भाग्यद्वारा
**स्वपौरुषे** = आफ्नो परिश्रम
**नष्टे** = नष्ट गरिएपछि
**ते** = तिनीहरू
**परिम्लानमुखश्रियः** = निन्याउरो अनुहार भएका
**सुनिर्विण्णमनसः** = असाध्यै दुःखी मनवाला
**आसन्** = भए

**वाक्यार्थ–** दुर्भाग्यवश आफ्नो परिश्रम नष्ट भएपछि ती देवता र दैत्यहरूको अनुहार निन्याउरो भयो र मन पनि असाध्यै खिन्न भयो।

**विलोक्य विघ्नेशविधिं तदेश्वरो दुरन्तवीर्योऽवितथाभिसन्धिः।**
**कृत्वा वपुः काच्छपमद्भुतं महत् प्रविश्य तोयं गिरिमुज्जहार ॥ ८॥**

**पदार्थ–**
**तदा** = त्यसै समयमा
**दुरन्तवीर्यः** = प्रबल पराक्रमी
**अवितथाभिसन्धिः** = सत्यसङ्कल्प भएका
**ईश्वरः** = भगवान्‌ले
**विघ्नेशविधिं** = विघ्नेश्वरको यो विघ्नलाई
**विलोक्य** = देखेर
**अद्भुतं** = विचित्र
**महत्** = असाध्यै ठुलो
**काच्छपं वपुः** = कछुवाको शरीर
**कृत्वा** = धारण गरी
**तोयं** = पानीमा
**प्रविश्य** = प्रवेश गरी
**गिरिं** = पर्वतलाई
**उज्जहार** = उचाल्नुभयो

**वाक्यार्थ–** प्रबल पराक्रमी र सत्यसङ्कल्प भएका भगवान्‌ले यो विघ्न विघ्नेश्वरको काम हो भन्ने जान्नुभयो। त्यसैले असाध्यै विशाल, आश्चर्यपूर्ण कछुवाको शरीर धारण गरी पानी भित्र प्रवेश गर्नुभयो र त्यस मन्दराचललाई जुरुक्क उचाल्नुभयो।

**तमुत्थितं वीक्ष्य कुलाचलं पुनः समुत्थिता निर्मथितुं सुरासुराः।**
**दधार पृष्ठेन स लक्षयोजनप्रस्तारिणा द्वीप इवापरो महान् ॥ ९॥**

**पदार्थ–**
**कुलाचलं** = मन्दराचललाई
**पुनः** = फेरि
**उत्थितं** = उठेको
**वीक्ष्य** = देखी
**सुरासुराः** = देवता र दानवहरू
**निर्मथितुं** = समुद्रमन्थनका लागि
**समुत्थिताः** = उठे
**महान्** = महान्
**सः** = उनै भगवान्‌ले
**लक्षयोजनप्रस्तारिणा** = एक लाख योजन फैलिएको
**पृष्ठेन** = पिठ्यूँद्वारा
**अपरः** = अर्को
**द्वीपः इव** = द्वीप झैँ भई

**तं** = त्यो पर्वतलाई
**दधार** = धारण गर्नुभएको थियो

**वाक्यार्थ–** मन्दराचललाई पानीभित्रबाट उठेको देखी देवता र दानवहरू फेरि पनि समुद्रमन्थन गर्न उठे। त्यस समयमा मानौं अर्को द्वीप झैं एक लाख योजन फैलिएको आफ्नो पिठ्यूँद्वारा भगवान्ले मन्दराचललाई धारण गर्नुभएको थियो।

**सुरासुरेन्द्रैर्भुजवीर्यवेपितं परिभ्रमन्तं गिरिमङ्ग पृष्ठतः।**
**बिभ्रत् तदावर्तनमादिकच्छपो मेनेऽङ्गकण्डूयनमप्रमेयः॥ १०॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय राजा
**सुरासुरेन्द्रैः** = देवता र दानवहरूका नाइके
**भुजवीर्यवेपितं** = सकेसम्मको बाहुबलले घुमाइएर
**पृष्ठतः** = आफ्नो पिठ्यूँमा
**परिभ्रमन्तं** = घुमिरहेको
**गिरिं** = मन्दराचललाई
**बिभ्रत्** = धारण गर्दै
**अप्रमेयः** = अनन्त शक्तिसम्पन्न
**आदिकच्छपः** = आदिकच्छप अवतार भगवान्ले
**तदावर्तनं** = त्यो घुमाइलाई
**अङ्गकण्डूयनं** = आङ कन्याएको जस्तो
**मेने** = मान्नुभयो

**वाक्यार्थ–** हे प्रिय राजा परीक्षित्! देवता र दानवका नाइकेहरूद्वारा सकेसम्मको बाहुबल प्रयोग गरी घुमाइएको मन्दराचललाई धारण गरेका अनन्त शक्तिसम्पन्न आदिकच्छप अवतार भगवान्ले त्यो पूरा पहाड आफ्नो पिठ्यूँमाथि घुम्दा आङ कन्याएको जस्तो मात्र मान्नुभयो।

**तथासुरानाविशदासुरेण रूपेण तेषां बलवीर्यमीरयन्।**
**उद्दीपयन् देवगणांश्च विष्णुर्दैवेन नागेन्द्रमबोधरूपः॥ ११॥**

**पदार्थ–**
**विष्णुः** = भगवान् श्रीहरि
**आसुरेण** = असुरको
**रूपेण** = स्वरूपद्वारा
**तेषां** = ती असुरहरूको
**बलवीर्यं** = शारीरिक बल र इन्द्रियशक्तिलाई
**ईरयन्** = बढाउँदै
**असुरान्** = असुरहरूभित्र
**आविशत्** = पस्नुभयो
**तथा** = त्यसै गरी
**देवगणान्** = देवताहरूलाई
**उद्दीपयन्** = उत्साहित बनाउँदै
**दैवेन** = देवस्वरूपद्वारा पस्नुभयो
**नागेन्द्रं च** = नागराज वासुकिभित्र
**अबोधरूपः** = निद्रारूपले पस्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीहरि असुरहरूको शारीरिक बल र इन्द्रियशक्तिलाई बढाउँदै तिनीहरूभित्र असुररूपले नै पस्नुभयो भने देवताहरूभित्र पनि उनीहरूलाई उत्साहित बनाउँदै देवस्वरूपले नै पस्नुभयो। त्यसै गरी नागराज वासुकिभित्र उहाँ निद्रारूपले प्रवेश गर्नुभयो।

**उपर्यगेन्द्रं गिरिराडिवान्य आक्रम्य हस्तेन सहस्रबाहुः।**
**तस्थौ दिवि ब्रह्मभवेन्द्रमुख्यैरभिष्टुवद्भिः सुमनोऽभिवृष्टः॥ १२॥**

**पदार्थ–**
**उपरि** = पर्वतमाथि
**अन्यः** = अर्को

**गिरिराट् इव** = पर्वतसमान भई
**सहस्रबाहुः** = हजार हात धारण गर्ने परमात्मा
**हस्तेन** = आफ्ना हातले
**अगेन्द्रं** = पर्वतश्रेष्ठ
मन्दराचललाई
**आक्रम्य** = थिचेर
**तस्थौ** = बस्नुभयो
**दिवि** = आकाशमा रही
**अभिष्टुवद्भिः** = स्तुति गर्ने
**ब्रह्मभवेन्द्रमुख्यैः** = ब्रह्माजी, भगवान् शङ्कर र इन्द्र आदि देवताहरूद्वारा
**सुमनः** = फूल
**अभिवृष्टः** = बर्साइयो

**वाक्यार्थ–** भगवान्ले हजार हात भएको अत्यन्त विशाल पर्वतसमानको अर्को रूप धारण गर्नुभयो र आफ्ना हातले मन्दराचललाई थिची त्यहीँमाथि बस्नुभयो। आकाशमा रहेका ब्रह्माजी, भगवान् शङ्कर र इन्द्रसहित सम्पूर्ण देवताहरूले उहाँको स्तुति गरे र उहाँमाथि पुष्पवृष्टि पनि गरे।

**उपर्यधश्चात्मनि गोत्रनेत्रयोः परेण ते प्राविशता समेधिताः।**
**ममन्थुरब्धिं तरसा मदोत्कटा महाद्रिणा क्षोभितनक्रचक्रम्॥ १३॥**

**पदार्थ–**
**आत्मनि** = देवता–दैत्यभित्र
**गोत्रनेत्रयोः** = पहाड र वासुकिनागभित्र
**उपरि अधः च** = मन्दराचलको तल र माथि पनि
**प्राविशता** = (विभिन्न रूपले) प्रवेश गर्ने
**परेण** = परमात्माद्वारा
**समेधिताः** = बलवान् भएका
**मदोत्कटाः** = मदमत्त
**ते** = तिनीहरूले
**महाद्रिणा** = मन्दराचलका कारण
**क्षोभितनक्रचक्रम्** = गोही आदि जलचरहरू कम्पित भएको
**अब्धिं** = महासागरलाई
**तरसा** = वेगपूर्वक
**ममन्थुः** = मन्थन गर्न थाले

**वाक्यार्थ–** देवता र दैत्यभित्र, मन्दराचलमा, वासुकिनागभित्र र मन्दराचलको तल–माथि विभिन्न रूपले भगवान् प्रवेश गर्नुभएको थियो। यसकारण बलवान् भएका ती देवता र दैत्यहरूले महासागरलाई मन्थन गर्न थाले। त्यस समयमा मन्दराचल हल्लिनाले त्यहाँ रहने गोही आदि जलचरहरू कम्पित भएका थिए।

**विवरण–** समुद्रमन्थनमा सहायता गर्न भगवान्ले पहिले नै कच्छप अवतार लिइसक्नुभएको थियो। त्यति मात्र नभई देवता, दानव, मन्दराचल र वासुकिभित्र पनि उहाँ बल, उत्साह आदि रूपले प्रकट हुनुभयो भन्ने कुरा माथिका तीन श्लोकमा बताइएको छ। सर्वव्यापी परमात्मा **आसुरेण रूपेण** अर्थात् असुरहरूकै रूपले तिनीहरूभित्र बस्नुभयो भने, **दैवेन** अर्थात् देवताकै रूपले देवताभित्र पनि बस्नुभयो। देवता र दानवहरूको शक्ति र उत्साहलाई बढाउनकै लागि भगवान्ले यसो गर्नुभएको थियो। वासुकि नागलाई मदानीको बीचमा डोरी बरे झैँ बेरिएको थियो। मुख र पुच्छरतिर समातेर तान्दा र मन्दराचलपर्वतसँग रगडिँदा वासुकिलाई ज्यादै कष्ट हुन्छ भनेर भगवान्ले अखण्ड निद्राको रूपले उनीभित्र प्रवेश गर्नुभयो, जसबाट उनलाई कुनै दुःखको अनुभव हुनै पाएन। भगवान् **गोत्र** अर्थात् पहाडभित्र पनि दृढताको रूपले बस्नुभएको थियो, जसका कारण जति घुमाउँदा पनि पहाड फुट्ने र खस्ने भएन। फेरि भगवान्ले पहाडमाथि अर्को ठुलो रूप लिई त्यसलाई थिच्नुभयो, जसबाट पहाड दायाँ–बायाँ लड्न पाएन। यसप्रकार भगवान्

सबैभित्र उनीहरूले पनि थाहा नपाउने गरी बस्नुभएको थियो। भगवान् सर्वशक्तिमान् हुनुहुन्छ र संसारका सबै थरी व्यवहारहरूका एक मात्र सञ्चालक हुनुहुन्छ, तापनि उहाँ कहीँ पनि देखिने गरी अभिव्यक्त हुनुहुन्न। उहाँ मनका प्रेरक हुनुहुन्छ, सबैलाई कुशलतापूर्वक यसरी निर्देशित गर्नुहुन्छ कि सबैले उहाँकै इच्छाअनुसार यो संसारनाटकमा आफ्नो भागको अभिनय पूर्णताका साथ गर्दछन्। हुन त प्राणीहरूले सोच्छन् कि मैले धेरै महत्त्वपूर्ण कामहरू गरेको छु, तर उनीहरूको मन, बुद्धिलाई अन्तर्यामीले प्रेरित नगरेको भए के तिनीहरूले त्यो काम गर्न सक्दथे र ? यही अदृश्य प्रेरणा र इच्छाशक्तिको भरमा सम्पूर्ण संसार–व्यवस्थालाई सुघटित बनाउने सर्वशक्तिमान् परमात्माले समुद्रमन्थनमा पनि देवता र दानवले थाहै नपाउने गरी उनीहरूभित्र बसेर लीला गर्नुभयो भन्ने कुरा यो प्रसङ्गले बताएको छ।

**अहीन्द्रसाहस्रकठोरदृङ्मुखश्वासाग्निधूमाहतवर्चसोऽसुराः।**
**पौलोमकालेयबलील्वलादयो दावाग्निदग्धाः सरला इवाभवन्॥ १४॥**

**पदार्थ–**
**अहीन्द्रसाहस्रकठोरदृङ्मुख-श्वासाग्निधूमाहतवर्चसः** = नागराजका हजारौँ कठोर आँखा, मुख र सासबाट निस्किएका विषमय आगोका धुवाँका कारण निस्तेज भएका **पौलोमकालेयबलील्वलादयः** = पौलोम, कालेय, बलि र इल्वल आदि **असुराः** = दैत्यहरू **दावाग्निदग्धाः** = डढेलोबाट डढेका **सरलाः इव** = सल्लाका रुख झैँ **अभवन्** = भए

**वाक्यार्थ–** नागराज वासुकिका हजारौँ कठोर आँखा, मुख एवं सासबाट निस्किएका विषमय आगोका धुवाँका कारण निस्तेज भएका पौलोम, कालेय, बलि र इल्वल आदि श्रेष्ठ दैत्यहरू डढेलोबाट डढेका सल्लाका रुखहरू झैँ कान्तिहीन भए।

**देवांश्च तच्छ्वासशिखाहतप्रभान् धूम्राम्बरस्रग्वरकञ्चुकाननान्।**
**समभ्यवर्षन् भगवद्वशा घना ववुः समुद्रोर्म्युपगूढवायवः॥ १५॥**

**पदार्थ–**
**तच्छ्वासशिखाहतप्रभान्** = वासुकिको सासको विषमय आगोद्वारा कान्ति क्षीण भएका **धूम्राम्बरस्रग्वरकञ्चुकाननान्** = वस्त्र, माला, कवच र मुख सबै ध्वाँसे भएका **देवान् च** = देवताहरूलाई चाहिँ **भगवद्वशाः** = भगवान्द्वारा प्रेरित **घनाः** = बादलहरूले **समभ्यवर्षन्** = जलवृष्टि गरे **समुद्रोर्म्युपगूढवायवः** = समुद्रका तरङ्गलाई स्पर्श गर्ने शीतल वायुहरू **ववुः** = बहन थाले

**वाक्यार्थ–** देवताहरू पनि वासुकिनागको सासबाट निस्किरहेको विषमय आगोको लपेटाबाट कान्ति क्षीण भएका भए, उनीहरूका वस्त्र, माला, कवच र मुख पनि मैलाधैला भए। भगवान्‌को प्रेरणाले बादलहरूले देवताहरूतिर जलवृष्टि गरे अनि समुद्रका तरङ्गलाई स्पर्श गर्ने शीतल वायु पनि बहन थाल्यो।

**मथ्यमानात् तथा सिन्धोर्देवासुरवरूथपैः।**

**यदा सुधा न जायेत निर्ममन्थाजितः स्वयम्॥ १६॥**

**पदार्थ—**
**तथा** = त्यसप्रकार
**देवासुरवरूथपैः** = देवता र दानवहरूका सेनापतिहरूद्वारा
**मथ्यमानात्** = मन्थन गरिएको
**सिन्धोः** = समुद्रबाट
**यदा** = जब
**सुधा** = अमृत
**न जायेत** = उत्पन्न भएन
**अजितः** = तब अजित भगवान्
**स्वयम्** = आफैँले
**निर्ममन्थ** = मन्थन गर्नुभयो

**वाक्यार्थ—** यसप्रकार देवता र दानवहरूका सेनापतिहरूले मिलेर समुद्रमन्थन गर्दा त्यसबाट अमृत उत्पन्न नभएपछि भगवान् अजितले आफैँ समुद्रमन्थन गर्न थाल्नुभयो।

**मेघश्यामः कनकपरिधिः कर्णविद्योतविद्यु-**

**न्मूर्ध्नि भ्राजद्विलुलितकचः स्रग्धरो रक्तनेत्रः।**

**जैत्रैर्दोर्भिर्जगदभयदैर्दन्दशूकं गृहीत्वा**

**मथ्नन् मथ्ना प्रतिगिरिरिवाशोभताथोद्धृताद्रिः॥ १७॥**

**पदार्थ—**
**अथ** = यसपछि
**उद्धृताद्रिः** = कछुवारूपले पर्वतलाई उठाइराख्ने
**मेघश्यामः** = बादल झैँ कालो वर्ण भएका
**कनकपरिधिः** = सुनौलो पीताम्बर लगाएका
**कर्णविद्योतविद्युत्** = कानमा बिजुली झैँ चम्किने कुण्डल लगाएका
**मूर्ध्नि** = शिरमा
**भ्राजद्विलुलितकचः** = घुम्रिएका कपाल फरफराइरहेका
**रक्तनेत्रः** = राता-राता आँखा भएका
**स्रग्धरः** = वनमालाधारी अजित भगवान्ले
**जगदभयदैः** = जगत्लाई नै अभयप्रदान गर्ने
**जैत्रैः** = विश्वविजयी
**दोर्भिः** = आफ्ना बाहुहरूद्वारा
**दन्दशूकं** = वासुकिलाई
**गृहीत्वा** = समातेर
**मथ्ना** = मदानी बनाइएको मन्दराचलद्वारा
**मथ्नन्** = मन्थन गर्दा
**प्रतिगिरिः इव** = अर्को मन्दराचल झैँ
**अशोभत** = सुहाउनुभयो

**वाक्यार्थ—** कछुवाको रूप धारण गरी मन्दराचललाई उठाइराख्दा भगवान्को शरीर बादल झैँ कालो-कालो वर्णको थियो र जसमा सुनौलो पीताम्बर लगाइएको थियो। उहाँको कानमा बिजुली झैँ चम्किरहेका कुण्डलहरू थिए भने शिरमा फरफराइरहेको घुम्रिएको कपाल थियो। उहाँका हातहरू सम्पूर्ण जगत्लाई नै अभयप्रदान गर्ने र सबैभन्दा बढी शक्तिशाली थिए। तिनै हातले वासुकि नागलाई समातेर मदानी बनाइएको मन्दराचललाई घुमाई समुद्रमन्थन गर्दा उहाँ दोस्रो मन्दराचल झैँ सुशोभित देखिनुभएको थियो।

**निर्मथ्यमानादुदधेरभूद् विषं महोल्बणं हालहलाह्वमग्रतः ।**
**सम्भ्रान्तमीनोन्मकराहिकच्छपात् तिमिद्विपग्राहतिमिङ्गिलाकुलात् ॥ १८ ॥**

**पदार्थ–**
**सम्भ्रान्तमीनोन्मकराहि-कच्छपात्** = भागदौड गरिरहेका माछा, माथि उत्रिएका गोही, सर्प र कछुवाले युक्त
**तिमिद्विपग्राहतिमिङ्गिलाकुलात्** = आत्तिएका तिमि, समुद्री हात्ती, गोही र तिमिङ्गिलहरूले व्याप्त
**निर्मथ्यमानात्** = मन्थन गरिएको
**उदधेः** = त्यो समुद्रबाट
**अग्रतः** = सबैभन्दा पहिला
**महोल्बणं** = अत्यन्त उग्र
**हालहलाह्वं** = हालाहल नामको
**विषं** = विष
**अभूत्** = उत्पन्न भयो

**वाक्यार्थ–** भगवान्ले समुद्रमन्थन गर्न थालेपछि भागदौड गरिरहेका माछा, माथि उत्रिएका गोही, सर्प र कछुवा एवं आत्तिएका तिमि (माछो), तिमिङ्गिल (तिमि माछोलाई निल्न सक्ने ठुलो माछो), समुद्री हात्ती र अनेक प्रकारका गोहीहरू भएको त्यस समुद्रबाट सबैभन्दा पहिला अत्यन्त उग्र हालाहल नाम गरेको विष उत्पन्न भयो।

**तदुग्रवेगं दिशि दिश्युपर्यधो विसर्पदुत्सर्पदसह्यमप्रति ।**
**भीताः प्रजा दुद्रुवुरङ्ग सेश्वरा अरक्ष्यमाणाः शरणं सदाशिवम् ॥ १९ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय राजा
**अप्रति** = प्रतिकार गर्नै नसकिने
**उग्रवेगं** = भयङ्कर वेगवान्
**असह्यं** = सहनै नसकिने
**तत्** = त्यो विषलाई
**दिशि दिशि** = दिशा-विदिशाहरूमा
**उपरि अधः** = तल माथि
**उत्सर्पत्** = उड्दै र
**विसर्पत्** = फैलिँदै गरेको देखेर
**अरक्ष्यमाणाः** = कसैद्वारा रक्षा नगरिएका
**भीताः** = असाध्यै डराएका
**सेश्वराः** = प्रजापतिहरूसहितका
**प्रजाः** = सम्पूर्ण प्रजाहरू
**सदाशिवम्** = सदाशिवको
**शरणं** = शरणमा
**दुद्रुवुः** = दगुर्दै पुगे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! प्रतिकार गर्नै नसकिने त्यस असह्य विषलाई भयङ्कर वेगका साथ दिशा-विदिशामा उडिरहेको र तलमाथि जताततै फैलिरहेको देखेपछि र त्यसबाट आफूलाई कसैले रक्षा नगरेपछि असाध्यै डराएका प्रजापति सहितका सम्पूर्ण प्रजाहरू दगुर्दै सदाशिव भगवान्को शरणमा पुगे।

**विलोक्य तं देववरं त्रिलोक्या भवाय देव्याभिमतं मुनीनाम् ।**
**आसीनमद्रावपवर्गहेतोस्तपो जुषाणं स्तुतिभिः प्रणेमुः ॥ २० ॥**

**पदार्थ–**
**त्रिलोक्याः** = तीनै लोकको
**भवाय** = उन्नतिको लागि
**देव्या** = सतीदेवीसँग
**अद्रौ** = कैलाशमा
**आसीनं** = बसिरहनुभएका
**मुनीनाम्** = सम्पूर्ण ज्ञान चाहने मुनिहरूद्वारा
**अभिमतं** = सेवित

**अपवर्गहेतोः** = तिनीहरूकै मोक्षका लागि
**तपः** = तपस्या
**जुषाणं** = गरिरहनुभएका
**तं** = ती
**देववरं** = महादेवलाई
**विलोक्य** = देखेर
**स्तुतिभिः** = स्तुतिपूर्वक
**प्रणेमुः** = प्रणाम गरे

**वाक्यार्थ–** सम्पूर्ण लोकको उन्नतिका लागि सतीदेवीसँग कैलाशमा बसिरहनुभएका, ज्ञान चाहने सम्पूर्ण मुनिहरूद्वारा सेवा गरिएका एवं तिनीहरूकै मोक्षका लागि तपस्या गरिरहनुभएका देवाधिदेव महादेवलाई देखी प्रजापति र सम्पूर्ण प्रजाहरूले उहाँलाई स्तुतिपूर्वक प्रणाम गरे।

**प्रजापतय ऊचुः** (प्रजापतिहरूले भने)

**देवदेव महादेव भूतात्मन् भूतभावन।**

**त्राहि नः शरणापन्नांस्त्रैलोक्यदहनाद् विषात्॥ २१॥**

**पदार्थ–**
**भूतभावन** = सबैका पालक
**भूतात्मन्** = सबैका आत्मस्वरूप
**देवदेव** = देवताका पनि देवता
**महादेव** = हे महादेव
**शरणापन्नान्** = शरणमा आएका
**नः** = हामीहरूलाई
**त्रैलोक्यदहनात्** = तीनै लोकलाई डढाउने
**विषात्** = विषबाट
**त्राहि** = जोगाउनुहोस्

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूका आत्मा र उनीहरूका पालक देवाधिदेव हे महादेव ! हजुरका शरणमा आएका हामीलाई तीनै लोकलाई पनि डढाउन सक्ने यस विषबाट जोगाउनुहोस्।

**त्वमेकः सर्वजगत ईश्वरो बन्धमोक्षयोः।**

**तं त्वामर्चन्ति कुशलाः प्रपन्नार्तिहरं गुरुम्॥ २२॥**

**पदार्थ–**
**एकः** = केवल एक
**त्वं** = हजुर मात्र
**सर्वजगतः** = सम्पूर्ण जगत्को
**बन्धमोक्षयोः** = बन्धन र मोक्षका लागि
**ईश्वरः** = समर्थ हुनुहुन्छ
**तं** = त्यस्ता
**प्रपन्नार्तिहरं** = शरणागतहरूको दुःखलाई नष्ट गर्ने
**गुरुम्** = जगद्गुरु
**त्वां** = हजुरलाई
**कुशलाः** = विवेकीहरू
**अर्चन्ति** = सेवा गर्दछन्

**वाक्यार्थ–** सम्पूर्ण जगत्को बन्धन र मुक्तिका लागि केवल हजुर मात्र समर्थ हुनुहुन्छ। हजुर आफ्ना शरणमा आएका भक्तहरूको दुःखलाई तत्काल नाश गर्नुहुन्छ, त्यसैले विवेकी मानिसहरू हजुरको सेवा गर्दछन्।

**गुणमय्या स्वशक्त्यास्य सर्गस्थित्यप्ययान् विभो।**

**धत्से यदा स्वदृग्भूमन् ब्रह्मविष्णुशिवाभिधाम्॥ २३॥**

**पदार्थ–**
**स्वदृक्** = स्वयंप्रकाश
**विभो** = सर्वव्यापक
**भूमन्** = हे परमात्मा
**यदा** = जब
**गुणमय्या** = त्रिगुणात्मिका

**स्वशक्त्या** = आफ्नो मायाशक्तिद्वारा
**अस्य** = यो जगत्को
**सर्गस्थित्यप्ययान्** = सृष्टि, स्थिति र नाश गर्नुहुन्छ, तब
**ब्रह्मविष्णुशिवाभिधाम्** = ब्रह्मा, विष्णु र शिवको नामरूप
**धत्से** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** हे परमात्मा ! हजुर स्वयंप्रकाश र सर्वव्यापक हुनुहुन्छ। आफ्नो त्रिगुणात्मिका मायाशक्तिद्वारा जगत्को सृष्टि, स्थिति र लय गर्ने वेलामा चाहिँ हजुर नै ब्रह्मा, विष्णु र शिवको नामरूप धारण गर्नुहुन्छ।

**त्वं ब्रह्म परमं गुह्यं सदसद्भावभावनः।**
**नानाशक्तिभिराभातस्त्वमात्मा जगदीश्वरः॥ २४॥**

**पदार्थ–**
**सदसद्भावभावनः** = उचनीच सबै प्रकारका प्राणीहरूलाई जीवन दिने
**त्वं** = हजुर नै
**गुह्यं** = परम रहस्यमय
**परमं ब्रह्म** = परब्रह्म हुनुहुन्छ
**आत्मा** = सबैका आत्मा
**जगदीश्वरः** = जगत्का मालिक
**त्वं** = हजुर नै
**नानाशक्तिभिः** = अनन्त शक्तिहरूद्वारा
**आभातः** = जगत्रूपमा देखिनुभएको छ

**वाक्यार्थ–** हे परमात्मा ! जगत्का उचनीच सबै प्रकारका प्राणीहरूलाई जीवन दिने हजुर नै सम्पूर्ण जगत्का मालिक र सबैका आत्मा हुनुहुन्छ। परम रहस्यमय परब्रह्मतत्त्व भएर पनि आफ्ना अनन्त शक्तिहरूद्वारा दृश्य जगत्को रूपमा हजुर नै देखिनुभएको छ।

**त्वं शब्दयोनिर्जगदादिरात्मा प्राणेन्द्रियद्रव्यगुणस्वभावः।**
**कालः क्रतुः सत्यमृतं च धर्मस्त्वय्यक्षरं यत् त्रिवृदामनन्ति॥ २५॥**

**पदार्थ–**
**त्वं** = हजुर नै
**शब्दयोनिः** = शब्द (वेद)का कारण हुनुहुन्छ
**जगदादिः** = जगत्कारण महत्तत्त्व
**आत्मा** = अहङ्कार र
**प्राणेन्द्रियद्रव्यगुणस्वभावः** = अहङ्कारका कार्य पञ्चप्राण, इन्द्रियहरू, पदार्थहरू र तिनका भिन्नभिन्न स्वभाव पनि हुनुहुन्छ
**कालः** = कालस्वरूप
**क्रतुः** = यज्ञरूप
**सत्यं** = सत्यस्वरूप
**ऋतं** = तथ्यस्वरूप
**धर्मः च** = धर्मरूप पनि हुनुहुन्छ
**यत्** = जुन
**त्रिवृत्** = त्रिगुणात्मिका
**अक्षरं** = प्रकृति छ, त्यो
**त्वयि** = हजुरमा नै
**आमनन्ति** = (आश्रित रहन्छ भनी विद्वान्हरू) बताउँछन्

**वाक्यार्थ–** वेद हजुरबाट नै उत्पन्न भएको हो। हजुर नै महत्तत्त्व, अहङ्कार र यसका कार्य मन, बुद्धि, इन्द्रिय, प्राण, सम्पूर्ण पदार्थ र यिनीहरूका भिन्नभिन्न स्वभाव पनि हुनुहुन्छ। हजुर नै काल, यज्ञ, सत्य र तथ्य धर्मस्वरूप हुनुहुन्छ। त्रिगुणात्मिका प्रकृति पनि हजुरमा नै आश्रित छ भनी विद्वान्हरू बताउँछन्।

**विवरण–** यस श्लोकमा परमात्मास्वरूप भगवान् शिवको स्तुति गर्दै परमात्मालाई अहङ्कारस्वरूप

अनि प्रकृतिको आश्रय भनी बताइएको छ। अहङ्कार तीन प्रकारको हुन्छ— वैकारिक, राजस र तामस। अहङ्कारबाट नै सम्पूर्ण सृष्टिको आरम्भ भएको हो। त्यसमध्ये वैकारिक अर्थात् सात्त्विक अहङ्कार क्षुब्ध हुँदा त्यसबाट मन, तैजस अर्थात् राजस अहङ्कार विकृत हुँदा बुद्धि, इन्द्रिय र प्राण अनि तामस अहङ्कारबाट रूप, रस आदि पञ्चतन्मात्राहरूको उत्पत्ति हुन्छ (भागवत ३/२६/२४-३२)। वास्तवमा त्यो अहङ्कार पनि भगवान् नै हुनुहुन्छ। यसबाट परमात्माभन्दा भिन्न अर्को कुनै पदार्थ छैन भन्ने बुझिन्छ।

यस श्लोकमा आएको **त्रिवृत् अक्षरं** यस पदावलीको अर्थ दुई प्रकारले गर्न सकिन्छ। **त्रिवृत्**को शाब्दिक अर्थ तीनवटा अवयवबाट बनेको भन्ने हुन्छ भने **अक्षर**को शाब्दिक अर्थ नाश नहुने भन्ने हुन्छ। यसरी **त्रिवृत् अक्षरं** यसको अर्थ त्रिगुणात्मिका प्रकृति पनि हुन्छ त्यस्तै अ, उ, म् गरी तीन अवयवबाट बनेको ओङ्कार पनि हुन्छ। तर पनि प्रसङ्ग अनुसार 'त्रिगुणात्मिका प्रकृति' यो पहिलो अर्थ नै बढी ग्राह्य छ।

**अग्निर्मुखं तेऽखिलदेवतात्मा क्षितिं विदुर्लोकभवाङ्घ्रिपङ्कजम्।**
**कालं गतिं तेऽखिलदेवतात्मनो दिशश्च कर्णौ रसनं जलेशम्॥ २६॥**

**पदार्थ—**
**लोकभव** = हे सम्पूर्ण लोकको कल्याण गर्ने परमात्मा
**अखिलदेवतात्मा** = सर्वदेव-स्वरूप
**अग्निः** = अग्नि नै
**ते** = हजुरको
**मुखं** = मुख हो
**क्षितिं** = पृथिवी नै
**अङ्घ्रिपङ्कजम्** = चरणकमल हो भनी
**विदुः** = (विद्वान्हरू) जान्दछन्
**कालं** = काल नै
**अखिलदेवतात्मनः** = सम्पूर्ण देवताहरूका आत्मा भएका
**ते** = हजुरको
**गतिं** = गति हो
**दिशः** = दिशाहरू
**कर्णौ** = दुई कान हुन् भने
**जलेशम् च** = वरुणदेव नै
**रसनम्** = जिब्रो हुन्

**वाक्यार्थ—** सम्पूर्ण लोकको कल्याण गर्ने हे परमात्मा ! सर्वदेवस्वरूप अग्नि हजुरका मुख हुन्। पृथिवी हजुरको चरणकमल हो भने काल नै हजुरको गति हो। पूर्व, पश्चिम आदि दिशाहरू नै हजुरका कान् हुन् भने वरुण नै हजुरका जिब्रो हुन् अनि हजुर सबै देवताहरूका आत्मस्वरूप हुनुहुन्छ भनी विद्वान्हरू जान्दछन्।

**नाभिर्नभस्ते श्वसनं नभस्वान् सूर्यश्च चक्षूंषि जलं स्म रेतः।**
**परावरात्माश्रयणं तवात्मा सोमो मनो द्यौर्भगवन् शिरस्ते॥ २७॥**

**पदार्थ—**
**भगवन्** = हे सर्वसमर्थ प्रभु
**नभः** = आकाश
**ते** = हजुरको
**नाभिः** = नाभि
**नभस्वान्** = वायु
**श्वसनं** = श्वासप्रश्वास
**सूर्यः च** = सूर्य नै
**चक्षूंषि** = आँखाहरू
**जलं** = पानी
**रेतः स्म** = वीर्य
**सोमः** = चन्द्रमा
**मनः** = मन
**द्यौः** = स्वर्गलोक
**ते** = हजुरको

**शिरः** = शिर र
**तव** = हजुरको
**आत्मा** = अहङ्कार
**परावरात्माश्रयणं** = उचनीच सबै प्राणीहरूको आश्रय हो

**वाक्यार्थ–** हे सर्वसमर्थ प्रभु ! आकाश हजुरको नाभि हो भने वायु हजुरको श्वासप्रश्वास हो। सूर्य हजुरका आँखा हुन्, पानी हजुरको वीर्य हो। चन्द्रमा हजुरका मन हुन् भने स्वर्गलोक नै हजुरको शिर हो। हजुरको अहङ्कार नै उचनीच सबै प्रकारका प्राणीहरूको आश्रय हो।

**कुक्षिः समुद्रा गिरयोऽस्थिसङ्घा रोमाणि सर्वौषधिवीरुधस्ते।**
**छन्दांसि साक्षात् तव सप्त धातवस्त्रयीमयात्मन् हृदयं सर्वधर्मः॥ २८॥**

**पदार्थ–**
**त्रयीमयात्मन्** = तीन वेद (ऋक्, यजु र साम) नै आत्मास्वरूप भएका हे प्रभु
**समुद्राः** = समुद्रहरू
**कुक्षिः** = हजुरको कोख हुन्
**गिरयः** = पहाडहरू
**अस्थिसङ्घाः** = हाडहरू हुन्
**सर्वौषधिवीरुधः** = सम्पूर्ण औषधि वनस्पतिहरू
**ते** = हजुरका
**रोमाणि** = रौँहरू हुन्
**साक्षात्** = साक्षात्
**छन्दांसि** = वेदहरू नै
**तव** = हजुरका
**सप्त** = सात
**धातवः** = धातुहरू हुन्
**सर्वधर्मः** = सम्पूर्ण प्रकारको धर्म
**हृदयम्** = हजुरको हृदय हो

**वाक्यार्थ–** वेदात्मा हे प्रभु ! समुद्रहरू हजुरका कोख हुन् र सम्पूर्ण पहाडहरू हाड हुन्। जति पनि औषधि वनस्पतिहरू छन् ती सबै हजुरका रौँ हुन्। वेदहरू हजुरका सात धातु हुन् भने सम्पूर्ण धर्म हजुरको हृदय हो।

**मुखानि पञ्चोपनिषदस्तवेश यैस्त्रिंशदष्टोत्तरमन्त्रवर्गः।**
**यत्तच्छिवाख्यं परमात्मतत्त्वं देव स्वयंज्योतिरवस्थितिस्ते॥ २९॥**

**पदार्थ–**
**ईश** = हे भगवान्
**पञ्चोपनिषदः** = सद्योजात आदि उपनिषद्का पाँच मन्त्रहरू
**तव** = हजुरका
**मुखानि** = मुखहरू हुन्
**यैः** = जसबाट
**त्रिंशत् अष्टोत्तरमन्त्रवर्गः** = अठ्तीस प्रकारका मन्त्रहरू हुन्छन्
**देव** = हे परमात्मा
**यत्** = जुन
**स्वयंज्योतिः** = स्वयंप्रकाश
**शिवाख्यं** = शिवनामक
**परमात्मतत्त्वं** = परमार्थतत्त्व छ
**तत्** = त्यो
**ते** = हजुरको
**अवस्थितिः** = शान्त अवस्था हो

**वाक्यार्थ–** हे भगवन् ! सद्योजात, वामदेव, अघोर, तत्पुरुष र ईशान यी उपनिषद्का पाँच मन्त्रहरू नै हजुरका पाँच मुख हुन्। यी मन्त्रहरूबाट फेरि खण्डखण्ड गर्दा अठ्तीस प्रकारका मन्त्रहरू बन्दछन्। हे परमात्मा ! जुन कल्याणकारक स्वयंप्रकाश शिवनामक परमार्थतत्त्व छ, त्यो हजुरको शान्त अवस्था हो।

**विवरण–** यहाँ पाँच उपनिषद् नै भगवान् शङ्करका पाँच मुख हुन् भनी बताइएको छ। यहाँ

उपनिषद् भनेर कृष्णयजुर्वेदीय तैत्तिरीय आरण्यकको दशम प्रपाठकको १७-२१ अनुवाकका पाँच मन्त्रहरूलाई लिइएको हो। सबैका अन्तरात्मा र मालिक पशुपतिका पाँच मुख र तिनलाई बुझाउने पाँच मन्त्रहरू रहेका छन्। अद्वैत शिवतत्त्व नै पूर्व-पश्चिम, तल-माथि, सबैतिर रहेको छ। भगवान् शङ्करका पाँच मुखहरूमध्ये पश्चिमपट्टिको मुखलाई **सद्योजातं प्रपद्यामि** यस मन्त्रले सद्योजात तत्त्वको रूपमा बताउँछ। **वामदेवाय नमः** यस मन्त्रले उत्तरतिर वामदेव तत्त्वलाई बताउँछ। **अघोरेभ्योऽथ घोरेभ्यः** यस मन्त्रले दक्षिणतिर अघोर तत्त्वलाई बताउँछ भने **तत्पुरुषाय विमद्महे** यस मन्त्रले पूर्वतिर तत्पुरुष तत्त्वको प्रतिपादन गर्दछ। **ईशानः सर्वविद्यानां** यस मन्त्रले चाहिँ माथितिर ईशान तत्त्वको प्रतिपादन गर्दछ। भगवान् शङ्करको उपासना गर्दा उहाँलाई रुद्रसूक्तका मन्त्रहरूद्वारा सर्वरूपमा नै उपासना गरिएको पाइन्छ। अव्यक्त परमात्माको पृथिवी तत्त्व नै पूर्वी मुख सद्योजात हो, जल तत्त्व नै उत्तरमुख वामदेव हो, तेज तत्त्व नै दक्षिणमुख अघोर हो, वायु तत्त्व नै पूर्वीमुख तत्पुरुष हो र आकाश तत्त्व नै ऊर्ध्वमुख ईशान हो भनी बताइएको पाइन्छ। प्रत्येक मुखमा वेद र आम्नाय पनि छुट्टै छन्। ऋग्वेदले सद्योजात, यजुर्वेदले वामदेव, अथर्ववेदले अघोर, सामवेदले तत्पुरुष र प्रणवार्थले ईशानलाई प्रतिपादन गर्दछन्। तीमध्ये पाँच मन्त्रहरूलाई नै यहाँ पाँच उपनिषद् भनिएको हो। यी पाँच मन्त्रका ३८ कला हुन्छन् (नेत्रतन्त्र, २२/२५/३४), स्वच्छन्दतन्त्र (१/५३/५८)। ती कलाहरू यसप्रकार छन्। सद्योजातका कलाहरू– १. सिद्धि २. ऋद्धि ३. द्युति ४. लक्ष्मी ५. मेधा ६. कान्ति ७. धृति ८. स्वधा। वामदेवका कलाहरू– ९. रजा १०. रक्षा ११. रति १२. पाल्या १३. काम्या १४. तृष्णा १५. मति १६. क्रिया १७. वृद्धि १८. माया १९. नाडी २०. भ्रामणी २१. मोहनी। अघोरका कलाहरू– २२. तमा २३. मोहा २४. क्षुधा २५. निद्रा २६. मृत्यु २७. माया २८. भया २९. जरा। तत्पुरुषका कलाहरू– ३०. निवृत्ति ३१. प्रतिष्ठा ३२. विद्या ३३. शान्ति। ईशानका कलाहरू– ३४. तारा ३५. सुतारा ३६. तरणी ३७. तारयन्ती ३८. सुतारिणी।

**छाया त्वधर्मोर्मिषु यैर्विसर्गो नेत्रत्रयं सत्त्वरजस्तमांसि।**
**साङ्ख्यात्मनः शास्त्रकृतस्तवेक्षा छन्दोमयो देव ऋषिः पुराणः॥ ३०॥**

**पदार्थ–**
**अधर्मोर्मिषु तु** = अधर्मका लोभ आदि तरङ्ग (वृत्ति)हरू नै
**छाया** = हजुरका छाया हुन्
**यैः** = जसबाट
**विसर्गः** = अनेक सृष्टि चल्छ
**सत्त्वरजस्तमांसि** = सत्त्व, रज र तमोगुण नै
**नेत्रत्रयं** = तीन नेत्र हुन्
**देव** = हे भगवान्
**छन्दोमयः** = गायत्री आदि छन्दमा
**पुराणः** = सनातन
**ऋषिः** = वेद नै
**शास्त्रकृतः** = शास्त्रहरूलाई बनाउने र
**साङ्ख्यात्मनः** = साङ्ख्य आदि शास्त्रस्वरूप पनि हुनुहुने
**तव** = हजुरको
**ईक्षा** = विचार हो

**वाक्यार्थ–** हे भगवान्! अधर्मका लोभ आदि अनेक वृत्तिहरू हजुरका छाया हुन्, तिनबाट अनेक प्रकारको सृष्टि चल्दछ। सत्त्व, रज र तमोगुण हजुरका आँखा हुन्। गायत्री आदि छन्दमा आबद्ध

सनातन वेद नै साङ्ख्य आदि शास्त्र र ती-ती शास्त्र बनाउनेका रूपमा रहने हजुरको विचार हो।

**न ते गिरित्राखिललोकपाल विरिञ्चवैकुण्ठसुरेन्द्रगम्यम्।**
**ज्योतिः परं यत्र रजस्तमश्च सत्त्वं न यद् ब्रह्म निरस्तभेदम्॥ ३१॥**

**पदार्थ—**
**गिरित्र** = हे कैलासरक्षक प्रभु
**ते** = हजुरको
**परं ज्योतिः** = परं ज्योतिर्मय स्वरूप
**निरस्तभेदम्** = समस्त भेदले रहित
**ब्रह्म** = ब्रह्म नै हो
**यत्** = जुन तत्त्व
**अखिललोकपालविरिञ्चवैकुण्ठसुरेन्द्रगम्यम् न** = सम्पूर्ण लोकपालहरू र ब्रह्मा, विष्णु अनि देवराज इन्द्रद्वारा समेत जान्न नसकिने छ
**यत्र** = जुन स्वरूपमा
**रजः** = रजोगुण
**तमः** = तमोगुण र
**सत्त्वं च न** = सत्त्वगुण पनि छैन

**वाक्यार्थ—** हे कैलासरक्षक प्रभु ! हजुरको परं ज्योतिर्मय स्वरूप ब्रह्म नै हो, जो सबै प्रकारका भेदहरूले रहित छ, जहाँ सत्त्वगुण, रजोगुण र तमोगुण केही छैनन्, जसको स्वरूपलाई, सम्पूर्ण लोकपालहरू अनि ब्रह्मा, विष्णु र इन्द्रले पनि जान्न सक्दैनन्।

**विवरण—** यस श्लोकमा परं ज्योतिरूप शिवतत्त्वलाई ब्रह्माजी र भगवान् विष्णुले समेत जान्न नसक्ने बताइएको छ। निर्गुण परम तत्त्व ब्रह्मा, विष्णु र महेश्वरको पनि मूल उपजीव्य हो, त्यो अनन्त र अचिन्त्य छ। त्यही परम तत्त्व नै मायाका गुणहरूलाई स्वीकार गरी त्रिदेवको रूपमा प्रकट भएको छ। निर्गुणको उपासना सम्भव नभएकाले भक्तहरू कुनै एक स्वरूपलाई मूल तत्त्वको रूपमा मानी त्यसकै उपासना गर्दछन्। यहाँ अद्वितीय ब्रह्मतत्त्वको रूपमा भगवान् शङ्करको स्तुति गरिएको छ।

शिवोपासना वेद, उपनिषद् र पुराणको समेत मूल विषय रहिआएको छ। ईश्वर नाम भगवान् शिवको पर्यायवाची बनेर वेद, पुराण आदिमा प्रयुक्त भएको छ। वैदिक उपासनामा सबैभन्दा लामो स्तुति प्रकरण भगवान् शङ्करकै छ। रुद्रसूक्तमा स्तुति गरिए अनुसार शिव कुनै विशेष रूपमा मात्र नभएर सुतेका, जागेका, उठेका, हिँडेका र दौडिइरहेका सबै प्राणीहरूको रूपमा हुनुहुन्छ— **नमो विसृजद्भ्यो विद्वद्भ्यश्च वो नमो नमः। स्वपद्भ्यो जाग्रद्भ्यश्च वो नमो नमः। शयानेभ्यऽआसीनेभ्यश्च वो नमो नमः। तिष्ठद्भ्यो धावद्भ्यश्च वो नमो नमः।** (शुक्लयजुर्वेद १६/२३)। शिवलाई सर्वात्मक परमात्मतत्त्वको रूपमा उपासना गरिने भएकैले रुद्रसूक्तका मन्त्रहरूलाई **अत्याश्रमी** अर्थात् सम्पूर्ण कर्म छाडेका संन्यासीले पनि जपिरहनुपर्छ भनी कैवल्योपनिषद् (२४)मा बताइएको छ। श्लोकमा आएको प्रसङ्ग चाहिँ पुराणहरूमा कथाको रूपमा प्राप्त हुन्छ, जस अनुसार श्रेष्ठताको विवादमा अल्झिएका ब्रह्मा र विष्णुले आफ्नो अगाडि प्रकट भएको स्वयंप्रकाश ज्योतिर्लिङ्गको आदि-अन्त्य पाउन सकेका थिएनन्।

**कामाध्वरत्रिपुरकालगराद्यनेक-**
**भूतद्रुहः क्षपयतः स्तुतये न तत् ते।**

**यस्त्वन्तकाल इदमात्मकृतं स्वनेत्र-**

**वह्निस्फुलिङ्गशिखया भसितं न वेद ॥३२॥**

| पदार्थ– | **ते** = हजुरका लागि | **अन्तकाले** = प्रलयकालमा |
|---|---|---|
| **कामाध्वरत्रिपुरकालगराद्यनेक-भूतद्रुहः** = कामदेव, दक्षयज्ञ, त्रिपुरासुर, काल, कालकूट विष र जीवहरूलाई दुःख दिनेहरूलाई | **तत्** = त्यो कर्म | **स्वनेत्रवह्निस्फुलिङ्गशिखया** = आफ्नो तेस्रो नेत्रबाट निस्केको आगोको लप्काद्वारा |
| **क्षपयतः** = सखाप पार्ने | **स्तुतये** = स्तुतिको कारण | **भसितं** = भस्मसात् भएको पनि |
| | **न** = हुँदैन | **न वेद** = थाहा पाउनुहुन्न |
| | **यः तु** = जुन भगवान्ले त | |
| | **आत्मकृतं** = आफैँले बनाएको | |
| | **इदं** = यो विशाल जगत्लाई | |

**वाक्यार्थ–** कामदेव, दक्षयज्ञ, त्रिपुरासुर, काल र कालकूट विष (केही छिनपछि पिउन लागिएको) अनि जीवहरूलाई दुःख दिने अनेक दुष्टहरूलाई नष्ट गर्ने हजुरका लागि ती कर्म मात्र हजुरको स्तुतिको कारण बन्दैनन् किनभने हजुरले त आफैँले बनाएको यो अनन्त संसारलाई प्रलयकालमा आफ्नै तेस्रो नेत्रबाट निस्केको आगोको लप्काद्वारा भस्मसात् भएको पनि थाहा पाउनुहुन्न।

**विवरण–** यस श्लोकमा कामदेव, त्रिपुरासुर, काल आदिलाई नष्ट गरेको भनी वर्णन गर्दा भगवान्को स्तुति हुन सक्दैन भनिएको छ। दृश्यमान सम्पूर्ण विश्वप्रपञ्चलाई कल्पनाको भरमा आफैँमा आफैँद्वारा उत्पन्न गरी त्यसलाई आफैँ लीन गर्ने परमात्माको स्तुति गर्दा एउटा-दुइटा राक्षस मार्ने कुरा गर्नु हास्यास्पद हुन जान्छ भन्ने आशय यस श्लोकको रहेको छ। सामान्य राक्षसहरूलाई मारेर भगवान्को कीर्ति भएको होइन। सबभन्दा ठुलो चमत्कार त केही पनि गुणधर्म नभएको तत्त्वबाट मायाको एक अंशलाई लिएर अनन्त र विचित्रतायुक्त जगत्को सृष्टि, त्यसको पालन र संहार गर्नु हो। यस्तो चमत्कारपूर्ण कार्य त भगवान् ख्यालख्यालमा गर्नुहुन्छ भने सामान्य राक्षसहरूको वधको त कुरै भएन। यसर्थ यस श्लोकमा यस्तो विचित्रतायुक्त जगत्को सृष्टि, त्यसको पालन र संहार गर्नु त भगवान्को लागि सामान्य कुरो हो भने सामान्य व्यक्तिको वधजस्ता कार्यलाई कसरी महत्त्वपूर्ण मान्न सकिन्छ र त्यो स्तुतिको कारण बन्दछ भनिएको हो।

**ये त्वात्मरामगुरुभिर्हृदि चिन्तिताङ्घ्रि-**

**द्वन्द्वं चरन्तमुमया तपसाभितप्तम्।**

**कत्थन्त उग्रपरुषं निरतं श्मशाने**

**ते नूनमूतिमविदंस्तव हातलज्जाः॥ ३३॥**

| पदार्थ– | **आत्मरामगुरुभिः** = आत्माराम पुरुषहरूद्वारा | **हृदि** = हृदयभित्र |
|---|---|---|
| **ये तु** = जो-जो व्यक्तिहरू | | **चिन्तिताङ्घ्रिद्वन्द्वं** = |

चरणकमलको चिन्तन गरिएका
**तपसा** = ज्ञानमय तपस्यामा
**अभितप्तम्** = स्थित रहने
हजुरलाई
**उमया** = उमासँग
**चरन्तं** = आसक्त भई हिँड्ने र
**श्मशाने निरतं** = श्मशानमा बस्ने
**उग्रपरुषं** = उग्र पुरुष भनी
**कत्थन्ते** = फतफताउँछन्
**हातलज्जाः** = लाज नभएका
**ते** = तिनीहरूले
**नूनं** = निश्चय नै
**तव** = हजुरको
**ऊतिं** = लीलारहस्यलाई
**अविदन्** = जान्दैनन्

**वाक्यार्थ–** आत्माराम महापुरुषहरू आफ्नो हृदयभित्र सधैँ जसका चरणकमलको चिन्तन गरिरहन्छन्, जो ज्ञानमय तपस्यामा स्थित रहनुहुन्छ त्यस्ता हजुरलाई जो–जो व्यक्तिहरू उमासँग आसक्त भई हिँड्ने र श्मशानमा रमाउने उग्रपुरुष भनी जथाभावी फतफताउँछन्, ती लाज नभएका मूर्खहरूले निश्चय नै हजुरको लीलारहस्यलाई बुझेका छैनन्।

**तत्तस्य ते सदसतोः परतः परस्य**
**नाञ्जः स्वरूपगमने प्रभवन्ति भूम्नः।**
**ब्रह्मादयः किमुत संस्तवने वयं तु**
**तत्सर्गसर्गविषया अपि शक्तिमात्रम्॥ ३४॥**

**पदार्थ–**
**तत्** = त्यसैले
**ब्रह्मादयः** = ब्रह्मा आदि पनि
**तस्य** = त्यस्ता
**सदसतोः** = कारण र कार्यरूप जगत्का
**परतः** = कारण मायाभन्दा पनि
**परस्य** = पर रहने
**भूम्नः** = सर्वव्यापक
**ते** = हजुरको
**अञ्जः स्वरूपगमने** = साक्षात् स्वरूपलाई जान्न
**न प्रभवन्ति** = समर्थ छैनन्
**संस्तवने** = स्तुति गर्ने
**किमुत** = के कुरा
**वयं तु** = हामीहरू त
**तत्सर्गसर्गविषयाः** = ब्रह्माजीहरूको सृष्टिको पनि सृष्टिका उत्पादन
**अपि** = भए पनि
**शक्तिमात्रम्** = आफ्नो शक्ति अनुसार (स्तुति गर्दछौँ)

**वाक्यार्थ–** कार्य र कारणात्मक जगत्को कारण भएको मायाभन्दा पनि पर रहने सर्वव्यापक हजुरको वास्तविक स्वरूपलाई स्पष्टरूपले जान्न ब्रह्मा आदि देवताहरू पनि समर्थ छैनन्, झन् स्तुति गर्ने त सम्भावना नै छैन। हामीहरू त झनै ती ब्रह्माजी आदिका सृष्टिका पनि उत्पादन हौँ तर पनि आफ्नो शक्ति अनुसार हामी हजुरको स्तुति गर्दछौँ।

**एतत् परं प्रपश्यामो न परं ते महेश्वर।**
**मृडनाय हि लोकस्य व्यक्तिस्तेऽव्यक्तकर्मणः॥ ३५॥**

**पदार्थ–**
**महेश्वर** = हे महादेव
**ते** = हजुरको
**एतत्** = यही रूपलाई
**परं** = सर्वश्रेष्ठ
**प्रपश्यामः** = देखिरहेका छौँ
**परं न** = पारमार्थिक स्वरूप (देखेका छैनौँ)
**हि** = निश्चय नै

**अव्यक्तकर्मणः** = अव्यक्तलीला गर्ने
**ते** = हजुर
**व्यक्तिः** = व्यक्तरूपमा हुनु
**लोकस्य** = संसारको
**मृडनाय** = कल्याणका लागि हो

**वाक्यार्थ–** हे महादेव ! हामी हजुरको पारमार्थिक स्वरूपलाई देख्न समर्थ छैनौँ, तर यही व्यक्तरूपलाई देख्नु पनि हाम्रो लागि ठुलो कुरो हो किनभने अव्यक्त लीला गर्ने हजुर नै संसारको कल्याणका लागि व्यक्तस्वरूपमा हुनुहुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तद् वीक्ष्य व्यसनं तासां कृपया भृशपीडितः।**

**सर्वभूतसुहृद् देव इदमाह सतीं प्रियाम्॥ ३६॥**

**पदार्थ–**
**तासां** = ती प्राणीहरूको
**तत्** = यस्तो
**व्यसनं** = सङ्कटलाई
**वीक्ष्य** = देखेर
**कृपया** = कृपाद्वारा
**भृशपीडितः** = असाध्यै दुःखी हुनुभएका
**सर्वभूतसुहृत्** = समस्त प्राणीहरूका हितैषी
**देवः** = भगवान् शिवले
**प्रियाम्** = आफ्नी प्यारी पत्नी
**सतीं** = सतीलाई
**इदं** = यस्तो
**आह** = भन्नुभयो

**वाक्यार्थ–** ती प्राणीहरूमाथि यस्तो सङ्कट आइपरेको देखेर कृपावश असाध्यै दुःखी हुनुभएका समस्त प्राणीहरूका हितैषी भगवान् शिवले आफ्नी पत्नी सतीसँग यसो भन्नुभयो।

**शिव उवाच** (भगवान् शिवले भन्नुभयो)

**अहो बत भवान्येतत् प्रजानां पश्य वैशसम्।**

**क्षीरोदमथनोद्भूतात् कालकूटादुपस्थितम्॥ ३७॥**

**पदार्थ–**
**अहो** = अहो
**बत** = दुःखको कुरा
**भवानि** = हे सती
**क्षीरोदमथनोद्भूतात्** = क्षीरसमुद्र मन्थन गर्दा उत्पन्न
**कालकूटात्** = कालकूट विषको कारण
**उपस्थितम्** = आइपरेको
**एतत्** = यो
**प्रजानां** = आफ्ना प्रजाहरूको
**वैशसम्** = सङ्कटलाई
**पश्य** = हेर त

**वाक्यार्थ–** हे सती ! ठुलो दुःखको कुरो छ। क्षीरसमुद्र मन्थन गर्दा निस्किएको कालकूट विषको कारणले हाम्रा यी प्रजाहरूमा आइपरेको ठुलो सङ्कटलाई हेर त।

**आसां प्राणपरीप्सूनां विधेयमभयं हि मे।**

**एतावान् हि प्रभोरर्थो यद् दीनपरिपालनम्॥ ३८॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**मे** = मैले

**प्राणपरीप्सूनां** = प्राण बचाउन चाहने
**आसां** = यी प्रजाहरूको
**अभयं** = निर्भयता
**विधेयम्** = गरिदिनुपर्दछ
**यत्** = जुन
**दीनपरिपालनम्** = दुःखीहरूको रक्षा गर्नु
**एतावान् हि** = यत्ति मात्र नै
**प्रभोः** = शक्तिसम्पन्नहरूको लागि
**अर्थः** = सार्थकता हो

**वाक्यार्थ–** मैले आफ्नो प्राण बचाउन चाहने यी प्रजाहरूलाई भयरहित बनाउनुपर्दछ। शक्तिले सम्पन्न व्यक्तिहरूको लागि त्यो शक्तिको सार्थकता भनेको दुःखीहरूको रक्षा गर्नु नै हो।

**प्राणैः स्वैः प्राणिनः पान्ति साधवः क्षणभङ्गुरैः।**

**बद्धवैरेषु भूतेषु मोहितेष्वात्ममायया॥ ३९॥**

**पदार्थ–**
**आत्ममायया** = परमात्माको मायाद्वारा
**मोहितेषु** = मोहित भएका
**बद्धवैरेषु** = शत्रुताको भाव राख्ने
**भूतेषु** = प्राणीहरूमा पनि
**साधवः** = साधुहरूले चाहिँ
**स्वैः** = आफ्ना
**क्षणभङ्गुरैः** = नाशवान्
**प्राणैः** = प्राणद्वारा
**प्राणिनः** = अरू प्राणीहरूलाई
**पान्ति** = रक्षा गर्दछन्

**वाक्यार्थ–** परमात्माको मायाद्वारा मोहित भएका प्राणीहरूले एकआपसमा वैरभाव राख्छन्, तर साधुहरूले चाहिँ आफ्नो नाशवान् प्राण दिएर भए पनि अरू प्राणीहरूको रक्षा गर्दछन्।

**पुंसः कृपयतो भद्रे सर्वात्मा प्रीयते हरिः।**

**प्रीते हरौ भगवति प्रीयेऽहं सचराचरः।**

**तस्मादिदं गरं भुञ्जे प्रजानां स्वस्तिरस्तु मे॥ ४०॥**

**पदार्थ–**
**भद्रे** = हे सती
**कृपयतः** = कृपा गर्ने
**पुंसः** = व्यक्तिमाथि
**सर्वात्मा** = सबैका आत्मा हुनुभएका
**हरिः** = भगवान् श्रीहरि
**प्रीयते** = प्रसन्न हुनुहुन्छ
**भगवति** = भगवान्
**हरौ** = श्रीहरि
**प्रीते** = खुसी हुँदा
**सचराचरः** = चराचर जगत्सहित
**अहं** = म
**प्रीये** = प्रसन्न हुन्छु
**तस्मात्** = त्यसैले
**इदं** = यो
**गरं** = विष
**भुञ्जे** = खाइदिन्छु
**मे** = मेरा
**प्रजानां** = प्रजाहरूको
**स्वस्तिः** = कल्याण
**अस्तु** = होस्

**वाक्यार्थ–** हे सती ! अरूमाथि कृपा गर्ने व्यक्तिप्रति सर्वात्मा भगवान् श्रीहरि प्रसन्न हुनुहुन्छ। हरि भगवान् प्रसन्न हुँदा चराचरजगत्सहित म पनि प्रसन्न हुन्छु। त्यसैले यो विष म खाइदिन्छु, मेरा प्रजाहरूको कल्याण होस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमामन्त्र्य भगवान् भवानीं विश्वभावनः ।**

**तद्विषं जग्धुमारेभे प्रभावज्ञान्वमोदत ॥ ४१ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**भवानीं** = भगवती सतीलाई
**आमन्त्र्य** = भनेपछि
**विश्वभावनः** = सम्पूर्ण विश्वका जीवनदाता
**भगवान्** = भगवान् शिवले
**तत्** = त्यो
**विषं** = विषलाई
**जग्धुं** = खान
**आरेभे** = थाल्नुभयो
**प्रभावज्ञा** = भगवान्को सामर्थ्यलाई जान्ने भगवतीले
**अन्वमोदत** = अनुमोदन गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार भगवती सतीलाई भनेपछि समस्त संसारका जीवनदाता प्रभु शिवजीले त्यो विष पिउन थाल्नुभयो। उहाँको सामर्थ्यलाई बुझ्ने भगवतीले पनि त्यस कुराको अनुमोदन गर्नुभयो।

**ततः करतलीकृत्य व्यापि हालाहलं विषम् ।**

**अभक्षयन्महादेवः कृपया भूतभावनः ॥ ४२ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**भूतभावनः** = सम्पूर्ण प्राणीका जीवनदाता
**महादेवः** = महादेव शिवले
**कृपया** = कृपापूर्वक
**व्यापि** = सबैतिर फैलिएको
**हालाहलं विषम्** = हालाहल विषलाई
**करतलीकृत्य** = अन्जुलिमा उठाएर
**अभक्षयत्** = खाइदिनुभयो

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूका जीवनदाता र सम्पूर्ण देवताहरूका पनि देवता महादेवले कृपापूर्वक त्यो सबैतिर फैलिएको विषलाई अन्जुलिमा उठाएर खाइदिनुभयो।

**तस्यापि दर्शयामास स्ववीर्यं जलकल्मषः ।**

**यच्चकार गले नीलं तच्च साधोर्विभूषणम् ॥ ४३ ॥**

**पदार्थ–**
**जलकल्मषः** = पानीको मल भएको विषले
**तस्य अपि** = उहाँमा पनि
**स्ववीर्यं** = आफ्नो प्रभाव
**दर्शयामास** = देखायो
**गले** = घाँटीमा
**यत्** = जुन
**नीलं** = नीलो दाग
**चकार** = बनायो
**तत् च** = त्यो त
**साधोः** = परोपकारी भगवान्को
**विभूषणम्** = शृङ्गार जस्तो भयो

**वाक्यार्थ–** पानीको मलका रूपमा रहेको त्यस विषले भगवान् शिवको घाँटीमा पनि आफ्नो प्रभाव देखाइहाल्यो। तर परोपकारी भगवान्को घाँटीमा चाहिँ त्यो नीलो दाग पनि शृङ्गार जस्तो भयो।

**तप्यन्ते लोकतापेन साधवः प्रायशो जनाः।**

**परमाराधनं तद्धि पुरुषस्याखिलात्मनः॥ ४४॥**

**पदार्थ—**
**प्रायशः** = धेरैजसो
**साधवः** = साधु
**जनाः** = मानिसहरू
**लोकतापेन** = प्राणीहरूको दुःखद्वारा
**तप्यन्ते** = आफैं दुःखी हुन्छन्
**तत् हि** = त्यही नै
**अखिलात्मनः** = सबैका आत्मस्वरूप
**पुरुषस्य** = भगवान्को
**परमाराधनम्** = सर्वश्रेष्ठ पूजा हो

**वाक्यार्थ—** धेरैजसो सत्पुरुषहरू प्राणीहरूको दुःखबाट आफू पनि दुःखी हुन्छन्। त्यही नै सबैको हृदयभित्र आत्मरूपले रहने भगवान्को सर्वश्रेष्ठ पूजा हो।

**निशम्य कर्म तच्छम्भोर्देवदेवस्य मीढुषः।**

**प्रजा दाक्षायणी ब्रह्मा वैकुण्ठश्च शशंसिरे॥ ४५॥**

**पदार्थ—**
**मीढुषः** = सबैका कामना पूरा गर्ने
**देवदेवस्य** = देवताका पनि देवता
**शम्भोः** = भगवान् शिवको
**तत् कर्म** = त्यो कर्मलाई
**निशम्य** = सुनेर
**दाक्षायणी प्रजा** = दक्षका सन्तति प्रजाहरू
**ब्रह्मा** = ब्रह्माजी र
**वैकुण्ठः च** = विष्णु भगवान्ले पनि
**शशंसिरे** = प्रशंसा गर्नुभयो

**वाक्यार्थ—** सबै कामनाहरूलाई पूरा गरिदिने देवाधिदेव भगवान् शिवले विष पिइदिनुभएको सुनेपछि दक्षसन्तति सबै प्रजाहरू, ब्रह्माजी र विष्णु भगवान्ले पनि उहाँको प्रशंसा गर्नुभयो।

**प्रस्कन्नं पिबतः पाणेर्यत्किञ्चिज्जगृहुः स्म तत्।**

**वृश्चिकाहिविषौषध्यो दन्दशूकाश्च येऽपरे॥ ४६॥**

**पदार्थ—**
**यत्** = जुन विष
**पिबतः** = पिइरहँदा
**पाणेः** = भगवान्को हातबाट
**प्रस्कन्नं** = चुहिएको थियो
**तत् किञ्चित्** = त्यो केहीलाई
**वृश्चिकाहिविषौषध्यः** = बिच्छी, सर्प, विषालु औषधिहरू
**दन्दशूकाः** = अनेक थरीका सर्पहरू
**ये च** = जति पनि
**अपरे** = अरू विषालु प्राणी छन् ती सबैले
**जगृहुः स्म** = ग्रहण गरे

**वाक्यार्थ—** भगवान् शिवले विष पिइरहँदा उहाँको हातबाट चुहिएका विषका थोपाहरूलाई अनेक प्रकारका सर्पहरू, बिच्छी, विषालु औषधि र अरू पनि विषालु प्राणीहरूले लिए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहिताया-**

**मष्टमस्कन्धेऽमृतमथने सप्तमोऽध्यायः॥ ७॥**

# अथ अष्टमोऽध्यायः

## समुद्रबाट प्राप्त अमृतका लागि देवता र दानवको विवाद र भगवान्द्वारा मोहिनी अवतार ग्रहण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**पीते गरे वृषाङ्केण प्रीतास्तेऽमरदानवाः।**

**ममन्थुस्तरसा सिन्धुं हविर्धानी ततोऽभवत्॥ १॥**

**पदार्थ–**
**वृषाङ्केण** = भगवान् शङ्करले
**गरे** = विष
**पीते** = पिएपछि
**प्रीताः** = प्रसन्न भएका
**ते** = ती
**अमरदानवाः** = देवता र दानवहरूले
**तरसा** = उत्साहपूर्वक
**सिन्धुं** = समुद्रलाई
**ममन्थुः** = मथ्न थाले
**ततः** = त्यहाँबाट
**हविर्धानी** = यज्ञीय द्रव्य उत्पन्न गर्ने कामधेनु
**अभवत्** = उत्पन्न भइन्

**वाक्यार्थ–** भगवान् शङ्करले विष पिएपछि देवता, दानव आदि सबै प्रसन्न भए र उनीहरूले उत्साहपूर्वक फेरि समुद्रमन्थन गर्न थाले। त्यहाँबाट यज्ञमा आवश्यक घिउ आदि उत्पन्न गर्ने कामधेनु उत्पन्न भइन्।

**तामग्निहोत्रीमृषयो जगृहुर्ब्रह्मवादिनः।**

**यज्ञस्य देवयानस्य मेध्याय हविषे नृप॥ २॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ब्रह्मवादिनः** = ब्रह्मवादी
**ऋषयः** = ऋषिहरूले
**देवयानस्य** = उत्तरायण गति दिने
**यज्ञस्य** = यज्ञको
**मेध्याय** = पवित्र
**हविषे** = दूध, घिउ आदि द्रव्यहरूका लागि
**अग्निहोत्रीं** = अग्निहोत्रसम्बन्धी सामग्री उत्पन्न गर्ने
**तां** = ती कामधेनुलाई
**जगृहुः** = ग्रहण गरे

**वाक्यार्थ–** ब्रह्मलोकसम्मको उत्तरायण गति दिने यज्ञका निमित्त दूध, घिउ आदि अग्निहोत्रसम्बन्धी सामग्रीहरू उत्पन्न गर्ने कामधेनु गाईलाई ब्रह्मवादी ऋषिहरूले ग्रहण गरे।

**तत उच्चैःश्रवा नाम हयोऽभूच्चन्द्रपाण्डुरः।**

**तस्मिन् बलिः स्पृहां चक्रे नेन्द्र ईश्वरशिक्षया॥ ३॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**उच्चैःश्रवा नाम** = उच्चैःश्रवा नामको
**चन्द्रपाण्डुरः** = चन्द्रमा जस्तो सेतो

**हयः** = घोडा
**अभूत्** = उत्पन्न भयो
**तस्मिन्** = त्यो घोडामा
**बलिः** = बलिले
**स्पृहां** = इच्छा
**चक्रे** = गरे
**ईश्वरशिक्षया** = भगवान्को सङ्केत अनुसार
**इन्द्रः न** = इन्द्रले चाहना गरेनन्

**वाक्यार्थ–** त्यसपछि उच्चैःश्रवा नामको चन्द्रमा जस्तो सेतो घोडा उत्पन्न भयो। त्यो घोडालाई बलिले लिन चाहे। भगवान्को सङ्केत अनुसार इन्द्रले त्यसको चाहना गरेनन्।

**तत ऐरावतो नाम वारणेन्द्रो विनिर्गतः।**
**दन्तैश्चतुर्भिः श्वेताद्रेर्हरन् भगवतो महिम्॥ ४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**चतुर्भिः** = चार ओटा
**दन्तैः** = दाँतहरूले
**भगवतः** = भगवान् शङ्करको
**श्वेताद्रेः** = कैलास पर्वतको
**महिम्** = शोभालाई पनि
**हरन्** = हरण गर्दै
**ऐरावतः नाम** = ऐरावत नाम गरेको
**वारणेन्द्रः** = श्रेष्ठ हात्ती
**विनिर्गतः** = निस्कियो

**वाक्यार्थ–** त्यसपछि आफ्ना चार ओटा दाँतहरूको चमकले भगवान् शङ्करको कैलास पर्वतको शोभालाई पनि हरण गर्ने ऐरावत नाम गरेको श्रेष्ठ हात्ती निस्कियो।

**कौस्तुभाख्यमभूद् रत्नं पद्मरागो महोदधेः।**
**तस्मिन् हरिः स्पृहां चक्रे वक्षोऽलङ्करणे मणौ॥ ५॥**

**पदार्थ–**
**महोदधेः** = समुद्रबाट
**कौस्तुभाख्यं** = कौस्तुभ नामक
**पद्मरागः** = कमलजस्तो कान्ति भएको
**रत्नं** = रत्न
**अभूत्** = उत्पन्न भयो
**वक्षोऽलङ्करणे** = आफ्नो छातीको अलङ्कारस्वरूप
**तस्मिन्** = त्यो
**मणौ** = मणिमा
**हरिः** = श्रीहरिले
**स्पृहां** = इच्छा
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि त्यो महासागरबाट कमलको जस्तो कान्ति भएको कौस्तुभ नामक एउटा उत्तम रत्न निस्कियो। आफ्नो छातीको आभूषण हुने ठानी त्यसलाई भगवान् श्रीहरिले चाहनुभयो।

**ततोऽभवत् पारिजातः सुरलोकविभूषणम्।**
**पूरयत्यर्थिनो योऽर्थैः शश्वद् भुवि यथा भवान्॥ ६॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सुरलोकविभूषणम्** = देवलोकको शोभा भएको
**पारिजातः** = पारिजात नामक कल्पवृक्ष
**अभवत्** = उत्पन्न भयो
**यथा** = जसरी
**भुवि** = पृथिवीमा
**भवान्** = तपाईं (राजा परीक्षित्)ले
**शश्वत्** = सधैँ सबैको कामना पूरा गर्नुहुन्छ, त्यसै गरी
**यः** = जुन कल्पवृक्षले
**अर्थैः** = चाहिएका पदार्थहरू

तत्काल दिएर | **अर्थिनः** = याचकहरूलाई | **पूरयति** = भरिपूर्ण गरिदिन्छ

**वाक्यार्थ–** त्यसपछि देवलोकको शोभा भएको पारिजात नामक कल्पवृक्ष उत्पन्न भयो। जसरी पृथिवीमा बसेर तपाईंले आफूकहाँ आउने सबैको कामना पूरा गर्नुहुन्छ त्यसै गरी त्यस वृक्षले याचकहरूलाई उनीहरूले चाहेको वस्तु दिएर भरिपूर्ण गरिदिन्छ।

**ततश्चाप्सरसो जाता निष्ककण्ठ्यः सुवाससः।**
**रमण्यः स्वर्गिणां वल्गु गतिलीलावलोकनैः॥ ७॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
**वल्गुगतिलीलावलोकनैः** = सुन्दर हिँडाइ र हँसिलो हेराइद्वारा
**स्वर्गिणां** = स्वर्गमा बस्ने देवताहरूलाई
**रमण्यः** = आनन्द दिने
**सुवाससः** = सुन्दरवस्त्र लगाउने
**निष्ककण्ठ्यः** = घाँटीमा सुन्दर हार लगाएका
**अप्सरसः** = अप्सराहरू
**जाताः** = उत्पन्न भए

**वाक्यार्थ–** त्यसपछि आफ्ना सुन्दर हिँडाइ अनि हँसिलो हेराइद्वारा स्वर्गका देवताहरूलाई आनन्द प्रदान गर्ने एवं सुन्दर हार र सुन्दर वस्त्र धारण गरेका अप्सराहरू उत्पन्न भए।

**ततश्चाविरभूत् साक्षाच्छ्री रमा भगवत्परा।**
**रञ्जयन्ती दिशः कान्त्या विद्युत् सौदामनी यथा॥ ८॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
**सौदामनी** = चम्किलो
**विद्युत् यथा** = बिजुली झैं
**कान्त्या** = आफ्नो कान्तिद्वारा
**दिशः** = सम्पूर्ण दिशालाई
**रञ्जयन्ती** = चम्काउँदै
**साक्षात् श्री** = साक्षात् शोभाकी मूर्ति भएकी
**भगवत्परा** = भगवान्‌मा तत्पर
**रमा** = लक्ष्मीजी
**आविः अभूत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** त्यसपछि समुद्रबाट बिजुलीजस्तो चम्किलो आफ्नो शरीरको कान्तिले सारा दिशाहरूलाई चम्काउँदै शोभाकी साक्षात् प्रतिमूर्ति भगवान्‌मा समर्पित लक्ष्मीजी प्रकट हुनुभयो।

**तस्यां चक्रुः स्पृहां सर्वे ससुरासुरमानवाः।**
**रूपौदार्यवयोवर्णमहिमाक्षिप्तचेतसः॥ ९॥**

**पदार्थ–**
**रूपौदार्यवयोवर्णमहिमाक्षिप्तचेतसः** = उहाँको रूप, उदारता, यौवन, सौन्दर्य एवं महिमाद्वारा चित्त आसक्त भएका
**ससुरासुरमानवाः** = देवता, दानव र मानवसमेत
**सर्वे** = सबैले
**तस्यां** = उहाँमाथि
**स्पृहां** = चाहना
**चक्रुः** = गरे

**वाक्यार्थ–** लक्ष्मीजीको दिव्य रूप, उदारता, यौवन, सुन्दरता र महिमाद्वारा सबै प्राणीहरूको मन खिचियो। त्यसैले देवता, दानव र मानवसमेत सबैले उहाँको चाहना गरे।

**तस्या आसनमानिन्ये महेन्द्रो महदद्भुतम् ।**

**मूर्तिमत्यः सरिच्छ्रेष्ठा हेमकुम्भैर्जलं शुचि ॥ १० ॥**

**पदार्थ–**
**महेन्द्रः** = महाराज इन्द्रले
**तस्यै** = उहाँको लागि
**महदद्भुतम्** = विशाल एवं विचित्र
**आसनं** = आसन
**आनिन्ये** = ल्याए
**मूर्तिमत्यः** = मूर्तिमान् भएका
**सरिच्छ्रेष्ठाः** = श्रेष्ठ नदीहरूले
**हेमकुम्भैः** = सुनका कलशहरूमा
**शुचि** = पवित्र
**जलम्** = जल ल्याए

**वाक्यार्थ–** महाराज इन्द्रले लक्ष्मीजीलाई बसाउन विचित्र प्रकारको विशाल आसन ल्याएर दिए। श्रेष्ठ नदीहरूले पनि मूर्तिमान् भई सुनका कलशहरूमा पवित्र जल ल्याए।

**आभिषेचनिका भूमिराहरत् सकलौषधीः ।**

**गावः पञ्च पवित्राणि वसन्तो मधुमाधवौ ॥ ११ ॥**

**पदार्थ–**
**भूमिः** = पृथिवीले
**आभिषेचनिकाः** = अभिषेकका लागि चाहिने
**सकलौषधीः** = सबै प्रकारका औषधिहरूलाई
**आहरत्** = ल्याइन्
**गावः** = गाईहरूले
**पवित्राणि** = पवित्र
**पञ्च** = पञ्चगव्य दिए भने
**वसन्तः** = वसन्त ऋतुले
**मधुमाधवौ** = चैत र वैशाखमा हुने फलफूलहरू तयार पारे

**वाक्यार्थ–** पृथिवीले अभिषेकका लागि चाहिने सबैथरी औषधिहरूलाई ल्याइदिइन्। गाईहरूले दूध, दही, घिउ आदि पवित्र पञ्चगव्य दिए भने वसन्त ऋतुले पनि चैत र वैशाखमा हुने फलफूलहरू दिए।

**ऋषयः कल्पयाञ्चक्रुरभिषेकं यथाविधि ।**

**जगुर्भद्राणि गन्धर्वा नट्यश्च ननृतुर्जगुः ॥ १२ ॥**

**पदार्थ–**
**ऋषयः** = ऋषिहरूले
**यथाविधि** = विधिपूर्वक
**अभिषेकं** = अभिषेकको सामग्री
**कल्पयाञ्चक्रुः** = तयार गर्न थाले
**गन्धर्वाः** = गन्धर्वहरूले
**भद्राणि** = मङ्गलमय गीतहरू
**जगुः** = गाए भने
**नट्यः च** = नर्तकीहरूले पनि
**ननृतुः** = नाचे र
**जगुः** = गाए

**वाक्यार्थ–** ऋषिहरूले शास्त्रविधिअनुसार अभिषेकको सामग्री तयार गर्न थाले। गन्धर्वहरूले मङ्गलमय गीतहरू गाए भने नर्तकीहरूले पनि नाच्ने-गाउने काम गरे।

**मेघा मृदङ्गपणवमुरजानकगोमुखान् ।**

**व्यनादयञ्छङ्खवेणुवीणास्तुमुलनिःस्वनान् ॥ १३ ॥**

**पदार्थ–**
**मेघाः** = बादलहरूले
**तुमुलनिःस्वनान्** = ठुलो स्वरले
**मृदङ्गपणवमुरजानकगोमुखान्** = मृदङ्ग, डमरु, ढोल, नगाडा र नरसिङ्गाहरू
**शङ्खवेणुवीणाः** = शङ्ख, मुरली र वीणा पनि
**व्यनादयन्** = बजाए

**वाक्यार्थ–** बादलहरूले मूर्तिमान् भई ठुलो स्वरले मृदङ्ग, डमरु, नगाडा, नरसिङ्गा, शङ्ख, मुरली, वीणा आदि वाद्यसामग्रीहरू बजाए।

**ततोऽभिषिषिचुर्देवीं श्रियं पद्‌मकरां सतीम्।**
**दिग्गिभाः पूर्णकलशैः सूक्तवाक्यैर्द्विजेरितैः ॥ १४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**द्विजेरितैः** = ब्राह्मणहरूद्वारा पढिएको
**सूक्तवाक्यैः** = वेदमन्त्रका सूक्तहरूद्वारा
**पूर्णकलशैः** = जलपूर्ण कलशहरू लिएर
**दिग्गिभाः** = दिग्गजहरूले
**पद्‌मकरां** = हातमा कमलको फूल लिएकी
**सतीम्** = आसनमा बसेकी
**श्रियं देवीं** = लक्ष्मी देवीलाई
**अभिषिषिचुः** = अभिषेक गरे

**वाक्यार्थ–** त्यसपछि ब्राह्मणहरूद्वारा पढिएका वेदमन्त्रका सूक्तहरूद्वारा पवित्र भएका जलपूर्ण कलशहरू लिएका दिग्गजहरूले हातमा कमल लिएर आसनमा बसिरहेकी लक्ष्मीदेवीलाई अभिषेक गरे।

**समुद्रः पीतकौशेयवाससी समुपाहरत्।**
**वरुणः स्रजं वैजयन्तीं मधुना मत्तषट्पदाम्॥ १५ ॥**

**पदार्थ–**
**समुद्रः** = समुद्रले
**पीतकौशेयवाससी** = रेशमका पहैँला कपडा
**समुपाहरत्** = चढाए
**वरुणः** = वरुणले
**मधुना** = मह (पुष्पपराग)का कारणले
**मत्तषट्पदाम्** = मत्त भएका भँवराहरूले युक्त
**वैजयन्तीं** = वैजयन्ती
**स्रजम्** = माला (समर्पण गरे)

**वाक्यार्थ–** समुद्रले रेशमका पहैँला कपडा उपहार दिए भने वरुणले पुष्पपरागले गर्दा मत्त भएका भँवराहरूले युक्त वैजयन्तीमाला अर्पण गरे।

**भूषणानि विचित्राणि विश्वकर्मा प्रजापतिः।**
**हारं सरस्वती पद्‌ममजो नागाश्च कुण्डले ॥ १६ ॥**

**पदार्थ–**
**प्रजापतिः** = प्रजापति
**विश्वकर्मा** = विश्वकर्माले
**विचित्राणि** = अनेकथरी
**भूषणानि** = गहनाहरू दिए
**सरस्वती** = सरस्वतीले
**हारं** = हार
**अजः** = ब्रह्माजीले
**पद्‌मं** = कमलको फूल र
**नागाः च** = नागहरूले
**कुण्डले** = दुई ओटा कुण्डल (दिए)

**वाक्यार्थ–** प्रजापति विश्वकर्माले अनेकथरी गहनाहरू दिए। सरस्वतीले हार, ब्रह्माजीले कमलको फूल र नागहरूले दुई ओटा कुण्डल दिए।

**ततः कृतस्वस्त्ययनोत्पलस्रजं नदद्द्विरेफां परिगृह्य पाणिना।**
**चचाल वक्त्रं सुकपोलकुण्डलं सव्रीडहासं दधती सुशोभनम्॥ १७॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**कृतस्वस्त्ययना** = स्वस्तिपाठ गरिएकी लक्ष्मी
**पाणिना** = हातमा
**नदद्द्विरेफां** = मत्त भँवराहरू गुन्जिरहेको
**उत्पलस्रजं** = कमलको मालालाई
**परिगृह्य** = लिएर
**सुकपोलकुण्डलं** = गालासम्म झुन्डिएका कुण्डल र
**सव्रीडहासं** = लज्जासहितको मधुर हाँसोले युक्त
**सुशोभनम्** = असाध्यै सुन्दर
**वक्त्रं** = अनुहार
**दधती** = बनाउँदै
**चचाल** = हिँड्न थाल्नुभयो

**वाक्यार्थ–** लक्ष्मी देवीका लागि ब्राह्मणहरूले स्वस्तिवाचन गरिसकेपछि उहाँ आफ्ना हातमा कमलपुष्पको माला लिएर (त्यो वरमाला सर्वगुणसम्पन्न पुरुषलाई पहिऱ्याउनका लागि) हिँड्नुभयो। त्यस मालामा मत्त भँवराहरू गुन्जिरहेका थिए। गालासम्म झुन्डिएका कुण्डल र लज्जासहितको मधुर हाँसोले गर्दा उहाँको मुखको सुन्दरता झन् बढेको थियो।

**स्तनद्वयं चातिकृशोदरी समं निरन्तरं चन्दनकुङ्कुमोक्षितम्।**
**ततस्ततो नूपुरवल्गुशिञ्जितैर्विसर्पती हेमलतेव सा बभौ॥ १८॥**

**पदार्थ–**
**अतिकृशोदरी** = अत्यन्त पातलो कम्मर भएकी लक्ष्मीजी
**चन्दनकुङ्कुमोक्षितम्** = चन्दन र केसरद्वारा लिप्त
**निरन्तरं** = जोडिएका
**समं च** = बराबर
**स्तनद्वयं** = दुई स्तनले युक्त हुनुहुन्थ्यो
**नूपुरवल्गुशिञ्जितैः** = पाउजुको मिठो झङ्कार गर्दै
**ततः ततः** = यता–उता
**विसर्पती** = हिँडिरहेकी
**सा** = उहाँ
**हेमलता इव** = सुनको लहरा हिँडिरहे झैँ
**बभौ** = सुशोभित देखिनुभयो

**वाक्यार्थ–** अत्यन्त पातलो कम्मर भएकी भगवती लक्ष्मी केशर र चन्दनको लेप लगाइएका बराबर र एकआपसमा जोडिएका दुई स्तनले युक्त हुनुहुन्थ्यो। पाउजुद्वारा मिठो झङ्कार उत्पन्न गर्दै हिँडिरहँदा उहाँ सुनको लहरा नै यताउता हिँडिरहे झैँ सुशोभित देखिनुभएको थियो।

**विलोकयन्ती निरवद्यमात्मनः पदं ध्रुवं चाव्यभिचारिसद्गुणम्।**
**गन्धर्वयक्षासुरसिद्धचारणत्रैविष्टपेयादिषु नान्वविन्दत॥ १९॥**

**पदार्थ–**
**अव्यभिचारिसद्गुणम्** = कहिल्यै नहट्ने सद्गुणहरूले युक्त
**निरवद्यं** = अनिन्द्य
**ध्रुवं च** = नित्य
**आत्मनः** = आफ्नो

**पदं** = आश्रयलाई
**विलोकयन्ती** = खोजिरहेकी लक्ष्मीजीले
**गन्धर्वयक्षासुरसिद्धचारण-त्रैविष्टपेयादिषु** = गन्धर्व, यक्ष, असुर, सिद्ध, चारण र देवगणको समूहमा
**न अन्वविन्दत** = त्यस्तो वर पाउनुभएन

**वाक्यार्थ–** जसबाट सद्‌गुणहरू कहिल्यै नहटून् र जो आफ्नो अनिन्द्य एवं नित्य आश्रय होस् यस्तो वर खोजिरहेकी लक्ष्मीजीले गन्धर्व, सिद्ध, असुर, यक्ष, चारण र देवगणको समूहमा खोजेबमोजिमको वर पाउनुभएन।

**नूनं तपो यस्य न मन्युनिर्जयो ज्ञानं क्वचित् तच्च न सङ्गवर्जितम्।**
**कश्चिन्महांस्तस्य न कामनिर्जयः स ईश्वरः किं परतो व्यपाश्रयः॥२०॥**

**पदार्थ–**
**नूनं** = निश्चय नै
**यस्य** = जसको
**तपः** = तपस्या छ
**मन्युनिर्जयः** = (तर) क्रोधविजय
**न** = छैन
**क्वचित्** = कसैमा
**ज्ञानं** = ज्ञान छ
**तत् च** = त्यो ज्ञान
**सङ्गवर्जितम् न** = आसक्तिरहित छैन
**कश्चित्** = कोही
**महान्** = महान् छ
**तस्य** = त्यसको
**कामनिर्जयः न** = कामविजय छैन
**सः** = त्यस्तो
**ईश्वरः किं** = ईश्वर कसरी होस् जो
**परतोव्यपाश्रयः** = अर्काको आधारमा ऐश्वर्यवान् बनेको होस्

**वाक्यार्थ–** जो तपस्वी छ उसले क्रोधलाई जितेको छैन। कोही ज्ञानी छ, तर ऊ आसक्तिरहित छैन। कोही महान् छ, तर उसले कामवासनालाई जितेको छैन। कोही ऐश्वर्यशाली छ, तर उसको ऐश्वर्य अर्काको आधारमा टिकेकाले उसलाई ईश्वर भन्न मिल्दैन।

**धर्मः क्वचित् तत्र न भूतसौहृदं त्यागः क्वचित् तत्र न मुक्तिकारणम्।**
**वीर्यं न पुंसोऽस्त्यजवेगनिष्कृतं न हि द्वितीयो गुणसङ्गवर्जितः॥ २१॥**

**पदार्थ–**
**क्वचित्** = कहीँ
**धर्मः** = धर्म छ
**तत्र** = त्यहाँ
**भूतसौहृदं न** = प्राणीसँग मित्रता छैन
**क्वचित्** = कहीँ
**त्यागः** = त्याग छ
**तत्र** = त्यो
**मुक्तिकारणम् न** = मुक्तिको साधन भएको छैन
**पुंसः** = बलशाली पुरुषको पनि
**अजवेगनिष्कृतं** = कालको वेगले प्रभावित नहुने
**वीर्यं** = पराक्रम
**न अस्ति** = छैन
**गुणसङ्गवर्जितः** = विषयको आसक्तिले रहित भएकाको लागि त
**द्वितीयः** = अर्को व्यक्ति नै
**न हि** = छँदैछैन

**वाक्यार्थ–** कसैमा धर्म छ, तर प्राणीहरूसँग मित्रता छैन, कसैमा त्याग छ तर त्यो त्याग मोक्षको कारण बनेको छैन। बलशाली पुरुषहरू छन्, तर उनीहरूको पराक्रम कालको वेगले नष्ट हुन्छ अनि जो आसक्तिले रहित छन्, उनीहरूको लागि त आफूभन्दा अर्को व्यक्तिको भान नै छैन।

**क्वचिच्चिरायुर्न हि शीलमङ्गलं क्वचित् तदप्यस्ति न वेद्यमायुषः।**
**यत्रोभयं कुत्र च सोऽप्यमङ्गलः सुमङ्गलः कश्च न काङ्क्षते हि माम्॥२२॥**

**पदार्थ—**
**क्वचित्** = कहीँ
**चिरायुः** = लामो आयु छ
**शीलमङ्गलं** = माङ्गलिक स्वभाव
**न हि** = छैन
**क्वचित्** = कहीँ
**तत् अपि** = त्यो पनि (मङ्गलस्वभाव)
**अस्ति** = छ
**आयुषः** = आयुको
**वेद्यं न** = केही ठेगान छैन
**यत्र कुत्र च** = कहीँ–कहीँ मात्र
**उभयं** = मङ्गल स्वभाव र आयु दुबै छन्
**सः अपि** = उनी पनि
**अमङ्गलः** = अमङ्गल वेषभूषामा देखिन्छन्
**कः** = कोही
**सुमङ्गलः च** = मङ्गल भएर पनि
**माम्** = म (लक्ष्मी)लाई
**न हि काङ्क्षते** = चाहँदैनन्

**वाक्यार्थ—** कोहीसँग लामो आयु छ तर माङ्गलिक स्वभाव छैन। कसैमा शीलस्वभाव ठीक छ, तर उसको आयुको भरोसा नै छैन। आयु र शीलस्वभाव ठीक हुने पनि कोही–कोही छन्, तर त्यस्ताले बाहिर आफ्नो अमङ्गल वेश देखाउँछन्। सम्पूर्ण रूपले मङ्गल भएकाले चाहिँ म (लक्ष्मी)लाई चाहँदैनन्।

**विवरण—** यहाँ लक्ष्मीजीले वर खोज्नुभएको प्रसङ्गको वर्णन गरिएको छ। लक्ष्मीजीले अनन्त सद्गुणहरूले युक्त वर खोज्नुभएको छ। तर उहाँले सद्गुणहरूले कहिल्यै नछोड्ने पुरुष देवता, गन्धर्व, यक्ष आदिको समूहमा भेट्टाउनुभएन। दुर्वासा आदि ऋषिहरू तपस्वी थिए तर उनीहरूले रिसको आवेगलाई नियन्त्रण गर्न सकेका थिएनन्। देवता र दानवका गुरुहरू बृहस्पति र शुक्राचार्य ज्ञानी अवश्य थिए तर उनीहरूको ज्ञान आसक्तिले भरिएको थियो। आ–आफ्ना पक्षमा आसक्त भएकाले उनीहरूको ज्ञान पनि उत्कृष्ट थिएन। ब्रह्माजी, चन्द्रमा आदि ठुला देवता थिए तर उनीहरूले कामवासनालाई जित्न सकेका थिएनन्। तीनै लोकका राजा र समर्थ भए पनि इन्द्रको सामर्थ्य अरूको सहायतामा निर्भर रहन्थ्यो। परशुराम आदिमा धर्म भएर पनि प्राणीहरूमाथि दया थिएन। शिवि राजा आदिले गरेका महान् त्यागहरू पनि मुक्तिका साधन भएका थिएनन्। त्यसै गरी कार्तवीर्यार्जुन आदि वीर राजाहरू थिए तर उनीहरूको वीरता कालको प्रभावले समाप्त हुन्थ्यो। सनक आदि पनि योग्य थिएनन् किनभने उनीहरू गुणहरूको सङ्गले रहित भए तापनि निरन्तर समाधिनिष्ठ थिए, उनीहरूमा आफू र अरू भन्ने द्वितीय वस्तुको भान नै थिएन। मार्कण्डेय आदि ऋषि चिरञ्जीवी भएर पनि उनीहरूमा इन्द्रियनिग्रह आदि कठोर शीलस्वभाव थियो। अनन्त वैभवशाली हिरण्यकशिपु आदि भगवान्को द्वेषी भएकाले कुन वेला मर्ने हुन् थाहा थिएन। भगवान् शङ्करमा सबै सद्गुणहरू थिए तर उहाँका आचरण अनौठा खालका थिए। उहाँको श्मसानमा बस्ने, भूत आदि गणहरूद्वारा घेरिएर रहने, चिताभस्म लगाउने आदि अमङ्गल आचरण थियो। मङ्गलमय आचरण भएका भगवान् विष्णु हुनुहुन्थ्यो। उहाँको स्वभाव ऐश्वर्यशाली र गम्भीर थियो तर उहाँले लक्ष्मीलाई चाहनु नै भएन। यसरी लक्ष्मीले त्यो समूहमा आफूलाई हुने एउटै पनि वर देख्नुभएन। तर अन्तिममा उहाँले आफूलाई त्यति नचाहने भए पनि

सद्गुणहरूले नित्ययुक्त भगवान् विष्णुलाई नै वर रोज्नुभयो।

यस प्रसङ्गबाट लक्ष्मी तपस्या, धर्म, ज्ञान, प्राणीदया, पराक्रम, मङ्गलमय आचरण, काम र क्रोधको विजय आदि सम्पूर्ण सद्गुणहरू भएको व्यक्तिलाई उसले नचाहँदा नचाहँदै पनि चाहनुहुन्छ र त्यस्तो व्यक्तिसँग सधैँ रहनुहुन्छ भन्ने तथ्य स्पष्ट हुन्छ।

**एवं विमृश्याव्यभिचारिसद्गुणैर्वरं निजैकाश्रयतागुणाश्रयम्।**
**वव्रे वरं सर्वगुणैरपेक्षितं रमा मुकुन्दं निरपेक्षमीप्सितम्॥ २३॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**विमृश्य** = विचार गरेर
**रमा** = लक्ष्मीले
**अव्यभिचारिसद्गुणैः** = कहिल्यै नहट्ने सद्गुणहरूले र
**निजैकाश्रयतया** = आफ्नो एक मात्र आश्रय भएकाले
**वरं** = सर्वश्रेष्ठ हुनुभएका
**अगुणाश्रयम्** = प्रकृतिका गुणहरूदेखि पर
**निरपेक्षं** = निरपेक्ष भएर पनि
**सर्वगुणैः** = अणिमा आदि अनेक गुण (सिद्धि)हरूद्वारा
**अपेक्षितं** = आश्रित
**ईप्सितम्** = आफूलाई मन पर्ने
**मुकुन्दं** = मुकुन्द भगवान्लाई नै
**वरं** = वर
**वव्रे** = वरण गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार सोचविचार गरी लक्ष्मीले जसबाट सद्गुणहरू कहिल्यै हट्दैनन्, त्यस्ता आफ्ना एक मात्र सर्वश्रेष्ठ आश्रय, प्रकृतिका गुणहरूदेखि पर र निरपेक्ष भएर पनि अणिमा आदि अनेक सिद्धिहरूद्वारा आश्रित भगवान् मुकुन्दलाई नै वरका रूपमा वरण गर्नुभयो।

**विवरण–** श्लोकमा आएको **सर्वगुणैः** भन्ने पदको अर्थ हुन्छ– अणिमा आदि सिद्धिहरूद्वारा। भगवान्ले आफूलाई नचाहेको देखेपछि लक्ष्मीजी अल्मलिनुभयो, तर उहाँले अणिमा आदि सिद्धिहरू भगवान् मुकुन्दमा रहिरहेको देख्नुभयो। जसरी चाहना नगर्दा नगर्दै पनि आएका अणिमा आदि सिद्धिहरूलाई भगवान्ले उपेक्षा गर्नुभएको छैन, अपितु शरण नै दिनुभएको छ त्यसै गरी मलाई पनि भगवान्ले स्थान अवश्य दिनुहोला भन्ने आशाले लक्ष्मीजीले भगवान् मुकुन्दलाई वरण गर्नुभयो।

**तस्यांसदेश उशतीं नवकञ्जमालां**
**माद्यन्मधुव्रतवरूथगिरोपघुष्टाम्।**
**तस्थौ निधाय निकटे तदुरः स्वधाम**
**सव्रीडहासविकसन्नयनेन याता॥२४॥**

**पदार्थ–**
**याता** = भगवान्को नजिक पुगेकी (लक्ष्मीजीले)
**तस्य** = उहाँको
**अंसदेशे** = घाँटीमा
**उशतीं** = सुन्दर
**माद्यन्मधुव्रतवरूथगिरोपघुष्टाम्** = मत्त भएका भमराहरूको गुञ्जनले युक्त
**नवकञ्जमालां** = ताजा कमलको माला
**निधाय** = लगाइदिएर

**सव्रीडहासविकसन्नयनेन** = लजालु हँसाइ एवं विस्फारित (प्रेमपूर्ण) नयनले
**स्वधाम** = आफ्नो वासस्थान
**तदुरः** = उहाँको वक्षःस्थललाई (हेर्दै)
**निकटे** = उहाँको नजिक
**तस्थौ** = बस्नुभयो

**वाक्यार्थ–** लक्ष्मीजीले भगवान्को नजिक पुगेर मत्त भएका भमराहरूको गुञ्जनले युक्त त्यो सुन्दर एवं ताजा कमलपुष्पको मालालाई उहाँको घाँटीमा लगाइदिनुभयो। अनि लजालु हँसाइ एवं प्रेमपूर्ण हेराइले युक्त भई आफ्नो योग्य निवासस्थान भगवान्कै वक्षःस्थललाई हेर्दै उहाँको नजिक बस्नुभयो।

**तस्याः श्रियस्त्रिजगतो जनको जनन्या**
**वक्षो निवासमकरोत् परमं विभूतेः।**
**श्रीः स्वाः प्रजाः सकरुणेन निरीक्षणेन**
**यत्र स्थितैधयत साधिपतींस्त्रिलोकान्॥ २५॥**

**पदार्थ–**
**जनकः** = जगत्पिता भगवान्ले
**त्रिजगतः** = तीनै लोकको
**जनन्याः** = जननी
**विभूतेः** = सम्पत्तिकी (अधिष्ठात्री देवता)
**तस्याः** = ती
**श्रियः** = लक्ष्मीजीको लागि
**वक्षः** = आफ्नो छाती नै
**परमं** = स्थिर
**निवासं** = आसन
**अकरोत्** = बनाउनुभयो
**यत्र** = जहाँ
**स्थिता** = बसेकी
**श्रीः** = लक्ष्मीजीले
**सकरुणेन** = करुणापूर्ण
**निरीक्षणेन** = हेराइद्वारा
**साधिपतीन्** = लोकपालहरूसहित
**त्रिलोकान्** = तीनै लोकलाई
**स्वाः** = आफ्ना
**प्रजाः** = प्रजाहरूलाई पनि
**ऐधयत** = बढाउनुभयो

**वाक्यार्थ–** जगत्पिता परमात्माले पनि ती सम्पत्तिकी अधिष्ठात्री देवी लक्ष्मीजीलाई आफ्नो छाती नै स्थिर आसनको रूपमा दिनुभयो। लक्ष्मीजीले पनि त्यहाँ बसेर आफ्नो करुण दृष्टिद्वारा लोकपालहरूसहित तीनै लोकलाई र आफ्ना प्रजाहरूलाई पनि बढाउनुभयो।

**शङ्खतूर्यमृदङ्गानां वादित्राणां पृथुः स्वनः।**
**देवानुगानां सस्त्रीणां नृत्यतां गायतामभूत्॥ २६॥**

**पदार्थ–**
**सस्त्रीणां** = अप्सराहरूले सहित
**देवानुगानां** = देवताका अनुचर गन्धर्वहरूले
**नृत्यतां** = नाच्दा र
**गायतां** = गाइरहँदा
**शङ्खतूर्यमृदङ्गानां** = शङ्ख, तुरही, मृदङ्ग आदि
**वादित्राणां** = बाजाहरूको
**पृथुः** = ठुलो
**स्वनः** = स्वर
**अभूत्** = उत्पन्न भयो

**वाक्यार्थ–** त्यस समयमा अप्सराहरूले सहित भई देवानुचर गन्धर्वहरू नाच्न र गाउन थाले अनि शङ्ख, तुरही, मृदङ्ग आदि बाजाहरू पनि ठुलो स्वरले बज्न थाले।

**ब्रह्मरुद्राङ्गिरोमुख्याः सर्वे विश्वसृजो विभुम् ।**
**ईडिरेऽवितथैर्मन्त्रैस्तल्लिङ्गैः पुष्पवर्षिणः ॥ २७ ॥**

**पदार्थ–**
**पुष्पवर्षिणः** = पुष्पवर्षा गरिरहेका
**ब्रह्मरुद्राङ्गिरोमुख्याः** = ब्रह्मा, रुद्र र अङ्गिरा आदि
**सर्वे** = सबै
**विश्वसृजः** = प्रजापतिहरूले
**तल्लिङ्गैः** = भगवान्को चरित्रलाई बताउने
**अवितथैः** = अमोघ
**मन्त्रैः** = मन्त्रहरूद्वारा
**विभुम्** = श्रीहरि भगवान्लाई
**ईडिरे** = स्तुति गरे

**वाक्यार्थ–** ब्रह्मा, रुद्र र अङ्गिरा आदि सम्पूर्ण प्रजापतिहरूले पुष्पवृष्टि गर्दै भगवान्का चरित्रलाई बताउने अमोघ मन्त्रहरूद्वारा श्रीहरि भगवान्को स्तुति गरे।

**श्रियावलोकिता देवाः सप्रजापतयः प्रजाः ।**
**शीलादिगुणसम्पन्ना लेभिरे निर्वृतिं पराम् ॥ २८ ॥**

**पदार्थ–**
**श्रिया** = लक्ष्मीजीद्वारा
**अवलोकिताः** = (करुण दृष्टिले) हेरिएका
**देवाः** = देवताहरू
**सप्रजापतयः** = प्रजापतिसमेतका
**प्रजाः** = सम्पूर्ण प्रजाहरू पनि
**शीलादिगुणसम्पन्नाः** = शील आदि उत्तम गुणहरूले युक्त भई
**पराम्** = परम
**निर्वृतिं** = सुख
**लेभिरे** = पाए

**वाक्यार्थ–** लक्ष्मीजीको करुणापूर्ण दृष्टिद्वारा हेरिएका सम्पूर्ण देवताहरू, प्रजापतिहरू एवं सम्पूर्ण प्रजाहरू शील आदि उत्तम गुणहरूबाट युक्त भए र परम सुखी भए।

**निःसत्त्वा लोलुपा राजन् निरुद्योगा गतत्रपाः ।**
**यदा चोपेक्षिता लक्ष्म्या बभूवुर्दैत्यदानवाः ॥ २९ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**यदा च** = जब
**दैत्यदानवाः** = दैत्य र दानवहरू
**लक्ष्म्या** = लक्ष्मीद्वारा
**उपेक्षिताः** = उपेक्षित भए (तब)
**निःसत्त्वाः** = निर्बल
**लोलुपाः** = लोभी
**निरुद्योगाः** = परिश्रम नगर्ने एवं
**गतत्रपाः** = लज्जारहित
**बभूवुः** = भए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! लक्ष्मीजीद्वारा उपेक्षित भएका दैत्य र दानवहरू चाहिँ निर्बल, लोभी, परिश्रम नगर्ने र लाज हराएका भए।

**अथासीद् वारुणी देवी कन्या कमललोचना ।**
**असुरा जगृहुस्तां वै हरेरनुमतेन ते ॥ ३० ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**कमललोचना** = कमलनयनी

**वारुणी देवी** = वारुणी देवी नामकी
**कन्या** = कन्या
**आसीत्** = प्रकट भइन्
**वै** = निश्चय नै
**हरेः** = श्रीहरि भगवान्को
**अनुमतेन** = अनुमतिले
**ते** = ती
**असुराः** = असुरहरूले
**तां** = तिनलाई
**जगृहुः** = ग्रहण गरे

**वाक्यार्थ–** त्यसपछि वारुणी देवी नामकी एउटी कमलनयनी कन्या प्रकट भइन्। श्रीहरि भगवान्को अनुमतिले असुरहरूले तिनलाई लिए।

**अथोदधेर्मथ्यमानात् काश्यपैरमृतार्थिभिः।**
**उदतिष्ठन्महाराज पुरुषः परमाद्भुतः॥ ३१॥**

**पदार्थ–**
**महाराज** = हे महाराज परीक्षित्
**अथ** = त्यसपछि
**अमृतार्थिभिः** = अमृत चाहने
**काश्यपैः** = कश्यपका सन्तान देवता र दावनहरूद्वारा
**मथ्यमानात्** = मन्थन गरिरहिएको
**उदधेः** = समुद्रबाट
**परमाद्भुतः** = अत्यन्त अद्भुत
**पुरुषः** = पुरुष
**उदतिष्ठत्** = उत्पन्न भए

**वाक्यार्थ–** हे महाराज परीक्षित् ! कश्यपका सन्तान देवता र दावनहरूले अमृतको चाहनाले यसप्रकार समुद्रमन्थन गर्दागर्दै त्यहाँबाट एउटा अत्यन्त अद्भुत पुरुष प्रकट भए।

**दीर्घपीवरदोर्दण्डः कम्बुग्रीवोऽरुणेक्षणः।**
**श्यामलस्तरुणः स्रग्वी सर्वाभरणभूषितः॥ ३२॥**
**पीतवासा महोरस्कः सुमृष्टमणिकुण्डलः।**
**स्निग्धकुञ्चितकेशान्तः सुभगः सिंहविक्रमः॥ ३३॥**
**अमृतापूर्णकलशं बिभ्रद् वलयभूषितः।**
**स वै भगवतः साक्षाद् विष्णोरंशांशसम्भवः॥ ३४॥**

**पदार्थ–**
**दीर्घपीवरदोर्दण्डः** = लामा र मोटा हात भएका
**कम्बुग्रीवः** = शङ्खजस्तो घाँटी भएका
**अरुणेक्षणः** = राता-राता आँखा भएका
**श्यामलः** = कालो वर्णका
**स्रग्वी** = माला लगाएका
**सर्वाभरणभूषितः** = सबै आभूषणहरूले युक्त भएका
**पीतवासा** = पहेँलो वस्त्र लगाएका
**महोरस्कः** = फराकिलो छाती भएका
**सुमृष्टमणिकुण्डलः** = कानमा चम्किला मणिका कुण्डल लगाएका
**स्निग्धकुञ्चितकेशान्तः** = चिल्ला र घुम्रिएका कपाल भएका
**सिंहविक्रमः** = सिंहसमान पराक्रमी
**सुभगः** = अत्यन्त सुन्दर
**तरुणः** = युवा
**वलयभूषितः** = हातमा बालाहरू लगाएका

**अमृतापूर्णकलशं** = अमृतले पूर्ण कलशलाई
**बिभ्रत्** = लिइरहेका
**सः** = ती श्रेष्ठ पुरुष
**वै** = निश्चय नै
**साक्षात्** = साक्षात्
**भगवतः** = भगवान्
**विष्णोः** = विष्णुको
**अंशांशसम्भवः** = अंशावतारको रूपमा उत्पन्न भएका थिए

**वाक्यार्थ–** लामा र मोटा हातहरू भएका, शङ्खको जस्तो घाँटी भएका, राता-राता आँखा भएका, माला र सबै प्रकारका आभूषणहरूद्वारा सुसज्जित, पहेँलो वस्त्र लगाएका, फराकिलो छाती भएका, मणिमय सुन्दर कुण्डल धारण गरेका, चिल्लो, कालो र घुम्रिएको कपाल भएका अनि सिंहजस्तो पराक्रमी, कालो-कालो वर्ण भएका, हातमा बालाहरू लगाएका, अमृतपूर्ण कलश लिइरहेका अत्यन्त सुन्दर ती पुरुष साक्षात् भगवान् विष्णुकै अंशावतारको रूपमा उत्पन्न भएका थिए।

**धन्वन्तरिरिति ख्यात आयुर्वेददृगिज्यभाक्।**
**तमालोक्यासुराः सर्वे कलशं चामृताभृतम्॥ ३५॥**
**लिप्सन्तः सर्ववस्तूनि कलशं तरसाहरन्।**
**नीयमानेऽसुरैस्तस्मिन् कलशेऽमृतभाजने॥ ३६॥**
**विषण्णमनसो देवा हरिं शरणमाययुः।**
**इति तद्दैन्यमालोक्य भगवान् भृत्यकामकृत्।**
**मा खिद्यत मिथोऽर्थं वः साधयिष्ये स्वमायया॥ ३७॥**

**पदार्थ–**
**आयुर्वेददृक्** = आयुर्वेदका प्रवर्तक
**इज्यभाक्** = यज्ञभाग ग्रहण गर्ने
**धन्वन्तरिः इति** = धन्वन्तरि भनी
**ख्यातः** = प्रख्यात थिए
**सर्ववस्तूनि** = समुद्रबाट निस्कने सबै उत्तम वस्तुहरूलाई
**लिप्सन्तः** = चाहने
**सर्वे** = सबै
**असुराः** = असुरहरूले
**तं** = ती पुरुषलाई र
**अमृताभृतम्** = अमृतपूर्ण
**कलशं च** = कलशलाई पनि
**आलोक्य** = देखेर
**तरसा** = वेगपूर्वक
**कलशं** = कलशलाई
**अहरन्** = लुटे
**तस्मिन्** = त्यो
**अमृतभाजने** = अमृतले भरिएको
**कलशे** = कलश
**असुरैः** = असुरहरूद्वारा
**नीयमाने** = लगिएपछि
**विषण्णमनसः** = दुःखी मन भएका
**देवाः** = देवताहरू
**हरिं** = श्रीहरि भगवान्‌को
**शरणं** = शरणमा
**आययुः** = आए
**इति** = यस्तो
**तद्दैन्यं** = तिनको दुःखलाई
**आलोक्य** = देखेर
**भृत्यकामकृत्** = आफ्ना सेवकहरूको इच्छा पूरा गरिदिने
**भगवान्** = भगवान्‌ले (भन्नुभयो)
**मा खिद्यत** = दुःखी नबन
**स्वमायया** = आफ्नो मायाद्वारा
**मिथः** = उनीहरूलाई एकआपसमा फुटाई

**वः** = तिमीहरूको | **अर्थं** = उद्देश्य | **साधयिष्ये** = पूरा गर्नेछु

**वाक्यार्थ–** समुद्रमन्थनबाट उत्पन्न भएका ती पुरुष आयुर्वेदका प्रवर्तक यज्ञभाग ग्रहणकर्ता धन्वन्तरि नामबाट प्रख्यात भए। समुद्रबाट निस्केका सम्पूर्ण उत्तम वस्तुहरू हाम्रा नै होऊन् भनी चाहने असुरहरूले जब उनलाई र उनले बोकेको अमृतपूर्ण कलशलाई देखे तब उनीहरूले वेगपूर्वक त्यसलाई लुटे। अमृत भरिएको त्यस कलशलाई असुरहरूले लुटेपछि सम्पूर्ण देवताहरू खिन्न भए र भगवान् हरिको शरणमा गए। आफ्ना सेवकहरूको इच्छालाई पूरा गर्नुहुने भगवान्ले आफ्ना अनुचरहरूको दुःखलाई देखी 'हे देवताहरू हो ! दुःखी नबन, म आफ्नो मायाशक्तिद्वारा तिनीहरूलाई फुटाई तिमीहरूको उद्देश्य पूरा गर्नेछु' भन्नुभयो।

**मिथः कलिरभूत् तेषां तदर्थे तर्षचेतसाम्।**

**अहं पूर्वमहं पूर्वं न त्वं न त्वमिति प्रभो॥ ३८॥**

**पदार्थ–**
**प्रभो** = हे परीक्षित्
**तदर्थे** = त्यो अमृतका लागि
**तर्षचेतसाम्** = मन लोभिएका
**तेषां** = ती दैत्यहरूको बीचमा
**अहं पूर्वं** = म पहिले
**अहं पूर्वं** = म पहिले
**न त्वं** = तिमी होइनौ
**न त्वम् इति** = तिमी होइनौ भनी
**मिथः** = आपसमा
**कलिः** = झगडा
**अभूत्** = भयो

**वाक्यार्थ–** अमृतमा लोभिएका दैत्यहरूका बीचमा तिमी होइन, म पहिले अमृत पिउँछु, तिमी होइन, म पहिले पिउँछु भनी आपसमा झगडा भयो।

**देवाः स्वं भागमर्हन्ति ये तुल्यायासहेतवः।**

**सत्रयाग इवैतस्मिन्नेष धर्मः सनातनः॥ ३९॥**

**इति स्वान् प्रत्यषेधन् वै दैतेया जातमत्सराः।**

**दुर्बलाः प्रबलान् राजन् गृहीतकलशान् मुहुः॥ ४०॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**ये** = जो-जो
**तुल्यायासहेतवः** = बराबर परिश्रम गर्ने
**देवाः** = देवताहरू छन्, उनीहरू पनि
**स्वं** = आफ्नो
**भागं** = भाग
**अर्हन्ति** = पाउन योग्य छन्
**सत्रयागे इव** = यज्ञमा झैं
**एतस्मिन्** = यहाँ पनि
**एषः** = यही नै
**सनातनः** = सनातन
**धर्मः** = धर्म हो
**इति** = यसो भन्दै
**दुर्बलाः** = दुर्बल
**दैतेयाः** = दैत्यहरूले
**जातमत्सराः** = बलियाहरूको ईर्ष्या गर्दै
**गृहीतकलशान्** = अमृतको कलश लुट्ने
**प्रबलान्** = आफूभन्दा बलिया
**स्वान्** = दैत्यहरूलाई नै पनि
**मुहुः** = बारम्बार
**प्रत्यषेधन् वै** = अमृत पिउन रोकिरहे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! ती मध्ये जो-जो दैत्यहरू दुर्बल थिए उनीहरूले बराबर परिश्रम

गर्ने देवताहरूले पनि आफ्नो भाग पाउनुपर्दछ, यज्ञविधिमा जस्तो यहाँ पनि यही नै सनातन धर्म हो भन्दै अमृतकलशलाई लुछालुछ गर्ने आफ्नै जातिका बलिया दैत्यहरूको ईर्ष्या गर्दै उनीहरूलाई अमृत पिउन रोकिरहेका थिए।

**एतस्मिन्नन्तरे विष्णुः सर्वोपायविदीश्वरः।**
**योषिद्रूपमनिर्देश्यं दधार परमाद्भुतम्॥ ४१॥**

**पदार्थ—**
**एतस्मिन्** = यही
**अन्तरे** = बीचमा
**सर्वोपायवित्** = सबै उपायहरू जान्ने
**ईश्वरः** = सर्वमसर्थ
**विष्णुः** = भगवान् विष्णुले
**परमाद्भुतम्** = अत्यन्त आश्चर्यमय
**अनिर्देश्यं** = अवर्णनीय सुन्दरी
**योषिद्रूपं** = स्त्रीको रूप
**दधार** = धारण गर्नुभयो

**वाक्यार्थ—** यही समयको बीचमा सबै उपायहरू जान्ने सर्वसमर्थ भगवान् विष्णुले अत्यन्त आश्चर्यमय एवं ज्यादै सुन्दरी स्त्रीको स्वरूप धारण गर्नुभयो।

**प्रेक्षणीयोत्पलश्यामं सर्वावयवसुन्दरम्।**
**समानकर्णाभरणं सुकपोलोन्नसाननम्॥ ४२॥**
**नवयौवननिर्वृत्तस्तनभारकृशोदरम्।**
**मुखामोदानुरक्तालिझङ्कारोद्विग्नलोचनम्॥ ४३॥**
**बिभ्रत्स्वकेशभारेण मालामुत्फुल्लमल्लिकाम्।**
**सुग्रीवकण्ठाभरणं सुभुजाङ्गदभूषितम्॥ ४४॥**
**विरजाम्बरसंवीतनितम्बद्वीपशोभया।**
**काञ्च्या प्रविलसद्वल्गुचलच्चरणनूपुरम्॥ ४५॥**

**पदार्थ—**
**प्रेक्षणीयोत्पलश्यामं** = नीलकमलसमान हेरिरहूँ जस्तो लाग्ने
**सर्वावयवसुन्दरम्** = सबै अङ्गहरू सुन्दर भएको
**समानकर्णाभरणं** = कानहरूमा समान कुण्डल लगाएको
**सुकपोलोन्नसाननम्** = सुन्दर गाला, उँचो नाक र राम्रो मुख भएको
**नवयौवननिर्वृत्तस्तनभार-कृशोदरम्** = नयाँ जवानीमा उठेका स्तनका भारहरूले दबिएको पातलो कम्मरले युक्त
**मुखामोदानुरक्तालिझङ्कारोद्विग्न-लोचनम्** = मुखसुगन्धको कारणले झुम्मिएका भँवराहरूसँग डराएको जस्तै चञ्चल आँखा भएको
**स्वकेशभारेण** = आफ्नो केशभारद्वारा
**उत्फुल्लमल्लिकाम्** = मल्लिका फूलले गाँसेको
**मालां** = मालालाई
**बिभ्रत्** = धारण गरेको
**सुग्रीवकण्ठाभरणं** = गहनाले

घाँटी झन् सुन्दर भएको **सुभुजाङ्गदभूषितम्** = राम्रा हातहरूमा बाजु पनि लगाएको **विरजाम्बरसंवीतनितम्बद्वीपशोभया** = स्वच्छ साडीले ढाकिएका उठेका नितम्बद्वीपद्वारा सुशोभित भएको **काञ्च्या** = मेखलाद्वारा **प्रविलसत्** = अत्यन्त शोभित एवं **वल्गुचलच्चरणनूपुरम्** = आकर्षक गतिमा हिँड्दा छम-छम बजिरहेका पाउजुद्वारा पनि उनको त्यो शरीर सुशोभित भएको थियो

**वाक्यार्थ–** नीलकमलसमान वर्णको र हेरिरहूँ जस्तो लाग्ने, सबै अङ्ग-प्रत्यङ्गहरू सुन्दर भएको, कानहरूमा समान र राम्रा कुण्डल सजिएको, सुन्दर गाला, उँचो नाक र राम्रो मुख भएको, नयाँ जवानीमा उठेका स्तनको भार थाम्न नसके झैँ कम्मर पातलिएको, मुखको सुगन्धमा झुम्मिएका भँवराहरूसँग डराए झैँ चञ्चल आँखा भएको, भारयुक्त घना केशहरूमा मल्लिका फूलको माला लगाइएको, गहनाहरूले गर्दा घाँटी झन् सुन्दर भएको, राम्रा हातहरूमा बाजु लगाइएको, स्वच्छ साडीले ढाकिएर उठेका द्वीपजस्ता लाग्ने नितम्बले शोभित भएको, मेखलाद्वारा रूपसौन्दर्य झन् बढिरहेको एवं आकर्षक गतिमा हिँड्दा छम-छम बजिरहेका पाउजुद्वारा पनि उनको त्यो शरीर ज्यादै सुशोभित भएको थियो।

**सव्रीडस्मितविक्षिप्तभ्रूविलासावलोकनैः।**
**दैत्ययूथपचेतःसु काममुद्दीपयन्मुहुः॥ ४६॥**

**पदार्थ–** **सव्रीडस्मितविक्षिप्तभ्रूविलासावलोकनैः** = लजालु हाँसो, टेढिँदै नाचिरहेका आँखीभौँ र आकर्षक हेराइद्वारा **दैत्ययूथपचेतःसु** = दैत्यसेनापतिहरूको मनभित्र **मुहुः** = बारम्बार **कामं** = तीव्र कामभाव **उद्दीपयन्** = जगाउँदै (भगवान् विष्णु मोहिनीरूपमा प्रकट हुनुभयो)

**वाक्यार्थ–** आफ्ना लजालु हाँसो, टेढिँदै नाचिरहेका आँखीभौँ र आकर्षक हेराइद्वारा दैत्यसेनापतिहरूको मनभित्र तीव्र कामभाव जगाउँदै भगवान् विष्णु मोहिनीरूपमा प्रकट हुनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**
**भगवन्मायोपलम्भनं नामाष्टमोऽध्यायः॥ ८॥**

# अथ नवमोऽध्यायः

## मोहिनीरूप भगवान्द्वारा अमृतवितरण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तेऽन्योन्यतोऽसुराः पात्रं हरन्तस्त्यक्तसौहृदाः ।**

**क्षिपन्तो दस्युधर्माण आयान्तीं ददृशुः स्त्रियम् ॥ १ ॥**

**पदार्थ–**
**त्यक्तसौहृदाः** = मित्रता छाडी
**क्षिपन्तः** = एक-अर्कालाई गाली गर्दै
**दस्युधर्माणः** = डाँकूहरूको जस्तो स्वभाव लिएका
**अन्योन्यतः** = एकआपसमा
**पात्रं** = अमृतको कलशलाई
**हरन्तः** = लुछाचुँडी गरिरहेका
**ते** = ती
**असुराः** = असुरहरूले
**आयान्तीं** = आफूतिरै आइरहेकी
**स्त्रियम्** = स्त्रीलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** डाँकूहरूको जस्तो स्वभाव लिई एकआपसमा मित्रता त्यागी गाली गर्दै अमृतको कलश समाउन लुछाचुँडी गरिरहेका ती असुरहरूले आफूतिरै आइरहेकी स्त्रीलाई देखे।

**अहो रूपमहो धाम अहो अस्या नवं वयः ।**

**इति ते तामभिद्रुत्य पप्रच्छुर्जातहृच्छयाः ॥ २ ॥**

**पदार्थ–**
**जातहृच्छयाः** = काममोहित भएका
**ते** = तिनीहरूले
**अहो रूपं** = अहा ! कति सुन्दर रूप
**अहो धाम** = अहो ! कस्तो शरीरको कान्ति
**अहो** = अहा !
**अस्याः** = यिनको
**नवं** = नयाँ
**वयः** = जवानी
**इति** = यसो भन्दै
**ताम्** = तिनकै
**अभिद्रुत्य** = नजिकै दौडी
**पप्रच्छुः** = सोध्न थाले

**वाक्यार्थ–** काममोहित भएका तिनीहरू 'अहा कति सुन्दर रूप ! शरीरमा कस्तो चमक ! कस्तो भर्खरको जवानी !' भन्दै ती स्त्रीको नजिक पुगे र उनीसँग सोध्न थाले।

**का त्वं कञ्जपलाशाक्षि कुतो वा किं चिकीर्षसि ।**

**कस्यासि वद वामोरु मथ्नन्तीव मनांसि नः ॥ ३ ॥**

**पदार्थ–**
**कञ्जपलाशाक्षि** = हे कमलको पुष्पदल जस्तै आँखा भएकी
**त्वं** = तिमी
**का** = को हौ
**कुतः वा** = कहाँबाट आएकी हौ
**किं चिकीर्षसि** = के गर्न चाहन्छ्यौ
**वामोरु** = (सुन्दर जघनस्थल

भएकी) हे सुन्दरी
**नः** = हाम्रो
**मनांसि** = मनलाई
**मथ्नन्ती इव** = मन्थन गरिरहेकी जस्तैँ तिमी
**कस्य** = कसकी
**असि** = (कन्या) हौ
**वद** = भन

**वाक्यार्थ–** हे कमलको पुष्पदल जस्तै आँखा भएकी सुन्दरी ! तिमी को हौ ? कहाँबाट यहाँ आएकी हौ ? र के गर्न चाहन्छ्यौ ? हामी सबैको मनमा हलचल पैदा गरिदिने तिमी कसकी कन्या हौ ? हामीलाई बताऊ।

**न वयं त्वामरैर्दैत्यैः सिद्धगन्धर्वचारणैः।**
**नास्पृष्टपूर्वां जानीमो लोकेशैश्च कुतो नृभिः ॥ ४ ॥**

**पदार्थ–**
**वयं** = हामीहरूले
**त्वा** = तिमी
**अमरैः** = देवता
**दैत्यैः** = दैत्य
**सिद्धगन्धर्वचारणैः** = सिद्ध, गन्धर्व र चारण
**लोकेशैः च** = लोकपालहरूद्वारा समेत
**अस्पृष्टपूर्वां** = आजभन्दा पहिले कहिल्यै नछोइएकी (भन्ने कुरो)
**न न जानीमः** = जान्दैनौँ भन्ने होइन (अर्थात् बुझेका छौँ)
**नृभिः** = मानिसहरूद्वारा त
**कुतः** = कहाँबाट (छोइयोस्)

**वाक्यार्थ–** हामीले बुझेका छौँ कि तिमीलाई दैत्य, देवता, सिद्ध, गन्धर्व, चारण र लोकपालहरूले समेत कसैले पनि आजभन्दा पहिले छोएका सम्म छैनन्, मानिसहरूको त के कुरा ?

**नूनं त्वं विधिना सुभ्रूः प्रेषितासि शरीरिणाम्।**
**सर्वेन्द्रियमनःप्रीतिं विधातुं सघृणेन किम् ॥ ५ ॥**

**पदार्थ–**
**सुभ्रूः** = सुन्दर आँखीभौँ भएकी हे सुन्दरी
**त्वं** = तिमी
**नूनं** = निश्चय नै
**सघृणेन** = दयालु
**विधिना** = विधाताद्वारा
**शरीरिणाम्** = शरीरधारी प्राणीहरूको
**सर्वेन्द्रियमनःप्रीतिं** = सम्पूर्ण इन्द्रिय र मनलाई प्रसन्न
**विधातुं** = बनाउन
**प्रेषिता असि किम्** = पठाइएकी हौ कि

**वाक्यार्थ–** सुन्दर आँखीभौँ भएकी हे सुन्दरी ! पक्कै पनि दयालु विधाताले शरीरधारी प्राणीहरूका सम्पूर्ण इन्द्रिय र मनलाई प्रसन्न बनाउन तिमीलाई यहाँ पठाएका होलान्।

**सा त्वं नः स्पर्धमानानामेकवस्तुनि मानिनि।**
**ज्ञातीनां बद्धवैराणां शं विधत्स्व सुमध्यमे ॥ ६ ॥**

**पदार्थ–**
**सुमध्यमे** = सुन्दर कम्मरवाली
**मानिनि** = हे सुन्दरी
**सा** = त्यस्ती
**त्वं** = तिमीले
**एकवस्तुनि** = एउटै अमृतका लागि
**स्पर्धमानानां** = हारालुछ गर्ने
**बद्धवैराणां** = शत्रुता गरिरहेका

| | | |
|---|---|---|
| **ज्ञातीनां** = एउटै कुलका | **शं** = (मेलमिलाप गराई) | **विधत्स्व** = गरिदेऊ |
| **नः** = हामीहरूलाई | कल्याण | |

**वाक्यार्थ–** सुन्दर कम्मर भएकी हे सुन्दरी ! एउटै अमृतमा हारालुछ गर्दा शत्रु भएका हामी सबै एउटै कुलमा उत्पन्न भएका असुरहरू हौँ। हामीहरूलाई एकआपसमा मिलाई तिमीले नै हाम्रो कल्याण गरिदेऊ।

**वयं कश्यपदायादा भ्रातरः कृतपौरुषाः।**
**विभजस्व यथान्यायं नैव भेदो यथा भवेत्॥ ७॥**

| पदार्थ– | गर्ने | लगाइदेऊ |
|---|---|---|
| **वयं** = हामीहरू | **भ्रातरः** = दाजुभाइ हौँ | **यथा** = जसले गर्दा |
| **कश्यपदायादाः** = कश्यपका पुत्र | **यथान्यायं** = न्यायअनुसार | **भेदः** = झगडा |
| **कृतपौरुषाः** = अत्यन्त पराक्रम | **विभजस्व** = अमृतको भाग | **न एव भवेत्** = नहोस् |

**वाक्यार्थ–** हामीहरू सबै कश्यप ऋषिका सन्तान अत्यन्त पराक्रमी दाजुभाइ हौँ। तिमीले हामीहरूका लागि न्यायपूर्वक यसरी अमृतको भाग लगाइदेऊ कि जसले गर्दा हाम्रो झगडा समाप्त होस्।

**इत्युपामन्त्रितो दैत्यैर्मायायोषिद्वपुर्हरिः।**
**प्रहस्य रुचिरापाङ्गैर्निरीक्षन्निदमब्रवीत्॥ ८॥**

| पदार्थ– | स्त्रीरूप धारण गर्ने | **निरीक्षन्** = तिनीहरूलाई हेर्दै |
|---|---|---|
| **दैत्यैः** = असुरहरूद्वारा | **हरिः** = श्रीहरि भगवान् | **इदं** = यसो |
| **इति** = यसप्रकार | **प्रहस्य** = हाँसेर | **अब्रवीत्** = भन्नुभयो |
| **उपामन्त्रितः** = बोलाइनुभएका | **रुचिरापाङ्गैः** = सुन्दर तेर्सो | |
| **मायायोषिद्वपुः** = मायाद्वारा | आँखाद्वारा | |

**वाक्यार्थ–** असुरहरूले यसप्रकार बोलाएपछि आफ्नो मायाद्वारा स्त्रीको रूप धारण गर्ने श्रीहरि भगवान् हाँस्नुभयो र सुन्दर तेर्सो आँखाद्वारा उनीहरूलाई हेर्दै उहाँले भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**कथं कश्यपदायादाः पुंश्चल्यां मयि सङ्गताः।**
**विश्वासं पण्डितो जातु कामिनीषु न याति हि॥ ९॥**

| पदार्थ– | **पुंश्चल्यां** = कुलटा | गर्नुहुन्छ |
|---|---|---|
| **कश्यपदायादाः** = कश्यपका | **मयि** = ममा | **हि** = निश्चय नै |
| सन्तति तपाईंहरू | **कथं सङ्गताः** = किन विश्वास | **पण्डितः** = बुद्धिमान् व्यक्ति |

**जातु** = एकपटक पनि
**कामिनीषु** = कामिनी स्त्रीहरूमा
**विश्वासं** = विश्वास
**न याति** = गर्दैन

**वाक्यार्थ—** तपाईंहरू कश्यप ऋषिका सन्तान हुनुहुन्छ, म कुलटामाथि किन विश्वास गर्नुहुन्छ ? निश्चय नै बुद्धिमान् व्यक्तिले कहिल्यै पनि मजस्ता कामिनी स्त्रीहरूमा विश्वास गर्दैन।

**सालावृकाणां स्त्रीणां च स्वैरिणीनां सुरद्विषः।**
**सख्यान्याहुरनित्यानि नूत्नं नूत्नं विचिन्वताम्॥ १०॥**

**पदार्थ—**
**सुरद्विषः** = हे असुरहरू
**नूत्नं नूत्नं** = नयाँ–नयाँ सिकार
**विचिन्वताम्** = खोजिरहने
**सालावृकाणां** = ब्वाँसो र
**स्वैरिणीनां** = व्यभिचारी
**स्त्रीणां च** = स्त्रीहरूको
**सख्यानि** = मित्रता
**अनित्यानि** = अनित्य हुन्छन् (स्थायी हुँदैनन्)
**आहुः** = भन्दछन्

**वाक्यार्थ—** हे असुरहरू ! ब्वाँसो र व्यभिचारिणी स्त्रीहरू सधैं नयाँ–नयाँ सिकारको खोजीमा रहन्छन्, उनीहरूसँगको मित्रता कहीँ पनि स्थिर हुँदैन भन्दछन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति ते क्ष्वेलितैस्तस्या आश्वस्तमनसोऽसुराः।**
**जहसुर्भावगम्भीरं ददुश्चामृतभाजनम्॥ ११॥**

**पदार्थ—**
**इति** = यसप्रकार
**तस्याः** = तिनको
**क्ष्वेलितैः** = जिस्किएका वचनहरूद्वारा
**आश्वस्तमनसः** = ऊन् मन आश्वस्त भएका
**ते** = ती
**असुराः** = असुरहरूले
**भावगम्भीरं** = गम्भीर भावपूर्वक
**जहसुः** = हाँसे र
**अमृतभाजनम् च** = अमृतको कलश पनि
**ददुः** = दिए

**वाक्यार्थ—** यसप्रकार तिनका जिस्किएका वचनहरूद्वारा दैत्यहरूको मनमा उनीप्रति ऊन् विश्वास बढ्यो। उनीहरू गम्भीर भावपूर्वक हाँसे र अमृतको कलश उनैलाई दिए।

**ततो गृहीत्वामृतभाजनं हरिर्बभाष ईषत्स्मितशोभया गिरा।**
**यद्यभ्युपेतं क्व च साध्वसाधु वा कृतं मया वो विभजे सुधामिमाम्॥ १२॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**हरिः** = मोहिनीरूपधारी श्रीहरिले
**अमृतभाजनं** = अमृतको कलश
**गृहीत्वा** = लिएर
**ईषत्स्मितशोभया** = मन्द मुस्कानका कारण सुन्दर भएको
**गिरा** = वाणीद्वारा
**बभाषे** = भन्नुभयो
**मया** = मद्वारा
**कृतं** = गरिएका
**साधु** = राम्रो
**असाधु वा** = वा नराम्रो
**क्व च** = जेसुकै भए पनि
**यदि** = यदि

**अभ्युपेतं** = स्वीकार हुन्छ भने
**वः** = तिमीहरूका लागि
**इमाम्** = यो
**सुधाम्** = अमृत
**विभजे** = भाग लगाइदिन्छु

**वाक्यार्थ–** मोहिनीरूपधारी भगवान्ले अमृतको कलश लिनुभयो र मुस्कुराउँदै मैले गरेको राम्रो–नराम्रो जस्तोसुकै काम पनि यदि तिमीहरूलाई स्वीकार हुन्छ भने मात्र म तिमीहरूका लागि यो अमृत भाग लगाइदिन्छु भनी असुरहरूलाई भन्नुभयो।

**इत्यभिव्याहृतं तस्या आकर्ण्यासुरपुङ्गवाः।**
**अप्रमाणविदस्तस्यास्तत् तथेत्यन्वमंसत॥ १३॥**

**पदार्थ–**
**इति** = यस्तो
**तस्याः** = ती मोहिनीको
**अभिव्याहृतं** = भनाइलाई
**आकर्ण्य** = सुनेर
**तस्याः** = तिनको
**अप्रमाणविदः** = वास्तविक स्वरूपलाई नजान्ने
**असुरपुङ्गवाः** = श्रेष्ठ असुरहरूले
**तत्** = तिनको त्यो सर्तलाई
**तथा इति** = हुन्छ भनी
**अन्वमंसत** = अनुमोदन गरे

**वाक्यार्थ–** मोहिनीको वास्तविक स्वरूपलाई नजानेका ती असुरश्रेष्ठहरूले मोहिनीको त्यो भनाइ सुने र उनीहरू सबैले हुन्छ भनी उनको त्यो सर्तलाई स्वीकार गरे।

**अथोपोष्य कृतस्नाना हुत्वा च हविषानलम्।**
**दत्त्वा गोविप्रभूतेभ्यः कृतस्वस्त्ययना द्विजैः॥ १४॥**
**यथोपजोषं वासांसि परिधायाहतानि ते।**
**कुशेषु प्राविशन् सर्वे प्रागग्रेष्वभिभूषिताः॥ १५॥**

**पदार्थ–**
**अथ** = यसपछि (एक दिन)
**उपोष्य** = भोकै बसी (अर्को दिन)
**कृतस्नानाः** = स्नान गरी
**हविषा च** = पवित्र द्रव्यहरूद्वारा
**अनलम्** = अग्निमा
**हुत्वा** = हवन गरी
**गोविप्रभूतेभ्यः** = गाई, ब्राह्मण र प्राणीहरूलाई
**दत्त्वा** = योग्य वस्तुहरू दान गरी
**द्विजैः** = ब्राह्मणहरूद्वारा
**कृतस्वस्त्ययनाः** = स्वस्तिवाचन गराई
**यथोपजोषं** = आफ्नो रुचिअनुसारका
**अहतानि** = (नच्यातिएका) नयाँ
**वासांसि** = कपडाहरू
**परिधाय** = लगाएर
**अभिभूषिताः** = गहनाहरूले पनि सजिएका
**ते** = ती
**सर्वे** = सबै असुरहरू
**प्रागग्रेषु** = पूर्वतिर फर्किएका
**कुशेषु** = कुशहरूमाथि
**प्राविशन्** = बसे

**वाक्यार्थ–** त्यसपछि मोहिनीको भनाइअनुसार ती सबैले एक दिन भोकै बसी अर्को दिन बिहान स्नान गरी पवित्र द्रव्यहरूद्वारा अग्निमा हवन गरे। उनीहरूले गाई, ब्राह्मण र अरू प्राणीहरूलाई अन्न, वस्त्र आदि दान दिए र ब्राह्मणहरूद्वारा स्वस्तिवाचन गराई आफूलाई मनपर्ने नयाँ लुगा लगाई गहनाहरूद्वारा पनि सजिएर पूर्वतिर फर्काई ओछ्याइएको कुशमाथि सबै असुरहरू बसे।

**प्राङ्मुखेषूपविष्टेषु सुरेषु दितिजेषु च।**
**धूपामोदितशालायां जुष्टायां माल्यदीपकैः॥ १६॥**
**तस्यां नरेन्द्र करभोरुरुशद्दुकूल-**
**श्रोणीतटालसगतिर्मदविह्वलाक्षी।**
**सा कूजती कनकनूपुरशिञ्जितेन**
**कुम्भस्तनी कलशपाणिरथाविवेश॥ १७॥**

**पदार्थ–**
**नरेन्द्र** = हे राजा
**अथ** = त्यसपछि
**सुरेषु** = देवताहरू
**दितिजेषु च** = दैत्यहरू पनि
**प्राङ्मुखेषु** = पूर्वतिर फर्की
**उपविष्टेषु** = बसेपछि
**माल्यदीपकैः** = माला र बत्तीहरूद्वारा
**जुष्टायां** = सजाइएको
**तस्यां** = त्यो
**धूपामोदितशालायां** = धूपको सुगन्ध हर्हराइरहेको सभामा
**उशद्दुकूलश्रोणीतटालसगतिः** = सुन्दर वस्त्रद्वारा ढाकिएका भारयुक्त स्तनहरूद्वारा थिचिए झैँ बिस्तारै हिँडिरहेकी
**मदविह्वलाक्षी** = यौवनमदले आँखा विह्वल भएकी
**कनकनूपुरशिञ्जितेन** = सुनका पाउजुहरूको झङ्कारले
**कूजती** = त्यो सभालाई नै मुखरित पारिरहेकी
**कुम्भस्तनी** = कलशजस्ता ठुला स्तन र
**करभोरुः** = हात्तीको सुँडजस्तो तिघ्रा भएकी
**सा** = ती स्त्री
**कलशपाणिः** = हातमा कलश लिई
**आविवेश** = प्रवेश गरिन्

**वाक्यार्थ–** हे राजा! देवता र दानवहरू सबै पूर्वपङ्क्ति फर्केर बसेपछि माला र बत्तीहरूद्वारा सजाइएको अनि धूपको सुगन्ध हर्हराइरहेको त्यस विशाल सभामा सुन्दर वस्त्रले ढाकिएका भारयुक्त स्तनहरूको भारले थिचिए झैँ गरी बिस्तारै हिँडिरहेकी, यौवनमदले आँखा विह्वल भएकी, हात्तीका सुँडजस्ता तिघ्रा भएकी ती सुन्दरी सुनका पाउजुको झङ्कारले पूरा सभालाई नै झङ्कृत गर्दै हातमा अमृतको कलश लिई प्रवेश गरिन्।

**तां श्रीसखीं कनककुण्डलचारुकर्ण-**
**नासाकपोलवदनां परदेवताख्याम्।**
**संवीक्ष्य सम्मुमुहुरुत्स्मितवीक्षणेन**
**देवासुरा विगलितस्तनपट्टिकान्ताम्॥ १८॥**

**पदार्थ–**
**कनककुण्डलचारुकर्णनासा-कपोलवदनां** = सुनका कुण्डलले युक्त सुन्दर कान, नाक, गाला र मुख भएकी
**विगलितस्तनपट्टिकान्ताम्** =

स्तनमा लगाइएको वस्त्रको आँचल केही तल झर्दै गरेको अवस्थामा रहेकी
**परदेवताख्याम्** = परदेवता (देवताका पनि देवता भगवान् विष्णु) भएर पनि
**श्रीसखीं** = (रूप र सौन्दर्यका कारण) लक्ष्मीकी साथी जस्तै देखिने
**तां** = ती सुन्दरीलाई
**संवीक्ष्य** = देखेर (तिनको)
**उत्स्मितवीक्षणेन** = मुस्कानपूर्वकको हेराइले
**देवासुराः** = देवता र दैत्यहरू
**सम्मुमुहुः** = मोहित भए

**वाक्यार्थ–** सुनका कुण्डलले युक्त सुन्दर कान, नाक, गाला र मुख भएकी, स्तनमा लगाइएको वस्त्रको आँचल केही तल झर्दै गरेको अवस्थामा रहेकी, स्वयं परदेवता भएर पनि रूप र सौन्दर्यका कारण लक्ष्मीकी साथी जस्तै देखिने ती सुन्दरीको मुस्कानपूर्वकको हेराइले देवता र दैत्यहरू मोहित भए।

**असुराणां सुधादानं सर्पाणामिव दुर्नयम्।**
**मत्वा जातिनृशंसानां न तां व्यभजदच्युतः॥ १९॥**

**पदार्थ–**
**अच्युतः** = भगवान्ले
**जातिनृशंसानां** = जातैले क्रूरस्वभाव भएका
**असुराणां** = असुरहरूलाई
**सुधादानं** = अमृत दिनु
**सर्पाणाम् इव** = सर्पलाई दुध दिनुजस्तै
**दुर्नयम्** = नीतिविरुद्ध काम हुने जाने
**मत्वा** = विचार गरेर
**तां** = त्यो अमृत
**न व्यभजत्** = उनीहरूलाई भाग लगाउनुभएन

**वाक्यार्थ–** जातिगत स्वभावले नै क्रूर भएका असुरहरूलाई अमृत दिनु सर्पलाई दुध दिनु जस्तै नीतिविरुद्ध काम हुन्छ भन्ने विचार गरेर भगवान्ले असुरहरूलाई अमृत भाग लगाउनुभएन।

**कल्पयित्वा पृथक्पङ्क्तीरुभयेषां जगत्पतिः।**
**तांश्चोपवेशयामास स्वेषु स्वेषु च पङ्क्तिषु॥ २०॥**

**पदार्थ–**
**जगत्पतिः** = जगत्का मालिक भगवान्ले
**उभयेषां** = देवता र असुरहरूको
**पृथक्** = छुट्टाछुट्टै
**पङ्क्तीः** = पङ्क्तिहरू
**कल्पयित्वा** = बनाई
**तान् च** = ती सबैलाई
**स्वेषु स्वेषु च** = आ-आफ्नो
**पङ्क्तिषु** = पङ्क्तिहरूमा
**उपवेशयामास** = बसाउनुभयो

**वाक्यार्थ–** भगवान्ले देवता र असुरहरूको छुट्टाछुट्टै पङ्क्ति बनाई ती सबैलाई आ-आफ्नो पङ्क्तिमा मिलाएर बसाउनुभयो।

**दैत्यान् गृहीतकलशो वञ्चयन्नुपसञ्चरैः।**
**दूरस्थान् पाययामास जरामृत्युहरां सुधाम्॥ २१॥**

**पदार्थ–**
**गृहीतकलशः** = स्त्रीरूपले हातमा कलश लिनुहुने

भगवान्ले
**उपसञ्चरैः** = (हाउ-भाउ कटाक्ष गर्दै दैत्यहरूको) नजिकैबाट हिँडेर
**दैत्यान्** = उनीहरूलाई
**वञ्चयन्** = ठग्दै
**दूरस्थान्** = टाढा बसेका देवताहरूलाई
**जरामृत्युहरां** = बुढ्याइँ र मृत्युलाई नाश गर्ने
**सुधाम्** = अमृत
**पाययामास** = पियाउनुभयो

**वाक्यार्थ–** अमृतको कलश लिएका स्त्रीरूपधारी भगवान् हाउभाउ कटाक्ष गर्दै दैत्यहरूको नजिकैबाट अघि जानुभयो र उनीहरूलाई मोहित बनाउँदै उहाँले टाढा रहेका देवताहरूलाई चाहिँ बुढ्याइँ र मृत्युलाई नष्ट गरिदिने अमृत पियाउनभयो।

**ते पालयन्तः समयमसुराः स्वकृतं नृप।**
**तूष्णीमासन् कृतस्नेहाः स्त्रीविवादजुगुप्सया ॥ २२ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**स्वकृतं** = आफैँले गरेको
**समयं** = प्रतिज्ञा
**पालयन्तः** = पालन गरिरहेका
**कृतस्नेहाः** = मोहिनीमा आसक्त भएका
**ते** = ती
**असुराः** = असुरहरू
**स्त्रीविवादजुगुप्सया** = स्त्रीसँग विवाद गर्दा आफ्नै निन्दा हुने ठानी
**तूष्णीम्** = चुपचाप
**आसन्** = थिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यति हुँदाहुँदै पनि आफ्नो प्रतिज्ञालाई पालन गरिरहेका असुरहरू मोहिनीमा आसक्त भएको कारणले र स्त्रीसँग विवाद गर्दा आफ्नै निन्दा हुन्छ भन्ने ठानी चुपचाप लागिरहे।

**तस्यां कृतातिप्रणयाः प्रणयापायकातराः।**
**बहुमानेन चाबद्धा नोचुः किञ्चन विप्रियम् ॥ २३ ॥**

**पदार्थ–**
**तस्यां** = ती मोहिनीमा
**कृतातिप्रणयाः** = अत्यन्त प्रेम गर्ने
**प्रणयापायकातराः** = प्रेमसम्बन्ध छुट्ला भनी डराउने **बहुमानेन च** = मोहिनीको हाउभाउद्वारा पनि
**आबद्धाः** = बाँधिएका
असुरहरूले
**किञ्चन** = कुनै पनि
**विप्रियम्** = अप्रिय वचन
**न ऊचुः** = बोलेनन्

**वाक्यार्थ–** मोहिनीलाई असाध्यै प्रेम गरेकाले त्यो प्रेमसम्बन्ध छुट्ला कि भनी असाध्यै डराएका र मोहिनीको हाउभाउद्वारा बाँधिएका ती असुरहरूले कुनै पनि अप्रिय वचन बोलेनन्।

**देवलिङ्गप्रतिच्छन्नः स्वर्भानुर्देवसंसदि।**
**प्रविष्टः सोममपिबच्चन्द्रार्काभ्यां च सूचितः ॥ २४ ॥**

**पदार्थ–**
**देवलिङ्गप्रतिच्छन्नः** = देवताहरूको वेशले ढाकिएर
**देवसंसदि** = देवताको समूहमा
**प्रविष्टः** = पसेको
**स्वर्भानुः** = राहुले

| | | |
|---|---|---|
| **सोमं** = अमृत | **चन्द्रार्काभ्यां च** = चन्द्र र सूर्यद्वारा | **सूचितः** = सूचित गराइयो |
| **अपिबत्** = पियो | | |

**वाक्यार्थ–** देवताहरूको स्वरूप बनाएको राहु देवताहरूको समूहमा पस्यो र अमृत पियो। तर चन्द्रमा र सूर्यले यो दैत्य हो भन्ने कुरा थाहा पाएर मोहिनीलाई सूचित गराइदिए।

**चक्रेण क्षुरधारेण जहार पिबतः शिरः।**
**हरिस्तस्य कबन्धस्तु सुधयाप्लावितोऽपतत्॥ २५॥**

| | | |
|---|---|---|
| पदार्थ– | **शिरः** = शिरलाई | **सुधया** = अमृतद्वारा |
| **हरिः** = श्रीहरि भगवान्ले | **क्षुरधारेण** = तीखो धारवाला | **अप्लावितः** = नभिजेकाले |
| **पिबतः** = अमृत पिइरहेको | **चक्रेण** = चक्रले | **कबन्धः तु** = धड चाहिँ (भुइँमा) |
| **तस्य** = त्यस राहुको | **जहार** = छिनाइदिनुभयो | **अपतत्** = ढल्यो |

**वाक्यार्थ–** अमृत पिउँदै गरेको राहुको शिरलाई श्रीहरि भगवान्ले आफ्नो तीखो धारवाला चक्रले छिनाइदिनुभयो। अमृत भिजिनसकेको हुनाले त्यसको धड चाहिँ भुइँमा ढल्यो।

**शिरस्त्वमरतां नीतमजो ग्रहमचीक्लृपत्।**
**यस्तु पर्वणि चन्द्रार्कावभिधावति वैरधीः॥ २६॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अजः** = ब्रह्माजीले | **वैरधीः** = शत्रुको भावनाले |
| **अमरतां** = अमर | **ग्रहं** = ग्रह | **पर्वणि** = पूर्णिमा र औँसीमा |
| **नीतम्** = भएको | **अचीक्लृपत्** = बनाउनुभयो | **चन्द्रार्कौ** = चन्द्रमा र सूर्यलाई |
| **शिरः तु** = शिरलाई चाहिँ | **यः तु** = जुन राहुले | **अभिधावति** = आक्रमण गर्दछ |

**वाक्यार्थ–** अमर बनेको शिरलाई चाहिँ ब्रह्माजीले ग्रह बनाउनुभयो। (चन्द्रमा र सूर्यले मोहिनीलाई सूचित गरिदिनाले) वैरभाव भएको कारणले राहुले पूर्णिमामा चन्द्रमालाई र औँसीमा सूर्यलाई आक्रमण गर्दछ।

**पीतप्रायेऽमृते देवैर्भगवाँल्लोकभावनः।**
**पश्यतामसुरेन्द्राणां स्वं रूपं जगृहे हरिः॥ २७॥**

| | | |
|---|---|---|
| पदार्थ– | **देवैः** = देवताहरूले | **स्वं** = आफ्नो |
| **लोकभावनः** = सम्पूर्ण संसारका जीवनदाता | **अमृते** = अमृत | **रूपं** = वास्तविक रूप |
| | **पीतप्राये** = लगभग पिइसकेपछि | **जगृहे** = ग्रहण गर्नुभयो |
| **भगवान्** = भगवान् | **असुरेन्द्राणां** = श्रेष्ठ असुरहरूले | |
| **हरिः** = श्रीहरिले | **पश्यताम्** = हेर्दाहेर्दै | |

**वाक्यार्थ–** देवताहरूले अमृत लगभग पिइसकेपछि संसारका जीवनदाता भगवान् श्रीहरिले

असुरहरूले हेर्दाहेर्दै उनीहरूकै अगाडि आफ्नो वास्तविक स्वरूप लिनुभयो।

**एवं सुरासुरगणाः समदेशकाल-**
**हेत्वर्थकर्ममतयोऽपि फले विकल्पाः।**
**तत्रामृतं सुरगणाः फलमञ्जसापु-**
**र्यत्पादपङ्कजरजःश्रयणान्न दैत्याः॥ २८॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**समदेशकालहेत्वर्थकर्ममतयः**
**अपि** = ठाउँ, समय, कारण, प्रयोजन, कर्म र विचार एकै भए तापनि
**सुरासुरगणाः** = देवता र दानवहरू
**फले** = फल पाउँदा
**विकल्पाः** = छुट्टाछुट्टै भए
**तत्र** = तीमध्ये
**सुरगणाः** = देवताहरूले
**यत्पादपङ्कजरजःश्रयणात्** = जुन भगवान्‌को चरणकमलको धुलोको आश्रयमा भएकाले
**अमृतं** = अमृतरूपी
**फलं** = फललाई
**अञ्जसा** = सजिलैसँग
**आपुः** = पाए
**दैत्याः** = दैत्यहरूले
**न** = पाउन सकेनन्

**वाक्यार्थ–** देवता र दानवहरूले एउटै ठाउँमा, एउटै समयमा, एउटै प्रयोजनले, एउटै वस्तु पाउन, एकै विचारले उही कर्म गरेको भए तापनि परिणाममा त्यसको भिन्न-भिन्न फल पाए। तीमध्ये देवताहरू भगवान्‌को चरणकमलको धूलोमा आश्रित थिए, त्यसैले उनीहरूले अमृतरूपी फल सजिलैसँग पाए भने भगवान्‌सँग विमुख भएका दैत्यहरूले परिश्रमको फल अमृत पाउन सकेनन्।

**यद्युज्यतेऽसुवसुकर्ममनोवचोभि-**
**र्देहात्मजादिषु नृभिस्तदसत्पृथक्त्वात्।**
**तैरेव सद् भवति यत् क्रियतेऽपृथक्त्वात्**
**सर्वस्य तद्भवति मूलनिषेचनं यत्॥ २९॥**

**पदार्थ–**
**नृभिः** = मानिसहरूद्वारा
**असुवसुकर्ममनोवचोभिः** = प्राण, धन, मन, वचन र कर्मद्वारा
**देहात्मजादिषु** = आफ्नो शरीर र पुत्र आदिको लागि
**यत्** = जुन कर्म
**युज्यते** = गरिन्छ
**तत्** = त्यो
**पृथक्त्वात्** = भिन्नभिन्न वस्तुहरूमा आश्रित रहने भएकाले
**असत्** = व्यर्थ हुन्छ
**तैः एव** = तिनै मन, वचन, कर्म आदिले
**अपृथक्त्वात्** = सबैतिर रहने मूल कारण भएका भगवान्‌को लागि
**यत् क्रियते** = जे कर्म गरिन्छ, त्यो
**सत्** = सफल
**भवति** = हुन्छ
**यत्** = जुन
**मूलनिषेचनं** = फेदमा पानी हाल्ने काम छ
**तत्** = त्यो
**सर्वस्य** = सबै पात, फल, हाँगाहरूको लागि पनि
**भवति** = हुन्छ

**वाक्यार्थ–** मानिसहरूले प्राण, धन, मन, वचन, कर्म आदि साधनहरूद्वारा आफ्नो शरीर र पुत्र आदिको लागि गर्ने कर्महरूको आश्रय भएका पदार्थहरू अनेक र नाशवान् भएकाले ती सबै व्यर्थ हुन्छन्। सबैतिर व्यापक रहने एउटै तत्त्व भगवान्‌को उद्देश्यले तिनै मन, वचन आदिबाट कर्म गरियो भने चाहिँ त्यो कर्म रुखको फेदमा पानी हाल्दा पात, हाँगा, फल आदि सबै पुष्ट भए झैँ सबैका लागि फलदायक हुन्छ।

**अध्याय-विवरण–** देवता र दानवहरू मिली गरिएको समुद्रमन्थन आत्मविचारको प्रतीक पनि हो। शरीर नै क्षीर समुद्र हो। त्यहाँ मन्दराचलरूपी बुद्धिलाई विचारद्वारा घुमाउनुपर्दछ। आत्माको विषयमा चिन्तन गर्दा मुमुक्षुको बुद्धि त्यसको ऊहापोह गर्न लाग्दछ, मथन गर्नु भनेको यही हो। मुमुक्षुको मनमा खेलिरहने यस सन्देहले उसको बुद्धिलाई कहिले दायाँतिर त कहिले बायाँतिर मदानी झैँ घुमाइदिन्छ। पुराना संस्कार र स्वाभाविक बाह्य प्रवृत्तितिर उसको मन जान खोज्नु मन्दराचल दानवहरूतिर घुम्नु हो भने विवेक र वैराग्यको बलमा मुमुक्षुले त्यसलाई फेरि अन्तर्मुख गराउनु मन्दराचल देवतातिर घुम्नु हो। मनको स्वाभाविक बहिर्मुखीपन र त्यसलाई अन्तर्मुख गराउने अभ्यास देवता र दानवले मन्दराचललाई आ-आफूतिर घुमाउनुजस्तै हुन जान्छ। समुन्द्रमन्थनको क्रममा समुद्रका ठुला माछा र गोहीहरू अस्तव्यस्त भए। शरीररूपी समुद्रमा काम, क्रोध आदि दुष्ट प्रवृत्तिद्वारा निर्देशित हुने इन्द्रियहरू नै भयङ्कर जीवजन्तु हुन्। आत्मविचारको वेगले यी सबै इन्द्रियका दुष्प्रवृत्तिहरूलाई पाखा लगाइदिन्छ। सत् र असत्‌बीचको यो खिचातानी ज्ञानरूपी अमृत उत्पन्न नभएसम्म निरन्तर चलिरहन्छ। दया, इन्द्रियनिग्रह, श्रद्धा आदि दैवी वृत्तिहरूको पक्षमा नै अमृत प्राप्त हुन्छ, जसद्वारा असत् वृत्ति निरस्त हुन्छ। यसका लागि बुद्धिमा ठुलो धैर्यको आवश्यकता पर्दछ। पहाड जस्तो अचल अर्थात् अडिग बुद्धिले विचार गर्दा मात्र यो ज्ञानामृत फेला पर्दछ। मन्थनका वेलामा मन्दराचल हल्लिई त्यसलाई माथिबाट थिची अड्याइएको कथाले पनि यही निश्चयात्मिका वा व्यवसायात्मिका बुद्धिलाई सङ्केत गर्दछ। निश्चल बुद्धिद्वारा निरन्तर आत्मविचार गरिरहनु र स्वभावतः बहिर्मुखी मनलाई अन्तर्मुखी बनाइरहनु नै समद्रमन्थनको आध्यात्मिक अर्थ हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहिताया-**

**मष्टमस्कन्धेऽमृतमथने नवमोऽध्यायः॥ ९॥**

# अथ दशमोऽध्यायः

## देवता र असुरहरूका बीच युद्ध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति दानवदैतेया नाविन्दन्नमृतं नृप ।**

**युक्ताः कर्मणि यत्ताश्च वासुदेवपराङ्मुखाः ॥ १ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**इति** = यसप्रकार
**कर्मणि** = समुद्रमन्थन कार्यमा
**यत्ताः** = तत्पर भई
**युक्ताः च** = लागिपरेका भए पनि
**वासुदेवपराङ्मुखाः** = भगवान् वासुदेवबाट विमुख भएकाले
**दानवदैतेयाः** = दानव र दैत्यहरूले
**अमृतं** = अमृत
**न अविन्दन्** = पाउन सकेनन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसप्रकार दानव र दैत्यहरू सबै समुद्रमन्थन गर्न तत्परतापूर्वक लागिपरेका भए पनि भगवान् वासुदेवबाट विमुख भएकाले तिनीहरूले अमृत पाउन सकेनन् ।

**साधयित्वामृतं राजन् पाययित्वा स्वकान् सुरान् ।**

**पश्यतां सर्वभूतानां ययौ गरुडवाहनः ॥ २ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**गरुडवाहनः** = गरुड वाहन भएका भगवान्ले
**अमृतं** = अमृत
**साधयित्वा** = निकालेर
**स्वकान्** = आफ्नो शरणमा आउने
**सुरान्** = देवताहरूलाई
**पाययित्वा** = पिलाई
**सर्वभूतानां** = सबै प्राणीहरूले
**पश्यतां** = हेर्दाहेर्दै
**ययौ** = (आफ्नो लोकतिर) जानुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! गरुडमा चढ्नुहुने श्रीहरि भगवान्ले समुद्रमन्थनबाट अमृत निकालेर आफ्नो शरणमा आउने देवताहरूलाई पिलाई सबैले हेर्दाहेर्दै आफ्नो लोकतिर जानुभयो ।

**सपत्नानां परामृद्धिं दृष्ट्वा ते दितिनन्दनाः ।**

**अमृष्यमाणा उत्पेतुर्देवान् प्रत्युद्यतायुधाः ॥ ३ ॥**

**पदार्थ–**
**सपत्नानां** = आफ्ना शत्रुहरूको
**परां** = श्रेष्ठ
**ऋद्धिं** = ऐश्वर्य
**दृष्ट्वा** = देखेर
**अमृष्यमाणाः** = असह्य भएका
**ते** = ती
**दितिनन्दनाः** = दैत्यहरूले
**उद्यतायुधाः** = अस्त्रशस्त्र उठाई
**देवान् प्रति** = देवताहरूतिर
**उत्पेतुः** = जाइलागे

**वाक्यार्थ–** अमृत पिउनाले आफ्ना शत्रुहरूको ऐश्वर्य र बल बढेको देखेर यसबाट रिसले खपिनसक्नु भएका दैत्यहरूले अस्त्र-शस्त्र उठाई देवताहरूमाथि जाइलागे।

**ततः सुरगणाः सर्वे सुधया पीतयैधिताः।**

**प्रतिसंयुयुधुः शस्त्रैर्नारायणपदाश्रयाः॥ ४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**पीतया** = पिइएको
**सुधया** = अमृतद्वारा
**एधिताः** = शक्ति बढेका र
**नारायणपदाश्रयाः** = भगवान् नारायणको चरणमा आश्रित भएका
**सर्वे** = सबै
**सुरगणाः** = देवताहरूले पनि
**शस्त्रैः** = आ-आफ्ना अस्त्र-शस्त्रहरूद्वारा
**प्रतिसंयुयुधुः** = प्रतिकार गरे

**वाक्यार्थ–** देवताहरू पनि अमृत पिएर शक्तिशाली बनेका थिए र उनीहरू भगवान्‌को चरणमा आश्रित थिए। त्यसैले उनीहरूले पनि आ-आफ्ना अस्त्र-शस्त्रहरू लिई दैत्यहरूको प्रतिकार गरे।

**तत्र दैवासुरो नाम रणः परमदारुणः।**

**रोधस्युदन्वतो राजंस्तुमुलो रोमहर्षणः॥ ५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्र** = त्यहाँ
**उदन्वतः** = क्षीरसमुद्रको
**रोधसि** = किनारमा
**परमदारुणः** = अत्यन्त भयङ्कर
**रोमहर्षणः** = रौँ ठाडो पारिदिने
**तुमुलः** = घमासान
**दैवासुरः नाम** = देवासुर नामले प्रसिद्ध
**रणः** = युद्ध भयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यस क्षीरसमुद्रको किनारमा देवता र दानवहरूको बीच ज्यादै भयङ्कर युद्ध भयो। जिउ नै सिरिङ्ग पार्ने यो घमासान युद्ध देवासुर-सङ्ग्राम नामले प्रसिद्ध भयो।

**तत्रान्योन्यं सपत्नास्ते संरब्धमनसो रणे।**

**समासाद्यासिभिर्बाणैर्निजघ्नुर्विविधायुधैः॥ ६॥**

**पदार्थ–**
**तत्र** = त्यो
**रणे** = युद्धमा
**संरब्धमनसः** = क्रुद्ध भएका
**ते** = ती
**सपत्नाः** = शत्रुहरूले
**अन्योन्यं** = एक-अर्कालाई
**समासाद्य** = सामुन्नेमा पाएर
**असिभिः** = तरबार
**बाणैः** = बाण र
**विविधायुधैः** = अनेक हतियारहरूद्वारा
**निजघ्नुः** = प्रहार गरे

**वाक्यार्थ–** एक-अर्काप्रति असाध्यै क्रुद्ध भएका देवता र दानवहरूले आफ्ना शत्रुहरूलाई आफ्नै सामुन्नेमा पाएर तरबार, बाण आदि अनेक हतियारहरूद्वारा प्रहार गरे।

**शङ्खतूर्यमृदङ्गानां भेरीडमरिणां महान्।**

**हस्त्यश्वरथपत्तीनां नदतां निस्वनोऽभवत्॥ ७॥**

**पदार्थ–**
**नदतां** = बजिरहेका
**शङ्खतूर्यमृदङ्गानां** = शङ्ख, तुरही, मृदङ्ग
**भेरीडमरिणां** = नगाडा, डमरु र
**हस्त्यश्वरथपत्तीनां** = हात्ती, घोडा, रथ र पैदल सेनाको (आवाजले समेत)
**महान्** = ठुलो
**निस्वनः** = हो-हल्ला
**अभवत्** = भयो

**वाक्यार्थ–** त्यहाँ शङ्ख, तुरही, मृदङ्ग, नगाडा र डमरु बज्नाले अनि हात्ती, घोडा, रथ र पैदल सेनाको आवाजले समेत ठुलो हो-हल्ला भयो।

**रथिनो रथिभिस्तत्र पत्तिभिः सह पत्तयः।**

**हया हयैरिभाश्चेभैः समसज्जन्त संयुगे॥ ८॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**संयुगे** = युद्धमा
**रथिनः** = रथीहरू
**रथिभिः** = रथीहरूसँग
**पत्तयः** = पैदल सैनिकहरू
**पत्तिभिः सह** = पैदल सैनिकसित
**हयाः** = घोडामाथि चढ्नेहरू
**हयैः** = घोडसवार योद्धासँग
**इभाः च** = हात्तीमाथि चढ्नेहरू
**इभैः** = हात्तीमाथिकै योद्धासँग
**समसज्जन्त** = भिडे

**वाक्यार्थ–** त्यो युद्धमा रथी योद्धासँग रथी, पैदल सैनिकसित पैदल सैनिक, घोडसवारसँग घोडसवार र हात्ती चढ्ने योद्धासँग हात्तीवाला नै भिडे।

**उष्ट्रैः केचिदिभैः केचिदपरे युयुधुः खरैः।**

**केचिद् गौरमृगैर्ऋक्षैर्द्वीपिभिर्हरिभिर्भटाः॥ ९॥**

**पदार्थ–**
**केचित्** = कोही
**उष्ट्रैः** = उँटमाथि
**केचित्** = कोही
**इभैः** = हात्तीमाथि
**अपरे** = अरू
**खरैः** = गधामाथि
**केचित्** = कोही
**भटाः** = वीरहरू
**गौरमृगैः** = गौरमृग
**ऋक्षैः** = भालु
**द्वीपिभिः** = बाघ
**हरिभिः** = सिंहमाथि (चढी)
**युयुधुः** = युद्ध गर्दै थिए

**वाक्यार्थ–** त्यहाँ कोही वीरहरू उँटमाथि, कोही हात्तीमाथि र कोही गधामाथि बसी युद्ध गर्दै थिए। कोही चाहिँ गौरमृग, भालु, बाघ र सिंहमाथि चढी युद्ध गर्दै थिए।

**गृध्रैः कङ्कैर्बकैरन्ये श्येनभासैस्तिमिङ्गिलैः।**

**शरभैर्महिषैः खड्गैर्गोवृषैर्गवयारुणैः॥ १०॥**

**शिवाभिराखुभिः केचित् कृकलासैः शशैर्नरैः।**

**बस्तैरेके कृष्णसारैर्हंसैरन्ये च सूकरैः ॥ ११ ॥**

**अन्ये जलस्थलखगैः सत्त्वैर्विकृतविग्रहैः ।**

**सेनयोरुभयो राजन् विविशुस्तेऽग्रतोऽग्रतः ॥ १२ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित् !
**अन्ये** = अरू वीरहरू
**गृध्रैः** = गिद्ध
**कङ्कैः** = ढुङ्गीफोर
**बकैः** = बकुल्ला
**श्येनभासैः** = बाज र भास (एक किसिमको गिद्ध)
**तिमिङ्गिलैः** = तिमिङ्गिल माछा
**शरभैः** = शरभ
**महिषैः** = राँगा
**खड्गैः** = गैंडा
**गोवृषैः** = गोरु
**गवयारुणैः** = नील गाई र जङ्गली गोरुमाथि
**केचित्** = कोही
**शिवाभिः** = स्याल
**आखुभिः** = मुसामाथि
**कृकलासैः** = छेपारो
**शशैः** = खरायो
**नरैः** = मानिसमाथि
**एके** = कोही
**बस्तैः** = बाख्रा
**कृष्णसारैः** = कृष्णसार मृग
**हंसैः** = हाँसमाथि
**अन्ये च** = केही चाहिँ
**सूकरैः** = बँदेलमाथि
**अन्ये** = अरू चाहिँ
**जलस्थलखगैः** = पानी, भुइँ र आकाशमा रहने
**विकृतविग्रहैः** = भयानक शरीर भएका
**सत्त्वैः** = प्राणीहरूमाथि चढेका
**ते** = ती योद्धाहरू
**उभयोः** = दुबै
**सेनयोः** = सेनाको
**अग्रतः अग्रतः** = भित्र-भित्रसम्म
**विविशुः** = घुसे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! कोही वीर योद्धाहरू गिद्ध, ढुङ्गीफोर र बकुल्लामाथि चढी युद्ध गर्दै थिए भने कोही बाज, भास, तिमिङ्गिल माछा, शरभ, राँगा, गैंडा, गोरु, नीलगाई र जङ्गली गोरुमाथि चढी युद्ध गर्दै थिए। कोही स्याल, मुसा, छेपारो र खरायोमाथि चढेका थिए भने कोही बाख्रा, कृष्णसार, हाँस र बँदेलमाथि चढेका थिए। केही वीरहरू चाहिँ पानी, भुइँ र आकाशमा रहने अनेक प्रकारका भयानक शरीर भएका जन्तुहरूमाथि चढेका थिए। यसप्रकार युद्ध गर्दा दुबै पक्षका वीरहरू दुबै सेनाको भित्र-भित्रसम्म घुसे।

**चित्रध्वजपटै राजन्नातपत्रैः सितामलैः ।**

**महाधनैर्वज्रदण्डैर्व्यजनैर्बार्हचामरैः ॥ १३ ॥**

**वातोद्धूतोत्तरोष्णीषैरर्चिर्भिर्वर्मभूषणैः ।**

**स्फुरद्भिर्विशदैः शस्त्रैः सुतरां सूर्यरश्मिभिः ॥ १४ ॥**

**देवदानववीराणां ध्वजिन्यौ पाण्डुनन्दन ।**

**रेजतुर्वीरमालाभिर्यादसामिव सागरौ ॥ १५ ॥**

**पदार्थ–**
**पाण्डुनन्दन** = पाण्डुवंशी
**राजन्** = हे राजा परीक्षित्

**देवदानववीराणां** = वीर देवता र दानवहरूका
**ध्वजिन्यौ** = सेनाहरू
**चित्रध्वजपटैः** = रङ्गी–बिरङ्गी ध्वजापताकाहरूले
**सितामलैः** = सेतो र निर्मल
**आतपत्रैः** = छाताहरूले
**महाधनैः** = बहुमूल्य
**वज्रदण्डैः** = हिराको दण्ड भएको
**व्यजनैः** = पङ्खा र
**बार्हचामरैः** = मयूरको प्वाँखले निर्मित चमरहरूले
**वातोद्धूतोत्तरोष्णीषैः** = हावामा लहराइरहेका ओढ्ने र पगरीहरूले
**वर्मभूषणैः** = कवच र आभूषणले
**स्फुरद्भिः** = चम्किरहेका
**अर्चिर्भिः** = तेजिला
**सूर्यरश्मिभिः** = सूर्यकिरणतुल्य
**विशदैः** = उज्ज्वल
**शस्त्रैः** = शस्त्रहरूले अनि
**वीरमालाभिः** = वीरहरूका पङ्क्तिले गर्दा
**यादसाम्** = जलजन्तु तरङ्गित भइरहेका
**सागरौ इव** = दुई सागर झैँ
**सुतरां** = असाध्यै
**रेजतुः** = शोभित भए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यस समयमा रङ्गी–बिरङ्गी ध्वजापताकाहरूले, सेतो र असाध्यै निर्मल छाताहरूले, हिराका दण्ड भएका बहुमूल्य पङ्खा र मयूरको प्वाँखबाट बनेका चमरहरू अनि हावामा लहराइरहेका ओढ्नेहरू र पगरी, कवच, आभूषण तथा सूर्यकिरणसमान चम्किला शस्त्रअस्त्र लिएका पङ्क्तिबद्ध देवता र दानवहरूका सेना जलजन्तुहरू तरङ्गित भइरहेका दुई सागरजस्ता देखिन्थे।

**वैरोचनो बलिः सङ्ख्ये सोऽसुराणां चमूपतिः।**
**यानं वैहायसं नाम कामगं मयनिर्मितम्॥ १६॥**
**सर्वसाङ्ग्रामिकोपेतं सर्वाश्चर्यमयं प्रभो।**
**अप्रतर्क्यमनिर्देश्यं दृश्यमानमदर्शनम्॥ १७॥**
**आस्थितस्तद्विमानाग्र्यं सर्वानीकाधिपैर्वृतः।**
**बालव्यजनछत्राग्र्यै रेजे चन्द्र इवोदये॥ १८॥**

**पदार्थ–**
**प्रभो** = हे राजा परीक्षित्
**असुराणां** = असुरहरूका
**चमूपतिः** = सेनानायक
**वैरोचनः** = विरोचनका पुत्र बलि
**सर्वसाङ्ग्रामिकोपेतं** = सङ्ग्राममा सम्पूर्ण सामग्रीले युक्त भएको
**अप्रतर्क्यं** = गतिको विषयमा अनुमान पनि गर्न नसकिने
**अनिर्देश्यं** = कहाँ छ भनी बताउन पनि नसकिने
**दृश्यमानं** = कहिले देखिने
**अदर्शनम्** = कहिले नदेखिने
**सर्वाश्चर्यमयं** = अत्यन्त आश्चर्यमय
**वैहायसं नाम** = वैहायस नामको
**मयनिर्मितम्** = मयद्वारा बनाइएको
**कामगं** = इच्छाअनुसार उड्ने
**यानं** = विमानमा (चढे)
**बालव्यजनछत्राग्र्यैः** = मन्द–मन्द पङ्खा हम्किने र छाता ओढाउने सेवक र
**सर्वानीकाधिपैः** = सबै सेनापतिहरूबाट
**वृतः** = घेरिएका

**तद्विमानाग्र्यं** = त्यस श्रेष्ठ विमानमा
**आस्थितः** = चढेका
**सः** = ती
**बलिः** = महाराज बलि
**सङ्ख्ये** = त्यो युद्धभूमिमा
**उदये** = उदयाचलमा
**चन्द्रः इव** = चन्द्रमा उदाए झैं
**रेजे** = शोभित भए

**वाक्यार्थ–** हे परीक्षित् ! असुरहरूका सेनानायक विरोचनपुत्र राजा बलि युद्धका सम्पूर्ण सामग्रीहरूले युक्त, अत्यन्त आश्चर्यमय, गतिको विषयमा अनुमान पनि गर्न नसकिने, कहाँ छ भनी बताउन पनि नसकिने, कहिले देखिने र कहिले नदेखिने एवं इच्छानुसार उड्ने मयनिर्मित वैहायस नामक श्रेष्ठ विमानमाथि चढेका थिए। मन्दमन्द पङ्खा हम्किने र छाता ओढाउने सेवक अनि आफ्ना सेनापतिहरूद्वारा घेरिएर त्यस श्रेष्ठ विमानमा रहेका ती बलि त्यस युद्धभूमिमा उदयाचलमा चन्द्रमा उदाए झैं गरी सुशोभित भए।

**तस्यासन् सर्वतो यानैर्यूथानां पतयोऽसुराः।**
**नमुचिः शम्बरो बाणो विप्रचित्तिरयोमुखः॥ १९॥**
**द्विमूर्धा कालनाभोऽथ प्रहेतिर्हेतिरिल्वलः।**
**शकुनिर्भूतसन्तापो वज्रदंष्ट्रो विरोचनः॥ २०॥**
**हयग्रीवः शङ्कुशिराः कपिलो मेघदुन्दुभिः।**
**तारकश्चक्रदृक् शुम्भो निशुम्भो जम्भ उत्कलः॥ २१॥**
**अरिष्टोऽरिष्टनेमिश्च मयश्च त्रिपुराधिपः।**
**अन्ये पौलोमकालेया निवातकवचादयः॥ २२॥**

**पदार्थ–**
**तस्य** = ती बलिका
**सर्वतः** = चारैतिर
**नमुचिः** = नमुचि
**शम्बरः** = शम्बर
**बाणः** = बाण
**विप्रचित्तिः** = विप्रचित्ति
**अयोमुखः** = अयोमुख
**द्विमूर्धा** = द्विमूर्धा
**कालनाभः** = कालनाभ
**अथ** = त्यसै गरी
**प्रहेतिः** = प्रहेति
**हेतिः** = हेति
**इल्वलः** = इल्वल
**शकुनिः** = शकुनि
**भूतसन्तापः** = भूतसन्ताप
**वज्रदंष्ट्रः** = वज्रदंष्ट्र
**विरोचनः** = विरोचन
**हयग्रीवः** = हयग्रीव
**शङ्कुशिराः** = शङ्कुशिरा
**कपिलः** = कपिल
**मेघदुन्दुभिः** = मेघदुन्दुभि
**तारकः** = तारक
**चक्रदृक्** = चक्रदृक्
**शुम्भः** = शुम्भ
**निशुम्भः** = निशुम्भ
**जम्भः** = जम्भ
**उत्कलः** = उत्कल
**अरिष्टः** = अरिष्ट
**अरिष्टनेमिः च** = अरिष्टनेमि अनि
**त्रिपुराधिपः** = त्रिपुरको मालिक
**मयः च** = मय र
**अन्ये** = अरू
**पौलोमकालेयाः** = पौलोम, कालेय र

**निवातकवचादयः** = निवातकवच आदि
**यूथानां** = दैत्यसेनाका
**पतयः** = पति
**असुराः** = श्रेष्ठ असुरहरू
**यानैः** = आ-आफ्ना विमानहरूका साथ
**आसन्** = थिए

**वाक्यार्थ–** महाराज बलिका चारैतिर नमुचि, शम्बर, बाण, विप्रचित्ति, अयोमुख, द्विमूर्धा, कालनाभ, प्रहेति, हेति, इल्वल, शकुनि, भूतसन्ताप, वज्रदंष्ट्र, विरोचन, हयग्रीव, शङ्कुशिरा, कपिल, मेघदुन्दुभि, तारक, चक्रदृक्, शुम्भ, निशुम्भ, जम्भ, उत्कल, अरिष्ट, अरिष्टनेमि, त्रिपुरको मालिक मय र अरू पौलोम, कालेय, निवातकवच आदि असुर सेनाका सेनापतिहरूसमेत आ-आफ्ना विमानमा रहेका थिए।

**अलब्धभागाः सोमस्य केवलं क्लेशभागिनः।**
**सर्व एते रणमुखे बहुशो निर्जितामराः॥ २३॥**

**पदार्थ–**
**एते** = यी
**सर्वे** = सबैले
**सोमस्य** = अमृतको
**अलब्धभागाः** = भाग नपाएका
**केवलं** = केवल
**क्लेशभागिनः** = समुद्र मथ्न दुःख पाएका थिए अनि
**रणमुखे** = युद्धभूमिमा
**बहुशः** = बारम्बार
**निर्जितामराः** = देवताहरूलाई पराजित पनि गरिसकेका थिए

**वाक्यार्थ–** यी सबै दैत्यहरूले अमृतको भाग पाएका थिएनन्, केवल समुद्र मथ्ने दुःख मात्र पाएका थिए। अनि यिनीहरूले अघिल्ला युद्धहरूमा बारम्बार देवताहरूलाई पराजित पनि गरिसकेका थिए।

**सिंहनादान् विमुञ्चन्तः शङ्खान् दध्मुर्महारवान्।**
**दृष्ट्वा सपत्नानुत्सिक्तान् बलभित् कुपितो भृशम्॥ २४॥**

**पदार्थ–**
**सिंहनादान्** = सिंहनाद
**विमुञ्चन्तः** = गर्दै (यिनले)
**महारवान्** = ठुलो आवाज गर्ने
**शङ्खान्** = शङ्ख
**दध्मुः** = बजाए
**सपत्नान्** = आफ्ना शत्रुहरूलाई
**उत्सिक्तान्** = उत्साही
**दृष्ट्वा** = देखेर
**बलभित्** = इन्द्र
**भृशम्** = असाध्यै
**कुपितः** = रिसाए

**वाक्यार्थ–** यी सबैले भयङ्कर सिंहनाद गर्दै ठुलो आवाज गर्ने शङ्ख बजाए। यसरी आफ्ना शत्रुहरू उत्साही बनेको देखेर इन्द्र असाध्यै रिसाए।

**ऐरावतं दिक्करिणमारूढः शुशुभे स्वराट्।**
**यथा स्रवत्प्रस्रवणमुदयाद्रिमहर्पतिः॥ २५॥**

**पदार्थ–**
**यथा** = जसरी
**स्रवत्प्रस्रवणं** = अनेक झरनाहरू बगिरहेको
**उदयाद्रिं** = उदयाचलमा
**अहर्पतिः** = सूर्य शोभित हुन्छन्

**स्वराट्** = इन्द्र पनि
**ऐरावतं** = ऐरावत नामक
**दिक्करिणं** = दिग्गजमाथि
**आरूढः** = चढेर
**शुशुभे** = (त्यसै गरी) सुशोभित भए

**वाक्यार्थ–** जसरी अनेक झरनाहरू बगिरहेको उदयाचलमाथि रहँदा सूर्यको शोभा हुन्छ त्यसै गरी (गालाबाट मदका धाराहरू बगाइरहेको) ऐरावत नामक हात्तीमाथि चढेका इन्द्र पनि सुशोभित भए।

**तस्यासन् सर्वतो देवा नानावाहध्वजायुधाः।**
**लोकपालाः सहगणैर्वाय्वग्निवरुणादयः॥ २६॥**

**पदार्थ–**
**तस्य** = ती इन्द्रको
**सर्वतः** = चारैतिर
**नानावाहध्वजायुधाः** = अनेक वाहन, ध्वजा र शस्त्रहरूले युक्त भएका
**देवाः** = देवताहरू र
**गणैः सह** = आफ्ना गणसहित
**वाय्वग्निवरुणादयः** = वायु, अग्नि, वरुण आदि
**लोकपालाः** = लोकपालहरू
**आसन्** = थिए

**वाक्यार्थ–** इन्द्रलाई पनि चारैतिरबाट अनेक वाहन, ध्वजा र शस्त्रास्त्र लिएका देवता र आ-आफ्ना गणहरूले सहित वायु, अग्नि, वरुण आदि लोकपालहरूले घेरेका थिए।

**तेऽन्योन्यमभिसंसृत्य क्षिपन्तो मर्मभिर्मिथः।**
**आह्वयन्तो विशन्तोऽग्रे युयुधुर्द्वन्द्वयोधिनः॥ २७॥**

**पदार्थ–**
**द्वन्द्वयोधिनः** = आपसमा लड्ने
**ते** = ती वीरहरूले
**अन्योन्यं** = एक-अर्काको
**अभिसंसृत्य** = नजिक जाँदै
**मिथः** = आपसमा
**मर्मभिः** = मर्मस्पर्शी वचनहरूले
**क्षिपन्तः** = धिक्कार्दै
**आह्वयन्तः** = आफ्ना प्रतिद्वन्द्वीलाई बोलाउँदै
**अग्रे** = सेनाको अगाडि
**विशन्तः** = घुस्दै
**युयुधुः** = युद्ध गरे

**वाक्यार्थ–** परस्परमा मर्मस्पर्शी वचनहरूद्वारा धिक्कार्दै र आफ्ना प्रतिद्वन्द्वीलाई बोलाउँदै एक-अर्काको सेनाको भित्रभित्र घुस्दै तिनीहरूले एकआपसमा युद्ध गर्न थाले।

**युयोध बलिरिन्द्रेण तारकेण गुहोऽस्यत।**
**वरुणो हेतिनायुध्यन्मित्रो राजन् प्रहेतिना॥ २८॥**

**पदार्थ–**
**राजन्** = हे परीक्षित्
**बलिः** = असुरराज बलि
**इन्द्रेण** = इन्द्रसँग
**युयोध** = लडे
**गुहः** = कार्त्तिकेय
**तारकेण** = तारकासुरसँग
**अस्यत** = लडे
**वरुणः** = वरुण
**हेतिना** = हेतिसँग र
**मित्रः** = मित्र
**प्रहेतिना** = प्रहेतिसँग
**अयुध्यत्** = लडे

**वाक्यार्थ–** हे परीक्षित् ! त्यहाँ असुरराज बलि देवराज इन्द्रसँग लडे। तारकासुरसँग कार्त्तिकेय लडे भने हेतिसँग वरुण र प्रहेतिसँग मित्रदेवता लडे।

**यमस्तु कालनाभेन विश्वकर्मा मयेन वै।**

**शम्बरो युयुधे त्वष्ट्रा सवित्रा तु विरोचनः॥ २९॥**

**पदार्थ–**
**यमः तु** = यमराज चाहिँ
**कालनाभेन** = कालनाभसँग
**विश्वकर्मा** = विश्वकर्मा
**वै** = निश्चय नै
**मयेन** = मय दानवसँग
**शम्बरः** = शम्बरासुर
**त्वष्ट्रा** = त्वष्टासँग र
**सवित्रा तु** = सवितासँग
**विरोचनः** = विरोचन
**युयुधे** = लडे

**वाक्यार्थ–** यमराज कालनाभसँग अनि विश्वकर्मा मयसँग लडे भने शम्बरासुर त्वष्टासँग र विरोचन सवितासँग लडे।

**अपराजितेन नमुचिरश्विनौ वृषपर्वणा।**

**सूर्यो बलिसुतैर्देवो बाणज्येष्ठैः शतेन च॥ ३०॥**

**पदार्थ–**
**नमुचिः** = नमुचि
**अपराजितेन** = अपराजितसँग
**अश्विनौ** = दुई भाइ अश्विनीकुमार
**वृषपर्वणा** = वृषपर्वासँग लडे
**देवः सूर्यः च** = सूर्यदेव चाहिँ
**बाणज्येष्ठैः** = जेठा बाणसहितका
**शतेन** = सय भाइ
**बलिसुतैः** = बलिपुत्रहरूसँग लडे

**वाक्यार्थ–** नमुचि अपराजितसँग र दुई भाइ अश्विनीकुमार वृषपर्वासँग लडे भने सूर्यदेव बाण आदि बलिका सय भाइ छोराहरूसँग लडे।

**राहुणा च तथा सोमः पुलोम्ना युयुधेऽनिलः।**

**निशुम्भशुम्भयोर्देवी भद्रकाली तरस्विनी॥ ३१॥**

**पदार्थ–**
**तथा च** = त्यसै गरी
**सोमः** = चन्द्रमा
**राहुणा** = राहुसँग
**अनिलः** = वायु
**पुलोम्ना** = पुलोमासँग
**युयुधे** = लडे
**तरस्विनी** = तीव्र वेग भएकी
**भद्रकाली देवी** = भद्रकाली देवी
**निशुम्भशुम्भयोः** = शुम्भ-निशुम्भसँग लड्नुभयो

**वाक्यार्थ–** त्यसै गरी चन्द्रमा राहुसँग लडे भने वायु पुलोमासँग लडे। तीव्र वेग भएकी भद्रकाली देवी चाहिँ शुम्भ र निशुम्भसँग लड्नुभयो।

**वृषाकपिस्तु जम्भेन महिषेण विभावसुः।**

**इल्वलः सह वातापिर्ब्रह्मपुत्रैररिन्दम॥ ३२॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुनाशक परीक्षित्
**वृषाकपिः तु** = भगवान् शङ्कर
**जम्भेन** = जम्भसँग
**विभावसुः** = अग्नि
**महिषेण** = महिषासुरसँग
**सह वातापिः** = वातापि सहित
**इल्वलः** = इल्वल चाहिँ
**ब्रह्मपुत्रैः** = ब्रह्माजीका छोरा मरीचि आदिसँग लडे

**वाक्यार्थ–** हे परीक्षित् ! भगवान् शङ्कर जम्भसँग लड्नुभयो भने अग्नि महिषासुरसँग लडे अनि वातापि र इल्वल चाहिँ ब्रह्माजीका छोरा मरीचि आदिसँग लडे।

**कामदेवेन दुर्मर्ष उत्कलो मातृभिः सह ।**
**बृहस्पतिश्चोशनसा नरकेण शनैश्चरः ॥ ३३ ॥**

**पदार्थ–**
**दुर्मर्षः** = दुर्मर्ष
**कामदेवेन** = कामदेवसँग
**उत्कलः** = उत्कल
**मातृभिः सह** = मातृकागणसँग
**बृहस्पतिः च** = बृहस्पति
**उशनसा** = शुक्राचार्यसँग
**शनैश्चरः** = शनैश्चर
**नरकेण** = नरकासुरसँग लडे

**वाक्यार्थ–** दुर्मर्ष कामदेवसँग, उत्कल मातृकागणसँग लडे भने बृहस्पति शुक्राचार्यसँग, त्यस्तै शनैश्चर नरकासुरसँग लडे।

**मरुतो निवातकवचैः कालेयैर्वसवोऽमराः ।**
**विश्वेदेवास्तु पौलोमै रुद्राः क्रोधवशैः सह ॥ ३४ ॥**

**पदार्थ–**
**मरुतः** = मरुत्गण
**निवातकवचैः** = निवात-कवचहरूसँग
**वसवः अमराः** = वसु देवताहरू
**कालेयैः** = कालेयगणसँग
**विश्वेदेवाः तु** = विश्वेदेवहरू चाहिँ
**पौलोमैः** = पौलोमहरूसँग
**रुद्राः** = एघार रुद्रहरू
**क्रोधवशैः सह** = क्रोधवशहरूसँग लडे

**वाक्यार्थ–** मरुत्हरू निवातकवचहरूसँग लडे, आठ वसुहरू कालेयगणसँग लडे। त्यसै गरी विश्वेदेवहरू पौलोमहरूसँग लडे भने एघार रुद्रहरू क्रोधवशहरूसँग लडे।

**त एवमाजावसुराः सुरेन्द्रा द्वन्द्वेन संहत्य च युध्यमानाः ।**
**अन्योन्यमासाद्य निजघ्नुरोजसा जिगीषवस्तीक्ष्णशरासितोमरैः ॥ ३५ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**आजौ** = युद्धभूमिमा
**द्वन्द्वेन** = एक-आपसमा
**संहत्य** = भिडेर
**युध्यमानाः** = युद्ध गरिरहेका
**जिगीषवः** = एक-अर्कालाई जित्न चाहने
**ते** = ती
**असुराः** = दैत्य र
**सुरेन्द्राः च** = देवताहरूले
**अन्योन्यं** = आ-आफ्नो शत्रुलाई
**आसाद्य** = पाएर
**ओजसा** = वेगपूर्वक
**तीक्ष्णशरासितोमरैः** = तीखा बाण, तरबार र तोमरले
**निजघ्नुः** = प्रहार गरे

**वाक्यार्थ–** यसप्रकार युद्धभूमिमा एक-आपसमा युद्ध गरिरहेका र एक-अर्कालाई जित्न चाहने ती देवता र दैत्यहरूले आ-आफ्ना शत्रुलाई पाएर तीखा बाण, तरबार र तोमरहरूले वेगपूर्वक प्रहार गरे।

**भुशुण्डिभिश्चक्रगदर्ष्टिपट्टिशैः शक्त्युल्मुकैः प्रासपरश्वधैरपि।**
**निस्त्रिंशभल्लैः परिघैः समुद्गरैः सभिन्दिपालैश्च शिरांसि चिच्छिदुः॥ ३६॥**

**पदार्थ–**
**भुशुण्डिभिः** = भुशुण्डिहरू (अग्निप्रक्षेपक अस्त्र)
**चक्रगदर्ष्टिपट्टिशैः** = चक्र, गदा, ऋष्टि, पट्टिश
**शक्त्युल्मुकैः** = शक्ति र उल्मुक (अगुल्टो)
**प्रासपरश्वधैः अपि** = प्रास र बञ्चरो
**निस्त्रिंशभल्लैः** = तरबार, भाला अनि
**सभिन्दिपालैः** = भिन्दिपाल र
**समुद्गरैः** = मुद्गरसहित
**परिघैः च** = परिघले समेत
**शिरांसि** = एक-अर्काका शिर
**चिच्छिदुः** = छिनाए

**वाक्यार्थ–** ती देवता र दैत्यहरूले भुशुण्डि, चक्र, गदा, ऋष्टि, पट्टिश, शक्ति, उल्मुक, प्रास, बञ्चरो, तरबार, भाला, भिन्दिपाल, मुद्गर र परिघद्वारा एक-अर्काका शिर चटाचट छिनाए।

**गजास्तुरङ्गाः सरथाः पदातयः सारोहवाहा विविधा विखण्डिताः।**
**निकृत्तबाहूरुशिरोधराङ्घ्रयश्छिन्नध्वजेष्वासतनुत्रभूषणाः॥ ३७॥**

**पदार्थ–**
**सारोहवाहाः** = योद्धाहरू र तिनका सवारीका साथै अरू
**गजाः** = हात्तीहरू
**तुरङ्गाः** = घोडाहरू
**सरथाः** = रथसमेतका
**पदातयः** = पैदल सेनाहरू
**विविधाः** = अनेक प्रकारका
**विखण्डिताः** = छिन्न-भिन्न भएका
**निकृत्तबाहूरुशिरोधराङ्घ्रयः** = हात, तिघ्रा, गर्धन र खुट्टा काटिएका र
**छिन्नध्वजेष्वासतनुत्रभूषणाः** = ध्वजा, धनु, कवच र आभूषण काटिएका थिए

**वाक्यार्थ–** त्यस युद्धमा आ-आफ्ना सवारीसँगै योद्धाहरू मारिन थाले। हात्ती, घोडा, रथ र सम्पूर्ण पैदल सेना नै छिन्न-भिन्न भए। योद्धाहरूमध्ये कसैको हात, कसैको तिघ्रा, कसैको गर्धन र कसैका खुट्टा छिनाइए अनि तिनका ध्वजा, धनु, कवच र आभूषणहरू पनि काटिए।

**तेषां पदाघातरथाङ्गचूर्णितादायोधनादुल्बण उत्थितस्तदा।**
**रेणुर्दिशः खं द्युमणिं च छादयन् न्यवर्ततासृक्स्रुतिभिः परिप्लुतात्॥ ३८॥**

**पदार्थ–**
**तेषां** = ती योद्धाहरूको
**पदाघातरथाङ्गचूर्णितात्** = खुट्टा बजारिएको र रथको पाङ्ग्रो धस्सिएको
**आयोधनात्** = त्यो युद्धभूमिबाट
**तदा** = त्यस वेला
**दिशः** = सम्पूर्ण दिशाहरूलाई
**खं** = आकाशलाई र

| | | |
|---|---|---|
| **द्युमणिं च** = सूर्यलाई समेत | **रेणुः** = धूलो | बग्नाले |
| **छादयन्** = ढपक्क ढाक्दै | **उत्थितः** = उड्न थाल्यो | **परिप्लुतात्** = भुइँ भिजेपछि |
| **उल्बणः** = प्रचण्ड | **असृक्स्रुतिभिः** = रगतको धारा | **न्यवर्तत** = हट्यो |

**वाक्यार्थ–** ती योद्धाहरूले भुइँमा खुट्टा बजार्दा र रथका पाङ्ग्राहरू धस्सिँदा त्यस युद्धभूमिबाट यति धेरै धूलो उड्न थाल्यो कि, त्यसले सम्पूर्ण दिशा, आकाश र सूर्यलाई समेत पूरै ढाकिदियो। एकछिनपछि रगतको धाराले पूरै युद्धभूमि भिजेपछि भने त्यो धूलो हट्यो।

**शिरोभिरुद्धूतकिरीटकुण्डलैः संरम्भदृग्भिः परिदष्टदच्छदैः।**
**महाभुजैः साभरणैः सहायुधैः सा प्रास्तृता भूः करभोरुभिर्बभौ॥ ३९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **उद्धूतकिरीटकुण्डलैः** = मुकुट र कुण्डल खसेका | टोकिरहेका | तिघ्राहरूले पनि |
| **संरम्भदृग्भिः** = रिसाएका आँखाले युक्त | **शिरोभिः** = शिरहरूले | **प्रास्तृता** = छपक्क ढाकिएको |
| **परिदष्टदच्छदैः** = दाँतले ओठ | **साभरणैः** = गहनासहितका | **सा** = त्यो |
| | **सहायुधैः** = अस्त्रशस्त्रयुक्त | **भूः** = रणभूमि |
| | **महाभुजैः** = विशाल हातहरूले र | **बभौ** = सुशोभित देखियो |
| | **करभोरुभिः** = मोटा-मोटा | |

**वाक्यार्थ–** काटिएर खसेका शिर, हात र खुट्टाहरूले त्यो रणभूमि छपक्क ढाकियो। ती शिरबाट मुकुट र कुण्डल खसेका थिए, आँखा रिसले भरिएका थिए भने दाँतले ओठ दबाइएका थिए। काटिएका हातहरू पनि गहना र अस्त्रशस्त्रहरूले सहित नै थिए अनि काटिएका तिघ्राहरू मोटामोटा थिए। काटिएका अङ्गहरूद्वारा यसरी ढाकिएको त्यो रणभूमि भयानक देखियो।

**कबन्धास्तत्र चोत्पेतुः पतितस्वशिरोऽक्षिभिः।**
**उद्यतायुधदोर्दण्डैराधावन्तो भटान् मृधे॥ ४०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तत्र** = त्यो | धड (मुर्कट्टा)हरू पनि | शस्त्रास्त्र उठाई |
| **मृधे** = युद्धमा | **पतितस्वशिरोऽक्षिभिः** = खसेका शिरमा रहेका आँखाले हेर्दै | **भटान्** = शत्रु वीरहरूतिर |
| **कबन्धाः च** = शिर काटिएका | **उद्यतायुधदोर्दण्डैः** = हातमा | **आधावन्तः** = दौडिँदै |
| | | **उत्पेतुः** = उफ्रिन थाले |

**वाक्यार्थ–** त्यस युद्धमा शिर काटिइसकेका धड (मुर्कट्टा)हरू पनि भुइँमा खसेका शिरका आँखाले आफ्ना शत्रुहरूलाई हेर्दै हातमा अस्त्र-शस्त्र उठाई विरोधी वीरहरूतिर जाइलाग्न र उफ्रिन थाले।

**बलिर्महेन्द्रं दशभिस्त्रिभिरैरावतं शरैः।**
**चतुर्भिश्चतुरो वाहानेकेनारोहमार्च्छयत्॥ ४१॥**

**पदार्थ—**
**बलिः** = महाराज बलिले
**दशभिः** = दश ओटा
**शरैः** = बाणहरूद्वारा
**महेन्द्रं** = देवराज इन्द्रलाई
**त्रिभिः** = तीन बाणले
**ऐरावतं** = ऐरावत हात्तीलाई
**चतुर्भिः** = चार बाणले
**चतुरः** = चार जना
**वाहान्** = ऐरावतका पादरक्षकहरूलाई
**एकेन** = एउटा बाणले
**आरोहं** = हात्तीको माउतेलाई
**आर्च्छयत्** = प्रहार गरे

**वाक्यार्थ—** असुरराज बलिले इन्द्रमाथि दश ओटा, ऐरावतमाथि तीन ओटा, ऐरावतका पादरक्षा गर्ने चार सैनिकमाथि चार ओटा र माउतेमाथि एउटा बाण प्रहार गरे।

**स तानापततः शक्रस्तावद्भिः शीघ्रविक्रमः ।**
**चिच्छेद निशितैर्भल्लैरसम्प्राप्तान् हसन्निव ॥ ४२ ॥**

**पदार्थ—**
**शीघ्रविक्रमः** = चाँडै पराक्रम गर्ने
**सः** = ती
**शक्रः** = इन्द्रले पनि
**आपततः** = आफूतिर हानिएका
**तान्** = ती बाणलाई
**असम्प्राप्तान्** = आइ नपुग्दै बीचैमा
**तावद्भिः** = त्यति नै (अठार ओटा)
**निशितैः** = तीखा
**भल्लैः** = भालाहरूद्वारा
**हसन् इव** = हाँस्दै झैं
**चिच्छेद** = काटिदिए

**वाक्यार्थ—** चाँडै नै पराक्रम देखाउन सक्ने देवराज इन्द्रले पनि आफूतिर हानिएका ती अठार ओटा बाणलाई आफूनजिक आइपुग्नुभन्दा अघि नै अठार ओटै तीखा भालाहरूले हाँस्दै टुक्रा-टुक्रा पारिदिए।

**तस्य कर्मोत्तमं वीक्ष्य दुर्मर्षः शक्तिमाददे ।**
**तां ज्वलन्तीं महोल्काभां हस्तस्थामच्छिनद्धरिः ॥ ४३ ॥**

**पदार्थ—**
**तस्य** = ती इन्द्रको
**उत्तमं** = श्रेष्ठ
**कर्म** = पराक्रमलाई
**वीक्ष्य** = देखेर
**दुर्मर्षः** = रिसाएका बलिले
**शक्तिं** = शक्ति
**आददे** = हातमा लिए
**ज्वलन्तीं** = बलिरहेको
**महोल्काभां** = ठुलो राँको जस्तो
**तां** = त्यो शक्तिलाई
**हस्तस्थां** = हातमा लिनेबित्तिकै
**हरिः** = इन्द्रले
**अच्छिनत्** = काटिदिए

**वाक्यार्थ—** इन्द्रको श्रेष्ठ पराक्रम देखेर असह्य भई असाध्यै रिसाएका राजा बलिले आफ्नो हातमा ठुलो राँको बले झैं चम्किलो शक्ति लिए। तर इन्द्रले त्यसलाई हातमा लिनेबित्तिकै काटिदिए।

**ततः शूलं ततः प्रासं ततस्तोमरमृष्टयः ।**
**यद्यच्छस्त्रं समादद्यात् सर्वं तदच्छिनद् विभुः ॥ ४४ ॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**शूलं** = त्रिशूल
**ततः** = त्यसपछि
**प्रासं** = प्रास
**ततः** = त्यसपछि
**तोमरं** = तोमर र
**ऋष्टयः** = ऋष्टिसमेत
**यत् यत्** = जुन-जुन
**शस्त्रं** = शस्त्र
**समादद्यात्** = बलिले लिए
**तत्** = ती
**सर्वं** = सबैलाई
**विभुः** = ऐश्वर्यशाली इन्द्रले
**अच्छिनत्** = काटिदिए

**वाक्यार्थ—** त्यसपछि बलिले एक-एक गर्दै शूल, प्रास, तोमर र ऋष्टि हातमा लिए। तर उनी जुन-जुन शस्त्र उठाउँथे, ती सबैलाई ऐश्वर्यशाली इन्द्रले एक-एक गरी काटिदिए।

**ससर्जाथासुरीं मायामन्तर्धानगतोऽसुरः।**
**ततः प्रादुरभूच्छैलः सुरानीकोपरि प्रभो ॥ ४५॥**

**पदार्थ—**
**प्रभो** = हे राजा परीक्षित्
**अथ** = त्यसपछि
**अन्तर्धानगतः** = नदेखिने भएका
**असुरः** = असुरराज बलिले
**आसुरीं** = आसुरी
**मायां** = माया
**ससर्ज** = सृष्टि गरे
**ततः** = त्यसपछि
**सुरानीकोपरि** = देवसेनामाथि
**शैलः** = पहाड
**प्रादुरभूत्** = प्रकट भयो

**वाक्यार्थ—** हे परीक्षित्! आफ्ना सबै अस्त्र काटिएपछि असुरराज बलि नदेखिने भए र उनले आसुरी मायाको सृष्टि गरे। आसुरी मायाको प्रभावले देवसेनामाथि एउटा पहाड प्रकट भयो।

**ततो निपेतुस्तरवो दह्यमाना दवाग्निना।**
**शिलाः सटङ्कशिखराश्चूर्णयन्त्यो द्विषद्बलम्॥ ४६॥**

**पदार्थ—**
**ततः** = त्यो पहाडबाट
**दवाग्निना** = डढेलोले
**दह्यमानाः** = डढ्दै गरेका
**तरवः** = रुखहरू र
**सटङ्कशिखराः** = छिनुसमान तीखा धार भएका चुचुराहरूसमेत
**शिलाः** = ढुङ्गाहरू
**द्विषद्बलम्** = शत्रु देवताको सेनालाई
**चूर्णयन्त्यः** = चूर्ण बनाउँदै
**निपेतुः** = खस्न थाले

**वाक्यार्थ—** त्यो मायामय पर्वतबाट डढेलोद्वारा डढ्दै गरेका रुखहरू र छिनुसमानका अत्यन्त तीखा चुचुराहरू सहित ढुङ्गाहरू देवताका सेनालाई धुलोपिठो बनाउँदै खस्न थाले।

**महोरगाः समुत्पेतुर्दन्दशूकाः सवृश्चिकाः।**
**सिंहव्याघ्रवराहाश्च मर्दयन्तो महागजान्॥ ४७॥**

**पदार्थ—**
**सिंहव्याघ्रवराहाः** = सिंह, बाघ, बँदेलहरू र
**सवृश्चिकाः** = बिच्छीसमेतका
**महोरगाः** = ठुला सर्पहरू
**दन्दशूकाः च** = नागहरूले समेत
**महागजान्** = देवसेनाका ठुला हात्तीहरूलाई
**मर्दयन्तः** = पीडित बनाउँदै
**समुत्पेतुः** = उफ्रिन थाले

**वाक्यार्थ–** सिंह, बाघ र बँदेलहरू अनि अनेक प्रकारका सर्प, नाग र बिच्छीहरू देवसेनाका ठुला हात्तीहरूलाई पीडित बनाउँदै उफ्रिन थाले।

**यातुधान्यश्च शतशः शूलहस्ता विवाससः।**

**छिन्धि भिन्धीति वादिन्यस्तथा रक्षोगणाः प्रभो ॥ ४८ ॥**

**पदार्थ–**
**प्रभो** = हे राजा परीक्षित्
**शूलहस्ताः** = हातमा त्रिशूल लिएका
**विवाससः** = नाङ्गा
**छिन्धि भिन्धि इति** = छिनाऊ, काट यसो
**वादिन्यः** = भन्दै गरेका
**शतशः** = सयौँ
**यातुधान्यः** = राक्षस्नीहरू
**तथा** = त्यसै गरी
**रक्षोगणाः च** = राक्षसका गण पनि प्रकट भए

**वाक्यार्थ–** हे परीक्षित्! त्यस रणभूमिमा त्रिशूल हातमा लिएका र छिनाऊ, काट भन्दै कराइरहेका सयौँ नाङ्गा राक्षस्नीहरू र राक्षसका गणहरू पनि प्रकट भए।

**ततो महाघना व्योम्नि गम्भीरपरुषस्वनाः।**

**अङ्गारान् मुमुचुर्वातैराहताः स्तनयित्नवः ॥ ४९ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**व्योम्नि** = आकाशमा
**गम्भीरपरुषस्वनाः** = आपसमा ठोक्किएर गम्भीर र कठोर गर्जना गर्ने
**महाघनाः** = ठुला बादलहरू देखिए
**वातैः** = हावाद्वारा
**आहताः** = ठोक्किएका
**स्तनयित्नवः** = ती बादलहरूले
**अङ्गारान्** = अँगार
**मुमुचुः** = बर्साए

**वाक्यार्थ–** आकाशमा बादलहरू ठोक्किएर गम्भीर र कठोर गर्जना गर्न थाले। हावाको प्रचण्ड वेगद्वारा आपसमा ठोक्किएका ती बादलहरूले देवसेनामाथि अँगार बर्साए।

**सृष्टो दैत्येन सुमहान् वह्निः श्वसनसारथिः।**

**सांवर्तक इवात्युग्रो विबुधध्वजिनीमधाक् ॥ ५० ॥**

**पदार्थ–**
**दैत्येन** = दैत्यराज बलिद्वारा
**सृष्टः** = रचिएको
**श्वसनसारथिः** = वायुको सहायताले फैलिरहेको
**सांवर्तकः इव** = प्रलयकालीन अग्नि झैँ
**अत्युग्रः** = अत्यन्त भयङ्कर
**सुमहान्** = विशाल
**वह्निः** = आगोले
**विबुधध्वजिनीं** = देवसेनालाई
**अधाक्** = जलाउन थाल्यो

**वाक्यार्थ–** दैत्यराज बलिले प्रलयकालीन अग्निसमान अत्यन्त भयङ्कर आगोको सृष्टि गरे। वायुको सहायताद्वारा रुन्-रुन् फैलिरहेको त्यो विशाल आगोले देवसेनालाई जलाउन थाल्यो।

**ततः समुद्र उद्वेलः सर्वतः प्रत्यदृश्यत ।**

**प्रचण्डवातैरुद्धूततरङ्गावर्तभीषणः ॥ ५१ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**प्रचण्डवातैः** = प्रबल आँधीका कारण
**उद्धूततरङ्गावर्तभीषणः** = ठुला-ठुला छाल र भुमरीले युक्त भएको
**उद्वेलः** = सीमालाई नाघेर बढिरहेको
**समुद्रः** = समुद्र
**सर्वतः** = (देवसेनाको) चारैतिर
**प्रत्यदृश्यत** = देखिन थाल्यो

**वाक्यार्थ–** त्यसपछि त्यहाँ प्रबल आँधीको कारण ठुला-ठुला छालहरू उठिरहेको र भयङ्कर भुमरी परी आफ्नो सीमालाई नाघेर बढिरहेको समुद्रले देवसेनालाई चारैतिरबाट घेर्न थाल्यो।

**एवं दैत्यैर्महामायैरलक्ष्यगतिभीषणैः ।**

**सृज्यमानासु मायासु विषेदुः सुरसैनिकाः ॥ ५२ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**महामायैः** = ठुला मायावी र
**अलक्ष्यगतिभीषणैः** = मायाद्वारा लुकेर गति नै थाहा नपाइनाले झन् भयङ्कर बनेका
**दैत्यैः** = दैत्यहरूद्वारा
**मायासु** = अनेक प्रकारका आसुरी माया
**सृज्यमानासु** = रचिन थालेपछि
**सुरसैनिकाः** = देवताका सैनिकहरू
**विषेदुः** = ज्यादै दुःखी भए

**वाक्यार्थ–** महामायावी र मायाद्वारा लुकेर गति नै थाहा नपाइनाले झन् भयङ्कर बनेका दैत्यहरूले अनेक प्रकारका आसुरी माया देखाउन थालेपछि देवताका सैनिकहरू ज्यादै दुःखी भए।

**न तत्प्रतिविधिं यत्र विदुरिन्द्रादयो नृप ।**

**ध्यातः प्रादुरभूत् तत्र भगवान् विश्वभावनः ॥ ५३ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**यत्र** = जुन युद्धभूमिमा
**इन्द्रादयः** = इन्द्र आदि देवताहरूले
**तत्प्रतिविधिं** = त्यसको प्रतीकारको उपाय
**न विदुः** = जानेनन् र
**तत्र** = त्यहीँ नै
**ध्यातः** = उनीहरूद्वारा ध्यान गरिएका
**विश्वभावनः** = विश्वका जीवनदाता
**भगवान्** = भगवान् श्रीहरि
**प्रादुरभूत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यो रणभूमिमा इन्द्र आदि देवताहरूले यस आपत्तिको प्रतीकार गर्ने उपाय जान्न सकेनन्। उनीहरूले त्यहीँ विश्वका जीवनदाता भगवान् श्रीहरिको ध्यान गरेपछि उहाँ त्यहीँ प्रकट हुनुभयो।

**ततः सुपर्णांसकृताङ्घ्रिपल्लवः पिशङ्गवासा नवकञ्जलोचनः ।**

**अदृश्यताष्टायुधबाहुरुल्लसच्छ्रीकौस्तुभानर्घ्यकिरीटकुण्डलः ॥ ५४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सुपर्णांसकृताङ्घ्रिपल्लवः** = गरुडको काँधमाथि आफ्नो चरणकमल राखेका
**अष्टायुधबाहुः** = आठ हातमा आठैथरी अस्त्र धारण गर्ने
**नवकञ्जलोचनः** = ताजा कमलको फूलसमान आँखा भएका
**उल्लसच्छ्रीकौस्तुभानर्घ्यकिरीट-कुण्डलः** = लक्ष्मी, कौस्तुभमणि र अमूल्य मुकुट एवं कुण्डलहरूले युक्त
**पिशङ्गवासाः** = पीताम्बरधारी भगवान्
**अदृश्यत** = देखिनुभयो

**वाक्यार्थ–** गरुडको काँधमाथि आफ्नो चरणकमल राखेका, आठ हातमा आठै ओटा शस्त्रहरू धारण गरेका, ताजा कमलको फूलजस्ता आँखा भएका, छातीमा लक्ष्मी र कौस्तुभमणि एवं शिरमा अमूल्य मुकुट एवं कुण्डलहरू धारण गरेका पीताम्बरधारी भगवान् प्रकट हुनुभयो।

**तस्मिन् प्रविष्टेऽसुरकूटकर्मजा माया विनेशुर्महिना महीयसः।**
**स्वप्नो यथा हि प्रतिबोध आगते हरिस्मृतिः सर्वविपद्विमोक्षणम्॥ ५५॥**

**पदार्थ–**
**यथा** = जसरी
**प्रतिबोधे** = जाग्रत्
**आगते** = आएपछि
**स्वप्नः** = सपना
**हि** = निश्चय नै (नष्ट हुन्छ)
**तस्मिन्** = उहाँ भगवान्
**प्रविष्टे** = त्यहाँ आउनुभएपछि
**महीयसः** = प्रभावशाली उहाँकै
**महिना** = महिमाले
**असुरकूटकर्मजाः** = असुरका छलकपटबाट पैदा भएका
**मायाः** = अनेकथरी मायाहरू
**विनेशुः** = तत्काल नष्ट भए
**हरिस्मृतिः** = परमात्माको सम्झना गर्नु
**सर्वविपद्विमोक्षणम्** = सम्पूर्ण आपत्तिहरूबाट छुट्नु हो

**वाक्यार्थ–** जसरी जाग्रत् अवस्थामा आएपछि सपना आफैं नष्ट हुन्छ त्यसै गरी प्रभावशाली भगवान् त्यहाँ आउनुभएपछि उहाँकै महिमाले छलकपटपूर्ण असुरका अनेकथरी मायाहरू तत्काल नष्ट भए। वास्तवमा परमात्माको सम्झना गर्नु सम्पूर्ण आपत्तिहरूबाट छुट्नु हो।

**दृष्ट्वा मृधे गरुडवाहमिभारिवाह**
**आविध्य शूलमहिनोदथ कालनेमिः।**
**तल्लीलया गरुडमूर्ध्नि पतद् गृहीत्वा**
**तेनाहनन्नृप सवाहमरिं त्र्यधीशः॥५६॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**इभारिवाहः** = सिंहमाथि चढेको
**कालनेमिः** = कालनेमिले
**मृधे** = युद्धभूमिमा
**गरुडवाहम्** = गरुडवाहन भगवान्लाई
**दृष्ट्वा** = देखेर
**शूलं** = त्रिशूल
**आविध्य** = उठाई
**अहिनोत्** = प्रहार गर्‍यो
**नृप** = हे परीक्षित्
**त्र्यधीशः** = तीनै लोकका मालिक भगवान्ले पनि
**गरुडमूर्ध्नि** = गरुडको टाउकोमा

**पतत्** = लाग्नै लागेको
**तत्** = त्यो भयङ्कर त्रिशूललाई
**लीलया** = खेल-खेलमै
**गृहीत्वा** = समातेर
**तेन** = त्यही त्रिशूलले
**सवाहं** = वाहन सिंह समेत
**अरिं** = शत्रु कालनेमिलाई
**अहनत्** = मारिदिनुभयो

**वाक्यार्थ–** त्यस युद्धभूमिमा सिंहमाथि चढेको कालनेमि दैत्यले गरुडमाथि चढ्नुभएका भगवान्‌लाई देख्यो र उसले भगवान्‌लाई ताकेर भयङ्कर त्रिशूल प्रहार गऱ्यो। हे परीक्षित् ! तीनै लोकका मालिक भगवान्‌ले पनि गरुडको शिरमाथि लाग्नै लागेको वेलामा त्यो भयङ्कर त्रिशूललाई खेल-खेलमैं समातिदिनुभयो र त्यही त्रिशूलले उसको वाहन सिंह समेत त्यस दुष्ट कालनेमिलाई मारिदिनुभयो।

**माली सुमाल्यतिबलौ युधि पेततुर्य-**
**च्चक्रेण कृत्तशिरसावथ माल्यवांस्तम्।**
**आहत्य तिग्मगदयाहनदण्डजेन्द्रं**
**तावच्छिरोऽच्छिनदरेर्नदतोऽरिणाद्यः॥ ५७॥**

**पदार्थ–**
**युधि** = युद्धमा
**यच्चक्रेण** = जुन भगवान्‌को चक्रद्वारा
**कृत्तशिरसौ** = शिर काटिएका
**अतिबलौ** = अत्यन्त पराक्रमी
**माली** = माली र
**सुमाली** = सुमाली
**पेततुः** = ढले
**अथ** = त्यसपछि
**माल्यवान्** = माल्यवान् नामक दैत्यले
**तिग्मगदया** = भयङ्कर गदाले
**अण्डजेन्द्रं** = पक्षीराज गरुडलाई
**अहनत्** = प्रहार गऱ्यो
**आद्यः** = आदि पुरुष परमात्माले
**तम्** = ती गरुडलाई
**आहत्य** = प्रहार गरी
**नदतः** = गर्जना गरिरहेको
**अरेः** = शत्रु माल्यवान्‌को
**शिरः** = शिरलाई
**अरिणा** = चक्रद्वारा
**तावत्** = तत्काल नै
**अच्छिनत्** = छिनाइदिनुभयो

**वाक्यार्थ–** युद्धमा भगवान्‌को चक्रद्वारा शिर काटिएपछि अत्यन्त पराक्रमी दुई ओटा दैत्य माली र सुमाली त्यहीँ ढले। त्यसपछि माल्यवान् नामक दैत्यले आफ्नो भयङ्कर गदाले पक्षीराज गरुडमाथि प्रहार गऱ्यो र ठुलो गर्जना गर्न थाल्यो। आदिपुरुष परमात्माले पनि गर्जना गर्दागर्दै त्यो माल्यवान्‌को शिरलाई आफ्नो चक्रद्वारा तत्काल नै छिनाइदिनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**
**देवासुरसंग्रामे दशमोऽध्यायः॥ १०॥**

# अथ एकादशोऽध्यायः

## देवासुर सङ्ग्राममा देवताको विजय

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथो सुराः प्रत्युपलब्धचेतसः परस्य पुंसः परयानुकम्पया ।**

**जघ्नुर्भृशं शक्रसमीरणादयस्तांस्तान् रणे यैरभिसंहताः पुरा ॥ १ ॥**

**पदार्थ–**
**अथो** = यसपछि
**परस्य पुंसः** = परम पुरुष श्रीहरिको
**परया** = श्रेष्ठ (अहैतुकी)
**अनुकम्पया** = कृपाद्वारा
**प्रत्युपलब्धचेतसः** = चित्तवृत्ति उत्साहयुक्त बनेका
**शक्रसमीरणादयः** = इन्द्र, वायु आदि
**सुराः** = देवताहरूले
**पुरा** = पहिले
**रणे** = युद्धमा
**यैः** = जो-जो असुरहरूद्वारा
**अभिसंहताः** = आफू घायल बनेका थिए
**तान् तान्** = ती-ती असुरहरूलाई
**भृशं** = बारम्बार
**जघ्नुः** = प्रहार गर्न थाले

**वाक्यार्थ–** परम पुरुष श्रीहरिको अहैतुकी कृपाले उत्साहित बनेका इन्द्र, वायु आदि सम्पूर्ण देवताहरू युद्धमा पहिले जुन-जुन असुरवीरहरूद्वारा पीडित भएका थिए ती-ती असुरहरूलाई बारम्बार प्रहार गर्न थाले।

**वैरोचनाय संरब्धो भगवान् पाकशासनः ।**

**उदयच्छद् यदा वज्रं प्रजा हा हेति चुक्रुशुः ॥ २ ॥**

**पदार्थ–**
**संरब्धः** = अत्यन्त रिसाएका
**भगवान्** = ऐश्वर्यशाली
**पाकशासनः** = इन्द्रले
**वैरोचनाय** = विरोचनपुत्र बलिमाथि
**यदा** = जब
**वज्रं** = वज्र
**उदयच्छत्** = उठाए तब
**प्रजाः** = सम्पूर्ण प्रजाहरू
**हा हा इति** = हाहाकार गर्दै
**चुक्रुशुः** = कराउन थाले

**वाक्यार्थ–** इन्द्रले जब अत्यन्त रिसाई विरोचनपुत्र बलिमाथि प्रहार गर्न वज्र उठाए, तब सम्पूर्ण प्रजाहरू हाहाकार गर्दै कराउन थाले।

**वज्रपाणिस्तमाहेदं तिरस्कृत्य पुरःस्थितम् ।**

**मनस्विनं सुसम्पन्नं विचरन्तं महामृधे ॥ ३ ॥**

**पदार्थ–**
**महामृधे** = भयानक युद्धमा
**विचरन्तं** = घुमिरहेका
**मनस्विनं** = उत्साहयुक्त र
**सुसम्पन्नं** = अस्त्र-शस्त्रले युक्त
**पुरःस्थितम्** = आफ्नै अगाडि

रहेका
**तं** = ती बलिलाई
**तिरस्कृत्य** = तिरस्कार गर्दै
**वज्रपाणिः** = वज्रधारी इन्द्रले
**इदं** = यसो
**आह** = भने

**वाक्यार्थ–** भयानक युद्धमा पनि निर्भय भई घुमिरहेका, सम्पूर्ण शस्त्रास्त्रले सुसज्जित र उत्साहसम्पन्न असुरराज बलिलाई आफ्नै अगाडि आइपुगेको देखेपछि वज्रधारी देवराज इन्द्रले उनको तिरस्कार गर्दै यसो भने।

**नटवन्मूढ मायाभिर्मायेशान्नो जिगीषसि।**
**जित्वा बालान् निबद्धाक्षान् नटो हरति तद्धनम्॥ ४॥**

**पदार्थ–**
**निबद्धाक्षान्** = आँखा छोपिएका
**बालान्** = बच्चाहरूलाई
**जित्वा** = जितेर
**नटः** = मायावी नटुवाले
**तद्धनम्** = उनीहरूको पैसा
**हरति** = हरण गर्दछ
**मूढ** = हे मूर्ख (तँ पनि)
**नटवत्** = मायावी नटुवा जस्तो
**मायाभिः** = आफ्ना अनेकथरी
मायाद्वारा
**मायेशान्** = मायाका स्वामी
**नः** = हामीहरूलाई
**जिगीषसि** = जित्न खोज्छस्

**वाक्यार्थ–** मायावी नटुवाले बच्चाहरूको आँखा छली जादु देखाउँछ र उनीहरूलाई जिती उनीहरूको पैसा हरण गर्दछ। त्यही नटुवाले जस्तै तँ आफ्ना अनेकथरी मायाद्वारा हामी मायाका स्वामीलाई जित्न खोज्दैछस् ? (तेरो यो प्रयास बेकार छ)।

**आरुरुक्षन्ति मायाभिरुत्सिसृप्सन्ति ये दिवम्।**
**तान् दस्यून् विधुनोम्यज्ञान् पूर्वस्माच्च पदादधः॥ ५॥**

**पदार्थ–**
**ये** = जो मूर्खहरू
**मायाभिः** = क्षुद्र मायाहरूद्वारा
**दिवम्** = स्वर्गमा
**आरुरुक्षन्ति** = चढ्न चाहन्छन् र
**उत्सिसृप्सन्ति** = त्यहाँभन्दा
माथि पनि चढ्न खोज्छन्
**तान्** = ती
**अज्ञान्** = अज्ञानी
**दस्यून्** = लुटेराहरूलाई
**पूर्वस्मात्** = पहिलेका
**पदात् च** = स्थितिबाट पनि
**अधः** = तल
**विधुनोमि** = खसालिदिन्छु

**वाक्यार्थ–** जो मूर्खहरू क्षुद्र मायाहरूको भरमा स्वर्गमा अधिकार गर्न चाहन्छन्, अरु त्यहाँभन्दा माथिल्ला लोकमा समेत पुग्न खोज्दछन् ती अज्ञानी लुटेराहरूलाई म पहिलेको स्थितिबाट पनि तल खसालिदिन्छु।

**सोऽहं दुर्मायिनस्तेऽद्य वज्रेण शतपर्वणा।**
**शिरो हरिष्ये मन्दात्मन् घटस्व ज्ञातिभिः सह॥ ६॥**

**पदार्थ–**
**मन्दात्मन्** = हे मन्दबुद्धि
**सः** = त्यस्तो
**अहं** = म
**अद्य** = आज
**शतपर्वणा** = सय ओटा धार

भएको
**वज्रेण** = वज्रद्वारा
**दुर्मायिनः** = दुष्ट माया भएको
**ते** = तेरो
**शिरः** = शिर
**हरिष्ये** = छिनाइदिनेछु
**ज्ञातिभिः सह** = आफ्ना बन्धुबान्धवहरूको साथमा
**घटस्व** = सक्दो प्रयास गर्

**वाक्यार्थ–** हे मन्दबुद्धि ! त्यस्तो प्रबल पराक्रमी मैले आज सय ओटा धार भएको आफ्नो वज्रद्वारा दुष्ट मायावी तेरो शिरलाई छिनाइदिनेछु। आफ्ना बन्धुबान्धवहरूको साथमा सक्दो प्रयास गर्।

**बलिरुवाच** (बलिले भने)

**सङ्ग्रामे वर्तमानानां कालचोदितकर्मणाम्।**
**कीर्तिर्जयोऽजयो मृत्युः सर्वेषां स्युरनुक्रमात्॥ ७॥**

**पदार्थ–**
**कालचोदितकर्मणाम्** = कालद्वारा प्रेरित भई कर्म गर्ने
**सङ्ग्रामे** = युद्धमा
**वर्तमानानां** = रहेका
**सर्वेषां** = सबै योद्धाहरूको
**अनुक्रमात्** = क्रमैसँग
**जयः** = जित
**अजयः** = हार
**कीर्तिः** = कीर्ति
**मृत्युः** = मृत्यु
**स्युः** = भइरहन्छन्

**वाक्यार्थ–** हे इन्द्र ! कालद्वारा प्रेरित भई कर्म गर्ने युद्धमा रहेका योद्धाहरूलाई कहिले जित, कहिले हार, कहिले विजयको कीर्ति र कहिले मृत्यु त भइरहन्छन् नै।

**तदिदं कालरशनं जनाः पश्यन्ति सूरयः।**
**न हृष्यन्ति न शोचन्ति तत्र यूयमपण्डिताः॥ ८॥**

**पदार्थ–**
**तत्** = त्यसैले
**सूरयः** = विवेकी
**जनाः** = मानिसहरूले
**इदं** = यो जगत्लाई
**कालरशनं** = कालरूपी डोरीद्वारा नियन्त्रित भएको
**पश्यन्ति** = देख्दछन् र
**न हृष्यन्ति** = न खुसी हुन्छन्
**न शोचन्ति** = न त शोक नै गर्दछन्
**तत्र** = त्यस विषयमा
**यूयं** = तिमीहरू
**अपण्डिताः** = मूर्ख छौ

**वाक्यार्थ–** विवेकी व्यक्तिहरू यस जगत्लाई कालको डोरीले नियन्त्रित भएको कुरा जान्दछन् र उनीहरू जय र पराजयमा न खुसी हुन्छन्, न त शोक नै गर्दछन्। यस विषयमा तिमीहरू मूर्ख छौ (कुरा बुझ्दैनौ)।

**न वयं मन्यमानानामात्मानं तत्र साधनम्।**
**गिरो वः साधुशोच्यानां गृह्णीमो मर्मताडनाः॥ ९॥**

**पदार्थ–**
**तत्र** = ती जय, पराजय आदिमा
**आत्मानं** = आफूलाई नै
**साधनम्** = प्रधान कारण
**मन्यमानानां** = मानिरहेका
**साधुशोच्यानां** = विवेकीका

दृष्टिमा शोचनीय भएका
**वः** = तिमीहरूको
**मर्मताडनाः** = मर्मस्पर्शी
**गिरः** = वचनहरूलाई
**वयं** = हामी विवेकीहरू
**न गृह्णीमः** = ग्रहण गर्दैनौं

**वाक्यार्थ–** जय, पराजय आदिमा आफूलाई नै प्रधान कारण मान्ने तिमीहरू विवेकी पुरुषहरूको दृष्टिमा दयायोग्य छौ। तिमीहरूका मर्मस्पर्शी वचनहरूलाई हामीहरू वास्ता गर्दैनौं।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्याक्षिप्य विभुं वीरो नाराचैर्वीरमर्दनः।**
**आकर्णपूर्णैरहनदाक्षेपैराहतं पुनः॥ १०॥**

**पदार्थ–**
**वीरमर्दनः** = वीरहरूको अभिमान नष्ट गर्ने
**वीरः** = वीर बलिले
**विभुं** = शक्तिशाली इन्द्रलाई
**इति** = यस्ता
**आक्षेपैः** = गालीहरूद्वारा
**आक्षिप्य** = हप्काएर (त्यसबाट)
**आहतं** = पीडित भएका इन्द्रलाई
**पुनः** = फेरि
**आकर्णपूर्णैः** = धनुलाई कानसम्म खिँचिएका
**नाराचैः** = ठुला बाणहरूले
**अहनत्** = प्रहार गरे

**वाक्यार्थ–** वीरहरूको अभिमान नष्ट गरिदिने वीर बलिले यसरी हप्काएर त्यसबाट आहत भएका इन्द्रमाथि आफ्नो धनुलाई कानसम्म खिँच्दै ठुला खालका बाणहरूले फेरि प्रहार गर्न थाले।

**एवं निराकृतो देवो वैरिणा तथ्यवादिना।**
**नामृष्यत् तदधिक्षेपं तोत्राहत इव द्विपः॥ ११॥**

**पदार्थ–**
**तथ्यवादिना** = सत्य वचन बोल्ने
**वैरिणा** = आफ्नो शत्रुद्वारा
**एवं** = यसप्रकार
**निराकृतः** = तिरस्कार गरिएका
**देवः** = देवराज इन्द्रले
**तोत्राहतः** = अङ्कुशले प्रहार गरिएको
**द्विपः इव** = हात्ती झैँ भई
**तदधिक्षेपं** = बलिको आक्षेपलाई
**न अमृष्यत्** = सहन सकेनन्

**वाक्यार्थ–** सत्य वचन बोल्ने शत्रु बलिद्वारा तिरस्कार गरिएका देवराज इन्द्र अङ्कुशद्वारा प्रहार गरिएको हात्ती झैँ विह्वल भए। उनले यस तिरस्कारलाई सहन सकेनन्।

**प्राहरत् कुलिशं तस्मा अमोघं परमर्दनः।**
**सयानो न्यपतद् भूमौ छिन्नपक्ष इवाचलः॥ १२॥**

**पदार्थ–**
**परमर्दनः** = शत्रुघाती इन्द्रले
**तस्मै** = ती बलिलाई
**अमोघं** = कहिल्यै व्यर्थ नहुने
**कुलिशं** = वज्र
**प्राहरत्** = प्रहार गरे
**छिन्नपक्षः** = पखेटा काटिएको
**अचलः इव** = पहाडजस्ता राजा बलि
**सयानः** = विमानसहित
**भूमौ** = युद्धभूमिमा
**न्यपतत्** = ढले

**वाक्यार्थ–** शत्रुघाती इन्द्रले कहिल्यै व्यर्थ नहुने आफ्नो वज्रले राजा बलिलाई प्रहार गरे। राजा बलि वज्रको प्रहारले पखेटा काटिएको पहाडजस्तै भई आफ्नो विमानसहित युद्धभूमिमा ढले।

**सखायं पतितं दृष्ट्वा जम्भो बलिसखः सुहृत्।**
**अभ्ययात् सौहृदं सख्युर्हतस्यापि समाचरन्॥ १३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सखायं** = आफ्नो साथीलाई | **बलिसखः** = बलिको साथी | **सख्युः अपि** = साथीको समेत |
| **पतितं** = ढलेको | **सुहृत्** = उनको अत्यन्त हितैषी | **सौहृदं** = प्रिय |
| **दृष्ट्वा** = देखेर | **जम्भः** = जम्भ नामको दैत्य | **समाचरन्** = गर्नका लागि |
| | **हतस्य** = मरेका | **अभ्ययात्** = इन्द्रनजिक आयो |

**वाक्यार्थ–** आफ्नो साथी बलि ढलेको देखेर उनको अत्यन्त हितैषी मित्र जम्भ नामको दैत्य आफ्ना मित्रको प्रिय कार्य गर्नका लागि (इन्द्रसँग बदला लिने उद्देश्यले) इन्द्रनजिकै आयो।

**स सिंहवाह आसाद्य गदामुद्यम्य रंहसा।**
**जत्रावताडयच्छक्रं गजं च सुमहाबलः॥ १४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सिंहवाहः** = सिंहमाथि चढेको | **आसाद्य** = इन्द्रको नजिक पुगी | **शक्रं** = इन्द्रलाई |
| **सुमहाबलः** = ज्यादै बलियो | **गदां** = गदा | **जत्रौ** = काँधको हाडैमा अनि |
| **सः** = त्यस जम्भले | **उद्यम्य** = उठाई | **गजं च** = ऐरावत हात्तीलाई पनि |
| | **रंहसा** = वेगपूर्वक | **अताडयत्** = हिर्कायो |

**वाक्यार्थ–** सिंहमाथि चढेको प्रबल पराक्रमी त्यस जम्भासुरले इन्द्रको नजिक पुगेर आफ्नो गदा उठाई पूरा वेगले इन्द्रको काँधको हाडैमा प्रहार गर्‍यो अनि ऐरावत हात्तीमाथि पनि प्रहार गर्‍यो।

**गदाप्रहारव्यथितो भृशं विह्वलितो गजः।**
**जानुभ्यां धरणीं स्पृष्ट्वा कश्मलं परमं ययौ॥ १५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **गदाप्रहारव्यथितः** = गदाको प्रहारले पीडित भएको | **विह्वलितः** = व्याकुल बनेको | **स्पृष्ट्वा** = टेकेर |
| **भृशं** = अत्यन्त | **गजः** = ऐरावत हात्ती | **परमं** = अत्यन्त |
| | **जानुभ्यां** = घुँडाले | **कश्मलं** = मूर्च्छामा |
| | **धरणीं** = भुइँमा | **ययौ** = पुग्यो |

**वाक्यार्थ–** गदाको प्रहारद्वारा पीडित र व्याकुल बनेको त्यो ऐरावत हात्ती भुइँमा घुँडा टेक्न पुग्यो र तत्कालै मूर्च्छित भयो।

**ततो रथो मातलिना हरिभिर्दशशतैर्वृतः।**
**आनीतो द्विपमुत्सृज्य रथमारुरुहे विभुः॥ १६॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**मातलिना** = इन्द्रका सारथि मातलिले
**दशशतैः** = एक हजार
**हरिभिः** = घोडाहरूले
**वृतः** = युक्त
**रथः** = रथ
**आनीतः** = ल्याए
**विभुः** = शक्तिशाली इन्द्र पनि
**द्विपं** = हात्तीलाई
**उत्सृज्य** = छाडी
**रथं** = त्यस रथमा
**आरुरुहे** = चढे

**वाक्यार्थ—** त्यही वेलामा इन्द्रका सारथि मातलिले एक हजार घोडाहरूले तान्ने एउटा रथ ल्याए। इन्द्र पनि मूर्च्छित भएको ऐरावत हात्तीलाई छाडी त्यही रथमा चढे।

**तस्य तत् पूजयन् कर्म यन्तुर्दानवसत्तमः।**
**शूलेन ज्वलता तं तु स्मयमानोऽहनन्मृधे॥ १७॥**

**पदार्थ—**
**दानवसत्तमः** = दानवश्रेष्ठ जम्भासुरले
**तस्य** = ती
**यन्तुः** = सारथि मातलिको
**मृधे** = युद्धभूमिमा
**तत्** = त्यो
**कर्म** = पराक्रमलाई
**पूजयन्** = प्रशंसा गर्दै
**स्मयमानः** = मुस्कुराउँदै
**ज्वलता** = चम्किरहेको
**शूलेन** = त्रिशूलले
**तं तु** = ती मातलिलाई
**अहनत्** = प्रहार गऱ्यो

**वाक्यार्थ—** दानवश्रेष्ठ जम्भासुरले इन्द्रका सारथि मातलिले युद्धभूमिमा गरेको त्यस साहसिक पराक्रमको प्रशंसा गऱ्यो र मुस्कुराउँदै चम्किरहेको त्रिशूलले उनमाथि प्रहार गऱ्यो।

**सेहे रुजं सुदुर्मर्षां सत्त्वमालम्ब्य मातलिः।**
**इन्द्रो जम्भस्य सङ्क्रुद्धो वज्रेणापाहरच्छिरः॥ १८॥**

**पदार्थ—**
**मातलिः** = मातलिले
**सत्त्वं** = धैर्य
**आलम्ब्य** = लिई
**सुदुर्मर्षां** = सहनै नसकिने
**रुजं** = त्यो पीडालाई
**सेहे** = सहन गरे
**सङ्क्रुद्धः** = यसबाट असाध्यै रिसाएका
**इन्द्रः** = इन्द्रले
**वज्रेण** = वज्रद्वारा
**जम्भस्य** = जम्भको
**शिरः** = शिर
**अपाहरत्** = छिनाइदिए

**वाक्यार्थ—** मातलिले धैर्यको सहाराले त्यो असह्य पीडालाई सहन गरे। यसबाट असाध्यै रिसाएका इन्द्रले आफ्नो वज्रद्वारा जम्भको शिर छिनाइदिए।

**जम्भं श्रुत्वा हतं तस्य ज्ञातयो नारदादृषेः।**
**नमुचिश्च बलः पाकस्तत्रापेतुस्त्वरान्विताः॥ १९॥**

**पदार्थ—**
**ऋषेः** = ऋषि
**नारदात्** = नारदबाट
**जम्भं** = जम्भासुर
**हतं** = मरेको
**श्रुत्वा** = सुनेर

**तस्य** = उनका
**ज्ञातयः** = भाइबन्धु
**नमुचिः** = नमुचि
**बलः** = बल र
**पाकः च** = पाकसमेत
**त्वरान्विताः** = वेगपूर्वक
**तत्र** = त्यस ठाउँमा (इन्द्रको अगाडि)
**अपेतुः** = आइपुगे

**वाक्यार्थ–** देवर्षि नारदको मुखबाट जम्भ मरेको सुनेर उनका भाइबन्धुहरू नमुचि, बल र पाक नामका असुरहरू तत्काल इन्द्रको अगाडि आइपुगे।

**वचोभिः परुषैरिन्द्रमर्दयन्तोऽस्य मर्मसु।**
**शरैरवाकिरन् मेघा धाराभिरिव पर्वतम्॥ २०॥**

**पदार्थ–**
**परुषैः** = अत्यन्त कठोर
**वचोभिः** = वचनहरूद्वारा
**अस्य** = यी इन्द्रका
**मर्मसु** = मर्महरूमा
**अर्दयन्तः** = पीडित गर्दै, तिनीहरूले
**मेघाः** = बादलहरूले
**धाराभिः** = मुसलधारे पानीद्वारा
**पर्वतम् इव** = पहाडलाई ढाके झैँ
**इन्द्रं** = इन्द्रलाई
**शरैः** = बाणहरूले
**अवाकिरन्** = ढाकिदिए

**वाक्यार्थ–** ती दानवहरूले अत्यन्त कठोर र मर्मस्पर्शी वचनहरूद्वारा इन्द्रलाई गाली गरे र बादलहरूले पहाडमाथि मुसलधारे पानी बर्साए झैँ इन्द्रमाथि बाणको वर्षा गरी उनलाई ढाकिदिए।

**हरीन् दशशतान्याजौ हर्यश्वस्य बलः शरैः।**
**तावद्भिरर्दयामास युगपल्लघुहस्तवान्॥ २१॥**

**पदार्थ–**
**लघुहस्तवान्** = असाध्यै छिटो हात चलाउने
**बलः** = बलासुरले
**आजौ** = युद्धभूमिमा
**हर्यश्वस्य** = इन्द्रका
**दशशतानि** = एक हजार
**हरीन्** = घोडाहरूलाई
**युगपत्** = एकैपटक
**तावद्भिः** = त्यति नै सङ्ख्याका
**शरैः** = बाणहरूद्वारा
**अर्दयामास** = घाइते पारिदियो

**वाक्यार्थ–** असाध्यै छिटो हात चलाउने बलासुरले युद्धभूमिमा एकैपटक एकहजार बाणहरूद्वारा इन्द्रका एक हजार घोडाहरूलाई घाइते पारिदियो।

**शताभ्यां मातलिं पाको रथं सावयवं पृथक्।**
**सकृत्सन्धानमोक्षेण तदद्भुतमभूद्रणे॥ २२॥**

**पदार्थ–**
**पाकः** = पाकले
**सकृत्सन्धानमोक्षेण** = एकैपटक बाण चढाउँदै र हान्दै गरेर
**शताभ्यां** = सय बाणद्वारा
**मातलिं** = मातलिलाई र
**पृथक्** = अर्को सय बाणले
**सावयवं** = पूरा अङ्गसमेतको
**रथं** = रथलाई नै प्रहार गर्‍यो
**रणे** = युद्धमा
**तत्** = त्यो घटना
**अद्भुतं** = अद्भुत
**अभूत्** = भयो

**वाक्यार्थ–** पाकले एकैपटक बाण चढाउँदै र हान्दै एक सय बाणले मातलिलाई र अर्को एक सय बाणले रथका सम्पूर्ण अङ्गहरूमाथि प्रहार गऱ्यो। त्यस युद्धमा यो घटना अत्यन्त अद्भुत थियो।

**नमुचिः पञ्चदशभिः स्वर्णपुङ्खैर्महेषुभिः।**
**आहत्य व्यनदत् सङ्ख्ये सतोय इव तोयदः॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नमुचिः** = नमुचिले | **पञ्चदशभिः** = पन्ध्र ओटा | **आहत्य** = इन्द्रलाई घाइते बनाई |
| **स्वर्णपुङ्खैः** = सुनका प्वाँख भएका | **महेषुभिः** = ठुला-ठुला बाणहरूद्वारा | **सतोयः** = पानीसहितको |
| | **सङ्ख्ये** = त्यस युद्धमा | **तोयदः इव** = बादल झैँ |
| | | **व्यनदत्** = गर्जना गऱ्यो |

**वाक्यार्थ–** नमुचिले सुनका प्वाँख भएका पन्ध्र ओटा ठुला-ठुला बाणहरूद्वारा त्यस युद्धमा इन्द्रलाई घाइते बनायो अनि ऊ पानीले भरिएको बादल गर्जिए झैँ गर्जिन थाल्यो।

**सर्वतः शरकूटेन शक्रं सरथसारथिम्।**
**छादयामासुरसुराः प्रावृट्सूर्यमिवाम्बुदाः॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **असुराः** = असुरहरूले | **शक्रं** = इन्द्रलाई | **सर्वतः** = सबै तिरबाट |
| **शरकूटेन** = बाणहरूको वर्षाद्वारा | **अम्बुदाः** = बादलहरूले | **छादयामासुः** = ढाकिदिए |
| **सरथसारथिम्** = रथ र सारथि समेतका | **प्रावृट्सूर्यम् इव** = वर्षाकालको सूर्यलाई ढाके झैँ | |

**वाक्यार्थ–** असुरहरूले बाणहरूको वर्षाद्वारा रथ र सारथिसहित इन्द्रलाई वर्षाकालमा बादलहरूले सूर्यलाई ढाके झैँ पूरै ढाकिदिए।

**अलक्षयन्तस्तमतीव विह्वला विचुक्रुशुर्देवगणाः सहानुगाः।**
**अनायकाः शत्रुबलेन निर्जिता वणिक्पथा भिन्ननवो यथार्णवे॥ २५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तं** = ती इन्द्रलाई | **शत्रुबलेन** = शत्रुको सामर्थ्य (असुर सेना)द्वारा | **देवगणाः** = देवताहरू |
| **अलक्षयन्तः** = नदेख्नाले | **निर्जिताः** = जितिएका | **विचुक्रुशुः** = चिच्याउन थाले |
| **अतीव** = असाध्यै | **सहानुगाः** = आफ्ना अनुचरले सहित भएका | **यथा** = जसरी |
| **विह्वलाः** = व्याकुल भएका | | **अर्णवे** = समुद्रमा |
| **अनायकाः** = कोही नायक नभएका | | **भिन्ननवः** = डुङ्गा नष्ट भएका |
| | | **वणिक्पथाः** = व्यापारीहरू हुन्छन् |

**वाक्यार्थ–** इन्द्रलाई नदेखेर असाध्यै व्याकुल र नायकहीन भएका अनि असुर सेनाद्वारा पराजित आफ्ना अनुचरले सहित भएका देवताहरू समुद्रमा डुङ्गा डुबेपछि व्यापारीहरू विचल्लीमा परे झैँ

विचल्लीमा परे र चिच्याउन थाले।

**ततस्तुराषाडिषुबद्धपञ्जराद् विनिर्गतः साश्वरथध्वजाग्रणीः।**
**बभौ दिशः खं पृथिवीं च रोचयन् स्वतेजसा सूर्य इव क्षपात्यये॥ २६॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**साश्वरथध्वजाग्रणीः** = घोडा, रथ, ध्वजा र सारथिसमेतका
**तुराषाद्** = इन्द्र
**इषुबद्धपञ्जरात्** = बाणद्वारा निर्मित पिँजडाबाट
**विनिर्गतः** = निस्किए
**स्वतेजसा** = आफ्नो तेजद्वारा
**दिशः** = सम्पूर्ण दिशा
**खं** = आकाश
**पृथिवीं च** = पृथिवीलाई समेत
**रोचयन्** = प्रकाशित गर्दै
**क्षपात्यये** = रात बितेपछिको
**सूर्यः इव** = सूर्य झैँ
**बभौ** = चम्किए

**वाक्यार्थ–** असुरहरूले बाणै बाणले बनाएको पिँजडाबाट इन्द्र केही समयपछि नै आफ्ना घोडा, रथ, ध्वजा र सारथिसहित निस्किए। रात बितेपछि निस्किएका सूर्यले दिशाहरू, पृथिवी र आकाश सबैलाई झलमल्ल पारे झैँ उनको तेजले पनि सम्पूर्ण दिशा, पृथिवी र आकाश प्रकाशित भए।

**निरीक्ष्य पृतनां देवः परैरभ्यर्दितां रणे।**
**उदयच्छद् रिपुं हन्तुं वज्रं वज्रधरो रुषा॥ २७॥**

**पदार्थ–**
**वज्रधरः** = वज्रधारी
**देवः** = इन्द्रले
**रणे** = युद्धमा
**पृतनां** = आफ्नो सेनालाई
**परैः** = शत्रुहरूको सेनाले
**अभ्यर्दितां** = पीडित बनाएको
**निरीक्ष्य** = देखेर
**रुषा** = क्रोधले
**रिपुं** = शत्रुलाई
**हन्तुं** = मार्न
**वज्रं** = वज्र
**उदयच्छत्** = उठाए

**वाक्यार्थ–** वज्रधारी इन्द्रले युद्धमा आफ्नो सेनालाई असुरहरूको सेनाले पीडित गरिरहेको देखे। यसबाट अत्यन्त रिसाई उनले शत्रुहरूलाई मार्न वज्र उठाए।

**स तेनैवाष्टधारेण शिरसी बलपाकयोः।**
**ज्ञातीनां पश्यतां राजञ्जहार जनयन् भयम्॥ २८॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**पश्यतां** = हेरिरहेका
**ज्ञातीनां** = भाइबन्धुहरूको मनमा
**भयम्** = भय
**जनयन्** = उत्पन्न गर्दै
**सः** = उनले
**तेन एव** = त्यही नै
**अष्टधारेण** = आठ ओटा धार भएको वज्रले
**बलपाकयोः** = बल र पाकको
**शिरसी** = शिर
**जहार** = छिनाइदिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! आफ्नो त्यही आठ ओटा धार भएको वज्रद्वारा इन्द्रले हेरिरहेका भाइबन्धुहरूलाई भयभीत गराउँदै बल र पाकको शिर छिनाइदिए।

**नमुचिस्तद्वधं दृष्ट्वा शोकामर्षरुषान्वितः।**
**जिघांसुरिन्द्रं नृपते चकार परमोद्यमम्॥ २९॥**

**पदार्थ–**
**नृपते** = हे राजा परीक्षित्
**तद्वधं** = बल र पाकको हत्यालाई
**दृष्ट्वा** = देखेर
**शोकामर्षरुषान्वितः** = शोक र असह्य रिसले युक्त भएको
**नमुचिः** = नमुचिले
**इन्द्रं** = इन्द्रलाई
**जिघांसुः** = मार्ने इच्छाले
**परमोद्यमम्** = सकेसम्म प्रयास
**चकार** = गर्‍यो

**वाक्यार्थ–** हे परीक्षित् ! इन्द्रले बल र पाकलाई मारेको देखेपछि नमुचि असाध्यै दुःखी भयो र रिसले युक्त भएर उसले इन्द्रलाई मार्ने इच्छाले सकेसम्म प्रयास गर्‍यो।

**अश्मसारमयं शूलं घण्टावद्धेमभूषणम्।**
**प्रगृह्याभ्यद्रवत् क्रुद्धो हतोऽसीति वितर्जयन्।**
**प्राहिणोद् देवराजाय निनदन् मृगराडिव॥ ३०॥**

**पदार्थ–**
**क्रुद्धः** = ज्यादै रिसाएको नमुचि
**अश्मसारमयं** = कडा फलामले बनेको
**घण्टावद्धेमभूषणम्** = घण्टहरू जडिएको र सुनका आभूषणले युक्त
**शूलं** = त्रिशूललाई
**प्रगृह्य** = लिएर
**हतः असि** = तँ मरिस्
**इति** = यसरी
**वितर्जयन्** = धम्क्याउँदै
**अभ्यद्रवत्** = इन्द्रमाथि जाइलाग्यो
**मृगराट् इव** = सिंह झैँ
**निनदन्** = गर्जना गरेर
**देवराजाय** = देवराज इन्द्रमाथि
**प्राहिणोत्** = प्रहार पनि गर्‍यो

**वाक्यार्थ–** ज्यादै रिसाएको नमुचि कडा फलामले बनेको, सुनका आभूषण जडिएको र घण्टहरू झुण्ड्याइएको एउटा त्रिशूल लिएर हे इन्द्र ! अब तँ मरिस् भनी धम्क्याउँदै इन्द्रमाथि जाइलाग्यो। सिंह झैँ गर्जना गर्दै उसले देवराज इन्द्रमाथि त्यस त्रिशूलले प्रहार गर्‍यो।

**तदापतद् गगनतले महाजवं**
**विचिच्छिदे हरिरिषुभिः सहस्रधा।**
**तमाहनन्नृप कुलिशेन कन्धरे**
**रुषान्वितस्त्रिदशपतिः शिरो हरन्॥ ३१॥**

**पदार्थ–**
**हरिः** = इन्द्रले पनि
**महाजवं** = असाध्यै वेगवान् भई
**आपतत्** = आफूतिर आइरहेको
**तत्** = त्यो त्रिशूललाई
**इषुभिः** = बाणहरूद्वारा

**गगनतले** = आकाशमा नै
**सहस्रधा** = हजारौँ खण्डमा
**विचिच्छिदे** = टुक्रा पारिदिए
**नृप** = हे राजा
**रुषा** = रिसले
**अन्वितः** = युक्त भएका
**त्रिदशपतिः** = स्वर्गका मालिक इन्द्रले
**कुलिशेन** = आफ्नो वज्रद्वारा
**शिरः** = टाउको
**हरन्** = छिनाउनका लागि
**तं** = ती नमुचिको
**कन्धरे** = गर्धनमा
**अहनत्** = प्रहार गरे

**वाक्यार्थ–** हे परीक्षित् ! इन्द्रले असाध्यै वेगपूर्वक आफूतिर आइरहेको त्यस त्रिशूललाई आफ्ना बाणहरूले आकाशमा नै हजारौँ टुक्रा पारिदिए। अनि अत्यन्त रिसाई उनले नमुचिको टाउको छिनाउनका लागि आफ्नो वज्रले उसको गर्धनमा प्रहार गरे।

**न तस्य हि त्वचमपि वज्र ऊर्जितो**
**बिभेद यः सुरपतिनौजसेरितः।**
**तदद्भुतं परमतिवीर्यवृत्रभित्**
**तिरस्कृतो नमुचिशिरोधरत्वचा ॥ ३२ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**सुरपतिना** = देवराज इन्द्रद्वारा
**ओजसा** = वेगपूर्वक
**ईरितः** = चलाइएको
**ऊर्जितः** = परम शक्तिशाली
**यः** = जुन
**वज्रः** = वज्रले
**तस्य** = त्यो नमुचिको
**त्वचम् अपि** = छालालाई पनि
**न बिभेद** = काट्न सकेन
**अतिवीर्यवृत्रभित्** = महाबली वृत्रासुरलाई पनि छिया, छिया पारिदिने त्यो वज्रलाई
**नमुचिशिरोधरत्वचा** = नमुचिको घाँटीका छालाले
**तिरस्कृतः** = तिरस्कार गरिदिएको
**तत्** = यो घटना
**परम्** = असाध्यै
**अद्भुतम्** = आश्चर्यपूर्ण भयो

**वाक्यार्थ–** देवराज इन्द्रले वेगपूर्वक चलाएको परम शक्तिशाली त्यस वज्रले नमुचिको छालालाई पनि काट्न सकेन। जुन वज्रले महाबली वृत्रासुरलाई छियाछिया पारिदिएको थियो त्यसैलाई आज नमुचिको घाँटीको छालाले तिरस्कार गरिदियो। यसैले यो घटना असाध्यै आश्चर्यपूर्ण भयो।

**तस्मादिन्द्रोऽबिभेच्छत्रोर्वज्रः प्रतिहतो यतः।**
**किमिदं दैवयोगेन भूतं लोकविमोहनम् ॥ ३३ ॥**

**पदार्थ–**
**यतः** = जहाँबाट
**वज्रः** = वज्रसमेत
**प्रतिहतः** = व्यर्थ भई फर्कियो
**तस्मात्** = त्यो
**शत्रोः** = शत्रु नमुचिबाट
**इन्द्रः** = इन्द्र
**अबिभेत्** = डराए
**यतः** = जुन
**दैवयोगेन** = दैवसंयोगले
**लोकविमोहनम्** = सबै प्राणीलाई मोहित पारिदिने
**इदं** = यो
**किम्** = के
**भूतम्** = भयो

**वाक्यार्थ–** जब नमुचिलाई केही गर्न नसकेर वज्र फर्कियो तब इन्द्र ऊसँग डराए। उनले सोचे–

दैवसंयोगले सम्पूर्ण प्राणीहरूलाई मोहमा पारिदिने यो के घटना भयो ?

**येन मे पूर्वमद्रीणां पक्षच्छेदः प्रजात्यये।**
**कृतो निविशतां भारैः पतत्त्रैः पततां भुवि॥ ३४॥**
**तपःसारमयं त्वाष्ट्रं वृत्रो येन विपाटितः।**
**अन्ये चापि बलोपेताः सर्वास्त्रैरक्षतत्वचः॥ ३५॥**
**सोऽयं प्रतिहतो वज्रो मया मुक्तोऽसुरेऽल्पके।**
**नाहं तदाददे दण्डं ब्रह्मतेजोऽप्यकारणम्॥ ३६॥**

**पदार्थ—**
**मे** = मद्वारा
**पूर्वं** = पहिले
**प्रजात्यये** = प्रजाहरूमाथि सङ्कट आइपर्दा
**येन** = जुन वज्रद्वारा नै
**पतत्त्रैः** = पङ्खहरूद्वारा
**पततां** = आकाशमा उड्ने अनि
**भारैः** = भारको कारण
**भुवि** = भुइँमा
**निविशतां** = जहीं तहीं बसिदिने
**अद्रीणां** = पर्वतहरूको
**पक्षच्छेदः** = पखेटा काट्ने काम
**कृतः** = गरियो
**त्वाष्ट्रं** = त्वष्टा ऋषिको
**तपःसारमयं** = तपस्याको सारका रूपमा रहेको
**वृत्रः च** = वृत्रासुर
**येन** = जुन वज्रद्वारा
**विपाटितः** = काटियो
**सर्वास्त्रैः** = अरू सम्पूर्ण अस्त्रहरूद्वारा
**अक्षतत्वचः** = छालामा पनि चोट नपुगेका
**अन्ये** = अरू
**बलोपेताः अपि** = बलशाली दैत्यहरू पनि (जसबाट मरे)
**मया** = मद्वारा
**मुक्तः** = प्रहार गरिएको
**सः** = त्यस्तो
**अयं** = यो
**वज्रः** = वज्र
**अल्पके** = तुच्छ
**असुरे** = असुरकहाँ पुगी
**प्रतिहतः** = व्यर्थ भयो
**तत्** = त्यसैले
**ब्रह्मतेजः अपि** = दधीचि ऋषिको ब्रह्मतेज भए पनि
**अकारणम्** = बेकम्मा भएको
**दण्डं** = लौरो बराबरको यसलाई
**अहं** = म
**न आददे** = लिन्नँ

**वाक्यार्थ—** प्रजाहरूमाथि सङ्कट आइपर्दा मैले पहिले यही वज्रद्वारा आकाशमा उड्ने र भारका कारण जहाँ-तहीं भुइँमा बसिदिने पर्वतहरूका पखेटा काटिदिएको थिएँ। त्वष्टा ऋषिको तपस्याको महत्त्वपूर्ण अंशका रूपमा रहेको वृत्रासुरलाई पनि मैले यही वज्रले काटिदिएँ। अरू कुनै अस्त्रहरूद्वारा छालामा चोट पुऱ्याउन नसकिने महाबलशाली अरू दैत्यहरू पनि यसैद्वारा मरे। त्यही वज्र आज मैले नै एउटा तुच्छ असुरमाथि प्रहार गर्दा व्यर्थ भई फर्कियो। दधीचि ऋषिको ब्रह्मतेज भए तापनि लौरोबराबर बेकम्मा भएको यस वज्रलाई अब म लिन्नँ।

**इति शक्रं विषीदन्तमाह वागशरीरिणी।**
**नायं शुष्कैरथो नार्द्रैर्वधमर्हति दानवः॥ ३७॥**

**मयास्मै यद् वरो दत्तो मृत्युर्नैवार्द्रशुष्कयोः।**
**अतोऽन्यश्चिन्तनीयस्ते उपायो मघवन् रिपोः॥ ३८॥**

**पदार्थ–**
**इति** = यस्तो सोच्दै
**विषीदन्तं** = खिन्न भइरहेका
**शक्रं** = इन्द्रलाई
**अशरीरिणी** = शरीररहितको
**वाक्** = वाणीले
**आह** = भन्यो
**मघवन्** = हे इन्द्र
**अयं** = यो
**दानवः** = दानव
**न शुष्कैः** = न त सुकेको
वस्तुबाट
**अथो** = त्यस्तै
**न आर्द्रैः** = न भिजेका
वस्तुहरूद्वारा
**वधम्** = मर्न
**अर्हति** = सक्दछ
**यत्** = किनभने
**मया एव** = मैले नै
**अस्मै** = यो दैत्यलाई
**आर्द्रशुष्कयोः** = भिजेका र
सुकेका वस्तुबाट
**न मृत्युः** = मृत्यु हुनेछैन भन्ने
**वरः** = वर
**दत्तः** = दिएको छु
**अतः** = त्यसैले
**ते** = तिमीले
**रिपोः** = आफ्नो शत्रुको लागि
**अन्यः** = अर्को
**उपायः** = उपाय
**चिन्तनीयः** = विचार गर्नुपर्दछ

**वाक्यार्थ–** यस्तो सोच्दै खिन्न भइरहेका इन्द्रलाई आकाशवाणीले भन्यो– हे इन्द्र ! यो दानव भिजेका वस्तुहरूबाट अनि सुख्खा पदार्थहरूबाट पनि मर्न सक्दैन। म कालले नै यसलाई तेरो मृत्यु भिजेका र सुकेका पदार्थबाट हुनेछैन भन्ने वर दिइसकेको छु, यसैले तिमीले आफ्नो शत्रुलाई मार्न कुनै अर्को उपाय सोच।

**तां दैवीं गिरमाकर्ण्य मघवान् सुसमाहितः।**
**ध्यायन् फेनमथापश्यदुपायमुभयात्मकम्॥ ३९॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**सुसमाहितः** = अत्यन्त एकाग्र
चित्त भएका
**मघवान्** = इन्द्रले
**तां** = त्यो
**दैवीं** = दिव्य
**गिरं** = वाणीलाई
**आकर्ण्य** = सुनेर
**ध्यायन्** = विचार गर्दा
**उभयात्मकम्** = सुख्खा र
भिजेको दुबै भएकाले
**उपायं** = शत्रु मार्ने उपायको
रूपमा
**फेनं** = समुद्रको फिँजलाई
**अपश्यत्** = देखे

**वाक्यार्थ–** यस दैवी वाणीलाई सुनेर अत्यन्त एकाग्र चित्त भएका इन्द्रले विचार गर्दा शत्रु मार्ने उपायको रूपमा सुख्खा र भिजेको दुबै भएकाले समुद्रको फिँजलाई देखे।

**न शुष्केण न चार्द्रेण जहार नमुचेः शिरः।**
**तं तुष्टुवुर्मुनिगणा माल्यैश्चावाकिरन् विभुम्॥ ४०॥**

**पदार्थ–**
**न शुष्केण** = न सुख्खा
**न च आर्द्रेण** = न त भिजेको वस्तुद्वारा
**नमुचेः** = नमुचिको
**शिरः** = टाउको
**जहार** = छिनाइदिए
**मुनिगणाः** = ऋषिमुनिहरूले
**तं** = ती
**विभुं** = देवराज इन्द्रलाई
**तुष्टुवुः** = स्तुति गरे
**माल्यैः च** = मालाहरू पनि
**अवाकिरन्** = बर्साए

**वाक्यार्थ–** न सुख्खा न त भिजेको त्यही फिँजद्वारा इन्द्रले नमुचिको टाउको छिनाइदिए। अनि ऋषिमुनिहरूले देवराज इन्द्रको स्तुति गर्न थाले र फूलमाला बर्साए।

**गन्धर्वमुख्यौ जगतुर्विश्वावसुपरावसू।**
**देवदुन्दुभयो नेदुर्नर्तक्यो ननृतुर्मुदा॥ ४१॥**

**पदार्थ–**
**गन्धर्वमुख्यौ** = गन्धर्वहरूमध्ये श्रेष्ठ
**विश्वावसुपरावसू** = विश्वावसु र परावसुले
**जगतुः** = गाउन थाले भने
**देवदुन्दुभयः** = देवताका दुन्दुभिहरू
**नेदुः** = बज्न थाले अनि
**नर्तक्यः** = नर्तकीहरू
**मुदा** = खुसीले
**ननृतुः** = नाच्न थाले

**वाक्यार्थ–** गन्धर्वहरूमध्ये श्रेष्ठ विश्वावसु र परावसुले गाउन थाले भने देवताहरूका दुन्दुभिहरू बज्न थाले अनि नर्तकीहरू पनि खुसीले नाच्न थाले।

**अन्येऽप्येवं प्रतिद्वन्द्वान् वाय्वग्निवरुणादयः।**
**सूदयामासुरस्त्रौघैर्मृगान् केसरिणो यथा॥ ४२॥**

**पदार्थ–**
**यथा** = जसरी
**केसरिणः** = सिंहहरूले
**मृगान्** = मृगहरूलाई मार्छन्
**एवं** = यसै गरी
**वाय्वग्निवरुणादयः** = वायु, अग्नि, वरुण आदि
**अन्ये अपि** = अरू देवताहरूले पनि
**अस्त्रौघैः** = आफ्ना शस्त्रास्त्रहरूद्वारा
**प्रतिद्वन्द्वान्** = विपक्षी वीरहरूलाई
**सूदयामासुः** = मारे

**वाक्यार्थ–** जसरी सिंहहरूले मृगहरूलाई मार्दछन् त्यसै गरी अग्नि, वायु, वरुण तथा अरू देवताहरूले पनि इन्द्रले झैं आ-आफ्ना शस्त्रास्त्रहरूले प्रतिद्वन्द्वी आफ्ना शत्रु असुरवीरहरूलाई मारे।

**ब्रह्मणा प्रेषितो देवान् देवर्षिर्नारदो नृप।**
**वारयामास विबुधान् दृष्ट्वा दानवसङ्क्षयम्॥ ४३॥**

**पदार्थ–**
**नृप** = हे राजा
**दानवसङ्क्षयम्** = दानवहरूको विनाश
**दृष्ट्वा** = देखेर
**ब्रह्मणा** = ब्रह्माजीद्वारा
**देवान्** = देवताहरूकहाँ
**प्रेषितः** = पठाइनुभएका
**देवर्षिः** = देवर्षि

**नारदः** = नारदले
**विबुधान्** = देवताहरूलाई
**वारयामास** = रोक्नुभयो

**वाक्यार्थ–** हे राजा ! दानवहरू पूरै नष्ट हुन लागेको देखेर ब्रह्माजीले देवर्षि नारदलाई देवताहरूकहाँ पठाउनुभयो। नारदजीले त्यहाँ पुगी देवताहरूलाई युद्ध गर्नबाट रोक्नुभयो।

**श्रीनारद उवाच** (नारदजीले भन्नुभयो)

**भवद्भिरमृतं प्राप्तं नारायणभुजाश्रयैः।**
**श्रिया समेधिताः सर्व उपारमत विग्रहात्॥ ४४॥**

**पदार्थ–**
**नारायणभुजाश्रयैः** = नारायणको हातको आश्रयमा रहेका
**भवद्भिः** = तपाईंहरूले
**अमृतं** = अमृत
**प्राप्तं** = पाउनुभयो
**सर्वे** = सबै देवताहरू
**श्रिया** = लक्ष्मीको कृपाद्वारा पनि
**समेधिताः** = ऐश्वर्यशाली बन्नुभएको छ
**विग्रहात्** = लडाइँबाट
**उपारमत** = रोकिनुहोस्

**वाक्यार्थ–** हे देवताहरू ! तपाईंहरूले भगवान् नारायणको वरद हातको आश्रयमा रहेर अमृत प्राप्त गर्नुभयो अनि लक्ष्मीजीको कृपाद्वारा ऐश्वर्यशाली बन्नुभयो। अब यो लडाइँ नगर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**संयम्य मन्युसंरम्भं मानयन्तो मुनेर्वचः।**
**उपगीयमानानुचरैर्ययुः सर्वे त्रिविष्टपम्॥ ४५॥**

**पदार्थ–**
**मुनेः** = देवर्षि नारदजीको
**वचः** = वचन
**मानयन्तः** = मान्दै
**सर्वे** = सबै देवताहरू
**मन्युसंरम्भं** = रिसको आवेगलाई
**संयम्य** = शान्त गरी
**उपगीयमानानुचरैः** = स्तुति गरिरहेका आ-आफ्ना अनुचरहरूले युक्त भई
**त्रिविष्टपम्** = स्वर्ग
**ययुः** = गए

**वाक्यार्थ–** देवर्षि नारदजीको सल्लाहलाई मानेर आफ्नो रिसको आवेगलाई शान्त गरी स्तुति गरिरहेका आ-आफ्ना अनुचरहरूले सहित भई देवताहरू स्वर्गतिर गए।

**येऽवशिष्टा रणे तस्मिन् नारदानुमतेन ते।**
**बलिं विपन्नमादाय अस्तं गिरिमुपागमन्॥ ४६॥**

**पदार्थ–**
**तस्मिन्** = त्यो
**रणे** = युद्धमा
**ये** = जो-जो
**अवशिष्टाः** = बाँचेका थिए
**ते** = ती दैत्यहरू पनि
**नारदानुमतेन** = नारदजीको सल्लाहअनुसार
**विपन्नं** = मरेका
**बलिं** = बलिलाई
**आदाय** = लिएर
**अस्तं गिरिं** = अस्ताचलतर्फ
**उपागमन्** = गए

**वाक्यार्थ–** त्यस युद्धमा बाँचेका जति पनि दैत्यहरू थिए ती सबै नारदजीको सल्लाहअनुसार मरेका बलिलाई बोकेर अस्ताचलतर्फ गए।

**तत्राविनष्टावयवान् विद्यमानशिरोधरान्।**
**उशना जीवयामास संजीविन्या स्वविद्यया॥ ४७॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**उशना** = शुक्राचार्यले
**अविनष्टावयवान्** = मुख्य अङ्गहरू नष्ट नभएका
**विद्यमानशिरोधरान्** = गर्धन नछिनाइएका दैत्यहरूलाई
**संजीविन्या** = सञ्जीविनी
**स्वविद्यया** = आफ्नो विद्याद्वारा
**जीवयामास** = बँचाइदिए

**वाक्यार्थ–** त्यहाँ शुक्राचार्यले आफ्नो सञ्जीविनी विद्याद्वारा जसका मुख्य अङ्ग नष्ट भएका थिएनन् र जसको गर्धन छिनाइएको थिएन त्यस्ता सबै दैत्यहरूलाई बँचाइदिए।

**बलिश्चोशनसा स्पृष्टः प्रत्यापन्नेन्द्रियस्मृतिः।**
**पराजितोऽपि नाखिद्यल्लोकतत्त्वविचक्षणः॥ ४८॥**

**पदार्थ–**
**उशनसा** = शुक्राचार्यद्वारा
**स्पृष्टः** = छोइएका
**प्रत्यापन्नेन्द्रियस्मृतिः** = इन्द्रियमा चेतना र स्मरणशक्ति फर्किएका
**लोकतत्त्वविचक्षणः च** = संसारको यथार्थतालाई जान्ने
**बलिः** = असुरराज बलि
**पराजितः अपि** = हारेका भए पनि
**न अखिद्यत्** = खिन्न भएनन्

**वाक्यार्थ–** शुक्राचार्यले स्पर्श गर्नेबित्तिकै इन्द्रियमा चेतना र स्मरणशक्ति पाएका र संसारमा जित-हार आदि बारम्बार भइरहन्छन् भन्ने यथार्थलाई बुझेका असुरराज बलि देवताहरूसँग हारेर पनि खिन्न भएनन्।

**अध्याय-विवरण–** देवासुर सङ्ग्राम सृष्टिमा सत् र असत्का बीच सधैं भइरहने युद्धको दृष्टान्त र प्रतीक हो। यसको आध्यात्मिक अर्थले मानिसहरूको शरीर, मन र इन्द्रियभित्र भइरहने उथलपुथल र खिचातानीलाई जनाउँछ। आत्मा नै प्रजापति हो र उसका सद्बुद्धि र असद्बुद्धिरूपी दुई पत्नीहरू छन्। कश्यप प्रजापतिका दिति र अदिति नामका दुई पत्नीहरू भनेका यिनै हुन्। कश्यप शब्दको व्युत्पत्ति पश्यति इति पश्यकः पश्यक एव कश्यपः भनी गरिएको पाइन्छ, जसको अर्थ हुन्छ सबै व्यवहारलाई हेरिरहने द्रष्टा। **दो अवखण्डने** धातुबाट बनेको दिति शब्दले टुक्र्याउनु, छुट्याउनु वा भेद गर्नु भन्ने अर्थ दिन्छ। संसारका अनन्त पदार्थहरू र तिनीहरूको सङ्ग्रहमा प्रवृत्त भई असत् पदार्थतिर लागेको बुद्धि नै दिति हो। अदिति शब्दको अर्थ भने भेद नगर्नु या नटुक्र्याउनु भन्ने हुन्छ। यसरी अखण्ड परमात्मतत्त्वतिर लागेको बुद्धि नै अदिति हो भने संसारतिर लागेको बुद्धि दिति हो। यिनीहरूका अनन्त सन्तानहरू छन्। कश्यप आत्माको सत्ता पाएर नै दिति-अदितिका सन्तान दैवी वृत्ति र आसुरी वृत्तिहरू सिद्ध हुन सक्छन्। शास्त्रहरूले दुष्ट दैत्यहरूलाई पनि कश्यपकै सन्तान बताएर संसारका क्रोध, ईर्ष्या जस्ता दुष्प्रवृत्तिहरू पनि

आत्माविना सिद्ध हुन नसक्ने रहस्यलाई सङ्केत गरेका छन्। दैवी शक्ति र आसुरी शक्तिबीचमा परस्पर भइरहने खिचातानी नै देवासुरसङ्ग्राम हो।

बृहदारण्यकोपनिषद्मा प्रजापतिका दुई छोरा देवता र असुरहरू छन् र तीमध्ये असुरहरू बलिया अनि धेरै छन् भने देवताहरू थोरै र निर्बल छन् भनिएको छ। यसको भाष्यमा श्रीशङ्कराचार्यले शास्त्रीय प्रवृत्तिले युक्त इन्द्रियहरू देवता र स्वाभाविक बहिर्मुखी मनपरी प्रवृत्तिले युक्त इन्द्रियलाई असुर भनी उल्लेख गर्नुभएको छ। **अत एव कनीयस्त्वं देवानां शास्त्रजनितप्रवृत्तेः अल्पत्वात्** (बहदारण्यकोपनिषद्, शाङ्करभाष्य १/३/१) अर्थात् शास्त्रजनित प्रवृत्ति थोरै हुने भएकाले नै देवताहरू थोरै थिए भनिएको हो। **असुषु रमन्ते इति असुराः** अर्थात् आफ्नै जीवन र स्वार्थमा रमाउनेहरू नै असुर हुन्। स्वाभाविक रूपमा बलिया तिनीहरूले देवताहरूलाई जित्छन्, तर दैवी सम्पत्तिको संरक्षक साक्षात् परमात्मा नै हुनुहुन्छ यसैले अन्त्यमा जित भने देवताहरूकै हुने गर्दछ। देव-दानवको युद्धमा भगवान्ले देवताहरूलाई जिताइदिनुभएकोमा के शङ्का उठाइने गरिन्छ भने भगवान् आफ्नो सेवा गर्नेलाई जिताइदिने स्वार्थी हुनुहुन्छ, त्यसैले सधैँ देवताको पक्ष लिनुहुन्छ। तर भगवान्ले देवताहरूको पक्ष लिनुपर्ने त्यस्तो स्वार्थको कारणले नभई लोककै कल्याणका लागि हो भन्ने बुझ्नुपर्दछ। यद्यपि पुराणहरूमा देवताहरूले पनि ठाउँठाउँमा गल्ती गरेका प्रसङ्ग आउँछन्, तर पनि भगवान् उनीहरूकै पक्ष लिनुहुन्छ किनभने उनीहरू सम्पूर्ण प्राणीहरूका इन्द्रिय, मन आदिका नियन्त्रक समष्टि अस्तित्व हुन्। हातका देवता इन्द्र, मुखका देवता वायु, जिब्रोका देवता वरुण, मनका देवता चन्द्र, बुद्धिका देवता सूर्य आदिले निरन्तर आफ्नो अनुग्रहद्वारा सबै प्राणीका इन्द्रियहरूलाई सञ्चालित गरिरहेका छन्। त्यसैले देवताहरू विना जगत्को स्थिति सम्भव नहुने भएकाले नै भगवान्ले उनीहरूकै साथ दिनुहुन्छ। आध्यात्मिक अर्थमा भने अन्तर्मुखी दैवी सम्पत्तिले नै परमात्माकहाँ पुऱ्याइदिन्छ, आसुरी सम्पत्ति त्यो विना अधुरो रहन्छ भन्ने बुझ्नुपर्दछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**देवासुरसंग्रामे एकादशोऽध्यायः ॥ ११ ॥**

# अथ द्वादशोऽध्यायः

## मोहिनीरूपबाट भगवान् शङ्कर मोहित

**श्रीबादरायणिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वृषध्वजो निशम्येदं योषिद्रूपेण दानवान्।**
**मोहयित्वा सुरगणान् हरिः सोममपाययत्॥ १॥**
**वृषमारुह्य गिरिशः सर्वभूतगणैर्वृतः।**
**सह देव्या ययौ द्रष्टुं यत्रास्ते मधुसूदनः॥ २॥**

**पदार्थ–**
**हरिः** = भगवान् श्रीहरिले
**योषिद्रूपेण** = स्त्रीको रूप धारण गरी
**दानवान्** = दानवहरूलाई
**मोहयित्वा** = मोहित बनाई
**सुरगणान्** = देवताहरूलाई
**सोमं** = अमृत
**अपाययत्** = पिलाउनुभयो
**इदं** = यो कुरा
**निशम्य** = सुनेर
**वृषध्वजः** = वृषध्वज
**गिरिशः** = भगवान् शङ्कर
**सर्वभूतगणैः** = आफ्ना सम्पूर्ण भूतगणहरूद्वारा
**वृतः** = युक्त भई
**देव्या सह** = सतीदेवीसँग
**वृषं** = नन्दीमाथि
**आरुह्य** = चढी
**यत्र** = जहाँ
**मधुसूदनः** = भगवान् श्रीहरि
**आस्ते** = रहनुहुन्छ (त्यतैतिर)
**द्रष्टुं** = दर्शन गर्न
**ययौ** = जानुभयो

**वाक्यार्थ–** भगवान् श्रीहरिले स्त्रीको रूप धारण गरी दानवहरूलाई मोहित तुल्याएर देवताहरूलाई अमृत पिलाउनुभयो भन्ने कुरा भगवान् शङ्करले सुन्नुभयो। त्यसपछि उहाँको दर्शन गर्न भगवान् शङ्कर सतीसँग नन्दीमाथि चढी आफ्ना समस्त भूतगणहरूलाई पनि साथमा लिई भगवान् श्रीहरि रहनुभएको ठाउँतिर जानुभयो।

**सभाजितो भगवता सादरं सोमया भवः।**
**सूपविष्ट उवाचेदं प्रतिपूज्य स्मयन् हरिम्॥ ३॥**

**पदार्थ–**
**भगवता** = भगवान् श्रीहरिद्वारा
**सोमया** = उमाको सँगसँगै
**सादरं** = आदरपूर्वक
**सभाजितः** = सत्कार गरिनुभएका
**भवः** = भगवान् शङ्करले
**सूपविष्टः** = सुखपूर्वक बसी
**हरिम्** = श्रीहरि भगवान्लाई
**प्रतिपूज्य** = सम्मान गर्दै
**स्मयन्** = बिस्तारै हाँस्दै
**इदं** = यसो
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीहरिद्वारा आदरपूर्वक सत्कार गरिनुभएका भगवान् शङ्कर पनि उमासहित

सुखपूर्वक बस्नुभयो र उहाँले भगवान् श्रीहरिलाई सम्मान गर्दै बिस्तारै हाँस्दै यसो भन्नुभयो।

**श्रीमहादेव उवाच** (भगवान् शङ्करले भन्नुभयो)

**देवदेव जगद्व्यापिन् जगदीश जगन्मय।**

**सर्वेषामपि भावानां त्वमात्मा हेतुरीश्वरः ॥ ४ ॥**

**पदार्थ–**
**देवदेव** = हे देवताका पनि देवता
**जगद्व्यापिन्** = विश्वव्यापी
**जगन्मय** = विश्वरूप
**जगदीश** = हे जगदीश्वर
**सर्वेषाम्** = सबै
**भावानां** = पदार्थहरूको
**हेतुः** = मूल कारण
**ईश्वरः** = ईश्वर र
**आत्मा अपि** = आत्मासमेत
**त्वं** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** हे जगदीश्वर ! हजुर देवताका पनि देवता, विश्वव्यापी र विश्वरूप हुनुहुन्छ। हजुर नै सम्पूर्ण पदार्थहरूको मूल कारण, तिनका स्वामी र आत्मा समेत हुनुहुन्छ।

**आद्यन्तावस्य यन्मध्यमिदमन्यदहं बहिः।**

**यतोऽव्ययस्य नैतानि तत् सत्यं ब्रह्म चिद् भवान् ॥ ५ ॥**

**पदार्थ–**
**यतः** = जुन परमात्माबाट
**अस्य** = यो जगत्को
**आद्यन्तौ** = आदि, अन्त्य र
**मध्यम्** = मध्य पनि हुन्छ
**अव्ययस्य** = अविनाशी परमात्माको चाहिँ
**एतानि** = यी आदि, मध्य र अन्त्य
**न** = हुँदैनन्
**यत्** = जुन तत्त्व
**इदं** = यो दृश्यप्रपञ्च
**अहं** = यसलाई देख्ने अहङ्कार
**बहिः** = बाहिरी भोग्य पदार्थ र
**अन्यत्** = अन्य भोक्तासमेत हो
**भवान्** = हजुर
**तत्** = त्यही
**सत्यं** = सत्स्वरूप
**चित्** = चैतन्यरूप
**ब्रह्म** = ब्रह्म हुनुहुन्छ

**वाक्यार्थ–** हजुरबाट नै यो जगत्को आदि, मध्य र अन्त हुन्छ, तर अविनाशी परमात्मा हजुरको चाहिँ आदि, मध्य र अन्त छैन। यो सम्पूर्ण दृश्य प्रपञ्च, यसलाई देख्ने अहङ्कार, बाहिरी भोग्य पदार्थ र भोक्तारूपमा समेत देखिने सत्य एवं चैतन्यरूप ब्रह्म हजुर नै हुनुहुन्छ।

**तवैव चरणाम्भोजं श्रेयस्कामा निराशिषः।**

**विसृज्योभयतः सङ्गं मुनयः समुपासते ॥ ६ ॥**

**पदार्थ–**
**श्रेयस्कामाः** = कल्याण चाहने
**निराशिषः** = समस्त कामनाहरूलाई त्याग गर्ने
**मुनयः** = महात्माहरूले
**उभयतः** = यो लोक र परलोक दुबैबाट
**सङ्गं** = आसक्तिलाई
**विसृज्य** = छोडेर
**तव** = हजुरको
**चरणाम्भोजं एव** = चरणकमलको नै
**समुपासते** = उपासना गर्दछन्

**वाक्यार्थ–** कल्याण चाहने र समस्त कामनाहरूलाई त्याग गर्ने महात्माहरूले यो लोक र परलोक दुबैका आसक्तिहरूलाई त्यागेर केवल हजुरका चरणकमलको नै उपासना गर्दछन्।

**त्वं ब्रह्म पूर्णममृतं विगुणं विशोक-**
**मानन्दमात्रमविकारमनन्यदन्यत् ॥**
**विश्वस्य हेतुरुदयस्थितिसंयमाना-**
**मात्मेश्वरश्च तदपेक्षतयानपेक्षः ॥ ७ ॥**

**पदार्थ–**
**त्वं** = हजुर
**अमृतं** = अमृतस्वरूप
**विगुणं** = गुणले रहित
**विशोकम्** = शोकशून्य
**आनन्दमात्रं** = केवल आनन्दस्वरूप
**अविकारं** = निर्विकार
**पूर्णं ब्रह्म** = पूर्ण ब्रह्म हुनुहुन्छ
**अनन्यत्** = हजुरभन्दा भिन्न केही छैन, तर
**अन्यत्** = हजुर सबैभन्दा भिन्न हुनुहुन्छ
**विश्वस्य** = संसारको
**उदयस्थितिसंयमानाम्** = उत्पत्ति, स्थिति र लयको समेत
**हेतुः** = कारण हुनुहुन्छ
**अनपेक्षः** = पूर्णतः निरपेक्ष भएर पनि
**तदपेक्षतया** = जीवहरूको अपेक्षाले
**आत्मेश्वरः च** = जीवहरूलाई कर्मफल दिने ईश्वरसमेत हुनुहुन्छ

**वाक्यार्थ–** हे परमात्मा ! हजुर अमृतस्वरूप, गुणले रहित, शोकशून्य, केवल आनन्दरूप र निर्विकार पूर्ण ब्रह्म हुनुहुन्छ। हजुरभन्दा भिन्न कुनै पनि पदार्थ छैन भने हजुर चाहिँ संसारका सबै पदार्थहरूभन्दा भिन्न हुनुहुन्छ अनि संसारको उत्पत्ति, स्थिति र लयका समेत कारण हजुर नै हुनुहुन्छ। पूर्णतः निरपेक्ष भएर पनि जीवहरूको अपेक्षाले उनीहरूलाई कर्मफल दिने ईश्वर पनि हजुर नै हुनुहुन्छ।

**एकस्त्वमेव सदसद्द्वयमद्वयं च**
**स्वर्णं कृताकृतमिवेह न वस्तुभेदः ॥**
**अज्ञानतस्त्वयि जनैर्विहितो विकल्पो**
**यस्माद् गुणैर्व्यतिकरो निरुपाधिकस्य ॥ ८ ॥**

**पदार्थ–**
**एकः** = एक मात्र
**त्वम् एव** = हजुर नै
**कृताकृतम्** = गहना बनाइएको र नबनाइएको
**स्वर्णं इव** = सुन झैँ
**सदसत्** = कार्यकारणरूप
**द्वयं** = द्वैत र
**अद्वयं च** = अद्वैतसमेत हुनुहुन्छ
**इह** = यो द्वैत र अद्वैतरूप हजुरमा
**वस्तुभेदः** = वास्तविक भेद
**न** = छैन
**त्वयि** = हजुरमा
**जनैः** = मानिसहरूद्वारा
**अज्ञानतः** = अज्ञानका कारण
**विकल्पः** = भेदव्यवहार
**विहितः** = गरिन्छ

**यस्मात्** = किनभने
**निरुपाधिकस्य** = उपाधिले रहित हजुरमा
**गुणैः** = गुणहरूको उपाधिका कारण नै
**व्यतिकरः** = भेद झैं देखिन्छ

**वाक्यार्थ—** एक मात्र हजुर नै कार्यकारणरूप अनि द्वैत र अद्वैतस्वरूप हुनुहुन्छ। जसरी गहना बनाइएको सुन विभिन्न रूपमा अनि गहना नबनाइएको सुन एउटै रूपमा देखिन्छ, तर पनि ती दुईमा केही भेद छैन त्यसै गरी सबै रूपले प्रतीत हुनुहुने हजुरमा पनि कुनै भेद छैन। यो भेदव्यवहार त मानिसहरूले अज्ञानका कारणले नै हजुरमा आरोपित गरेका हुन् किनभने वास्तवमा हजुर उपाधिले रहित हुनुहुन्छ, तर मायाका गुणहरूको उपाधिबाट नै भेदप्रतीत हुन्छ।

**विवरण—** माथिका दुई श्लोकमा परमात्मस्वरूपको वर्णन गरिएको छ। परमात्मा उपाधिले रहित निर्गुण ब्रह्मतत्त्व हुनुहुन्छ। उसो भए त्यस्ता निर्गुण एवं निर्विशेष परमात्माको भजन र प्रार्थना कसरी गर्न सकिन्छ भन्ने शङ्का हुँदा समाधानको रूपमा भनिएको छ— जीवहरूका अपेक्षाअनुसार तिनलाई फल पनि दिनुपर्ने हुन्छ। मायाद्वारा संसारकै सृष्टि, स्थिति र संहार गर्ने परमात्मा सम्पूर्ण कर्महरूका फलदाता हुनुहुन्छ। **तदपेक्षतया** अर्थात् जीवहरू जे-जे चाहन्छन्, सोहीअनुसार नै भगवान्‌ले फल दिनुहुन्छ। उसो भए जसरी स्वार्थका कारण मालिकहरू आफ्ना कर्मचारीहरूलाई तलब सुविधा दिन्छन् त्यसै गरी भगवान्‌ले पनि स्वार्थपूर्वक फल दिने हो त भन्ने शङ्काको समाधान गर्दै भनिएको छ— **अनपेक्षः** अर्थात् भगवान् परिपूर्ण भएकाले उहाँले केही अपेक्षा गर्नुहुन्न।

निर्गुण ब्रह्मतत्त्व त अद्वितीय छ, त्यसमा कुनै भेद छैन। विविधतायुक्त द्वैत प्रपञ्चको रूपमा पनि त्यही तत्त्व कसरी हुन सक्छ भन्ने शङ्काको समाधान प्रस्तुत श्लोकले दिएको छ। बाला, तिलहरी, औँठी आदि गहना बनाइएको सुन र गहना नबनाइएको अवस्थाको सुन दुई रूपले प्रतीत भए तापनि एउटै हुन्। शुद्ध सुनमा भेद व्यवहार छैन, तर त्यही सुनले बनेका औँठी, तिलहरी आदिका नाम-रूपहरू भिन्नभिन्न छन्। यसै गरी आफ्नो स्वाभाविक रूपमा अद्वितीय परमात्मा व्यवहारकालमा कार्यकारणात्मक द्वैत प्रपञ्चको रूपमा प्रकट हुनुहुन्छ। नाम-रूपको दृष्टिले हेर्ने हो भने जगत्‌का पदार्थहरूमा परस्पर भेद या द्वैत छ, तर ब्रह्मरूपले ती सबै पदार्थ एउटै हुन्। त्यसैले भगवान् कार्य-कारणात्मक द्वैत प्रपञ्च र प्रपञ्चातीत अद्वैत रूपसमेत हुनुहुन्छ।

**त्वां ब्रह्म केचिदवयन्त्युत धर्ममेके**
**एके परं सदसतोः पुरुषं परेशम् ॥**
**अन्येऽवयन्ति नवशक्तियुतं परं त्वां**
**केचिन्महापुरुषमव्ययमात्मतन्त्रम् ॥९॥**

**पदार्थ—**
**त्वां** = हजुरलाई
**केचित्** = कोही
**ब्रह्म** = ब्रह्मतत्त्व
**अवयन्ति** = मान्दछन्
**उत** = अनि
**एके** = एकथरी
**धर्मं** = धर्मरूप मान्दछन्
**एके** = कोही

**सदसतोः** = प्रकति र पुरुषभन्दा
**परं** = पर रहेको
**पुरुषं** = परमपुरुष
**परेशम्** = परमेश्वर मान्दछन्
**अन्ये** = अरू कोही
**त्वां** = हजुरलाई
**नवशक्तियुतं** = नौ ओटा शक्तिले युक्त
**परं** = परमात्मा
**अवयन्ति** = मान्दछन् भने
**केचित्** = कोही
**आत्मतन्त्रम्** = परम स्वतन्त्र
**अव्ययं** = अविनाशी
**महापुरुषम्** = परमपुरुष मान्दछन्

**वाक्यार्थ–** हजुरलाई कोही ब्रह्म मान्दछन्, अनि कोही हजुरलाई धर्मरूप मान्दछन् अनि कोही चाहिँ प्रकृति र पुरुषभन्दा पर रहने परमपुरुष परमेश्वरको रूपमा मान्दछन्। अरू कोही हजुरलाई नौ ओटा शक्तिले युक्त परमात्मा भनी मान्दछन् भने कोही चाहिँ क्लेश, कर्म आदिको बन्धनले रहित परम स्वतन्त्र पुरुषको रूपमा मान्दछन्।

**विवरण–** एउटै आत्मतत्वलाई पनि विभिन्न दृष्टि भएका दार्शनिकहरूले आ-आफ्नो रूपमा देख्दछन् भनी प्रस्तुत श्लोकमा बताइएको छ। छान्दोग्योपनिषद् (६/२/१)मा **एकमेवाद्वितीयम्** अर्थात् परमात्मा एकमात्र तत्त्व हुनुहुन्छ भनिएको छ। यसर्थ जसले जे रूपले जे-जे वर्णन गरे पनि त्यो परमात्माकै वर्णन हुन जान्छ, किनभने त्योभन्दा अर्को अस्तित्व नै छैन। जसरी एउटै डोरीलाई अनेक रूपमा देख्न सकिन्छ। जसले डोरीलाई डोरी नै भनेर जान्दछ त्यसले पनि डोरीमा नै डोरीलाई जानेको हुन्छ भने भ्रमद्वारा डोरीलाई नै सर्प, माला, लौरो आदि देख्नेहरूले पनि सर्प आदि भनेर डोरीलाई नै अन्य रूपमा जानेका हुन्छन्। विभिन्न दर्शनले गर्ने परमात्म-प्रतिपादन पनि यस्तै छ। यसलाई वेदान्तीहरू ब्रह्म भन्दछन् भने मीमांसकहरू धर्म भन्दछन्। यसै गरी साङ्ख्याचार्यहरू प्रकृति-पुरुषभन्दा पर रहेका निर्विशेष उदासीन तत्त्व भनी बताउँछन्। पाञ्चरात्रहरू नौ शक्ति (विमला, उत्कर्षिणी, ज्ञाना, क्रिया, योगा, प्रह्वी, सत्या, ईशाना र अनुग्रहा)ले युक्त तत्त्व भनी बताउँछन्। योगदर्शनका अनुयायीहरू भने त्यही तत्त्वलाई महापुरुष भन्दछन् भन्ने कुरा यस श्लोकमा बताइएको छ।

**नाहं परायुर्ऋषयो न मरीचिमुख्या**
**जानन्ति यद्विरचितं खलु सत्त्वसर्गाः।**
**यन्मायया मुषितचेतस ईश दैत्य-**
**मर्त्यादयः किमुत शश्वदभद्रवृत्ताः ॥ १० ॥**

**पदार्थ–**
**खलु** = निश्चय नै
**यद्विरचितं** = जुन भगवान्को रचनालाई
**सत्त्वसर्गाः** = सत्त्व गुणप्रधान भएर पनि
**परायुः** = ब्रह्माजीले
**मरीचिमुख्याः** = मरीचि आदि
**ऋषयः** = ऋषिहरूले नै
**न जानन्ति** = जान्दैनन्
**अहं न** = म पनि जान्दिनँ
**ईश** = हे परमात्मा
**यन्मायया** = हजुरको मायाद्वारा
**मुषितचेतसः** = चित्त भ्रान्त भएका
**शश्वत्** = सधैँ
**अभद्रवृत्ताः** = रजोगुण र तमोगुणमा लागिपर्ने
**दैत्यमर्त्यादयः** = दैत्य र मानिस आदिले त
**किमुत** = कसरी जानून्

**वाक्यार्थ–** हे परमात्मा ! सत्त्वगुण प्रधान भएका म (शिव), ब्रह्माजी र मरीचि आदि ऋषिहरूले पनि हजुरको सृष्टिरचनालाई समेत पूरा बुझ्न सक्दैनौं भने जसको चित्त हजुरको मायाद्वारा मोहित भएको छ र जो रजोगुणी एवं तमोगुणी कर्महरूमा लागि परेका छन्, ती दैत्य र मानिस आदि प्राणीले त हजुरको सृष्टिरचनाको रहस्य कसरी बुझून् ?

**स त्वं समीहितमदः स्थितिजन्मनाशं**
**भूतेहितं च जगतो भवबन्धमोक्षौ ।**
**वायुर्यथा विशति खं च चराचराख्यं**
**सर्वं तदात्मकतयावगमोऽवरुन्त्से ॥११॥**

**पदार्थ–**
**यथा** = जसरी
**वायुः** = वायु
**खं** = आकाश र
**चराचराख्यं च** = चर, अचर सबै प्राणीहरूको शरीरभित्र पनि
**विशति** = व्याप्त रहन्छ, त्यसै गरी
**अवगमः** = केवल ज्ञानस्वरूप
**सः** = यस्ता
**त्वं** = हजुर पनि
**तदात्मकतया** = सर्वात्मक भएकाले
**समीहितं** = आफ्नो सृष्टि
**अदः जगतः** = यो जगत्को
**स्थितिजन्मनाशं** = जन्म, स्थिति र विनाश
**भूतेहितं** = प्राणीहरूको कर्म र
**भवबन्धमोक्षौ च** = संसारको बन्धन र मोक्षलाई समेत
**सर्वं** = सबैलाई
**अवरुन्त्से** = व्याप्त गर्नुहुन्छ र जान्नुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! जसरी वायु आकाशमा र चरअचर सबै प्राणीहरूको शरीरभित्र व्याप्त रहन्छ, त्यसै गरी हजुर पनि आफ्नो सृष्टि भएको यो जगत्को जन्म, स्थिति, नाश, प्राणीहरूको कर्म, संसारको बन्धन र मोक्ष सबै भित्र व्याप्त हुनुहुन्छ अनि ज्ञानस्वरूप हजुर नै यी सबैलाई जान्नुहुन्छ ।

**अवतारा मया दृष्टा रममाणस्य ते गुणैः ।**
**सोऽहं तद् द्रष्टुमिच्छामि यत् ते योषिद्वपुर्धृतम् ॥ १२ ॥**

**पदार्थ–**
**गुणैः** = गुणहरूद्वारा
**रममाणस्य** = लीला विहार गर्ने
**ते** = हजुरका
**अवताराः** = अनेक अवतारहरू
**मया** = मद्वारा
**दृष्टाः** = देखिएका छन्
**सः अहं** = त्यही म
**ते** = हजुरले
**यत्** = जुन
**योषिद्वपुः** = स्त्रीको स्वरूप
**धृतम्** = धारण गर्नुभयो
**तत्** = त्यही स्वरूप
**द्रष्टुम्** = हेर्न
**इच्छामि** = चाहन्छु

**वाक्यार्थ–** मायाका गुणहरूलाई स्वीकार गरी अनेक लीलाहरू गर्नुहुने हजुरका अनेक अवतारहरू मैले देखेको छु । तर आज म हजुरले जुन स्त्रीरूप धारण गर्नुभएको थियो त्यही स्वरूपलाई हेर्न चाहन्छु ।

**येन सम्मोहिता दैत्याः पायिताश्चामृतं सुराः।**
**तद् दिदृक्षव आयाताः परं कौतूहलं हि नः॥ १३॥**

**पदार्थ—**
**येन** = जुन रूपद्वारा
**दैत्याः** = दैत्यहरू
**सम्मोहिताः** = मोहित भए
**सुराः च** = देवताहरू चाहिँ
**अमृतं** = अमृत
**पायिताः** = पिलाइए
**तत्** = त्यही स्वरूपलाई
**दिदृक्षवः** = देख्ने इच्छाले
**आयाताः** = आएका छौँ
**हि** = निश्चय नै
**नः** = हामीहरूलाई
**परं** = असाध्यै
**कौतूहलम्** = खुलदुली लागेको छ

**वाक्यार्थ—** जुन स्त्रीस्वरूपद्वारा हजुरले दैत्यहरूलाई मोहित बनाउनुभयो र देवताहरूलाई अमृत पिलाइदिनुभयो त्यही स्वरूपलाई हेर्ने इच्छाले हामी आएका छौँ। हामीलाई यस विषयमा असाध्यै खुलदुली लागेको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमभ्यर्थितो विष्णुर्भगवान् शूलपाणिना।**
**प्रहस्य भावगम्भीरं गिरिशं प्रत्यभाषत॥ १४॥**

**पदार्थ—**
**शूलपाणिना** = भगवान् शङ्करद्वारा
**एवं** = यसप्रकार
**अभ्यर्थितः** = प्रार्थना गरिनुभएका
**भगवान्** = भगवान्
**विष्णुः** = विष्णुले
**भावगम्भीरं** = गम्भीर भावले
**प्रहस्य** = मुसुक्क हाँस्दै
**गिरिशं** = भगवान् शङ्करलाई
**प्रत्यभाषत** = बताउन थाल्नुभयो

**वाक्यार्थ—** भगवान् शङ्करले यसप्रकार प्रार्थना गरिसकेपछि भगवान् विष्णु गम्भीर भावले मुसुक्क हाँस्नुभयो, अनि उहाँले भगवान् शङ्करलाई बताउन थाल्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**कौतूहलाय दैत्यानां योषिद्वेषो मया कृतः।**
**पश्यता सुरकार्याणि गते पीयूषभाजने॥ १५॥**

**पदार्थ—**
**पीयूषभाजने** = अमृतको कलश
**गते** = (दैत्यहरूको हातमा) गएपछि
**सुरकार्याणि** = देवताहरूको काम
**पश्यता** = यही रूपद्वारा गराउन सकिन्छ भन्ने विचार गर्ने
**मया** = मैले
**दैत्यानां** = दैत्यहरूको मनमा
**कौतूहलाय** = उत्सुकता पैदा गर्न
**योषिद्वेषः** = स्त्रीको रूप धारण
**कृतः** = गरिएको हो

**वाक्यार्थ—** अमृतको कलश दैत्यहरूको हातमा गएपछि स्त्रीको रूप लिएर मात्र देवताहरूको काम बनाउन सकिन्छ भन्ने विचार गर्दै मैले दैत्यहरूको मनमा उत्सुकता पैदा गर्न मात्र स्त्रीको स्वरूप धारण गरेको हुँ।

**तत् तेऽहं दर्शयिष्यामि दिदृक्षोः सुरसत्तम।**

**कामिनां बहु मन्तव्यं सङ्कल्पप्रभवोदयम्॥ १६॥**

**पदार्थ–**
**सुरसत्तम** = हे देवश्रेष्ठ महादेव
**अहं** = म
**दिदृक्षोः** = हेर्न चाहने
**ते** = हजुरलाई
**सङ्कल्पप्रभवोदयम्** = कामवासना उत्पन्न गराउने अनि
**कामिनां** = कामासक्त व्यक्तिहरूलाई
**बहु मन्तव्यं** = असाध्यै मनपर्ने
**ते** = त्यो रूप
**दर्शयिष्यामि** = देखाउनेछु

**वाक्यार्थ–** हे देवश्रेष्ठ महादेव ! कामवासनालाई उत्पन्न गराउने र कामासक्त व्यक्तिहरूलाई असाध्यै मनपर्ने त्यो रूप हजुर हेर्न चाहनुहुन्छ भने म अवश्य देखाउनेछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति ब्रुवाणो भगवांस्तत्रैवान्तरधीयत।**

**सर्वतश्चारयंश्चक्षुर्भव आस्ते सहोमया॥ १७॥**

**पदार्थ–**
**इति** = यति
**ब्रुवाणः** = भन्दाभन्दै
**भगवान्** = भगवान् श्रीहरि
**तत्र एव** = त्यहीँ नै
**अन्तरधीयत** = अन्तर्धान हुनुभयो
**भवः** = भगवान् शङ्कर चाहिँ
**उमया सह** = उमा देवीसँग
**सर्वतः** = सबैतिर
**चक्षुः** = आँखा
**चारयन्** = डुलाउँदै
**आस्ते** = बस्नुभयो

**वाक्यार्थ–** यति भन्दाभन्दै श्रीहरि भगवान् त्यहीँ अन्तर्धान हुनुभयो। भगवान् शङ्कर चाहिँ उमा देवीसँग सबैतिर आँखा डुलाउँदै बस्नुभयो।

**ततो ददर्शोपवने वरस्त्रियं विचित्रपुष्पारुणपल्लवद्रुमे।**

**विक्रीडतीं कन्दुकलीलया लसद्दुकूलपर्यस्तनितम्बमेखलाम्॥ १८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (भगवान् शङ्करले)
**विचित्रपुष्पारुणपल्लवद्रुमे** = रङ्गी-विरङ्गी फूल र राता-राता पालुवायुक्त वृक्षहरूले भरिएको
**उपवने** = बगैँचामा
**कन्दुकलीलया** = भकुन्डो उफार्दै
**विक्रीडतीं** = खेलिरहेकी
**लसद्दुकूलपर्यस्तनितम्ब-मेखलाम्** = सुन्दर साडीले सुशोभित कम्मरमा मेखला बाँधिएकी
**वरस्त्रियं** = सुन्दरी युवतिलाई
**ददर्श** = देख्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् शङ्करले रङ्गी-विरङ्गी फूल र राता-राता पालुवायुक्त वृक्षहरूले भरिएको एउटा सुन्दर बगैँचामा भकुन्डो उफार्दै खेलिरहेकी एवं सुन्दर साडीले सुशोभित कम्मरमा मेखला बाँधेकी सुन्दरी युवतिलाई देख्नुभयो।

**आवर्तनोद्वर्तनकम्पितस्तनप्रकृष्टहारोरुभरैः पदे पदे।**

**प्रभज्यमानामिव मध्यतश्चलत्पदप्रवालं नयतीं ततस्ततः॥ १९॥**

**दिक्षु भ्रमत्कन्दुकचापलैर्भृशं प्रोद्विग्नतारायतलोललोचनाम् ।**
**स्वकर्णविभ्राजितकुण्डलोल्लसत्कपोलनीलालकमण्डिताननाम् ॥ २० ॥**

**पदार्थ–**
**आवर्तनोद्वर्तनकम्पितस्तन-प्रकृष्टहारोरुभरैः** = भकुन्डोलाई माथि फाल्दा र तलबाट समाउँदा यताउति हल्लिएका स्तन र उज्ज्वल हारहरूका भारले
**पदे पदे** = पाइलैपिच्छे
**मध्यतः** = कम्मर
**प्रभज्यमानाम् इव** = भाँचिएला कि जस्तो भएकी
**चलत्पदप्रवालं** = चञ्चल पालुवासमानको चरणलाई
**ततः ततः** = यताउति
**नयतीं** = डुलाउँदै गरेकी
**दिक्षु** = अनेक दिशातिर
**भ्रमत्कन्दुकचापलैः** = फुत्किएको भकुन्डो यताउता गुड्दा
**भृशं** = अत्यन्त
**प्रोद्विग्नतारायतलोललोचनाम्** = चलाख भएका नानी सहितका चञ्चल र ठुला आँखाले युक्त भएकी
**स्वकर्णविभ्राजितकुण्डलोल्लसत्कपोलनीलालकमण्डिताननाम्** = दुई कानमा झुन्डिएका चम्किला कुण्डलहरूद्वारा उज्यालिएका गाला र काला केशराशिले गर्दा असाध्यै राम्रो अनुहार भएकी (सुन्दरीलाई देख्नुभयो)

**वाक्यार्थ–** भकुन्डोलाई माथि फाल्दा र तलबाट समाउँदा यताउति हल्लिएका स्तन र उज्ज्वल हारहरूको भारले थिचिएर पाइलैपिच्छे भाँचिएला कि झैं लाग्ने पातलो कम्मर भएकी, चञ्चल पालुवासमान चरणलाई यताउति डुलाइरहेकी, खेलाउँदा हातबाट फुत्किई यताउता गएको भकुन्डोका कारणले चलाख भएका आँखाका नानीयुक्त चञ्चल ठुला आँखा भएकी र दुई कानमा झुन्डिएका चम्किला कुण्डलहरूद्वारा उज्यालिएका गाला र काला केशराशिले गर्दा असाध्यै राम्रो अनुहार भएकी सुन्दरीलाई भगवान् शङ्करले देख्नुभयो ।

**श्लथद् दुकूलं कबरीं च विच्युतां सन्नह्यतीं वामकरेण वल्गुना ।**
**विनिघ्नतीमन्यकरेण कन्दुकं विमोहयन्तीं जगदात्ममायया ॥ २१ ॥**

**तां वीक्ष्य देव इति कन्दुकलीलयेषद्-**
**व्रीडास्फुटस्मितविसृष्टकटाक्षमुष्टः ।**
**स्त्रीप्रेक्षणप्रतिसमीक्षणविह्वलात्मा**
**नात्मानमन्तिक उमां स्वगणांश्च वेद ॥२२ ॥**

**पदार्थ–**
**श्लथत्** = फुस्किएको
**दुकूलं** = साडी र
**विच्युतां** = फुकेको
**कबरीं च** = चुल्ठोलाई
**वल्गुना** = सुकुमार
**वामकरेण** = बायाँ हातले
**सन्नह्यतीं** = मिलाउँदै गरेकी
**अन्यकरेण** = अर्को दाहिने हातले
**कन्दुकं** = भकुन्डोलाई
**विनिघ्नतीम्** = हान्दै गरेकी
**आत्ममायया** = आफ्नो मायाद्वारा
**जगत्** = सारा संसारलाई नै

**विमोहयन्तीं** = मोहित बनाइरहेकी
**इति** = यस्ती
**तां** = ती मोहिनीलाई
**वीक्ष्य** = देखेर
**कन्दुकलीलया** = भकुन्डो खेल्दाखेल्दै ती सुन्दरीबाट
**ईषत्व्रीडास्फुटस्मितविसृष्ट-कटाक्षमुष्टः** = केही लज्जामिश्रित मन्दमुस्कान र छड्के हेराइले मन चोरिएका अनि
**स्त्रीप्रेक्षणप्रतिसमीक्षण-विह्वलात्मा** = आफूले उनलाई हेरेको अनि उनले पनि आफूलाई हेरेको देखेर असाध्यै व्याकुल भएका
**देव** = भगवान् शङ्करले
**आत्मानं** = आफूलाई
**अन्तिके** = नजिकै रहेका
**उमां** = उमा देवीलाई र
**स्वगणान् च** = आफ्ना गणहरूलाई समेत
**न वेद** = बिर्सनुभयो

**वाक्यार्थ–** फुस्किएको साडी र फुकेको चुल्ठोलाई आफ्ना कोमल बायाँ हातले मिलाइरहेकी र दाहिने हातले चाहिँ भकुन्डो हान्दै गरेकी अनि आफ्नो मायाले सारा संसारलाई नै मोहित बनाइरहेकी सुन्दरीलाई भगवान् शङ्करले देख्नुभयो। भकुन्डो खलिरहेकी ती सुन्दरीले पनि भगवान् शङ्करलाई केही लज्जा मिश्रित मन्दमुस्कानले मुस्कुराउँदै छड्के हेराइले हेरेपछि त उहाँको मन नै चोरियो। यसरी आफूले उनलाई हेरेको अनि उनले पनि आफूलाई हेरेको देखेर असाध्यै व्याकुल भएका भगवान् शङ्करले नजिकै रहेकी उमा देवी र आफ्ना गणहरूसहित आफूलाई पनि बिर्सनुभयो।

**तस्याः कराग्रात् स तु कन्दुको यदा गतो विदूरं तमनुव्रजत्स्त्रियाः।**
**वासः ससूत्रं लघु मारुतोऽहरद् भवस्य देवस्य किलानुपश्यतः॥ २३॥**

**पदार्थ–**
**सः** = त्यो
**कन्दुकः तु** = भकुन्डो
**यदा** = जब
**तस्याः** = ती सुन्दरीको
**कराग्रात्** = हत्केलाबाट
**विदूरं** = अलि टाढा
**गतः** = गएको थियो
**तं** = त्यसको
**अनुव्रजत्स्त्रियाः** = पछि-पछि दौडिएकी ती सुन्दरीको
**ससूत्रं** = मेखलासहितको
**लघु** = पातलो
**वासः** = त्यो साडीलाई
**मारुतः** = हावाले
**देवस्य** = भगवान्
**भवस्य** = शङ्करले
**अनुपश्यतः किल** = हेर्दाहेर्दै नै
**अहरत्** = उडाइदियो

**वाक्यार्थ–** खेल्दा-खेल्दै एकपटक त्यो भकुन्डो ती सुन्दरीको हत्केलाबाट फुत्किएर अलि टाढा पुग्यो। त्यसलाई लिन त्यसको पछि-पछि दौडिएकी ती सुन्दरीको मेखलासहितको पातलो साडीलाई भगवान् शङ्करले हेर्दाहेर्दै हावाले उडाइदियो।

**एवं तां रुचिरापाङ्गीं दर्शनीयां मनोरमाम्।**
**दृष्ट्वा तस्यां मनश्चक्रे विषज्जन्त्यां भवः किल॥ २४॥**

**पदार्थ–**
**एवं** = यसरी
**रुचिरापाङ्गीं** = अत्यन्त राम्रा आँखाका कुनाहरू भएकी
**दर्शनीयां** = हेरिरहूँ जस्तो लाग्ने र

**मनोरमाम्** = मनलाई आनन्द दिने
**तां** = ती सुन्दरीलाई
**दृष्ट्वा** = देखेर
**भवः** = भगवान् शङ्करले
**विषज्जन्त्यां** = आफूतिर आसक्त भए झैं देखिएकी
**तस्यां** = तिनमा
**मनः** = मन
**चक्रे किल** = लगाउनुभयो

**वाक्यार्थ—** आँखाका कुनाहरू अत्यन्त राम्रा भएकाले हेरिरहूँ जस्तो लाग्ने र मनोरञ्जनी ती सुन्दरीलाई देखेर भगवान् शङ्करले आफूतिर आसक्त भएजस्तो देखिएकी ती सुन्दरीमा मन लगाउनुभयो।

**तयापहृतविज्ञानस्तत्कृतस्मरविह्वलः।**
**भवान्या अपि पश्यन्त्या गतह्रीस्तत्पदं ययौ॥ २५॥**

**पदार्थ—**
**तया** = ती सुन्दरीद्वारा
**अपहृतविज्ञानः** = विवेक अपहरण गरिएका
**तत्कृतस्मरविह्वलः** = उनको कारणले गर्दा कामवासनाद्वारा व्याकुल बनेका भगवान्
**गतह्रीः** = लाजै छाडी
**भवान्याः** = उमा देवीले
**पश्यन्त्याः अपि** = हेर्दा-हेर्दै नै
**तत्पदं** = उनको पछि-पछि
**ययौ** = दौडिनुभयो

**वाक्यार्थ—** ती सुन्दरी र उनको हाउभाउका कारण कामवासनाद्वारा विवेक हराई व्याकुल बनेका भगवान् शङ्कर लाजै छाडी उमा देवीले हेर्दाहेर्दै उनको पछि-पछि दौडिनुभयो।

**सा तमायान्तमालोक्य विवस्त्रा व्रीडिता भृशम्।**
**निलीयमाना वृक्षेषु हसन्ती नान्वतिष्ठत॥ २६॥**

**पदार्थ—**
**तं** = ती भगवान् शङ्करलाई
**आयान्तं** = आइरहेको
**आलोक्य** = देखेर
**भृशम्** = अत्यन्त
**व्रीडिता** = लजाएकी
**विवस्त्रा** = वस्त्रहीन
**सा** = तिनी
**वृक्षेषु** = रुखहरूको आडमा
**निलीयमाना** = छेल पर्दै
**हसन्ती** = हाँस्दै
**न अन्वतिष्ठत** = नअडिई भागिरहिन्

**वाक्यार्थ—** भगवान् शङ्करलाई आइरहेको देखेपछि वस्त्रहीन ती सुन्दरी हाँस्दै र रुखहरूको आडमा छेल पर्दै भागिरहिन्।

**तामन्वगच्छद् भगवान् भवः प्रमुषितेन्द्रियः।**
**कामस्य च वशं नीतः करेणुमिव यूथपः॥ २७॥**

**पदार्थ—**
**प्रमुषितेन्द्रियः** = इन्द्रियहरू चोरिएका (वशमा नरहेका) र
**कामस्य च** = कामवासनाको समेत
**वशं** = वशमा
**नीतः** = परेका
**भगवान्** = भगवान्
**भवः** = शङ्कर

**यूथपः** = हात्तीहरूको नाइके
**करेणुम् इव** = हत्तिनी (ढोई)को पछि लागे झैं
**तां** = ती सुन्दरीको
**अन्वगच्छत्** = पछि लाग्नुभयो

**वाक्यार्थ–** इन्द्रियहरू वशमा नरहेका र कामवासनाको वशमा परेका भगवान् शङ्कर हात्तीहरूको नाइके हत्तिनी (ढोई)को पछि लागे झैं ती सुन्दरीको पछि लाग्नुभयो।

**सोऽनुव्रज्यातिवेगेन गृहीत्वानिच्छतीं स्त्रियम्।**
**केशबन्ध उपानीय बाहुभ्यां परिषस्वजे॥ २८॥**

**पदार्थ–**
**सः** = उहाँ
**अतिवेगेन** = अत्यन्त छिटो
**अनुव्रज्य** = उनको पछि दौडिई
**केशबन्धे** = चुल्ठोमा
**उपानीय** = समाती
**अनिच्छतीं** = उनको चाहना विना पनि
**स्त्रियम्** = सुन्दरीलाई
**गृहीत्वा** = समाएर
**बाहुभ्यां** = दुबै हातले
**परिषस्वजे** = अँगालो मार्नुभयो

**वाक्यार्थ–** भगवान्ले अत्यन्त छिटो दौडी उनको चुल्ठोमा समात्नुभयो र उनले नचाहँदा नचाहँदै पनि आफ्ना दुबै हातले उनलाई समाती अँगालो मार्नुभयो।

**सोपगूढा भगवता करिणा करिणी यथा।**
**इतस्ततः प्रसर्पन्ती विप्रकीर्णशिरोरुहा॥ २९॥**
**आत्मानं मोचयित्वाङ्ग सुरर्षभभुजान्तरात्।**
**प्राद्रवत् सा पृथुश्रोणी माया देवविनिर्मिता॥ ३०॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय राजा
**यथा** = जसरी
**करिणा** = हात्तीले
**करिणी** = हत्तिनीलाई अँगालो मार्छ, त्यसै गरी
**भगवता** = भगवान् शङ्करद्वारा
**उपगूढा** = अँगालो मारिएकी
**इतः ततः** = यताउति
**प्रसर्पन्ती** = फुत्किन खोजेकी
**विप्रकीर्णशिरोरुहा** = कपाल जताततै छरिएकी
**देवविनिर्मिता** = श्रीहरिद्वारा रचिएकी
**माया** = माया स्वरूपिणी
**सा** = ती
**पृथुश्रोणी** = ठुलो नितम्ब भएकी सुन्दरी
**सुरर्षभभुजान्तरात्** = महादेवका हातको फन्दाबाट
**आत्मानं** = आफूलाई
**मोचयित्वा** = छुटाई
**प्राद्रवत्** = दौडिइन्

**वाक्यार्थ–** हे राजा! जसरी हात्तीले हत्तिनीलाई अँगालो मार्छ त्यसै गरी भगवान्ले तिनलाई अँगालो मारेपछि यताउति फुत्किन खोज्दा कपालहरू जताततै छरिएकी अनि ठुलो नितम्ब भएकी ती श्रीहरिद्वारा रचना गरिएकी मायास्वरूपिणी सुन्दरी भगवान् शङ्करको हातको फन्दाबाट आफूलाई छुटाई त्यहाँबाट भागिन्।

**तस्यासौ पदवीं रुद्रो विष्णोरद्भुतकर्मणः ।**
**प्रत्यपद्यत कामेन वैरिणेव विनिर्जितः ॥ ३१ ॥**

**पदार्थ–**
**वैरिणा** = शत्रु
**कामेन** = कामदेवद्वारा
**विनिर्जितः इव** = जितिए झैँ
**असौ** = उहाँ
**रुद्रः** = भगवान् शङ्कर पनि
**अद्भुतकर्मणः** = अद्भुत लीला भएका
**तस्य** = ती
**विष्णोः** = विष्णु भगवान्को
**पदवीं** = पाइला
**प्रत्यपद्यत** = पछ्याउँदै दौडिनुभयो

**वाक्यार्थ–** शत्रु कामदेवद्वारा जितिए झैँ भगवान् शङ्कर अद्भुत लीला गर्नुहुने स्त्री रूपधारी भगवान् विष्णुको पछि-पछि दौडिनुभयो।

**टिप्पणी–** भगवान् शङ्करले कामदेवलाई भस्म गर्नुभएको थियो। यसैले भगवान् शङ्करलाई कामारि अर्थात् कामदेवका शत्रु भनिन्छ। भगवान् शङ्कर अहिले सुन्दरी स्त्रीको पछि लागेकाले मानौँ उहाँलाई उहाँको शत्रु कामदेवले जितेको हो कि भनेर यस श्लोकमा उत्प्रेक्षा गरिएको हो।

**तस्यानुधावतो रेतश्चस्कन्दामोघरेतसः ।**
**शुष्मिणो यूथपस्येव वासितामनुधावतः ॥ ३२ ॥**

**पदार्थ–**
**वासितां** = कामग्रस्त हत्तिनीको
**अनुधावतः** = पछि-पछि दौडने
**शुष्मिणः** = मदोन्मत्त
**यूथपस्य इव** = हात्तीको झैँ
**अनुधावतः** = ती सुन्दरीको पछि लाग्ने
**अमोघरेतसः** = अमोघ वीर्य भएका
**तस्य** = ती भगवान्को
**रेतः** = वीर्य
**चस्कन्द** = पतन भयो

**वाक्यार्थ–** कामग्रस्त हत्तिनीको पछि लाग्ने मदोन्मत्त हात्तीको झैँ ती सुन्दरीको पछि-पछि लाग्ने अमोघ वीर्य भएका भगवान् शङ्करको वीर्य पतन भयो।

**यत्र यत्रापतन्मह्यां रेतस्तस्य महात्मनः ।**
**तानि रूप्यस्य हेम्नश्च क्षेत्राण्यासन् महीपते ॥ ३३ ॥**

**पदार्थ–**
**महीपते** = हे राजा
**तस्य** = ती
**महात्मनः** = महादेवको
**रेतः** = वीर्य
**मह्यां** = पृथिवीमा
**यत्र यत्र** = जहाँ-जहाँ
**अपतत्** = खस्यो
**तानि** = ती-ती ठाउँ
**रूप्यस्य** = चाँदीका र
**हेम्नः च** = सुनका
**क्षेत्राणि** = खानीयुक्त ठाउँहरू
**आसन्** = भए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! ती महादेव भगवान्को वीर्य पृथिवीका जुन-जुन ठाउँमा खस्यो ती-ती ठाउँहरू सुनका र चाँदीका खानीहरू भए।

**सरित्सरस्सु शैलेषु वनेषूपवनेषु च।**
**यत्र क्व चासन्नृषयस्तत्र सन्निहितो हरः॥ ३४॥**

**पदार्थ—**
**सरित्सरस्सु** = नदी र सरोवरहरूमा
**शैलेषु** = पहाडहरूमा
**वनेषु** = वन र
**उपवनेषु च** = बगैँचाहरूमा समेत
**यत्र क्व च** = जहाँ-कहीँ पनि
**ऋषयः** = ऋषिहरू
**आसन्** = रहन्थे
**तत्र** = त्यहीँ-त्यहीँ
**हरः** = भगवान् शङ्कर
**सन्निहितः** = पुग्नुभएको थियो

**वाक्यार्थ—** नदी, सरोवर, पहाड, वन एवं बगैँचा आदि जुन-जुन ठाउँहरूमा ऋषिहरू रहन्थे, त्यहीँ-त्यहीँ भगवान् शङ्कर पुग्नुभएको थियो।

**स्कन्ने रेतसि सोऽपश्यदात्मानं देवमायया।**
**जडीकृतं नृपश्रेष्ठ सन्न्यवर्तत कश्मलात्॥ ३५॥**

**पदार्थ—**
**नृपश्रेष्ठ** = हे राजा
**रेतसि** = वीर्य
**स्कन्ने** = स्खलित भएपछि
**सः** = उहाँले
**आत्मानं** = आफूलाई
**देवमायया** = श्रीहरिको मायाद्वारा
**जडीकृतं** = अज्ञानी बनाएको
**अपश्यत्** = देख्नुभयो अनि
**कश्मलात्** = त्यो लज्जाजनक प्रसङ्गबाट
**सन्न्यवर्तत** = हट्नुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित्! वीर्य स्खलन भएपछि भगवान् शङ्करले आफूलाई श्रीहरिको मायाले अज्ञानी झैँ बनाइदिएको थाहा पाउनुभयो र यो लज्जाजनक प्रसङ्गबाट हट्नुभयो।

**अथावगतमाहात्म्य आत्मनो जगदात्मनः।**
**अपरिज्ञेयवीर्यस्य न मेने तदु हाद्भुतम्॥ ३६॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**ह** = निश्चय नै
**अपरिज्ञेयवीर्यस्य** = अपरिमित पराक्रमले युक्त
**आत्मनः** = आत्मास्वरूप
**जगदात्मनः** = सर्वात्मा भगवान्को
**अवगतमाहात्म्यः** = माहात्म्य थाहा पाएका भगवान् शङ्करले
**तत् उ** = त्यो कुरालाई
**अद्भुतम्** = आश्चर्य
**न मेने** = मान्नुभएन

**वाक्यार्थ—** यसपछि अपरिमित पराक्रमले युक्त आत्मास्वरूप सर्वात्मा भगवान्को महिमालाई थाहा पाएर भगवान् शङ्करले यस विषयमा केही आश्चर्य मान्नुभएन।

**तमविक्लवमव्रीडमालक्ष्य मधुसूदनः।**

**उवाच परमप्रीतो बिभ्रत् स्वां पौरुषीं तनुम्॥ ३७॥**

**पदार्थ—**
**तं** = ती भगवान् शङ्करलाई
**अविक्लवं** = खिन्नतारहित एवं
**अव्रीडं** = लज्जारहित
**आलक्ष्य** = देखेर
**परमप्रीतः** = असाध्यै प्रसन्न भएका
**मधुसूदनः** = मधु दैत्यका नाशक भगवान्ले
**स्वां** = आफ्नो
**पौरुषीं** = पुरुषको
**तनुम्** = शरीरलाई
**बिभ्रत्** = धारण गरी
**उवाच** = यसो भन्नुभयो

**वाक्यार्थ—** यो घटनाबाट कुनै खिन्नता र लज्जा नभएका भगवान् शङ्करलाई देखेर भगवान् विष्णु असाध्यै प्रसन्न हुनुभयो र आफ्नो यथार्थ पुरुषशरीर धारण गरी उहाँलाई यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**दिष्ट्या त्वं विबुधश्रेष्ठ स्वां निष्ठामात्मना स्थितः।**

**यन्मे स्त्रीरूपया स्वैरं मोहितोऽप्यङ्ग मायया॥ ३८॥**

**पदार्थ—**
**विबुधश्रेष्ठ** = देवताहरूमध्ये श्रेष्ठ
**अङ्ग** = हे प्रिय शङ्कर
**यत्** = जसरी
**मे** = मेरो
**स्त्रीरूपया** = स्त्रीरूप धारण गर्ने
**मायया** = मायाद्वारा
**स्वैरं** = यथेच्छ
**मोहितः अपि** = मोहित भए तापनि
**त्वं** = तपाईं
**दिष्ट्या** = सौभाग्यले
**आत्मना** = आफैं नै
**स्वां** = आफ्नो
**निष्ठां** = स्थितिमा
**स्थितः** = रहनुभएको छ

**वाक्यार्थ—** हे देवताहरूमध्ये श्रेष्ठ शङ्कर! मेरो स्त्रीरूपी मायाद्वारा आफ्नै इच्छाले मोहित भए तापनि तपाईं आफैं नै आफ्नो स्थितिमा रहनुभएको छ, यो सौभाग्यको कुरो हो।

**को नु मेऽतितरेन्मायां विषक्तस्त्वदृते पुमान्।**

**तांस्तान् विसृजतीं भावान् दुस्तरामकृतात्मभिः॥ ३९॥**

**पदार्थ—**
**तान् तान्** = ती-ती
**भावान्** = भावहरू
**विसृजतीं** = फैलाइरहने
**अकृतात्मभिः** = अजितेन्द्रिय व्यक्तिहरूद्वारा
**दुस्तरां** = छुटकारा पाउनै नसकिने
**मे** = मेरी
**मायां** = मायालाई
**त्वदृते** = तपाईंबाहेक
**कः नु** = कुन चाहिँ
**विषक्तः** = विषयमा आसक्त
**पुमान्** = पुरुषले
**अतितरेत्** = तर्न सक्ला र

**वाक्यार्थ—** जो विभिन्न भावहरू फैलाउँछे र जसबाट अजितेन्द्रिय पुरुष छुटकारा पाउन सक्दैन त्यस्ती मेरी मायाबाट संसारमा तपाईंबाहेक अर्को कुन चाहिँ व्यक्तिले पार पाउन सक्ला र?

**सेयं गुणमयी माया न त्वामभिभविष्यति।**
**मया समेता कालेन कालरूपेण भागशः॥ ४०॥**

**पदार्थ—**
**कालेन** = सृष्टि आदिको समयअनुसार
**कालरूपेण** = कालस्वरूप
**मया** = मद्वारा
**भागशः** = रजोगुण आदिको क्रमले
**समेता** = युक्त भएकी
**सा** = यस्ती
**इयं** = यी
**गुणमयी** = त्रिगुणात्मिका
**माया** = मायाले
**त्वां** = तपाईंलाई
**न अभिभविष्यति** = जित्न सक्नेछैन

**वाक्यार्थ—** सृष्टि, स्थिति आदिको समयअनुसार कालरूपी मद्वारा रजोगुण, सत्त्वगुण आदिले युक्त भएकी त्रिगुणात्मिका मायाले तपाईंलाई जित्न सक्नेछैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं भगवता राजन् श्रीवत्साङ्केन सत्कृतः।**
**आमन्त्र्य तं परिक्रम्य सगणः स्वालयं ययौ॥ ४१॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्!
**एवं** = यसप्रकार
**भगवता** = भगवान्
**श्रीवत्साङ्केन** = विष्णुद्वारा
**सत्कृतः** = सत्कार गरिएका
**सगणः** = आफ्ना गणसहित भगवान् शङ्कर
**तं** = ती भगवान् विष्णुसँग
**आमन्त्र्य** = बिदा लिई
**परिक्रम्य** = उहाँको परिक्रमा गरी
**स्वालयं** = आफ्नो लोकतिर
**ययौ** = जानुभयो

**वाक्यार्थ—** हे परीक्षित्! भगवान् विष्णुले यसप्रकार भगवान् शङ्करको सत्कार गर्नुभयो। त्यसपछि भगवान् शङ्कर पनि उहाँसँग बिदा लिई उहाँको परिक्रमा गरेर आफ्ना गणसहित कैलाशतिर जानुभयो।

**आत्मांशभूतां तां मायां भवानीं भगवान् भवः।**
**शंसतामृषिमुख्यानां प्रीत्याचष्टाथ भारत॥ ४२॥**

**पदार्थ—**
**भारत** = हे भरतवंशी परीक्षित्!
**अथ** = यसपछि
**भगवान्** = भगवान्
**भवः** = शङ्करले
**शंसतां** = आदरपूर्वक सुनिरहेका
**ऋषिमुख्यानां** = प्रमुख ऋषिहरूको अगाडि
**आत्मांशभूतां** = आफ्नो अंश भएकी
**भवानीं** = उमालाई
**प्रीत्या** = प्रेमपूर्वक
**तां** = त्यो
**मायां** = मायाको विषयमा
**आचष्ट** = बताउनुभयो

**वाक्यार्थ—** हे परीक्षित्! भगवान् शङ्करले ऋषिमुनिहरूको सभामा नै प्रेमपूर्वक आफ्नी अर्धाङ्गिनी उमालाई त्यो मायाको विषयमा बताउनुभयो।

**अपि व्यपश्यस्त्वमजस्य मायां परस्य पुंसः परदेवतायाः।**
**अहं कलानामृषभो विमुह्ये ययावशोऽन्ये किमुतास्वतन्त्राः॥ ४३॥**

**पदार्थ—**
**त्वं** = तिमीले
**परस्य** = परम
**पुंसः** = पुरुष
**परदेवतायाः** = परमेश्वर
**अजस्य** = भगवान्को
**मायां** = मायालाई
**व्यपश्यः अपि** = के देख्यौ
**यया** = जुन मायाद्वारा
**कलानां** = सम्पूर्ण सद्गुणहरूको
**ऋषभः** = स्वामी
**अवशः** = परमस्वतन्त्र
**अहं** = म समेत
**विमुह्ये** = मोहित भएँ भने
**अन्ये अस्वतन्त्राः** = अरू परतन्त्र जीवहरूको त
**किं उत** = के कुरा

**वाक्यार्थ—** हे सती ! तिमीले के परमपुरुष परमात्मा भगवान् श्रीहरिको मायालाई देख्यौ ? सम्पूर्ण सद्गुणहरूका स्वामी र परमस्वतन्त्र भए तापनि जुन मायाद्वारा म समेत मोहित भएँ भने अरू परतन्त्र जीवहरूको त के कुरा ?

**यं मामपृच्छस्त्वमुपेत्य योगात् समासहस्रान्त उपारतं वै।**
**स एष साक्षात् पुरुषः पुराणो न यत्र कालो विशते न वेदः॥ ४४॥**

**पदार्थ—**
**त्वं वै** = तिमीले नै
**समासहस्रान्ते** = हजारौँ वर्षपछि
**योगात्** = समाधिबाट
**उपारतं** = ब्युँझिएको
**मां** = मकहाँ
**उपेत्य** = आएर
**यं** = जुन आराध्यको विषयमा
**अपृच्छः** = सोधेकी थियौ
**एषः** = यी भगवान्
**सः** = त्यही
**साक्षात्** = साक्षात्
**पुराणः पुरुषः** = पुराण पुरुष हुनुहुन्छ
**यत्र** = जहाँ
**कालः** = समय
**न विशते** = पस्न सक्दैन
**वेदः न** = वेदले समेत वर्णन गर्न सक्दैन

**वाक्यार्थ—** अहिले हजारौँ वर्षको समाधिबाट म उठेपछि तिमीले मसँग मेरो आराध्यको विषयमा सोधेकी थियौ। यी भगवान् उनै साक्षात् पुराणपुरुष परमात्मा हुनुहुन्छ जहाँ काल पनि पस्न सक्दैन र वेदहरूले पनि जसको स्वरूपको वर्णन गर्न सक्दैनन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति तेऽभिहितस्तात विक्रमः शार्ङ्गधन्वनः।**
**सिन्धोर्निर्मथने येन धृतः पृष्ठे महाचलः॥ ४५॥**

**पदार्थ—**
**तात** = हे प्रिय परीक्षित्
**इति** = यसप्रकार
**ते** = तपाईंलाई
**येन** = जो श्रीहरिले
**सिन्धोः** = समुद्रको
**निर्मथने** = मन्थन गर्दा
**महाचलः** = मन्दराचललाई
**पृष्ठे** = पिठ्युँमा

**धृतः** = बोक्नुभएको थियो, त्यस्ता
**शार्ङ्गधन्वनः** = शार्ङ्गधनु धारण गर्नुहुने श्रीहरिको
**विक्रमः** = पराक्रम
**अभिहितः** = बताइयो

**वाक्यार्थ–** हे परीक्षित् ! जो श्रीहरिले समुद्रमन्थनको वेलामा कछुवा रूप लिई मन्दराचललाई आफ्ना पिठ्युँमा बोक्नुभएको थियो ती शार्ङ्गधनु धारण गर्नुहुने श्रीहरिको पराक्रम मैले तपाईंलाई सुनाएँ।

**एतन्मुहुः कीर्तयतोऽनुशृण्वतो न रिष्यते जातु समुद्यमः क्वचित्।**
**यदुत्तमश्लोकगुणानुवर्णनं समस्तसंसारपरिश्रमापहम्॥ ४६॥**

**पदार्थ–**
**एतत्** = यो चरित्रलाई
**मुहुः** = बारम्बार
**कीर्तयतः** = कीर्तन गर्ने र
**अनुशृण्वतः** = श्रवण गर्ने व्यक्तिको
**समुद्यमः** = उद्योग
**क्वचित्** = कहीं पनि र
**जातु** = कहिल्यै पनि
**न रिष्यते** = व्यर्थ हुँदैन
**यद्** = किनभने
**उत्तमश्लोकगुणानुवर्णनं** = पवित्रकीर्ति भगवान्का गुणहरूको कीर्तन
**समस्तसंसारपरिश्रमापहम्** = संसारका सम्पूर्ण परिश्रमहरूलाई नाश गर्नेवाला छ

**वाक्यार्थ–** यस चरित्रलाई बारम्बार श्रवण र कीर्तन गरिरहने व्यक्तिको उद्यम कहीं पनि र कहिल्यै पनि व्यर्थ हुँदैन किनभने पवित्रकीर्ति भगवान्का गुणहरूको कीर्तनले संसारका सम्पूर्ण परिश्रमहरूलाई नाश गरिदिन्छ।

**असदविषयमङ्घ्रिं भावगम्यं प्रपन्ना-**
**नमृतममरवर्यानाशयत् सिन्धुमथ्यम्॥**
**कपटयुवतिवेषो मोहयन् यः सुरारीं-**
**स्तमहमुपसृतानां कामपूरं नतोऽस्मि॥ ४७॥**

**पदार्थ–**
**कपटयुवतिवेषः** = छल (माया)ले स्त्रीको रूप धारण गर्ने
**यः** = जसले
**सुरारीन्** = दैत्यहरूलाई
**मोहयन्** = मोहित गरी
**प्रपन्नान्** = आफ्नो शरणमा आएका
**अमरवर्यान्** = देवताहरूलाई
**सिन्धुमथ्यम्** = समुद्रमन्थनबाट उत्पन्न
**अमृतं** = अमृत
**अशयत्** = खुवाउनुभयो
**असदविषयम्** = दुष्ट व्यक्तिहरूद्वारा पाउनै नसकिने
**भावगम्यं** = भक्तिद्वारा मात्र भेटिने
**अङ्घ्रिं** = चरणयुक्त
**उपसृतानां** = शरणमा आएकाहरूको
**कामपूरं** = इच्छा पूरा गरिदिनुहुने
**तं** = त्यस्ता परमात्मालाई
**अहं** = म
**नतः अस्मि** = प्रणाम गर्दछु

**वाक्यार्थ–** मायाले स्त्रीको रूप धारण गर्ने जुन भगवान्ले दैत्यहरूलाई मोहित बनाउनुभयो र शरणमा आउने देवताहरूलाई चाहिँ समुद्रमन्थनबाट उत्पन्न अमृत खुवाउनुभयो। जसको चरणलाई

दुष्ट व्यक्तिहरूले पाउन सक्दैनन् केवल भक्तिबाट मात्र प्राप्त गर्न सकिन्छ र जो आफ्ना शरणमा आएकाहरूको समस्त इच्छालाई पूरा गरिदिनुहुन्छ त्यस्ता परमात्मालाई म प्रणाम गर्दछु।

**अध्याय-विवरण—** यस अध्यायमा भगवान् शङ्कर भगवान् विष्णुको मोहिनी रूपमा मोहित हुनुभएको बताइएको छ। यस प्रसङ्गलाई लिएर प्रशस्त शङ्काहरू उठेको पाइन्छ। तर यो लीलामा साधकहरूलाई सावधानीको शिक्षा दिने उद्देश्य लुकेको छ भन्ने बुझ्नुपर्दछ। भगवान् शङ्कर कामारि हुनुहुन्छ। जसको ज्ञानरूपी तेस्रो नेत्रले कामदेवलाई डढाइदियो उनै भगवान्लाई कामले कसरी जित्न सक्छ र? शिव सामान्य देवता मात्र नभएर स्वयं परमात्मा हुनुहुन्छ। भगवान् विष्णु र उहाँमा भेद छैन भन्ने कुरा त समुद्रबाट उत्पन्न विष पिउने प्रसङ्गमा सातौँ अध्यायमा उहाँको स्तुति गरिएबाट थाहा हुन्छ। परमात्मा नै संसारको सृष्टि, स्थिति र संहार गर्न ब्रह्मा, विष्णु र शिवको रूपमा देखिनुहुन्छ (भागवत ८/७/२३) भनी भागवतले शिव र विष्णुलाई एउटै तत्त्व मानेको छ। भगवान् शिव भगवान् विष्णुको मोहिनी रूपमा मोहित हुनु भगवान्को लीला मात्र हो। यस प्रसङ्गबाट पनि साधकहरूले सावधानीको शिक्षा लिनुपर्दछ। मनमाथि अलिकति पनि विश्वास गरियो भने त्यसले मानिसलाई खाडलमा लगेर खसालिदिन्छ। जब मनका स्वच्छन्द प्रवृत्तिहरूमा रमाउन थालिन्छ तब मनको शक्ति बढिहाल्छ। त्यसैले साधकले यो स्वच्छन्द मनमा सधैँ दृष्टि लगाइरहनुपर्दछ ता कि यसले आफूलाई परास्त गर्न नपाओस्। शास्त्रहरूमा यो उपदेशले साधकलाई सावधान गराउँदा धेरैजसो भगवान् शंकर मोहित भएको यही चरित्रलाई दृष्टान्त बनाइएको छ (भागवत ५/६/३)। बाह्रौँ अध्यायको सुरुमा पनि श्रीधर स्वामीले भगवान्को मायाद्वारा सारा संसार मोहित हुनसक्छ भन्ने दृष्टान्तका लागि यो महादेवमोहन बताइएको हो भनी उल्लेख गर्नुभएको छ। यसैले यो शिवमोहको कथा साधकहरूलाई सधैँ सावधान रहन निर्देशन र भगवान्को मायाले सबैलाई परास्त गर्न सक्छ भन्ने दृष्टान्त पनि हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**शङ्करमोहनं नाम द्वादशोऽध्यायः॥ १२॥**

# अथ त्रयोदशोऽध्यायः

## वैवस्वत आदि मन्वन्तरहरूको वर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**मनुर्विवस्वतः पुत्रः श्राद्धदेव इति श्रुतः ।**

**सप्तमो वर्तमानो यस्तदपत्यानि मे शृणु ॥ १ ॥**

**पदार्थ–**
**यः** = जो
**वर्तमानः** = अहिलेका
**श्राद्धदेवः इति** = श्राद्धदेव भन्ने नामले
**श्रुतः** = प्रख्यात
**सप्तमः** = सातौँ
**मनुः** = मनु छन् यी
**विवस्वतः** = विवस्वान्का
**पुत्रः** = छोरा हुन्
**मे** = मबाट
**तदपत्यानि** = उनका सन्तानहरूको विषयमा
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** अहिलेका मन्वन्तरमा श्राद्धदेव नाम गरेका मनु छन्। यी सातौँ मनु हुन् र विश्वस्वान्का छोरा हुन्। यिनका सन्तानहरूको विषयमा सुन्नुहोस्।

**इक्ष्वाकुर्नभगश्चैव धृष्टः शर्यातिरेव च ।**

**नरिष्यन्तोऽथ नाभागः सप्तमो दिष्ट उच्यते ॥ २ ॥**

**करूषश्च पृषध्रश्च दशमो वसुमान् स्मृतः ।**

**मनोर्वैवस्वतस्यैते दश पुत्राः परन्तप ॥ ३ ॥**

**पदार्थ–**
**परन्तप** = हे शत्रुनाशक परीक्षित्
**इक्ष्वाकुः** = इक्ष्वाकु
**नभगः च** = नभग
**धृष्टः एव** = धृष्ट र
**शर्यातिः एव** = शर्याति पनि
**अथ** = त्यसै गरी
**नरिष्यन्तः** = नरिष्यन्त
**नाभागः च** = नाभाग समेत
**सप्तमः** = सातौँ छोरा चाहिँ
**दिष्टः** = दिष्ट
**उच्यते** = भनिन्छन्
**करूषः च** = करूष
**पृषध्रः च** = पृषध्र र
**दशमः** = दशौँ छोरा
**वसुमान्** = वसुमान्
**स्मृतः** = भनिन्छन्
**एते** = यी
**दश** = दश जना
**वैवस्वतस्य** = वैवस्वत (श्राद्धदेव)
**मनोः** = मनुका
**पुत्राः** = छोराहरू थिए

**वाक्यार्थ–** हे परीक्षित् ! विश्वस्वान्का पुत्र श्राद्धदेव मनुका दश जना छोराहरू भए। जेठा इक्ष्वाकु अनि अरू नभग, धृष्ट, शर्याति, नरिष्यन्त, नाभाग, दिष्ट, करूष, पृषध्र र दसौँ छोरा वसुमान् नामका थिए।

**आदित्या वसवो रुद्रा विश्वेदेवा मरुद्गणाः।**

**अश्विनावृभवो राजन्निन्द्रस्तेषां पुरन्दरः॥ ४॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**आदित्याः** = आदित्यहरू
**वसवः** = वसुहरू
**रुद्राः** = रुद्रहरू
**विश्वेदेवाः** = विश्वेदेव
**मरुद्गणाः** = मरुद्गण
**अश्विनौ** = अश्विनीकुमार र
**ऋभवः** = ऋभुहरू देवता हुन्
**तेषां** = तिनीहरूमध्ये
**पुरन्दरः** = पुरन्दर
**इन्द्रः** = इन्द्र छन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! यस मन्वन्तरमा आदित्य, वसु, रुद्र, विश्वेदेव, मरुद्गण, अश्विनीकुमार र ऋभुहरू देवताहरू थिए भने तिनीहरूमध्ये पुरन्दर नामका इन्द्र भए।

**कश्यपोऽत्रिर्वसिष्ठश्च विश्वामित्रोऽथ गौतमः।**

**जमदग्निर्भरद्वाज इति सप्तर्षयः स्मृताः॥ ५॥**

**पदार्थ–**
**अथ** = त्यसै गरी
**कश्यपः** = कश्यप
**अत्रिः** = अत्रि
**वसिष्ठः च** = वसिष्ठ
**विश्वामित्रः** = विश्वामित्र
**गौतमः** = गौतम
**जमदग्निः** = जमदग्नि र
**भरद्वाजः इति** = भरद्वाज यति
**सप्तर्षयः** = सप्तर्षि
**स्मृताः** = मानिएका छन्

**वाक्यार्थ–** त्यसै गरी कश्यप, अत्रि, वसिष्ठ, विश्वामित्र, गौतम, जमदग्नि र भरद्वाज यी सात जना सप्तर्षि छन्।

**अत्रापि भगवज्जन्म कश्यपाददितेरभूत्।**

**आदित्यानामवरजो विष्णुर्वामनरूपधृक्॥ ६॥**

**पदार्थ–**
**अत्र अपि** = यो मन्वन्तरमा पनि
**कश्यपात्** = कश्यप र
**अदितेः** = अदितिबाट
**भगवज्जन्म** = भगवान्‌को जन्म
**अभूत्** = भयो
**विष्णुः** = भगवान् विष्णुले
**आदित्यानां** = अदितिका छोराहरूमध्ये
**अवरजः** = सबैभन्दा पछि जन्मिई
**वामनरूपधृक्** = वामनरूप धारण गर्नुभएको थियो

**वाक्यार्थ–** यस मन्वन्तरमा पनि कश्यपकी पत्नी अदितिबाट भगवान् विष्णु जन्मिनुभयो। अदितिका छोराहरूमध्ये सबैभन्दा कान्छा उहाँले वामनरूप धारण गर्नुभएको थियो।

**सङ्क्षेपतो मयोक्तानि सप्त मन्वन्तराणि ते।**

**भविष्याण्यथ वक्ष्यामि विष्णोः शक्त्यान्वितानि च॥ ७॥**

**पदार्थ–**
**ते** = तपाईंलाई
**मया** = मैले

**सङ्क्षेपतः** = सङ्क्षेपमा
**सप्त** = सात
**मन्वन्तराणि** = मन्वन्तरको विषयमा
**उक्तानि** = बताएँ
**अथ** = अब
**विष्णोः** = भगवान् विष्णुको
**शक्त्या** = शक्तिले
**अन्वितानि** = युक्त भएका
**भविष्याणि च** = आगामी मन्वन्तरहरू पनि
**वक्ष्यामि** = बताउनेछु

**वाक्यार्थ–** मैले तपाईंलाई अहिलेसम्मका सात ओटा मन्वन्तरको विषयमा बताएँ। अब भगवान् विष्णुका शक्तिले युक्त भएका आगामी अरू मन्वन्तरहरूको विषयमा बताउँछु।

**विवस्वतश्च द्वे जाये विश्वकर्मसुते उभे ।**
**संज्ञा छाया च राजेन्द्र ये प्रागभिहिते तव ॥ ८ ॥**
**तृतीयां वडवामेके तासां संज्ञासुतास्त्रयः ।**
**यमो यमी श्राद्धदेवश्छायायाश्च सुताञ्छृणु ॥ ९ ॥**
**सावर्णिस्तपती कन्या भार्या संवरणस्य या ।**
**शनैश्चरस्तृतीयोऽभूदश्विनौ वडवात्मजौ ॥ १० ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे राजा परीक्षित् !
**संज्ञा** = संज्ञा र
**छाया च** = छाया गरी
**उभे** = दुबै
**विश्वकर्मसुते** = विश्वकर्माका छोरीहरू थिए (जो)
**विवस्वतः च** = विवस्वान्का
**द्वे जाये** = दुई पत्नी थिए
**ये** = जो (जसको विषयमा)
**तव** = तपाईंलाई
**प्राक्** = पहिल्यै
**अभिहिते** = बताइए (बताइयो)
**एके** = कोही
**तृतीयां** = तेस्री पत्नी
**वडवां** = वडवा भनी बताउँछन्
**तासां** = तिनीहरूमध्ये
**यमः** = यमराज
**यमी** = यमी र
**श्राद्धदेवः** = श्राद्धदेव मनुसमेत
**त्रयः** = तीन जना
**संज्ञासुताः** = संज्ञाका सन्तान थिए
**छायायाः च** = छायाका चाहिँ
**सुतान्** = सन्तानहरू
**शृणु** = सन्नुहोस्
**सावर्णिः** = सावर्णि
**या** = जो
**संवरणस्य** = संवरणकी
**भार्या** = पत्नी भइन् ती
**तपती** = तपती नामकी
**कन्या** = कन्या र
**तृतीयः** = तेस्रो सन्तान
**शनैश्चरः** = शनैश्चर
**अभूत्** = भए
**वडवात्मजौ** = वडवाका छोराहरू चाहिँ
**अश्विनौ** = अश्विनीकुमार भए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! विश्वकर्माका संज्ञा र छाया गरी दुई छोरी थिए, ती दुबै विवस्वान्का पत्नी भए, जसको चरित्र मैले बताइसकेँ। विवस्वान्की तेस्री पत्नी वडवा नामकी थिइन् पनि भन्दछन्। तीमध्ये संज्ञाका यमराज, यमी र श्राद्धदेव नामका तीन सन्तान भए। छायाका पनि तीनै सन्तान थिए। जेठा सावर्णि, तपती नामकी कन्या जो पछि संवरणकी पत्नी भइन् अनि तेस्रा चाहिँ शनैश्चर थिए। वडवाबाट चाहिँ अश्विनीकुमार जन्मिए।

**अष्टमेऽन्तर आयाते सावर्णिर्भविता मनुः ।**
**निर्मोकविरजस्काद्याः सावर्णितनया नृप ॥ ११ ॥**

**पदार्थ—**
**नृप** = हे राजा
**अष्टमे** = आठौँ
**अन्तरे** = मन्वन्तर
**आयाते** = आएपछि
**सावर्णिः** = सावर्णि
**मनुः** = मनु
**भविता** = हुनेछन्
**सावर्णितनयाः** = सावर्णिका छोराहरू
**निर्मोकविरजस्काद्याः** = निर्मोक र विरजस्क आदि हुनेछन्

**वाक्यार्थ—** हे राजा ! आठौँ मन्वन्तर आएपछि सावर्णि मनु हुनेछन्। उनका छोराहरू निर्मोक र विरजस्क आदि हुनेछन्।

**तत्र देवाः सुतपसो विरजा अमृतप्रभाः ।**
**तेषां विरोचनसुतो बलिरिन्द्रो भविष्यति ॥ १२ ॥**

**पदार्थ—**
**तत्र** = त्यो मन्वन्तरमा
**सुतपसः** = सुतपा
**विरजाः** = विरजा र
**अमृतप्रभाः** = अमृतप्रभा नामका
**देवाः** = देवताहरू हुनेछन्
**तेषां** = ती मध्ये
**विरोचनसुतः** = विरोचनका छोरा
**बलिः** = बलि
**इन्द्रः** = इन्द्र
**भविष्यति** = हुनेछन्

**वाक्यार्थ—** त्यस मन्वन्तरमा सुतपा, विरजा र अमृतप्रभ आदि देवताहरू हुनेछन्। अनि विरोचनका छोरा बलि इन्द्र हुनेछन्।

**दत्त्वेमां याचमानाय विष्णवे यः पदत्रयम् ।**
**राद्धमिन्द्रपदं हित्वा ततः सिद्धिमवाप्स्यति ॥ १३ ॥**

**पदार्थ—**
**यः** = जसले
**पदत्रयम्** = तीन पाउ पृथिवी
**याचमानाय** = माग्दै गरेका
**विष्णवे** = विष्णु भगवान्लाई
**इमां** = यो पूरा त्रिलोक नै
**दत्त्वा** = दिएर
**राद्धम्** = सम्पूर्ण ऐश्वर्यले पूर्ण
**इन्द्रपदं** = इन्द्रको पदलाई पनि
**हित्वा** = त्यागेर
**ततः** = त्यसपछि
**सिद्धिं** = सिद्धि
**अवाप्स्यति** = पाउनेछन्

**वाक्यार्थ—** यिनै बलिले तीन पाउ पृथिवी माग्ने भगवान् विष्णुलाई सारा त्रिलोक नै दान गर्नेछन्। उनले सम्पूर्ण ऐश्वर्यले परिपूर्ण भएको इन्द्रको पदलाई पनि त्यागेर परमसिद्धि पाउनेछन्।

**योऽसौ भगवता बद्धः प्रीतेन सुतले पुनः ।**
**निवेशितोऽधिके स्वर्गादधुनास्ते स्वराडिव ॥ १४ ॥**

**पदार्थ—**
**यः असौ** = जुन यी बलि
**भगवता** = भगवान्द्वारा

**बद्धः** = बाँधिएका थिए (उनै)
**पुनः** = फेरि
**प्रीतेन** = प्रसन्न भएपछि
**स्वर्गात्** = स्वर्गभन्दा पनि
**अधिके** = श्रेष्ठ
**सुतले** = सुतल लोकमा
**निवेशितः** = राखिएका थिए
**अधुना** = अहिले उनी
**स्वराट् इव** = मालिक जैँ
**आस्ते** = त्यहीँ बसेका छन्

**वाक्यार्थ–** एकपटक त भगवान्ले बलिलाई बन्दी बनाउनुभएको थियो, तर पछि प्रसन्न भएर उहाँले उनलाई स्वर्गभन्दा पनि श्रेष्ठ सुतल लोक दिनुभयो। अहिले उनी त्यहाँको मालिक जैँ भएर बसिरहेका छन्।

**गालवो दीप्तिमान् रामो द्रोणपुत्रः कृपस्तथा।**
**ऋष्यशृङ्गः पितास्माकं भगवान् बादरायणः॥ १५॥**
**इमे सप्तर्षयस्तत्र भविष्यन्ति स्वयोगतः।**
**इदानीमासते राजन् स्वे स्व आश्रममण्डले॥ १६॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्र** = त्यस मन्वन्तरमा
**गालवः** = गालव
**दीप्तिमान्** = दीप्तिमान्
**रामः** = परशुराम
**द्रोणपुत्रः** = द्रोणपुत्र अश्वत्थामा
**तथा** = त्यसै गरी
**कृपः** = कृपाचार्य
**ऋष्यशृङ्गः** = ऋष्यशृङ्ग र
**अस्माकं** = हाम्रा
**पिता** = पिताजी
**भगवान्** = भगवान्
**बादरायणः** = वेदव्यास
**इमे** = यी
**सप्तर्षयः** = सप्तर्षि
**भविष्यन्ति** = हुनेछन्
**इदानीं** = अहिले
**स्वयोगतः** = आफ्नो योगबलले
**स्वे स्वे** = आ-आफ्नै
**आश्रममण्डले** = आश्रमक्षेत्रमा
**आसते** = रहनुभएको छ

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यस मन्वन्तरमा गालव, दीप्तिमान्, परशुराम, अश्वत्थामा, कृपाचार्य, ऋष्यशृङ्ग र मेरा पिताजी भगवान् व्यास गरी सात जना सप्तर्षि हुनेछन्। अहिले भने उहाँहरू योगबलले आ-आफ्नै आश्रममा रहनुभएको छ।

**देवगुह्यात् सरस्वत्यां सार्वभौम इति प्रभुः।**
**स्थानं पुरन्दराद्धृत्वा बलये दास्यतीश्वरः॥ १७॥**

**पदार्थ–**
**प्रभुः** = सर्वसमर्थ
**ईश्वरः** = ईश्वरले
**देवगुह्यात्** = देवगुह्य र
**सरस्वत्यां** = उनकी पत्नी सरस्वतीबाट
**सार्वभौमः इति** = सार्वभौम भन्ने अवतार लिई
**पुरन्दरात्** = पुरन्दर नामका इन्द्रबाट
**स्थानं** = स्वर्गलोक
**हृत्वा** = हरण गरी
**बलये** = बलिलाई
**दास्यति** = दिनुहुनेछ

**वाक्यार्थ–** त्यस मन्वन्तरमा भगवान्ले देवगुह्यकी पत्नी सरस्वतीको गर्भबाट सार्वभौम नामको

अवतार लिनुहुनेछ र पुरन्दर नामका इन्द्रबाट स्वर्गको राज्य लिएर बलिलाई दिनुहुनेछ।

**नवमो दक्षसावर्णिर्मनुर्वरुणसम्भवः।**

**भूतकेतुर्दीप्तकेतुरित्याद्यास्तत्सुता नृप ॥ १८ ॥**

**पदार्थ–**
**नृप** = हे राजा
**वरुणसम्भवः** = वरुणका छोरा
**दक्षसावर्णिः** = दक्षसावर्णि
**नवमः** = नवौँ
**मनुः** = मनु हुनेछन्
**तत्सुताः** = उनका छोराहरू
**भूतकेतुः** = भूतकेतु
**दीप्तकेतुः इत्याद्याः** = दीप्तकेतु आदि हुनेछन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! वरुणका छोरा दक्षसावर्णि नवौँ मनु हुनेछन्। उनका छोराहरू चाहिँ भूतकेतु र दीप्तकेतु आदि हुनेछन्।

**पारा मरीचिगर्भाद्या देवा इन्द्रोऽद्भुतः स्मृतः।**

**द्युतिमत्प्रमुखास्तत्र भविष्यन्त्यृषयस्ततः ॥ १९ ॥**

**पदार्थ–**
**तत्र** = त्यो मन्वन्तरमा
**पाराः** = पार
**मरीचिगर्भाद्याः** = मरीचिगर्भ आदि
**देवाः** = देवताहरू र
**अद्भुतः** = अद्भुत नामका
**इन्द्रः** = इन्द्र
**स्मृतः** = हुनेछन्
**ततः** = त्यसै गरी
**द्युतिमत्प्रमुखाः** = द्युतिमान् आदि
**ऋषयः** = ऋषिहरू
**भविष्यन्ति** = हुनेछन्

**वाक्यार्थ–** त्यस मन्वन्तरमा पार, मरीचिगर्भ आदि देवताहरू हुनेछन्। अद्भुत नामका इन्द्र र द्युतिमान् आदि सप्तर्षि हुनेछन्।

**आयुष्मतोऽम्बुधारायामृषभो भगवत्कला।**

**भविता येन संराद्धां त्रिलोकीं भोक्ष्यतेऽद्भुतः ॥ २० ॥**

**पदार्थ–**
**आयुष्मतः** = आयुष्मान् र
**अम्बुधारायां** = अम्बुधारामा
**ऋषभः** = ऋषभ नामको
**भगवत्कला** = भगवान्को कलावतार
**भविता** = हुनेछ
**अद्भुतः** = अद्भुत नामका इन्द्रले
**येन** = जसद्वारा
**संराद्धां** = दिइएको
**त्रिलोकीं** = तीन लोकलाई
**भोक्ष्यते** = भोग गर्नेछन्

**वाक्यार्थ–** आयुष्मान्की पत्नी अम्बुधाराको गर्भबाट भगवान्ले ऋषभ नामको कलावतार धारण गर्नुहुनेछ। अद्भुत नामका इन्द्रले उहाँले नै दिएको तीन लोकको राज्य भोग्नेछन्।

**दशमो ब्रह्मसावर्णिरुपश्लोकसुतो महान्।**

**तत्सुता भूरिषेणाद्या हविष्मत्प्रमुखा द्विजाः ॥ २१ ॥**

**पदार्थ–**
**उपश्लोकसुतः** = उपश्लोकका छोरा
**महान्** = धेरै गुणले युक्त
**ब्रह्मसावर्णिः** = ब्रह्मसावर्णि नामका
**दशमः** = दसौँ मनु हुनेछन्
**भूरिषेणाद्याः** = भूरिषेण आदि
**तत्सुताः** = उहाँका छोराहरू र
**हविष्मत्प्रमुखाः** = हविष्मान् आदि
**द्विजाः** = सप्तर्षि हुनेछन्

**वाक्यार्थ–** उपश्लोकका धेरै गुणले युक्त ब्रह्मसावर्णि नामका छोरा दसौँ मनु हुनेछन्। उनका छोराहरू भूरिषेण आदि हुनेछन् भने हविष्मान् आदि सप्तर्षि हुनेछन्।

**हविष्मान् सुकृतिः सत्यो जयो मूर्तिस्तदा द्विजाः।**
**सुवासनविरुद्धाद्या देवाः शम्भुः सुरेश्वरः॥ २२॥**

**पदार्थ–**
**तदा** = त्यो बेला
**हविष्मान्** = हविष्मान्
**सुकृतिः** = सुकृति
**सत्यः** = सत्य
**जयः** = जय
**मूर्तिः** = मूर्ति नामका
**द्विजाः** = सप्तर्षि हुनेछन्
**सुवासनविरुद्धाद्याः** = सुवासन, विरुद्ध आदि
**देवाः** = देवताहरू र
**शम्भुः** = शम्भु नामका
**सुरेश्वरः** = इन्द्र हुनेछन्

**वाक्यार्थ–** त्यस मन्वन्तरमा हविष्मान्, सुकृति, सत्य, जय र मूर्ति आदि सप्तर्षि हुनेछन्। सुवासन, विरुद्ध आदि देवताहरू र शम्भु नामका इन्द्र हुनेछन्।

**विष्वक्सेनो विषूच्यां तु शम्भोः सख्यं करिष्यति।**
**जातः स्वांशेन भगवान् गृहे विश्वसृजो विभुः॥ २३॥**

**पदार्थ–**
**विश्वसृजः** = विश्वसृज्को
**गृहे** = घरमा
**विषूच्यां** = पत्नी विषूचीमा
**स्वांशेन** = आफ्नो अंशद्वारा
**जातः** = जन्मेका
**विभुः** = सर्वसमर्थ
**भगवान्** = भगवान्
**विष्वक्सेनः तु** = विष्वक्सेनले
**शम्भोः** = शम्भु नामका इन्द्रसँग
**सख्यं** = मित्रता
**करिष्यति** = गर्नुहुनेछ

**वाक्यार्थ–** विश्वसृज्को घरमा उनकी पत्नी विषूचीबाट भगवान्ले विष्वक्सेन नामको अंशावतार लिनुहुनेछ र शम्भु नामका इन्द्रसँग मित्रता गर्नुहुनेछ।

**मनुर्वै धर्मसावर्णिरेकादशम आत्मवान्।**
**अनागतास्तत्सुताश्च सत्यधर्मादयो दश॥ २४॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**आत्मवान्** = अत्यन्त संयमी
**धर्मसावर्णिः** = धर्मसावर्णि नामका
**एकादशमः** = एघारौँ
**मनुः** = मनु हुनेछन्
**अनागताः** = पछि जन्मिने
**सत्यधर्मादयः** = सत्य, धर्म आदि
**दश च** = दश जना
**तत्सुताः** = उनका छोरा हुनेछन्

**वाक्यार्थ–** अत्यन्त संयमी धर्मसावर्णि नामका एघारौँ मनु हुनेछन्। उनका सत्य, धर्म आदि दश जना छोराहरू हुनेछन्।

**विहङ्गमाः कामगमा निर्वाणरुचयः सुराः।**
**इन्द्रश्च वैधृतस्तेषामृषयश्चारुणादयः॥ २५॥**

**पदार्थ–**
**विहङ्गमाः** = विहङ्गम
**कामगमाः** = कामगम
**निर्वाणरुचयः** = निर्वाणरुचि
आदि
**सुराः** = देवता हुनेछन्
**तेषां** = तिनीहरूमध्ये
**वैधृतः च** = वैधृत नामका
**इन्द्रः** = इन्द्र अनि
**अरुणादयः च** = अरुण आदि
**ऋषयः** = ऋषिहरू हुनेछन्

**वाक्यार्थ–** विहङ्गम, कामगम, निर्वाणरुचि आदि देवताहरू हुनेछन्। तीमध्ये वैधृत नामका इन्द्र र अरुण आदि सप्तर्षिहरू हुनेछन्।

**आर्यकस्य सुतस्तत्र धर्मसेतुरिति स्मृतः।**
**वैधृतायां हरेरंशस्त्रिलोकीं धारयिष्यति॥ २६॥**

**पदार्थ–**
**तत्र** = त्यो मन्वन्तरमा
**आर्यकस्य** = आर्यक र
**वैधृतायां** = वैधृताका
**सुतः** = छोरा
**धर्मसेतुः इति** = धर्मसेतु नामले
**स्मृतः** = बताइने
**हरेः** = भगवान् श्रीहरिको
**अंशः** = अंशले
**त्रिलोकीं** = तीनै लोकलाई
**धारयिष्यति** = रक्षा गर्नेछ

**वाक्यार्थ–** त्यस मन्वन्तरमा आर्यककी पत्नी वैधृताको गर्भबाट भगवान् श्रीहरिले धर्मसेतु नामको अंशावतार धारण गर्नुहुनेछ र तीनै लोकको रक्षा गर्नुहुनेछ।

**भविता रुद्रसावर्णी राजन् द्वादशमो मनुः।**
**देववानुपदेवश्च देवश्रेष्ठादयः सुताः॥ २७॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**रुद्रसावर्णिः** = रुद्रसावर्णि नामका
**द्वादशमः** = बाह्रौँ
**मनुः** = मनु
**भविता** = हुनेछन्
**देववान्** = देववान् र
**उपदेवः** = उपदेव
**देवश्रेष्ठादयः च** = देवश्रेष्ठ आदि
**सुताः** = उनका छोरा हुनेछन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! बाह्रौँ मनुको नाम रुद्रसावर्णि हुनेछ। उनका देववान्, उपदेव र देवश्रेष्ठ आदि छोराहरू हुनेछन्।

**ऋतधामा च तत्रेन्द्रो देवाश्च हरितादयः।**
**ऋषयश्च तपोमूर्तिस्तपस्व्याग्नीध्रकादयः॥ २८॥**

**पदार्थ—**
**तत्र** = त्यहाँ
**हरितादयः च** = हरित आदि
**देवाः** = देवताहरू र
**ऋतधामाः च** = ऋतधामा नामका
**इन्द्रः च** = इन्द्र हुनेछन्
**तपोमूर्तिः** = तपोमूर्ति
**तपस्वी** = तपस्वी र
**आग्नीध्रकादयः** = आग्नीध्रक आदि
**ऋषयः** = सप्तर्षि हुनेछन्

**वाक्यार्थ—** त्यस मन्वन्तरमा हरित आदि देवताहरू र ऋतधामा नामका इन्द्र हुनेछन्। त्यसै गरी तपोमूर्ति, तपस्वी र आग्नीध्रक आदि सप्तर्षि हुनेछन्।

**स्वधामाख्यो हरेरंशः साधयिष्यति तन्मनोः।**
**अन्तरं सत्यसहसः सूनृतायाः सुतो विभुः॥ २९॥**

**पदार्थ—**
**सत्यसहसः** = सत्यसहा र
**सूनृतायाः** = सूनृताका
**सुतः** = छोरा
**स्वधामाख्यः** = स्वधाम नामको
**हरेः** = श्रीहरिको
**अंशः** = अंशावतार हुनेछ र
**विभुः** = सर्वसमर्थ उहाँले नै
**तन्मनोः अन्तरं** = त्यस मन्वन्तरलाई
**साधयिष्यति** = रक्षा गर्नुहुनेछ

**वाक्यार्थ—** सत्यसहाकी पत्नी सूनृताको गर्भबाट भगवान्ले स्वधाम नामको अंशावतार धारण गर्नुहुनेछ र त्यस मन्वन्तरको रक्षा गर्नुहुनेछ।

**मनुस्त्रयोदशो भाव्यो देवसावर्णिरात्मवान्।**
**चित्रसेनविचित्राद्या देवसावर्णिदेहजाः॥ ३०॥**

**पदार्थ—**
**आत्मवान्** = जितेन्द्रिय
**देवसावर्णिः** = देवसावर्णि
**त्रयोदशः** = तेह्रौं
**मनुः** = मनु
**भाव्यः** = हुनेछन्
**चित्रसेनविचित्राद्याः** = चित्रसेन र विचित्र आदि
**देवसावर्णिदेहजाः** = देवसावर्णिका छोराहरू हुनेछन्

**वाक्यार्थ—** जितेन्द्रिय देवसावर्णि तेह्रौं मनु हुनेछन्। उनका चित्रसेन, विचित्र आदि छोराहरू हुनेछन्।

**देवाः सुकर्मसुत्रामसंज्ञा इन्द्रो दिवस्पतिः।**
**निर्मोकतत्त्वदर्शाद्या भविष्यन्त्यृषयस्तदा॥ ३१॥**

**पदार्थ—**
**तदा** = त्यो वेला
**सुकर्मसुत्रामसंज्ञाः** = सुकर्म, सुत्राम आदि नामका
**देवाः** = देवताहरू र
**दिवस्पतिः** = दिवस्पति नामका
**इन्द्रः** = इन्द्र अनि
**निर्मोकतत्त्वदर्शाद्याः** = निर्मोक र तत्त्वदर्श आदि
**ऋषयः** = ऋषिहरू
**भविष्यन्ति** = हुनेछन्

**वाक्यार्थ—** त्यस मन्वन्तरमा सुकर्म, सुत्राम आदि देवताहरू, दिवस्पति नामका इन्द्र अनि निर्मोक

र तत्त्वदर्श आदि नामका सप्तर्षि हुनेछन्।

**देवहोत्रस्य तनय उपहर्ता दिवस्पतेः।**

**योगेश्वरो हरेरंशो बृहत्यां सम्भविष्यति॥ ३२॥**

**पदार्थ—**
**हरेः** = श्रीहरिको
**अंशः** = अंशावतार
**योगेश्वरः** = योगेश्वर नामले
**बृहत्यां** = बृहतीमा
**देवहोत्रस्य** = देवहोत्रको
**तनयः** = छोरो भई
**सम्भविष्यति** = उत्पन्न हुनुहुनेछ
अनि
**दिवस्पतेः** = दिवस्पतिलाई
**उपहर्ता** = इन्द्रपद दिलाइदिनुहुनेछ

**वाक्यार्थ—** देवहोत्रकी पत्नी बृहतीको गर्भबाट भगवान्ले उनीहरूको छोराको रूपमा योगेश्वरनामक अंशावतार धारण गर्नुहुनेछ र उहाँले दिवस्पतिलाई इन्द्रपद दिलाइदिनुहुनेछ।

**मनुर्वा इन्द्रसावर्णिश्चतुर्दशम एष्यति।**

**उरुगम्भीरबुद्ध्याद्या इन्द्रसावर्णिवीर्यजाः॥ ३३॥**

**पदार्थ—**
**वै** = निश्चय नै
**इन्द्रसावर्णिः** = इन्द्रसावर्णि
**चतुर्दशमः** = चौधौँ
**मनुः** = मनु
**एष्यति** = हुनेछन्
**इन्द्रसावर्णिवीर्यजाः** = इन्द्रसावर्णिका छोराहरू
**उरुगम्भीरबुद्ध्याद्याः** = उरु, गम्भीर र बुद्धि आदि हुनेछन्

**वाक्यार्थ—** इन्द्रसावर्णि चौधौँ मनु हुनेछन्। उनका उरु, गम्भीर र बुद्धि आदि छोराहरू हुनेछन्।

**पवित्राश्चाक्षुषा देवाः शुचिरिन्द्रो भविष्यति।**

**अग्निर्बाहुः शुचिः शुद्धो मागधाद्यास्तपस्विनः॥ ३४॥**

**पदार्थ—**
**पवित्राः** = पवित्र र
**चाक्षुषाः** = चाक्षुष आदि
**देवाः** = देवताहरू
**शुचिः** = शुचि नामक
**इन्द्रः** = इन्द्र
**भविष्यति** = हुनेछन्
**अग्निः** = अग्नि
**बाहुः** = बाहु
**शुचिः** = शुचि
**शुद्धः** = शुद्ध र
**मागधाद्याः** = मागध आदि
**तपस्विनः** = सप्तर्षि हुनेछन्

**वाक्यार्थ—** त्यस वेला पवित्र र चाक्षुष आदि देवताहरू, शुचि नामका इन्द्र र अग्नि, बाहु, शुचि, शुद्ध र मागध आदि सप्तर्षि हुनेछन्।

**सत्रायणस्य तनयो बृहद्भानुस्तदा हरिः।**

**वितानायां महाराज क्रियातन्तून् वितायिता॥ ३५॥**

**पदार्थ—**
**महाराज** = हे महाराज परीक्षित्
**तदा** = त्यो मन्वन्तरमा

**वितानायां** = वितानाको गर्भमा
**सत्रायणस्य** = सत्रायणका
**तनयः** = छोरा
**बृहद्भानुः** = बृहद्भानु नामका
**हरिः** = भगवान् श्रीहरिले
**क्रियातन्तून्** = कर्मकाण्डलाई
**वितायिता** = विस्तार गर्नुहुनेछ

**वाक्यार्थ–** हे महाराज परीक्षित् ! त्यस मन्वन्तरमा सत्रायणकी पत्नी वितानाको गर्भबाट भगवान्ले बृहद्भानु नामको अवतार धारण गर्नुहुनेछ र कर्मकाण्डको विस्तार गर्नुहुनेछ।

**राजंश्चतुर्दशैतानि त्रिकालानुगतानि ते।**
**प्रोक्तान्येभिर्मितः कल्पो युगसाहस्रपर्ययः॥ ३६॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**ते** = तपाईंलाई
**त्रिकालानुगतानि** = तीनै कालमा चलिरहने
**एतानि** = यी
**चतुर्दश** = चौध मन्वन्तर
**प्रोक्तानि** = बताएँ
**एभिः** = यी चौध मन्वन्तरहरूद्वारा
**युगसाहस्रपर्ययः** = एकहजार चतुर्युग बराबरको
**कल्पः** = कल्प
**मितः** = नापिन्छ

**वाक्यार्थ–** हे राजा परीक्षित् ! तपाईंलाई मैले तीनै कालमा चलिरहने यी चौध मन्वन्तरको बारेमा बताएँ। यी मन्वन्तरहरूद्वारा नै एकहजार चतुर्युग बराबर एक कल्प हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**
**मन्वन्तरानुवर्णनं नाम त्रयोदशोऽध्यायः॥ १३॥**

# अथ चतुर्दशोऽध्यायः

## विभिन्न मनुद्वारा धर्मको पालन र प्रजारक्षण

**श्रीराजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**मन्वन्तरेषु भगवन् यथा मन्वादयस्त्विमे ।**

**यस्मिन् कर्मणि ये येन नियुक्तास्तद्वदस्व मे ॥ १ ॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**इमे** = यी पूर्ववर्णित
**मन्वादयः** = मनु आदिहरू
**मन्वन्तरेषु** = आ-आफ्नो
मन्वन्तरमा
**यस्मिन्** = जुन
**कर्मणि** = काममा
**येन** = जसद्वारा
**यथा** = जसरी
**ये** = जो
**नियुक्ताः** = नियुक्त हुन्छन्
**तत्** = त्यो कुरा
**मे** = मलाई
**वदस्व** = बताउनुहोस्

**वाक्यार्थ–** हे भगवान् ! अघिल्लो अध्यायमा वर्णित मनु, मनुपुत्र, सप्तर्षि आदि आ-आफ्नो मन्वन्तरमा कसद्वारा नियुक्त हुन्छन् र उनीहरूले के-कस्ता कामहरू कसरी गर्दछन् ? यो कुरा मलाई बताउनुहोस् ।

**श्रीऋषिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**मनवो मनुपुत्राश्च मुनयश्च महीपते ।**

**इन्द्राः सुरगणाश्चैव सर्वे पुरुषशासनाः ॥ २ ॥**

**पदार्थ–**
**महीपते** = हे राजा
**मनवः** = मनुहरू
**मनुपुत्राः** = मनुपुत्रहरू
**मुनयः** = सप्तर्षिहरू र
**इन्द्राः च** = इन्द्रहरू
**सुरगणाः च** = देवगणहरू पनि
**सर्वे** = यी सबै
**पुरुषशासनाः एव** = भगवान्द्वारा नियुक्त भई तत्तत् कर्म गर्दछन्

**वाक्यार्थ–** हे राजा ! मनु, मनुपुत्र, सप्तर्षि, इन्द्र र सम्पूर्ण देवगणहरू भगवान्द्वारा तत्तत् कर्ममा नियुक्त भई आ-आफ्नो कर्म गर्दछन्।

**यज्ञादयो याः कथिताः पौरुष्यस्तनवो नृप ।**

**मन्वादयो जगद्यात्रां नयन्त्याभिः प्रचोदिताः ॥ ३ ॥**

**पदार्थ–**
**नृप** = हे राजा
**यज्ञादयः** = यज्ञहरू
**याः** = जुन
**पौरुष्यः** = भगवान्का
**तनवः** = अवतारमूर्तिहरू हुन्

भनी
**कथिताः** = बताइयो
**आभिः** = तिनै यज्ञमूर्तिद्वारा
**प्रचोदिताः** = प्रेरित भई
**मन्वादयः** = मनु आदिले
**जगद्यात्रां** = जगत्‌को व्यवस्था
**नयन्ति** = सञ्चालन गर्दछन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सम्पूर्ण यज्ञहरू भगवान्‌कै अवतारमूर्ति हुन्। भगवान्‌का तिनै अवतारहरूको प्रेरणा पाएर मनु आदिले लोकको व्यवस्था र सञ्चालन गर्दछन्।

**चतुर्युगान्ते कालेन ग्रस्ताञ्छ्रुतिगणान् यथा ।**
**तपसा ऋषयोऽपश्यन् यतो धर्मः सनातनः ॥ ४ ॥**

**पदार्थ–**
**कालेन** = समयको लामो अन्तरालपछि
**ग्रस्तान्** = नष्ट भएका
**श्रुतिगणान्** = वेदराशिहरूलाई
**चतुर्युगान्ते** = चतुर्युगको अन्त्यमा
**ऋषयः** = ऋषिहरूले
**तपसा** = तपोबलद्वारा
**यथा** = यथावत्
**अपश्यन्** = साक्षात्कार गर्दछन्
**यतः** = जुन वेदहरूद्वारा
**सनातनः** = सनातन
**धर्मः** = धर्म (प्रवर्तित हुन्छ)

**वाक्यार्थ–** समयको लामो अन्तरालपछि नष्ट भएका वेदहरूलाई चतुर्युगको अन्तकालमा ऋषिहरूले आफ्नो तपोबलद्वारा साक्षात्कार गर्दछन् र तिनै वेदद्वारा सनातन धर्मको प्रवर्तन हुन्छ।

**ततो धर्मं चतुष्पादं मनवो हरिणोदिताः ।**
**युक्ताः सञ्चारयन्त्यद्धा स्वे स्वे काले महीं नृप ॥ ५ ॥**

**पदार्थ–**
**नृप** = हे राजा
**ततः** = त्यसपछि
**हरिणा** = भगवान् श्रीहरिद्वारा
**उदिताः** = प्रेरित
**मनवः** = मनुहरूले
**युक्ताः** = संयमित भएर
**स्वे स्वे काले** = आ-आफ्नो मन्वन्तरमा
**चतुष्पादं** = चार पाउ भएको
**धर्मं** = वैदिक धर्मलाई
**अद्धा** = साक्षात्
**महीं** = पृथिवीमा
**सञ्चारयन्ति** = सञ्चार गर्दछन्

**वाक्यार्थ–** हे राजा ! मनुहरूले भगवान् श्रीहरिको प्रेरणा पाई संयमित भएर आ-आफ्नो मन्वन्तरमा पृथिवीमा चार पाउले युक्त वैदिक धर्मको सञ्चार गर्दछन्।

**विवरण–** यहाँ मनुहरूले चार पाउले युक्त धर्मको सञ्चार गर्ने कुरा बताइएको छ। युगहरू सत्य, त्रेता, द्वापर र कलि गरी चार ओटा छन्। धर्मका पाउहरू पनि तपस्या, शौच, दया र सत्य गरी चार नै छन्। अधर्मका पनि चार पाउ छन्– स्मय, सङ्ग, मद र अनृत। सत्य युगमा धर्मका चार पाउहरू पूर्ण अंशमा रहेका हुन्छन्। यसमा अधर्मको अलिकति पनि प्रवेश हुँदैन। त्रेतायुगमा अधर्मका पाउहरूद्वारा धर्मका पाउहरूको चौथाइ अंश वा चार भागको एक भाग नष्ट हुन्छ। स्मय भनेको बुद्धि मोहित हुनु हो, यसबाट तपस्याको चौथाइ भाग नष्ट हुन्छ। सङ्ग भनेको स्त्री आदिप्रति आसक्त हुनु हो, यसबाट शौच या शुद्धताको चौथाइ भाग नष्ट हुन्छ। मद भनेको घमन्ड

हो, यसबाट दयाको चौथाइ भाग नष्ट हुन्छ। अनृत भनेको असत्य हो, यसबाट सत्यको चौथाइ भाग नष्ट हुन्छ। यसै गरी द्वापरको प्रारम्भमा आइपुग्दा अधर्मका अंशहरूद्वारा धर्मका प्रत्येक पाउहरू आधा-आधा क्षीण हुन्छन्। कलिको सुरुवातमा त चार भागको एक भाग मात्र बाँकी रहन्छन्। त्यो एक अंश पनि कलिको प्रभाव बढ्दै गएपछि क्षीण हुन लाग्छ। यसरी हरेक चतुर्युगको अन्त्यमा वेद र तत्प्रतिपाद्य सनातन धर्म क्षीण हुँदै जाने र अर्को चतुर्युगको आदिमा वेद र सनातन धर्मको पुनरुद्धार गरिने व्यवस्थाको सङ्केत यहाँ गरिएको छ।

**पालयन्ति प्रजापाला यावदन्तं विभागशः।**
**यज्ञभागभुजो देवा ये च तत्रान्विताश्च तैः॥ ६॥**

**पदार्थ—**
**विभागशः** = पुत्रपौत्रादि क्रमले **प्रजापालाः** = प्रजाहरूको पालन गर्ने मनुपुत्रहरूले (जुन मन्वन्तरमा) **यज्ञभागभुजः** = यज्ञको भाग स्वीकार गर्ने **देवाः** = देवताहरू **ये च** = जुन अरू ऋषि आदि पनि **अन्विताः** = भोक्तारूपले सम्बन्धित थिए **तत्र** = त्यो मन्वन्तरमा **तैः च** = तिनीहरूसँग सम्बन्धित भई **यावदन्तं** = आ-आफ्नो मन्वन्तरको समाप्तिसम्म **पालयन्ति** = प्रजा र धर्मको पालन गर्दछन्

**वाक्यार्थ—** भोक्तारूपले यज्ञको भाग स्वीकार गर्ने देवताले ऋषि, पितृ, मनुष्य आदिसँग सम्बन्धित भई तत्तत् मन्वन्तरमा पुत्रपौत्रादि क्रमले प्रजाहरूको पालन गर्ने मनुपुत्रहरूले आ-आफूलाई दिएको यज्ञभाग स्वीकार गर्दछन् अनि मनुपुत्रहरूले पनि आ-आफ्नो मन्वन्तरको समाप्तिसम्म प्रजा र धर्मको पालन गर्दछन्।

**इन्द्रो भगवता दत्तां त्रैलोक्यश्रियमूर्जिताम्।**
**भुञ्जानः पाति लोकांस्त्रीन् कामं लोके प्रवर्षति॥ ७॥**

**पदार्थ—**
**भगवता** = भगवान्द्वारा **दत्तां** = दिइएको **ऊर्जिताम्** = विशाल **त्रैलोक्यश्रियम्** = तीनै लोकको सम्पत्तिलाई **भुञ्जानः** = भोग गर्दै **इन्द्रः** = इन्द्रले **त्रीन् लोकान्** = तीन लोकलाई **पाति** = पालन गर्दछन् **लोके** = लोकमा **कामं** = यथेष्ट **प्रवर्षति** = जलको वृष्टि गराउँछन्

**वाक्यार्थ—** भगवान् नारायणले दिएको तीनै लोकको विशाल सम्पत्तिहरूको भोग गर्दै देवराज इन्द्रले स्वर्ग, मर्त्य र पातालको पालन गर्दछन्। त्यसका लागि इन्द्रले समय-समयमा आवश्यकता अनुसार जलको वृष्टि गराउँछन्।

**ज्ञानं चानुयुगं ब्रूते हरिः सिद्धस्वरूपधृक् ।**
**ऋषिरूपधरः कर्म योगं योगेशरूपधृक् ॥ ८ ॥**

**पदार्थ—**
**सिद्धस्वरूपधृक्** = सनक आदि सिद्धहरूको स्वरूप धारण गरेर
**हरिः** = भगवान् श्रीहरिले नै
**अनुयुगं** = प्रत्येक युगमा
**ज्ञानं** = ज्ञानको
**ऋषिरूपधरः** = याज्ञवल्क्य आदि ऋषिहरूको स्वरूप धारण गरी
**कर्म** = कर्मको र
**योगेशरूपधृक्** = दत्तात्रेय आदि योगेश्वरको रूप धारण गरेर
**योगं च** = योगको
**ब्रूते** = उपदेश गर्नुहुन्छ

**वाक्यार्थ—** प्रत्येक युगमा भगवान् नारायणले नै सनक आदि सिद्धहरूको रूप धारण गरी ज्ञानको, याज्ञवल्क्य आदि ऋषिहरूको रूप धारण गरी कर्मको र दत्तात्रेय आदि योगेश्वरको रूप धारण गरी योगको उपदेश गर्नुहुन्छ।

**सर्गं प्रजेशरूपेण दस्यून् हन्यात् स्वराड्वपुः ।**
**कालरूपेण सर्वेषामभावाय पृथग्गुणः ॥ ९ ॥**

**पदार्थ—**
**पृथग्गुणः** = भिन्न-भिन्न सर्गअनुरूप रज आदि गुणलाई लिएका भगवान् नारायण
**प्रजेशरूपेण** = मरीचि आदिको रूपद्वारा
**सर्गं** = सृष्टि गर्नुहुन्छ
**स्वराड्वपुः** = राजाको रूप धारण गरी
**दस्यून्** = चोरहरूलाई
**हन्यात्** = मार्नुहुन्छ
**सर्वेषां** = सबै पदार्थहरूको
**अभावाय** = विनाशका लागि
**कालरूपेण** = कालको रूप धारण गरेर रहनुहुन्छ

**वाक्यार्थ—** भगवान् नारायणले सर्गअनुरूप रज आदि गुणहरूलाई स्वीकार गरेर मरीचि आदि प्रजापतिहरूको रूप धारण गरी प्रजासृष्टि गर्नुहुन्छ। राजाको रूप धारण गरी चोरहरूलाई नष्ट गर्नुहुन्छ र कालको रूप धारण गरी सम्पूर्ण पदार्थहरूको विनाश गर्नुहुन्छ।

**स्तूयमानो जनैरेभिर्मायया नामरूपया ।**
**विमोहितात्मभिर्नाना दर्शनैर्न च दृश्यते ॥ १० ॥**

**पदार्थ—**
**नामरूपया** = नामरूपात्मिका
**मायया** = मायाका कारण
**विमोहितात्मभिः** = बुद्धि भ्रान्त भएका
**एभिः** = शास्त्रज्ञका रूपमा प्रसिद्ध यी
**जनैः** = मनुष्यहरूद्वारा
**नानादर्शनैः** = विभिन्न दर्शन र शास्त्रहरूद्वारा
**स्तूयमानः** = स्तुति (निरूपण) गरिएका भगवान्
**न च दृश्यते** = देखिनुहुन्न

**वाक्यार्थ—** नामरूपात्मिका मायाद्वारा बुद्धि भ्रान्त भएका शास्त्रज्ञ व्यक्तिहरूले पनि विभिन्न दर्शन र शास्त्रहरूद्वारा निरूपित भगवान्को वास्तविक स्वरूपलाई देख्न (जान्न) सक्दैनन्।

**एतत्कल्पविकल्पस्य प्रमाणं परिकीर्तितम्।**
**यत्र मन्वन्तराण्याहुश्चतुर्दश पुराविदः॥ ११॥**

**पदार्थ–**
**कल्पविकल्पस्य** = कल्प र अवान्तर कल्पको
**एतत्** = यो
**प्रमाणं** = परिमाण
**परिकीर्तितम्** = बताइयो
**यत्र** = जुन अवान्तर कल्पमा
**चतुर्दश** = चौध
**मन्वन्तराणि** = मन्वन्तरहरू हुन्छन् भनी
**पुराविदः** = पुराणज्ञ विद्वान्हरू
**आहुः** = बताउँछन्

**वाक्यार्थ–** हे राजा! मैले तपाईंलाई कल्प र अवान्तरकल्पको परिमाण बताएँ। पुराणज्ञ विद्वान्हरू प्रत्येक अवान्तर कल्पमा चौध ओटा मन्वन्तरहरू हुन्छन् भनेर बताउँछन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहिताया-**
**मष्टमस्कन्धे चतुर्दशोऽध्यायः॥ १४॥**

# अथ पञ्चदशोऽध्यायः

## राजा बलिद्वारा स्वर्गमाथि विजय

**श्रीराजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**बलेः पदत्रयं भूमेः कस्माद्धरिरयाचत ।**

**भूत्वेश्वरः कृपणवल्लब्धार्थोऽपि बबन्ध तम् ॥ १ ॥**

**पदार्थ–**
**हरिः** = भगवान् नारायण
**ईश्वरः** = ईश्वर
**भूत्वा** = भएर
**कृपणवत्** = दीनहीन झैँ
**बलेः** = महाराज बलिबाट
**भूमेः पदत्रयं** = तीन पाइला जमिन (तीन पाइला राख्न पुग्ने जमिन)
**कस्मात्** = के कारणले
**अयाचत** = माग्नुभयो
**लब्धार्थः अपि** = तीनै लोक पाएर पनि (किन)
**तम्** = ती बलिलाई
**बबन्ध** = बाँध्नुभयो

**वाक्यार्थ–** भगवान् नारायण साक्षात् ईश्वर भएर पनि एउटा दीनहीन व्यक्तिले झैँ उहाँले महाराज बलिसँग तीन पाइला जमिन किन माग्नुभयो ? फेरि तीनै लोक पाएर पनि उहाँले बलिलाई किन बाँध्नुभयो ?

**एतद् वेदितुमिच्छामो महत्कौतूहलं हि नः ।**

**यज्ञेश्वरस्य पूर्णस्य बन्धनं चाप्यनागसः ॥ २ ॥**

**पदार्थ–**
**यज्ञेश्वरस्य** = यज्ञफलदाता
**पूर्णस्य** = स्वयंमा पूर्ण भगवान् नारायणले गरेको
**अनागसः** = निरपराध बलिको
**बन्धनं** = बन्धन
**अपि च** = अनि दीनहीन झैँ याचना
**एतत्** = यी कुरा
**वेदितुम्** = जान्न
**इच्छामः** = इच्छा गर्दछु
**हि** = किनभने
**नः** = मलाई (भगवान्को त्यो कर्म देखेर)
**महत्** = अत्यन्त
**कौतूहलं** = आश्चर्य लागेको छ

**वाक्यार्थ–** यज्ञफलदाता स्वयं परिपूर्ण भगवान् नारायणले निरपराध बलिको बन्धन र उनीसँग दीनहीन झैँ भई भूमिको याचना किन गर्नुभयो ? यी दुई कुराले मलाई अत्यन्त आश्चर्यचकित बनाएको छ। अतः यस विषयमा म सबै कुरा जान्न चाहन्छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**पराजितश्रीरसुभिश्च हापितो हीन्द्रेण राजन् भृगुभिः स जीवितः ।**

**सर्वात्मना तानभजद् भृगून् बलिः शिष्यो महात्मार्थनिवेदनेन ॥ ३ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**इन्द्रेण** = इन्द्रद्वारा
**असुभिः च** = प्राण पनि
**हापितः** = खोसिएका
**पराजितश्रीः** = सम्पत्ति हारेका
**हि** = त्यसपछि
**भृगुभिः** = भृगुवंशी शुक्राचार्यद्वारा
**जीवितः** = सञ्जीवनी विद्याको प्रयोग गरी पुनः जीवित भएका
**महात्मा** = उदार मन भएका
**शिष्यः** = शुक्राचार्यका चेला
**सः बलिः** = ती बलिले
**सर्वात्मना** = पूर्ण समर्पित भएर
**अर्थनिवेदनेन** = गुरुलाई चाहिएका पदार्थहरू समर्पण गरी
**तान्** = ती गुरु
**भृगून्** = भृगुवंशी शुक्राचार्यलाई
**अभजत्** = सेवा गर्न लागे

**वाक्यार्थ—** हे राजा परीक्षित् ! इन्द्रले युद्धमा बलिलाई जितेर उनको सम्पत्ति पनि खोसे र बलिको प्राण पनि लिए। त्यसपछि भृगुवंशी दैत्यगुरु शुक्राचार्यले आफ्नो सञ्जीवनी विद्याद्वारा शिष्य बलिलाई पुनः जीवित गराए। आफू पुनर्जीवित भएपछि उदार मन भएका बलिले पूर्णरूपमा समर्पित भएर गुरुलाई चाहिएका पदार्थहरू समर्पण गरी शुक्राचार्यको सेवा गर्न लागे।

**तं ब्राह्मणा भृगवः प्रीयमाणा अयाजयन् विश्वजिता त्रिणाकम्।**
**जिगीषमाणं विधिनाभिषिच्य महाभिषेकेण महानुभावाः॥ ४॥**

**पदार्थ—**
**प्रीयमाणाः** = सेवाबाट प्रसन्न भएका
**महानुभावाः** = अति प्रभावशाली
**भृगवः** = भृगुवंशी
**ब्राह्मणाः** = शुक्राचार्य आदि ब्राह्मणहरूले
**त्रिणाकम्** = स्वर्गलाई
**जिगीषमाणं** = जित्न चाहने
**तं** = ती बलिलाई
**महाभिषेकेण** = महाभिषेकको
**विधिना** = विधिद्वारा
**अभिषिच्य** = अभिषेक गरेर
**विश्वजिता** = विश्वजित् नामक
**अयाजयन्** = यज्ञ गर्न लगाए

**वाक्यार्थ—** बलिको सेवाबाट प्रसन्न भएका प्रभावशाली भृगुवंशी शुक्राचार्य आदि ब्राह्मणहरूले स्वर्गलाई जित्न चाहने बलिलाई महाभिषेक विधिद्वारा अभिषेक गरेर विश्वजित् नामको यज्ञ गर्न लगाए।

**ततो रथः काञ्चनपट्टनद्धो हयाश्च हर्यश्वतुरङ्गवर्णाः।**
**ध्वजश्च सिंहेन विराजमानो हुताशनादास हविर्भिरिष्टात्॥ ५॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**हविर्भिः** = हविहरूद्वारा
**इष्टात्** = पूजित
**हुताशनात्** = अग्निबाट
**काञ्चनपट्टनद्धः** = सुनको वस्त्रले ढाकिएको
**रथः** = दिव्य रथ
**हर्यश्वतुरङ्गवर्णाः** = इन्द्रको घोडा जस्तै हरियो वर्ण भएका
**हयाः च** = घोडाहरू पनि (निस्किए)
**सिंहेन** = सिंहको चिह्नले
**विराजमानः** = युक्त भएको
**ध्वजः च** = ध्वजा पनि
**आस** = निस्किएको थियो

**वाक्यार्थ—** बलिले यज्ञ गर्न थालेपछि हविहरूद्वारा पूजित यज्ञाग्निबाट सुनको वस्त्रले ढाकिएको

एउटा दिव्य रथ, इन्द्रको घोडा जस्तैँ हरियो रङ्ग भएका घोडाहरू र सिंहको चिह्नले युक्त भएको ध्वजा निस्किए।

**धनुश्च दिव्यं पुरटोपनद्धं तूणावरिक्तौ कवचं च दिव्यम्।**

**पितामहस्तस्य ददौ च मालामम्लानपुष्पां जलजं च शुक्रः॥ ६॥**

| पदार्थ– | **दिव्यं** = अलौकिक | **तस्य** = ती बलिलाई |
|---|---|---|
| **पुरटोपनद्धं** = सुनले मोडिएको | **कवचं च** = कवच पनि निस्किए | **ददौ** = दिनुभयो |
| **दिव्यम्** = दिव्य | **पितामहः च** = हजुरबा प्रह्लादले | **शुक्रः च** = शुक्राचार्यले चाहिँ |
| **धनुः च** = धनु | **अम्लानपुष्पां** = कहिल्यै | **जलजम्** = शङ्ख (दिनुभयो) |
| **अरिक्तौ** = कहिल्यै खाली नहुने | नओइलाउने फूल भएको | |
| **तूणौ** = दुई ओटा ठोक्रा | **मालां** = माला | |

**वाक्यार्थ–** त्यही यज्ञाग्निबाट सुनले मोडिएको दिव्य धनु, कहिल्यै पनि खाली नहुने बाण राख्ने दुई ओटा ठोक्रा र दिव्य कवच निस्किए। बलिलाई उनका हजुरबा प्रह्लादले कहिल्यै पनि नओइलाउने फूल भएको माला दिए भने शुक्राचार्यले एउटा शङ्ख दिए।

**एवं स विप्रार्जितयोधनार्थस्तैः कल्पितस्वस्त्ययनोऽथ विप्रान्।**

**प्रदक्षिणीकृत्य कृतप्रणामः प्रह्लादमामन्त्र्य नमश्चकार॥ ७॥**

| पदार्थ– | **तैः** = ती ब्राह्मणहरूबाट | **प्रदक्षिणीकृत्य** = प्रदक्षिणा गरेर |
|---|---|---|
| **एवं** = यसप्रकार | **कल्पितस्वस्त्ययनः** = | **कृतप्रणामः** = प्रणाम गर्ने बलिले |
| **विप्रार्जितयोधनार्थः** = ब्राह्मणबाट | स्वस्तिवाचन आदि प्राप्त गरे | **प्रह्लादं** = हजुरबा प्रह्लादलाई |
| युद्धसामग्री प्राप्त गरेका | **अथ** = त्यसपछि | **आमन्त्र्य** = वार्तालाप गरेर |
| **सः** = ती बलिले | **विप्रान्** = ब्राह्मणहरूलाई | **नमश्चकार** = नमस्कार गरे |

**वाक्यार्थ–** यसरी ब्राह्मणहरूबाट आवश्यक सम्पूर्ण युद्धका सामग्रीहरू प्राप्त गरेका ती बलिले ब्राह्मणहरूद्वारा प्रदत्त मङ्गलवाचनलाई पनि स्वीकार गरी उनीहरूलाई प्रदक्षिणा गरी नमस्कार गरे। त्यसपछि आफ्ना हजुरबा प्रह्लादसँग वार्तालाप गरी उनलाई पनि नमस्कार गरे।

**अथारुह्य रथं दिव्यं भृगुदत्तं महारथः।**

**सुस्रग्धरोऽथ सन्नह्य धन्वी खड्गी धृतेषुधिः॥ ८॥**

**हेमाङ्गदलसद्बाहुः स्फुरन्मकरकुण्डलः।**

**रराज रथमारूढो धिष्ण्यस्थ इव हव्यवाट्॥ ९॥**

| पदार्थ– | **अथ** = यसपछि | **भृगुदत्तं** = भृगुवंशी ब्राह्मण |
|---|---|---|

शुक्राचार्यद्वारा दिइएको
**दिव्यं** = अलौकिक
**रथं** = रथमा
**आरुह्य** = चढेर
**सुस्रग्धरः** = नओइलाउने सुन्दर माला लगाएका
**धन्वी** = धनु लिएका
**खड्गी** = तरबार धारण गरेका
**अथ** = त्यसै गरी
**धृतेषुधिः** = ठोक्रो बोकेका
**सन्नह्य** = शस्त्रअस्त्रहरूले सुसज्जित भई
**रथं** = रथमा
**आरूढः** = चढेका
**हेमाङ्गदलसद्‌बाहुः** = सुनको बाजु (बाहुकवच)ले बाहु शोभायमान भएका
**स्फुरन्मकरकुण्डलः** = चम्किलो मकरकुण्डल लगाएका
**महारथः** = महारथी बलि
**धिष्ण्यस्थः** = यज्ञकुण्डमा रहेको
**हव्यवाट् इव** = अग्नि झैं
**रराज** = सुशोभित भए

**वाक्यार्थ–** त्यसपछि भृगुवंशी ब्राह्मण शुक्राचार्यले यज्ञाग्निबाट निकालेर दिएको रथमा चढेका, नओइलाउने फूलको माला लगाएका, धनु, तरबार र बाणहरू राख्ने ठोक्रो धारण पनि गरेका एवं बाहुमा सुनले बनेको बाजु (बाहुकवच) र कानमा चम्किलो मकरकुण्डल लगाएका महारथी बलि रथमा चढ्दा यज्ञकुण्डको अग्नि झैं सुशोभित भए।

**तुल्यैश्वर्यबलश्रीभिः स्वयूथैर्दैत्ययूथपैः।**
**पिबद्‌भिरिव खं दृग्भिर्दहद्‌भिः परिधीनिव ॥ १० ॥**
**वृतो विकर्षन् महतीमासुरीं ध्वजिनीं विभुः।**
**ययाविन्द्रपुरीं स्वृद्धां कम्पयन्निव रोदसी ॥ ११ ॥**

**पदार्थ–**
**तुल्यैश्वर्यबलश्रीभिः** = आफूजस्तै ऐश्वर्य, बल र सम्पत्ति भएका
**खं** = आकाशलाई
**पिबद्‌भिः इव** = पिउला झैं गर्ने
**दृग्भिः** = आँखाले
**परिधीन्** = दिशाहरूलाई
**दहद्‌भिः इव** = डढाउँला झैं गर्ने
**दैत्ययूथपैः** = दैत्यसेनापति सहितका
**स्वयूथैः** = आफ्ना सेनाहरूद्वारा
**वृतः** = घेरिएका
**विभुः** = राजा बलिले
**महतीम्** = विशाल
**आसुरीं** = असुरहरूको
**ध्वजिनीं** = सेनाहरूलाई
**विकर्षन्** = सञ्चालन गर्दै
**रोदसी** = भूमि र आकाशलाई
**कम्पयन् इव** = हल्लाउँदै
**स्वृद्धां** = अतिसमृद्ध
**इन्द्रपुरीं** = इन्द्रनगरीमा
**ययौ** = (आक्रमण गर्न) गए

**वाक्यार्थ–** आफ्नो बराबर ऐश्वर्य, बल र सम्पत्ति भएका, क्रोधित आँखाहरूले चारै दिशा ढलाउला झैं र आकाशलाई पिउँला झैं गरिरहेका, असुरसेनापति र सेनाहरूले युक्त भएका राजा बलिले आफ्ना सेनाहरूको सञ्चालनद्वारा भूमि र आकाशमा कम्पन गराउँदै ऐश्वर्यहरूले सम्पन्न इन्द्रनगरीमा आक्रमण गर्न प्रस्थान गरे।

**रम्यामुपवनोद्यानैः श्रीमद्‌भिर्नन्दनादिभिः।**
**कूजद्विहङ्गमिथुनैर्गायन्मत्तमधुव्रतैः ॥ १२ ॥**

**प्रवालफलपुष्पोरुभारशाखामरद्रुमैः ।**

**पदार्थ–**
**कूजद्विहङ्गमिथुनैः** = चिरबिर गरी कराउने पक्षीका जोडीहरू र
**गायन्मत्तमधुव्रतैः** = गुन्गुनाइरहने मदमत्त भँवराहरूद्वारा युक्त
**प्रवालफलपुष्पोरुभारशाखामरद्रुमैः** = नयाँ अङ्कुर, फल, फुलको झुप्पाले झुलेका हाँगा सहितका पारिजात आदि देववृक्ष भएका
**श्रीमद्भिः** = शोभाले युक्त
**नन्दनादिभिः** = नन्दन आदि वन
**उपवनोद्यानैः** = बाटिका र बगैँचाहरूद्वारा
**रम्याम्** = रमाइलो भएको (स्वर्गमा आक्रमण गरे)

**वाक्यार्थ–** चिरबिर गरी कराउने पक्षीका जोडीहरू र गुन्गुनाइरहने मदमत्त भँवराहरू भएको, नयाँ अङ्कुर, फल, फुलको झुप्पाले झुलेका हाँगा सहितका पारिजात आदि देववृक्ष भएको र ज्यादै राम्रा नन्दन आदि वन, बाटिका र बगैँचाहरूद्वारा सुशोभित इन्द्रनगरीमा राजा बलिले आक्रमण गरे।

**हंससारसचक्राह्वकारण्डवकुलाकुलाः ॥**
**नलिन्यो यत्र क्रीडन्ति प्रमदाः सुरसेविताः ॥ १३ ॥**

**पदार्थ–**
**यत्र** = जहाँ (सरोवरमा)
**हंससारसचक्राह्वकारण्डवकुलाकुलाः** = हाँस, सारस, चखेवा, कोणेर, बकुल्ला जस्ता पक्षीहरूका समूहले व्याप्त
**नलिन्यः** = कमलहरू छन्, जहाँ
**सुरसेविताः** = देवताहरूले युक्त
**प्रमदाः** = देवाङ्गनाहरू
**क्रीडन्ति** = क्रीडा गर्दछन्

**वाक्यार्थ–** जुन सरोवरमा हाँस, सारस, चखेवा, कोणेर, बकुल्ला आदि पक्षीहरूका समूहहरूले युक्त भएका कमलका फूलहरू छन् र जहाँ देवताहरूले सहित भएका देवाङ्गनाहरू जलक्रीडा गर्दथे।

**आकाशगङ्गया देव्या वृतां परिखभूतया ।**
**प्राकारेणाग्निवर्णेन साट्टालेनोन्नतेन च ॥ १४ ॥**

**पदार्थ–**
(त्यो इन्द्रपुरी)
**परिखभूतया** = बाँध झैं भएकी
**देव्या** = पूज्य
**आकाशगङ्गया** = आकाश-गङ्गाद्वारा
**साट्टालेन** = अट्टालिकाले सहित
**अग्निवर्णेन** = अग्नि झैं चम्किलो
**उन्नतेन च** = अत्यन्त अग्ला
**प्राकारेण** = पर्खाल (दुर्ग)ले
**वृतां** = घेरिएको (थियो)

**वाक्यार्थ–** पूज्य आकाशगङ्गाले त्यो इन्द्रपुरीलाई बाँधले झैं वरिपरिबाट घेरेकी थिइन्। त्यसै गरी (सुवर्ण आदि धातुहरूद्वारा बनेको हुनाले) अग्नि झैं चम्किला अत्यन्त अग्ला दुर्गहरूद्वारा पनि त्यो इन्द्रपुरी घेरिएको थियो।

**रुक्मपट्टकपाटैश्च द्वारैः स्फटिकगोपुरैः ।**
**जुष्टां विभक्तप्रपथां विश्वकर्मविनिर्मिताम् ॥ १५ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **स्फटिकगोपुरैः** = स्फटिकमय | राजमार्ग भएको (अमरावती) |
| **रुक्मपट्टकपाटैः** = सुनका | नगरद्वारहरूले | **विश्वकर्मविनिर्मिताम्** = |
| खापाहरू लगाइएका | **जुष्टां** = युक्त | विश्वकर्माद्वारा बनाइएको थियो |
| **द्वारैः च** = द्वार तथा | **विभक्तप्रपथां** = अलग-अलग | |

**वाक्यार्थ–** सुनका खापाहरू लगाइएका द्वारहरू, स्फटिकले बनेका मुख्य द्वार एवं अलग-अलग राजमार्गहरूले युक्त त्यस अमरावती पुरीलाई विश्वकर्माले बनाएका थिए।

**सभाचत्वररथ्याढ्यां विमानैर्न्यर्बुदैर्युताम् ।**
**शृङ्गाटकैर्मणिमयैर्वज्रविद्रुमवेदिभिः ॥ १६ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **न्यर्बुदैः** = दश करोड | मुगाहरूले बनेका वेदीहरू र |
| **सभाचत्वररथ्याढ्यां** = सभा, | **विमानैः** = विमानहरूद्वारा | **मणिमयैः** = मणिद्वारा निर्मित |
| क्रीडाभूमि, ठुला-ठुला | **युताम्** = युक्त | **शृङ्गाटकैः** = चौबाटाहरूले |
| उपमार्गहरूले युक्त | **वज्रविद्रुमवेदिभिः** = हीरा र | (अमरावती युक्त थियो) |

**वाक्यार्थ–** अमरावतीपुरी सभा, खेल्ने क्रीडाभूमि र ठुला-ठुला उपमार्गहरूले युक्त, दश करोड विमानहरूले युक्त एवं हीरा, मुगाहरूले बनेका वेदीहरू र मणिद्वारा निर्मित चौबाटाहरूले युक्त थियो।

**यत्र नित्यवयोरूपाः श्यामा विरजवाससः ।**
**भ्राजन्ते रूपवन्नार्यो ह्यर्चिर्भिरिव वह्नयः ॥ १७ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **विरजवाससः** = सफा कपडा | **अर्चिर्भिः** = ज्वालाहरूद्वारा |
| **यत्र** = जुन अमरावतीमा | लगाएका | **वह्नयः इव** = अग्नि जैँ |
| **नित्यवयोरूपाः** = सधैँ | **रूपवन्नार्यः** = रूपवती नारीहरू | **हि** = निश्चय नै |
| यौवनावस्था र सौन्दर्यले युक्त | **श्यामाः** = खारिएको सुन जस्तो | **भ्राजन्ते** = सुशोभित छन् |
| भएका | वर्ण भएका स्त्रीहरू | |

**वाक्यार्थ–** जुन अमरावतीमा सफा कपडा लगाएका सधैँ युवती र सुन्दरी रहने, खारिएको सुन जस्तो रङ्ग भएका स्त्रीहरू ज्वालाहरूद्वारा अग्नि सुशोभित भए जैँ सुशोभित भएर बसेका थिए।

**सुरस्त्रीकेशविभ्रष्टनवसौगन्धिकस्रजाम् ।**
**यत्रामोदमुपादाय मार्ग आवाति मारुतः ॥ १८ ॥**

**पदार्थ–**
**यत्र** = जुन अमरावतीमा
**मारुतः** = वायु
**सुरस्त्रीकेशविभ्रष्टनवसौगन्धिक-स्रजाम्** = देवाङ्गनाहरूको केशको चुल्ठोबाट झरेका नयाँ सुगन्धित पुष्पमालाहरूको
**आमोदं** = वासनालाई
**उपादाय** = लिएर
**मार्गे** = बाटोमा
**आवाति** = बहन्छ

**वाक्यार्थ–** जुन अमरावतीपुरीमा देवाङ्गनाहरूको चुल्ठोबाट झरेका नयाँ बासनादार पुष्पमालाहरूको सुगन्धलाई लिएर वायु बाटोमा बहन्छ।

**हेमजालाक्षनिर्गच्छद्धूमेनागुरुगन्धिना।**
**पाण्डुरेण प्रतिच्छन्नमार्गे यान्ति सुरप्रियाः॥ १९॥**

**पदार्थ–**
**अगुरुगन्धिना** = अगुरु धूपको सुगन्धले युक्त
**पाण्डुरेण** = खैरो वर्ण भएको
**हेमजालाक्षनिर्गच्छद्धूमेन** = सुनले बनेका झ्यालबाट निस्किएका धुवाँद्वारा
**प्रतिच्छन्नमार्गे** = ढाकिएको बाटोमा
**सुरप्रियाः** = देवस्त्रीहरू
**यान्ति** = हिँड्दछन्

**वाक्यार्थ–** अमरावतीमा सुनले बनेका झ्यालहरूबाट निस्किएको अगुरु धूपको सुगन्धले युक्त खैरो धुवाँले ढाकिएका बाटामा देवस्त्रीहरू आउने-जाने गर्दछन्।

**मुक्तावितानैर्मणिहेमकेतुभिर्नानापताकावलभीभिरावृताम्।**
**शिखण्डिपारावतभृङ्गनादितां वैमानिकस्त्रीकलगीतमङ्गलाम्॥ २०॥**

**पदार्थ–**
**मुक्तावितानैः** = मोतीको चँदुवाद्वारा
**मणिहेमकेतुभिः** = मणि र सुनका झण्डाहरूद्वारा
**नानापताकावलभीभिः** = घरको अगाडिपट्टि हुने बलोमा राखिएका विभिन्न प्रकारका पताकाहरूद्वारा
**आवृताम्** = व्याप्त (तथा)
**शिखण्डिपारावतभृङ्गनादितां** = मयूर, परेवा र भमराहरूको शब्दले युक्त (तथा)
**वैमानिकस्त्रीकलगीतमङ्गलाम्** = विमानमा हिँड्ने देवस्त्रीहरूको मधुर गीतसङ्गीतले सधैँ मङ्गलमय भइरहने (अमरावती छ)

**वाक्यार्थ–** अमरावतीमा मोतीका चँदुवाहरू, मणि एवं सुनले बनेका झण्डाहरू र प्रत्येक घरमा घरको अगाडिपट्टिको बलोमा विभिन्न प्रकारका पताकाहरू राखिएका थिए। मयूर, परेवा र भमराहरूको कल-कलशब्दले युक्त त्यो नगरी विमानमा हिँड्ने देवस्त्रीहरूको श्रुतिमधुर गीत-सङ्गीतको झङ्कारले मङ्गलमय बनेको थियो।

**मृदङ्गशङ्खानकदुन्दुभिस्वनैः सतालवीणामुरजर्ष्टिवेणुभिः।**
**नृत्यैः सवाद्यैरुपदेवगीतकैर्मनोरमां स्वप्रभया जितप्रभाम्॥ २१॥**

**यां न व्रजन्त्यधर्मिष्ठाः खला भूतद्रुहः शठाः ।**
**मानिनः कामिनो लुब्धा एभिर्हीना व्रजन्ति यत् ॥ २२ ॥**

**पदार्थ–**
**मृदङ्गशङ्खानकदुन्दुभिस्वनैः** = मादल, शङ्ख, नगरा र ढोलका आवाजहरूद्वारा
**सतालवीणामुरजर्ष्टिवेणुभिः** = ताल, वीणा, मुरज र बाँसुरीका आवाजहरूद्वारा
**सवाद्यैः** = सङ्गीतले सहित
**नृत्यैः** = नाचद्वारा
**उपदेवगीतकैः** = गन्धर्वहरूले गाएको गीतद्वारा
**मनोरमां** = मनोहर
**स्वप्रभया** = आफ्नो प्रकाशद्वारा
**जितप्रभाम्** = सूर्य आदिको प्रकाशलाई पनि तिरस्कार गरिरहेको
**यां** = जुन अमरावती नगरीमा
**अधर्मिष्ठाः** = पापी
**खलाः** = दुष्ट
**भूतद्रुहः** = प्राणीपीडक
**शठाः** = धूर्त
**मानिनः** = अभिमानी
**कामिनः** = विषयलम्पट
**लुब्धाः** = लोभी
**न व्रजन्ति** = जान सक्दैनन्
**एभिः हीनाः** = यी अधर्म आदि दोषले शून्य व्यक्तिहरू
**यत्** = जुन नगरीमा
**व्रजन्ति** = जान्छन्

**वाक्यार्थ–** मादल, शङ्ख, नगरा, ढोल, ताल, वीणा, मुरज (मुजुरा) र बाँसुरीका आवाज, सङ्गीतसहितको नाच एवं गन्धर्वहरूले गाएको गीतद्वारा मनोहर बनेको र आफ्नो प्रकाशद्वारा सूर्य आदिको प्रकाशलाई पनि तिरस्कार गरिरहेको यस अमरावती नगरीमा पापी, दुष्ट, प्राणीपीडक, धूर्त, अभिमानी, विषयलम्पट, लोभी व्यक्तिहरू जान सक्दैनन् भने यस्ता दुर्गुण नभएका व्यक्तिहरू मात्र जान सक्छन्।

**तां देवधानीं स वरूथिनीपतिर्बहिः समन्ताद्रुरुधे पृतन्यया ।**
**आचार्यदत्तं जलजं महास्वनं दध्मौ प्रयुञ्जन् भयमिन्द्रयोषिताम् ॥ २३ ॥**

**पदार्थ–**
**वरूथिनीपतिः** = सेनापति
**सः** = ती बलिले
**पृतन्यया** = आफ्ना सेनाद्वारा
**तां** = त्यो
**देवधानीं** = देवताको राजधानी अमरावती नगरीलाई
**बहिः** = बाहिर
**समन्तात्** = चारैतिरबाट
**रुरुधे** = घेरा हाले
**इन्द्रयोषिताम्** = इन्द्रका स्त्रीहरूमा
**भयम्** = डर
**प्रयुञ्जन्** = उत्पन्न गराउँदै
**आचार्यदत्तं** = शुक्राचार्यद्वारा दिइएको
**महास्वनं** = ठुलो आवाज गर्ने
**जलजं** = शङ्ख
**दध्मौ** = बजाए

**वाक्यार्थ–** देवताको राजधानी त्यस अमरावतीलाई बाहिरबाट चारैतिर आफ्नो सेनाद्वारा असुरसेनानायक बलिले घेरा हाले। त्यसपछि उनले इन्द्रका स्त्रीहरूलाई भयभीत गराउँदै असुरगुरु शुक्राचार्यद्वारा दिइएको ठुलो आवाज गर्ने शङ्ख बजाए।

**मघवांस्तमभिप्रेत्य बलेः परममुद्यमम् ।**
**सर्वदेवगणोपेतो गुरुमेतदुवाच ह ॥ २४ ॥**

**पदार्थ–**
**बलेः** = बलिको
**तं** = त्यस प्रकारको
**परमम् उद्यमम्** = (युद्धका लागि) ठूलो प्रयास भएको
**अभिप्रेत्य** = बुझेर
**सर्वदेवगणोपेतः** = सम्पूर्ण देवगणहरूले सहित भएका
**मघवान्** = इन्द्रले
**गुरुं** = गुरु बृहस्पति समक्ष गएर
**ह** = निश्चय नै
**एतत्** = यस्तो कुरा
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** आफ्नो नगरीलाई घेरा हाली आक्रमण गर्न लागेका बलिले ठूलो तयारी गरेको बुझेर देवराज इन्द्रले सम्पूर्ण देवगणहरूलाई साथमा लिई आफ्ना गुरु बृहस्पति समक्ष गएर यसो भन्नुभयो ।

**भगवन्नुद्यमो भूयान् बलेर्नः पूर्ववैरिणः ।**
**अविषह्यमिमं मन्ये केनासीत् तेजसोर्जितः ॥ २५ ॥**

**पदार्थ–**
**भगवन्** = हे सिद्धिसम्पन्न गुरु
**नः** = हाम्रो
**पूर्ववैरिणः** = पुरानो शत्रु
**बलेः** = बलिको
**भूयान्** = धेरै
**उद्यमः** = युद्धको तयारी छ
**इमं** = यो युद्धलाई
**अविषह्यम्** = प्रतिकार गर्न नसकिने
**मन्ये** = लाग्दछ
**केन** = कुन
**तेजसा** = शक्तिद्वारा
**ऊर्जितः आसीत्** = सम्पन्न भएको हो

**वाक्यार्थ–** हे सिद्धिसम्पन्न गुरु ! हाम्रो पुरानो शत्रु बलिले धेरै प्रयास गरी अहिले युद्धको तयारी गरेको छ। मलाई लाग्दछ उसको यस युद्धलाई हामीले प्रतिकार गर्न सक्दैनौं। कुन शक्तिका कारण बलि यसरी बढिरहेको हो ?

**नैनं कश्चित् कुतो वापि प्रतिव्योढुमधीश्वरः ।**
**पिबन्निव मुखेनेदं लिहन्निव दिशो दश ॥**
**दहन्निव दिशो दृग्भिः संवर्ताग्निरिवोत्थितः ॥ २६ ॥**

**पदार्थ–**
**कुतः वा अपि** = कुनै उपायबाट पनि
**एनं** = यस बलिलाई (अहिले)
**प्रतिव्योढुं** = हटाउन (रोक्न)
**कश्चित्** = कोही पनि
**न अधीश्वरः** = समर्थ छैन
**मुखेन** = मुखद्वारा
**इदं** = यो संसारलाई
**पिबन् इव** = पिउँला झैं
**दश दिशः** = दसै दिशा
**लिहन् इव** = चाटौंला झैं
**दृग्भिः** = हेराइले
**दिशः** = दिशाहरूलाई
**दहन् इव** = डढाऊँला झैं गरी
**संवर्ताग्निः इव** = प्रलयकालीन अग्नि झैं (युद्धका लागि)
**उत्थितः** = जुर्मुराएको छ

**वाक्यार्थ–** अहिले कोही पनि कसैबाट वा कुनै पनि उपायबाट बलिलाई युद्धबाट रोक्न समर्थ छैन किनभने ऊ प्रलयकालीन अग्नि जैँ मुखले संसारलाई पिउँला जैँ, दसै दिशालाई जिब्रोले चाटुँला जैँ, हेराइले नै दिशाहरूलाई डढाऊँला जैँ गरी युद्धका लागि जुर्मुराएको छ।

**ब्रूहि कारणमेतस्य दुर्धर्षत्वस्य मद्रिपोः।**
**ओजः सहो बलं तेजो यत एतत्समुद्यमः॥ २७॥**

| पदार्थ– | | |
|---|---|---|
| **यतः** = जसबाट | **बलं** = (मानसिक) बल | **मद्रिपोः** = मेरो शत्रु बलिको |
| **एतस्य** = यस बलिको | **तेजः** = प्रताप (प्राप्त भयो) | **दुर्धर्षत्वस्य** = दुःसह्य युद्धको तयारीको |
| **ओजः** = (शारीरिक) सामर्थ्य | **यतः** = जसको कारण | **कारणम्** = कारण |
| **सहः** = (इन्द्रिय) शक्ति | **एतत्समुद्यमः** = यस्तो किसिमको युद्धको तयारी गऱ्यो | **ब्रूहि** = बताउनुहोस् |

**वाक्यार्थ–** मेरो शत्रु बलिको शरीर, इन्द्रिय र मनमा सामर्थ्य, शक्ति, बल र प्रताप कहाँबाट आयो ? जसका कारण उसले यस्तो किसिमको युद्धको तयारी गऱ्यो। कृपापूर्वक मलाई मेरो शत्रु बलिको दुःसह्य युद्धतयारीको कारण बताउनुहोस्।

**गुरुरुवाच** (देवगुरु बृहस्पतिले भन्नुभयो)

**जानामि मघवञ्छत्रोरुन्नतेरस्य कारणम्।**
**शिष्यायोपभृतं तेजो भृगुभिर्ब्रह्मवादिभिः॥ २८॥**

| पदार्थ– | | |
|---|---|---|
| **मघवन्** = हे इन्द्र | **कारणम्** = कारण | **भृगुभिः** = भृगुवंशी शुक्राचार्य आदि गुरुहरूद्वारा |
| **अस्य** = यो (तपाईंको) | **जानामि** = म जान्दछु | **तेजः** = सम्पूर्ण शक्ति |
| **शत्रोः** = शत्रु बलिको | **शिष्याय** = आफ्ना शिष्य बलिलाई | **उपभृतम्** = प्रदान गरिएको हो |
| **उन्नतेः** = शक्तिवृद्धिको | **ब्रह्मवादिभिः** = ब्रह्मवादी | |

**वाक्यार्थ–** हे देवराज इन्द्र ! तपाईंको शत्रु बलिको शक्ति कसरी बढ्यो भन्ने कुरा कुरा जान्दछु। ब्रह्मवादी भृगुवंशी शुक्राचार्य आदि गुरुहरूले आफूमा निहित सम्पूर्ण शक्ति आफ्नो शिष्य बलिलाई प्रदान गरेका हुन्।

**भवद्विधो भवान् वापि वर्जयित्वेश्वरं हरिम्।**
**नास्य शक्तः पुरः स्थातुं कृतान्तस्य यथा जनाः॥ २९॥**

| पदार्थ– | | |
|---|---|---|
| **ईश्वरं** = सर्वसमर्थ | **वर्जयित्वा** = छाडेर | तपाईंजस्ता अरू कोही पनि |
| **हरिम्** = भगवान् नारायणलाई | **भवान्** = तपाईं | **अस्य** = यस बलिको |
| | **भवद्विधः वा अपि** = अथवा | **पुरः** = अगाडि |

**स्थातुं** = टिक्न
**न शक्तः** = सक्दैन
**यथा** = जसरी
**कृतान्तस्य** = कालको अगाडि
**जनाः** = मानिसहरू (टिक्न सक्दैनन्)

**वाक्यार्थ–** जसरी कालको अगाडि कोही पनि मानिस टिक्न सक्दैन त्यसै गरी सर्वसमर्थ भगवान् नारायणलाई छाडेर तपाईं वा तपाईंजस्तो अरू कोही पनि बलिको अगाडि टिक्न सक्दैन।

**तस्मान्निलयमुत्सृज्य यूयं सर्वे त्रिविष्टपम्।**
**यात कालं प्रतीक्षन्तो यतः शत्रोर्विपर्ययः॥ ३०॥**

**पदार्थ–**
**तस्मात्** = त्यसकारण
**यतः** = जहिलेसम्म
**शत्रोः** = तपाईंको शत्रु बलिको
**विपर्ययः** = विपरीत अवस्था (शक्ति क्षीण) हुँदैन, तबसम्म
**कालं** = त्यो समयलाई
**प्रतीक्षन्तः** = पर्खँदै
**यूयं** = तपाईंहरू
**सर्वे** = सबै
**निलयं** = आफ्नो स्थान
**त्रिविष्टपम्** = स्वर्गलाई
**उत्सृज्य** = छोडेर
**यात** = (अन्यत्र) जानुहोस्

**वाक्यार्थ–** त्यसकारण जहिलेसम्म आफ्नो शत्रु बलिको शक्तिक्षय हुँदैन, तहिलेसम्म उचित समयको प्रतीक्षा गर्दै तपाईंहरू सबै जना स्वर्ग छोडेर अन्यत्र जानुहोस्।

**एष विप्रबलोदर्कः सम्प्रत्यूर्जितविक्रमः।**
**तेषामेवापमानेन सानुबन्धो विनङ्क्ष्यति॥ ३१॥**

**पदार्थ–**
**विप्रबलोदर्कः** = ब्राह्मणहरूको बलले सम्पन्न
**एषः** = यो बलि
**सम्प्रति** = अहिले
**ऊर्जितविक्रमः** = अत्यधिक शक्तिशाली भएको छ
**तेषां एव** = तिनै ब्राह्मणहरूको
**अपमानेन** = अपमानद्वारा
**सानुबन्धः** = समूल (दैत्यसेना र परिवारसहित)
**विनङ्क्ष्यति** = नष्ट हुनेछ

**वाक्यार्थ–** ब्राह्मणहरूद्वारा प्रदत्त बलले यो बलि अहिले अत्यधिक शक्तिशाली भएको छ, तर जब शक्तिको घमन्डले बलिले तिनै ब्राह्मणहरूको अपमान गर्दछ, तब त्यही अपमानका कारण ऊ समूल (परिवार र दैत्यसेनासहित) नष्ट हुनेछ।

**एवं सुमन्त्रितार्थास्ते गुरुणार्थानुदर्शिना।**
**हित्वा त्रिविष्टपं जग्मुर्गीर्वाणाः कामरूपिणः॥ ३२॥**

**पदार्थ–**
**अर्थानुदर्शिना** = वस्तुको यथावत् विचार गर्न सक्ने
**गुरुणा** = गुरु बृहस्पतिद्वारा
**एवं** = यसप्रकार (केही समय लुक्न)
**सुमन्त्रितार्थाः** = स्वार्थ सिद्धिका लागि परामर्श पाएका
**ते** = ती
**गीर्वाणाः** = देवताहरू
**त्रिविष्टपं** = स्वर्गलाई
**हित्वा** = छाडेर
**कामरूपिणः** = इच्छानुसार विभिन्न रूप धारण गरी
**जग्मुः** = (अन्यत्र) गए

**वाक्यार्थ–** वस्तुको यथावत् विचार गर्न समर्थ देवगुरु बृहस्पतिले देवताहरूलाई स्वर्ग छाडी अन्यत्र कहीं गएर लुक्न परामर्श दिनुभएपछि आफ्नो स्वार्थसिद्धिका लागि देवताहरू पनि उहाँकै परामर्शअनुसार स्वर्ग छाडी इच्छाबमोजिमको विभिन्न रूप धारण गरी अन्यत्रै गए।

**देवेष्वथ निलीनेषु बलिर्वैरोचनः पुरीम्।**
**देवधानीमधिष्ठाय वशं निन्ये जगत्त्रयम्॥ ३३॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**देवेषु** = देवताहरू
**निलीनेषु** = लुकेपछि
**वैरोचनः** = विरोचनका पुत्र
**बलिः** = बलिले
**देवधानीम्** = स्वर्गको राजधानी अमरावती
**पुरीम्** = नगरीमा
**अधिष्ठाय** = बसेर
**जगत्त्रयम्** = स्वर्ग, मर्त्य र पाताल तीनै लोकलाई
**वशं** = आफ्नो वशमा
**निन्ये** = लिए

**वाक्यार्थ–** देवताहरू स्वर्ग छाडेर लुकेपछि विरोचनका पुत्र बलिले देवनगरी अमरावतीमा बसी स्वर्ग, मर्त्य र पाताल तीनै लोकलाई आफ्नो वशमा लिए।

**तं विश्वजयिनं शिष्यं भृगवः शिष्यवत्सलाः।**
**शतेन हयमेधानामनुव्रतमयाजयन्॥ ३४॥**

**पदार्थ–**
**शिष्यवत्सलाः** = शिष्यका प्रति दयालु भएका
**भृगवः** = शुक्राचार्य आदि भृगुवंशीहरूले
**अनुव्रतं** = आफ्नो अनुयायी भएको
**विश्वजयिनं** = विश्वविजयी
**तं** = ती
**शिष्यं** = शिष्य बलिलाई
**हयमेधानां शतेन** = सय ओटा अश्वमेध यज्ञ
**अयाजयन्** = गर्न लगाए

**वाक्यार्थ–** शिष्यका प्रति दयालु भएका भृगुवंशी शुक्राचार्य आदि गुरुहरूले आफ्नो अनुगत विश्वविजयी शिष्य बलिलाई सय ओटा अश्वमेध यज्ञ गर्न लगाए।

**ततस्तदनुभावेन भुवनत्रयविश्रुताम्।**
**कीर्तिं दिक्षु वितन्वानः स रेज उडुराडिव॥ ३५॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (सय अश्वमेध यज्ञ गरिसकेपछि)
**तदनुभावेन** = त्यस यज्ञानुष्ठानको प्रभावले
**भुवनत्रयविश्रुताम्** = तीनै लोकमा प्रसिद्ध
**कीर्तिं** = आफ्नो कीर्तिलाई
**दिक्षु** = सबै दिशामा
**वितन्वानः** = फैलाएका
**सः** = ती बलि
**उडुराड् इव** = चन्द्रमा जैँ
**रेजे** = सुशोभित भए

**वाक्यार्थ–** सय ओटा अश्वमेध यज्ञ गरेपछि यज्ञानुष्ठानको प्रभावले बलिको कीर्ति तीनै लोक र

दसै दिशामा फैलियो। आकाशमा चन्द्रमा झैँ उनी तीनै लोकमा सुशोभित भए।

**बुभुजे च श्रियं स्वृद्धां द्विजदेवोपलम्भिताम्।**

**कृतकृत्यमिवात्मानं मन्यमानो महामनाः॥ ३६॥**

**पदार्थ–**
**आत्मानं** = आफूलाई
**कृतकृत्यं इव** = कृतकृत्य भएको
**मन्यमानः** = अनुभव गरेका
**महामनाः** = उदार चित्त भएका बलिले
**द्विजदेवोपलम्भिताम्** = ब्राह्मणदेवहरूबाट प्राप्त
**स्वृद्धां** = समृद्ध
**श्रियं च** = राजलक्ष्मीलाई
**बुभुजे** = भोग गरे

**वाक्यार्थ–** सय अश्वमेध यज्ञ गरेपछि आफू कृतकृत्य भएको अनुभव गरी उदारचित्त भएका बलिले ब्राह्मणदेवहरूको कृपाबाट प्राप्त समृद्ध राजलक्ष्मीको भोग गर्न थाले।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहिताया-**

**मष्टमस्कन्धे पञ्चदशोऽध्यायः॥ १५॥**

# अथ षोडशोऽध्यायः

## कश्यपबाट अदितिलाई पयोव्रतको उपदेश

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं पुत्रेषु नष्टेषु देवमातादितिस्तदा ।**

**हृते त्रिविष्टपे दैत्यैः पर्यतप्यदनाथवत् ॥ १ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**त्रिविष्टपे** = स्वर्गलोकलाई
**दैत्यैः** = दैत्यहरूले
**हृते** = खोसेपछि
**पुत्रेषु** = पुत्रहरू
**नष्टेषु** = लुक्न थालेपछि
**तदा** = त्यस अवस्थामा
**देवमाता** = देवमाता
**अदितिः** = अदिति
**अनाथवत्** = अनाथ झैँ
**पर्यतप्यत्** = दुःखी बनिन्

**वाक्यार्थ–** यसरी दैत्यहरूले स्वर्गलोकमा आधिपत्य जमाउनाले आफ्ना पुत्र देवताहरू लुकेर बस्न थालेपछि यस्तो अवस्थामा देवमाता अदिति अनाथ झैँ दुःखी बनिन्।

**एकदा कश्यपस्तस्या आश्रमं भगवानगात् ।**

**निरुत्सवं निरानन्दं समाधेर्विरतश्चिरात् ॥ २ ॥**

**पदार्थ–**
**समाधेः** = समाधिबाट
**चिरात्** = धेरै समयपछि
**विरतः** = निवृत्त भएका
**भगवान्** = भगवान्
**कश्यपः** = कश्यप
**एकदा** = एक दिन
**निरुत्सवं** = उत्सवहीन
**निरानन्दं** = आनन्दशून्य
**तस्याः** = ती अदितिको
**आश्रमं** = आश्रममा
**अगात्** = जानुभयो

**वाक्यार्थ–** एक दिन धेरै सयमको समाधिबाट निवृत्त भएका भगवान् कश्यप आफ्नी पत्नी अदितिको उत्सवहीन एवं आनन्दशून्य आश्रममा जानुभयो।

**स पत्नीं दीनवदनां कृतासनपरिग्रहः ।**

**सभाजितो यथान्यायमिदमाह कुरूद्वह ॥ ३ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**यथान्यायम्** = यथायोग्य
**कृतासनपरिग्रहः** = (अदितिद्वारा) आसन ग्रहण गराइएका तथा
**सभाजितः** = पूजा गरिएका
**सः** = ती कश्यप मुनिले
**दीनवदनां** = मलिन अनुहार भएकी
**पत्नीं** = पत्नी अदितिलाई
**इदं** = यसो
**आह** = भन्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! अदितिले आफ्नो कुटीमा आउनुभएका पतिलाई आसनमा बसाई यथायोग्य पूजा गरिन्। त्यसपछि कश्यप मुनिले मलिन अनुहार भएकी पत्नी अदितिलाई भन्नुभयो।

**अप्यभद्रं न विप्राणां भद्रे लोकेऽधुनागतम्।**
**न धर्मस्य न लोकस्य मृत्योश्छन्दानुवर्तिनः॥ ४॥**

**पदार्थ–**
**भद्रे** = हे कल्याणी
**अपि** = के
**अधुना** = अहिले
**लोके** = संसारमा
**विप्राणां** = ब्राह्मणहरूमा
**अभद्रं** = दुःख त
**न आगतम्** = आएको छैन
**धर्मस्य** = धर्ममा विपत्ति
**न** = आएको त छैन
**मृत्योः** = मृत्युको
**छन्दानुवर्तिनः** = इच्छानुसार चल्ने
**लोकस्य** = लोकमा (कुनै कष्ट त)
**न** = आएको छैन

**वाक्यार्थ–** हे कल्याणी ! संसारमा अहिले ब्राह्मणहरूमाथि कुनै दुःख त आएको छैन ? धर्मको परिपालन त भइरहेको छ ? मृत्युको इच्छानुसार उसैको इसारामा चल्ने लोकमा कुनै कष्ट त आएको छैन ? (किन दुःखी भएकी हौ ?)

**अपि वाकुशलं किञ्चिद् गृहेषु गृहमेधिनि।**
**धर्मस्यार्थस्य कामस्य यत्र योगो ह्ययोगिनाम्॥ ५॥**

**पदार्थ–**
**गृहमेधिनि** = हे गृहस्वामिनी
**अपि वा** = अथवा
**गृहेषु** = घरमा
**धर्मस्य** = धर्म
**अर्थस्य** = अर्थ
**कामस्य** = काममा
**किञ्चित्** = केही
**अकुशलं** = ह्रास भयो
**यत्र** = जुन घरमा
**हि** = निश्चय नै
**अयोगिनाम्** = योगाभ्यासरहित व्यक्तिहरूलाई पनि
**योगः** = (स्वधर्माचरणद्वारा) योगफल प्राप्त हुन्छ

**वाक्यार्थ–** हे गृहस्वामिनी ! योगाभ्यासरहित व्यक्तिहरू पनि स्वधर्माचरणद्वारा घरमैं बसेर योगको फल प्राप्त गर्दछन्। त्यस्तो यो घरमा के धर्म, अर्थ र काममा केही कमी आएको त छैन ?

**अपि वातिथयोऽभ्येत्य कुटुम्बासक्तया त्वया।**
**गृहादपूजिता याताः प्रत्युत्थानेन वा क्वचित्॥ ६॥**

**पदार्थ–**
**अपि वा** = अथवा
**क्वचित्** = कतै
**अतिथयः** = पाहुनाहरू
**अभ्येत्य** = आएर
**कुटुम्बासक्तया** = परिवारको पालनपोषणमा एकाग्र भएकी
**त्वया** = तिमीद्वारा
**प्रत्युत्थानेन वा** = स्वागतसत्कारबाट
**अपूजिताः** = सत्कृत नभई
**गृहात्** = घरबाट
**याताः** = फर्किए

**वाक्यार्थ–** अथवा परिवारको पालनपोषणमा एकाग्र भएकी तिमीले कतै घरमा आएका पाहुना-हरूको उचित स्वागत सत्कार गर्न नसक्नाले उनीहरू अपमानित भएर घरबाट त्यसै फर्किए कि ?

**गृहेषु येष्वतिथयो नार्चिताः सलिलैरपि।**

**यदि निर्यान्ति ते नूनं फेरुराजगृहोपमाः॥ ७॥**

**पदार्थ–**
**यदि** = यदि
**येषु** = जुन
**गृहेषु** = घरमा
**अतिथयः** = पाहुनाहरू
**सलिलैः अपि** = पानीद्वारा पनि
**न अर्चिताः** = सत्काररहित भएर
**निर्यान्ति** = फर्केर जान्छन् भने
**ते** = ती घरहरू
**नूनं** = निश्चय नै
**फेरुराजगृहोपमाः** = स्यालको नाइकेको घर (गुफा) समान हुन्छन्

**वाक्यार्थ–** जुन घरमा आएका पाहुनाहरूलाई केही नभए पिउनका लागि पानीसम्म दिएर भए पनि स्वागत गरिदैंन भने ती घर, घर नभएर स्याल बस्ने गुफासमान हुन्छन्।

**अप्यग्नयस्तु वेलायां न हुता हविषा सति।**

**त्वयोद्विग्नधिया भद्रे प्रोषिते मयि कर्हिचित्॥ ८॥**

**पदार्थ–**
**सति** = हे प्यारी
**भद्रे** = हे कल्याणी
**मयि** = म
**प्रोषिते** = बाहिर गएपछि
**उद्विग्नधिया** = चित्त विचलित भएकी
**त्वया** = तिमीद्वारा
**कर्हिचित्** = कहिल्यै
**वेलायां अपि** = होमकालमा पनि
**अग्नयः तु** = अग्निहरू
**हविषा** = हविद्वारा
**न हुताः** = हवन गरिएनन्

**वाक्यार्थ–** हे प्यारी ! हे कल्याणी ! कि म बाहिर गएपछि चित्त विचलित भएकी तिमीले होम गर्ने वेला हविहरूद्वारा अग्निमा हवन गरिनौ कि ?

**यत्पूजया कामदुघान् याति लोकान् गृहान्वितः।**

**ब्राह्मणोऽग्निश्च वै विष्णोः सर्वदेवात्मनो मुखम्॥ ९॥**

**पदार्थ–**
**यत्पूजया** = जुन ब्राह्मण र अग्निको पूजाद्वारा
**गृहान्वितः** = गृहस्थले
**कामदुघान्** = इच्छानुसारको
**लोकान्** = लोक
**याति** = प्राप्त गर्दछ (किनभने)
**ब्राह्मणः** = बाह्मण र
**अग्निः च** = अग्नि पनि
**वै** = निश्चय नै
**सर्वदेवात्मनः** = सर्वदेवमय
**विष्णोः** = भगवान् विष्णुका
**मुखम्** = मुख हुन्

**वाक्यार्थ–** सर्वदेवमय भगवान् विष्णुका मुख ब्राह्मण र अग्नि हुन्। अतः गृहस्थले ब्राह्मण र अग्निको उचित पूजा गऱ्यो भने उसले इच्छा गरेको लोक प्राप्त गर्दछ।

**अपि सर्वे कुशलिनस्तव पुत्रा मनस्विनि।**

**लक्षयेऽस्वस्थमात्मानं भवत्या लक्षणैरहम्॥ १०॥**

| पदार्थ– | | |
|---|---|---|
| **मनस्विनि** = हे बुद्धिमती | **सर्वे** = सबै | **अहम्** = म |
| **अपि** = के | **कुशलिनः** = कुशल छन् | **लक्षणैः** = तिमीमा देखिएका लक्षणहरूद्वारा |
| **तव** = तिम्रा | **भवत्याः** = तिम्रो | **लक्षये** = जान्दछु |
| **पुत्राः** = पुत्रहरू | **आत्मानं** = मन | |
| | **अस्वस्थं** = ठीक छैन भन्ने कुरा | |

**वाक्यार्थ–** हे बुद्धिमती अदिति ! तिम्रा पुत्रहरू सबै कुशल त छन् ? तिमी आज उदास छौ भन्ने कुरा मैले तिमीमा देखिएका लक्षणहरूद्वारा जानिरहेको छु।

**अदितिरुवाच** (अदितिले भनिन्)

**भद्रं द्विजगवां ब्रह्मन् धर्मस्यास्य जनस्य च।**

**त्रिवर्गस्य परं क्षेत्रं गृहमेधिन् गृहा इमे॥ ११॥**

| पदार्थ– | | |
|---|---|---|
| **ब्रह्मन्** = हे ब्राह्मण | **अस्य जनस्य च** = यो मान्छे (म)लाई पनि | **त्रिवर्गस्य** = धर्म, अर्थ र कामको |
| **गृहमेधिन्** = हे गृहस्थ | **भद्रं** = कुशल नै छ | **परं** = सर्वोत्कृष्ट |
| **द्विजगवां** = ब्राह्मण, गाई | **इमे** = यो | **क्षेत्रम्** = उद्भव स्थान हो |
| **धर्मस्य** = धर्म र | **गृहाः** = गृहस्थाश्रम | |

**वाक्यार्थ–** हे नाथ ! यहाँ ब्राह्मण, गाई, धर्म र म समेत सबै कुशल नै छौँ। यो गृहस्थाश्रम धर्म, अर्थ र कामको सर्वोत्कृष्ट उद्भवस्थान हो। (त्यसैले त्रिवर्ग पनि यहाँ यथावत् नै चलेको छ)।

**अग्नयोऽतिथयो भृत्या भिक्षवो ये च लिप्सवः।**

**सर्वं भगवतो ब्रह्मन्ननुध्यानान्न रिष्यति॥ १२॥**

| पदार्थ– | | |
|---|---|---|
| **ब्रह्मन्** = हे ब्राह्मण | **भिक्षवः** = भिक्षुहरू | **भगवतः** = हजुरको |
| **अग्नयः** = अग्निहरू | **ये च** = जो अरू पनि | **अनुध्यानात्** = प्रतिक्षणको चिन्तनका कारण |
| **अतिथयः** = अतिथिहरू | **लिप्सवः** = माग्नेहरू छन् (ती सबै यथोचित मद्वारा पूजित नै छन्) | **सर्वं** = केही कुरामा पनि |
| **भृत्याः** = सेवकहरू | | **न रिष्यति** = कमी भएको छैन |

**वाक्यार्थ–** हे ब्राह्मण ! अग्नि, अतिथि, सेवक, भिक्षु र माग्नेहरूलाई पनि मैले निरन्तर पूजा गरिरहेकी नै छु। हजुरको प्रतिक्षणको चिन्तनका कारण कहीँ कतै केही कुरामा पनि कमी भएको छैन।

**को नु मे भगवन् कामो न सम्पद्येत मानसः।**

**यस्या भवान् प्रजाध्यक्ष एवं धर्मान् प्रभाषते॥ १३॥**

**पदार्थ—**
**भगवन्** = हे नाथ
**यस्याः** = जुन मेरो
**प्रजाध्यक्षः** = प्रजापति
**भवान्** = हजुर
**एवं** = यसप्रकार
**धर्मान्** = धर्मोपदेश
**प्रभाषते** = बताउनुहुन्छ (त्यस्ती)
**मे** = मेरो
**मानसः** = मनमा रहेको
**कः नु** = कुन चाहिँ
**कामः** = इच्छा
**न सम्पद्येत** = पूरा नहोला

**वाक्यार्थ—** हे नाथ ! हजुर जस्तो प्रजापतिले मलाई यस प्रकारले धर्मको उपदेश गर्नुहुन्छ भने मेरो मनमा कुन चाहिँ त्यस्तो कामना होला जुन पूर्ण नहोला ?

**तवैव मारीच मनःशरीरजाः प्रजा इमाः सत्त्वरजस्तमोजुषः।**
**समो भवांस्तास्वसुरादिषु प्रभो तथापि भक्तं भजते महेश्वरः॥ १४॥**

**पदार्थ—**
**मारीच** = हे मरीचिपुत्र
**सत्त्वरजस्तमोजुषः** = सत्त्व, रज र तमोगुणले युक्त
**इमाः** = यी सम्पूर्ण
**प्रजाः** = प्राणीहरू
**तव एव** = हजुरकै
**मनःशरीरजाः** = मनबाट र शरीरबाट उत्पन्न भएका हुन्
**प्रभो** = हे प्रभु
**तासु** = ती सबै
**असुरादिषु** = असुर आदि प्रजामा पनि
**भवान्** = हजुर
**समः** = समदृष्टिवाला हुनुहुन्छ
**तथा अपि** = तर पनि
**महेश्वरः** = परमेश्वरले
**भक्तं** = आफ्नो भक्तहरूको नै
**भजते** = मनोरथ पूर्ण गरिदिनुहुन्छ

**वाक्यार्थ—** हे मरीचिपुत्र ! सत्त्वगुणी, रजोगुणी र तमोगुणी सबै प्रजाहरू कोही हजुरको शरीरबाट र कोही मनबाट उत्पन्न भएका सन्तान हुन्। ती सबै प्रजामा हजुर समदृष्टि राख्नुहुन्छ। तापनि जसरी परमेश्वर सबैमा सम भए पनि आफ्नो भक्तको मात्र मनोरथ पूर्ण गर्नुहुन्छ, त्यस्तै हजुर पनि भक्तको इच्छा पूर्ण गर्नुहुन्छ।

**तस्मादीश भजन्त्या मे श्रेयश्चिन्तय सुव्रत।**
**हृतश्रियो हृतस्थानान् सपत्नैः पाहि नः प्रभो॥ १५॥**

**पदार्थ—**
**तस्मात्** = त्यसकारण
**प्रभो** = हे प्रभु
**ईश** = हे ईश्वर
**सुव्रत** = हे तापस (हजुरलाई)
**भजन्त्याः** = भजन गर्ने
**मे** = मेरो
**श्रेयः** = कल्याण
**चिन्तय** = विचार गर्नुहोस्
**सपत्नैः** = शत्रुहरूद्वारा
**हृतश्रियः** = सम्पत्ति लुटिएका
**हृतस्थानात्** = बस्ने ठाउँ पनि खोसिएका
**नः** = हामीलाई
**पाहि** = रक्षा गर्नुहोस्

**वाक्यार्थ—** हे प्रभु ! हे ईश्वर ! हजुरलाई भजन गर्ने म हजुरकी पत्नीको कल्याण कसरी हुन्छ ? विचार गर्नुहोस्। शत्रु दैत्यहरूद्वारा लुटिएका तथा वासस्थान खोसिएका हामीलाई रक्षा गर्नुहोस्।

**पैरैर्विवासिता साहं मग्ना व्यसनसागरे।**
**ऐश्वर्यं श्रीर्यशः स्थानं हृतानि प्रबलैर्मम॥ १६॥**

**पदार्थ–**
**प्रबलैः** = शक्तिसम्पन्न
**परैः** = दैत्य शत्रुहरूद्वारा
**मम** = मेरो
**ऐश्वर्यं** = ऐश्वर्य
**श्रीः** = सम्पत्ति
**यशः** = कीर्ति
**स्थानं** = पदप्रतिष्ठा
**हृतानि** = खोसिए
**सा** = यसरी ऐश्वर्यादिरहित भएकी
**अहं** = म
**विवासिता** = आफ्नो घरबाट निकालिएँ (त्यसैले)
**व्यसनसागरे** = दुःखको सागरमा
**मग्ना** = डुबेकी छु

**वाक्यार्थ–** शक्तिसम्पन्न दैत्यहरूले मेरो ऐश्वर्य, सम्पत्ति, कीर्ति, पद र प्रतिष्ठा सबै लुटे। ऐश्वर्यादिले रहित भएकी मलाई दैत्यहरूले घरबाट पनि निकालिदिए। त्यसैले म दुःखको सागरमा डुबेकी छु।

**यथा तानि पुनः साधो प्रपद्येरन् ममात्मजाः।**
**तथा विधेहि कल्याणं धिया कल्याणकृत्तम॥ १७॥**

**पदार्थ–**
**साधो** = हे सत्पुरुष
**कल्याणकृत्तम** = हे कल्याणकारी प्रभु
**यथा** = जसरी
**मम आत्मजाः** = मेरा पुत्रहरू
**तानि** = दैत्यद्वारा लुटिएका ती ऐश्वर्यहरूलाई
**पुनः** = फेरि
**प्रपद्येरन्** = प्राप्त गर्न सकून्
**तथा** = त्यस्तो उपाय
**धिया** = बुद्धिद्वारा विचार गरेर
**कल्याणं** = कल्याण
**विधेहि** = गर्नुहोस्

**वाक्यार्थ–** हे सत्पुरुष ! हे कल्याणकारी प्रभु ! मेरा पुत्रहरू दैत्यद्वारा लुटिएको ऐश्वर्यलाई कसरी प्राप्त गर्न सक्छन् ? त्यस्तो उपाय विचार गरी हाम्रो कल्याण गर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमभ्यर्थितोऽदित्या कस्तामाह स्मयन्निव।**
**अहो मायाबलं विष्णोः स्नेहबद्धमिदं जगत्॥ १८॥**

**पदार्थ–**
**अदित्या** = अदितिद्वारा
**एवं** = यसप्रकार
**अभ्यर्थितः** = प्रार्थना गरिएका
**कः** = प्रजापित कश्यप मुनिले
**स्मयन् इव** = छक्क परे झैँ गरी
**तां** = ती अदितिलाई
**आह** = भने
**अहो** = आश्चर्य छ
**विष्णोः** = भगवान् नारायणको
**मायाबलं** = मायाशक्ति (जुन शक्तिबाट)
**इदं** = यो
**जगत्** = जगत्
**स्नेहबद्धम्** = स्नेहद्वारा बाँधिएको छ

**वाक्यार्थ—** अदितिले यसप्रकार प्रार्थना गरिसकेपछि कश्यप मुनिले छक्क परे झैँ गरी उनलाई भने— अहो भगवान् नारायणको मायाशक्ति विचित्र छ, जुन शक्तिबाट यो सम्पूर्ण जगत् स्नेहमा बाँधिएको छ।

**क्व देहो भौतिकोऽनात्मा क्व चात्मा प्रकृतेः परः।**
**कस्य के पतिपुत्राद्या मोह एव हि कारणम्॥ १९॥**

**पदार्थ—**
**भौतिकः** = पञ्चमहाभूतबाट उत्पन्न
**अनात्मा** = आत्मादेखि भिन्न
**देहः** = शरीर
**क्व** = कहाँ
**प्रकृतेः** = त्रिगुणात्मक प्रकृतिभन्दा
**परः** = पर रहेको
**आत्मा च** = आत्मा
**क्व** = कहाँ
**कस्य** = कसको
**के** = को
**पतिपुत्राद्याः** = पति, पुत्र आदि छन्
**मोहः** = मोह
**एव** = नै
**हि** = निश्चय नै
**कारणम्** = (स्नेहको) कारण हो

**वाक्यार्थ—** पञ्चमहाभूतको कार्य अनात्मा यो अनित्य शरीर कहाँ ? त्रिगुणात्मक प्रकृतिभन्दा पनि पर रहेको नित्य आत्मा कहाँ ? यहाँ कसैको कोही पनि पति, पुत्र आदि छैन। मोह नै स्नेहको कारण हो।

**उपतिष्ठस्व पुरुषं भगवन्तं जनार्दनम्।**
**सर्वभूतगुहावासं वासुदेवं जगद्‌गुरुम्॥ २०॥**

**पदार्थ—**
**पुरुषं** = परमपुरुष
**सर्वभूतगुहावासं** = सम्पूर्ण प्राणीहरूको हृदयमा निवास गर्ने
**जनार्दनम्** = भक्तहरूको दुःखलाई हटाउने
**जगद्‌गुरुम्** = चराचर जगत्का गुरु
**भगवन्तं** = भगवान्
**वासुदेवं** = वासुदेवलाई
**उपतिष्ठस्व** = उपासना गर

**वाक्यार्थ—** हे अदिति ! तिमी सम्पूर्ण प्राणीहरूको हृदयमा निवास गर्ने, चराचर जगत्का गुरु एवं भक्तहरूको दुःखलाई हटाउने परमपुरुष भगवान् वासुदेवको उपासना गर।

**स विधास्यति ते कामान् हरिर्दीनानुकम्पनः।**
**अमोघा भगवद्‌भक्तिर्नेतरेति मतिर्मम॥ २१॥**

**पदार्थ—**
**दीनानुकम्पनः** = दीन दुःखीहरूलाई दया गर्ने
**सः** = उहाँ भगवान्
**हरिः** = वासुदेवले नै
**ते** = तिम्रा
**कामान्** = कामनाहरू
**विधास्यति** = पूर्ण गर्नुहुनेछ
**भगवद्‌भक्तिः** = भगवान्को भक्ति
**अमोघाः** = निश्चय नै फल दिने हुन्छ

| | | |
|---|---|---|
| **इतरा** = अरूमा गरिएको भक्ति | **इति** = यस्तो | **मतिः** = विचार छ |
| **न** = फलदायी हुँदैन | **मम** = मेरो | |

**वाक्यार्थ–** दीन दुःखीहरूलाई दया गर्ने भगवान्ले नै तिम्रो सम्पूर्ण कामना पूर्ण गरिदिनुहुनेछ। किनभने भगवान्को भक्ति अवश्य फलदायी हुन्छ, व्यर्थ हुँदैन तर अरूमा गरिएको भक्ति त्यस्तो हुँदैन भन्ने मेरो विचार छ।

**अदितिरुवाच** (अदितिले भनिन्)

**केनाहं विधिना ब्रह्मन्नुपस्थास्ये जगत्पतिम्।**
**यथा मे सत्यसङ्कल्पो विदध्यात् स मनोरथम्॥ २२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **केन** = कुन | **सः** = उहाँ वासुदेवले |
| **ब्रह्मन्** = हे ब्राह्मण | **विधिना** = विधिद्वारा | **मे** = मेरो |
| **अहं** = म | **उपस्थास्ये** = उपासना गरूँ | **मनोरथम्** = इच्छालाई |
| **जगत्पतिम्** = जगत्का स्वामी | **यथा** = जसद्वारा | **विदध्यात्** = पूर्ण गर्नुहुनेछ |
| भगवान् वासुदेवलाई | **सत्यसङ्कल्पः** = सत्यसङ्कल्प | |

**वाक्यार्थ–** हे ब्राह्मण ! सम्पूर्ण जगत्का स्वामी वासुदेवलाई म कुन विधिद्वारा उपासना गरूँ ? जुन विधिपूर्वकको उपासनाद्वारा प्रसन्न भई सत्यसङ्कल्प भगवान्ले मेरा सम्पूर्ण इच्छाहरूलाई पूर्ण गर्नुहुनेछ।

**आदिश त्वं द्विजश्रेष्ठ विधिं तदुपधावनम्।**
**आशु तुष्यति मे देवः सीदन्त्याः सह पुत्रकैः॥ २३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **देवः** = भगवान् | भगवान्को उपासना गर्ने |
| **द्विजश्रेष्ठ** = हे ब्राह्मणश्रेष्ठ | **आशु** = छिटो | **विधिं** = विधि |
| **पुत्रकैः सह** = छोराहरूले सहित | **तुष्यति** = प्रसन्न हुनुहुन्छ | **आदिश** = बताउनुहोस् |
| **सीदन्त्याः** = दुःख पाएकी | **त्वं** = हजुर | |
| **मे** = मप्रति | **तदुपधावनम्** = त्यस्ता | |

**वाक्यार्थ–** हे ब्राह्मणश्रेष्ठ पतिदेव ! अहिले छोराहरू सहित मैले अत्यन्त दुःख पाएकी छु। त्यसैले भगवान् नारायण मप्रति कसरी छिटो प्रसन्न हुनुहुन्छ त्यस्तो उपासनाविधि मलाई बताउनुहोस्।

**कश्यप उवाच** (कश्यप मुनिले भन्नुभयो)

**एतन्मे भगवान् पृष्टः प्रजाकामस्य पद्मजः।**
**यदाह ते प्रवक्ष्यामि व्रतं केशवतोषणम्॥ २४॥**

**पदार्थ—**
**भगवान्** = भगवान्
**पद्मजः** = ब्रह्माजीले
**पृष्टः** = मद्वारा प्रश्न गरिँदा
**प्रजाकामस्य** = प्रजाको उत्पत्ति चाहने
**मे** = मलाई
**यत्** = जुन व्रतको विधि
**आह** = बताउनुभयो
**केशवतोषणम्** = भगवान् वासुदेवलाई प्रसन्न गराउने
**एतत्** = त्यो
**व्रतं** = व्रत
**ते** = तिमीलाई
**प्रवक्ष्यामि** = बताउँछु

**वाक्यार्थ—** हे अदिति ! मलाई सन्तान प्राप्त गर्ने इच्छा हुँदा मैले यस विषयमा भगवान् ब्रह्माजीलाई सोधेँ। त्यसवेला उहाँले भगवान् वासुदेवलाई प्रसन्न गराउने जुन व्रत मलाई बताउनुभयो त्यो म तिमीलाई बताउँछु।

**फाल्गुनस्यामले पक्षे द्वादशाहं पयोव्रतः।**
**अर्चयेदरविन्दाक्षं भक्त्या परमयान्वितः॥ २५॥**

**पदार्थ—**
**फाल्गुनस्य** = फागुन महिनाको
**अमले पक्षे** = शुक्ल पक्षमा
**द्वादशाहं** = बाह्र दिनसम्म
**पयोव्रतः** = दूध मात्र पिउने व्रत लिएर
**परमया भक्त्या** = परमभक्तिले
**अन्वितः** = युक्त भई
**अरविन्दाक्षं** = कमलनयन भगवान्लाई
**अर्चयेत्** = पूजा गर्नू

**वाक्यार्थ—** फागुन महिनाको शुक्लपक्षमा बाह्रदिन (प्रतिपदादेखि द्वादशीसम्म) केवल दूध मात्र पिएर परमभक्तिले युक्त भई कमलनयन भगवान् नारायणको पूजा गर्नू।

**सिनीवाल्यां मृदालिप्य स्नायात् क्रोडविदीर्णया।**
**यदि लभ्येत वै स्रोतस्येतं मन्त्रमुदीरयेत्॥ २६॥**

**पदार्थ—**
**यदि वै** = यदि
**लभ्येत** = पाइन्छ भने
**क्रोडविदीर्णया** = बँदेलले खनेको
**मृदा** = माटाले
**आलिप्य** = लेपन गरेर
**सिनीवाल्यां** = औँसीको दिनमा
**स्रोतसि** = नदीमा
**स्नायात्** = नुहाउनू (नुहाउँदा)
**एतं** = यो
**मन्त्रं** = मन्त्र
**उदीरयेत्** = उच्चारण गर्नू

**वाक्यार्थ—** यदि पाइन्छ भने बँदेलले खनेको माटो शरीरमा दलेर औँसीको दिन नदीमा स्नान गर्नू। स्नान गर्दा यो मन्त्रको उच्चारण पनि गर्नू।

**त्वं देव्यादिवराहेण रसायाः स्थानमिच्छता।**
**उद्धृतासि नमस्तुभ्यं पाप्मानं मे प्रणाशय॥ २७॥**

**पदार्थ—**
**देवि** = हे भगवती पृथिवी
**स्थानम्** = प्राणीहरूलाई बस्ने ठाउँको
**इच्छता** = इच्छा गर्ने
**आदिवराहेण** = आदि वराहावतार भगवान्द्वारा
**त्वं** = हजुर
**रसायाः** = रसातलबाट

**उद्धृता** = उद्धार गरिएकी
**असि** = हुनुहुन्छ (अतः)
**मे** = मेरो
**पाप्मानं** = पापलाई
**प्रणाशय** = नष्ट गर्नुहोस्
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवती पृथिवी ! प्राणीहरूलाई बस्ने ठाउँ होस् भन्ने इच्छा गरी वराहरूप भगवान्‌ले रसातलबाट उद्धार गरिएकी हजुरले मेरा सम्पूर्ण पापहरूलाई नष्ट गर्नुहोस्, हजुरलाई नमस्कार छ।

**निर्वर्तितात्मनियमो देवमर्चेत् समाहितः।**

**अर्चायां स्थण्डिले सूर्ये जले वह्नौ गुरावपि॥ २८॥**

**पदार्थ–**
**निर्वर्तितात्मनियमः** = आफ्ना नित्यनैमित्तिक कर्महरू सम्पन्न गरी
**समाहितः** = एकाग्रचित्त भई
**अर्चायां** = मूर्तिमा
**स्थण्डिले** = वेदीमा
**सूर्ये** = सूर्यमा
**जले** = जलमा
**वह्नौ** = अग्निमा
**गुरौ अपि** = गुरुको रूपमा पनि
**देवं** = भगवान् नारायणलाई
**अर्चेत्** = पूजा गर्नू

**वाक्यार्थ–** त्यसपछि आफ्ना नित्यनैमित्तिक कर्महरू सम्पन्न गरेर एकाग्र चित्त भई मूर्ति, वेदी, सूर्य, जल, अग्नि र गुरुको रूपमा भगवान् नारायणको पूजा गर्नू (र यसरी स्तुति गर्नू)।

**नमस्तुभ्यं भगवते पुरुषाय महीयसे।**

**सर्वभूतनिवासाय वासुदेवाय साक्षिणे॥ २९॥**

**पदार्थ–**
**भगवते** = भगवान्
**पुरुषाय** = परमपुरुष
**महीयसे** = सर्वश्रेष्ठ
**सर्वभूतनिवासाय** = सम्पूर्ण प्राणीहरूको हृदयमा निवास गर्नुहुने
**साक्षिणे** = साक्षी
**वासुदेवाय** = वासुदेव
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** जो सर्वश्रेष्ठ परमपुरुष हुनुहुन्छ र जो सम्पूर्ण प्राणीहरूको हृदयमा साक्षीरूपले विराजमान हुनुहुन्छ यस्ता भगवान् वासुदेवलाई नमस्कार गर्दछु।

**नमोऽव्यक्ताय सूक्ष्माय प्रधानपुरुषाय च।**

**चतुर्विंशद्गुणज्ञाय गुणसङ्ख्यानहेतवे॥ ३०॥**

**पदार्थ–**
**अव्यक्ताय** = अव्यक्त
**सूक्ष्माय** = सूक्ष्म
**प्रधानपुरुषाय** = प्रकृति र पुरुषको रूपमा विद्यमान
**चतुर्विंशद्गुणज्ञाय** = चौबीस गुणहरूको ज्ञाता
**गुणसङ्ख्यानहेतवे च** = साङ्ख्य दर्शनका प्रवर्तक हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** जो अव्यक्त र सूक्ष्म हुनुहुन्छ, जो प्रकृति र पुरुषको रूपमा रहनुभएको छ, जो चौबीस गुणहरू (वैशेषिकहरूले बताउने रूप आदि)को ज्ञाता हुनुहुन्छ अनि जो साङ्ख्य दर्शनका प्रवर्तक पनि हुनुहुन्छ त्यस्ता हजुरलाई सादर नमस्कार गर्दछु।

**टिप्पणी–** न्याय र वैशेषिक दर्शनमा चौबीस गुणहरू मानिन्छन्। ती गुणहरू यसप्रकार छन्– १. रूप २. रस ३. गन्ध ४. स्पर्श ५. सङ्ख्या ६. परिमाण ७. पृथक्त्व ८. संयोग ९. विभाग १०. परत्व ११. अपरत्व १२. बुद्धि १३. सुख १४. दुःख १५. इच्छा १६. द्वेष १७. प्रयत्न १८. गुरुत्व १९. द्रवत्व २०. स्नेह २१. संस्कार २२. धर्म २३. अधर्म २४. शब्द।

साङ्ख्य दर्शनका प्रवर्तक महर्षि कपिल भगवान्का अवतार हुनुहुन्छ।

**नमो द्विशीर्ष्णे त्रिपदे चतुःशृङ्गाय तन्तवे।**
**सप्तहस्ताय यज्ञाय त्रयीविद्यात्मने नमः॥ ३१॥**

**पदार्थ–**
**द्विशीर्ष्णे** = प्रायणीय र उदयनीय दुई शिर भएका
**त्रिपदे** = प्रातः, मध्याह्न र सायङ्कालरूप सवन नै तीन पाउ भएका
**चतुःशृङ्गाय** = ऋक्, यजुः, साम र अथर्वरूप वेद नै चार सिङ भएका
**सप्तहस्ताय** = गायत्री आदि सात ओटा छन्द नै हात भएका
**तन्तवे** = यज्ञविस्तारक
**यज्ञाय** = यज्ञरूप हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**त्रयीविद्यात्मने** = वेदविद्या नै आत्मास्वरूप भएका हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** जसका प्रायणीय र उदयनीय गरी दुई शिर; प्रातः, मध्याह्न र सायङ्काल तीन सवनहरू तीन पाउ; ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद चार वेद चार सिङ; गायत्री, त्रिष्टुप्, अनुष्टुप्, जगती, बृहती, पङ्क्ति, विराट् सात छन्दहरू सात हातहरू हुन् यस्ता यज्ञविस्तारक र यज्ञरूप हजुरलाई नमस्कार गर्दछु। यसप्रकार वेदविद्या नै आत्मस्वरूप भएका हजुरलाई नमस्कार छ।

**विवरण–** यस श्लोकमा यज्ञरूपमा भगवान्को स्तुति गरिएको छ। यज्ञका दई शिर छन्, तीन पाउ छन्, चार सिंग छन् र सात हात छन्। यस श्लोकले **चत्वारि शृङ्गास्त्रयोऽस्य पादा द्वे शीर्षे सप्तहस्तासोऽस्य। त्रिधा बद्धो वृषभो रोरवीति महो देवो मर्त्याँऽआविवेश** भन्ने ऋग्वेद (४/५८/३)को मन्त्रको अर्थ बताएको छ। चार वेद नै यज्ञका चार सिङ हुन्। तीन ओटा कर्म नै तीन पाउ हुन्। प्रायणीय र उदयनीय नामका कर्म नै दुई शिर हुन्। गायत्री, त्रिष्टुप्, जगती आदि सात छन्द नै सात हात हुन्। यज्ञलाई तीन ग्रन्थले बताउँछन्। यसैले यज्ञ यिनीहरूद्वारा बाँधिएको वा व्यवस्थित भएको छ। मन्त्र भाग भनेको मूल संहिता खण्ड हो। ब्राह्मण भनेको नियमहरू बताउने खण्ड हो भने कल्प भनेको यज्ञका विधिविधानलाई बताउने प्रक्रियाग्रन्थ हो, यिनीहरूद्वारा यज्ञ बाँधिएको हुन्छ। यस्तो यज्ञ **रोरवीति** अर्थात् शब्द गर्छ। यज्ञमा ऋग्वेदका मन्त्रहरूद्वारा देवताहरूको आवाहन आदि गरिन्छ, यजुर्वेदका मन्त्रहरूद्वारा हवन गरिन्छ र सामवेदका मन्त्रहरूद्वारा स्तुति गरिन्छ, यही नै यज्ञले शब्द गर्नु हो। **त्रयी विद्या** अर्थात् वेद नै यज्ञको आत्मा अर्थात् मूल हो। यसरी यज्ञस्वरूप परमात्माको स्तुति गरिएको छ।

**नमः शिवाय रुद्राय नमः शक्तिधराय च।**
**सर्वविद्याधिपतये भूतानां पतये नमः॥ ३२॥**

**पदार्थ—**
**शिवाय** = लोककल्याणकारी शिव
**रुद्राय** = प्रलयकर्ता रुद्र
**शक्तिधराय** = समग्र शक्तिहरूको धारणकर्ता
**सर्वविद्याधिपतये** = सम्पूर्ण ज्ञानहरूको अधीश्वर
**भूतानां** = सम्पूर्ण प्राणीहरूका
**पतये च** = पति (हजुरलाई)
**नमो नमः नमः** = बारम्बार नमस्कार गर्दछु

**वाक्यार्थ—** जो लोकको कल्याणका लागि शिवरूपमा प्रकट हुनुहुन्छ र लोकको प्रलय गर्न रुद्ररूपमा रहनुहुन्छ, जसले जगत्को सृष्टि, स्थिति र लय गर्नुहुन्छ र जसले सम्पूर्ण शक्तिहरूलाई धारण गर्नुभएको छ, जो अष्टादश विद्याका स्वामी हुनुहुन्छ र जो सम्पूर्ण प्राणीहरूको मालिक हुनुहुन्छ यस्ता हजुरलाई म बारम्बार नमस्कार गर्दछु।

**नमो हिरण्यगर्भाय प्राणाय जगदात्मने।**
**योगैश्वर्यशरीराय नमस्ते योगहेतवे॥ ३३॥**

**पदार्थ—**
**हिरण्यगर्भाय** = हिरण्यगर्भ
**प्राणाय** = सूत्रात्मा (प्राण)
**जगदात्मने** = चराचर जगत्को आत्मा
**योगैश्वर्यशरीराय** = योगबाट उत्पन्न हुने ऐश्वर्य नै शरीर भएका
**योगहेतवे** = योगका कारण
**ते** = हजुरलाई
**नमो नमः** = बारम्बार नमस्कार गर्दछु

**वाक्यार्थ—** जो हिरण्यगर्भ र सूत्रात्मा (प्राण)को रूपमा विराजमान हुनुहुन्छ, जो चराचर जगत्को आत्मा हुनुहुन्छ, जो योगको कारण (प्रवर्तक) हुनुहुन्छ तथा योगजन्य ऐश्वर्यको रूपमा पनि रहनुभएको छ यस्ता हजुरलाई म बारम्बार नमस्कार गर्दछु।

**नमस्त आदिदेवाय साक्षिभूताय ते नमः।**
**नारायणाय ऋषये नराय हरये नमः॥ ३४॥**

**पदार्थ—**
**आदिदेवाय** = आदिदेव
**साक्षिभूताय** = सम्पूर्ण प्राणीहरूका साक्षी
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ
**नराय नारायणाय ऋषये** = नरनारायण ऋषिको रूपमा प्रकट हुनुभएका
**हरये** = श्रीहरि
**ते** = हजुरलाई
**नमः नमः** = बारम्बार नमस्कार छ

**वाक्यार्थ—** सम्पूर्ण प्राणीहरूका साक्षी आदिदेव हजुरलाई नमस्कार छ। नरनारायण ऋषिको रूपमा प्रकट हुनुभएका श्रीहरि हजुरलाई बारम्बार नमस्कार छ।

**नमो मरकतश्यामवपुषेऽधिगतश्रिये ।**
**केशवाय नमस्तुभ्यं नमस्ते पीतवाससे ॥ ३५ ॥**

**पदार्थ–**
**मरकतश्यामवपुषे** = मरकत मणि ॐ श्यामवर्ण भएका (हजुरलाई)
**नमः** = नमस्कार छ
**अधिगतश्रिये** = सम्पूर्ण सम्पत्तिले पूर्ण लक्ष्मीलाई प्राप्त गरेका
**केशवाय** = भगवान् केशव
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ
**पीतवाससे** = पहेँलो वस्त्र लगाउनुहुने
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** मरकत मणि ॐ श्यामवर्ण भएका हजुरलाई नमस्कार छ। सम्पूर्ण सम्पत्तिकी स्वामिनी स्वयं लक्ष्मीलाई पत्नीको रूपमा प्राप्त गरेका केशवरूप हजुरलाई नमस्कार छ। पहेँलो वस्त्र लगाउनुहुने हजुरलाई नमस्कार छ।

**त्वं सर्ववरदः पुंसां वरेण्य वरदर्षभ ।**
**अतस्ते श्रेयसे धीराः पादरेणुमुपासते ॥ ३६ ॥**

**पदार्थ–**
**वरेण्य** = हे पूज्यतम प्रभु
**वरदर्षभ** = हे वरदाता पुरुषहरूमा श्रेष्ठ भगवान्
**त्वं** = हजुर
**पुंसां** = मानिसहरूका लागि
**सर्ववरदः** = सम्पूर्ण वरप्रदाता हुनुहुन्छ
**अतः** = त्यसैले
**धीराः** = विवेकीहरू
**श्रेयसे** = आफ्नो कल्याणका लागि
**ते** = हजुरको
**पादरेणुं** = चरणरजलाई
**उपासते** = उपासना गर्दछन्

**वाक्यार्थ–** हे पूज्यतम प्रभु ! हजुर मानिसहरूका लागि सम्पूर्ण प्रकारको वरदाता हुनुहुन्छ र वरदाताहरूमा हजुर नै श्रेष्ठ हुनुहुन्छ। त्यसैले विवेकीहरू आफ्नो कल्याणका लागि हजुरको चरणरजको उपासना गर्दछन्।

**अन्ववर्तन्त यं देवाः श्रीश्च तत्पादपद्मयोः ।**
**स्पृहयन्त इवामोदं भगवान् मे प्रसीदताम् ॥ ३७ ॥**

**पदार्थ–**
**तत्पादपद्मयोः** = हजुरको चरणकमलको
**अमोदं** = सुगन्धलाई
**स्पृहयन्तः इव** = चाहना गर्ने
**देवाः** = सम्पूर्ण देवताहरू
**श्रीः च** = स्वयं लक्ष्मीजी पनि
**यं** = जुन भगवान् नारायणलाई
**अन्ववर्तन्त** = सेवा गर्नुहुन्छ त्यस्ता
**भगवान्** = भगवान् नारायण
**मे** = मसँग
**प्रसीदताम्** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** जसको चरणकमलको सुगन्धलाई प्राप्त गर्ने इच्छा गरी सम्पूर्ण देवता र भगवती लक्ष्मीजी सेवा गरिरहनुहुन्छ त्यस्ता भगवान् नारायण मसँग प्रसन्न हुनुहोस्।

**एतैर्मन्त्रैर्हृषीकेशमावाहनपुरस्कृतम् ।**
**अर्चयेच्छ्रद्धया युक्तः पाद्योपस्पर्शनादिभिः ॥ ३८ ॥**

**पदार्थ—**
**एतैः** = यी
**मन्त्रैः** = मन्त्रहरूद्वारा
**आवाहनपुरस्कृतम्** = आवाहनपूर्वक आफ्नो अगाडि स्थापित
**हृषीकेशं** = भगवान् हृषीकेशलाई
**श्रद्धया** = श्रद्धाले
**युक्तः** = युक्त भई
**पाद्योपस्पर्शनादिभिः** = पाद्य, आचमन आदिद्वारा
**अर्चयेत्** = पूजा गर्नू

**वाक्यार्थ—** उक्त मन्त्रहरूद्वारा आवाहनपूर्वक आराधनाका लागि आफ्नो अगाडि स्थापना गरिएका भगवान् हृषीकेशलाई श्रद्धावान् भई पाद्य, आचमन आदि समर्पण गरी पूजा गर्नू।

**अर्चित्वा गन्धमाल्याद्यैः पयसा स्नपयेद् विभुम् ।**
**वस्त्रोपवीताभरणपाद्योपस्पर्शनैस्ततः ।**
**गन्धधूपादिभिश्चार्चेद् द्वादशाक्षरविद्यया ॥ ३९ ॥**

**पदार्थ—**
**द्वादशाक्षरविद्यया** = **'ॐ नमो भगवते वासुदेवाय'** यो द्वादशाक्षर मन्त्रद्वारा
**गन्धमाल्याद्यैः** = सुगन्धित वस्तु, माला आदि समर्पण गरी
**अर्चित्वा** = पूजा गरी
**विभुं** = सर्वव्यापक भगवान्लाई
**पयसा** = दुधले
**स्नपयेत्** = स्नान गराउनू
**ततः** = त्यसपछि (द्वादशाक्षर मन्त्र पढ्दै)
**वस्त्रोपवीताभरणपाद्योपस्पर्शनैः** = वस्त्र, जनै, गहना, पाद्य, आचमन आदि र
**गन्धधूपादिभिः च** = सुगन्धित वस्तु, धूप जस्ता सामग्रीहरूद्वारा
**अर्चेत्** = पूजा गर्नू

**वाक्यार्थ— 'ॐ नमो भगवते वासुदेवाय'** यो द्वादशाक्षर मन्त्रपाठ गर्दै सुगन्धित वस्तु, माला आदि पूजाद्रव्य समर्पण गरेर पूजा गरी भगवान्लाई दुधले स्नान गराउनू। त्यसपछि त्यही द्वादशाक्षर मन्त्रपाठपूर्वक वस्त्र, जनै, गहना, पाद्य, आचमन, सुगन्धित वस्तु, धूप, दीप जस्ता पूजासामग्रीहरूद्वारा फेरि पनि भगवान्को पूजा गर्नू।

**शृतं पयसि नैवेद्यं शाल्यन्नं विभवे सति ।**
**ससर्पिः सगुडं दत्त्वा जुहुयान्मूलविद्यया ॥ ४० ॥**

**पदार्थ—**
**विभवे सति** = सम्भव भएसम्म
**पयसि** = दुधमा
**शृतं** = पकाइएको
**ससर्पिः** = घिउ र
**सगुडं** = सखरले युक्त
**शाल्यन्नं** = शालिको चामलको
**नैवेद्यं** = नैवेद्य
**दत्त्वा** = चढाएर
**मूलविद्यया** = द्वादशाक्षर मन्त्रद्वारा
**जुहुयात्** = हवन गर्नू

**वाक्यार्थ—** सम्भव भएसम्म घिउ र सखर मिसाएर दुधमा पकाएको शालिचामलको पायस नैवेद्यको रूपमा भगवान्लाई चढाउनू र द्वादशाक्षर मन्त्रले हवन गर्नू।

**निवेदितं तद् भक्ताय दद्याद् भुञ्जीत वा स्वयम्।**
**दत्त्वाचमनमर्चित्वा ताम्बूलं च निवेदयेत्॥ ४१॥**

**पदार्थ—**
**निवेदितं** = भगवान्लाई चढाइएको
**तत्** = त्यो नैवेद्य
**भक्ताय** = भक्तलाई
**दद्यात्** = दिनू
**स्वयम् वा** = अथवा आफूले
**भुञ्जीत** = खानू
**आचमनं** = आचमन
**दत्त्वा** = चढाएर
**अर्चित्वा** = पूजा गरेपछि
**ताम्बूलं च** = पान पनि
**निवेदयेत्** = चढाउनू

**वाक्यार्थ—** भगवान्लाई चढाएको नैवेद्य भगवान्का भक्तहरूलाई दिनू अथवा आफूले खानू। नैवेद्य चढाएपछि आचमन पनि चढाउनू अनि पूजा गरेर पान पनि चढाउनू।

**जपेदष्टोत्तरशतं स्तुवीत स्तुतिभिः प्रभुम्।**
**कृत्वा प्रदक्षिणं भूमौ प्रणमेद् दण्डवन्मुदा॥ ४२॥**

**पदार्थ—**
**अष्टोत्तरशतं** = एकसय आठ पटक द्वादशाक्षर मन्त्र
**जपेत्** = जप्नू
**स्तुतिभिः** = स्तुतिहरूद्वारा
**प्रभुम्** = भगवान्लाई
**स्तुवीत** = प्रार्थना गर्नू
**प्रदक्षिणं** = प्रदक्षिणा
**कृत्वा** = गरेर
**मुदा** = प्रसन्नतापूर्वक
**भूमौ** = पृथिवीमा
**दण्डवत्** = दण्डवत्
**प्रणमेत्** = प्रणाम गर्नू

**वाक्यार्थ—** त्यसपछि एकसय आठ पटक द्वादशाक्षर मन्त्रको जप गरेर पूर्वोक्त स्तुति वा अन्य स्तुतिमन्त्रहरू पाठ गरेर भगवान्को प्रार्थना गर्नू। प्रार्थना सकेपछि भगवान्लाई प्रदक्षिणा गरेर प्रसन्नतापूर्वक पृथिवीमा लम्पसार परेर दण्डवत् प्रणाम गर्नू।

**कृत्वा शिरसि तच्छेषां देवमुद्वासयेत् ततः।**
**द्व्यवरान् भोजयेद् विप्रान् पायसेन यथोचितम्॥ ४३॥**

**पदार्थ—**
**तच्छेषां** = त्यस निर्माल्य (पूजामा देवतालाई चढाउन बाँकी रहेका सामग्रीहरू)लाई
**शिरसि** = आफ्नो शिरमाथि
**कृत्वा** = लिएर
**देवं** = भगवान्लाई
**उद्वासयेत्** = विसर्जन गर्नू
**ततः** = त्यसपछि
**द्व्यवरान्** = कम्तीमा दुईजना
**विप्रान्** = ब्राह्मणहरूलाई
**पायसेन** = पायसद्वारा
**यथोचितं** = यथोचित
**भोजयेत्** = भोजन गराउनू

**वाक्यार्थ—** त्यसपछि त्यस निर्माल्यलाई आफ्नो शिरमाथि लिनू र भगवान्को विसर्जन गर्नू। पूजा सकिएपछि कम्तीमा दुईजना ब्राह्मणहरूलाई यथोचित रूपमा पायसको भोजन गराउनू।

**भुञ्जीत तैरनुज्ञातः शेषं सेष्टः सभाजितैः ।**
**ब्रह्मचार्यथ तद्रात्र्यां श्वो भूते प्रथमेऽहनि ॥ ४४ ॥**
**स्नातः शुचिर्यथोक्तेन विधिना सुसमाहितः ।**
**पयसा स्नापयित्वार्चेद् यावद्व्रतसमापनम् ॥ ४५ ॥**

**पदार्थ–**
**सभाजितैः** = भोजन र दक्षिणाद्वारा पूजित
**तैः** = ती ब्राह्मणहरूबाट
**अनुज्ञातः** = आज्ञा लिएर
**शेषं** = ब्राह्मणभोजनबाट बाँकी रहेको अन्न
**सेष्टः** = बन्धुपरिवारहरू सहित भएर
**भुञ्जीत** = भोजन गर्नू
**अथ** = त्यसपछि
**तद्रात्र्यां** = त्यस दिनको रात
**ब्रह्मचारी** = ब्रह्मचारी भएर (समागम नगरी) सुत्नू
**श्वो भूते** = भोलिपल्ट
**प्रथमे अहनि** = प्रतिपदामा (प्रातःकालमा)
**स्नातः** = स्नान गरी
**शुचिः** = पवित्र भई
**सुसमाहितः** = अत्यन्त सावधान भएर (एकाग्र भई)
**यथोक्तेन** = पूर्ववर्णित
**विधिना** = विधिद्वारा
**पयसा** = दुधले
**स्नापयित्वा** = स्नान गराएर
**यावद्व्रतसमापनम्** = व्रतसमाप्तिपर्यन्त
**अर्चेत्** = पूजा गर्नू

**वाक्यार्थ–** भोजन र दक्षिणाद्वारा सन्तुष्ट भएका ब्राह्मणहरूको अनुमति लिएर बाँकी रहेको अन्न बन्धुपरिवारहरू सहित भएर व्रतालुले प्रसादका रूपमा खानू। त्यसपछि त्यो दिनको रातमा ब्रह्मचारी भएर रहनू वा समागम नगरी सुत्नू। भोलिपल्ट बिहान प्रातःकालमा स्नान गरेर पवित्र भई एकाग्रमनद्वारा पूर्वोक्त पूजाविधिले व्रतसमाप्ति नहुन्जेलसम्म भगवान्लाई दुधले स्नान गराई पूजा गर्नू।

**पयोभक्षो व्रतमिदं चरेद् विष्ण्वर्चनादृतः ।**
**पूर्ववज्जुहुयादग्निं ब्राह्मणांश्चापि भोजयेत् ॥ ४६ ॥**

**पदार्थ–**
**पयोभक्षः** = दुध मात्र पिएर
**विष्ण्वर्चनादृतः** = भगवान् विष्णुको आदरपूर्वक पूजा गर्ने व्रतालुले
**इदं** = यो
**व्रतम्** = व्रत
**चरेत्** = गर्नू
**पूर्ववत्** = अगाडि बताए झैं
**अग्निं च** = अग्निमा पनि
**जुहुयात्** = हवन गर्नू
**ब्राह्मणान् अपि** = ब्राह्मणलाई पनि
**भोजयेत्** = भोजन गराउनू

**वाक्यार्थ–** भगवान् विष्णुमा भक्तिभाव र आदरबुद्धि गरेर केवल दुध मात्र पिएर व्रतालुले यो पयोव्रत नामक व्रतको अनुष्ठान गर्नुपर्दछ र व्रत गर्दा पहिले जस्तै प्रतिदिन अग्निमा हवन गर्नुपर्छ अनि ब्राह्मणभोजन पनि गराउनुपर्दछ।

**एवं त्वहरहः कुर्याद् द्वादशाहं पयोव्रतः।**
**हरेराराधनं होममर्हणं द्विजतर्पणम्॥ ४७॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**द्वादशाहं** = बाह्र दिनसम्म
**पयोव्रतः तु** = दुध मात्र पिएर व्रत गर्ने व्रतालुले
**अहरहः** = प्रतिदिन
**हरेः** = भगवान् श्रीहरिको
**आराधनं** = स्तुति
**होमं** = हवन
**अर्हणं** = पूजा र
**द्विजतर्पणं** = ब्राह्मणभोजन
**कुर्यात्** = गर्नुपर्दछ

**वाक्यार्थ–** यसरी बाह्र दिनसम्म दुध मात्र पिएर व्रत गर्ने व्रतालुले प्रतिदिन भगवान् श्रीहरिको पूजा, स्तुति, होम गर्नुपर्दछ र ब्राह्मणभोजन समेत गराउनुपर्दछ।

**प्रतिपद्दिनमारभ्य यावच्छुक्लत्रयोदशीम्।**
**ब्रह्मचर्यमधःस्वप्नं स्नानं त्रिषवणं चरेत्॥ ४८॥**

**पदार्थ–**
**प्रतिपद्दिनं** = प्रतिपदाको दिनदेखि
**आरभ्य** = आरम्भ गरेर
**यावच्छुक्लत्रयोदशीम्** = शुक्लपक्षको त्रयोदशी तिथिसम्म
**ब्रह्मचर्यम्** = ब्रह्मचर्यमा (रहनुपर्दछ)
**अधःस्वप्नं** = भुइँमा सुत्नुपर्दछ
**त्रिषवणं** = त्रिकालको विधिले
**स्नानं** = स्नान
**चरेत्** = गर्नुपर्दछ

**वाक्यार्थ–** फाल्गुन शुक्ल प्रतिपदादेखि त्रयोदशीसम्म व्रतालुले ब्रह्मचर्यमा रहनुपर्दछ। भुइँमा सुत्नुपर्दछ र प्रत्येक दिन त्रिकाल स्नान गर्नुपर्दछ।

**वर्जयेदसदालापं भोगानुच्चावचांस्तथा।**
**अहिंस्रः सर्वभूतानां वासुदेवपरायणः॥ ४९॥**

**पदार्थ–**
**असदालापं** = झुटो बोल्ने काम
**वर्जयेत्** = छोड्नू
**उच्चावचान्** = साना-ठुला सबै
**भोगान्** = भोगहरू (छोड्नू)
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**अहिंस्रः** = हिंसा नगर्नू
**तथा** = तथा
**वासुदेवपरायणः** = भगवान् वासुदेवलाई नै आफ्नो परम लक्ष्य बनाइरहनू

**वाक्यार्थ–** व्रतालुले झुटो नबोल्नू। अनि साना-ठुला सबै प्रकारका भोगहरूलाई त्याग्नू। कुनै पनि प्राणीको हिंसा नगर्नू र भगवान् वासुदेवलाई नै आफ्नो परम लक्ष्य बनाइरहनू।

**त्रयोदश्यामथो विष्णोः स्नपनं पञ्चकैर्विभोः।**
**कारयेच्छास्त्रदृष्टेन विधिना विधिकोविदैः॥ ५०॥**

**पदार्थ–**
**अथ** = एवं रीतले
**त्रयोदश्यां** = त्रयोदशी तिथिमा
**विधिकोविदैः** = शास्त्रीय विधि जान्ने ब्राह्मणहरूद्वारा
**शास्त्रदृष्टेन** = शास्त्रीय

**विधिना** = विधिपूर्वक
**पञ्चकैः** = पञ्चामृतले
**विभोः** = सर्वव्यापक
**विष्णोः** = भगवान् विष्णुको
**स्नपनं** = स्नान
**कारयेत्** = गराउनू

**वाक्यार्थ–** यसरी त्रयोदशीका दिन शास्त्रज्ञ ब्राह्मणहरूद्वारा शास्त्रीय विधिपूर्वक पञ्चामृतले सर्वव्यापक भगवान् विष्णुको स्नान गराउनू।

**पूजां च महतीं कुर्याद् वित्तशाठ्यविवर्जितः।**

**चरुं निरूप्य पयसि शिपिविष्टाय विष्णवे॥ ५१॥**

**शृतेन तेन पुरुषं यजेत सुसमाहितः।**

**नैवेद्यं चातिगुणवद् दद्यात् पुरुषतुष्टिदम्॥ ५२॥**

**पदार्थ–**
**वित्तशाठ्यविवर्जितः** = पैसा धेरै खर्च होला भनेर नडराई
**महतीं** = धुमधामपूर्वक
**पूजां च** = पूजा
**कुर्यात्** = गर्नू
**शिपिविष्टाय** = सर्वान्तर्यामी
**विष्णवे** = भगवान् विष्णुलाई
**चरुं** = चरु (खिर)
**निरूप्य** = बनाएर
**पयसि** = दुधमा
**शृतेन** = पकाइएको
**तेन** = त्यो खिरद्वारा
**सुसमाहितः** = एकाग्र चित्त भई
**पुरुषं** = भगवान्लाई
**यजेत** = पूजा गर्नू
**अतिगुणवत्** = मधुर आदि षड्गुणले युक्त
**पुरुषतुष्टिदम्** = भगवान्लाई सन्तुष्ट पार्ने
**नैवेद्यं च** = नैवेद्य पनि
**दद्यात्** = अर्पण गर्नू

**वाक्यार्थ–** पैसा धेरै खर्च होला कि भनेर नडराई धुमधामसँग भगवान्को पूजा गर्नू। सर्वान्तर्यामी भगवान् विष्णुलाई दुधमा पकाइएको खिर चढाएर एकाग्रचित्तले पूजा गरी भगवान्लाई सन्तुष्टि प्रदान गर्ने मधुर आदि षड्गुणले युक्त अन्य नैवेद्यहरू पनि अर्पण गर्नू।

**आचार्यं ज्ञानसम्पन्नं वस्त्राभरणधेनुभिः।**

**तोषयेदृत्विजश्चैव तद् विद्ध्याराधनं हरेः॥ ५३॥**

**पदार्थ–**
**ज्ञानसम्पन्नं** = ज्ञानले सम्पन्न
**आचार्यं** = आचार्यलाई र
**ऋत्विजः च** = अन्य ऋत्विक्हरूलाई पनि
**वस्त्राभरणधेनुभिः** = वस्त्र, आभूषण र गोदानद्वारा
**तोषयेत्** = सन्तुष्ट गराउनू
**तत् एव** = त्यही नै
**हरेः** = भगवान् नारायणको
**आराधनं** = आराधना हो भनेर
**विद्धि** = बुझ

**वाक्यार्थ–** ज्ञानले सम्पन्न भएका आचार्य र ऋत्विक्हरूलाई वस्त्र, आभूषण र गोदानद्वारा सन्तुष्ट गराउनू। हे अदिति ! ब्राह्मणहरूको सन्तुष्टि नै भगवान्को आराधना हो भनेर बुझ।

**भोजयेत् तान् गुणवता सदन्नेन शुचिस्मिते।**

**अन्यांश्च ब्राह्मणाञ्छक्त्या ये च तत्र समागताः॥ ५४॥**

**पदार्थ–**
**शुचिस्मिते** = पवित्र मुस्कान भएकी हे प्यारी
**तान्** = ती आचार्यहरू र
**अन्यान् च** = अरू पनि
**ब्राह्मणान्** = ब्राह्मणहरूलाई
**ये च** = जो अतिथि वा बन्धुहरू
**तत्र** = त्यस पूजामा
**समागताः** = आएका छन्
(तिनीहरूलाई पनि)
**शक्त्या** = आफ्नो शक्ति अनुसार
**गुणवता** = मधुर आदि गुणले युक्त
**सदन्नेन** = सात्त्विक अन्नले
**भोजयेत्** = भोजन गराउनू

**वाक्यार्थ–** पवित्र मुस्कान भएकी हे प्यारी ! आचार्य र ऋत्विक् ब्राह्मणहरूका अतिरिक्त त्यस पूजाको कार्यक्रममा सहभागी भएका अतिथि, बन्धुहरू सबैलाई आफ्नो शक्तिअनुसार विभिन्न स्वादिष्ट शुद्ध सात्त्विक भोजन गराउनू।

**दक्षिणां गुरवे दद्यादृत्विग्भ्यश्च यथार्हतः।**
**अन्नाद्येनाश्वपाकांश्च प्रीणयेत् समुपागतान्॥ ५५॥**

**पदार्थ–**
**गुरवे** = आचार्यलाई
**ऋत्विग्भ्यः च** = ऋत्विक्‌हरूलाई पनि
**यथार्हतः** = यथायोग्य
**दक्षिणां** = दक्षिणा
**दद्यात्** = दिनू
**अन्नाद्येन** = अन्न आदिद्वारा
**आश्वपाकान्** = चाण्डाललगायत
**समुपागतान् च** = आएका अन्य व्यक्तिहरूलाई पनि
**प्रीणयेत्** = सन्तुष्ट बनाउनू

**वाक्यार्थ–** आचार्य र ऋत्विक्‌हरूलाई आफ्नो शक्तिअनुसार यथायोग्य दक्षिणा दिनू। त्यसै गरी त्यहाँ आएका चाण्डाललगायत अन्य सम्पूर्ण व्यक्तिहरूलाई पनि भोजन आदिद्वारा सन्तुष्ट बनाउनू।

**भुक्तवत्सु च सर्वेषु दीनान्धकृपणेषु च।**
**विष्णोस्तत् प्रीणनं विद्वान् भुञ्जीत सह बन्धुभिः॥ ५६॥**

**पदार्थ–**
**दीनान्धकृपणेषु** = दीनदुःखी, दृष्टिविहीन, असक्तहरूले र
**सर्वेषु च** = सम्पूर्ण उपस्थित व्यक्तिहरूले
**भुक्तवत्सु** = खाइसकेपछि
**तत् च** = ती सम्पूर्ण मानिसहरूलाई गराइएको भोजन
**विष्णोः** = भगवान् विष्णुको
**प्रीणनं** = प्रसन्नता हो भनी
**विद्वान्** = बुझेको व्रतालुले
**बन्धुभिः सह** = आफ्नो परिवारले सहित भई
**भुञ्जीत** = भोजन गर्नू

**वाक्यार्थ–** दीनदुःखी, दृष्टिविहीन एवं असक्तलगायत सम्पूर्ण उपस्थित व्यक्तिहरूले भोजन गरिसकेपछि उनीहरूलाई भोजनद्वारा गराइएको प्रसन्नता स्वयं भगवान् विष्णुको प्रसन्नता हो भन्ने बुझी व्रतालुले आफ्नो परिवारले सहित भई भोजन गर्नू।

**नृत्यवादित्रगीतैश्च स्तुतिभिः स्वस्तिवाचकैः।**
**कारयेत् तत्कथाभिश्च पूजां भगवतोऽन्वहम्॥ ५७॥**

**पदार्थ–**
**नृत्यवादित्रगीतैः** = नाच, बाजा, गीत
**स्तुतिभिः च** = स्तुति
**स्वस्तिवाचकैः** = स्वस्तिवाचन र
**तत्कथाभिः च** = भगवान्का कथाहरूद्वारा
**अन्वहम्** = प्रतिदिन
**भगवतः** = भगवान् नारायणको
**पूजां** = पूजा
**कारयेत्** = गराउनुपर्दछ

**वाक्यार्थ–** प्रतिपदादेखि त्रयोदशीसम्म प्रतिदिन नाच, बाजा, गीत (भजन), स्तुति, स्वस्तिवाचन र भगवत्कथाद्वारा भगवान् नारायणको पूजा गर्नुपर्दछ।

**एतत् पयोव्रतं नाम पुरुषाराधनं परम्।**
**पितामहेनाभिहितं मया ते समुदाहृतम्॥ ५८॥**

**पदार्थ–**
**एतत्** = यो
**पयोव्रतं नाम** = पयोव्रत नामको
**परम्** = अन्य साधनभन्दा उत्कृष्ट
**पुरुषाराधनं** = भगवान्को आराधना गर्ने साधन
**पितामहेन** = ब्रह्माजीद्वारा
**अभिहितं** = बताइएको थियो
**मया** = मद्वारा (त्यो व्रत)
**ते** = तिमीलाई
**समुदाहृतम्** = बताइयो

**वाक्यार्थ–** हे अदिति! भगवान्को आराधना गर्नका लागि उत्कृष्ट साधनभूत यस 'पयोव्रत' नामले प्रसिद्ध व्रतको विधिका बारेमा मलाई ब्रह्माजीले जे-जति बताउनुभएको थियो त्यो मैले तिमीलाई बताएँ।

**त्वं चानेन महाभागे सम्यक्चीर्णेन केशवम्।**
**आत्मना शुद्धभावेन नियतात्मा भजाव्ययम्॥ ५९॥**

**पदार्थ–**
**महाभागे** = हे भाग्यवती अदिति
**शुद्धभावेन** = शुद्ध भक्तिभावयुक्त
**आत्मना** = चित्तले
**नियतात्मा** = मनलाई वशमा राखेर
**त्वं** = तिमी
**सम्यक्चीर्णेन** = राम्रोसँग अनुष्ठित
**अनेन च** = यो व्रतद्वारा
**अव्ययम्** = अविनाशी
**केशवं** = भगवान् केशवलाई
**भज** = पूजा गर

**वाक्यार्थ–** हे भाग्यवती अदिति! तिमी आफ्नो मनलाई वशमा राखेर शुद्ध भक्तिभावयुक्त चित्तले 'पयोव्रत'को अनुष्ठान गर राम्रोसँग अनुष्ठित यही व्रतद्वारा अविनाशी भगवान् केशवको पूजा गर।

**अयं वै सर्वयज्ञाख्यः सर्वव्रतमिति स्मृतम्।**
**तपःसारमिदं भद्रे दानं चेश्वरतर्पणम्॥ ६०॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**अयं** = यो व्रतविधि
**सर्वयज्ञाख्यः** = सर्वयज्ञ नामले प्रसिद्ध (सम्पूर्ण यज्ञको फल प्रदान गर्ने)

**सर्वव्रतम् इति** = सम्पूर्ण व्रतहरूको फल दिने 'सर्वव्रत' भनेर (ब्रह्माजीले)
**स्मृतम्** = बताउनुभएको थियो
**भद्रे** = हे कल्याणी
**इदं** = यो व्रत
**तपःसारम्** = तपस्याको सार हो
**ईश्वरतर्पणं** = ईश्वरलाई तृप्त गराउने
**दानं च** = दान पनि हो

**वाक्यार्थ–** यो व्रत सम्पूर्ण यज्ञहरूको फल दिने भएकाले 'सर्वयज्ञ' र सम्पूर्ण व्रतको फल प्रदान गर्ने भएकाले 'सर्वव्रत' नामले प्रसिद्ध छ भनी ब्रह्माजीले बताउनुभएको थियो। त्यसैले हे कल्याणी ! यो व्रत सम्पूर्ण तपस्याहरूको सार हो र ईश्वरलाई तृप्त गराउने दान पनि हो।

**त एव नियमाः साक्षात् त एव च यमोत्तमाः।**
**तपो दानं व्रतं यज्ञो येन तुष्यत्यधोक्षजः॥ ६१॥**

**पदार्थ–**
**येन** = जुन कर्मद्वारा
**अधोक्षजः** = भगवान् नारायण
**तुष्यति** = प्रसन्न हुनुहुन्छ
**ते एव** = ती नै
**साक्षात्** = साक्षात्
**यमोत्तमाः** = उत्तम यम हुन्
**ते एव च** = ती नै
**नियमाः** = उत्तम नियम हुन्
**तपः** = उत्तम तपस्या
**दानं** = उत्तम दान
**व्रतं** = उत्तम व्रत र
**यज्ञः** = उत्तम यज्ञ हुन्

**वाक्यार्थ–** जुन कर्मद्वारा भगवान् नारायण प्रसन्न हुनुहुन्छ तिनै कार्य नै उत्तम यम (इन्द्रियसंयम), उत्तम नियम, उत्तम तपस्या, उत्तम दान, उत्तम व्रत र उत्तम यज्ञ हुन्।

**विवरण–** यस श्लोकमा यज्ञ, तपस्या, दान आदि साधनहरूको सार्थकता भगवान्को प्रसन्नतामा रहेको हुन्छ भनिएको छ। भगवान्को प्रसन्नताका लागि नभई केवल गर्नका लागि मात्र तपस्या, दान, यज्ञ, व्रत आदि गरिए भने तिनले झन् अहङ्कार बढाउँछन्। भगवान् त नम्रतापूर्ण भावद्वारा प्रसन्न बन्नुहुन्छ। नम्रतापूर्ण भावनाले समर्पण ल्याउँछ। यसर्थ जो व्यक्ति भगवान्प्रति समर्पित हुन्छ त्यसले म भगवान्को हुँ भन्ने स्वीकार गर्छ। यसैले यज्ञ, तपस्या, दान आदि पनि समर्पणभावबाट गरिन्छन् भने तिनीहरूबाट अवश्य नै भगवान् प्रसन्न बन्नुहुन्छ। यस्तो कर्म गर्ने मानिसलाई भगवान् नै आफ्नो आत्माको रूपमा रहनुभएको रहस्य थाहा हुन्छ। आफ्नो अस्तित्वसँग जब भगवान् जोडिनुहुन्छ तब भगवान्को अखण्ड चिन्तन हुनपुग्छ। यसभन्दा अघि व्यक्तिले संसारसँग सम्बन्धित शरीर र मन आदि नै म हुँ भनी बुझेको हुन्थ्यो भने अब ऊ भगवान्कै एक अंशका रूपमा आफूलाई बुझ्दछ। अरू तपस्या, व्रत, दान आदि साधन त केही दिन, केही घण्टा मात्र गरिन्छन्। यो समर्पण र स्वीकृतिभाव हुँदा नै मनुष्य खाँदा, सुत्दा र उठ्दासमेत भगवान्लाई सम्झिरहन्छ। यसैले यिनको सार्थकता भगवान्प्रतिको प्रेमभावलाई बढाएर भगवान्मा समर्पित हुनुमा नै छ।

**तस्मादेतद् व्रतं भद्रे प्रयता श्रद्धया चर।**
**भगवान् परितुष्टस्ते वरानाशु विधास्यति॥ ६२॥**

**पदार्थ–**
**भद्रे** = हे कल्याणी
**तस्मात्** = त्यसकारण

**प्रयता** = शुद्ध भई
**श्रद्धया** = श्रद्धापूर्वक
**एतत् व्रतं** = यो व्रत
**चर** = गर (यो व्रतद्वारा)
**परितुष्टः** = प्रसन्न
**भगवान्** = भगवान्‌ले
**ते** = तिम्रो
**वरान्** = इच्छालाई
**आशु** = तुरुन्त
**विधास्यति** = पूर्ण गरिदिनुहुनेछ

**वाक्यार्थ–** त्यसकारण हे कल्याणी अदिति ! शुद्ध भई श्रद्धापूर्वक तिमी यो व्रतको अनुष्ठान सुरु गर। यस व्रतद्वारा भगवान् नारायण अवश्य प्रसन्न हुनुहुनेछ र उहाँले तिम्रो सम्पूर्ण इच्छालाई तुरुन्त पूर्ण गरिदिनुहुनेछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे-**

**ऽदितिपयोव्रतकथनं नाम षोडशोऽध्यायः ॥ १६ ॥**

# अथ सप्तदशोऽध्यायः

## अदितिको व्रतबाट प्रसन्न भगवान्‌द्वारा वरप्रदान

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्ता सादिती राजन् स्वभर्त्रा कश्यपेन वै ।**

**अन्वतिष्ठद् व्रतमिदं द्वादशाहमतन्द्रिता ॥ १ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा !
**इति** = यसप्रकार
**स्वभर्त्रा** = आफ्ना पति
**कश्यपेन** = कश्यपद्वारा
**उक्ता** = उपदेश गरिएकी
**सा अदितिः** = ती अदितिले
**अतन्द्रिता** = आलस्यरहित भई
**वै** = निश्चय नै
**द्वादशाहं** = बाह्र दिनसम्म
**इदं** = यो
**व्रतम्** = व्रत
**अन्वतिष्ठत्** = गरिन्

**वाक्यार्थ—** हे राजा परीक्षित् ! आफ्ना पति कश्यपले यसप्रकारले विधिपूर्वक व्रत गर्न उपदेश दिएपछि ती अदितिले पनि आलस्यरहित भई बाह्र दिनसम्म यो व्रत गरिन्।

**चिन्तयन्त्येकया बुद्‌ध्या महापुरुषमीश्वरम् ।**

**प्रगृह्येन्द्रियदुष्टाश्वान् मनसा बुद्धिसारथिः ॥ २ ॥**

**मनश्चैकाग्रया बुद्‌ध्या भगवत्यखिलात्मनि ।**

**वासुदेवे समाधाय चचार ह पयोव्रतम् ॥ ३ ॥**

**पदार्थ—**
**एकया** = एकाग्र भएको
**बुद्‌ध्या** = बुद्धिद्वारा
**महापुरुषं** = पुरुषोत्तम
**ईश्वरं** = भगवान्‌लाई
**चिन्तयन्ती** = ध्यान गर्दै
**बुद्धिसारथिः** = बुद्धि नै सारथि भएकी अदितिले
**मनसा** = मनरूपी लगामद्वारा
**इन्द्रियदुष्टाश्वान्** = इन्द्रियरूपी दुष्ट घोडाहरूलाई
**प्रगृह्य** = संयमित बनाई
**एकाग्रया** = एकाग्र
**बुद्‌ध्या** = बुद्धिद्वारा
**अखिलात्मनि** = सर्वात्मा
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**मनः च** = मनलाई पनि
**समाधाय** = स्थिर गरेर
**पयोव्रतं** = पयोव्रतको अनुष्ठान
**ह चचार** = गरिन् नै

**वाक्यार्थ—** बुद्धिलाई एकाग्र बनाई पुरुषोत्तम भगवान्‌को ध्यान गर्दै अदितिले बुद्धिलाई सारथि बनाई मनरूपी लगामद्वारा इन्द्रियरूप दुष्ट घोडाहरूलाई वशमा राखिन्। त्यसै गरी सर्वात्मा भगवान् वासुदेवमा बुद्धिलाई एकाकार बनाएकी अदितिले मनलाई पनि स्थिर गराउँदै यस पयोव्रतको अनुष्ठान गरिन्।

**तस्याः प्रादुरभूत् तात भगवानादिपुरुषः ।**
**पीतवासाश्चतुर्बाहुः शङ्खचक्रगदाधरः ॥ ४ ॥**

**पदार्थ–**
**तात** = हे प्रिय परीक्षित्
**तस्याः** = ती अदितिको अगाडि
**पीतवासाः** = पीताम्बर लगाएका
**चतुर्बाहुः** = चार ओटा हात भएका
**शङ्खचक्रगदाधरः** = शङ्ख, चक्र र गदा धारण गरेका
**आदिपुरुषः** = आदिपुरुष
**भगवान्** = भगवान् श्रीहरि
**प्रादुरभूत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! व्रतानुष्ठान गरिरहेकी अदितिको अगाडि पहेँलो वस्त्र लगाएका, चार हात भएका र शङ्ख, चक्र, गदा धारण गरेका आदिपुरुष भगवान् श्रीहरि प्रकट हुनुभयो ।

**तं नेत्रगोचरं वीक्ष्य सहसोत्थाय सादरम् ।**
**ननाम भुवि कायेन दण्डवत् प्रीतिविह्वला ॥ ५ ॥**

**पदार्थ–**
**सहसा** = अचानक
**नेत्रगोचरं** = आफ्नो आँखाको अगाडि उपस्थित
**तं** = उहाँ आदिपुरुष भगवान्लाई
**वीक्ष्य** = देखेर
**सादरं** = आदरपूर्वक
**उत्थाय** = उठेर
**प्रीतिविह्वला** = प्रेमले विह्वल भएकी अदितिले
**कायेन** = शरीरले
**दण्डवत्** = दण्ड झैँ
**भुवि** = पृथिवीमा (लम्पसार परेर)
**ननाम** = प्रणाम गरिन्

**वाक्यार्थ–** आफ्नो आँखाको अगाडि अचानक आदिपुरुष भगवान् श्रीहरिलाई देखेर अदिति आदरभावले उठिन् । भगवान्को प्रेममा विह्वल भएकी उनले भगवान्लाई दण्डवत् प्रणाम गरिन् ।

**सोत्थाय बद्धाञ्जलिरीडितुं स्थिता नोत्सेह आनन्दजलाकुलेक्षणा ।**
**बभूव तूष्णीं पुलकाकुलाकृतिस्तद्दर्शनात्युत्सवगात्रवेपथुः ॥ ६ ॥**

**पदार्थ–**
**आनन्दजलाकुलेक्षणा** = आनन्दका कारण आँसुले भरिएका आँखा भएकी
**पुलकाकुलाकृतिः** = रोमाञ्चित शरीर भएकी
**तद्दर्शनात्युत्सवगात्रवेपथुः** = भगवान्को दर्शनरूप उत्सवका कारण कम्पित शरीर भएकी
**उत्थाय** = उठेर
**बद्धाञ्जलिः** = हात जोडेर
**स्थिता** = रहेकी
**सा** = ती अदिति
**ईडितुं** = भगवान्को स्तुति गर्न
**न उत्सेहे** = सकिनन्
**तूष्णीं** = चुपचाप
**बभूव** = रहिन्

**वाक्यार्थ–** आनन्दका कारण आँसुले भरिएका आँखा भएकी, रोमाञ्चित शरीर भएकी र भगवान्को दर्शनरूप उत्सवका कारण कम्पित शरीर भएकी अदितिले उठेर हात जोड्दै भगवान्को स्तुति गर्न लागिन्, तर उनी बोल्न नसकेर चुपचाप रहिन् ।

**प्रीत्या शनैर्गद्गदया गिरा हरिं तुष्टाव सा देव्यदितिः कुरूद्वह ।**
**उद्वीक्षती सा पिबतीव चक्षुषा रमापतिं यज्ञपतिं जगत्पतिम् ॥ ७ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुश्रेष्ठ
**सा** = ती
**देवी** = देवमाता
**अदितिः** = अदितिले
**गद्गदया** = अकमकाएको
**गिरा** = वाणीले
**शनैः** = बिस्तारै
**प्रीत्या** = प्रेमपूर्वक
**हरिं** = भगवान् श्रीहरिलाई
**तुष्टाव** = स्तुति गर्न लागिन्
**सा** = ती अदिति
**रमापतिं** = लक्ष्मीका पति
**यज्ञपतिं** = यज्ञपति
**जगत्पतिं** = जगत्पति भगवान्लाई
**चक्षुषा** = आँखाले
**पिबती इव** = पिउँला झैं गरी
**उद्वीक्षती** = हेर्दै थिइन्

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! त्यसपछि अदितिले अकमकाएको वाणीद्वारा बिस्तारै प्रेमपूर्वक भगवान्को स्तुति गर्न लागिन्। त्यस वेला उनी लक्ष्मीपति, यज्ञपति, जगत्पति भगवान् श्रीहरिलाई आँखाले नै पिउँला झैं गरी एकटकले हेरिरहेकी थिइन्।

**अदितिरुवाच** (अदितिले भनिन्)

**यज्ञेश यज्ञपुरुषाच्युत तीर्थपाद**
**तीर्थश्रवः श्रवणमङ्गलनामधेय ।**
**आपन्नलोकवृजिनोपशमोदयाद्य**
**शं नः कृधीश भगवन्नसि दीननाथः ॥ ८ ॥**

**पदार्थ–**
**यज्ञेश** = हे यज्ञका स्वामी
**यज्ञपुरुष** = हे यज्ञपुरुष
**अच्युत** = हे अच्युत
**तीर्थपाद** = गङ्गा आदि तीर्थहरू पाउमा भएका भगवान्
**तीर्थश्रवः** = सम्पूर्ण पापहरू हटाउने कीर्ति भएका भगवान्
**श्रवणमङ्गलनामधेय** = नामश्रवणद्वारा नै मङ्गल प्राप्त हुने नाम भएका प्रभु
**आपन्नलोकवृजिनोपशमोदय** = शरणागत मनुष्यहरूको पापलाई नष्ट गर्न प्रकट हुनुहुने भगवान्
**आद्य** = हे आदिपुरुष
**ईश** = हे ईश्वर
**भगवन्** = हे परमात्मा
**दीननाथः** = (हजुर) दुःखीहरूको रक्षक
**असि** = हुनुहुन्छ
**नः** = मेरो
**शं** = कल्याण
**कृधि** = गर्नुहोस्

**वाक्यार्थ–** हे अच्युत ! हे यज्ञका स्वामी ! हे यज्ञपुरुष ! जसको पाउमा गङ्गा आदि तीर्थहरू विराजमान छन्, जसको कीर्ति सम्पूर्ण पाप हटाउने खालको छ, जसका नामहरू सुन्नाले नै मङ्गल प्राप्त हुन्छ यस्ता हजुर शरणागत मनुष्यहरूको पाप नष्ट गर्न भक्तको अगाडि स्वयं प्रकट हुनुहुन्छ। हे आदिपुरुष ! हे ईश्वर ! हे परमात्मा ! म जस्ता दुःखीजनहरूको रक्षक पनि हजुर नै हुनुहुन्छ।

त्यसैले मेरो कल्याण गर्नुहोस्।

**विश्वाय विश्वभवनस्थितिसंयमाय**
**स्वैरं गृहीतपुरुशक्तिगुणाय भूम्ने।**
**स्वस्थाय शश्वदुपबृंहितपूर्णबोध-**
**व्यापादितात्मतमसे हरये नमस्ते॥ ९॥**

**पदार्थ–**
**विश्वाय** = विश्वरूप
**विश्वभवनस्थितिसंयमाय** = संसारको सृष्टि, स्थिति र लय गर्ने
**स्वैरं** = आफ्नै इच्छाले
**गृहीतपुरुशक्तिगुणाय** = प्रकृतिका सत्त्व आदि गुणलाई स्वीकार गर्ने
**भूम्ने** = सर्वव्यापक
**स्वस्थाय** = सर्वदा आत्मस्वरूपले विद्यमान
**शश्वदुपबृंहितपूर्णबोधव्यापादितात्मतमसे** = सधैँ बढ्दै गरेको पूर्ण ज्ञानद्वारा समस्त अज्ञानलाई नष्ट गर्नुहुने
**हरये** = भगवान् श्रीहरि
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** जो विश्वरूप हुनुहुन्छ, संसारको सृष्टि, स्थिति र लय गर्नुहुन्छ, गुणातीत भए तापनि स्वेच्छाले आफ्नो शक्ति प्रकृतिका गुणहरूलाई स्वीकार गरेर विभिन्न रूपमा प्रकट हुनुहुन्छ, सर्वव्यापक हुनुहुन्छ, जहिले पनि आत्मरूपले विराजमान हुनुहुन्छ, सधैँ बढ्दै गरेको पूर्ण ज्ञानद्वारा समस्त अज्ञानहरूलाई नष्ट गर्नुहुन्छ यस्ता भगवान् श्रीहरिलाई म नमस्कार गर्दछु।

**विवरण–** यस श्लोकमा सर्वव्यापक एवं ज्ञानस्वरूप भगवान्‌को स्तुति गरिएको छ। भगवान् संसारका सबै पदार्थहरूको रूपमा प्रकट हुने विश्वरूप हुनुहुन्छ। **विश्वभवनस्थितिसंयमाय** अर्थात् संसारको उत्पत्ति, स्थिति र संहारको लागि **गृहीतपुरुशक्तिगुणः** मायाका सत्त्व आदि गुणहरूलाई स्वीकार गर्नुहुन्छ। उहाँ **स्वस्थः** अर्थात् सधैँ आफ्नो स्वरूपमा स्थित हुनुहुन्छ। मायाका गुणहरूद्वारा प्रभावित नभई सधैँ आत्मरूपमा रहने, त्यहाँबाट च्युत नहुने भएकाले उहाँलाई **स्वस्थ** भनिएको हो। **शश्वत् उपबृंहितः** अर्थात् सधैँ बढिरहेको जुन अनन्त एवं पूर्ण ज्ञान छ, त्यसद्वारा भगवान्‌ले **व्यापादितात्मतमः** अर्थात् मायालाई विनष्ट गरिदिनुभएको छ। यसर्थ भगवान् मायासँग सम्बन्धित भएर पनि मायाको आवरणदेखि पर, सर्वव्यापक एवं ज्ञानस्वरूप हुनुहुन्छ।

**आयुः परं वपुरभीष्टमतुल्यलक्ष्मी-**
**द्यौर्भूरसाः सकलयोगगुणास्त्रिवर्गः।**
**ज्ञानं च केवलमनन्त भवन्ति तुष्टात्**
**त्वत्तो नृणां किमु सपत्नजयादिराशीः॥ १०॥**

**पदार्थ–**
**अनन्त** = हे अनन्त
**तुष्टात्** = प्रसन्न हुनुभएका

**त्वत्तः** = हजुरबाट
**नृणां** = मनुष्यहरूलाई
**परं** = द्विपरार्धसम्मको
**आयुः** = आयु
**अभीष्टं** = इच्छानुसारको
**वपुः** = सुन्दर शरीर
**अतुल्यलक्ष्मीः** = अतुलित सम्पत्ति
**द्योभूरसाः** = स्वर्ग, पृथिवी र पाताललोक
**सकलयोगगुणाः** = सम्पूर्ण योगका अणिमा आदि सिद्धिहरू
**त्रिवर्गः** = धर्म, अर्थ, काम
**केवलं** = अपरोक्ष
**ज्ञानं च** = ज्ञान पनि
**भवन्ति** = सुलभ हुन्छन्
**सपत्नजयादिराशीः** = शत्रुविजय आदि कामनाहरूको विषयमा त
**किमु** = के नै भन्नुपर्छ र

**वाक्यार्थ–** हे अनन्त ! प्रसन्न हुनुभएका हजुरबाट मनुष्यहरूले द्विपरार्धपरिमित दीर्घ आयु, सुन्दर शरीर, अतुलित सम्पत्ति, स्वर्ग, पृथिवी र पाताललोक, सम्पूर्ण योगहरूबाट हुने अणिमा आदि सिद्धिहरू, धर्म, अर्थ, काम जस्ता इच्छाअनुसारका विषयहरू र अपरोक्ष ब्रह्मज्ञान पनि प्राप्त गर्दछन् भने शत्रुविजय आदि स–साना कामनाहरू त पूर्ण नहुने कुरै भएन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अदित्यैवं स्तुतो राजन् भगवान् पुष्करेक्षणः।**
**क्षेत्रज्ञः सर्वभूतानामिति होवाच भारत ॥ ११ ॥**

पदार्थ–
**राजन्** = हे राजा
**भारत** = हे भरतवंशी परीक्षित्
**एवं** = यसप्रकार
**अदित्या** = देवमाता अदितिद्वारा
**स्तुतः** = स्तुति गरिनुभएका
**पुष्करेक्षणः** = कमलनयन
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको (हृदयमा विराजमान)
**क्षेत्रज्ञः** = अन्तर्यामी
**भगवान्** = भगवान् वासुदेवले
**ह** = निश्चय नै
**इति** = यसप्रकार
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! अदितिले सम्पूर्ण प्राणीहरूको हृदयमा साक्षीरूपले विराजमान अन्तर्यामी भगवान् कमलनयन श्रीहरिको स्तुति गरिसकेपछि उहाँले भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**देवमातर्भवत्या मे विज्ञातं चिरकाङ्क्षितम्।**
**यत्सपत्नैर्हृतश्रीणां च्यावितानां स्वधामतः ॥ १२ ॥**

पदार्थ–
**देवमातः** = हे देवमाता
**सपत्नैः** = दानव शत्रुहरूद्वारा
**हृतश्रीणां** = सम्पूर्ण सम्पत्ति खोसिएका
**स्वधामतः** = आफ्नो लोक स्वर्गबाट
**च्यावितानां** = लखेटिएका आफ्ना पुत्रहरूप्रति
**भवत्याः** = तपाईंको
**यत्** = जुन
**चिरकाङ्क्षितम्** = लामो समयदेखिको कामना छ त्यो
**मे** = मैले
**विज्ञातं** = बुझेको छु

**वाक्यार्थ–** हे देवमाता अदिति ! दानव शत्रुहरूद्वारा सम्पूर्ण सम्पत्ति खोसिएका र आफ्नो लोक

स्वर्गबाट लखेटिएका आफ्ना पुत्रहरूको हितका लागि तपाईंले लामो समयदेखि जे चाहनुभएको छ, त्यो मैले राम्रोसँग बुझेको छु।

**तान् विनिर्जित्य समरे दुर्मदानसुरर्षभान्।**
**प्रतिलब्धजयश्रीभिः पुत्रैरिच्छस्युपासितुम्॥ १३॥**

**पदार्थ—**
**दुर्मदान्** = मात्तिएका
**तान्** = ती बलि आदि
**असुरर्षभान्** = असुरश्रेष्ठ दैत्यहरूलाई
**समरे** = युद्धमा
**विनिर्जित्य** = जितेर
**प्रतिलब्धजयश्रीभिः** = पुनः विजय र राज्यलक्ष्मी प्राप्त गरेका
**पुत्रैः** = आफ्ना छोराहरूसँग
**उपासितुं** = मेरो उपासना गर्न
**इच्छसि** = इच्छा गर्नुहुन्छ

**वाक्यार्थ—** हे देवमाता ! तपाईं मात्तिएका बलशाली ती बलि आदि दैत्यहरूलाई युद्धमा जितेर पुनः विजय र राज्यलक्ष्मी प्राप्त गरेका छोराहरूसहित भएर मेरो उपासना गर्न चाहनुहुन्छ।

**इन्द्रज्येष्ठैः स्वतनयैर्हतानां युधि विद्विषाम्।**
**स्त्रियो रुदन्तीरासाद्य द्रष्टुमिच्छसि दुःखिताः॥ १४॥**

**पदार्थ—**
**इन्द्रज्येष्ठैः** = जेठो इन्द्र आदि
**स्वतनयैः** = आफ्ना छोराहरूद्वारा
**युधि** = युद्धमा
**हतानां** = मारिएका
**विद्विषाम्** = शत्रुहरूका
**स्त्रियः** = पत्नीहरू
**आसाद्य** = (मृत पतिको) नजिकमा आएर
**दुःखिताः** = दुःखी भई
**रुदन्तीः** = रुँदै गरेको
**द्रष्टुं** = हेर्न
**इच्छसि** = चाहनुहुन्छ

**वाक्यार्थ—** जेठो छोरो इन्द्र र अन्य आफ्ना छोराहरूद्वारा युद्धमा मारिएका शत्रुका पत्नीहरू मृत पतिको लासको नजिकमा आएर दुःखपूर्वक रुँदै गरेको तपाईं हेर्न चाहनुहुन्छ।

**आत्मजान् सुसमृद्धांस्त्वं प्रत्याहृतयशःश्रियः।**
**नाकपृष्ठमधिष्ठाय क्रीडतो द्रष्टुमिच्छसि॥ १५॥**

**पदार्थ—**
**त्वं** = तपाईं
**प्रत्याहृतयशःश्रियः** = गुमेको यश र राज्यलक्ष्मी पुनः फिर्ता ल्याएका
**सुसमृद्धान्** = ऐश्वर्यले सम्पन्न भएर
**नाकपृष्ठं** = स्वर्गमा
**अधिष्ठाय** = बसेर
**क्रीडतः** = विहार गरिरहेका
**आत्मजान्** = आफ्ना पुत्रहरूलाई
**द्रष्टुम्** = हेर्न
**इच्छसि** = चाहनुहुन्छ

**वाक्यार्थ—** तपाईं आफ्ना पुत्रहरूलाई असुरहरूले खोसेको यश र राजलक्ष्मी पुनः प्राप्त गरी ऐश्वर्यले सम्पन्न भई स्वर्गमा बसी विहार गरिरहेको हेर्न चाहनुहुन्छ।

**प्रायोऽधुना तेऽसुरयूथनाथा अपारणीया इति देवि मे मतिः।**
**यत् तेऽनुकूलेश्वरविप्रगुप्ता न विक्रमस्तत्र सुखं ददाति॥ १६॥**

**पदार्थ–**
**देवि** = हे देवी
**असुरयूथनाथाः** = असुर सेनापतिहरू
**अधुना** = अहिले
**प्रायः** = लगभग
**अपारणीयाः** = जित्न नसकिने छन्
**इति** = यस्तो
**मे** = मेरो
**मतिः** = निश्चय छ
**यत्** = किनभने
**ते** = तिनीहरू
**अनुकूलेश्वरविप्रगुप्ताः** = समर्थ ब्राह्मणहरू अनुकूल भएकाले उनीहरूद्वारा रक्षित छन्, अतः
**तत्र** = असुरहरूप्रति गरिएको
**विक्रमः** = पराक्रमले
**सुखं** = सुख
**न ददाति** = दिँदैन

**वाक्यार्थ–** हे देवी अदिति ! अहिले तपाईंका शत्रु असुरसेनापतिहरू सजिलैसँग जित्न नसकिने छन् भन्ने मेरो निश्चय छ किनभने समर्थ ब्राह्मणहरू अहिले उनीहरूको अनुकूल छन् र तिनै ब्राह्मणहरूद्वारा उनीहरू संरक्षित पनि छन्। यस्तो अवस्थामा असुरहरूप्रति गरिने पराक्रमले सुख दिँदैन।

**अथाप्युपायो मम देवि चिन्त्यः सन्तोषितस्य व्रतचर्यया ते।**
**ममार्चनं नार्हति गन्तुमन्यथा श्रद्धानुरूपं फलहेतुकत्वात्॥ १७॥**

**पदार्थ–**
**देवि** = हे देवमाता अदिति
**अथ अपि** = तर पनि
**ते** = तपाईंको
**व्रतचर्यया** = पयोव्रतको अनुष्ठानद्वारा
**सन्तोषितस्य** = प्रसन्न भएको
**मम** = मैले
**उपायः** = तपाईंको ऐश्वर्यप्राप्तिकारक उपाय
**चिन्त्यः** = विचार गर्नुपर्दछ
(किनभने)
**श्रद्धानुरूपं** = श्रद्धाअनुसार
**फलहेतुकत्वात्** = फलको प्राप्ति हुने भएकाले
**मम** = मेरो
**अर्चनं** = पूजा
**अन्यथा गन्तुं** = निष्फल हुन
**न अर्हति** = सक्दैन

**वाक्यार्थ–** त्यसो भए तापनि हे देवमाता अदिति ! तपाईंले विधिपूर्वक पयोव्रतको अनुष्ठान गरेर मलाई प्रसन्न गराउनुभएको छ। त्यसैले तपाईंको ऐश्वर्यादि प्राप्तिका लागि मैले कुनै न कुनै उपाय विचार गर्नुपर्दछ किनभने श्रद्धाअनुसारको फलको प्राप्ति हुने भएकाले मेरो पूजा कहिल्यै पनि निष्फल हुन सक्दैन।

**त्वयार्चितश्चाहमपत्यगुप्तये पयोव्रतेनानुगुणं समीडितः।**
**स्वांशेन पुत्रत्वमुपेत्य ते सुतान् गोप्तास्मि मारीचतपस्यधिष्ठितः॥ १८॥**

**पदार्थ–**
**अहं** = म
**त्वया** = तपाईंद्वारा
**अपत्यगुप्तये** = आफ्नो पुत्रको रक्षाका लागि
**अनुगुणं** = यथोचित रूपमा

**पयोव्रतेन** = पयोव्रतको आराधनाले
**अर्चितः** = पूजित र
**समीडितः च** = प्रार्थित पनि भएको छु (अतः)
**मारीचतपसि** = कश्यपको तपोजन्य तेज (वीर्य)मा
**अधिष्ठितः** = अवस्थित भई म
**स्वांशेन** = आफ्नो अंशद्वारा
**पुत्रत्वं** = तपाईंको पुत्ररूपमा
**उपेत्य** = आएर
**ते** = तपाईंका
**सुतान्** = छोराहरूलाई
**गोप्तास्मि** = रक्षा गर्नेछु

**वाक्यार्थ–** तपाईंले पुत्ररक्षाका लागि विधिपूर्वक पयोव्रतको अनुष्ठान गरी यथोचित रूपले मेरो पूजा र प्रार्थना गर्नुभयो। त्यसैले म अंशरूपले कश्यपको तपोजन्य तेजोमय वीर्यमा प्रवेश गरेर तपाईंको पुत्ररूपमा जन्म लिनेछु र तपाईंका छोराहरूको रक्षा गर्नेछु।

**उपधाव पतिं भद्रे प्रजापतिमकल्मषम्।**

**मां च भावयती पत्यावेवं रूपमवस्थितम्॥ १९॥**

**पदार्थ–**
**भद्रे** = हे कल्याणी
**पत्यौ** = पति कश्यपमा
**एवं रूपं** = यही रूपमा
**अवस्थितं** = रहेको
**मां** = मलाई
**भावयती** = चिन्तन गर्दै
**अकल्मषं** = तपस्याले शुद्ध भएका
**प्रजापतिं** = प्रजापति
**पतिं च** = पति कश्यपको
**उपधाव** = सेवा गर्नुहोस्

**वाक्यार्थ–** हे कल्याणी ! तपाईं पति कश्यपमा यही रूपमा अवस्थित मेरो चिन्तन गर्दै तपस्याले शुद्ध भएका प्रजापति कश्यपको सेवा गर्नुहोस्।

**नैतत् परस्मा आख्येयं पृष्टयापि कथञ्चन।**

**सर्वं सम्पद्यते देवि देवगुह्यं सुसंवृतम्॥ २०॥**

**पदार्थ–**
**कथञ्चन** = कदाचित्
**पृष्टया अपि** = कसैले सोध्यो भने पनि
**परस्मै** = अरूलाई
**एतत्** = मैले बताएको यो कुरा
**न आख्येयं** = नबताउनू
**देवि** = हे देवमाता
**देवगुह्यं** = देवताहरूको रहस्य
**सुसंवृतं** = गुप्त भयो भने मात्र
**सर्वं** = सम्पूर्ण कार्य
**सम्पद्यते** = सिद्ध हुन्छ

**वाक्यार्थ–** हे देवमाता ! यो मैले बताएको कुरा कदाचित् कसैले सोध्यो भने पनि अरूलाई नबताउनू किनभने देवताहरूको रहस्य गुप्त भयो भने मात्र त्यसबाट कार्य सिद्ध हुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एतावदुक्त्वा भगवांस्तत्रैवान्तरधीयत।**

**अदितिर्दुर्लभं लब्ध्वा हरेर्जन्मात्मनि प्रभोः॥ २१॥**

**उपाधावत् पतिं भक्त्या परया कृतकृत्यवत्।**

**पदार्थ–**
**एतावत्** = यति कुरा
**उक्त्वा** = बताएर
**भगवान्** = भगवान् श्रीहरि
**तत्र एव** = त्यहीँ नै
**अन्तरधीयत** = अन्तर्धान हुनुभयो
**अदितिः** = अदिति चाहिँ
**प्रभोः** = भगवान्
**हरेः** = श्रीहरिका
**दुर्लभं** = दुर्लभ
**जन्म** = जन्म
**आत्मनि** = आफूमा
**लब्ध्वा** = पाएर
**कृतकृत्यवत्** = आफूलाई कृतकृत्य मान्दै
**परया** = अत्यन्त
**भक्त्या** = भक्तिपूर्वक
**पतिं** = पति कश्यपलाई
**उपाधावत्** = सेवा गर्न थालिन्

**वाक्यार्थ–** यति कुरा बताएर भगवान् श्रीहरि अदितिको अगाडिबाट यथास्थानमैं अन्तर्धान हुनुभयो। यता अदिति चाहिँ भगवान् श्रीहरिले आफ्नो गर्भबाट जन्म लिने थाहा पाएर कृतकृत्यताको अनुभव गर्दै अत्यन्त भक्तिपूर्वक पति कश्यपको सेवा गर्न थालिन्।

**स वै समाधियोगेन कश्यपस्तदबुध्यत ॥ २२ ॥**

**प्रविष्टमात्मनि हरेरंशं ह्यवितथेक्षणः।**

**पदार्थ–**
**अवितथेक्षणः** = सत्यद्रष्टा
**सः** = अदितिका पति ती
**कश्यपः** = कश्यपजीले
**वै** = निश्चय नै
**तत्** = त्यही वेला
**समाधियोगेन** = समाधियोगद्वारा
**आत्मनि** = आफूमा
**प्रविष्टं** = प्रविष्ट भएको
**हरेः** = भगवान् श्रीहरिको
**अंशं** = अंशलाई
**हि** = निश्चय नै
**अबुध्यत** = जान्नुभयो

**वाक्यार्थ–** सत्यद्रष्टा कश्यप मुनिले पनि आफूमा भगवान् श्रीहरिको अंश प्रविष्ट भएको कुरा समाधियोगद्वारा थाहा पाउनुभयो।

**सोऽदित्यां वीर्यमाधत्त तपसा चिरसम्भृतम्।**

**समाहितमना राजन् दारुण्यग्निं यथानिलः ॥ २३ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**अनिलः** = वायुले
**दारुणि** = काठमा
**अग्निं** = (काठैलाई जलाउने) अग्नि राख्दछ (त्यसै गरी)
**राजन्** = हे राजा परीक्षित्
**समाहितमनाः** = समाहित चित्त भएका
**सः** = उहाँ कश्यपजीले
**तपसा** = तपोबलद्वारा
**चिरसम्भृतम्** = धेरै कालसम्म आफूमा सञ्चित
**वीर्यम्** = वीर्य
**अदित्यां** = पत्नी अदितिमा
**आधत्त** = आधान गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! जसरी वायुले काठमा काठैलाई जलाएर नष्ट गर्ने दाहक अग्निको आधान गर्दछ, त्यसै गरी समाहित चित्त भएका कश्यपजीले तपोबलद्वारा धेरै समयसम्म सञ्चित (आफ्नै पुत्र दैत्यहरूलाई नाश गर्ने) वीर्य अदितिमा आधान गर्नुभयो।

**अदितेर्धिष्ठितं गर्भं भगवन्तं सनातनम्।**
**हिरण्यगर्भो विज्ञाय समीडे गुह्यनामभिः॥ २४॥**

**पदार्थ–**
**हिरण्यगर्भः** = ब्रह्माजीले
**अदितेः** = अदितिको
**गर्भं** = गर्भमा
**धिष्ठितं** = बसेका
**सनातनं** = नित्य अविनाशी
**भगवन्तं** = भगवान् श्रीहरिलाई
**विज्ञाय** = जानेर
**गुह्यनामभिः** = रहस्यमय नामहरूद्वारा
**समीडे** = स्तुति गर्न थाल्नुभयो

**वाक्यार्थ–** ब्रह्माजीले नित्य, अविनाशी भगवान् श्रीहरि अदितिको गर्भमा रहनुभएको छ भन्ने थाहा पाएर रहस्यमय नामहरूद्वारा उहाँको स्तुति गर्न थाल्नुभयो।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**जयोरुगाय भगवन्नुरुक्रम नमोऽस्तु ते।**
**नमो ब्रह्मण्यदेवाय त्रिगुणाय नमो नमः॥ २५॥**

**पदार्थ–**
**उरुगाय** = विभिन्न नामले कीर्तिगान गरिने हे प्रभु (हजुरको)
**जय** = जय होस्
**उरुक्रम** = हे महापराक्रमी
**भगवन्** = हे भगवान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**ब्रह्मण्यदेवाय** = प्रार्थनीय देवता हजुरलाई
**नमः** = नमस्कार छ
**त्रिगुणाय** = त्रिगुणका नियामक हजुरलाई
**नमो नमः अस्तु** = बारम्बार नमस्कार छ

**वाक्यार्थ–** विभिन्न नामहरूले कीर्तिगान गरिने हे प्रभु ! हजुरको जय होस्। महापराक्रमी हे भगवान् ! हजुरलाई नमस्कार छ। त्रिगुणका नियामक हे ब्रह्मण्यदेव हजुरलाई बारम्बार नमस्कार छ।

**नमस्ते पृश्निगर्भाय वेदगर्भाय वेधसे।**
**त्रिनाभाय त्रिपृष्ठाय शिपिविष्टाय विष्णवे॥ २६॥**

**पदार्थ–**
**पृश्निगर्भाय** = पृश्निका पुत्र
**वेदगर्भाय** = वेदज्ञानलाई आफूभित्र राख्नुहुने
**वेधसे** = सबका विधाता
**त्रिनाभाय** = प्रलयकालमा तीनै लोकलाई आफ्नो नाभिमा राख्ने
**त्रिपृष्ठाय** = तीनलोकभन्दा माथि रहनुहुने
**शिपिविष्टाय** = जीवहरूमा अन्तर्यामीरूपले प्रविष्ट
**विष्णवे** = सर्वव्यापक
**ते** = हजुरलाई
**नमः** = म नमस्कार गर्दछु

**वाक्यार्थ–** जो पृश्निको पुत्रका रूपमा जन्मनुभएको थियो (अदिति नै पूर्वजन्ममा पृश्नि थिइन्), जसले समग्र वेदको ज्ञान आफूभित्र राख्नुभएको छ, जो सम्पूर्ण प्राणीहरूका एक मात्र विधाता

हुनुहन्छ, जसले प्रलयकालमा तीनै लोकलाई आफ्नो नाभिमा राख्नुहुन्छ र तीन लोकभन्दा माथि वैकुण्ठमा निवास गर्नुहुन्छ अनि जो जीवहरूको हृदयमा अन्तर्यामीरूपले प्रवेश गर्नुहुन्छ त्यस्ता सर्वव्यापक हजुरलाई म नमस्कार गर्दछु।

**विवरण–** यस श्लोकमा विभिन्न रूपमा भगवान्को स्तुति गरिएको छ। अदिति र कश्यप नै पूर्व जन्ममा पृश्नि र सुतपा थिए, उनीहरूले कठोर तपस्या गरे र भगवान् जस्तै छोरा मागे। भगवान्ले आफू जस्तो अरू देख्नुभएन र आफू नै तीन जन्मसम्म पुत्ररूपमा आउने वचन दिनुभयो। तिनै पृश्नि र सुतपाको पुत्रको रूपमा उहाँले वामन अवतार लिनुभयो। त्यसैले वामन भगवान्लाई पृश्निगर्भ भनिएको हो। ज्ञानस्वरूप भगवान्भित्रै वेदहरू रहेका हुन्छन्, त्यसैले उहाँ वेदगर्भ हुनुहुन्छ। भगवान्को नाभिमा नै तीन लोक छन्, त्यसैले उहाँ **त्रिणाभ** हुनुहुन्छ। **त्रिपृष्ठ** शब्दको अर्थ हुन्छ तीन लोकको **पृष्ठ** अर्थात् माथि रहने, यसले भगवान् प्रपञ्चातीत हुनुहुन्छ भनी बुझाएको छ। शिपि शब्दको मुख्य अर्थ हुन्छ पशु। जीवात्माहरू पनि अज्ञानका पासोहरूद्वारा पशुहरू जस्तै बाँधिएकाले उनीहरूलाई पनि शिपि भनिन्छ। तिनीहरूभित्र अन्तर्यामी रूपले **विष्ट** अर्थात् प्रविष्ट हुनभएका भगवान् **शिपिविष्ट** हुनुहुन्छ। यसरी यस श्लोकमा परमात्माको स्तुति गरिएको छ।

**त्वमादिरन्तो भुवनस्य मध्यमनन्तशक्तिं पुरुषं यमाहुः।**
**कालो भवानाक्षिपतीश विश्वं स्रोतो यथान्तः पतितं गभीरम्॥ २७॥**

**पदार्थ–**
**त्वं** = हजुर
**भुवनस्य** = संसारको
**आदिः** = आदि
**अन्तः** = अन्त र
**मध्यं** = मध्यरूपले वर्तमान हुनुहुन्छ
**यं** = जसलाई
**अनन्तशक्तिं** = अनन्तशक्तिमान्
**पुरुषं** = पुरुषको रूपमा
**आहुः** = वेदहरूले बताएका छन्
**यथा** = जसरी
**गभीरं** = गहिरो
**स्रोतः** = नदीप्रवाहले
**अन्तः पतितं** = बीचमा परेको तृण आदिलाई बगाउँछ त्यसै गरी
**ईश** = हे भगवान्
**कालः** = कालरूपले
**भवान्** = हजुरले नै
**विश्वं** = संसारलाई
**आक्षिपति** = आफूतिर खिच्नुहुन्छ

**वाक्यार्थ–** हे भगवान्! हजुर नै संसारको आदि, मध्य र अन्त हुनुहुन्छ। हजुरलाई नै अनन्त शक्तिमान् पुरुष भनी वेदहरू बताउँछन्। जसरी गहिरो नदीको प्रवाहले तृणहरूलाई आफूतिर खिचेर बगाउँछ त्यसै गरी कालरूपले हजुर नै संसारलाई आफूतिर खिच्नुभएको छ।

**त्वं वै प्रजानां स्थिरजङ्गमानां प्रजापतीनामसि सम्भविष्णुः।**
**दिवौकसां देव दिवश्च्युतानां परायणं नौरिव मज्जतोऽप्सु॥ २८॥**

**पदार्थ–**
**त्वं वै** = हजुर नै
**स्थिरजङ्गमानां** = चराचर प्राणी
**प्रजानां** = प्रजा
**प्रजापतीनां** = प्रजापतिहरूको
**सम्भविष्णुः** = उत्पादक (जनक)

**असि** = हुनुहुन्छ
**देव** = हे भगवान्
**अप्सु** = पानीमा
**मज्जतः** = डुब्न लागेकाहरूको लागि
**नौः इव** = डुङ्गा झैं
**दिवश्च्युतानां** = स्वर्गबाट लखेटिएका
**दिवौकसां** = देवताहरूको
**परायणं** = परम आश्रय हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** चराचर प्राणी, सम्पूर्ण प्रजा र प्रजापतिहरूको जनक हजुर नै हुनुहुन्छ। हे भगवान् ! जसरी पानीमा डुब्न लागेका मान्छेहरूको आश्रय डुङ्गा नै हो त्यसै गरी स्वर्गबाट लखेटिएका देवताहरूको एक मात्र आश्रय हजुर नै हुनुहुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**वामनप्रादुर्भावे सप्तदशोऽध्यायः ॥ १७ ॥**

# अथ अष्टादशोऽध्यायः

## भगवान्‌द्वारा वामन अवतार ग्रहण र बलिको यज्ञमा प्रस्थान

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं विरिञ्चस्तुतकर्मवीर्यः प्रादुर्बभूवामृतभूरदित्याम् ।**

**चतुर्भुजः शङ्खगदाब्जचक्रः पिशङ्गवासा नलिनायतेक्षणः ॥ १ ॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**विरिञ्चस्तुतकर्मवीर्यः** = ब्रह्माजीद्वारा कर्म र पराक्रमका बारेमा स्तुति गरिएका
**चतुर्भुजः** = चार हात भएका
**शङ्खगदाब्जचक्रः** = शङ्ख, चक्र, कमल र गदा धारण गरेका
**पिशङ्गवासाः** = पीताम्बर लगाएका
**नलिनायतेक्षणः** = कमलपुष्प झैं विस्तारित आँखा भएका
**अमृतभूः** = जन्ममृत्यु रहित भगवान्
**अदित्याम्** = अदितिको अगाडि
**प्रादुर्बभूव** = प्रकट हुनुभयो

**वाक्यार्थ–** यसप्रकार ब्रह्माजीले भगवान्‌को कर्म र पराक्रमको विषयमा स्तुति गरिसकेपछि चार हात र तिनमा शङ्ख, चक्र, गदा र पद्म धारण गरेका, पीताम्बर लगाएका एवं कमलपुष्प झैं विस्तारित आँखा भएका जन्ममृत्यु रहित भगवान् अदितिको अगाडि प्रकट हुनुभयो ।

**श्यामावदातो झषराजकुण्डलत्विषोल्लसच्छ्रीवदनाम्बुजः पुमान् ।**

**श्रीवत्सवक्षा बलयाङ्गदोल्लसत्किरीटकाञ्चीगुणचारुनूपुरः ॥ २ ॥**

**पदार्थ–**
**श्यामावदातः** = श्यामल र निर्मल शरीर भएका
**झषराजकुण्डलत्विषा** = मकराकार कुण्डलको कान्तिले
**उल्लसच्छ्रीवदनाम्बुजः** = मुखारविन्दमा शोभा उल्लसित भइरहेका
**श्रीवत्सवक्षाः** = छातीमा श्रीवत्सको चिह्न भएका
**बलयाङ्गदोल्लसत्किरीटकाञ्चीगुणचारुनूपुरः** = बाला, बाजु, चम्किलो किरीट, कमरबन्द र सुन्दर पाउजुद्वारा शोभायमान भएका
**पुमान्** = परमपुरुष भगवान् (अदितिको अगाडि प्रकट हुनुभयो)

**वाक्यार्थ–** श्यामल र निर्मल शरीर भएका, कानमा लगाएको मकराकार कुण्डलको कान्तिले सुशोभित मुखारविन्द भएका, छातीमा श्रीवत्सको चिह्न, हातमा बाला, पाखुरामा बाजु, मस्तकमा चम्किलो किरीट, कटिमा कमरबन्द र पाउमा सुन्दर पाउजुद्वारा शोभायमान भएका परमपुरुष भगवान् अदितिको अगाडि प्रकट हुनुभयो ।

**मधुव्रतव्रातविघुष्टया स्वया विराजितः श्रीवनमालया हरिः ।**

**प्रजापतेर्वेश्मतमः स्वरोचिषा विनाशयन् कण्ठनिविष्टकौस्तुभः ॥ ३ ॥**

**पदार्थ—**
**मधुव्रतव्रातविघुष्टया** = भँवराहरूको समूहद्वारा शब्दायमान भएको
**स्वया** = आफ्नो
**श्रीवनमालया** = ऐश्वर्यशाली वनमालाद्वारा
**विराजितः** = विराजित भएका
**कण्ठनिविष्टकौस्तुभः** = घाँटीमा कौस्तुभ मणि धारण गरेका
**हरिः** = भगवान् नारायण
**स्वरोचिषा** = आफ्नो कान्तिद्वारा
**प्रजापतेः** = प्रजापति कश्यपको
**वेश्मतमः** = कुटीमा रहेको अन्धकारलाई
**विनाशयन्** = नष्ट गर्दै (अदितिको अगाडि प्रकट हुनुभयो)

**वाक्यार्थ—** भँवराहरूको समूहद्वारा शब्दायमान भएको ऐश्वर्यशाली वनमाला र घाँटीमा कौस्तुभ मणि धारण गरेका भगवान् नारायण आफ्नो कान्तिले प्रजापति कश्यपको कुटीमा रहेको अन्धकारलाई नष्ट गर्दै अदितिको अगाडि प्रकट हुनुभयो।

**दिशः प्रसेदुः सलिलाशयास्तदा प्रजाः प्रहृष्टा ऋतवो गुणान्विताः।**
**द्यौरन्तरिक्षं क्षितिरग्निजिह्वा गावो द्विजाः सञ्जहृषुर्नगाश्च॥ ४॥**

**पदार्थ—**
**तदा** = त्यस वेलामा
**दिशः** = दिशाहरू
**सलिलाशयाः** = जलाशयहरू
**प्रसेदुः** = प्रसन्न र निर्मल भए
**प्रजाः** = सम्पूर्ण प्राणीहरू
**प्रहृष्टाः** = हर्षित भए
**ऋतवः** = ऋतुहरू
**गुणान्विताः** = पुष्पफलादि आ-आफ्नो गुणले युक्त भए
**द्यौः** = स्वर्ग
**अन्तरिक्षं** = अन्तरिक्ष
**क्षितिः** = पृथिवी
**अग्निजिह्वाः** = देवता
**गावः** = गाई
**द्विजाः** = ब्राह्मण
**नगाः च** = पर्वतहरू पनि
**सञ्जहृषुः** = हर्षित भए

**वाक्यार्थ—** भगवान् प्रकट भएपछि विभिन्न दिशाहरू र जलाशयहरू स्वच्छ भए। सम्पूर्ण प्राणीहरू हर्षित भए। ऋतुहरू पुष्प, फल आदि आ-आफ्ना गुणहरूले युक्त भए। स्वर्ग, अन्तरिक्ष, पृथिवी, देवगण, गाई, ब्राह्मण र पर्वतहरू पनि हर्षित भए।

**श्रोणायां श्रवणद्वादश्यां मुहूर्तेऽभिजिति प्रभुः।**
**सर्वे नक्षत्रताराद्याश्चक्रुस्तज्जन्म दक्षिणम्॥ ५॥**

**पदार्थ—**
**श्रवणद्वादश्यां** = भाद्र शुक्ल द्वादशीमा
**श्रोणायां** = चन्द्रमा श्रवण नक्षत्रमा भएको दिनमा
**अभिजिति** = अभिजित्
**मुहूर्ते** = मुहूर्तमा
**प्रभुः** = भगवान्ले (जन्म लिनुभयो)
**नक्षत्रताराद्याः** = नक्षत्र र तारा आदि
**सर्वे** = सम्पूर्ण ग्रहहरूले पनि
**तज्जन्म** = उहाँ भगवान्को जन्मलाई
**दक्षिणं** = मङ्गलको सङ्केतद्वारा सूचित
**चक्रुः** = गरे

**वाक्यार्थ—** भाद्र महिनाको शुक्ल पक्षको द्वादशी तिथिका दिन चन्द्रमा श्रवण नक्षत्रमा भएको वेला अभिजित् मुहूर्तमा भगवान्ले (अदितिको गर्भबाट) जन्म लिनुभयो। नक्षत्र, तारा आदि सम्पूर्ण ग्रहहरूले भगवान्को जन्मलाई मङ्गलको सङ्केत गरे।

**द्वादश्यां सवितातिष्ठन्मध्यन्दिनगतो नृप।**
**विजया नाम सा प्रोक्ता यस्यां जन्म विदुर्हरेः॥ ६॥**

**पदार्थ–**
**नृप** = हे राजा (त्यस वेला)
**सविता** = सूर्य
**मध्यन्दिनगतः** = मध्याह्नमा प्राप्त भई
**तिष्ठन्** = अवस्थित हुनुहुन्थ्यो
**यस्यां** = जुन
**द्वादश्यां** = द्वादशीका दिन
**हरेः** = भगवान्को
**जन्म** = जन्म
**विदुः** = भयो भन्दछन्
**सा** = त्यो द्वादशी तिथिलाई
**विजया नाम** = विजया द्वादशी भनेर
**प्रोक्ता** = बताइएको छ

**वाक्यार्थ–** भगवान्को जन्म हुने वेला सूर्य मध्य आकाशमा हुनुहुन्थ्यो। जुन द्वादशी तिथिको दिनमा भगवान्को जन्म भयो त्यो द्वादशी तिथिलाई विजया द्वादशी भनिन्छ।

**शङ्खदुन्दुभयो नेदुर्मृदङ्गपणवानकाः।**
**चित्रवादित्रतूर्याणां निर्घोषस्तुमुलोऽभवत्॥ ७॥**

**पदार्थ–**
**शङ्खदुन्दुभयः** = शङ्ख, ढोल
**मृदङ्गपणवानकाः** = मृदङ्ग, पणव, दमाहा आदि
**नेदुः** = बज्न लागे
**चित्रवादित्रतूर्याणां** = तुरही आदि विभिन्न प्रकारका बाजाहरूको
**तुमुलः** = महान्
**निर्घोषः** = ध्वनि
**अभवत्** = भयो

**वाक्यार्थ–** भगवान्को जन्मसमयमा शङ्ख, ढोल, मृदङ्ग, पणव, दमाहा आदि बाजाहरू बज्न थाले। तुरही आदि विभिन्न प्रकारका बाजाहरूको तुमुलध्वनि गुञ्जायमान हुन लाग्यो।

**प्रीताश्चाप्सरसोऽनृत्यन् गन्धर्वप्रवरा जगुः।**
**तुष्टुवुर्मुनयो देवा मनवः पितरोऽग्नयः॥ ८॥**

**पदार्थ–**
**प्रीताः** = प्रसन्न भएका
**अप्सरसः** = अप्सराहरू
**अनृत्यन्** = नाच्न थाले
**गन्धर्वप्रवराः** = श्रेष्ठ गन्धर्वहरू
**जगुः** = गीत गाउन थाले
**मुनयः** = मुनिहरू
**देवाः** = देवताहरू
**मनवः** = मनुहरू
**पितरः** = पितृहरू
**अग्नयः च** = अग्निहरूले पनि
**तुष्टुवुः** = स्तुति गर्न थाले

**वाक्यार्थ–** अप्सराहरू प्रसन्न भई नाच्न थाले भने श्रेष्ठ-श्रेष्ठ गन्धर्वहरू गीत गाउन थाले। मुनि, देवगण, मनु, पितृ र अग्निहरूले भगवान्को स्तुति गर्न थाले।

**सिद्धविद्याधरगणाः सकिम्पुरुषकिन्नराः।**
**चारणा यक्षरक्षांसि सुपर्णा भुजगोत्तमाः॥ ९॥**

**पदार्थ–**
**सिद्धविद्याधरगणाः** = सिद्ध र विद्याधरका गणहरू
**सकिम्पुरुषकिन्नराः** = किंपुरुष र किन्नरहरूले सहित भएका
**चारणाः** = चारण

**यक्षरक्षांसि** = यक्ष, राक्षस
**सुपर्णाः** = पक्षीहरू
**भुजगोत्तमाः** = श्रेष्ठ नागहरूले पनि (भगवान्‌को स्तुति गरे)

**वाक्यार्थ–** यसै गरी सिद्ध, विद्याधर, किम्पुरुष, किन्नर, चारण, यक्ष, राक्षस, पक्षी र श्रेष्ठ नागहरूले पनि भगवान्‌को स्तुति गरे।

**गायन्तोऽतिप्रशंसन्तो नृत्यन्तो विबुधानुगाः।**
**अदित्या आश्रमपदं कुसुमैः समवाकिरन्॥ १०॥**

**पदार्थ–**
**विबुधानुगाः** = देवताका अनुचरहरूले
**गायन्तः** = गीत गाउँदै
**अतिप्रशंसन्तः** = भगवान्‌को अतिशय प्रशंसा गर्दै (तथा)
**नृत्यन्तः** = नाच्दै
**अदित्याः** = अदितिको
**आश्रमपदं** = आश्रम भएको स्थानमा
**कुसुमैः** = फूलहरूद्वारा
**समवाकिरन्** = वृष्टि गरे

**वाक्यार्थ–** भगवान्‌का अनुचरहरूले नाचगान गर्दै तथा उहाँको अतिशय प्रशंसा गर्दै अदितिको आश्रम भएको स्थानमा पुष्पवृष्टि गरे।

**विवरण–** माथिका श्लोकहरूमा परिपूर्ण परमात्माले वामन अवतार लिनुहुँदा जडचेतनमय सम्पूर्ण जगत् कसरी प्रसन्न भयो भन्ने कुरा बताइएको छ। माथि पहिलो श्लोकमा भनिए झैं भगवान् **अमृतभूः** अर्थात् मृत्यु र जन्मले रहित हुनुहुन्छ, तर पनि उहाँ प्रकट हुनुभयो। त्यस वेला ऋतुहरूले आफ्नो सम्पूर्ण सौन्दर्य देखाउन थाले, दिशाहरू प्रसन्न भए, गाई, पृथिवी, अग्नि र ब्राह्मणहरू हर्षित भए। भगवान् वामनको जन्मसमय भाद्र शुक्ल द्वादशी तिथि थियो र श्रवण नक्षत्रको प्रारम्भमा अभिजित् मुहूर्त थियो। दिनका मालिक सूर्य आकाशमा प्रकाशमान् थिए। त्यस वेला सम्पूर्ण नक्षत्र र ताराहरू भगवान्‌को जन्मसमयलाई अत्युत्तम घोषित गरिरहेका थिए। यहाँ नक्षत्र भनेर अश्विनी आदि र तारा भनेर गुरु, शुक्र आदि ग्रहहरूलाई बुझाइएको छ। देवाङ्गनाहरूको नृत्य, गन्धर्व-किन्नरहरूको वाद्य र देवताहरूको पुष्पवृष्टिले झन् आनन्द बढाइरहेको थियो। मानिसहरू कुनै विशिष्ट अतिथि या सम्मानित व्यक्ति आउँदा उनको स्वागतमा जसरी तयारी गर्छन्, त्यसै गरी प्रकृतिले पनि आफ्ना स्वामी सर्वाधार परमात्माको स्वागतको तयारी गरेको यहाँ देखाइएको छ।

**दृष्ट्वादितिस्तं निजगर्भसम्भवं परं पुमांसं मुदमाप विस्मिता।**
**गृहीतदेहं निजयोगमायया प्रजापतिश्चाह जयेति विस्मितः॥ ११॥**

**पदार्थ–**
**अदितिः** = अदिति
**निजयोगमायया** = आफ्नो अचिन्त्य मायाशक्तिद्वारा
**गृहीतदेहं** = शरीर धारण गरेका
**निजगर्भसम्भवं** = आफ्नो गर्भबाट जन्म लिएका
**परं पुमांसं** = पुरुषोत्तम
**तं** = उहाँ भगवान् नारायणलाई
**दृष्ट्वा** = देखेर
**विस्मिता** = आश्चर्यचकित भइन् (तथा)
**मुदं** = आनन्द
**आप** = प्राप्त गरिन्
**प्रजापतिः च** = कश्यपजीले पनि

| | | |
|---|---|---|
| **विस्मितः** = आश्चर्यचकित भई | **जय इति** = जय होस् भनेर | **आह** = भन्न लाग्नुभयो |

**वाक्यार्थ–** आफ्नो अचिन्त्य मायाशक्तिद्वारा दिव्य शरीर धारण गरी आफ्नो गर्भबाट भगवान्ले जन्म लिनुभएको देखेर देवमाता अदितिलाई आश्चर्य लाग्यो भने परम आनन्दको अनुभूति पनि भयो। यता प्रजापति कश्यपजी पनि आश्चर्य मान्दै 'जय होस्, जय होस्' भन्न लाग्नुभयो।

**यत् तद् वपुर्भाति विभूषणायुधैरव्यक्तचिद् व्यक्तमधारयद्धरिः।**
**बभूव तेनैव स वामनो वटुः सम्पश्यतोर्दिव्यगतिर्यथा नटः॥ १२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अव्यक्तचित्** = अव्यक्त चित्स्वरूप | **भाति** = प्रकाशित हुन्छ | कुशल |
| **हरिः** = भगवान् श्रीहरिले | **तद्वपुः** = त्यही शरीर | **नटः यथा** = नट जस्तै |
| **विभूषणायुधैः** = गहना र हतियारहरूद्वारा | **अधारयत्** = धारण गर्नुभएको थियो | **सः** = ती भगवान् |
| **यत्** = जुन | **तेन एव** = त्यही शरीरद्वारा | **वामनः** = पुड्को |
| **व्यक्तं** = व्यक्त रूपमा | **सम्पश्यतः** = मातापिताले हेर्दाहेर्दै | **वटुः** = ब्रह्मचारी |
| | **दिव्यगतिः** = अद्भुत अभिनय | **बभूव** = हुनुभयो |

**वाक्यार्थ–** अव्यक्त चित्स्वरूप भगवान् नारायणले आभूषण र हतियारहरूले युक्त जुन व्यक्त शरीर धारण गर्नुभएको थियो त्यही शरीरद्वारा अदिति र कश्यपले हेर्दाहेर्दै अभिनयकुशल नटले तुरुन्तै रूप फेरे जस्तैं वामन (पुड्के) ब्रह्मचारीको रूप धारण गर्नुभयो।

**विवरण–** भगवान्ले अदितिको गर्भबाट पहिले श्रीहरिकै रूपमा चतुर्बाहुरूपमा जन्म लिनुभएको थियो। सर्वजगदाधार परमात्माले आफ्नो पुत्रको रूपमा जन्म लिनुभएको देखेर अदिति अत्यन्न प्रसन्न भइन् र कश्यप प्रजापतिले पनि आफ्नो छोरा भगवान् नै भएको प्रत्यक्ष देखेपछि उहाँको जयजयकार गर्नुभयो। त्यही वेलामा भगवान्ले आफ्नो चतुर्भुज रूपलाई सानो बालकको शरीरमा रूपान्तरित गर्नुभयो। सानो बच्चोको रूपमा देखेपछि सबैको ममता त्यतातिर आकृष्ट भयो र उहाँले लौकिक लीला सुरु गर्नुभयो। उहाँले बच्चाको रूप बनाउनुका साथै आफ्नो मायाद्वारा सबैको हृदयलाई मोहित गरिदिनुभयो जसका कारणले भगवान्लाई भर्खरको बालक ठानी उहाँको जातकर्म आदि संस्कारको आरम्भ भयो।

**तं वटुं वामनं दृष्ट्वा मोदमाना महर्षयः।**
**कर्माणि कारयामासुः पुरस्कृत्य प्रजापतिम्॥ १३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तं** = भगवान् | **दृष्ट्वा** = देखेर | **पुरस्कृत्य** = अगाडि राखेर |
| **वामनं** = वामनरूप | **मोदमानाः** = प्रसन्न भएका | **कर्माणि** = जातकर्म आदि संस्कार |
| **वटुं** = ब्रह्मचारीलाई | **महर्षयः** = महर्षिहरूले | **कारयामासुः** = गराए |
| | **प्रजापतिं** = प्रजापति कश्यपलाई | |

**वाक्यार्थ–** वामन ब्रह्मचारीको रूपमा भगवान्लाई देखेर अत्यन्त प्रसन्न भएका महर्षिहरूले प्रजापति कश्यपजीलाई अगाडि राखेर वामन वटुको जातकर्म आदि संस्कार गराए।

**तस्योपनीयमानस्य सावित्रीं सवितात्रवीत्।**

**बृहस्पतिर्ब्रह्मसूत्रं मेखलां कश्यपोऽददात्॥ १४॥**

**पदार्थ–**
**उपनीयमानस्य** = उपनयन कर्म गर्न लागिएका
**तस्य** = ती वामनलाई
**सविता** = सूर्यले
**सावित्रीं** = गायत्री
**अब्रवीत्** = सुनाउनुभयो
**बृहस्पतिः** = देवगुरु बृहस्पतिले
**ब्रह्मसूत्रं** = जनै र
**कश्यपः** = कश्यपजीले
**मेखलां** = मेखला (कन्दनी)
**अददात्** = प्रदान गर्नुभयो

**वाक्यार्थ–** वामनको उपनयन कर्म गर्दा उहाँलाई सूर्यले गायत्रीमन्त्र सुनाउनुभयो। देवगुरु बृहस्पतिले जनै र पिता कश्यपले मेखला प्रदान गर्नुभयो।

**ददौ कृष्णाजिनं भूमिर्दण्डं सोमो वनस्पतिः।**

**कौपीनाच्छादनं माता द्यौश्छत्रं जगतः पतेः॥ १५॥**

**पदार्थ–**
**भूमिः** = पृथिवीले
**जगतः पतेः** = जगत्का पालक वामनलाई
**कृष्णाजिनं** = मृगचर्म
**वनस्पतिः** = वृक्षहरूका पति
**सोमः** = चन्द्रमाले
**दण्डं** = दण्ड
**माता** = माता अदितिले
**कौपीनाच्छादनं** = लगौँटी र अधोवस्त्र (तथा)
**द्यौः** = आकाशका अभिमानी देवताहरूले
**छत्रं** = छाता
**ददौ** = दिए

**वाक्यार्थ–** जगत्पालक भगवान् वामनलाई पृथिवीले मृगचर्म, वृक्षहरूका स्वामी चन्द्रमाले दण्ड, माता अदितिले लगौँटी र अधोवस्त्र तथा आकाशका अभिमानी देवताहरूले छाता प्रदान गरे।

**कमण्डलुं वेदगर्भः कुशान् सप्तर्षयो ददुः।**

**अक्षमालां महाराज सरस्वत्यव्ययात्मनः॥ १६॥**

**पदार्थ–**
**महाराज** = हे महाराज परीक्षित्
**अव्ययात्मनः** = अविनाशी भगवान् वामनलाई
**वेदगर्भः** = ब्रह्माजीले
**कमण्डलुं** = कमण्डलु
**सप्तर्षयः** = सप्तर्षिहरूले
**कुशान्** = कुश
**सरस्वती** = सरस्वतीले
**अक्षमालां** = रुद्राक्षको माला
**ददुः** = दिनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! अविनाशी भगवान् वामनलाई ब्रह्माजीले कमण्डलु, सप्तर्षिहरूले कुश र सरस्वती देवीले रुद्राक्षको माला दिनुभयो।

**तस्मा इत्युपनीताय यक्षराट् पात्रिकामदात्।**

**भिक्षां भगवती साक्षादुमादादम्बिका सती॥ १७॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**उपनीताय** = उपनयन संस्कार गरिएका
**तस्मै** = ती वामनलाई
**यक्षराट्** = यक्षहरूका राजा कुबरले
**पात्रिकां** = भिक्षा राख्ने पात्र
**अदात्** = दिनुभयो
**साक्षात्** = साक्षात्
**भगवती** = भगवती
**अम्बिका** = अम्बिका
**सती** = सती
**उमा** = उमाले
**भिक्षां** = भिक्षा
**अदात्** = दिनुभयो

**वाक्यार्थ–** यसप्रकार उपनयन संस्कार गरिएका भगवान् वामनलाई यक्षराज कुबेरले भिक्षापात्र दिनुभयो भने साक्षात् भगवती अम्बिका उमाले भिक्षा दिनुभयो।

**स ब्रह्मवर्चसेनैवं सभां सम्भावितो वटुः।**
**ब्रह्मर्षिगणसञ्जुष्टामत्यरोचत मारिषः॥ १८॥**

**पदार्थ–**
**एवं** = यसरी
**सम्भावितः** = सबैबाट सत्कृत
**मारिषः** = श्रेष्ठ
**सः** = ती वामन
**वटुः** = ब्रह्मचारी
**ब्रह्मवर्चसेन** = आफ्नो तेजद्वारा
**ब्रह्मर्षिगणसञ्जुष्टां** = ब्रह्मर्षिहरूको समूहले युक्त भएको
**सभां** = सभामा
**अत्यरोचत** = अत्यन्त शोभायमान हुनुभयो

**वाक्यार्थ–** यसरी सम्पूर्ण देवीदेवताहरूबाट विभिन्न वस्तुहरू प्राप्त गरी सम्मानित हुनुभएका वामन ब्रह्मचारी ब्रह्मर्षिहरूको समूहले युक्त भएको सभामा आफ्नो तेजद्वारा अत्यन्त शोभायमान हुनुभयो।

**समिद्धमाहितं वह्निं कृत्वा परिसमूहनम्।**
**परिस्तीर्य समभ्यर्च्य समिद्भिरजुहोद् द्विजः॥ १९॥**

**पदार्थ–**
**द्विजः** = द्विज वामनले
**आहितं** = स्थापित
**समिद्धं** = बालिएको
**वह्निं** = अग्निलाई
**परिसमूहनम्** = परिसमूहन
**कृत्वा** = गरेर
**परिस्तीर्य** = परिस्तरण गरेर
**समभ्यर्च्य** = पूजा पनि गरेर
**समिद्भिः** = समिधाहरूद्वारा
**अजुहोत्** = हवन गर्नुभयो

**वाक्यार्थ–** यसपछि वटु वामनले स्थापना गरी बालिएको उपनयनको अग्निलाई परिसमूहन (जम्मा पार्ने कार्य) र परिस्तरण (फिँजाउने काम) गरेर पूजासमेत गरी समिधाहरूद्वारा हवन गर्नुभयो।

**श्रुत्वाश्वमेधैर्यजमानमूर्जितं बलिं भृगूणामुपकल्पितैस्ततः।**
**जगाम तत्राखिलसारसम्भृतो भारेण गां सन्नमयन् पदे पदे॥ २०॥**

**पदार्थ–**
**अखिलसारसम्भृतः** = सम्पूर्ण शक्ति र धैर्य, पाण्डित्य आदि

गुणहरूले पूर्ण वामन भगवान्
**भृगूणां** = भृगुवंशी
ब्राह्मणहरूद्वारा
**उपकल्पितैः** = गराइएको
**अश्वमेधैः** = अश्वमेध
यज्ञहरूद्वारा
**ऊर्जितं** = धन आदिले सम्पन्न
**यजमानं** = यजमान
**बलिं** = बलिको वृतान्त
**श्रुत्वा** = सुनेर
**ततः** = आफ्नो कुटीबाट
**भारेण** = आफ्नो भारले
**गां** = पृथिवीलाई
**पदे पदे** = प्रत्येक पदमा
**सन्नमयन्** = झुकाउँदै
**तत्र** = त्यहाँ (बलिको यज्ञमा)
**जगाम** = जानुभयो

**वाक्यार्थ–** सम्पूर्ण शक्ति, धैर्य र पाण्डित्य आदि गुणहरूले परिपूर्ण भगवान् वामनले भृगुवंशी ब्राह्मणहरूले विभिन्न सामग्रीहरूद्वारा अश्वमेध यज्ञ गराई यजमान बलिलाई धन आदिले सम्पन्न बनाएका छन् भन्ने कुरा सुन्नुभयो र आफ्नो भारले प्रत्येक पाइलामा पृथिवीलाई झुकाउँदै आफ्नो कुटीबाट बलिको यज्ञस्थानमा जानुभयो।

**तं नर्मदायास्तट उत्तरे बलेर्ये ऋत्विजस्ते भृगुकच्छसंज्ञके।**
**प्रवर्तयन्तो भृगवः क्रतूत्तमं व्याचक्षताराददुदितं यथा रविम्॥ २१॥**

पदार्थ–
**नर्मदायाः** = नर्मदा नदीको
**उत्तरे** = उत्तर
**तटे** = किनारमा
**भृगुकच्छसंज्ञके** = भृगुकच्छ नाम गरेको स्थानमा
**क्रतूत्तमं** = यज्ञश्रेष्ठ अश्वमेध
**प्रवर्तयन्तः** = गराइरहेका
**ये** = जो
**बलेः** = बलिको
**भृगवः** = भृगुवंशी
**ऋत्विजः** = यज्ञका ब्राह्मणहरू थिए
**ते** = तिनीहरूले
**आरात्** = नजिकैबाट
**उदितं** = उदाएका
**रविं यथा** = सूर्य झैँ
**तं** = ती वामनलाई
**व्याचक्षत** = देखे

**वाक्यार्थ–** नर्मदा नदीको उत्तरतटमा भृगुकच्छ नाम गरेको स्थानमा भृगुवंशी ब्राह्मणहरूले बलिद्वारा श्रेष्ठयज्ञ अश्वमेध गराइरहेका थिए। उनीहरूले नजिकैबाट उदाएका सूर्य झैँ यज्ञस्थानमा आउँदै गरेका वामनलाई देखे।

**ते ऋत्विजो यजमानः सदस्या हतत्विषो वामनतेजसा नृप।**
**सूर्यः किलायात्युत वा विभावसुः सनत्कुमारोऽथ दिदृक्षया क्रतोः॥ २२॥**

पदार्थ–
**नृप** = हे राजा
**वामनतेजसा** = वामनको तेजले
**हतत्विषः** = कान्तिक्षय भएका
**ते** = ती
**ऋत्विजः** = ब्राह्मणहरू
**यजमानः** = यजमान बलि
**सदस्याः** = यज्ञमा उपस्थित सदस्यहरू सबैले (सोच्न लागे)
**क्रतोः** = यज्ञलाई
**दिदृक्षया** = हेर्ने इच्छाले
**किल** = के
**सूर्यः** = सूर्यदेव
**आयाति** = आउनुभएको हो
**उत वा** = अथवा
**विभावसुः** = अग्निदेव
**अथ** = वा
**सनत्कुमारः** = सनत्कुमार आउनुभएको हो

**वाक्यार्थ—** हे महाराज परीक्षित् ! यज्ञस्थलमा आउँदै गर्नुभएका भगवान् वामनको तेजले कान्तिक्षय भएका यज्ञका ब्राह्मण, यजमान बलि र त्यहाँ उपस्थित सम्पूर्ण सदस्यहरूले विचार गरे— यज्ञको दर्शन गर्न सूर्य, अग्नि अथवा सनत्कुमार आउनुभएको त होइन ?

**इत्थं सशिष्येषु भृगुष्वनेकधा वितर्क्यमाणो भगवान् स वामनः ।**

**छत्रं सदण्डं सजलं कमण्डलुं विवेश बिभ्रद्धयमेधवाटम् ॥ २३ ॥**

**पदार्थ—**
**इत्थं** = यसरी
**सशिष्येषु** = आफ्ना शिष्यहरूले सहित भएका
**भृगुषु** = भृगुवंशी आचार्यहरूद्वारा
**अनेकधा** = विभिन्न प्रकारले
**वितर्क्यमाणः** = कल्पना गरिएका
**सः** = ती ब्रह्मचारी
**भगवान्** = भगवान्
**वामनः** = वामनले
**सदण्डं** = दण्डले सहित
**छत्रं** = छाता
**सजलं** = जलले युक्त
**कमण्डलुं** = कमण्डलु
**बिभ्रत्** = धारण गरी
**हयमेधवाटम्** = अश्वमेध यज्ञको मण्डपमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ—** आफ्ना शिष्यहरूले सहित भएका भृगुवंशी शुक्राचार्य आदि आचार्यहरूले यसप्रकार विभिन्न कल्पना गरिरहेको वेलामा भगवान् वामन दण्ड र छाता तथा जलयुक्त कमण्डलु लिएर अश्वमेध यज्ञको मण्डपमा प्रवेश गर्नुभयो ।

**मौञ्ज्या मेखलया वीतमुपवीताजिनोत्तरम् ।**

**जटिलं वामनं विप्रं मायामाणवकं हरिम् ॥ २४ ॥**

**प्रविष्टं वीक्ष्य भृगवः सशिष्यास्ते सहाग्निभिः ।**

**प्रत्यगृह्णन् समुत्थाय सङ्क्षिप्तास्तस्य तेजसा ॥ २५ ॥**

**पदार्थ—**
**मौञ्ज्या** = मुञ्ज (एक किसिमको खार)द्वारा निर्मित
**मेखलया** = मेखलाद्वारा
**वीतं** = कटि बाँधिएका
**उपवीताजिनोत्तरं** = जनैजस्तो गरी मृगचर्मको उत्तरीय लगाएका
**जटिलं** = जटा पालेका
**मायामाणवकं** = मायाद्वारा ब्रह्मचारीको वेष धारण गरेका
**वामनं** = वामन
**विप्रं** = ब्राह्मणरूप
**हरिं** = भगवान् श्रीहरिलाई
**प्रविष्टं** = यज्ञमण्डपमा प्रवेश गर्नुभएको
**वीक्ष्य** = देखेर
**तस्य** = वामनको
**तेजसा** = तेजले
**सङ्क्षिप्ताः** = निस्तेज भएका
**ते** = ती
**सशिष्याः** = बलि आदि शिष्यले सहित भएका
**भृगवः** = भृगुवंशी आचार्यहरू
**अग्निभिः सह** = अग्निले सहित भई
**समुत्थाय** = उठेर
**प्रत्यगृह्णन्** = यथोचित स्वागतसत्कार गरे

**वाक्यार्थ—** मुञ्जले बनेको मेखला कटिमा बाँधेका, जनै झैँ गरी गृचर्मको उत्तरीय लगाएका,

जटा पालेका एवं आफ्नो मायाद्वारा ब्रह्मचारी वेष धारण गरेका ब्राह्मणरूप भगवान् वामन जब यज्ञमण्डपमा प्रवेश गर्नुभयो, त्यस वेला वामनको तेजले निस्तेज भएका आफ्ना सम्पूर्ण शिष्यहरूले सहित भएका भृगुवंशी आचार्यहरू सबैले अग्निका साथ उठेर भगवान् वामनको यथोचित स्वागतसत्कार गरे।

**यजमानः प्रमुदितो दर्शनीयं मनोरमम्।**

**रूपानुरूपावयवं तस्मा आसनमाहरत्॥ २६॥**

**पदार्थ–**
**यजमानः** = यजमान बलिले
**दर्शनीयं** = दर्शन गर्न योग्य
**मनोरमं** = सुन्दर
**रूपानुरूपावयवं** = पुड्को शरीरको रूपअनुसारका अङ्ग भएका (वामनलाई देखेर)
**प्रमुदितः** = अत्यन्त प्रसन्न भई
**तस्मै** = ती ब्रह्मचारी वामनलाई
**आसनं** = आसन
**आहरत्** = दिए

**वाक्यार्थ–** पुड्को शरीर र शरीरको रूपअनुसारका छोटा-छोटा हात, पाउ आदि अङ्ग भएका दर्शनीय सुन्दर वामनलाई देखेर अत्यन्त प्रसन्न भएका यजमान बलिले उहाँलाई बस्नका लागि आसन प्रदान गरे।

**स्वागतेनाभिनन्द्याथ पादौ भगवतो बलिः।**

**अवनिज्यार्चयामास मुक्तसङ्गमनोरमम्॥ २७॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**बलिः** = बलिले
**मुक्तसङ्गमनोरमं** = विरक्त योगीहरूको मनमा क्रीडा गर्ने वामनलाई
**स्वागतेन** = स्वागत वचनद्वारा
**अभिनन्द्य** = अभिनन्दन गरी
**भगवतः** = भगवान् वामनको
**पादौ** = चरणलाई
**अवनिज्य** = धोएर
**अर्चयामास** = पूजा गरे

**वाक्यार्थ–** त्यसपछि बलिले विरक्त योगीहरूको मनमा रमण गर्ने भगवान् वामनलाई स्वागत छ भन्दै अभिनन्दन गरे। त्यसपछि उनले भगवान्को चरण धोएर पूजा गरे।

**तत्पादशौचं जनकल्मषापहं स धर्मविन्मूर्ध्न्यदधात् सुमङ्गलम्।**

**यद्देवदेवो गिरिशश्चन्द्रमौलिर्दधार मूर्ध्ना परया च भक्त्या॥ २८॥**

**पदार्थ–**
**जनकल्मषापहं** = मनुष्यहरूको पापलाई नष्ट गरिदिने
**सुमङ्गलं** = अत्यन्त मङ्गलमय
**तत्पादशौचं** = भगवान्को पादप्रक्षालन गरिएको जललाई
**धर्मवित्** = धर्मज्ञ
**सः** = ती बलिले
**मूर्ध्नि** = शिरमा
**अदधात्** = धारण गरे
**यत्** = जुन पादप्रक्षालन गरिएको जललाई
**देवदेवः** = देवाधिदेव ब्रह्मा
**चन्द्रमौलिः** = शिरमा चन्द्रमालाई राखेका
**गिरिशः च** = शङ्करले पनि
**परया भक्त्या** = परम प्रेमपूर्वक
**मूर्ध्ना** = शिरमा
**दधार** = धारण गर्नुभएको थियो

**वाक्यार्थ–** भगवान्‌को पादप्रक्षालन गरेको जल, जुन अत्यन्त मङ्गलमय हुन्छ र जसले मनुष्यहरूको सम्पूर्ण पापलाई नष्ट गरिदिन्छ त्यस जललाई धर्मज्ञ राजा बलिले शिरमा धारण गरे। भगवान्‌को चरण धोइएको जललाई देवाधिदेव ब्रह्मा र चन्द्रशेखर भगवान् महादेवले पनि अत्यन्त भक्तिपूर्वक शिरमा धारण गर्नुभएको थियो।

**बलिरुवाच** (बलिले भने)

**स्वागतं ते नमस्तुभ्यं ब्रह्मन् किं करवाम ते।**

**ब्रह्मर्षीणां तपः साक्षान्मन्ये त्वार्य वपुर्धरम्॥ २९॥**

**पदार्थ–**

**ब्रह्मन्** = हे ब्रह्मचारी
**ते** = तपाईंलाई
**स्वागतं** = स्वागत छ
**तुभ्यं** = तपाईंलाई
**नमः** = नमस्कार छ
**ते** = तपाईंको लागि
**किं** = के सेवा
**करवामः** = गरौँ
**आर्य** = हे सज्जन
**त्वा** = तपाईंलाई
**साक्षात्** = साक्षात्
**वपुर्धरं** = शरीरधारी
**ब्रह्मर्षीणां** = ब्रह्मर्षिहरूको
**तपः** = तपोराशि
**मन्ये** = ठान्दछु

**वाक्यार्थ–** हे ब्रह्मचारी ! तपाईंलाई स्वागत गर्दछु। तपाईंलाई मेरो नमस्कार छ। म तपाईंको के सेवा गरौँ ? आज्ञा होस्। हे सज्जन ! तपाईंलाई देख्दा ब्रह्मर्षिहरूको तपोराशि तपाईं साक्षात् शरीरधारी भएर मेरो अगाडि आउनुभएको हो भन्ने ठान्दछु।

**अद्य नः पितरस्तृप्ता अद्य नः पावितं कुलम्।**

**अद्य स्विष्टः क्रतुरयं यद् भवानागतो गृहान्॥ ३०॥**

**पदार्थ–**

**भवान्** = तपाईं
**गृहान्** = मेरो घरमा
**आगतः** = आउनुभएको छ
**यत्** = त्यसैले
**अद्य** = आज
**नः** = मेरा
**पितरः** = पितृहरू
**तृप्ताः** = तृप्त हुनुभयो
**अद्य** = आज
**नः** = मेरो
**कुलं** = सम्पूर्ण कुल नै
**पावितं** = पवित्र भएको छ
**अद्य** = आज
**अयं** = गर्दै गरिएको
**क्रतुः** = यज्ञ
**स्विष्टः** = राम्रोसँग अनुष्ठित भयो

**वाक्यार्थ–** आज तपाईं मेरो घरमा आउनुभएको छ, त्यसैले मेरा सम्पूर्ण पितृहरू तृप्त हुनुभयो। मेरो पुत्र–पौत्रादि सम्पूर्ण कुल पवित्र भयो र यो जुन यज्ञ म गर्दैछु, यो पनि विधिवत् रूपमा सम्पन्न भएको छ।

**अद्याग्नयो मे सुहुता यथाविधि द्विजात्मज त्वच्चरणावनेजनैः।**

**हतांहसो वार्भिरियं च भूरहो तथा पुनीता तनुभिः पदैस्तव॥ ३१॥**

**पदार्थ–**
**द्विजात्मज** = हे ब्राह्मणकुमार
**त्वच्चरणावनेजनैः** = तपाईंको चरण धोइएको
**वार्भिः** = जलद्वारा
**हतांहसः** = पाप नष्ट भएको
**मे** = मेरो
**अग्नयः** = यज्ञमा स्थापित अग्निहरू
**अद्य** = आज
**यथाविधि** = विधिपूर्वक
**सुहुताः** = राम्रोसँग हवन गरिए
**तथा** = त्यसै गरी
**अहो** = अहो
**इयं च** = यी
**भूः** = भूमि पनि
**तनुभिः** = स-साना
**तव** = तपाईंका
**पदैः** = पाउद्वारा
**पुनीता** = पवित्र भइन्

**वाक्यार्थ–** हे ब्राह्मणकुमार ! तपाईंको चरण धोइएको जलद्वारा मेरा सम्पूर्ण पापहरू नष्ट भए। यज्ञमा स्थापित अग्निहरू पनि राम्रोसँग हवन गरिए। यो भूमि पनि तपाईंका स-साना पाउको स्पर्श पाएर अत्यन्त पवित्र भयो।

**यद् यद् वटो वाञ्छसि तत् प्रतीच्छ मे त्वामर्थिनं विप्रसुतानुतर्कये।**
**गां काञ्चनं गुणवद्धाम मृष्टं तथान्नपेयमुत वा विप्रकन्याम्॥**
**ग्रामान् समृद्धांस्तुरगान् गजान् वा रथांस्तथार्हत्तम सम्प्रतीच्छ ॥ ३२ ॥**

**पदार्थ–**
**वटो** = हे ब्रह्मचारी
**त्वां** = तपाईंलाई
**अर्थिनं** = केही पाउने इच्छाले आएको याचकका रूपमा
**अनुतर्कये** = विचार गरेको छु
**विप्रसुत** = हे ब्राह्मणकुमार
**यत् यत्** = जे-जे
**वाञ्छसि** = चाहनुहुन्छ
**तत्** = ती सबै कुराहरू
**मे** = मबाट
**प्रतीच्छ** = लिनुहोस्
**अर्हत्तम** = हे पूज्यवर
**गां** = गाई
**काञ्चनं** = सुवर्ण
**गुणवत्** = सुविधासम्पन्न
**धाम** = घर
**तथा** = तथा
**मृष्टं** = स्वादिष्ट
**अन्नपेयं** = अन्न र पेय वस्तु
**उत वा** = अथवा
**विप्रकन्यां** = ब्राह्मणकन्या
**समृद्धान्** = सम्पत्तिले सम्पन्न
**ग्रामान्** = गाउँ
**तुरगान्** = घोडा
**गजान्** = हात्ती
**वा** = अथवा
**रथान्** = रथ
**सम्प्रतीच्छ** = लिनुहोस्

**वाक्यार्थ–** हे ब्रह्मचारी ! तपाईं मबाट केही पाउने इच्छाले आउनुभएको हो जस्तो लाग्छ। हे ब्राह्मणकुमार ! तपाईं जे-जे चाहनुहुन्छ ती सबै वस्तुहरू मबाट लिनुहोस्। हे पूज्यवर ब्राह्मण ! गाई, सुवर्ण, सुविधासम्पन्न घर, स्वादिष्ट अन्न, पेय वस्तु, ब्राह्मणकन्या, समृद्ध गाउँ, हात्ती, घोडा, रथ आदि जे-जे चाहिन्छ, मबाट लिनुहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**
**वामनप्रादुर्भावे बलिवामनसंवादेऽष्टादशोऽध्यायः ॥ १८ ॥**

# अथ एकोनविंशोऽध्यायः

## भगवान् वामनद्वारा बलिसँग भूमिको याचना र गुरु शुक्राचार्यद्वारा भूमिदानमा अवरोध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति वैरोचनेर्वाक्यं धर्मयुक्तं ससूनृतम्।**
**निशम्य भगवान् प्रीतः प्रतिनन्द्येदमब्रवीत्॥ १॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**धर्मयुक्तं** = धर्मसम्मत
**ससूनृतम्** = मनोहर
**वैरोचनेः** = विरोचनपुत्र बलिको
**वाक्यं** = कुरा
**निशम्य** = सुनेर
**प्रीतः** = प्रसन्न हुनुभएका
**भगवान्** = भगवान् वामनले
**प्रतिनन्द्य** = बलिको प्रशंसा गर्दै
**इदं** = यसो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** यसप्रकार बलिको धर्मसम्मत र मनोहर कुरा सुनेर भगवान् वामन प्रसन्न हुनुभयो र बलिको प्रशंसा गर्दै उहाँले भन्न थाल्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**वचस्तवैतज्जनदेव सूनृतं कुलोचितं धर्मयुतं यशस्करम्।**
**यस्य प्रमाणं भृगवः साम्पराये पितामहः कुलवृद्धः प्रशान्तः॥ २॥**

**पदार्थ–**
**जनदेव** = हे प्रजेश्वर
**एतत्** = यो
**वचः** = वाणी
**सूनृतं** = सत्य
**धर्मयुतं** = धर्मसम्मत
**कुलोचितं** = कुलोचित
**तव** = तपाईंको
**यशस्करं** = कीर्तिवर्धक पनि छ
**यस्य** = जुन तपाईंको (यो लोकको व्यवहारमा)
**भृगवः** = शुक्राचार्य आदि गुरुहरू (प्रमाण हुनुहुन्छ) भने
**साम्पराये** = परलोकको व्यवहारका लागि
**प्रशान्तः** = अति शान्त
**कुलवृद्धः** = कुलवृद्ध
**पितामहः** = हजुरबा (प्रह्लाद)
**प्रमाणम्** = प्रमाण हुनुहुन्छ

**वाक्यार्थ–** हे प्रजेश्वर बलि ! तपाईंले सत्य र धर्मसम्मत जुन कुरा गर्नुभयो, त्यो कुलोचित छ र त्यसले तपाईंको कीर्तिविस्तार गरेको छ। हुन पनि तपाईंले यस लोकको सम्पूर्ण व्यवहारमा भृगुपुत्र शुक्राचार्यलाई प्रमाण मान्नुभएको छ भने पारलौकिक व्यवहारमा कुलवृद्ध, अत्यन्त शान्त आफ्ना हजुरबा प्रह्लादलाई प्रमाण मान्नुभएको छ।

**न ह्येतस्मिन् कुले कश्चिन्निःसत्त्वः कृपणः पुमान्।**
**प्रत्याख्याता प्रतिश्रुत्य यो वादाता द्विजातये॥ ३॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**एतस्मिन्** = यो तपाईंको
**कुले** = कुलमा
**यः** = जो
**द्विजातये** = ब्राह्मण जातिलाई
**प्रत्याख्याता** = दिन्नँ भन्ने वक्ता
**वा** = अथवा
**प्रतिश्रुत्य** = दिन्छु भनेर
**अदाता** = नदिने
**कश्चित्** = कुनै पनि
**निःसत्त्वः** = कायर
**कृपणः** = लोभी
**पुमान्** = पुरुष
**न** = भएको छैन

**वाक्यार्थ—** हे बलि ! तपाईंको यस कुलमा ब्राह्मणलाई दिन्नँ भन्ने अथवा दिन्छु भनेर नदिने कायर लोभी पुरुष कहिल्यै उत्पन्न भएको छैन।

**न सन्ति तीर्थे युधि चार्थिनार्थिताः पराङ्मुखा ये त्वमनस्विनो नृपाः।**
**युष्मत्कुले यद्यशसामलेन प्रह्लाद उद्भाति यथोडुपः खे॥ ४॥**

**पदार्थ—**
**तीर्थे** = दान दिने समयमा
**अर्थिना** = याचकद्वारा
**अर्थिताः** = वस्तु मागिँदा
**युधि** = युद्धमा (शत्रुले चुनौती दिँदा)
**ये तु** = जो
**पराङ्मुखाः** = त्यसबाट विमुख हुने र
**अमनस्विनः च** = धैर्यहीन
**नृपाः** = राजाहरू छन्, (त्यस्ता राजाहरू)
**युष्मत्कुले** = तपाईंको कुलमा
**न सन्ति** = छँदै छैनन्
**यत्** = जुन यो तपाईंको कुलमा
**अमलेन** = निर्मल
**यशसा** = कीर्तिद्वारा
**खे** = आकाशमा
**उडुपः यथा** = चन्द्रमा झैँ
**प्रह्लादः** = प्रह्लाद
**उद्भाति** = प्रकाशित हुनुहुन्छ

**वाक्यार्थ—** तपाईंको यो कुलमा त्यस्तो राजा कहिल्यै भएन जो दान दिने समयमा याचकको प्रार्थना सुनेर तथा युद्धको समयमा शत्रुको चुनौती सुनेर विमुख भएको होस्। आकाशमा चन्द्रमा झैँ तपाईंको यस कुलमा आफ्नो निर्मल कीर्तिद्वारा प्रह्लाद प्रकाशित हुनुभएको छ।

**विवरण—** माथिका दुई श्लोकमा बलिको कुल र उनका हजुरबुबा प्रह्लादजीको प्रशंसा गरिएको छ। दान लिनेहरूले दिनेलाई जहिले पनि प्रशंसा गर्नुपर्दछ भन्ने सिकाउन पनि भगवान्‌ले यसो गर्नुभएको हो भनी श्रीधर स्वामीले यस अध्यायको सुरुमा नै सूचित गर्नुभएको छ। माथि तेस्रो श्लोकमा भनिएको छ— बलिको कुलमा कुनै पनि व्यक्ति गरिब थिएन, जसले दिन सक्दिनँ भनी कुनै याचकको तिरस्कार गरेको होस्। कुनै त्यस्तो लोभी थिएन, जसले दिन्छु भन्ने प्रतिज्ञा गरी पछि नदिएको होस्। यस चौथो श्लोकमा बलिका पूर्वजहरू सत्पात्रलाई दान दिने वेलामा र युद्धको वेलामा कहिल्यै पनि उत्साहशून्य भएनन् भनी बताइएको छ। जब-जब दान या युद्ध चाहनेले उनीहरूसँग याचना गर्‍यो, उनीहरू त्यसका लागि सधैँ तत्पर देखिए, पराङ्मुख भएनन्। प्रह्लादको जीवनले त यस कीर्तिगाथालाई झनै चम्काइदियो भनी यहाँ प्रह्लादको कुलको प्रशंसा गरिएको छ।

**यतो जातो हिरण्याक्षश्चरन्नेक इमां महीम्।**
**प्रतिवीरं दिग्विजये नाविन्दत गदायुधः॥ ५॥**

**पदार्थ–**
**यतः** = यही कुलमा
**गदायुधः** = गदा नै हतियार भएका (गदाधारी)
**हिरण्याक्षः** = हिरण्याक्ष
**जातः** = जन्मिएको थियो (जसले)
**एकः** = एक्लै
**दिग्विजये** = दिग्विजयका लागि
**इमां** = यो
**महीं** = सम्पूर्ण पृथिवी
**चरन्** = घुम्दा पनि
**प्रतिवीरं** = आफूसमानको प्रतिद्वन्द्वी वीर शत्रु
**न अविन्दत** = पाएन

**वाक्यार्थ–** तपाईंको यस कुलमा हिरण्याक्ष जस्तो व्यक्ति जन्मियो, जसले दिग्विजयका लागि गदा लिएर यो सम्पूर्ण पृथिवी एक्लै घुम्दा पनि आफूसमानको प्रतिद्वन्द्वी वीर शत्रु प्राप्त गर्न सकेन।

**यं विनिर्जित्य कृच्छ्रेण विष्णुः क्ष्मोद्धार आगतम्।**
**आत्मानं जयिनं मेने तद्वीर्यं भूर्यनुस्मरन्॥ ६॥**

**पदार्थ–**
**क्ष्मोद्धारे** = जलबाट पृथिवीको उद्धार गर्ने समयमा
**आगतं** = युद्धका लागि आएको
**यं** = जो हिरण्याक्षलाई
**विष्णुः** = वराहरूप भगवान् विष्णुले
**कृच्छ्रेण** = ज्यादै दुःखले
**विनिर्जित्य** = जिते तापनि
**भूरि** = अधिक
**तद्वीर्यं** = हिरण्याक्षको पराक्रमलाई
**अनुस्मरन्** = बारम्बार सम्झँदै
**आत्मानं** = आफूलाई
**जयिनं** = विजयी
**न मेने** = मान्नुभएन

**वाक्यार्थ–** जलबाट पृथिवीको उद्धार गर्ने वेलामा युद्ध गर्न आएको त्यस हिरण्याक्षलाई वराहरूप भगवान् विष्णुले ज्यादै दुःखले जिते तापनि उसको पराक्रमलाई बारम्बार सम्झिँदै भगवान्ले आफूलाई विजयी मान्नुभएन।

**निशम्य तद्वधं भ्राता हिरण्यकशिपुः पुरा।**
**हन्तुं भ्रातृहणं क्रुद्धो जगाम निलयं हरेः॥ ७॥**

**पदार्थ–**
**तद्वधं** = हिरण्याक्षको वध (भएको भन्ने)
**निशम्य** = सुनेर
**भ्राता** = हिरण्याक्षको दाइ
**हिरण्यकशिपुः** = हिरण्यकशिपु
**पुरा** = पहिले
**क्रुद्धः** = क्रुद्ध भई
**भ्रातृहणं** = भाइको हत्यारालाई
**हन्तुं** = मार्न
**हरेः** = भगवान् श्रीहरिको
**निलयं** = वासस्थानमा
**जगाम** = गयो

**वाक्यार्थ–** भगवान् विष्णुको हातबाट आफ्नो भाइ हिरण्याक्षको वध भएको भन्ने सुनेर

हिरण्यकशिपु क्रुद्ध भयो र ऊ भाइको हत्यारालाई मार्न भगवान् श्रीहरिको वासस्थान वैकुण्ठमा गयो।

**तमायान्तं समालोक्य शूलपाणिं कृतान्तवत्।**
**चिन्तयामास कालज्ञो विष्णुर्मायाविनां वरः॥ ८॥**

**पदार्थ–**
**शूलपाणिं** = हातमा त्रिशूल लिएर
**कृतान्तवत्** = काल झैँ
**आयान्तं** = आउँदै गरेको
**तं** = त्यस हिरण्यकशिपुलाई
**समालोक्य** = देखेर
**मायाविनां** = मायावीहरूमा
**वरः** = श्रेष्ठ
**कालज्ञः** = कुन समयमा के गर्नुपर्दछ भनेर जान्ने
**विष्णुः** = भगवान् विष्णुले
**चिन्तयामास** = विचार गर्नुभयो

**वाक्यार्थ–** हातमा त्रिशूल लिएर काल झैँ आफूतिर आउँदै गरेको हिरण्यकशिपुलाई देखेर मायावीहरूमा श्रेष्ठ र कुन समयमा के गर्नुपर्दछ भनेर जान्ने भगवान् विष्णुले विचार गर्नुभयो।

**यतो यतोऽहं तत्रासौ मृत्युः प्राणभृतामिव।**
**अतोऽहमस्य हृदयं प्रवेक्ष्यामि पराग्दृशः॥ ९॥**

**पदार्थ–**
**अहं** = म
**यतः यतः** = जहाँ-जहाँ (जान्छु)
**तत्र** = त्यहाँ-त्यहाँ
**प्राणभृतां** = प्राणीहरूमा
**मृत्युः इव** = मृत्युले झैँ
**असौ** = यो हिरण्यकशिपु पनि (आउनेछ)
**अतः** = त्यसकारण
**अहं** = म
**पराग्दृशः** = बहिर्दृष्टि भएको
**अस्य** = यसको
**हृदयं** = अन्तःकरणमा
**प्रवेक्ष्यामि** = प्रवेश गर्नेछु

**वाक्यार्थ–** जसरी प्राणी जता गयो, मृत्यु पनि त्यतै-त्यतै जान्छ त्यसै गरी म जता गए पनि यो हिरण्यकशिपुले मलाई पछ्याइरहन्छ। त्यसकारण म बहिर्दृष्टि भएको यसको अन्तःकरणमा प्रवेश गर्नेछु।

**एवं स निश्चित्य रिपोः शरीरमाधावतो निर्विविशेऽसुरेन्द्र।**
**श्वासानिलान्तर्हितसूक्ष्मदेहस्तत्प्राणरन्ध्रेण विविग्नचेताः॥ १०॥**

**पदार्थ–**
**असुरेन्द्र** = हे दानवराज बलि
**विविग्नचेताः** = डरले मुटु कामिरहेका
**श्वासानिलान्तर्हितसूक्ष्मदेहः** = श्वासवायुमा शरीरलाई सूक्ष्म बनाएका
**सः** = ती भगवान् विष्णुले
**एवं** = यस्तो
**निश्चित्य** = निश्चय गरी
**तत्प्राणरन्ध्रेण** = त्यस हिरण्यकशिपुको नाकको प्वालबाट
**आधावतः** = झम्टिँदै आइरहेको
**रिपोः** = शत्रु हिरण्यकशिपुको
**शरीरं** = शरीरमा
**निर्विविशे** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** हे दानवराज बलि ! बलवान् शत्रुको डरले मुटु कामिरहेका भगवान् विष्णुले यस्तो निश्चय गरी आफ्नो शरीरलाई अत्यन्त सूक्ष्म बनाउनुभयो र वेगपूर्वक आफूलाई झम्टँदै आइरहेको हिरण्यकशिपुको नाकको प्वालबाट उसैको शरीरभित्र प्रवेश गर्नुभयो।

**स तन्निकेतं परिमृश्य शून्यमपश्यमानः कुपितो ननाद।**
**क्ष्मां द्यां दिशः खं विवरान् समुद्रान् विष्णुं विचिन्वन्न ददर्श वीरः॥ ११॥**

**पदार्थ–**
**सः वीरः** = ती वीर हिरण्यकशिपुले
**शून्यं** = विष्णुरहित
**तन्निकेतं** = विष्णुको निवासस्थानमा
**परिमृश्य** = खोजेर
**अपश्यमानः** = कहीं पनि नदेखेपछि
**कुपितः** = क्रुद्ध भई
**ननाद** = आफूले विष्णुलाई जितेको घोषणा गऱ्यो (त्यसपछि फेरि पनि)
**क्ष्मां** = पृथिवी
**द्यां** = स्वर्ग
**दिशः** = दिशाहरू
**खं** = आकाश
**विवरान्** = अतल आदि अधोलोक
**समुद्रान्** = समुद्रहरूमा
**विचिन्वन्** = खोजी गरे पनि
**विष्णुं** = विष्णुलाई
**न ददर्श** = देखेन

**वाक्यार्थ–** वैकुण्ठधामको सबैतिर खोजी गरे पनि भगवान् विष्णुलाई नदेखेपछि क्रुद्ध भएको हिरण्यकशिपुले आफूले विष्णुलाई जितेको घोषणा गऱ्यो। त्यसपछि वैकुण्ठदेखि बाहिर पृथिवी, स्वर्ग, दिशा, आकाश, अतल आदि अधोलोक, सातै समुद्र सबैतिर खोज्यो, तर उसले कतै पनि भगवान् विष्णुलाई देखेन।

**अपश्यन्निति होवाच मयान्विष्टमिदं जगत्।**
**भ्रातृहा मे गतो नूनं यतो नावर्तते पुमान्॥ १२॥**

**पदार्थ–**
**अपश्यन्** = विष्णुलाई कहीं नदेखेको हिरण्यकशिपु
**ह** = निश्चय नै
**इति** = यसो
**उवाच** = भन्न लाग्यो
**मया** = मैले
**इदं** = यो
**जगत्** = सम्पूर्ण जगत्
**अन्विष्टं** = खोजें
**नूनं** = निश्चय नै
**मे** = मेरो
**भ्रातृहा** = भाइको हत्यारा
**गतः** = (त्यतै) गयो
**यतः** = जहाँबाट
**पुमान्** = व्यक्ति
**न आवर्तते** = फर्केर आउँदैन

**वाक्यार्थ–** सबैतिर खोज्दा पनि भगवान् विष्णुलाई कहीं नदेखेपछि हिरण्यकशिपु भन्न लाग्यो– मैले सम्पूर्ण जगत्मा खोजिसकें, तर विष्णु कहीं पनि छैन। त्यो मेरो भाइको हत्यारा निश्चय पनि त्यो लोकमा गयो जुन लोकमा गएको व्यक्ति कहिल्यै फर्केर आउँदैन।

**वैरानुबन्ध एतावानामृत्योरिह देहिनाम्।**
**अज्ञानप्रभवो मन्युरहंमानोपबृंहितः॥ १३॥**

**पदार्थ—**
**इह** = यस लोकमा
**देहिनाम्** = प्राणीहरूको
**वैरानुबन्धः** = शत्रुताभाव
**एतावान्** = यति नै हो कि त्यो
**आमृत्योः** = मृत्युपर्यन्त रहन्छ
**अज्ञानप्रभवः** = अज्ञानजन्य
**मन्युः** = क्रोध
**अहंमानोपबृंहितः** = अहङ्कारद्वारा बढ्दछ

**वाक्यार्थ—** यस लोकमा प्राणीहरूमा परस्परमा हुने शत्रुता देह रहुन्जेल मात्र हो। क्रोध अज्ञानका कारण उत्पन्न हुन्छ र त्यसलाई अहङ्कारले झन् बढाइदिन्छ।

**पिता प्रह्लादपुत्रस्ते तद्विद्वान् द्विजवत्सलः।**
**स्वमायुर्द्विजलिङ्गेभ्यो देवेभ्योऽदात् स याचितः॥ १४॥**

**पदार्थ—**
**द्विजवत्सलः** = ब्राह्मणभक्त
**प्रह्लादपुत्रः** = प्रह्लादका पुत्र
**ते** = तपाईंका
**पिता** = पिता विरोचनले
**तद्विद्वान्** = यी ब्राह्मणवेषधारी मेरा शत्रु हुन्, ब्राह्मण होइनन् भन्ने जानेर पनि
**याचितः** = देवताहरूद्वारा दानका लागि प्रार्थित
**सः** = ती विरोचनले
**द्विजलिङ्गेभ्यः** = ब्राह्मणको रूप धारण गरेका
**देवेभ्यः** = देवताहरूलाई
**स्वं** = आफ्नो
**आयुः** = आयु
**अदात्** = दान दिए

**वाक्यार्थ—** प्रह्लादका छोरा अनि तपाईंका पिता ब्राह्मणभक्त विरोचनले ब्राह्मणको रूप लिएर आएका देवताहरूलाई आफ्ना शत्रु हुन् भन्ने जान्दाजान्दै पनि देवताहरूद्वारा दानका लागि प्रार्थना गरिएका उनले आफ्नो आयु नै दान दिए।

**भवानाचरितान् धर्मानास्थितो गृहमेधिभिः।**
**ब्राह्मणैः पूर्वजैः शूरैरन्यैश्चोद्दामकीर्तिभिः॥ १५॥**

**पदार्थ—**
**गृहमेधिभिः** = गृहस्थ
**ब्राह्मणैः** = शुक्राचार्य आदि ब्राह्मणहरूद्वारा
**पूर्वजैः** = विरोचन आदि आफ्ना पूर्वजहरूद्वारा
**उद्दामकीर्तिभिः** = अनन्त कीर्ति भएका
**अन्यैः** = अन्य
**शूरैः च** = वीरहरूद्वारा पनि
**आचरितान्** = आचरण गरिएका
**धर्मान्** = धर्महरूलाई
**भवान्** = तपाईंले
**आस्थितः** =पालना गर्नुभएको छ

**वाक्यार्थ—** हे बलि ! शुक्राचार्य जस्ता गृहस्थ ब्राह्मण, विरोचन आदि आफ्ना पूर्वज र अनन्त कीर्ति भएका अन्य वीरपुरुषहरूले जुन धर्मको आचरण गरेका थिए, तपाईंले पनि त्यही धर्मको पालना गर्नुभएको छ।

**तस्मात् त्वत्तो महीमीषद् वृणेऽहं वरदर्षभात्।**
**पदानि त्रीणि दैत्येन्द्र सम्मितानि पदा मम॥ १६॥**

**पदार्थ—**
**दैत्येन्द्र** = हे दानवराज
**तस्मात्** = त्यसकारण
**वरदर्षभात्** = दान दिनेहरूमा श्रेष्ठ
**त्वत्तः** = तपाईंबाट
**अहं** = म
**ईषत्** = थोरै
**मम** = मेरो
**पदा** = पाइलाद्वारा
**सम्मितानि** = नापिएको
**त्रीणि** = तीन
**पदानि** = पाइला
**महीं** = भूमि
**वृणे** = वरण गर्दछु (माग्दछु)

**वाक्यार्थ—** हे दानवराज बलि ! त्यसकारण श्रेष्ठ दाता तपाईंसँग म मेरो तीन पाइला बराबरको थोरै भूमि माग्दछु।

**नान्यत् ते कामये राजन् वदान्याज्जगदीश्वरात्।**
**नैनः प्राप्नोति वै विद्वान् यावदर्थप्रतिग्रहः ॥ १७ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा
**वदान्यात्** = उदार
**जगदीश्वरात्** = लोकका मालिक
**ते** = तपाईंबाट
**अन्यत्** = तीन पाइला भूमिदेखि अतिरिक्त केही पनि
**न कामये** = चाहन्नँ (किनकि)
**यावदर्थप्रतिग्रहः** = आवश्यक वस्तु मात्र ग्रहण गर्ने
**विद्वान्** = विद्वान् पुरुषले
**वै** = निश्चय नै
**एनः** = पाप
**न प्राप्नोति** = प्राप्त गर्दैन

**वाक्यार्थ—** हे राजा ! उदार र तीनै लोकका अधिपति भए तापनि तपाईंबाट म तीन पाइला भूमिदेखि अतिरिक्त केही पनि माग्दिनँ किनभने आवश्यक वस्तु मात्र ग्रहण गर्ने विद्वान् पुरुषलाई प्रतिग्रहजन्य पाप लाग्दैन।

**बलिरुवाच** (बलिले भने)

**अहो ब्राह्मणदायाद वाचस्ते वृद्धसम्मताः।**
**त्वं बालो बालिशमतिः स्वार्थं प्रत्यबुधो यथा ॥ १८ ॥**

**पदार्थ—**
**ब्राह्मणदायाद** = हे ब्राह्मणपुत्र
**अहो** = आश्चर्य छ कि
**ते** = तपाईंका
**वाचः** = भनाइहरू
**वृद्धसम्मताः** = वृद्धहरूको जस्तै छ
**त्वं** = तपाईं
**बालः** = बालक हुनुहुन्छ (त्यसैले)
**बालिशमतिः** = बुद्धि पनि अनजान बालककै जस्तो छ (त्यसैले)
**यथा** = यथार्थमा (तपाईं)
**स्वार्थं प्रति** = आफ्नो स्वार्थप्रति
**अबुधः** = अनभिज्ञ नै हुनुहुन्छ

**वाक्यार्थ—** हे ब्राह्मणपुत्र ! तपाईंको भनाइ वृद्धहरूको जस्तै छ, तर तपाईं बालक नै हुनुहुन्छ। त्यसैले तपाईंको बुद्धि पनि अनजान बालककै जस्तो छ किनभने तपाईंले आफ्नो स्वार्थलाई अझ बुझ्नुभएको छैन।

**मां वचोभिः समाराध्य लोकानामेकमीश्वरम्।**
**पदत्रयं वृणीते योऽबुद्धिमान् द्वीपदाशुषम्॥ १९॥**

**पदार्थ—**
**लोकानां** = तीनै लोकको
**एकं** = एक मात्र
**ईश्वरं** = स्वामी (त्यसैले)
**द्वीपदाशुषं** = जम्बु आदि द्वीपहरू पनि दान दिन समर्थ
**मां** = मलाई
**वचोभिः** = आफ्नो वाणीद्वारा
**समाराध्य** = प्रसन्न गराएर
**यः** = जो तपाईं
**अबुद्धिमान्** = वस्तुतः अज्ञानी भएर नै
**पदत्रयं** = तीन पाइला जमिन
**वृणीते** = मागिरहनुभएको छ

**वाक्यार्थ—** स्वर्ग आदि तीनै लोकको एक मात्र स्वामी एवं जम्बु आदि द्वीपहरू पनि दान दिन सक्ने मलाई आफ्ना वाणीहरूद्वारा प्रसन्न गराएर पनि तपाईं जम्मा तीन पाइला जमिन मागिरहनुभएको छ, तपाईं वास्तवमा अज्ञानी हुनुहुँदो रहेछ।

**न पुमान् मामुपव्रज्य भूयो याचितुमर्हति।**
**तस्माद् वृत्तिकरीं भूमिं वटो कामं प्रतीच्छ मे॥ २०॥**

**पदार्थ—**
**पुमान्** = कुनै पनि व्यक्तिले
**मां** = मसँग
**उपव्रज्य** = आएर (मागेर)
**भूयः** = फेरि
**याचितुं** = (अरूसँग गई) माग्नु
**न अर्हति** = नपरोस्
**तस्मात्** = त्यसैले
**वटो** = हे ब्रह्मचारी
**कामं** = यथेच्छ
**वृत्तिकरीं** = जीविका चलाउन पुग्ने प्रशस्त
**भूमिं** = जमिन
**मे** = मबाट
**प्रतीच्छ** = लिनुहोस् (माग्नुहोस्)

**वाक्यार्थ—** हे ब्रह्मचारी ! मसँग आएर एकपटक मागेको व्यक्तिले फेरि अर्कोपटक कहीँ गएर माग्न नपरोस्। त्यसैले तपाईं आफ्नो पूरै जीवनभरिको जीविकाका लागि आवश्यक प्रशस्त जमिन मसँग माग्नुहोस्।

**विवरण—** माथिका दुई श्लोकमा असुरराज बलिले आत्मगौरवको भाव अभिव्यक्त गरेका छन्। उनी आफूलाई योग्य व्यक्ति पाइयो भने पुराका पुरा द्वीप नै दानमा दिने महादानी मान्दछन्। उनले स्पष्ट शब्दमा भनेका छन् कि म तीनै लोकको एक मात्र स्वामी हुँ। मसँग आएर कुनै कुरा मागेको व्यक्तिले जीवनभरि त्यसबाट गुजारा गर्न नसकी अर्को दोस्रो व्यक्तिसँग माग्नु मेरो लागि लाजमर्दो कुरा हुन्छ। त्यसैले पूरा जीविका चल्ने गरी माग्नुहोस्। यो आत्मगौरवको भावनाले अज्ञानीहरूको मनमा अहङ्कार उत्पन्न गरिदिन्छ। अहङ्कार सम्पूर्ण दुःखको मूल कारण हो। बलिको मनमा पनि यस्तै अहङ्कार थियो। अरु उनले त स्पष्ट रूपमा नै यसको अभिव्यक्ति गरे। जुन परमात्माले आफ्नो कल्पनाको भरमा सम्पूर्ण विश्वप्रपञ्च रच्नुभयो, त्यही परमात्माको अघि एउटा राजाले संसारको नै स्वामी हुँ भन्न कहाँ सुहाउँछ र ? भगवान्लाई पनि बलिको यही अभिमान नष्ट गर्नुथियो। त्यसैले उहाँले जानी-जानी आफ्नै खुट्टाले नापी तीन पाइला जमिन लिन्छु भनी माग्नुभएको थियो। यहाँ अभिव्यक्त भएको बलिको आत्माभिमानलाई नष्ट गर्नु नै भगवान्को मूल

उद्देश्य रहेको थियो किनभने अहङ्कारद्वारा नै मानिस अनन्त अस्तित्व परमात्मासँग एकाकार हुन पाउँदैन।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**यावन्तो विषयाः प्रेष्ठास्त्रिलोक्यामजितेन्द्रियम्।**

**न शक्नुवन्ति ते सर्वे प्रतिपूरयितुं नृप॥ २१॥**

**पदार्थ–**
**नृप** = हे राजा
**त्रिलोक्यां** = तीनै लोकमा
**यावन्तः** = जति पनि
**प्रेष्ठाः** = प्रिय
**विषयाः** = विषयहरू छन्
**ते** = ती
**सर्वे** = सबै पदार्थहरूले पनि
**अजितेन्द्रियं** = अजितेन्द्रिय (असन्तोषी) व्यक्तिलाई
**प्रतिपूरयितुं** = पूर्ण गराउन
**न शक्नुवन्ति** = सक्दैनन्

**वाक्यार्थ–** हे राजा ! तीनै लोकमा जति पनि प्रिय विषयहरू छन्, ती सबै पदार्थहरूले पनि असन्तोषी व्यक्तिलाई सन्तुष्ट गराउन सक्दैनन्।

**त्रिभिः क्रमैरसन्तुष्टो द्वीपेनापि न पूर्यते।**

**नववर्षसमेतेन सप्तद्वीपवरेच्छया॥ २२॥**

**पदार्थ–**
**त्रिभिः** = तीन
**क्रमैः** = पाइला बराबरको भूमिद्वारा
**असन्तुष्टः** = असन्तुष्ट व्यक्ति
**सप्तद्वीपवरेच्छया** = सातै द्वीप पाउने इच्छाले
**नववर्षसमेतेन** = नौओटा वर्षले युक्त भएको
**द्वीपेन अपि** = एउटा द्वीप पाएर पनि
**न पूर्यते** = इच्छा पूर्ण भएको (सन्तुष्ट) हुँदैन

**वाक्यार्थ–** जुन व्यक्ति तीन पाउ भूमि पाएर सन्तुष्ट हुँदैन, त्यो व्यक्तिले नौ ओटा वर्षले युक्त भएको एउटा द्वीप नै पायो भने पनि सन्तुष्ट हुँदैन (किनभने ऊ सात ओटै द्वीप पाउने इच्छा गर्दछ)।

**सप्तद्वीपाधिपतयो नृपा वैन्यगयादयः।**

**अर्थैः कामैर्गता नान्तं तृष्णाया इति नः श्रुतम्॥ २३॥**

**पदार्थ–**
**वैन्यगयादयः** = पृथु (वेनपुत्र), गय आदि
**नृपाः** = राजाहरू
**सप्तद्वीपाधिपतयः** = सातै द्वीपका अधिपति भएर पनि
**अर्थैः** = सम्पत्ति र
**कामैः** = कामद्वारा
**तृष्णायाः** = इच्छाको
**अन्तं** = पार
**न गताः** = जान सकेनन्
**इति** = भन्ने कुरा
**नः** = मैले
**श्रुतम्** = सुनेको छु

**वाक्यार्थ–** पृथु, गय आदि राजाहरू सातै द्वीपका अधिपति भए तापनि उनीहरूले सम्पत्ति र

भोग्य वस्तुहरूद्वारा इच्छालाई जित्न सकेनन् भन्ने कुरा मैले सुनेको छु।

**विवरण–** यस प्रसङ्गमा भगवान्ले अनेक उदाहरण दिई सन्तोषद्वारा मानिस सुखी रहन सक्ने बताउनुभएको छ। तृष्णाको भोक अनन्त हुन्छ। संसारभरका सबै पदार्थहरू पाए भने पनि तृष्णावान् व्यक्तिहरू सन्तुष्ट हुँदैनन्। उनीहरूलाई अरू-अरू विषयहरूको इच्छा भइरहन्छ। आफूलाई जीवन धान्न जति आवश्यक छ त्यतिबाट चित्त नबुझाउने मानिस पूरा द्वीपकै राज्य पाउँदा पनि सन्तुष्ट हुँदैन। उसलाई सातै द्वीपवाली पूरा पृथिवी नै आफ्नो बनाउने इच्छा हुन्छ। सातै द्वीपका मालिक भएर पनि पृथु, गय आदि राजाहरू पूर्ण सन्तुष्ट हुन सकेका थिएनन्। वास्तवमा सन्तुष्टि पदार्थमा होइन व्यक्तिको मानसिकतामा निर्भर हुन्छ। कुनै पनि पदार्थको चाहना आफ्नो सुखका लागि गरिन्छ। सुख त आफैँभित्र छ, बाहिरी पदार्थमा होइन। यदि बाहिरी वस्तुहरूमा सुख हुन्थ्यो भने जो व्यक्ति जति सम्पन्न छ त्यो त्यत्ति नै सुखी हुनुपर्ने हो तर यस्तो स्थिति देखिन्न। बरू भित्र रहने सुखलाई नचिनी भ्रमवश बाहिरी वस्तुहरूमा सुख खोज्दै हिँड्ने व्यक्ति झन्-झन् बढी असन्तुष्ट र दुःखी हुन्छ।

**यदृच्छयोपपन्नेन सन्तुष्टो वर्तते सुखम्।**
**नासन्तुष्टस्त्रिभिर्लोकैरजितात्मोपसादितैः॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यदृच्छया** = प्रारब्धवश | **वर्तते** = रहन्छ | **उपसादितैः** = प्राप्त भएको |
| **उपपन्नेन** = प्राप्त वस्तुद्वारा | **अजितात्मा** = इन्द्रियलाई वशमा नराख्ने | **त्रिभिः** = तीन |
| **सन्तुष्टः** = सन्तुष्ट हुने व्यक्ति | **असन्तुष्टः** = असन्तुष्ट हुने व्यक्ति चाहिँ | **लोकैः** = लोकद्वारा पनि |
| **सुखं** = सुखपूर्वक | | **न** = सुखी रहन सक्दैन |

**वाक्यार्थ–** आफ्नो प्रारब्धले जे-जति प्राप्त हुन्छ त्यसैमा सन्तुष्ट हुने व्यक्ति सधैँ सुखी रहन्छ, तर जो इन्द्रियलाई वशमा नराख्ने असन्तुष्ट व्यक्ति छ त्यो तीनै लोक प्राप्त गरे पनि सुखी रहन सक्दैन।

**पुंसोऽयं संसृतेर्हेतुरसन्तोषोऽर्थकामयोः।**
**यदृच्छयोपपन्नेन सन्तोषो मुक्तये स्मृतः॥ २५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अर्थकामयोः** = सम्पत्ति र त्यसको भोगमा हुने | **पुंसः** = मानिसको | प्राप्त हुने |
| **असन्तोषः** = असन्तोष | **संसृतेः** = जन्ममृत्युको | **सन्तोषः** = सन्तोष चाहिँ |
| **अयं** = यही नै | **हेतुः** = कारण हो | **मुक्तये** = मोक्षको लागि |
| | **यदृच्छया** = प्रारब्धवश | **स्मृतः** = बताइएको छ |
| | **उपपन्नेन** = प्राप्त सामग्रीद्वारा | |

**वाक्यार्थ–** सम्पत्ति र विषयको भोगमा गरिने असन्तोष नै मानिसहरूको जन्ममृत्युको कारण हो भने प्रारब्धले जे-जति दिन्छ त्यसैमा गरिने सन्तोष चाहिँ मोक्षको कारण हो भनी बताइएको छ।

**यदृच्छालाभतुष्टस्य तेजो विप्रस्य वर्धते ।**

**तत् प्रशाम्यत्यसन्तोषादम्भसेवाशुशुक्षणिः ॥ २६ ॥**

**पदार्थ–**
**यदृच्छालाभतुष्टस्य** = प्रारब्धवश प्राप्त विषयमा सन्तुष्ट हुने
**विप्रस्य** = ब्राह्मणको
**तेजः** = तेज
**वर्धते** = बढ्दछ
**असन्तोषात्** = असन्तोषबाट त
**अम्भसा** = जलद्वारा
**आशुशुक्षणिः इव** = अग्नि जैँ
**तत्** = त्यो ब्रह्मतेज
**प्रशाम्यति** = निभ्दछ

**वाक्यार्थ–** जुन ब्राह्मण प्रारब्धवश प्राप्त विषयहरूद्वारा सन्तुष्ट हुन्छ त्यसको तेज बढ्दछ। तर जो असन्तुष्ट हुन्छ, त्यसको ब्रह्मतेज त्यसरी नै निभ्दछ, जसरी पानीले आगोलाई निभाउँछ।

**तस्मात् त्रीणि पदान्येव वृणे त्वद्वरदर्षभात् ।**

**एतावतैव सिद्धोऽहं वित्तं यावत्प्रयोजनम् ॥ २७ ॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले (सन्तोष नै श्रेयस्कर हुने भएकाले)
**त्वद्वरदर्षभात्** = वरदाताहरूमा श्रेष्ठ तपाईंबाट
**त्रीणि** = तीन
**पदानि एव** = पाइला बराबरको भूमि मात्र
**वृणे** = वरण गर्दछु
**एतावता एव** = यति नै भूमिद्वारा
**अहं** = म
**सिद्धः** = कृतार्थ हुन्छु (किनभने)
**यावत्प्रयोजनं** = प्रयोजनअनुरूपको
**वित्तम्** = धनले (नै सुख दिन्छ)

**वाक्यार्थ–** हे राजा ! त्यसैले (सन्तोष नै श्रेयको कारण भएकाले) श्रेष्ठ वरदाता तपाईंसँग म त्यही तीन पाइला जमिन मात्र माग्दछु किनभने म त्यति जमिन पाएँ भने कृतार्थ भइहाल्छु। प्रयोजनअनुरूपको धनले मात्र सुख दिन्छ। (अधिक धनसङ्ग्रह चिन्ताजनक हुन्छ।)

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्तः स हसन्नाह वाञ्छातः प्रतिगृह्यताम् ।**

**वामनाय महीं दातुं जग्राह जलभाजनम् ॥ २८ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**उक्तः** = भगवान्द्वारा बताइएका
**सः** = ती बलिले
**हसन्** = हाँस्दै
**वाञ्छातः** = इच्छानुसारको
**प्रतिगृह्यतां** = स्वीकार गर्नुहोस्
**आह** = भने
**वामनाय** = वामनलाई
**महीं** = तीन पाइला जमिन
**दातुं** = दिन (सङ्कल्प गर्न)
**जलभाजनं** = जलपात्र
**जग्राह** = लिए

**वाक्यार्थ–** यसप्रकार भगवान्ले भनेपछि बलिले हाँस्दै इच्छानुसारको जमिन स्वीकार गर्नुहोस् भनेर वामनलाई जमिन दान गर्नका लागि सङ्कल्प गर्न जलपात्र हातमा लिए।

**विष्णवे क्ष्मां प्रदास्यन्तमुशना असुरेश्वरम् ।**

**जानंश्चिकीर्षितं विष्णोः शिष्यं प्राह विदां वरः ॥ २९ ॥**

**पदार्थ–**
**विष्णवे** = वामनरूप विष्णुलाई
**क्ष्मां** = भूमि
**प्रदास्यन्तं** = दिन तयार भएका
**शिष्यं** = शिष्य
**असुरेश्वरं** = असुरराज बलिलाई
**विष्णोः** = भगवान् विष्णुको
**चिकीर्षितं** = (सम्पूर्ण राज्य हरण गर्ने) मनसायलाई
**जानन्** = बुझेका
**विदां** = ज्ञानीहरूमा
**वरः** = श्रेष्ठ
**उशना** = शुक्राचार्यले
**प्राह** = भने

**वाक्यार्थ–** वामनरूप विष्णुको सम्पूर्ण राज्य हरण गर्ने भित्री मनसाय बुझेका एवं ज्ञानीहरूमा श्रेष्ठ दैत्यगुरु शुक्राचार्यले वामनरूप विष्णुलाई भूमिदान गर्न तयार भएका आफ्ना शिष्य असुरराज बलिलाई भने।

**शुक्र उवाच** (शुक्राचार्यले भने)

**एष वैरोचने साक्षाद् भगवान् विष्णुरव्ययः ।**

**कश्यपाददितेर्जातो देवानां कार्यसाधकः ॥ ३० ॥**

**पदार्थ–**
**वैरोचने** = हे विरोचनपुत्र बलि
**एषः** = यो वामनरूप ब्रह्मचारी
**देवानां** = देवताहरूको
**कार्यसाधकः** = कार्य सिद्ध गर्न
**कश्यपात्** = कश्यप र
**अदितेः** = अदितिको गर्भबाट
**जातः** = जन्मिएको
**अव्ययः** = अविनाशी
**साक्षात्** = स्वयं
**भगवान्** = भगवान्
**विष्णुः** = विष्णु हो

**वाक्यार्थ–** हे विरोचनपुत्र बलि ! यो वामनरूप ब्रह्मचारी देवताहरूको कार्यसम्पादन गर्न कश्यप र अदितिको गर्भबाट जन्मिएको अविनाशी साक्षात् भगवान् विष्णु हो।

**प्रतिश्रुतं त्वयैतस्मै यदनर्थमजानता ।**

**न साधु मन्ये दैत्यानां महानुपगतोऽनयः ॥ ३१ ॥**

**पदार्थ–**
**अनर्थम्** = अनर्थ
**अजानता** = नबुझेका
**त्वया** = तिमीले
**एतस्मै** = यो वामनलाई
**यत्** = जो
**प्रतिश्रुतं** = भूमिदानको प्रतिज्ञा गऱ्यौ (त्यसलाई)
**साधु** = ठीक
**न मन्ये** = ठान्दिनँ (यसबाट)
**दैत्यानां** = दैत्यहरूप्रति
**महान्** = ठूलो
**अनयः** = अन्याय
**उपगतः** = प्राप्त भएको छ

**वाक्यार्थ–** हे राजा ! अनर्थ नबुझेका तिमीले यस वामनलाई भूमिदान दिने जो प्रतिज्ञा गऱ्यौ यसलाई म राम्रो मान्दिनँ किनभने यसबाट दैत्यहरूमाथि ठूलो अन्याय भएको छ।

**एष ते स्थानमैश्वर्यं श्रियं तेजो यशः श्रुतम्।**

**दास्यत्याच्छिद्य शक्राय मायामाणवको हरिः॥ ३२॥**

**पदार्थ–**
**मायामाणवकः** = मायाद्वारा ब्रह्मचारी भएको
**एषः** = यो वामनरूप
**हरिः** = विष्णुले
**ते** = तिम्रो
**स्थानं** = राज्य
**ऐश्वर्यं** = ऐश्वर्य
**श्रियं** = सम्पत्ति
**तेजः** = तेज
**श्रुतं** = प्रसिद्धि
**यशः** = कीर्ति
**आच्छिद्य** = खोसेर
**शक्राय** = इन्द्रलाई
**दास्यति** = दिनेछ

**वाक्यार्थ–** हे राजा ! मायाद्वारा वामन ब्रह्मचारी भएर आएको यस विष्णुले तिम्रो राज्य, ऐश्वर्य, सम्पत्ति, तेज, प्रसिद्धि र सम्पूर्ण कीर्तिहरू खोसेर इन्द्रलाई दिनेछ।

**त्रिभिः क्रमैरिमाँल्लोकान् विश्वकायः क्रमिष्यति।**

**सर्वस्वं विष्णवे दत्त्वा मूढ वर्तिष्यसे कथम्॥ ३३॥**

**पदार्थ–**
**विश्वकायः** = विश्वरूप (भएर)
**त्रिभिः** = तीन
**क्रमैः** = पाइलाद्वारा
**इमान्** = यी
**लोकान्** = तीनै लोकलाई
**क्रमिष्यति** = नापेर लिनेछ
**मूढ** = हे मूर्ख बलि
**विष्णवे** = विष्णुलाई
**सर्वस्वं** = सम्पूर्ण सम्पत्तिहरू
**दत्त्वा** = दिएर
**कथं** = कसरी
**वर्तिष्यसे** = जीविका चलाउनेछौ

**वाक्यार्थ–** यस ब्रह्मचारीले विश्वरूप भएर तीन पाइलाद्वारा तीनै लोकहरूलाई नापेर लिनेछ। हे मूर्ख ! आफ्ना सम्पूर्ण सम्पत्तिहरू विष्णुलाई दिएर कसरी आफ्नो जीविका चलाउँछौ ?

**क्रमतो गां पदैकेन द्वितीयेन दिवं विभोः।**

**खं च कायेन महता तार्तीयस्य कुतो गतिः॥ ३४॥**

**पदार्थ–**
**एकेन** = एउटा
**महता** = विशाल
**पदा** = पाइलाले
**गां** = पृथिवीलाई
**द्वितीयेन** = दोस्रो पाइलाले
**दिवं** = स्वर्गलाई
**कायेन** = शरीरले
**खं च** = आकाशलाई
**क्रमतः** = नाप्ने
**विभोः** = विश्वरूप विष्णुको
**तार्तीयस्य** = तेस्रो पाइलाको
**गतिः** = जाने ठाउँ
**कुतः** = कहाँ, कसरी होला

**वाक्यार्थ–** यो विश्वरूप विष्णुको विशाल एउटा पाइलाले पृथिवी, दोस्रो पाइलाले स्वर्ग र विशाल शरीरले आकाशलाई ढाकिदिन्छ। त्यसपछि यसको तेस्रो पाइला राख्ने ठाउँ कहाँ हुन्छ ? (कहीं पनि हुन सक्दैन)।

**निष्ठां ते नरके मन्ये ह्यप्रदातुः प्रतिश्रुतम् ।**

**प्रतिश्रुतस्य योऽनीशः प्रतिपादयितुं भवान् ॥ ३५ ॥**

**पदार्थ—**
**यः** = जो
**भवान्** = तिमी
**प्रतिश्रुतं** = प्रतिज्ञा गरेको कुरा
**प्रतिपादयितुं** = पूरा गर्न
**अनीशः** = असमर्थ हुनेछौ (तब)
**प्रतिश्रुतस्य** = प्रतिज्ञा गरेको तर
**अप्रदातुः** = दिन नसक्ने
**ते** = तिम्रो
**हि** = निश्चय नै
**निष्ठां** = स्थिति
**नरके** = नरकमा हुन्छ भन्ने
**मन्ये** = ठान्दछु

**वाक्यार्थ—** अतः हे राजा ! प्रतिज्ञा गरेको भूमि दान गर्न तिमी असमर्थ हुनेछौ। यसैले दिने प्रतिज्ञा गरेर दिन नसक्ने तिमी नरकमा पर्नेछौ भन्ने म ठान्दछु।

**न तद्दानं प्रशंसन्ति येन वृत्तिर्विपद्यते ।**

**दानं यज्ञस्तपः कर्म लोके वृत्तिमतो यतः ॥ ३६ ॥**

**पदार्थ—**
**येन** = जुन दानद्वारा
**वृत्तिः** = जीविका नै
**विपद्यते** = नष्ट हुन्छ
**तत् दानं** = त्यो दानलाई
**न प्रशंसन्ति** = (सज्जनहरूले) प्रशंसा गर्दैनन्
**यतः** = किनभने
**लोके** = लोकमा
**वृत्तिमतः** = जीविका हुने व्यक्तिसँग नै
**दानं** = दान
**यज्ञः** = यज्ञ
**तपः** = तपस्या र
**कर्म** = कर्म सम्बन्धित हुन्छन्

**वाक्यार्थ—** जुन दान गर्दा दाताको जीविका नै नष्ट हुन्छ, त्यस्तो दानको प्रशंसा सज्जनहरूले गर्दैनन्। लोकमा दान, यज्ञ, तपस्या र कर्म त्यही व्यक्तिसँग सम्बन्धित हुन्छन्, जुन व्यक्तिको जीविका दान गरिसकेपछि पनि रहन्छ।

**धर्माय यशसेऽर्थाय कामाय स्वजनाय च ।**

**पञ्चधा विभजन् वित्तमिहामुत्र च मोदते ॥ ३७ ॥**

**पदार्थ—**
**धर्माय** = धर्म गर्न
**यशसे** = यश कमाउन
**अर्थाय** = (थप) धन कमाउन
**कामाय** = विषयभोग गर्न
**च** = तथा
**स्वजनाय** = आत्मीय जनको प्रसन्नताका लागि (यसप्रकार)
**पञ्चधा** = पाँच भागमा
**वित्तं** = धनसम्पत्तिलाई
**विभजन्** = भाग लगाउने व्यक्ति
**इह** = यस लोकमा
**अमुत्र च** = परलोकमा पनि
**मोदते** = सुखी हुन्छ

**वाक्यार्थ—** आफ्नो सम्पूर्ण सम्पत्तिलाई पाँच भागमा विभाजन गरी त्यसको एक-एक भाग धर्मको लागि, यशको लागि, धन वृद्धि हुने कार्यका लागि, विषयभोगका लागि र आफन्त जनलाई बाँडेर उनीहरूलाई खुसी बनाउनका लागि प्रयोग गर्ने व्यक्ति यस लोक र परलोक दुबैमा

सुखी रहन्छ।

**विवरण—** माथिका श्लोकहरूमा शुक्राचार्यको अर्थनीतिको व्याख्या गरिएको छ। यी भगवान् विष्णु हुन् भन्ने बुझेपछि शुक्राचार्यले आफ्ना शिष्य बलिलाई तीन पाइला भूमि दान गर्ने प्रतिज्ञा फिर्ता लिन भनेका छन्। एक पाउले यो स्थूल संसार, अर्को पाउले स्वर्ग आदि सम्पूर्ण लोक लिएपछि तिमीसँग तेस्रो पाउका लागि नाप्न दिने कुनै वस्तु रहनेछैन। प्रतिज्ञा गरेको वस्तु दिन नसकेपछि तिमीलाई यिनले नरक पठाउनेछन् भनी शुक्राचार्यले सम्झाएका छन्। शुक्राचार्य भन्छन्— मानिसले आफ्नो सम्पत्तिलाई पाँच भाग लगाउनुपर्छ। तीमध्ये एक भाग सम्पत्ति आफ्नो कीर्ति फैलाउने काममा खर्चिनुपर्दछ। अर्को भाग सम्पत्ति धर्मको लागि खर्चिनुपर्दछ। अरूले थाहा नपाउने गरी प्रचार-प्रसार विना गरिएका सत्कर्महरू नै धर्म हुन्। तेस्रो भाग सम्पत्ति आफ्नो सुख-सुविधाको लागि खर्च गर्नुपर्दछ। चौथो भाग सम्पत्ति आफ्ना इष्टमित्रहरू सहायता माग्न आउँदा दिनका लागि छुट्याउनुपर्दछ भने पाँचौं भाग सम्पत्ति अरू सम्पत्ति आर्जन गर्ने ठाउँमा लगानी गर्नुपर्दछ भनी बताइएको छ। यो शुक्रनीति यहाँको सर्वस्वत्यागी समर्पणभावको विरोधी मतका रूपमा आएको छ तर यसमा पनि सामान्य मानिसलाई सुखी जीवन जिउने कला सिकाइएको छ। आधुनिक समाजमा मानिसहरू भएभरको सम्पत्तिलाई सम्पत्ति कमाउनकै लागि अनेक ठाउँमा लगानी गरिरहन्छन्। कति मानिसहरूलाई त सम्पत्ति कमाउनुको मुख्य उद्देश्य पनि थाहा हुँदैन। शुक्राचार्यको यही नीतिको अनुसरण गर्दा व्यावहारिक जीवनमा धनको सही उपयोग हुने देखिन्छ।

**अत्रापि बह्वृचैर्गीतं शृणु मेऽसुरसत्तम।**
**सत्यमोमिति यत् प्रोक्तं यन्नेत्याहानृतं हि तत्॥ ३८॥**

**पदार्थ—**
**असुरसत्तम** = हे असुरश्रेष्ठ
**अत्र अपि** = यस सत्य र असत्यको विषयमा
**बह्वृचैः** = ऋग्वेदका ऋचाहरूद्वारा
**गीतं** = बताइएको कुरा
**मे** = मबाट
**शृणु** = सुन
**ओम् इति** = ओम् यो पदद्वारा
**यत्** = जे (दिएको कुरा)
**प्रोक्तं** = बताइएको छ
**तत्** = त्यो
**सत्यं** = सत्य हो
**न इति** = न यो पदद्वारा
**हि** = निश्चय नै
**यत्** = जे (अस्वीकार गर्नु) बताइएको छ, त्यो
**अनृतं** = असत्य हो भनी
**आह** = भनेको छ

**वाक्यार्थ—** हे असुरश्रेष्ठ ! सत्य र असत्यको विषयमा ऋग्वेदका ऋचाहरूले बताइएको कुरा म तिमीलाई बताउँछु, सुन— कसैले केही कुरा दिन्छ भने तत्कालमा त्यसलाई ओम् भन्नु अर्थात् स्वीकार गर्नु सत्य हो भने दिएको कुरालाई अस्वीकार गर्नु अनृत (असत्य) हो।

**सत्यं पुष्पफलं विद्यादात्मवृक्षस्य गीयते।**
**वृक्षेऽजीवति तन्न स्यादनृतं मूलमात्मनः॥ ३९॥**

**पदार्थ—**
**आत्मवृक्षस्य** = शरीररूप वृक्षको
**सत्यं** = सत्य नै

**पुष्पफलं** = फूल र फल हो भनी
**विद्यात्** = जान्नू
**वृक्षे** = शरीररूप वृक्ष
**अजीवति** = मऱ्यो भने
**तत्** = त्यो फलफूल
**न** = रहन सक्दैन
**आत्मनः** = शरीरको
**मूलं** = मूल (जरो)
**अनृतं** = सङ्कट अवस्थामा नदिएर भए पनि आत्मरक्षा
**स्यात्** = गर्नुपर्छ भनी
**गीयते** = (श्रुतिमा) बताइएको छ

**वाक्यार्थ–** शरीररूप वृक्षमा लाग्ने फल-फूल भनेको सत्य हो। कथञ्चित् त्यो वृक्ष नै मऱ्यो भने त्यहाँ फलफूल रहन सक्दैनन् ? यसैले शरीररूप वृक्षको मूल जरो नै सङ्कटमा पर्न लागेको छ भने दिन अस्वीकार गरेर पनि त्यसको रक्षा गर्नुपर्छ भनी श्रुतिमा बताइएको छ।

**तद् यथा वृक्ष उन्मूलः शुष्यत्युद्वर्ततेऽचिरात्।**
**एवं नष्टानृतः सद्य आत्मा शुष्येन्न संशयः ॥ ४० ॥**

**पदार्थ–**
**तत्** = त्यसैले
**यथा** = जसरी
**उन्मूलः** = जरो उखेलिएको
**वृक्षः** = रुख
**शुष्यति** = सुक्दछ र
**अचिरात्** = छिटै
**उद्वर्तते** = ढल्दछ
**एवं** = त्यसै गरी
**नष्टानृतः** = सङ्कट अवस्थामा पनि दान दिन अस्वीकार नगर्ने (दान दिने)
**आत्मा** = व्यक्ति
**सद्यः** = केही दिनमै
**शुष्येत्** = सुक्दछ (त्यसमा)
**न संशयः** = कुनै सन्देह छैन

**वाक्यार्थ–** जसरी जरो उखेलिएको वृक्ष सुक्दछ र केही दिनमैं ढल्दछ त्यसै गरी आत्मरक्षा नै सङ्कट अवस्थामा भएको वेला दान दिने व्यक्ति पनि सर्वस्व दिएका कारण शुष्क हुँदै जान्छ। यसमा कुनै सन्देह छैन।

**पराग्रिक्तमपूर्णं वा अक्षरं यत् तदोमिति।**
**यत् किञ्चिदोमिति ब्रूयात् तेन रिच्येत वै पुमान्।**
**भिक्षवे सर्वमों कुर्वन्नालं कामेन चात्मने ॥ ४१ ॥**

**पदार्थ–**
**यत्** = जुन
**ओम् इति** = हुन्छ म दिन्छु भन्ने
**अक्षरं** = अक्षर छ
**तत्** = त्यसले
**पराक्** = धनलाई टाढा लान्छ
**रिक्तं** = धनको अभाव र
**अपूर्णं वा** = अपूर्णता बुझाउने किसिमको छ
**पुमान्** = कुनै दाता व्यक्तिले
**यत् किञ्चित्** = केही कुरा अलिकति नै भए पनि
**ओम् इति** = हो म दिन्छु भनेर
**ब्रूयात्** = भन्दछ भने
**वै** = निश्चय नै
**तेन** = त्यो धनद्वारा
**रिच्येत** = शून्य हुन्छ
**भिक्षवे** = भिक्षुलाई
**सर्वं** = मागे जति सबै कुरा
**ओं कुर्वन्** = हो म दिन्छु भनी स्वीकार गर्ने व्यक्ति
**आत्मने च** = आफ्नो लागि
**कामेन** = भोगद्वारा
**न अलं** = पूर्ण हुँदैन

**वाक्यार्थ–** 'हुन्छ म दिन्छु' भन्ने भनाइले दाताको धनलाई टाढा लिएर जान्छ र त्यसले धनको

अभाव र अपूर्णताको सृष्टि गरिदिन्छ। त्यसैले कुनै पनि व्यक्तिले याचकलाई 'म दान दिन्छु' भन्दछ भने त्यो दान दिन चाहने व्यक्ति धनहीन बन्न पुग्दछ। त्यति मात्र होइन, भिक्षुलाई मागे जति सबै कुरा दान दिन स्वीकार गर्ने व्यक्ति आफ्नो लागि कुनै पनि विषयको भोग गर्न सक्दैन। (किनभने उसँग भोग्य पदार्थ नै बाँकी रहँदैन।)

**अथैतत् पूर्णमभ्यात्मं यच्च नेत्यनृतं वचः।**
**सर्वं नेत्यनृतं ब्रूयात् स दुष्कीर्तिः श्वसन्मृतः॥ ४२॥**

**पदार्थ–**
**अथ** = त्यसैले
**यत् न इति** = जो म दिन्नँ भन्ने
**अनृतं** = अस्वीकारात्मक (असत्य)
**वचः** = वाणी छ
**एतत्** = यो वाणी
**पूर्णम्** = धन खर्च नगर्ने पूर्ण र
**अभ्यात्मं च** = शरीरलाई सुरक्षित राख्ने खालको छ (तापनि जसले सधैँ)
**सर्वं** = केही पनि कसैलाई पनि
**न इति** = दिन्नँ भनेर
**अनृतं** = अस्वीकारोक्ति मात्र
**ब्रूयात्** = बोल्दछ भने
**सः** = त्यस्तो दानै नदिने व्यक्ति
**दुष्कीर्तिः** = दुष्कीर्तिका कारण
**श्वसन्** = जिउँदै
**मृतः** = मरेतुल्य हुन्छ

**वाक्यार्थ–** त्यसैले 'म दिन्नँ' भन्ने अस्वीकार गर्ने असत्य वाणीले धनको खर्च हुन दिँदैन। त्यसकारण यो अनृत वाणी पूर्ण, धनवर्धक र शरीरको सुरक्षा गर्ने किसिमको छ तापनि सधैँ कसैलाई केही पनि दान दिन्नँ भनेर अस्वीकारोक्ति मात्र बोल्ने व्यक्तिको भने लोकमा दुष्कीर्ति फैलन्छ र ऊ जिउँदै मरेतुल्य हुन्छ।

**स्त्रीषु नर्मविवाहे च वृत्त्यर्थे प्राणसङ्कटे।**
**गोब्राह्मणार्थे हिंसायां नानृतं स्याज्जुगुप्सितम्॥ ४३॥**

**पदार्थ–**
**स्त्रीषु** = स्त्रीहरूको प्रशंसा गर्दा
**नर्मविवाहे** = ख्यालठट्टा गर्दा, विवाहमा वरवधूको वैशिष्ट्य बताउँदा
**वृत्त्यर्थे** = जीविकाको सुरक्षाको लागि
**प्राणसङ्कटे** = प्राण सङ्कटमा पर्दा ज्यान जोगाउन
**गोब्राह्मणार्थे** = गाई र ब्राह्मणको हितका लागि
**हिंसायां च** = हिंसा हुन लाग्दा पनि
**अनृतं** = फुटो बोल्नु
**जुगुप्सितं** = निन्दित
**न स्यात्** = हुँदैन

**वाक्यार्थ–** स्त्रीहरूलाई प्रशंसा गरी प्रसन्न बनाउँदा, ख्यालठट्टा गर्दा, विवाहमा वरवधूको वैशिष्ट्य बताउँदा, आफ्नो जीविकाको सुरक्षा गर्दा, प्राण सङ्कटमा परेको वेला ज्यान जोगाउन, गाई र ब्राह्मणको हितको वेलामा र कसैलाई हिंसाबाट बचाउन कसैले फुटो बोल्छ भने पनि त्यो निन्दित हुँदैन।

**विवरण–** माथिका पाँच श्लोकहरूमा कहिलेकाहीँ असत्यद्वारा आफूलाई जोगाउनुपर्ने हुनाले त्यस्ता ठाउँमा असत्य बोल्दा पाप लाग्दैन भनी शुक्रनीतिअनुसार सत्य र असत्यको व्याख्या

गरिएको छ। सामान्यतया सत्यवचन भन्नाले भएको कुरा बोल्नु हो। सत्य वचनले मानिसलाई दुर्भावनाबाट मुक्त गराई आत्मज्ञान प्राप्तितर्फ अग्रसर गराउँछ। उपनिषद्मा **सत्येन लभ्यस्तपसा ह्येष आत्मा** अर्थात् सत्य र तपस्याद्वारा आत्मालाई पाउन सकिन्छ भनी बताइएको छ। सम्पूर्ण संसार मिथ्या छ, यसमा रहेर झन् असत्य व्यवहार गरिरह्यो भने मानिस सत्य परमात्मतत्त्वदेखि टाढा रहन्छ। सत्य व्यवहार गर्ने व्यक्तिले चाहिँ बिस्तारै सत्स्वरूप परमात्मालाई देख्न सक्ने योग्यता पाउँछ। सत्य बोल्ने प्रसङ्गमा नै प्राणीहरूको हितको प्रसङ्ग पनि जोडिन्छ। त्यसैले महाभारत (३/२००/४)मा **यद् भूतहितमत्यन्तं तत् सत्यममिति धारणा** अर्थात्, जुन कुरा बोल्दा सम्पूर्ण प्राणीहरूको हित हुन्छ त्यो नै सत्य हो भनिएको छ। कुनै कुरा बोल्दा अरू प्राणीहरूमाथि आपत्ति आइपर्दछ भने त्यो सत्य सत्य होइन, कुनै कुरा बोल्दा प्राणीहरूमाथि आपत्ति आइपर्दैन भने त्यस वेलामा त्यही नै सत्य हो। जेद्वारा सम्पूर्ण प्राणीहरूको निश्चित कल्याण हुन्छ त्यही सत्य हो।

यहाँ शुक्राचार्यले सत्यको परिभाषा केही फरक किसिमले गरेका छन्। शुक्राचार्यका अनुसार कुनै कुरा माग्दा हुन्छ भन्नु सत्य हो र दिन्नँ भन्नु असत्य हो। यस्तै आफू रुख हो भने रुखलाई शोभित गर्ने फलफूल सत्य हो। आफूलाई जोगाउनु पर्दा चाहिँ असत्य पनि असत्य नभई सत्य नै हुन्छ। यस्तो अवस्थामा असत्य जीवनवृक्षको मूल जरा हो। जरा नै नभई कसरी रुख रहन सक्छ ? माग्ने जति सबैलाई **ओम्** अर्थात् हुन्छ–दिन्छु भन्दै बाँड्दै गयो भने त्यो व्यक्ति एक दिन रित्तो बन्दछ। आफ्नै लागि पनि सम्पत्ति बाँकी रहँदैन। तर सधैँ दिन्नँ भन्यो भने पनि त्यसबाट दुष्कीर्ति हुन्छ। त्यसैले अवस्थाअनुसार कहिले दिने कहिले नदिने गर्नुपर्दछ। यस क्रममा शुक्राचार्यले आठ ठाउँमा असत्य बोल्दा त्यो असत्य नहुने उल्लेख गरेका छन्। **स्त्रीषु** अर्थात् स्त्रीहरूलाई प्रशंसा गर्दा, **नर्म** अर्थात् जिस्किँदा, **विवाहे** अर्थात् विवाहमा वरवधूको प्रशंसा गर्दा, **वृत्यर्थे** अर्थात् जीविका पाउनका लागि, **प्राणसङ्कटे** अर्थात् प्राणमाथि नै सङ्कट पर्दा, **गोब्राह्मणार्थे** अर्थात् गाई र ब्राह्मणको रक्षाका लागि, एवं **हिंसायाम्** अर्थात् कुनै प्राणीको हिंसा हुन लागेको वेलामा उसलाई बचाउन भनेर बोलिएको असत्य दोषयुक्त हुँदैन। यसैले यहाँ आफ्नो जीविका तथा प्राण जोगाउनका लागि प्रतिज्ञा गरेको कुरा दिन्नँ भन्नुलाई असत्य मानिँदैन भन्दै शुक्राचार्यले बलिलाई भूमिदान गर्नबाट रोक्न प्रयास गरेका छन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**वामनप्रादुर्भावे एकोनविंशोऽध्यायः ॥ १९ ॥**

# अथ विंशोऽध्यायः

## भगवान् वामनले विराट् रूप धारण गरी दुई पाइलाले पृथिवी र स्वर्ग नाप्नु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**बलिरेवं गृहपतिः कुलाचार्येण भाषितः।**

**तूष्णीं भूत्वा क्षणं राजन्नुवाचावहितो गुरुम्॥ १॥**

| **पदार्थ—** | **भाषितः** = भनिएका | **भूत्वा** = रही |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **गृहपतिः** = गृहस्वामी (यजमान) | **अवहितः** = विचार गर्दै |
| **कुलाचार्येण** = कुलगुरु | **बलिः** = बलि | **गुरुं** = गुरु शुक्राचार्यलाई |
| शुक्राचार्यद्वारा | **क्षणं** = केही समय | **उवाच** = भन्न लागे |
| **एवं** = यसप्रकार | **तूष्णीं** = चुप | |

**वाक्यार्थ—** हे राजा परीक्षित् ! यसरी कुलगुरु शुक्राचार्यले सावधान हुनको लागि प्रेरित गरेपछि यज्ञका यजमान बलि केही समय चुप लागे। त्यसपछि उनले विचारपूर्वक गुरु शुक्राचार्यलाई भन्न लागे।

**बलिरुवाच** (बलिले भने)

**सत्यं भगवता प्रोक्तं धर्मोऽयं गृहमेधिनाम्।**

**अर्थं कामं यशो वृत्तिं यो न बाधेत कर्हिचित्॥ २॥**

| **पदार्थ—** | **वृत्तिं** = जीविकामा | **भगवता** = हजुरले |
|---|---|---|
| **कर्हिचित्** = कहिल्यै पनि | **न बाधेत** = बाधा नगरोस् | **सत्यं** = सत्य |
| **अर्थं** = अर्थ | **यः अयं** = त्यही यो | **प्रोक्तम्** = भन्नुभयो |
| **कामं** = भोग | **गृहमेधिनां** = गृहस्थहरूको | |
| **यशः** = यश | **धर्मः** = धर्म हो (भन्ने कुरा) | |

**वाक्यार्थ—** हे गुरुवर ! जसले अर्थ, विषयभोग, यश र जीविकामा कुनै पनि बाधा उत्पन्न नगरोस् त्यही नै गृहस्थहरूको धर्म हो भनेर हजुरले सत्य भन्नुभयो।

**स चाहं वित्तलोभेन प्रत्याचक्षे कथं द्विजम्।**

**प्रतिश्रुत्य ददामीति प्राह्लादिः कितवो यथा॥ ३॥**

| **पदार्थ—** | **सः** = सम्पूर्ण लोकमा उदार | **अहं च** = मैले |
|---|---|---|
| **प्राह्लादिः** = प्रह्लादको नाति | राजाको रूपमा प्रसिद्ध त्यस्तो | **ददामि इति** = दिन्छु भनेर |

| | | |
|---|---|---|
| **प्रतिश्रुत्य** = प्रतिज्ञा गरी | **कितवः यथा** = ठगले झैं | **द्विजं** = ब्राह्मणलाई |
| **वित्तलोभेन** = धनको लोभले | **कथं** = कसरी | **प्रत्याचक्षे** = दिन्नँ भन्न सक्छु |

**वाक्यार्थ–** म प्रह्लादको नाति हुँ र सम्पूर्ण लोकमा उदार राजाको रूपमा प्रसिद्ध छु। एक पटक दिन्छु भनेर प्रतिज्ञा गरिसकेपछि धनको लोभका कारण ठगले झैं फेरि त्यही ब्राह्मणलाई दिन्नँ भनेर म कसरी भन्न सक्छु ?

**न ह्यसत्यात् परोऽधर्म इति होवाच भूरियम्।**
**सर्वं सोढुमलं मन्ये ऋतेऽलीकपरं नरम्॥ ४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अलीकपरं** = झुटो बोल्ने | **इति** = यो कुरा |
| **असत्यात्** = झूटो बोल्नुभन्दा | **नरं ऋते** = मान्छेलाई छाडेर | **इयं** = यी |
| **परः** = ठुलो | **सर्वं** = जस्तोसुकै ठुलो भार पनि | **भूः** = पृथिवीले |
| **अधर्मः** = अधर्म | **सोढुं** = सहन | **ह** = निश्चय नै |
| **हि** = निश्चय नै | **अलं** = समर्थ छु भन्ने | **उवाच** = भन्नुभएको छ |
| **न** = छैन | **मन्ये** = ठान्दछु | |

**वाक्यार्थ–** झूटो बोल्नुभन्दा ठुलो अधर्म (पाप) केही पनि छैन, त्यसैले झूटो बोल्ने मान्छेको भारबाहेक अरू जतिसुकै ठुलो भार पनि म सहन सक्छु भनी यी पृथिवीले भन्नुभएको छ।

**नाहं बिभेमि निरयान्नाधन्यादसुखार्णवात्।**
**न स्थानच्च्यवनान्मृत्योर्यथा विप्रप्रलम्भनात्॥ ५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **बिभेमि** = डराउँछु (त्यसरी) | सागरबाट |
| **अहं** = म | **निरयात्** = नरकदेखि | **न** = डराउँदिन |
| **यथा** = जसरी | **न** = डराउँदिनँ | **स्थानच्च्यवनात्** = राज्यनाशबाट |
| **विप्रप्रलम्भनात्** = झूटो बोलेर | **अधन्यात्** = दरिद्रताबाट | **मृत्योः** = मृत्युबाट पनि |
| ब्राह्मणलाई ठग्ने कामदेखि | **असुखार्णवात्** = दुःखको | **न** = डराउँदिनँ |

**वाक्यार्थ–** म झूटो कुरा बोलेर ब्राह्मणलाई ठग्ने कामदेखि जति डराउँछु, त्यति नरकबाट, दरिद्रताबाट, दुःखको सागरबाट, राज्यको विनाशबाट र मृत्युबाट पनि डराउँदिनँ।

**यद् यद्धास्यति लोकेऽस्मिन् सम्परेतं धनादिकम्।**
**तस्य त्यागे निमित्तं किं विप्रस्तुष्येन्न तेन चेत्॥ ६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सम्परेतं** = मरेका व्यक्तिलाई | **हास्यति** = त्यागिदिनेछ |
| **यत् यत्** = भए जति सबै | **अस्मिन्** = यही | (त्यसकारण किन जिउँदै हुँदा |
| **धनादिकं** = धन आदि वस्तुहरूले | **लोके** = लोकमा | नदिऊँ ?) |

**तेन** = दिइएको त्यस धनले
**चेत्** = यदि
**विप्रः** = याचक ब्राह्मण
**न तुष्येत्** = प्रसन्न हुँदैन भने
**तस्य** = त्यो धनको
**त्यागे** = दानद्वारा
**किं निमित्तम्** = के फल प्राप्त होला

**वाक्यार्थ–** हाम्रा भए जति सम्पूर्ण धनहरूले हामीलाई मरेपछि यही लोकमा नै छोडिदिन्छन् भने त्यो धन जिउँदै हुँदा किन दान नदिऊँ। (यदि थोरै देऊ किन सबै दिन्छौ भन्नुहुन्छ भने) त्यो अलिकति मात्र गरिएको धनको दानले यदि याचक प्रसन्न हुँदैन भने त्यस्तो दानद्वारा दातालाई के फल प्राप्त होला ?

**विवरण–** बलि आफूलाई शुक्राचार्यले भन्नुभएको कुरा अस्वीकार गर्दै भन्छन्– म प्रह्लादको नाति हुँ। मैले आफ्नो सम्पत्ति सकिएला कि भन्ने डरले ठगहरूले जस्तै असत्य बोल्न कसरी सक्छु ? म नरकदेखि पनि डराउन्नँ, न त दरिद्रता र मृत्युदेखि डराउँछु। अहिले म असत्यवादी बन्न चाहन्नँ। फेरि जुन सम्पत्तिलाई जोगाउनुपर्ने उपदेश हजुर गर्दै हुनुहुन्छ त्यो सम्पत्ति मसँग सधैँ रहने पनि होइन। मैले जति जोगाउन चाहे पनि एक दिन यो सम्पूर्ण वैभवले मलाई छोडिदिनेछ। मृत्युपछि मेरो साथ छोड्ने यो सम्पत्तिलाई मैले आजै छोडिदिँदा मेरो कीर्ति हुन्छ भने म किन यसमा लोभ गरूँ ? यसैले म यी ब्राह्मणलाई फर्काउन चाहन्नँ भनी बलि भन्दछन्।

**श्रेयः कुर्वन्ति भूतानां साधवो दुस्त्यजासुभिः।**
**दध्यङ्शिबिप्रभृतयः को विकल्पो धरादिषु ॥ ७ ॥**

**पदार्थ–**
**दध्यङ्शिबिप्रभृतयः** = दधीचि, शिबि आदि
**साधवः** = विवेकीहरूले
**दुस्त्यजासुभिः** = दुःखपूर्वक त्याग्न सकिने प्राणदानद्वारा
**भूतानां** = प्राणीहरूको
**श्रेयः** = कल्याण
**कुर्वन्ति** = गरेका छन् (भने)
**धरादिषु** = भूमि आदिको दान दिने विषयमा
**कः** = के
**विकल्पः** = विचार गरिरहनुपर्दछ र

**वाक्यार्थ–** दधीचि, शिबि आदि विवेकीहरूले प्राणीहरूको कल्याणका लागि आफ्नो दुस्त्यज प्राण पनि दिएका थिए भने भूमि आदिको दान दिने कुरामा के विचार गरिरहनुपर्दछ र ?

**यैरियं बुभुजे ब्रह्मन् दैत्येन्द्रैरनिवर्तिभिः।**
**तेषां कालोऽग्रसील्लोकान् न यशोऽधिगतं भुवि ॥ ८ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**यैः** = जुन-जुन
**अनिवर्तिभिः** = कसैले पनि प्रतिकार गर्न नसक्ने
**दैत्येन्द्रैः** = दैत्यराजाहरूद्वारा
**इयं** = यी पृथिवी
**बुभुजे** = भोग गरिइन्
**तेषां** = ती दैत्यराजाहरूको
**लोकान्** = लोकको भोगलाई
**कालः** = कालले
**अग्रसीत्** = निल्यो (तर)
**भुवि** = पृथिवीमा
**अधिगतं** = प्राप्त गरेको
**यशः** = कीर्तिलाई त
**न** = निल्न सकेन

**वाक्यार्थ–** हे ब्राह्मण ! युद्धमा कसैले पनि प्रतिकार गर्न नसक्ने महापराक्रमी दैत्यराजाहरूले पहिले पनि यस पृथिवीको भोग गरे। ती दैत्यराजाहरूको भोगलाई त कालले निल्यो तर तिनीहरूले पृथिवीमा प्राप्त गरेको कीर्तिलाई त कालले निल्न सकेन (उनीहरूको कीर्ति त अहिलेसम्म पनि छँदैछ)।

**सुलभा युधि विप्रर्षे ह्यनिवृत्तास्तनुत्यजः।**
**न तथा तीर्थ आयाते श्रद्धया ये धनत्यजः॥ ९॥**

**पदार्थ–**
**विप्रर्षे** = हे ब्रह्मर्षि
**युधि** = युद्धमा
**अनिवृत्ताः** = पीठ नफर्काउने
**तनुत्यजः** = प्राण त्याग्नेहरू
**हि** = निश्चय नै
**सुलभाः** = धेरै पाइन्छन्
**ये** = जो
**तीर्थे** = सत्पात्र
**आयाते** = प्राप्त हुँदा
**श्रद्धया** = श्रद्धापूर्वक
**धनत्यजः** = धनको दान गर्ने व्यक्तिहरू छन् (ती)
**तथा न** = त्यति धेरै पाइँदैनन्

**वाक्यार्थ–** हे ब्रह्मर्षि ! युद्धमा पीठ नफर्काउने बरू प्राण त्याग्ने वीरहरू संसारमा धेरै पाइन्छन्, तर सत्पात्र प्राप्त हुँदा श्रद्धापूर्वक आफ्नो धन दान गर्ने व्यक्तिहरू त्यति धेरै पाइँदैनन्।

**मनस्विनः कारुणिकस्य शोभनं यदर्थिकामोपनयेन दुर्गतिः।**
**कुतः पुनर्ब्रह्मविदां भवादृशां ततो वटोरस्य ददामि वाञ्छितम्॥ १०॥**

**पदार्थ–**
**अर्थिकामोपनयेन** = याचकको इच्छा पूर्ण गर्दा
**यत्** = जुन
**दुर्गतिः** = दरिद्रता आदि दुर्गति हुन्छ (त्यो)
**कारुणिकस्य** = दयालु
**मनस्विनः** = दानवीरका लागि
**शोभनं** = राम्रो नै हुन्छ
**भवादृशां** = हजुरजस्ता
**ब्रह्मविदां** = ब्रह्मज्ञहरूको (मनोरथ पूर्ण गर्दा त झन्)
**कुतः पुनः** = के भन्नु पर्दछ र ?
**ततः** = त्यसकारण
**अस्य** = यी वामन
**वटोः** = वटुको
**वाञ्छितं** = इच्छाअनुसारको भूमि
**ददामि** = प्रदान गर्दछु

**वाक्यार्थ–** याचक जस्तोसुकै होस्, उसको मनोरथ पूर्ण गराउँदा दरिद्रताको प्राप्ति हुन्छ भने त्यो दरिद्रता दयालु मनस्वी दानवीरका लागि राम्रो नै हुन्छ। फेरि हजुरजस्तो ब्रह्मज्ञको मनोरथ पूर्ण गर्दा दरिद्रताको प्राप्ति हुन्छ भने त्यसमा के नै भन्नु छ र ? अतः हे गुरुदेव ! म यी वामन वटुको इच्छाअनुसार तीन पाइला भूमि दान गर्दछु।

**यजन्ति यज्ञक्रतुभिर्यमादृता भवन्त आम्नायविधानकोविदाः।**
**स एव विष्णुर्वरदोऽस्तु वा परो दास्याम्यमुष्मै क्षितिमीप्सितां मुने॥ ११॥**

**पदार्थ–**
**मुने** = हे मुनि
**आम्नायविधानकोविदाः** = वेदोक्त यज्ञ गर्न कुशल
**भवन्तः** = हजुरहरू
**आदृताः** = आदरभावले युक्त

भई
**यज्ञक्रतुभिः** = यज्ञ-यागादिद्वारा
**यं** = जुन विष्णु भगवान्लाई
**यजन्ति** = आराधना गर्नुहुन्छ
**सः एव** = तिनै यी
**विष्णुः** = विष्णु
**वरदः** = मेरो वरदाता
**वा** = अथवा
**परः** = शत्रु
**अस्तु** = होऊन्
**अमुष्मै** = यिनलाई
**ईप्सितां** = इच्छाअनुसारको
**क्षितिं** = भूमि
**दास्यामि** = दिनेछु

**वाक्यार्थ–** हे मुनि! वेदोक्त विधिअनुसार यज्ञानुष्ठान गर्न कुशल तपाईंहरू विभिन्न यज्ञयागादिद्वारा आदरपूर्वक जसको आराधना गर्नुहुन्छ, तिनै भगवान् विष्णु मेरा वरदाता बनेर आएका होऊन् वा अन्य कुनै शत्रु आएका होऊन्। यिनलाई यिनकै इच्छाअनुसारको भूमि म अवश्य दान गर्नेछु।

**यद्प्यसावधर्मेण मां बध्नीयादनागसम्।**
**तथाप्येनं न हिंसिष्ये भीतं ब्रह्मतनुं रिपुम्॥ १२॥**

**पदार्थ–**
**यदपि** = यद्यपि
**असौ** = यी ब्रह्मचारीले
**अधर्मेण** = अधर्मपूर्वक
**अनागसं** = निष्कपट (निरपराध)
**मां** = मलाई
**बध्नीयात्** = बाँधून्
**तथा अपि** = तैपनि
**भीतं** = मेरो पराक्रमदेखि डराएका
**ब्रह्मतनुं** = ब्राह्मणको शरीर धारण गरेका
**एनं** = यिनलाई
**रिपुं** = शत्रु नै भए पनि
**न हिंसिष्ये** = मार्दिनँ

**वाक्यार्थ–** यद्यपि यी वामन ब्रह्मचारीले अधर्म (छल)पूर्वक निरपराध मलाई बाँधून् तापनि मेरो पराक्रमदेखि डराएर ब्राह्मणको शरीर धारण गरेका यिनलाई शत्रु नै भए पनि म मार्दिनँ।

**एष वा उत्तमश्लोको न जिहासति यद्यशः।**
**हत्वा मैनां हरेद् युद्धे शयीत निहतो मया॥ १३॥**

**पदार्थ–**
**यत्** = यदि
**एषः** = यी
**उत्तमश्लोकः** = पवित्र कीर्ति भएका विष्णु हुन् (भने)
**यशः** = आफ्नो कीर्ति
**न जिहासति** = त्याग्नेछैनन्
**युद्धे** = युद्धमा
**मा** = मलाई
**हत्वा** = मारेर
**एनां** = यो पृथिवीलाई
**हरेत्** = अवश्य लानेछन्
**वा** = अथवा (अरू कोही भए)
**मया** = मद्वारा
**निहतः** = पराजित भई (मारिई)
**शयीत** = (रणभूमिमै) सुत्ला

**वाक्यार्थ–** यदि यी ब्रह्मचारी पवित्र कीर्ति भएका भगवान् विष्णु नै हुन् भने यिनले आफ्नो कीर्तिलाई त्याग्नेछैनन्। युद्धमा मलाई मारेरै भए पनि यिनले पृथिवीलाई अवश्य लैजानेछन्। विष्णुदेखि अतिरिक्त कोही शत्रु भए त्यो मबाट पराजित भई रणभूमिमैं सधैंका लागि सुत्नेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमश्रद्धितं शिष्यमनादेशकरं गुरुः ।**
**शशाप दैवप्रहितः सत्यसन्धं मनस्विनम् ॥ १४ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**दैवप्रहितः** = दैवद्वारा प्रेरित
**गुरुः** = गुरु शुक्राचार्यले
**सत्यसन्धं** = सत्यप्रतिज्ञ
**मनस्विनं** = उदार चित्त भएका
**अश्रद्धितं** = गुरुवचनमा श्रद्धा नभएका
**अनादेशकरं** = गुरुआज्ञाको उल्लङ्घन गर्ने
**शिष्यं** = शिष्य बलिलाई
**शशाप** = श्राप दिए

**वाक्यार्थ–** दैवद्वारा प्रेरित भई गुरु शुक्राचार्यले गुरुवचनमा श्रद्धा नराखी गुरुको आज्ञाको उल्लङ्घन गरेकाले सत्यप्रतिज्ञ उदारचित्त शिष्य बलिलाई श्राप दिए।

**दृढं पण्डितमान्यज्ञः स्तब्धोऽस्यस्मदुपेक्षया ।**
**मच्छासनातिगो यस्त्वमचिराद् भ्रश्यसे श्रियः ॥ १५ ॥**

**पदार्थ–**
**दृढं** = दृढताका साथ
**पण्डितमानी** = आफूलाई पण्डित मान्ने
**अज्ञः** = मूर्ख
**स्तब्धः** = अशिष्ट भई
**मच्छासनातिगः** = मेरो आज्ञाको उल्लङ्घन गर्ने
**असि** = भएको छस् (त्यसैले)
**यः** = जो
**त्वं** = तँ
**अस्मदुपेक्षया** = हामी गुरुहरूको उपेक्षा गरेका कारण
**अचिरात्** = चाँडै नै
**श्रियः** = सम्पत्तिबाट
**भ्रश्यसे** = नष्ट हुनेछस्

**वाक्यार्थ–** दृढताका साथ आफूलाई पण्डित मान्ने तैँले अशिष्ट भई मेरो आज्ञाको उल्लङ्घन गरिस्। हामी गुरुहरूको उपेक्षा गरेका कारण तँ चाँडै नै सम्पत्तिरहित हुनेछस्।

**एवं शप्तः स्वगुरुणा सत्यान्न चलितो महान् ।**
**वामनाय ददावेनामर्चित्वोदकपूर्वकम् ॥ १६ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**स्वगुरुणा** = आफ्ना गुरुद्वारा
**शप्तः** = श्राप दिइएका
**महान्** = धैर्य आदि गुणले सम्पन्न महात्मा बलि
**सत्यात्** = आफ्नो सत्य वचनबाट
**न चलितः** = विचलित भएनन्
**अर्चित्वा** = वामनलाई पूजा गरेर
**उदकपूर्वकं** = पानी लिई
**वामनाय** = वामनलाई
**एनां** = यो भूमि
**ददौ** = दान दिए

**वाक्यार्थ–** यसरी आफ्ना गुरु शुक्राचार्यले श्राप दिए पनि धैर्य आदि गुणहरूले सम्पन्न महात्मा बलि आफ्नो वचनबाट विचलित भएनन्। बरु उनले वामनलाई पूजा गरेर हातमा पानी लिई भूमि दान गरे।

**विन्ध्यावलिस्तदागत्य पत्नी जालकमालिनी ।**
**आनिन्ये कलशं हैममवनेजन्यपां भृतम् ॥ १७ ॥**

**पदार्थ–**
**जालकमालिनी** = मोती आदि रत्नद्वारा निर्मित माला लगाएकी
**पत्नी** = बलिकी पत्नी
**विन्ध्यावलिः** = विन्ध्यावलि
**तदा** = त्यही वेलामा
**आगत्य** = आएर
**अवनेजन्यपां** = गोडा धुने जलले
**भृतम्** = भरिएको
**हैमं** = सुनको
**कलशं** = कलश
**आनिन्ये** = ल्याइन्

**वाक्यार्थ–** त्यही वेलामा मोती आदि रत्नहरूले बनेको माला लगाएकी बलिकी पत्नी विन्ध्यावलि आएर गोडा धुने जलले भरिएको सुनको कलश ल्याइन्।

**यजमानः स्वयं तस्य श्रीमत्पादयुगं मुदा ।**
**अवनिज्यावहन्मूर्ध्नि तदपो विश्वपावनीः ॥ १८ ॥**

**पदार्थ–**
**यजमानः** = यजमान बलिले
**स्वयं** = आफैँले
**तस्य** = ती वामन भगवान्को
**श्रीमत्** = शोभासम्पन्न
**पादयुगं** = दुई ओटै चरण
**मुदा** = हर्षपूर्वक
**अवनिज्य** = धोएर
**विश्वपावनीः** = संसारलाई नै पवित्र बनाउने
**तदपः** = त्यो चरण धोइएको जल
**मूर्ध्नि** = शिरमा
**अवहत्** = धारण गरे

**वाक्यार्थ–** यजमान बलि आफैँले हर्षपूर्वक भगवान् वामनको शोभासम्पन्न दुई पाउलाई धोएर सम्पूर्ण संसारलाई नै पवित्र बनाउने भगवान्को चरण धोएको त्यो जललाई आफ्नो शिरमा लगाए।

**तदासुरेन्द्रं दिवि देवतागणा गन्धर्वविद्याधरसिद्धचारणाः ।**
**तत्कर्म सर्वेऽपि गृणन्त आर्जवं प्रसूनवर्षैर्ववृषुर्मुदान्विताः ॥ १९ ॥**

**पदार्थ–**
**तदा** = त्यही वेलामा
**दिवि** = आकाशमा बसेका
**देवतागणाः** = देवगण
**गन्धर्वविद्याधरसिद्धचारणाः** = गन्धर्व, विद्याधर, सिद्ध, चारण
**सर्वे अपि** = सबैले
**मुदान्विताः** = हर्षित भई
**तत्कर्म** = बलिको भूमिदान गर्ने त्यो काम र
**आर्जवं** = सरलतालाई
**गृणन्तः** = प्रशंसा गर्दै
**असुरेन्द्रं** = असुरराज बलिलाई
**प्रसूनवर्षैः** = फूलको गुच्छाद्वारा
**ववृषुः** = वृष्टि गरे

**वाक्यार्थ–** त्यही वेलामा आकाशमा बसेका देवगण, गन्धर्व, विद्याधर, सिद्ध, चारण आदि सबैले अत्यन्त प्रसन्न भई बलिको भूमिदान कर्म र उनको सरलताको प्रशंसा गर्दै उनमाथि पुष्पवृष्टि गरे।

**नेदुर्मुहुर्दुन्दुभयः सहस्रशो गन्धर्वकिम्पूरुषकिन्नरा जगुः ।**
**मनस्विनानेन कृतं सुदुष्करं विद्वानदाद् यद् रिपवे जगत्त्रयम् ॥ २० ॥**

**पदार्थ–**
**सहस्रशः** = हजारौँ
**दुन्दुभयः** = दुन्दुभिहरू
**मुहुः** = बारम्बार
**नेदुः** = बज्न थाले
**गन्धर्वकिम्पूरुषकिन्नराः** = गन्धर्व, किम्पुरुष र किन्नरहरू
**जगुः** = गाउन थाले
**मनस्विना** = उदार हृदय भएका
**अनेन** = यी बलिले
**सुदुष्करं** = अरूद्वारा गर्न नसकिने कार्य
**कृतं** = गरियो
**यत्** = यी वामन देवताका पक्षपाती हुन् भन्ने कुरा
**विद्वान्** = जानेर पनि
**रिपवे** = शत्रुलाई
**जगत्त्रयं** = तीनै लोक
**अदात्** = दान दिए

**वाक्यार्थ–** हजारौँ दुन्दुभिहरू एकैसाथ बारम्बार बज्न थाले। गन्धर्व, किम्पुरुष र किन्नरहरू गाउन थाले। उदारहृदय भएका बलिले अरूद्वारा गर्न नसकिने कर्म गरे। यी वामन देवताका पक्षपाती हुन् भनेर जान्दाजान्दै पनि यिनले शत्रुलाई तीनै लोक दान दिए।

**तद् वामनं रूपमवर्धताद्भुतं हरेरनन्तस्य गुणत्रयात्मकम् ।**
**भूः खं दिशो द्यौर्विवराः पयोधयस्तिर्यङ्नृदेवा ऋषयो यदासत ॥ २१ ॥**

**पदार्थ–**
**अनन्तस्य** = अनन्त
**हरेः** = भगवान् विष्णुको
**गुणत्रयात्मकं** = त्रिगुणात्मक जगत्लाई आफैँभित्र समेट्ने
**तत्** = त्यो
**वामनं रूपं** = वामनको रूप
**अद्भुतं** = अनौठो तरिकाले
**अवर्धत** = बढ्न थाल्यो
**यत्** = जुन वामनको रूपभित्र
**भूः** = पृथिवी
**खं** = आकाश
**दिशः** = दिशाहरू
**द्यौः** = स्वर्ग
**विवराः** = पाताल
**पयोधयः** = समुद्र
**तिर्यङ्नृदेवाः** = पशुपक्षी, मनुष्य, देवगण
**ऋषयः** = ऋषिहरू
**आसत** = अवस्थित थिए

**वाक्यार्थ–** अनन्त भगवान् विष्णुको त्रिगुणात्मक सम्पूर्ण जगत्लाई आफैँभित्र लीन गरेको त्यो वामन रूप अनौठो तरिकाले बढ्दैगयो। भगवान् वामनको त्यो बढेको रूपभित्र पृथिवी, आकाश, सम्पूर्ण दिशा, स्वर्ग, पाताल, समुद्र, पशुपक्षी, मनुष्य, देवगण र ऋषिहरू अवस्थित थिए।

**काये बलिस्तस्य महाविभूतेः सहर्त्विगाचार्यसदस्य एतत् ।**
**ददर्श विश्वं त्रिगुणं गुणात्मके भूतेन्द्रियार्थाशयजीवयुक्तम् ॥ २२ ॥**

**पदार्थ–**
**सहर्त्विगाचार्यसदस्यः** = यज्ञमा उपस्थित ऋत्विक्, आचार्य र सदस्यहरूले सहित भएका
**बलिः** = बलिले
**महाविभूतेः** = अनन्त शक्तिसम्पन्न
**तस्य** = ती भगवान् वामनको
**गुणात्मके** = त्रिगुणात्मक जगत्को आश्रयभूत
**काये** = शरीरमा
**त्रिगुणं** = सत्त्व आदि त्रिगुणका

कार्य
**भूतेन्द्रियार्थाशयजीवयुक्तं** = पृथिवी आदि पञ्चमहाभूत, वाक् आदि इन्द्रिय, शब्द आदि विषय, अन्तःकरण र जीवहरूले युक्त भएको
**एतत्** = यो
**विश्वं** = विश्व
**ददर्श** = देखे

**वाक्यार्थ–** यज्ञमा उपस्थित सम्पूर्ण ऋत्विक्, आचार्य र आमन्त्रित सदस्यहरूले सहित भएका बलिले अनन्त शक्ति र ऐश्वर्यले सम्पन्न भएका भगवान् वामनको सम्पूर्ण त्रिगुणात्मक जगत्को आश्रयभूत शरीरमा सत्त्व आदि त्रिगुणका कार्य पञ्चमहाभूत, इन्द्रियहरू, इन्द्रियका विषयहरू, अन्तःकरण र जीवहरूले युक्त भएको यो विश्व देखे।

**रसामचष्टाङ्घ्रितलेऽथ पादयोर्महीं महीध्रान् पुरुषस्य जङ्घयोः।**
**पतत्त्रिणो जानुनि विश्वमूर्तेरूर्वोर्गणं मारुतमिन्द्रसेनः॥ २३॥**

**पदार्थ–**
**इन्द्रसेनः** = इन्द्रको जस्तै शक्तिशाली सेना भएका बलिले
**विश्वमूर्तेः** = विश्वरूप
**पुरुषस्य** = भगवान्को
**अङ्घ्रितले** = चरणतलमा
**रसां** = रसातल आदि सात लोक
**अथ** = त्यसै गरी
**पादयोः** = पाउमा
**महीं** = पृथिवी
**जङ्घयोः** = पिँडौलामा
**महीध्रान्** = पर्वतहरू
**जानुनि** = घुँडामा
**पतत्त्रिणः** = पक्षिगण
**उर्वोः** = तिघ्रामा
**मारुतं गणं** = मरुद्गण
**अचष्ट** = देखे

**वाक्यार्थ–** इन्द्रको जस्तै शक्तिशाली सेना भएका दैत्यराज बलिले विश्वरूप भगवान् पुरुषोत्तमको चरणतलमा रसातल आदि सात लोक, पाउमा पृथिवी, पिँडौलामा पर्वत, घुँडामा पक्षिगण र तिघ्रामा मरुद्गणलाई देखे।

**सन्ध्यां विभोर्वाससि गुह्य ऐक्षत् प्रजापतीन् जघने आत्ममुख्यान्।**
**नाभ्यां नभः कुक्षिषु सप्तसिन्धूनुरुक्रमस्योरसि चर्क्षमालाम्॥ २४॥**

**पदार्थ–**
**उरुक्रमस्य** = विश्वरूप
**विभोः** = सर्वव्यापक भगवान्को
**वाससि** = वस्त्रमा
**सन्ध्यां** = सन्ध्यालाई
**गुह्ये** = गुह्यस्थानमा
**आत्ममुख्यान्** = आफूसहित असुरहरूलाई
**जघने** = जाँघमा
**प्रजापतीन्** = प्रजापतिहरूलाई
**नाभ्यां** = नाभिमा
**नभः** = अन्तरिक्षलाई
**कुक्षिषु** = भुँडीमा
**सप्तसिन्धून्** = सात समुद्रलाई
**उरसि च** = छातीमा चाहिँ
**ऋक्षमालां** = तारागणलाई
**ऐक्षत्** = देखे

**वाक्यार्थ–** दैत्यराज बलिले विश्वरूप सर्वव्यापक भगवान्को वस्त्रमा सन्ध्या, गुह्यस्थानमा आफूसहित सम्पूर्ण असुरगण, जाँघमा मरीचि आदि प्रजापति, नाभिमा अन्तरिक्ष, भुँडीमा सात समुद्र र छातीमा तारागणलाई देखे।

**हृद्यङ्ग धर्मं स्तनयोर्मुरारेर्ऋतं च सत्यं च मनस्यथेन्दुम्।**
**श्रियं च वक्षस्यरविन्दहस्तां कण्ठे च सामानि समस्तरेफान्॥ २५॥**

**पदार्थ—**
**अङ्ग** = हे प्रिय परीक्षित्
**मुरारेः** = भगवान् विष्णुको
**हृदि** = हृदयमा
**धर्मं** = धर्मलाई
**स्तनयोः** = दुई स्तनमा
**ऋतं च** = मधुर वचन र
**सत्यं च** = सत्यलाई पनि
**अथ** = त्यसै गरी
**मनसि** = मनमा
**इन्दुं** = चन्द्रमालाई
**वक्षसि च** = छातीमा चाहिँ
**अरविन्दहस्तां** = हातमा कमल लिएकी
**श्रियं** = लक्ष्मीलाई
**कण्ठे** = घाँटीमा
**सामानि** = सामवेद
**समस्तरेफान् च** = अकार आदि सम्पूर्ण वर्णहरूलाई पनि (देखे)

**वाक्यार्थ—** हे राजा परीक्षित् ! बलिले वामनरूप भगवान् विष्णुको हृदयमा धर्म, स्तनमा मधुर वचन र सत्य, मनमा चन्द्रमा, छातीमा कमलको फूल लिएकी भगवती लक्ष्मी तथा घाँटीमा सामवेद र अकारादि सम्पूर्ण वर्णहरूलाई देखे।

**इन्द्रप्रधानानमरान् भुजेषु तत्कर्णयोः ककुभो द्यौश्च मूर्ध्नि।**
**केशेषु मेघाञ्छ्वसनं नासिकायामक्ष्णोश्च सूर्यं वदने च वह्निम्॥ २६॥**

**पदार्थ—**
**भुजेषु** = बाहुहरूमा
**इन्द्रप्रधानान्** = इन्द्र आदि
**अमरान्** = देवगणलाई
**तत्कर्णयोः** = भगवान्को कानमा
**ककुभः** = दिशाहरूलाई
**मूर्ध्नि च** = शिरमा चाहिँ
**द्यौः** = स्वर्गलाई
**केशेषु** = केशहरूमा
**मेघान्** = मेघहरूलाई
**नासिकायां** = नाकमा
**श्वसनं** = प्राणवायुलाई
**अक्ष्णोः च** = आँखामा
**सूर्यं** = सूर्यलाई
**वदने च** = मुखमा चाहिँ
**वह्निम्** = अग्निलाई (देखे)

**वाक्यार्थ—** बलिले भगवान्को बाहुमा इन्द्र आदि सम्पूर्ण देवता, कानमा दिशाहरू, शिरमा स्वर्ग, केशमा मेघसमूह, नाकमा प्राणवायु, आँखामा सूर्य र मुखमा चाहिँ अग्निलाई देखे।

**वाण्यां च छन्दांसि रसे जलेशं भ्रुवोर्निषेधं च विधिं च पक्ष्मसु।**
**अहश्च रात्रिं च परस्य पुंसो मन्युं ललाटेऽधर एव लोभम्॥ २७॥**

**पदार्थ—**
**वाण्यां** = वाणीमा
**छन्दांसि** = वेदहरूलाई
**रसे च** = जिभ्रोमा
**जलेशं** = जलदेवता वरुणलाई
**भ्रुवोः** = आँखीभौँमा
**विधिं च** = विधि र
**निषेधं च** = निषेधलाई
**पक्ष्मसु** = परेलामा
**अहः च** = दिन र
**रात्रिं च** = रातलाई
**परस्य पुंसः** = परमपुरुष भगवान्को
**ललाटे** = निधारमा
**मन्युं** = क्रोध

**अधरे** = तलपट्टिको ओठमा
**लोभं एव** = लोभलाई (देखे)

**वाक्यार्थ–** यसै गरी राजा बलिले परमपुरुष भगवान्‌को वाणीमा वेदहरू, जिभ्रोमा जलका देवता वरुण, दुई ओटा आँखीभौँमा विधिशास्त्र र निषेधशास्त्र, दुई ओटा परेलामा दिन र रात, निधारमा क्रोध र तल्लो ओठमा लोभलाई देखे।

**स्पर्शे च कामं नृप रेतसोऽम्भः पृष्ठे त्वधर्मं क्रमणेषु यज्ञम्।**
**छायासु मृत्युं हसिते च मायां तनूरुहेष्वोषधिजातयश्च ॥ २८ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**स्पर्शे** = त्वगिन्द्रियमा
**कामं** = काम
**रेतसः च** = वीर्यमा
**अम्भः** = जल
**पृष्ठे तु** = पीठमा चाहिँ
**अधर्मं** = पाप
**क्रमणेषु च** = पदविन्यासमा
**यज्ञं** = यज्ञ
**छायासु** = छायामा
**मृत्युं** = मृत्यु
**हसिते च** = हाँसोमा
**मायां** = माया
**तनूरुहेषु च** = शरीरका रौँहरूमा चाहिँ
**ओषधिजातयः** = विभिन्न प्रकारका औषधिहरू देखे

**वाक्यार्थ–** हे राजा परीक्षित्! बलिले भगवान्‌को त्वगिन्द्रियमा काम, वीर्यमा जल, पीठमा पाप, पदविन्यासमा यज्ञ, छायामा मृत्यु, हाँसोमा माया र शरीरका रौँहरूमा अनेक प्रकारका औषधिहरू देखे।

**नदीश्च नाडीषु शिला नखेषु बुद्धावजं देवगणानृषींश्च।**
**प्राणेषु गात्रे स्थिरजङ्गमानि सर्वाणि भूतानि ददर्श वीरः ॥ २९ ॥**

**पदार्थ–**
**वीरः** = वीर बलिले
**नाडीषु** = नाडीहरूमा
**नदीः** = नदीहरूलाई
**नखेषु च** = नङहरूमा
**शिलाः** = ढुङ्गाहरूलाई
**बुद्धौ** = बुद्धिमा
**अजं** = ब्रह्माजीलाई
**प्राणेषु** = इन्द्रियहरूमा
**देवगणान्** = देवगण र इन्द्रियका अधिष्ठाता देवताहरूलाई
**ऋषीन् च** = ऋषिहरूलाई पनि
**गात्रे** = शरीरमा
**सर्वाणि** = सम्पूर्ण
**स्थिरजङ्गमानि** = चर, अचर
**भूतानि** = प्राणीहरूलाई
**ददर्श** = देखे

**वाक्यार्थ–** वीर बलिले भगवान्‌का नाडीहरूमा नदीहरू, नङमा ढुङ्गाहरू, बुद्धिमा ब्रह्माजी, इन्द्रियहरूमा देवगण, इन्द्रियका अनुग्राहक देवताहरू र ऋषिहरू तथा शरीरमा सम्पूर्ण चराचर प्राणीहरूलाई देखे।

**सर्वात्मनीदं भुवनं निरीक्ष्य सर्वेऽसुराः कश्मलमापुरङ्ग।**
**सुदर्शनं चक्रमसह्यतेजो धनुश्च शार्ङ्गं स्तनयित्नुघोषम् ॥ ३० ॥**
**पर्जन्यघोषो जलजः पाञ्चजन्यः कौमोदकी विष्णुगदा तरस्विनी।**

**विद्याधरोऽसिः शतचन्द्रयुक्तस्तूणोत्तमावक्षयसायकौ च ॥ ३१ ॥**

**सुनन्दमुख्या उपतस्थुरीशं पार्षदमुख्याः सहलोकपालाः ।**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**सर्वात्मनि** = सम्पूर्ण जगत्का आधार भएका भगवान्मा
**इदं** = यो समग्र
**भुवनं** = संसार
**निरीक्ष्य** = देखेर
**सर्वे** = सम्पूर्ण
**असुराः** = दैत्यहरूले
**कश्मलं** = भय
**आपुः** = प्राप्त गरे
**असह्यतेजः** = असह्य तेज भएको
**सुदर्शनं** = सुदर्शन नामक
**चक्रं** = चक्र
**स्तनयित्नुघोषं** = मेघ झैँ गर्जना गर्ने
**शार्ङ्गं** = शार्ङ्ग नामक
**धनुः च** = धनु अनि
**पर्जन्यघोषः** = बादलको जस्तो गर्जना भएको
**पाञ्चजन्यः** = पाञ्चजन्य नामक
**जलजः** = शङ्ख
**तरस्विनी** = अत्यन्त वेगशाली
**कौमोदकी** = कौमोदकी नामक
**विष्णुगदा** = भगवान् विष्णुको गदा
**शतचन्द्रयुक्तः** = सय ओटा चन्द्रमाको आकारले युक्त
**विद्याधरः** = विद्याधर नामक
**असिः** = तरबार
**अक्षयसायकौ** = अक्षय बाणले युक्त भएको
**तूणोत्तमौ च** = दुई ओटा उत्तम ठोक्रा
**सहलोकपालाः** = लोकपालले सहित भएका
**सुनन्दमुख्याः** = सुनन्द आदि
**पार्षदमुख्याः** = मुख्य पार्षदहरू
**ईशं** = भगवान्को नजिक (सेवाका लागि)
**उपतस्थुः** = उपस्थित भए

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! सम्पूर्ण जगत्का आधार (आत्मा) भएका भगवान्मा यो सम्पूर्ण संसारलाई देखेर दैत्यहरू अत्यन्त डराए। यसै वेला भगवान्को सेवाका लागि आ-आफ्नो ठाउँमा असह्य तेज भएको सुदर्शन नामको चक्र, मेघ झैँ गर्जना गर्ने शार्ङ्गधनु, बादल झैँ गर्जने पाञ्चजन्य शङ्ख, अत्यन्त वेगशाली कौमोदकी गदा, सय ओटा चन्द्रमाको आकार अङ्कित विद्याधर नामक तरबार, कहिल्यै पनि बाण नसकिने दुई ओटा उत्तम ठोक्रा तथा इन्द्र आदि लोकपालहरू सहित सुनन्द आदि मुख्य-मुख्य पार्षदहरू भगवान्को नजिकमा उपस्थित भए।

**स्फुरत्किरीटाङ्गदमीनकुण्डलश्रीवत्सरत्नोत्तममेखलाम्बरैः ॥ ३२ ॥**

**मधुव्रतस्रग्वनमालयावृतो रराज राजन् भगवानुरुक्रमः ।**

**क्षितिं पदैकेन बलेर्विचक्रमे नभः शरीरेण दिशश्च बाहुभिः ॥ ३३ ॥**

**पदं द्वितीयं क्रमतस्त्रिविष्टपं न वै तृतीयाय तदीयमण्वपि ।**

**उरुक्रमस्याङ्घ्रिरुपर्युपर्यथो महर्जनाभ्यां तपसः परं गतः ॥ ३४ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**स्फुरत्किरीटाङ्गदमीनकुण्डल-श्रीवत्सरत्नोत्तममेखलाम्बरैः** = प्रकाशमान मुकुट, बाजु, मकराकार कुण्डल, श्रीवत्स चिह्न, उत्तम रत्ननिर्मित माला, मेखला र पीताम्बरद्वारा
**मधुव्रतस्रग्वनमालया** = भँवराको

पङ्क्तिले युक्त भएको वनमालाद्वारा
**वृतः** = ढाकिएका
**उरुक्रमः** = विश्वरूप
**भगवान्** = भगवान् वामन
**रराज** = शोभायमान हुनुहुन्थ्यो
**बलेः** = बलिको
**क्षितिं** = पृथिवीलाई
**एकेन** = एउटा
**पदा** = पाउद्वारा
**विचक्रमे** = ढाक्नुभयो
**नभः** = अन्तरिक्षलाई
**शरीरेण** = शरीरद्वारा र
**दिशः च** = सम्पूर्ण दिशाहरूलाई
**बाहुभिः** = हातहरूद्वारा (ढाक्नुभयो)
**क्रमतः** = नाप्ने भगवान्को
**द्वितीयं** = दोस्रो
**पदं** = पाउले
**त्रिविष्टपं** = स्वर्गलाई (ढाक्यो)
**तृतीयाय** = तेस्रो पाउ राख्नका लागि
**तदीयं** = बलिको
**अणु अपि** = अलिकति पनि ठाउँ
**वै** = निश्चय नै
**न** = भएन
**अथो** = अरु
**उरुक्रमस्य** = विश्वरूप भगवान् वामनको
**अङ्घ्रिः** = दोस्रो पाउ
**उपर्युपरि** = स्वर्गभन्दा पनि अझै माथि गएर
**महर्जनाभ्यां** = महर्लोक, जनलोक र
**तपसः** = तपोलोकबाट पनि
**परं** = पर रहेको सत्यलोकसम्म
**गतः** = पुग्यो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यसवेला शिरमा प्रकाशमान मुकुट, हातमा बाजु, कानमा मकराकार कुण्डल, छातीमा श्रीवत्सचिह्न, घाँटीमा रत्नको माला, कम्मरमा मेखला र शरीरमा पीताम्बर धारण गरेर भँवराको पङ्क्तिले युक्त भएको वनमाला धारण गरेका विश्वरूप भगवान् अत्यन्त शोभायमान हुनुहुन्थ्यो। त्यसपछि उहाँले एउटा पाउद्वारा बलिको पूरै पृथिवीलाई ढाकिदिनुभयो भने शरीरले अन्तरिक्ष र हातहरूले सम्पूर्ण दिशाहरूलाई ढाकिदिनुभयो। त्यसै गरी दोस्रो पाउद्वारा भगवान्ले स्वर्गलोकलाई पनि ढाकिदिनुभयो। त्यसपछि तेस्रो पाउ राख्न बलिको अणुसम्म पनि ठाउँ बाँकी रहेन। अरु भगवान् वामनको दोस्रो पाउ स्वर्गभन्दा पनि माथि–माथि बढ्दै गई महर्लोक, जनलोक, तपोलोक र त्यसभन्दा माथि सत्यलोकसम्म फैलिन पुग्यो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**विश्वरूपदर्शनं नाम विंशोऽध्यायः ॥ २० ॥**

# अथ एकविंशोऽध्यायः

## भगवान् वामनद्वारा राजा बलि बाँधिनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सत्यं समीक्ष्याब्जभवो नखेन्दुभिर्हतस्वधामद्युतिरावृतोऽभ्यगात्।**
**मरीचिमिश्रा ऋषयो बृहद्व्रताः सनन्दनाद्या नरदेव योगिनः॥ १॥**
**वेदोपवेदा नियमान्विता यमास्तर्केतिहासाङ्गपुराणसंहिताः।**
**ये चापरे योगसमीरदीपितज्ञानाग्निना रन्धितकर्मकल्मषाः।**
**ववन्दिरे यत्स्मरणानुभावतः स्वायम्भुवं धाम गता अकर्मकम्॥ २॥**

**पदार्थ—**
**नरदेव** = हे नरेश
**नखेन्दुभिः** = भगवान्को नङरूपी चन्द्रमाद्वारा
**हतस्वधामद्युतिः** = आफ्नो लोकको प्रकाश नै नष्ट भएका
**अब्जभवः** = कमलबाट उत्पन्न ब्रह्माजीले
**सत्यं** = सत्यलोकमा पुगेको (भगवान्को चरणकमललाई)
**समीक्ष्य** = देखेर
**आवृतः** = मरीचि आदि आफ्ना गणहरूद्वारा युक्त भई
**अभ्यगात्** = भगवान् वामनको नजिकमा आउनुभयो
**मरीचिमिश्राः** = मरीचि आदि
**ऋषयः** = ऋषिहरू
**बृहद्व्रताः** = नारद आदि नैष्ठिक ब्रह्मचारीहरू
**सनन्दनाद्याः** = सनन्दन आदि
**योगिनः** = ज्ञानयोगीहरू
**वेदोपवेदाः** = वेद र उपवेद
**नियमान्विताः** = शौच आदि नियमले युक्त
**यमाः** = यम (अहिंसा आदि)
**तर्केतिहासाङ्गपुराणसंहिताः** = तर्क, इतिहास, वेदाङ्ग, पुराण, संहिता र
**ये** = जो
**अपरे च** = अरू पनि (जसले)
**योगसमीरदीपितज्ञानाग्निना** = योगरूपी वायुद्वारा प्रज्वलित ज्ञानाग्निद्वारा
**रन्धितकर्मकल्मषाः** = कर्मजन्य दोषलाई नष्ट गराएका छन् (तिनीहरूले पनि)
**ववन्दिरे** = भगवान्को चरणकमलको वन्दना गरे
**यत्स्मरणानुभावतः** = भगवान्को जुन चरणकमलको स्मरणको प्रभावले
**अकर्मकं** = काम्य कर्मद्वारा प्राप्त नहुने
**स्वायम्भुवं** = ब्रह्माजीको
**धाम** = लोकमा
**गताः** = गए

**वाक्यार्थ—** भगवान्को त्यस चरणकमलको नङरूपी चन्द्रमाको कान्तिले ब्रह्मलोकको प्रकाश मलिन भएपछि ब्रह्माजीले आफ्नो सत्यलोकमा आइपुगेको भगवान्को चरणकमल देख्नुभयो र मरीचि आदि आफ्ना गणहरूले सहित भएर भगवान्को नजिकमा आउनुभयो। यसपछि मरीचि आदि ऋषिहरू, नारद आदि नैष्ठिक ब्रह्मचारीहरू, सनन्दन आदि ज्ञानयोगीहरू, ऋक् आदि वेद,

आयुर्वेद आदि उपवेद, शौच आदि नियम, अहिंसा आदि यम, तर्क (न्यायशास्त्र), महाभारत आदि इतिहास, शिक्षा आदि वेदाङ्ग, पुराण, पाञ्चरात्र आदि संहिता लगायत ज-जसले योगरूपी वायुद्वारा प्रज्वलित भएको ज्ञानरूप अग्निद्वारा कर्मजन्य सम्पूर्ण दोषहरूलाई नष्ट गराएका छन् ती सबैले भगवान्को चरणकमलको वन्दना गरे। भगवान्का चरणकमलको महिमाको वन्दनाद्वारा उनीहरूले काम्य कर्मद्वारा प्राप्त हुनै नसक्ने ब्रह्मलोक प्राप्त गरे।

**अथाङ्घ्रये प्रोन्नमिताय विष्णोरुपाहरत् पद्मभवोऽर्हणोदकम्।**
**समर्च्य भक्त्याभ्यगृणाच्छुचिश्रवा यन्नाभिपङ्केरुहसम्भवः स्वयम्॥ ३॥**

**पदार्थ—**
**अथ** = यसपछि
**शुचिश्रवाः** = पवित्र कीर्ति भएका
**पद्मभवः** = कमलबाट उत्पन्न भएका ब्रह्माजी
**स्वयं** = आफैँले
**यन्नाभिपङ्केरुहसम्भवः** = जसको नाभिकमलबाट उत्पन्न हुनुभएको थियो
**तस्य** = तिनै
**विष्णोः** = भगवान् विष्णुको
**प्रोन्नमिताय** = अत्यन्त माथि उठेको
**अङ्घ्रये** = चरणलाई
**अर्हणोदकं** = अर्घ्य
**उपाहरत्** = चढाउनुभयो
**समर्च्य** = चरणकमलको पूजा गरेर
**भक्त्या** = भक्तिपूर्वक
**अभ्यगृणात्** = स्तुति गर्नुभयो

**वाक्यार्थ—** भगवान् विष्णुको नाभिकमलबाट उत्पन्न भएका एवं अत्यन्त पवित्र कीर्ति भएका ब्रह्माजीले माथिसम्म उठेको भगवान् विष्णुको चरणकमलमा अर्घ्य चढाउनुभयो र विधिपूर्वक चरणकमलको पूजा गरेर भक्तिपूर्वक स्तुति गर्नुभयो।

**धातुः कमण्डलुजलं तदुरुक्रमस्य**
**पादावनेजनपवित्रतया नरेन्द्र।**
**स्वर्धुन्यभून्नभसि सा पतती निमार्ष्टि**
**लोकत्रयं भगवतो विशदेव कीर्तिः॥ ४॥**

**पदार्थ—**
**नरेन्द्र** = हे राजा परीक्षित्
**तत्** = त्यो पूजा गर्न समर्पित
**धातुः** = ब्रह्माजीको
**कमण्डलुजलं** = कमण्डलुको जल
**उरुक्रमस्य** = विश्वरूप भगवान्को
**पादावनेजनपवित्रतया** = चरण धुँदा पवित्र भएका कारण
**स्वर्धुनि** = गङ्गा
**अभूत्** = भइन् (जसले)
**नभसि** = आकाशमार्गबाट
**पतती** = झर्दै गर्दा
**भगवतः** = भगवान्को
**विशदा** = विमल
**कीर्तिः इव** = कीर्ति जस्ती
**सा** = ती गङ्गाले
**लोकत्रयं** = तीनै लोकलाई
**निमार्ष्टि** = पवित्र गर्दछिन्

**वाक्यार्थ—** हे राजा परीक्षित्! भगवान्को पूजा गर्दा ब्रह्माजीले कमण्डलुको जुन जलले विश्वरूप भगवान्को चरण धुनुभयो त्यही जल भगवान्को चरणको स्पर्शले गर्दा पवित्र भई गङ्गा

भयो। यी गङ्गाले आकाशमार्गबाट पृथिवीमा ओर्लेर भगवान्को विमलकीर्तिले झैं तीनै लोकलाई पवित्र गर्दछिन्।

**ब्रह्मादयो लोकनाथाः स्वनाथाय समादृताः।**
**सानुगा बलिमाजह्रुः सङ्क्षिप्तात्मविभूतये॥ ५॥**
**तोयैः समर्हणैः स्रग्भिर्दिव्यगन्धानुलेपनैः।**
**धूपैर्दीपैः सुरभिभिर्लाजाक्षतफलाङ्कुरैः॥ ६॥**
**स्तवनैर्जयशब्दैश्च तद्वीर्यमहिमाङ्कितैः।**
**नृत्यवादित्रगीतैश्च शङ्खदुन्दुभिनिःस्वनैः॥ ७॥**

**पदार्थ–**
**सङ्क्षिप्तात्मविभूतये** = आफ्नो देहविस्तारलाई सङ्क्षिप्त बनाएका
**स्वनाथाय** = आफ्ना स्वामीलाई
**ब्रह्मादयः** = ब्रह्मा आदि
**लोकनाथाः** = लोकपालहरू
**सानुगाः** = आ-आफ्ना अनुचरहरूले सहित भई
**समादृताः** = भक्तिपूर्वक (त्यहाँ आएर)
**तोयैः** = स्नान, आचमन आदि जलद्वारा
**समर्हणैः** = अर्घ्यजलद्वारा
**दिव्यगन्धानुलेपनैः** = दिव्य गन्ध भएको अङ्गरागद्वारा
**स्रग्भिः** = मालाहरूद्वारा
**सुरभिभिः** = सुगन्धमय
**धूपैः** = धूपहरूद्वारा
**दीपैः** = दीपहरूद्वारा
**लाजाक्षतफलाङ्कुरैः** = लाजा, अक्षता, फल र अङ्कुरद्वारा
**तद्वीर्यमहिमाङ्कितैः** = भगवान्को पराक्रम र महिमाले युक्त
**स्तवनैः** = स्तुतिहरूद्वारा
**जयशब्दैश्च** = जयशब्दहरूद्वारा
**नृत्यवादित्रगीतैः** = नाच, बाजा र गीतद्वारा
**शङ्खदुन्दुभिनिःस्वनैः च** = शङ्ख, दुन्दुभि आदिका आवाजहरूद्वारा
**बलिं** = पूजा
**आजह्रुः** = गरे

**वाक्यार्थ–** भगवान्ले लोकान्तरसम्म फैलिएको आफ्नो शरीरलाई सानो बनाउनुभएपछि आ-आफ्ना अनुचरहरूले सहित भई ब्रह्मा आदि लोकपालहरूले भगवान् भएको ठाउँमा आएर स्नान, आचमन र अर्घ्यका लागि सुगन्धित जल, दिव्य गन्ध भएको अङ्गराग, माला, सुगन्धमय धूप, दीप, लाजा, अक्षता, फल, अङ्कुर, भगवान्को पराक्रम र महिमाले युक्त स्तुति, जयजयकार शब्द, नाच, बाजागाजा, गीत, शङ्ख, दुन्दुभि आदिको आवाजहरूद्वारा अत्यन्त भक्तिपूर्वक उहाँको पूजा गरे।

**जाम्बवानृक्षराजस्तु भेरीशब्दैर्मनोजवः।**
**विजयं दिक्षु सर्वासु महोत्सवमघोषयत्॥ ८॥**

**पदार्थ–**
**मनोजवः** = मनको जस्तै वेग भएका
**ऋक्षराजः** = भालुका राजा
**जाम्बवान् तु** = जाम्बवान्ले
**भेरीशब्दैः** = कर्नालको

आवाजद्वारा
**सर्वासु** = सम्पूर्ण
**दिक्षु** = दिशाहरूमा
**महोत्सवं** = महोत्सवपूर्वक
**विजयं** = (भगवान्को वामनको) विजय
**अघोषयत्** = घोषणा गरे

**वाक्यार्थ–** त्यही वेला मनको जस्तै वेग भएका ऋक्षराज जाम्बवान्ले कर्नाल बजाएर सम्पूर्ण दिशाहरूमा महोत्सव गराई भगवान् वामनको विजयको घोषणा गरे।

**महीं सर्वां हृतां दृष्ट्वा त्रिपदव्याजयाच्ञया।**
**ऊचुः स्वभर्तुरसुरा दीक्षितस्यात्यमर्षिताः॥ ९॥**

**पदार्थ–**
**त्रिपदव्याजयाच्ञया** = तीन पाइला जमिन माग्ने निहुँ गरी
**दीक्षितस्य** = यज्ञमा दीक्षित भएकाले (दण्ड दिन असमर्थ)
**स्वभर्तुः** = आफ्ना स्वामी बलिको
**सर्वां** = सम्पूर्ण
**महीं** = पृथिवी
**हृतां** = हरण गरिएको
**दृष्ट्वा** = देखेर
**अत्यमर्षिताः** = ज्यादै रिसाएका
**असुराः** = असुरहरू
**ऊचुः** = (परस्परमा) भन्न लागे

**वाक्यार्थ–** वामनले तीन पाइला जमिन माग्ने निहुँ गरी आफ्ना स्वामी महाराज बलिको सम्पूर्ण पृथिवी हरण गरेको र महाराज बलि यज्ञमा दीक्षित भएकाले दण्ड दिन असमर्थ भएको देखेर रिसाएका असुरहरू परस्परमा भन्न लागे।

**न वा अयं ब्रह्मबन्धुर्विष्णुर्मायाविनां वरः।**
**द्विजरूपप्रतिच्छन्नो देवकार्यं चिकीर्षति॥ १०॥**

**पदार्थ–**
**अयं** = यो वामन
**वै** = निश्चय नै
**ब्रह्मबन्धुः** = कुनै ब्राह्मण
**न** = होइन (त्यो त)
**मायाविनां** = मायावीहरूमा
**वरः** = श्रेष्ठ
**विष्णुः** = विष्णु हो (जो)
**द्विजरूपप्रतिच्छन्नः** = ब्राह्मणको रूपमा लुकेर
**देवकार्यं** = देवताहरूको काम
**चिकीर्षति** = सिद्ध गर्न चाहन्छ

**वाक्यार्थ–** यो वामन निश्चय नै कुनै ब्राह्मण होइन। यो त सर्वश्रेष्ठ मायावी विष्णु हो। यो ब्राह्मणको रूपमा लुकेर देवताहरूको काम सिद्ध गर्न चाहन्छ।

**अनेन याचमानेन शत्रुणा वटुरूपिणा।**
**सर्वस्वं नो हृतं भर्तुर्न्यस्तदण्डस्य बर्हिषि॥ ११॥**

**पदार्थ–**
**याचमानेन** = मगन्ते
**वटुरूपिणा** = ब्रह्मचारीको रूप लिएको
**अनेन** = यो वामन
**शत्रुणा** = शत्रुद्वारा
**बर्हिषि** = यज्ञका कारण
**न्यस्तदण्डस्य** = दण्ड त्याग गरेका
**नः** = हाम्रा
**भर्तुः** = स्वामी बलिको
**सर्वस्वं** = सर्वस्व

**हृतम्** = हरण भयो

**वाक्यार्थ–** मगन्ते ब्रह्मचारीको रूप लिएर हाम्रो शत्रु वामनले यज्ञमा बस्नाले सबै प्रकारका दण्ड त्यागेका हाम्रा स्वामी महाराज बलिको सर्वस्व हरण गऱ्यो।

**सत्यव्रतस्य सततं दीक्षितस्य विशेषतः।**

**नानृतं भाषितुं शक्यं ब्रह्मण्यस्य दयावतः॥ १२॥**

**पदार्थ–**
**सततं** = सधैँ
**सत्यव्रतस्य** = सत्यनिष्ठ
**विशेषतः** = विशेष गरी
**दीक्षितस्य** = यज्ञानुष्ठानमा दीक्षित हुनुभएका
**ब्रह्मण्यस्य** = ब्राह्मणहरूका भक्त
**दयावतः** = दयालु (महाराज बलिद्वारा)
**अनृतं** = झूटो
**भाषितुं** = बोल्न
**न शक्यम्** = असम्भव छ

**वाक्यार्थ–** सधैँ सत्यनिष्ठ अनि अहिले यज्ञानुष्ठानमा दीक्षित, ब्राह्मणभक्त दयालु महाराज बलिले झूटो बोल्न असम्भव छ।

**तस्मादस्य वधो धर्मो भर्तुः शुश्रूषणं च नः।**

**इत्यायुधानि जगृहुर्बलेरनुचरासुराः॥ १३॥**

**पदार्थ–**
**तस्मात्** = त्यसकारण
**अस्य** = यस वामनको
**वधः** = वध गर्नु नै
**नः** = हाम्रो
**धर्मः** = धर्म हो
**भर्तुः** = स्वामीको
**शुश्रूषणं च** = सेवा पनि हो
**इति** = यस्तो भन्दै
**बलेः** = बलिका
**अनुचरासुराः** = अनुचर असुरहरूले
**आयुधानि** = हतियारहरू
**जगृहुः** = समाते

**वाक्यार्थ–** त्यसैले यो वामनको वध गर्नु नै हाम्रो धर्म हो र आफ्नो स्वामीप्रति हामीले गर्नुपर्ने सेवा पनि यही हो। यस्तो विचार गरी बलिका अनुचर सम्पूर्ण असुरहरूले आ–आफ्ना हतियारहरू समाते।

**ते सर्वे वामनं हन्तुं शूलपट्टिशपाणयः।**

**अनिच्छन्तो बले राजन् प्राद्रवन् जातमन्यवः॥ १४॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**जातमन्यवः** = अत्यन्त रिसाएका
**शूलपट्टिशपाणयः** = त्रिशूल र पट्टिश (अस्त्रविशेष) हातमा लिएका
**ते** = ती
**सर्वे** = सबै असुरहरू
**बलेः** = बलिको
**अनिच्छन्तः** = इच्छा नभए पनि
**वामनं** = वामनलाई
**हन्तुं** = मार्न
**प्राद्रवन्** = दौडिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! अत्यन्त रिसाएका सबै असुरहरू हातमा त्रिशूल र पट्टिश बोकेर

बलिले नचाहँदा नचाहँदै पनि वामनलाई मार्न भनेर दौडिए।

**तानभिद्रवतो दृष्ट्वा दितिजानीकपान् नृप।**
**प्रहस्यानुचरा विष्णोः प्रत्यषेधन्नुदायुधाः॥ १५॥**

**पदार्थ–**
**नृप** = हे राजा
**तान्** = ती
**दितिजानीकपान्** = असुरसेनापतिहरूले
**अभिद्रवतः** = वामन भगवान्लाई झम्टिँदै गरेको
**दृष्ट्वा** = देखेर
**उदायुधाः** = शस्त्रास्त्रहरू उठाएका
**विष्णोः** = भगवान् विष्णुका
**अनुचराः** = पार्षदहरूले
**प्रहस्य** = उपहासपूर्वक
**प्रत्यषेधन्** = रोकिदिए

**वाक्यार्थ–** हे राजा परीक्षित्! असुरसेनापतिहरूले भगवान्लाई झम्टिँदै आइरहेको देखेर भगवान् विष्णुका पार्षदहरूले पनि शस्त्रास्त्रहरू उठाए र उपहासपूर्वक असुरसेनापतिहरूलाई रोकिदिए।

**नन्दः सुनन्दोऽथ जयो विजयः प्रबलो बलः।**
**कुमुदः कुमुदाक्षश्च विष्वक्सेनः पतत्त्रिराट्॥ १६॥**
**जयन्तः श्रुतदेवश्च पुष्पदन्तोऽथ सात्वतः।**
**सर्वे नागायुतप्राणाश्चमूं ते जघ्नुरासुरीम्॥ १७॥**

**पदार्थ–**
**नन्दः** = नन्द
**सुनन्दः** = सुनन्द
**अथ** = त्यसै गरी
**जयः** = जय
**विजयः** = विजय
**प्रबलः** = प्रबल
**बलः** = बल
**कुमुदः** = कुमुद
**कुमुदाक्षः** = कुमुदाक्ष
**विष्वक्सेनः च** = विष्वक्सेन अनि
**पतत्त्रिराट्** = पक्षीराज गरुड
**जयन्तः** = जयन्त
**श्रुतदेवः च** = श्रुतदेव अनि
**अथ** = त्यसै गरी
**पुष्पदन्तः** = पुष्पदन्त
**सात्वतः** = सात्वत
**ते** = ती
**सर्वे** = सबै
**नागायुतप्राणाः** = दश हजार हात्तीको बल भएका पार्षदहरूले
**आसुरीम्** = असुरहरूको
**चमूं** = सेनालाई
**जघ्नुः** = मार्न थाले

**वाक्यार्थ–** नन्द, सुनन्द, जय, विजय, प्रबल, बल, कुमुद, कुमुदाक्ष, विष्वक्सेन, पक्षीराज गरुड, जयन्त, श्रुतदेव, पुष्पदन्त र सात्वत यी सबै दश हजार हात्तीको बराबर बल भएका भगवान्का पार्षदहरूले असुरसेनालाई मार्न थाले।

**हन्यमानान् स्वकान् दृष्ट्वा पुरुषानुचरैर्बलिः।**
**वारयामास संरब्धान् काव्यशापमनुस्मरन्॥ १८॥**

**पदार्थ—**
**बलिः** = बलिले
**पुरुषानुचरैः** = भगवान्का पार्षदहरूद्वारा
**स्वकान्** = आफ्ना सेनाहरू
**हन्यमानान्** = मारिन लागेका
**दृष्ट्वा** = देखेर
**संरब्धान्** = ज्यादै रिसाएका असुरहरूलाई
**काव्यशापं** = शुक्राचार्यको श्रापलाई
**अनुस्मरन्** = सम्झँदै
**वारयामास** = रोके

**वाक्यार्थ—** भगवान्का पार्षदहरूले आफ्ना सेनाहरूलाई धमाधम मार्न थालेको देखेर बलिले आफूलाई गुरु शुक्राचार्यद्वारा दिइएको श्राप सम्झँदै आफ्ना रिसाएका सेनाहरूलाई रोके।

**हे विप्रचित्ते हे राहो हे नेमे श्रूयतां वचः।**
**मा युध्यत निवर्तध्वं न नः कालोऽयमर्थकृत्॥ १९॥**

**पदार्थ—**
**हे विप्रचित्ते** = हे विप्रचित्ति
**हे राहो** = हे राहु
**हे नेमे** = हे नेमि
**वचः** = कुरा
**श्रूयतां** = सुन
**मा युध्यत** = लडाइँ नगर
**निवर्तध्वं** = फर्क
**अयं** = यो
**कालः** = समय
**नः** = हाम्रो लागि
**अर्थकृत्** = जयप्रद
**न** = छैन

**वाक्यार्थ—** बलिले विप्रचित्ति, राहु, नेमि आदिलाई सम्बोधन गर्दै भने— हे सेनापतिहरू ! तिमीहरू लडाइँ नगर, फर्क किनभने हाम्रो लागि यो समय जयप्रद छैन।

**यः प्रभुः सर्वभूतानां सुखदुःखोपपत्तये।**
**तं नातिवर्तितुं दैत्याः पौरुषैरीश्वरः पुमान्॥ २०॥**

**पदार्थ—**
**दैत्याः** = हे दैत्यहरू
**यः** = जुन काल
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूलाई
**सुखदुःखोपपत्तये** = सुख र दुःख प्रदान गर्न
**प्रभुः** = समर्थ छ
**तं** = त्यो काललाई
**पुमान्** = कुनै पनि पुरुषले
**पौरुषैः** = आफ्नो बल, पराक्रम आदिद्वारा
**अतिवर्तितुं** = अतिक्रमण गर्न
**न ईश्वरः** = सक्दैन

**वाक्यार्थ—** हे दैत्यहरू ! सम्पूर्ण प्राणीहरूलाई सुख र दुःख प्रदान गर्न समर्थ काललाई कुनै पनि पुरुषले आफ्नो बल, पराक्रम आदिद्वारा अतिक्रमण गर्न सक्दैन।

**यो नो भवाय प्रागासीदभवाय दिवौकसाम्।**
**स एव भगवानद्य वर्तते तद्विपर्ययम्॥ २१॥**

**पदार्थ—**
**यः** = जुन कालरूप
**भगवान्** = भगवान्
**प्राक्** = पहिले
**नः** = हाम्रो
**भवाय** = उन्नतिका लागि

**दिवौकसां** = देवताहरूको
**अभवाय** = अवनतिका लागि
**आसीत्** = थिए
**अद्य** = आज
**सः एव** = तिनै काल भगवान्
**तद्विपर्ययं** = देवताको उन्नति र हाम्रो विनाशका लागि
**वर्तते** = उपस्थित छन्

**वाक्यार्थ–** जुन कालरूप भगवान् पहिले हाम्रो उन्नति र देवताहरूको अवनतिका लागि हेतु थिए, तिनै काल भगवान् आज हाम्रो अवनति र देवताहरूको उन्नतिको कारण भएका छन्।

**बलेन सचिवैर्बुद्ध्या दुर्गैर्मन्त्रौषधादिभिः।**

**सामादिभिरुपायैश्च कालं नात्येति वै जनः॥ २२॥**

**पदार्थ–**
**जनः** = मनुष्यले
**बलेन** = बल
**सचिवैः** = मन्त्रीहरू
**बुद्ध्या** = बुद्धि
**दुर्गैः** = दुर्गहरू
**मन्त्रौषधादिभिः** = मन्त्र, औषधिहरू तथा
**सामादिभिः** = साम आदि
**उपायैः च** = उपायहरूद्वारा पनि
**कालं** = काललाई
**वै** = निश्चय नै
**न अत्येति** = अतिक्रमण गर्न सक्दैन

**वाक्यार्थ–** कुनै पनि मनुष्यले बल (सेना), मन्त्री, बुद्धि, दुर्ग, मन्त्र, औषधि र साम आदि उपायहरूद्वारा पनि काललाई जित्न सक्दैन।

**भवद्भिर्निर्जिता ह्येते बहुशोऽनुचरा हरेः।**

**दैवेनर्द्धैस्त एवाद्य युधि जित्वा नदन्ति नः॥ २३॥**

**पदार्थ–**
**दैवेन** = काल अनुकूल हुँदा
**ऋद्धैः** = अत्यन्त समृद्ध
**भवद्भिः** = तिमीहरूद्वारा
**बहुशः** = धैरै पटक
**एते** = यी
**हरेः** = विष्णुका
**अनुचराः** = पार्षदहरू
**हि** = निश्चय नै
**निर्जिताः** = जितिएका थिए
**अद्य** = आज
**ते एव** = तिनै पार्षदहरूले
**युधि** = युद्धमा
**नः** = हामीहरूलाई
**जित्वा** = जितेर
**नदन्ति** = गर्जिरहेका छन्

**वाक्यार्थ–** हे असुरहरू! काल अनुकूल हुँदा अत्यन्त समृद्ध भएका तिमीहरूबाट विष्णुका यी पार्षदहरू धैरैपटक पराजित भएका थिए। आज तिनै पार्षदहरू हामीलाई युद्धमा जितेर गर्जना गरिरहेका छन्।

**एतान् वयं विजेष्यामो यदि दैवं प्रसीददति।**

**तस्मात् कालं प्रतीक्षध्वं यो नोऽर्थत्वाय कल्पते॥ २४॥**

**पदार्थ–**
**यदि** = यदि
**दैवं** = काल
**प्रसीददति** = प्रसन्न हुन्छ (जब हाम्रो अनुकूल होला तब मात्र)
**वयं** = हामीहरू

**एतान्** = यी देवताहरूलाई
**विजेष्यामः** = जित्नेछौँ
**तस्मात्** = त्यसकारण
**यः** = जुन काल
**नः** = हाम्रो
**अर्थत्वाय** = अनुकूलताका लागि
**कल्पते** = समर्थ हुन्छ
**कालं** = त्यो काललाई
**प्रतीक्षध्वम्** = प्रतीक्षा गर

**वाक्यार्थ–** जब काल हाम्रो अनुकूल हुन्छ तब मात्र हामी देवताहरूलाई जित्न सक्नेछौँ। त्यसकारण हाम्रो अनुकूल काल नआउन्जेलसम्म प्रतीक्षा गर।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**पत्युर्निगदितं श्रुत्वा दैत्यदानवयूथपाः।**
**रसां निर्विविशू राजन् विष्णुपार्षदताडिताः॥ २५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**पत्युः** = आफ्ना स्वामी बलिको
**निगदितं** = भनाइ
**श्रुत्वा** = सुनेर
**विष्णुपार्षदताडिताः** = भगवान् विष्णुका पार्षदहरूबाट पिटिएका
**दैत्यदानवयूथपाः** = दैत्य र दानवका सेनापतिहरू
**रसां** = रसातलमा
**निर्विविशुः** = प्रवेश गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! आफ्ना स्वामी महाराज बलिको भनाइ सुनेर भगवान्का पार्षदहरूबाट पिटिएका दैत्य र दानवका सेनापतिहरू रसातलतिर गए।

**अथ तार्क्ष्यसुतो ज्ञात्वा विराट् प्रभुचिकीर्षितम्।**
**बबन्ध वारुणैः पाशैर्बलिं सौत्येऽहनि क्रतौ॥ २६॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**विराट्** = पक्षीराज
**तार्क्ष्यसुतः** = कश्यपपुत्र गरुडले
**प्रभुचिकीर्षितं** = भगवान्को चाहनालाई
**ज्ञात्वा** = बुझेर
**क्रतौ** = यज्ञको
**सौत्ये** = सोमपान गरिने
**अहनि** = दिनमा
**वारुणैः** = वरुणको
**पाशैः** = पाशद्वारा
**बलिं** = बलिलाई
**बबन्ध** = बाँधे

**वाक्यार्थ–** यसपछि कश्यपपुत्र पक्षीराज गरुडले भगवान् विष्णुको चाहनालाई बुझेर यज्ञको सोमपान हुने दिन वरुणको पाशद्वारा बलिलाई बाँधे।

**हाहाकारो महानासीद् रोदस्योः सर्वतो दिशम्।**
**गृह्यमाणेऽसुरपतौ विष्णुना प्रभविष्णुना॥ २७॥**

**पदार्थ–**
**प्रभविष्णुना** = सर्वशक्तिमान्
**विष्णुना** = भगवान् विष्णुद्वारा
**असुरपतौ** = असुरराज बलि
**गृह्यमाणे** = बाँधिएपछि
**रोदस्योः** = आकाश, पृथिवी र
**सर्वतो दिशं** = सम्पूर्ण दिशाहरूमा
**महान्** = ठूलो
**हाहाकारः** = हाहाकार
**आसीत्** = भयो

**वाक्यार्थ–** सर्वशक्तिमान् भगवान् विष्णुले असुरराज बलिलाई बाँधेपछि आकाश, पृथिवी र सम्पूर्ण दिशाहरूमा ठुलो हाहाकार भयो।

**तं बद्धं वारुणैः पाशैर्भगवानाह वामनः।**
**नष्टश्रियं स्थिरप्रज्ञमुदारयशसं नृप॥ २८॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**वारुणैः** = वरुणको
**पाशैः** = पाशद्वारा
**बद्धं** = बाँधिएका
**नष्टश्रियं** = सम्पूर्ण सम्पत्तिहरू नष्ट भएका (तापनि)
**स्थिरप्रज्ञं** = स्थिर बुद्धि (अविचलित) भएका
**उदारयशसं** = उदार कीर्ति भएका
**तं** = ती बलिलाई
**भगवान्** = भगवान्
**वामनः** = वामनले
**आह** = भन्नुभयो

**वाक्यार्थ–** हे परीक्षित्! वरुणको पाशद्वारा बाँधिएका र सम्पूर्ण सम्पत्ति खोसिएका भए पनि विचलित नभएका र उदार कीर्ति भएका बलिलाई भगवान् वामनले भन्नुभयो।

**विवरण–** माथिका तीन श्लोकमा भगवान्को आशयलाई बुझेर पक्षीराज गरुडले बलिलाई वारुण पाशद्वारा बाँधिदिएको तर पनि उनी स्थिरप्रज्ञ नै रहेको बताइएको छ। भगवान्ले बलिलाई किन बाँधन चाहनुभयो भन्ने कुरामा श्रीधर स्वामीले स्पष्ट उल्लेख गरिदिनुभएको छ– **तद्यशःप्रख्यापनार्थं** अर्थात् बलि जत्तिको धीर, समर्पित र सत्यनिष्ठ व्यक्ति कोही छैन भनी उनको यश बढाउनकै लागि भगवान्ले बलिलाई बाँधन खोज्नुभएको थियो। यही भाव बुझी गरुडले बलिलाई बाँधे तर पनि बलि विचलित भएनन्। यहाँ बलिको लागि तीन विशेषण प्रयोग गरिएको छ– **नष्टश्रियं, स्थिरप्रज्ञं** र **उदारयशसं**। यी तीन विशेषणहरूको क्रमशः विचार गर्ने हो भने बलिलाई भगवान्ले के–के गर्न खोज्नुभएको थियो भन्ने स्पष्ट हुन्छ। भगवान्को अन्तिम उद्देश्य त बलिको यशलाई प्रख्यात बनाउने नै थियो। त्यसका लागि उहाँले सबैभन्दा पहिला उनको श्रीसम्पत्तिलाई नष्ट गरिदिनुभयो, यति हुँदा पनि जब उनी स्थिरप्रज्ञ अर्थात् शान्तचित्त रहिरहे तब उनको कीर्ति स्वतः बढ्यो। आफ्नो उद्देश्य सफल भएको देखी भगवान् झन् उत्साहित हुनुभयो र बलिलाई आफैँमा लीन गराउने उद्देश्यले उहाँले अब तेस्रो पाइला भूमि मलाई देऊ भनी बलिसँग कठोर वचन बोलेको लीला गर्नुभयो।

**पदानि त्रीणि दत्तानि भूमेर्मह्यं त्वयासुर।**
**द्वाभ्यां क्रान्ता मही सर्वा तृतीयमुपकल्पय॥ २९॥**

**पदार्थ–**
**असुर** = हे असुर बलि
**भूमेः** = पृथिवीको
**त्रीणि** = तीन
**पदानि** = पाइला
**त्वया** = तिमीद्वारा
**मह्यं** = मलाई
**दत्तानि** = दिइयो
**द्वाभ्यां** = दुई पाउद्वारा (तिम्रो)
**सर्वा** = सम्पूर्ण
**मही** = पृथिवी
**क्रान्ता** = नापेर लिएँ (अब)
**तृतीयं** = तेस्रो पाइला भूमि
**उपकल्पय** = तयार पार

**वाक्यार्थ–** हे असुर बलि ! तिमीले मलाई तीन पाइला भूमि दिने प्रतिज्ञा गरेका थियौ। त्यसमध्ये दुई पाउद्वारा मैले तिम्रो सम्पूर्ण पृथिवी नापेर लिएँ। अब तेस्रो पाइला भूमि दिन तयार होऊ।

**यावत् तपत्यसौ गोभिर्यावदिन्दुः सहोडुभिः।**
**यावद् वर्षति पर्जन्यस्तावती भूरियं तव ॥ ३० ॥**

| पदार्थ– | **इन्दुः** = चन्द्रमा | **तावती** = त्यहाँसम्म |
|---|---|---|
| **असौ** = यी सूर्य | **यावत्** = जहाँसम्म (प्रकाशित हुन्छन्) | **इयं** = यी |
| **गोभिः** = आफ्ना किरणहरूद्वारा | **पर्जन्यः** = मेघ | **भूः** = पृथिवी |
| **यावत्** = जहाँसम्म | **यावत्** = जहाँसम्म | **तव** = तिम्रो हो |
| **तपति** = प्रकाशमान हुन्छन् | **वर्षति** = बर्सन्छ | |
| **उडुभिः सह** = नक्षत्रहरूले सहित | | |

**वाक्यार्थ–** आफ्ना किरणहरूद्वारा सूर्य जहाँसम्म प्रकाशित हुन्छन्, सम्पूर्ण नक्षत्रहरू सहित चन्द्रमाले जहाँसम्म आफ्नो प्रकाश फैलाउँछन् र मेघले जहाँसम्म जलवृष्टि गराउँछ त्यहाँसम्मको सम्पूर्ण पृथिवी तिम्रो हो (जसलाई मैले दुई पाउद्वारा नै लिइसकेँ)।

**पदैकेन मयाक्रान्तो भूर्लोकः खं दिशस्तनोः।**
**स्वर्लोकस्तु द्वितीयेन पश्यतस्ते स्वमात्मना ॥ ३१ ॥**

| पदार्थ– | **तनोः** = शरीरले | **पश्यतः** = हेर्दा-हेर्दै |
|---|---|---|
| **एकेन** = एउटा | **खं** = आकाश र | **ते** = तिम्रो |
| **पदा** = पाउद्वारा | **दिशः** = दिशाहरूलाई (नापेँ) | **स्वं** = सम्पूर्ण सम्पत्ति |
| **मया** = मैले | **द्वितीयेन** = दोस्रो पाउद्वारा | **आत्मना** = मैले (लिएँ) |
| **भूर्लोकः** = भूर्लोक | **तु** = चाहिँ | |
| **क्रान्तः** = नापेँ | **स्वर्लोकः** = स्वर्ग लोक (नापेँ) | |

**वाक्यार्थ–** पहिलो पाउद्वारा भूर्लोक, शरीरद्वारा आकाश र सम्पूर्ण दिशाहरू तथा दोस्रो पाउद्वारा स्वर्गलोक नापेर तिमीले हेर्दा-हेर्दै तिम्रा सम्पूर्ण सम्पत्ति (लोकहरू) मैले लिएँ। (अब तेस्रो पाइला राख्नका लागि भूमि कहाँ दिन्छौ ?)।

**प्रतिश्रुतमदातुस्ते निरये वास इष्यते।**
**विश त्वं निरयं तस्माद् गुरुणा चानुमोदितः ॥ ३२ ॥**

| पदार्थ– | **अदातुः** = दिन असमर्थ | **वासः** = वास |
|---|---|---|
| **प्रतिश्रुतं** = प्रतिज्ञाअनुसारको (तेस्रो पाइला जमिन) | **ते** = तिम्रो | **इष्यते** = इष्ट हुन्छ |
| | **निरये** = नरकमा | **तस्मात्** = त्यसकारण |

**गुरुणा च** = गुरु शुक्राचार्यद्वारा पनि
**अनुमोदितः** = नरक जानैका लागि अनुमोदन गरिएका
**त्वं** = तिमी
**निरयं** = नरकमा
**विश** = प्रवेश गर

**वाक्यार्थ—** हे बलि ! प्रतिज्ञाअनुसार तेस्रो पाइला जमिन दिन नसक्ने तिम्रो लागि नरकको वास उपयुक्त छ। शुक्राचार्य गुरुले पनि तिमीलाई त्यही भनेका थिए। त्यसैले तिमी अब नरकमा प्रवेश गर।

**वृथा मनोरथस्तस्य दूरे स्वर्गः पतत्यधः।**
**प्रतिश्रुतस्यादानेन योऽर्थिनं विप्रलम्भते ॥ ३३ ॥**

**पदार्थ—**
**यः** = जो व्यक्ति
**प्रतिश्रुतस्य** = प्रतिज्ञा गरेको वस्तु
**अदानेन** = नदिएर
**अर्थिनं** = याचकलाई
**विप्रलम्भते** = ठग्दछ
**तस्य** = त्यस्तो ठगको
**मनोरथः** = सुखविषयक इच्छा
**वृथा** = व्यर्थ हुन्छ
**स्वर्गः** = स्वर्ग पनि
**दूरे** = टाढै रहन्छ
**अधः** = तल (नरकमा)
**पतति** = खस्दछ

**वाक्यार्थ—** हे बलि ! जसले प्रतिज्ञा गरेको वस्तु नदिएर याचकलाई ठग्छ त्यो ठग दाताको कुनै पनि सुखविषयक इच्छा व्यर्थ हुन्छ र उसका लागि स्वर्ग पनि टाढै रहन्छ। उल्टो ऊ तल (नरकमा) खस्दछ।

**विप्रलब्धो ददामीति त्वयाहं चाढ्यमानिना।**
**तद्व्यलीकफलं भुङ्क्ष्व निरयं कतिचित् समाः ॥ ३४ ॥**

**पदार्थ—**
**आढ्यमानिना** = आफूलाई खुब ऐश्वर्यशाली हुँ भनिठान्ने
**त्वया च** = तिमीद्वारा
**ददामि इति** = जे पनि दिन्छु भनेर
**अहं** = म
**विप्रलब्धः** = ठगिएँ (त्यसकारण)
**कतिचित्** = केही
**समाः** = समय
**तद्व्यलीकफलं** = त्यो झूट प्रतिज्ञाको फल
**निरयं** = नरक
**भुङ्क्ष्व** = भोग गर

**वाक्यार्थ—** हे बलि ! तिमीले 'म तीनै लोकको ऐश्वर्यले सम्पन्न छु, त्यसैले जे मागे पनि दिन्छु' भनेर मलाई झुक्यायौ। त्यसकारण झूट प्रतिज्ञाको फलस्वरूप तिमीले अब केही वर्षसम्म नरकको भोग गर।

**विवरण—** यहाँ भगवान्ले दुई पाउमा बलिको पृथिवी र स्वर्गको राज्य लिनुमा विशेष रहस्य लुकेको छ। आफूसँग कुनै वस्तु छ भन्ने बित्तिकै त्यसमा ममता हुन्छ। अहंता र ममता नै बन्धनका कारण हुन्। त्यसैले भगवान् पहिले भक्तको ममतालाई र पछि अहंतालाई नष्ट गरिदिनुहुन्छ। वामन भगवान्ले दुई पाइला जमिन लिनुको एउटा रहस्य यही हो। अर्को रहस्य

हो— बलिसँग दुई थरी राज्य थिए। एउटा कर्मले जितेको पृथिवी र अर्को पुण्यले जितेको स्वर्ग। जीवात्माहरूको पनि यिनै दुई सम्पत्ति हुन्छन्— एउटा ऐहलौकिक दृश्य सम्पत्ति, अर्को पुण्यसम्पत्ति। ती दुबैलाई भगवान्मा समर्पण गर्न सक्यो भने मात्र तिनको सार्थकता हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**वामनप्रादुर्भावे बलिनिग्रहो नामैकविंशोऽध्यायः ॥ २१ ॥**

# अथ द्वाविंशोऽध्यायः

## बलिद्वारा भगवान्‌को स्तुति र भगवान्‌को प्रसन्नता

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं विप्रकृतो राजन् बलिर्भगवतासुरः।**

**भिद्यमानोऽप्यभिन्नात्मा प्रत्याहाविक्लवं वचः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**भगवता** = भगवान् वामनद्वारा
**विप्रकृतः** = तिरस्कृत
**भिद्यमानः अपि** = विचलित गराउन खोजिए पनि
**अभिन्नात्मा** = स्थिर मन भएका
**असुरः** = असुरराज
**बलिः** = बलिले
**अविक्लवं** = धैर्यपूर्ण
**वचः** = वाणी
**प्रत्याह** = भने

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसप्रकार भगवान् वामनले पाशबन्धन र मर्मभेदी वाणीद्वारा असुरराज बलिलाई विचलित गराउन खोज्नुभयो तापनि स्थिर मन भएका बलिले धैर्यपूर्ण वाणीमा भने।

**बलिरुवाच** (बलिले भने)

**यद्युत्तमश्लोक भवान् ममेरितं वचो व्यलीकं सुरवर्य मन्यते।**

**करोम्यृतं तन्न भवेत् प्रलम्भनं पदं तृतीयं कुरु शीर्ष्णि मे निजम्॥ २॥**

**पदार्थ–**
**उत्तमश्लोक** = हे पवित्र कीर्ति भएका भगवान्
**यदि** = यदि
**मम** = मैले
**ईरितं** = बोलेको
**वचः** = वाणीलाई
**भवान्** = हजुर
**व्यलीकं** = असत्य
**मन्यते** = मान्नुहुन्छ (तर)
**तत्** = त्यो (मेरो भनाइ)
**प्रलम्भनं** = धोका
**न भवेत्** = हुँदैन (किनभने म)
**ऋतं** = (त्यस भनाइलाई) सत्य
**करोमि** = बनाउँछु
**सुरवर्य** = हे देववर
**निजं** = आफ्नो
**तृतीयं** = तेस्रो
**पदं** = पाइला
**मे** = मेरो
**शीर्ष्णि** = शिरमा
**कुरु** = राख्नुहोस्

**वाक्यार्थ–** हे पुण्यकीर्ति भगवान्! मैले तीन पाइला भूमि दिन्छु भनेको भनाइलाई असत्य नठान्नुहोस्, म मेरो प्रतिज्ञालाई सत्य बनाउँछु। हे भगवान्! हजुरले अब मेरो शिरमाथि आफ्नो तेस्रो पाइला राख्नुहोस्।

**विवरण–** यस श्लोकमा बलिले भगवान्‌लाई उत्तर दिएका छन्। बलिले हे उत्तमश्लोक! भनी

भगवान्लाई सम्बोधन गरेका छन्। 'पवित्र कीर्ति भएका हे भगवान् !' भन्दा भगवान्ले गर्नुभएको छललाई व्यङ्ग्य गरेको भाव पनि यहाँ झल्किएको छ। मैले गरेको प्रतिज्ञा यदि हजुरलाई असत्य लाग्दछ भने म त्यसको व्यवस्था पनि गर्दछु। हजुरले आफ्नो तेस्रो पाउले मेरो शिरलाई नै नाप्नुहोस्। यसो भनिरहँदा बलिले आफ्नो सम्पूर्ण व्यक्तित्वलाई नै भगवान्को चरणमा समर्पित गरिदिएका छन्। भगवत्स्वरूपमा प्राप्त हुन नदिने दुई ओटा नै मुख्य अवरोध छन्– अहङ्कार र ममता। श्रीमद्भगवद्गीता (२/७१)मा भगवान्ले **निर्ममो निरहङ्कारः** भनी यिनै दुईलाई त्याग्नुपर्ने बताउनुभएको छ।

जहाँ ममता देखिन्छ, त्यहाँ त्योभन्दा पहिले अहङ्कार अवश्य विद्यमान रहन्छ। लोकव्यवहारमा पनि शरीरमा **अहं** अर्थात् म हुँ भन्ने बुद्धि गरेपछि त्यस सम्बन्धी पदार्थमा **मम** अर्थात् मेरो भन्ने बुद्धि हुन्छ। जहाँ अहङ्कार छैन त्यहाँ ममता पनि हुँदैन। सुषुप्ति कालमा शरीर, इन्द्रिय आदिमा अहङ्कार नभएकाले त्यहाँ कुनै विषयको ममता पनि छैन। म शरीर हुँ भनी आफूलाई परमात्माभन्दा भिन्नै अस्तित्व मान्नु अहङ्कार हो भने शरीसँग सम्बन्धित पुण्य-पाप, स्त्री-पुत्र, घर-जग्गा आदिलाई मेरो भन्नु ममता हो। यहाँ बलिले आफ्ना सम्पूर्ण राज्य-वैभव भगवान्लाई दिइसके, उनले जतिलाई **मम** अर्थात् मेरो भन्दथे, त्यो पदार्थ भगवान्को भइसकेकाले उनबाट ममता हटिसकेको थियो। शरीर, मन, इन्द्रिय आदिमा रहेको अहंता चाहिँ अझै छुटेको थिएन। वेदान्तशास्त्र अनुसार यही अहङ्कार नै अन्तिम बन्धन या जीवभावको मूल हो। आफैँलाई नै भगवान्मा समर्पित गरिदिएपछि त्यो अहं पनि निवृत्त हुन्छ र जीवले परमात्मभावलाई प्राप्त गर्दछ। यहाँ बलिले भगवान्लाई शिर अर्पण गरेर यही अहङ्कार नै चढाएका हुन्। नत्र सारा लोकहरूलाई नापिसक्नुभएका परमात्मालाई तेस्रो पाउ राख्न सानो टाउको के पर्याप्त होला र ? अहङ्कार त सम्पूर्ण संसारको मूल हो। यसैले नै यो लोक र परलोकका ममतास्पद विषयहरूलाई सँगालेको हो। सम्पत्तिभन्दा सम्पत्ति कमाउने मानिस सधैँ बढी मूल्यवान् हुन्छ। त्यसैले बलिले भगवान्लाई उत्तर दिएका छन् कि हे प्रभु ! मसँग हजुरलाई तेस्रो पाउ राख्नको लागि दिने अमूल्य वस्तु बाँकी छ, त्यो हो आफू। जुन मैले सम्पूर्ण सुखभोग र राज्यहरूलाई जितेको थिएँ त्यो म के ती पदार्थहरूभन्दा अमूल्य छैन र ? त्यसैले मलाई नै तेस्रो पाउको रूपमा नाप्नुहोस्। बलिको यही समर्पणलाई आत्मनिवेदन भक्तिको रूपमा व्याख्या गरिएको छ। वास्तवमा आत्मनिवेदन या अहङ्कारत्याग विना न ज्ञानमा, न त भक्तिमा नै कुनै सफलता मिल्दछ भन्ने बुझ्नुपर्दछ।

**बिभेमि नाहं निरयात् पदच्युतो न पाशबन्धाद् व्यसनाद् दुरत्ययात्।**
**नैवार्थकृच्छ्राद् भवतो विनिग्रहादसाधुवादाद् भृशमुद्विजे यथा ॥ ३॥**

**पदार्थ–**
**अहं** = म
**निरयात्** = नरकबाट
**न बिभेमि** = डराउँदिनँ
**पदच्युतः** = राज्यको विनाशबाट
**पाशबन्धात्** = पाशबन्धनबाट
**दुरत्ययात्** = अत्यन्त भीषण
**व्यसनात्** = विपत्तिबाट
**न** = डराउँदिनँ
**अर्थकृच्छ्रात्** = सम्पत्तिको विनाशबाट
**भवतः** = हजुरको

**विनिग्रहात्** = दण्डबाट पनि
**न एव** = त्यसरी डराउँदिनँ
**यथा** = जसरी
**असाधुवादात्** = अपकीर्तिबाट
**भृशं** = अत्यन्त
**उद्विजे** = डराउँछु

**वाक्यार्थ–** म नरकबाट, राज्यच्युत हुनबाट, हजुरले बाँधेको पाशबन्धनबाट र भीषण विपत्ति (दुःख)बाट डराउँदिनँ। यस्तै सम्पत्तिको विनाश वा हजुरले दिएका कुनै अन्य प्रकारका दण्डहरूबाट पनि म त्यति डराउँदिनँ, जति अपकीर्तिबाट डराउँछु।

**पुंसां श्लाघ्यतमं मन्ये दण्डमर्हत्तमार्पितम्।**
**यं न माता पिता भ्राता सुहृदश्चादिशन्ति हि॥ ४॥**

**पदार्थ–**
**अर्हत्तमार्पितम्** = हजुरजस्ता पूज्य व्यक्तिले दिएको
**दण्डं** = दण्ड
**पुंसां** = पुरुषहरूका लागि
**श्लाघ्यतमं** = ज्यादै प्रशंसनीय (हुन्छ भन्ने)
**मन्ये** = ठान्दछु
**हि** = किनभने
**यं** = जुन यसप्रकारको दण्ड
**माता** = आमाले
**पिता** = पिताले
**भ्राता** = दाजुभाइले
**सुहृदः च** = मित्रजनहरूले पनि
**न आदिशन्ति** = दिँदैनन्

**वाक्यार्थ–** हे भगवान्! हजुरजस्ता पूज्य व्यक्तिले दिएको दण्ड पुरुषहरूका लागि ज्यादै प्रशंसनीय हुन्छ भन्ने मलाई लाग्दछ (किनभने यस्तो दण्ड त पापनिर्वृत्ति र कीर्तिको विषय हुने गर्दछ)। यस्तो प्रशंसनीय दण्ड माता, पिता, दाजुभाइ र मित्रवर्गले पनि दिन सक्दैनन्। (जो हजुरले मलाई दिनुभयो।)

**त्वं नूनमसुराणां नः पारोक्ष्यः परमो गुरुः।**
**यो नोऽनेकमदान्धानां विभ्रंशं चक्षुरादिशत्॥ ५॥**

**पदार्थ–**
**त्वं** = हजुर
**नूनं** = निश्चय नै
**नः** = हामी
**असुराणां** = असुरहरूको
**पारोक्ष्यः** = परोक्षरूपमा रहेका
**परमः** = परम
**गुरुः** = गुरु हुनुहुन्छ
**यः** = जो हजुरले
**अनेकमदान्धानां** = अनेक प्रकारका मदले अन्ध भएका
**नः** = हामीहरूको
**विभ्रंशं** = मदलाई नष्ट गर्ने
**चक्षुः** = आँखा
**आदिशत्** = दिनुभयो

**वाक्यार्थ–** निश्चय पनि हजुर हामी असुरहरूको हितकारी परोक्षरूपमा रहेका परम गुरु हुनुहुन्छ किनभने मद (शौर्य, वीर्य र धनादिजन्य घमन्ड)ले अन्ध भएका हामीहरूको मदलाई नष्ट गर्ने आँखा हजुरले नै प्रदान गर्नुभएको छ।

**यस्मिन् वैरानुबन्धेन रूढेन विबुधेतराः।**
**बहवो लेभिरे सिद्धिं यामु हैकान्तयोगिनः॥ ६॥**

**पदार्थ–**
**एकान्तयोगिनः** = अनन्यभावले युक्त योगीहरूले

**उ ह** = निश्चय नै
**याम्** = जुन मोक्षविषयिणी
**सिद्धिं** = सिद्धि
**लेभिरे** = प्राप्त गरेका थिए
(त्यही सिद्धिलाई)
**बहवः** = धेरै
**विबुधेतराः** = असुरहरूले
**यस्मिन्** = जुन हजुरमा
**रूढेन** = दृढ
**वैरानुबन्धेन** = वैरभावद्वारा
(प्राप्त गरेका छन्)

**वाक्यार्थ–** हे भगवान् ! अनन्य भक्ति र ज्ञानद्वारा योगीहरूले जुन मोक्षविषयक सिद्धि प्राप्त गरेका थिए त्यही सिद्धि असुरहरूले हजुरसँग दृढ वैरभाव गरेर प्राप्त गरेका छन्।

**तेनाहं निगृहीतोऽस्मि भवता भूरिकर्मणा।**
**बद्धश्च वारुणैः पाशैर्नातिव्रीडे न च व्यथे॥ ७॥**

**पदार्थ–**
**तेन** = त्यस्ता
**भूरिकर्मणा** = अनन्त लीलासम्पन्न
**भवता** = हजुरद्वारा
**अहं** = म
**निगृहीतः अस्मि** = बाँधिएको छु
**वारुणैः** = वरुणको
**पाशैः** = पाशद्वारा
**बद्धः च** = बाँधिएको पनि छु
(तापनि)
**न अतिव्रीडे** = लाज मान्दिनँ
**न च व्यथे** = न त दुःखी नै बन्दछु

**वाक्यार्थ–** अनन्त लीला गर्ने हजुरले मलाई आफ्नो वशमा राख्नुभएको छ, वरुणको पाशले बाँध्नुभएको छ, तापनि मलाई कुनै लाज लागेको छैन, न त कुनै दुःखको अनुभव नै छ।

**पितामहो मे भवदीयसम्मतः प्रह्लाद आविष्कृतसाधुवादः।**
**भवद्विपक्षेण विचित्रवैशसं सम्प्रापितस्त्वत्परमः स्वपित्रा॥ ८॥**

**पदार्थ–**
**भवदीयसम्मतः** = हजुरको भक्त
**आविष्कृतसाधुवादः** = प्रशस्त कीर्ति प्राप्त गरेका
**त्वत्परमः** = हजुरलाई नै परम सेव्य मान्ने
**मे** = मेरा
**पितामहः** = हजुरबा
**प्रह्लादः** = प्रह्लादले
**भवद्विपक्षेण** = हजुरको विपक्षी (शत्रु)
**स्वपित्रा** = आफ्ना पिता हिरण्यकशिपुद्वारा
**विचित्रवैशसं** = अनेक यातना
**सम्प्रापितः** = प्राप्त गर्नुभयो

**वाक्यार्थ–** हजुरका परम भक्त एवं अनन्य सेवक भएकाले प्रशस्त कीर्ति प्राप्त गरेका मेरा हजुरबा प्रह्लादले हजुरका शत्रु आफ्ना पिता हिरण्यकशिपुबाट अनेक यातना पाउनुभयो।

**किमात्मनानेन जहाति योऽन्ततः किं रिक्थहारैः स्वजनाख्यदस्युभिः।**
**किं जायया संसृतिहेतुभूतया मर्त्यस्य गेहैः किमिहायुषो व्ययः॥ ९॥**

**पदार्थ–**
**यः** = जसले (जुन शरीरले)
**अन्ततः** = अन्तिममा गएर
**मर्त्यस्य** = मरणशील व्यक्तिको साथ
**जहाति** = छोडिदिन्छ (त्यस्तो)
**अनेन** = यो
**आत्मना** = शरीरद्वारा
**किं** = के प्रयोजन छ ?

**रिक्थहारैः** = सम्पत्ति हरण गर्ने
**स्वजनाख्यदस्युभिः** = आफन्त भनिने चोरहरूद्वारा
**किं** = के प्रयोजन सिद्ध हुन्छ ?
**संसृतिहेतुभूतया** = जन्ममरणको कारण भएकी
**जायया** = पत्नीद्वारा
**किं** = के प्रयोजन सिद्ध हुन्छ ?
**गेहैः** = घरद्वारा पनि
**किं** = के गर्नु ?
**इह** = यस प्रवृत्तिमार्गमा (यिनीहरूबाट केवल)
**आयुषः** = आयुको
**व्ययः** = क्षय मात्र हुन्छ

**वाक्यार्थ–** मरणशील व्यक्तिलाई यो शरीरले एक दिन अवश्य त्यागिदिन्छ। त्यस्तो आफैँलाई छोडिदिने शरीरबाट के प्रयोजन सिद्ध होला ? यस्तै आफ्नो सम्पत्ति हरण गर्ने चोरजस्ता आफन्तहरूद्वारा र जन्ममरणको कारण भएकी पत्नीद्वारा के प्रयोजन सिद्ध होला ? (जब मानिस स्वयं नै मरेर जान्छ भने) घरको पनि के प्रयोजन हुन्छ र ? यी सबै कुराहरू प्रवृत्तिमार्गका मात्र साधन हुन्, जसबाट केवल आयुको मात्र क्षय हुन्छ।

**इत्थं स निश्चित्य पितामहो महानगाधबोधो भवतः पादपद्मम्।**
**ध्रुवं प्रपेदे ह्यकुतोभयं जनाद् भीतः स्वपक्षक्षपणस्य सत्तम ॥ १० ॥**

**पदार्थ–**
**अगाधबोधः** = अपरिमित ज्ञानसम्पन्न
**महान्** = ठुला
**सत्तम** = सन्त
**सः** = ती
**पितामहः** = मेरा हजुरबा प्रह्लादले
**इत्थं** = यस्तो
**निश्चित्य** = निश्चय गरेर
**हिं** = निश्चय नै
**जनात्** = जनसमुदायबाट
**भीतः** = डराई
**स्वपक्षक्षपणस्य** = आफ्नो असुरपक्षलाई नाश गर्ने
**भवतः** = हजुरको
**ध्रुवं** = नित्यपुरुषार्थरूप
**अकुतोभयं** = भयशून्य
**पादपद्मं** = चरणकमलको
**प्रपेदे** = शरणमा जानुभयो

**वाक्यार्थ–** हजुरले असुरकुललाई नष्ट गर्नुभएको थियो तापनि अपरिमित ज्ञानसम्पन्न एवं महान् सन्त मेरा हजुरबा प्रह्लाद जनसमुदायबाट भयभीत भई नित्यपुरुषार्थरूप हजुरको चरणकमलको शरणमा जानुभयो।

**अथाहमप्यात्मरिपोस्तवान्तिकं दैवेन नीतः प्रसभं त्याजितश्रीः।**
**इदं कृतान्तान्तिकवर्ति जीवितं ययाध्रुवं स्तब्धमतिर्न बुध्यते ॥ ११ ॥**

**पदार्थ–**
**अथ** = त्यसैले
**अहम् अपि** = म पनि
**दैवेन** = सौभाग्यवश
**आत्मरिपोः** = स्थूल र सूक्ष्म शरीरको शत्रु
**तव** = मोक्षदाता हजुरको
**अन्तिकं** = नजिक
**नीतः** = प्राप्त भएको छु
**त्याजितश्रीः** = सम्पूर्ण सम्पत्तिबाट अलग भएको व्यक्ति
**यया** = जुन सम्पत्तिका कारण
**प्रसभं** = बलपूर्वक
**स्तब्धमतिः** = विवेक कुण्ठित भई
**कृतान्तान्तिकवर्ति** = मृत्युको नजिकमा रहने
**इदं** = यो
**जीवितं** = जीवनलाई
**अध्रुवं** = अनित्य हो भनेर
**न बुध्यते** = बुझ्दैन

**वाक्यार्थ–** त्यसैले म पनि सौभाग्यवश मोक्षदाता हजुरकै नजिकमा आइपुगेको छु। हजुर (मेरो शत्रु नभएर) स्थूलसूक्ष्म शरीरको शत्रु हुनुहन्छ। यसैले हजुरले कृपापूर्वक मलाई त्यो सम्पत्तिबाट अलग गराइदिनुभयो, जुन सम्पत्तिका कारण विवेकशून्य भएको व्यक्ति मृत्युको नजिकतिर गइरहेको यो जीवनलाई अनित्य (विनाशी) हो भनेर बुझ्न सक्दैन।

**विवरण–** माथिका भनाइहरूबाट बलिको भक्तिको विशेषता प्रकट भएको छ। धेरैजसो भक्तहरूको चरित्रमा उनीहरूले आफूलाई दीन-हीन एवं भगवान्लाई सर्वसमर्थ र दयानिधान भनेको पाइन्छ। उनीहरूको स्तुति एवं भावनाबाट उनीहरूमा केही शक्ति नभएकाले सर्वशक्तिमान् परमात्माको शरणमा आएको भाव व्यक्त हुन्छ। तर यहाँ बलि संसारको जीवनयुद्ध एक्लै लड्न सक्ने तागत भएका पात्रका रूपमा देखा परेका छन्। उनले भगवान्सँग केही भीख मागेका छैनन्, अपितु भगवान्लाई सम्पूर्ण संसार दान दिएका छन्। भगवान्बाट सहायता पाएर आफू बाँच्ने दाउमा उनी पटक्कै छैनन्, बरु भगवान्ले आफ्नो अभिमान चुर-चुर गरिदिएकोमा गर्वपूर्वक कृतज्ञता भने प्रकट गरेका छन्। उनी भन्छन् कि हे भगवान् ! मेरा हजुरबुबा प्रह्लादले अनेक आपत्तिहरूको बीचमा पनि सम्पूर्ण सांसारिक विषयहरूलाई त्यागेर हजुरको भक्ति गर्नुभएको थियो, म पनि हजुरले दिएको दण्डबाट सन्तुष्ट छु किनभने यसबाट हजुरले मलाई नदेखिने गरी राम्रो बाटो देखाउनुभएको छ। जीवन कति नै पो हुन्छ ? यसको निकट सधैँ काल घुमिरहन्छ, तर अभिमानी व्यक्ति यो कुरा नजानी सम्पूर्ण संसारलाई जित्ने धुनमा लाग्दछ। हजुरले मेरो अभिमान हटाइदिएर साह्रै राम्रो गर्नुभयो। बलिको भनाइको भङ्गिमाले उनीभित्रको आत्मविश्वास, समर्पण र कृतज्ञतालाई एकसाथ प्रकट गरेको छ। उनले भगवान्लाई **आत्मरिपुः** भनी सम्बोधन गरेका छन्। हुन पनि भगवान् बलिलाई छल्न उनको शत्रुकै भूमिकामा आउनुभएको थियो। शत्रुरूपमा आउँदा पनि के अरू कुनै भक्त भगवान्प्रति समर्पित भएको छ ? यसै कारणले बलिको समर्पणभावले विशेष महत्त्व राखेको छ भन्ने बुझ्नुपर्दछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तस्येत्थं भाषमाणस्य प्रह्लादो भगवत्प्रियः।**
**आजगाम कुरुश्रेष्ठ राकापतिरिवोत्थितः॥ १२॥**

**पदार्थ–**
**कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ परीक्षित्
**इत्थं** = यसप्रकार
**तस्य** = ती बलिले
**भाषमाणस्य** = बोल्दै गर्दा
**उत्थितः** = उदाएको
**राकापतिः इव** = पूर्णचन्द्र झैँ प्रकाशमान
**भगवत्प्रियः** = भगवान्का प्रिय भक्त
**प्रह्लादः** = प्रह्लाद
**आजगाम** = आइपुग्नुभयो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! यसप्रकार बलिले बोल्दै गर्दा भर्खर उदाएको पूर्णचन्द्र झैँ प्रकाशमान एवं भगवान् विष्णुका प्रिय भक्त प्रह्लाद आइपुग्नुभयो।

**तमिन्द्रसेनः स्वपितामहं श्रिया विराजमानं नलिनायतेक्षणम् ।**
**प्रांशुं पिशङ्गाम्बरमञ्जनत्विषं प्रलम्बबाहुं सुभगं समैक्षत ॥ १३ ॥**

**पदार्थ—**
**श्रिया** = कान्तिले
**विराजमानं** = शोभायमान
**नलिनायतेक्षणं** = कमलको फूल झैं फराकिला आँखा भएका
**प्रांशुं** = अग्लो अग्लो शरीर भएका
**पिशङ्गाम्बरं** = पीताम्बर धारण गरेका
**अञ्जनत्विषं** = गाजल झैं श्यामल वर्ण भएका
**प्रलम्बबाहुं** = लामा हात भएका
**सुभगं** = सुन्दर
**तं** = भर्खर आएका ती
**स्वपितामहं** = आफ्ना हजुरबा प्रह्लादलाई
**इन्द्रसेनः** = इन्द्रको समान सेना भएका बलिले
**समैक्षत** = देखे

**वाक्यार्थ—** कमलको फूल झैं विस्तीर्ण आँखा भएका, गाजल झैं श्यामल वर्णको अग्लो शरीरमा पीताम्बर धारण गरेका, लामा-लामा बाहु भएका एवं आफूतिर आइरहेका अत्यन्त सुन्दर आफ्ना हजुरबा प्रह्लादलाई इन्द्रको जस्तै सैन्यशक्ति भएका बलिले देखे।

**तस्मै बलिर्वारुणपाशयन्त्रितः समर्हणं नोपजहार पूर्ववत् ।**
**ननाम मूर्ध्नाश्रुविलोललोचनः सव्रीडनीचीनमुखो बभूव ह ॥ १४ ॥**

**पदार्थ—**
**वारुणपाशयन्त्रितः** = वरुणको पाशमा बाँधिएका
**बलिः** = बलिले
**तस्मै** = ती प्रह्लादलाई
**पूर्ववत्** = अघि-अघि जस्तो
**समर्हणं** = (अर्घ्य आदि चढाएर) पूजा
**न उपजहार** = गर्न सकेनन्
**मूर्ध्ना** = झुकेको शिरद्वारा
**ननाम** = नमस्कार गरे
**अश्रुविलोललोचनः** = आँसुले चञ्चल आँखा भएका बलि
**सव्रीडनीचीनमुखः** = लज्जाले मुख झुकाएका
**ह** = निश्चय नै
**बभूव** = भए

**वाक्यार्थ—** त्यस वेला वरुणको पाशमा बाँधिएका बलिले अघिका दिनहरूमा झैं हजुरबा प्रह्लादलाई अर्घ्य आदि चढाएर पूजा (स्वागतसत्कार) गर्न सकेनन्, केवल शिर झुकाएर नमस्कार गरे। त्यस अवस्थामा बलिको आँखा आँसुले भरिएर चञ्चल भएका थिए भने उनी लाजले मुख झुकाएर बसेका थिए।

**स तत्र हासीनमुदीक्ष्य सत्पतिं हरिं सुनन्दाद्यनुगैरुपासितम् ।**
**उपेत्य भूमौ शिरसा महामना ननाम मूर्ध्ना पुलकाश्रुविक्लवः ॥ १५ ॥**

**पदार्थ—**
**महामनाः** = महामनस्वी
**सः** = ती प्रह्लादले
**सुनन्दाद्यनुगैः** = सुनन्द, नन्द आदि पार्षदहरूद्वारा
**उपासितं** = सेवा गरिएका
**सत्पतिं** = भगवान्
**हरिं** = श्रीहरिलाई
**तत्र** = त्यहाँ

**आसीनं** = बस्नुभएको
**उदीक्ष्य** = देखेर
**ह** = निश्चय नै
**पुलकाश्रुविक्लवः** = रोमाञ्चित भई आँखामा आँसु आएर विह्वल भई
**शिरसा** = (झुकेको) शिरद्वारा
**उपेत्य** = वामनरूप भगवान्को नजिकमा गएर
**मूर्ध्ना** = शिरद्वारा
**भूमौ** = भुइँमा नै
**ननाम** = प्रणाम गरे

**वाक्यार्थ–** सुनन्द, नन्द आदि श्रेष्ठ पार्षदहरूद्वारा सेवा गरिएका भगवान् विष्णुलाई देख्नासाथ महामनस्वी प्रह्लाद रोमाञ्चित भई आँखामा आँसु भरिएर विह्वल हुनुभयो। त्यसपछि उहाँले शिर झुकाउँदै भगवान्को नजिकै गएर भूमिमा शिर राखेर प्रणाम गरे।

**प्रह्लाद उवाच** (प्रह्लादले भने)

**त्वयैव दत्तं पदमैन्द्रमूर्जितं हृतं तदेवाद्य तथैव शोभनम्।**
**मन्ये महानस्य कृतो ह्यनुग्रहो विभ्रंशितो यच्छ्रिय आत्ममोहनात्॥ १६॥**

**पदार्थ–**
**त्वया एव** = हजुरले नै (जसरी)
**ऊर्जितं** = समृद्ध
**ऐन्द्रं** = इन्द्रको
**पदं** = स्थान (स्वर्ग)
**दत्तं** = (बलिलाई) दिनुभयो
**तत्** = त्यही इन्द्रपद
**तथा एव** = त्यसरी नै
**अद्य** = आज
**हृतं** = फिर्ता पनि लिनुभयो
**शोभनम्** = राम्रो गर्नुभयो
**अस्य** = यी बलिमाथि
**हि** = निश्चय नै
**महान्** = ठुलो
**अनुग्रहः** = कृपा
**कृतः** = गर्नुभयो भनी
**मन्ये** = ठान्दछु
**यत्** = किनभने
**आत्ममोहनात्** = आत्मालाई मोहित पार्ने
**श्रियः** = सम्पत्तिरूप वस्तुबाट
**विभ्रंशितः** = बलिलाई हटाइदिनुभयो

**वाक्यार्थ–** हे भगवान् ! हजुरले नै बलिलाई समृद्ध इन्द्रपद प्रदान गर्नुभएको थियो भने आज त्यो सबै हजुरले नै फिर्ता लिएर राम्रो गर्नुभयो। यस कामद्वारा हजुरले बलिमाथि ठुलो कृपा गर्नुभएको छ किनभने हजुरले आत्मालाई मोहित पार्ने वस्तु (राजकीय सम्पत्ति र ऐश्वर्य)बाट बलिलाई हटाइदिनुभएको छ।

**यया हि विद्वानपि मुह्यते यतस्तत् को विचष्टे गतिमात्मनो यथा।**
**तस्मै नमस्ते जगदीश्वराय वै नारायणायाखिललोकसाक्षिणे॥ १७॥**

**पदार्थ–**
**यया** = जुन सम्पत्तिद्वारा
**विद्वान्** = विवेकी व्यक्ति
**यतः अपि** = संयमी भईकन पनि
**मुह्यते** = मोहित हुन्छ
**तत्** = त्यो सम्पत्ति हुँदा
**कः** = कसले
**आत्मनः** = आफ्नो स्वरूपको
**गतिं** = गति (तत्त्व)लाई
**यथा** = यथावत्रूपमा
**विचष्टे** = देख्न सक्दछ
**तस्मै** = त्यस्ता
**जगदीश्वराय** = सम्पूर्ण लोकका स्वामी
**अखिललोकसाक्षिणे** = सम्पूर्ण लोकका साक्षी
**नारायणाय** = नारायण
**ते** = हजुरलाई

| | |
|---|---|
| **वै** = निश्चय नै | **नमः** = नमस्कार गर्दछु |

**वाक्यार्थ–** हे नारायण ! आफैं संयमित हुने विवेकी व्यक्ति पनि सम्पत्तिद्वारा मोहित हुन्छ। सम्पत्तिरूप लक्ष्मी अगाडि प्राप्त छिन् भने कसले आफ्नो वास्तविक स्वरूप (आत्मतत्त्व)लाई यथावत् रूपमा जान्न सक्छ र? त्यसैले (बलिको त्यो राजलक्ष्मीलाई खोसिदिनुहुने) सम्पूर्ण लोकका स्वामी तथा सम्पूर्ण लोकका साक्षी हजुरलाई म नमस्कार गर्दछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तस्यानुशृण्वतो राजन् प्रह्लादस्य कृताञ्जलेः।**
**हिरण्यगर्भो भगवानुवाच मधुसूदनम्॥ १८॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **प्रह्लादस्य** = प्रह्लादको (भनाइ) | **मधुसूदनं** = मधु दैत्यका |
| **कृताञ्जलेः** = हात जोडेका | **अनुशृण्वतः** = सुनिरहनुभएका | विनाशक भगवान् हरि |
| **तस्य** = ती | **भगवान्** = भगवान् | (वामन)लाई |
| | **हिरण्यगर्भः** = ब्रह्माजीले | **उवाच** = भन्न लाग्नुभयो |

**वाक्यार्थ–** हे महाराज परीक्षित्! प्रह्लाद हात जोडेर आफ्ना भनाइहरू भगवान्लाई सुनाइरहनुभएको थियो त्यही वेला भगवान् ब्रह्माजीले पनि वामन भगवान्लाई केही कुरा भन्न लाग्नुभयो।

**बद्धं वीक्ष्य पतिं साध्वी तत्पत्नी भयविह्वला।**
**प्राञ्जलिः प्रणतोपेन्द्रं बभाषेऽवाङ्मुखी नृप॥ १९॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **नृप** = हे राजा परीक्षित् | **भयविह्वला** = डराएकी | **तत्पत्नी** = बलिकी पत्नी |
| **पतिं** = आफ्ना पतिलाई | **अवाङ्मुखी** = मुख निहुराएकी | विन्ध्यावलिले |
| **बद्धं** = वरुणपाशले बाँधिएका | **प्रणता** = भूमिमा झुकेर नमस्कार | **प्राञ्जलिः** = हात जोडेर |
| **वीक्ष्य** = देखेर | गरिरहेकी | **उपेन्द्रं** = भगवान् वामनलाई |
| | **साध्वी** = पतिव्रता | **बभाषे** = भन्न लागिन् |

**वाक्यार्थ–** हे परीक्षित् ! आफ्ना पतिलाई वरुणपाशले बाँधिएका देखेर भयभीत भएकी पतिव्रता विन्ध्यावलि (बलिकी पत्नी)ले लाजले मुख निहुराउँदै भूमिमा झुकेर भगवान् वामनलाई नमस्कार गरिन् र फेरि उठेर हात जोडी भगवान्लाई भन्न लागिन्। (ब्रह्माजी चाहिँ विन्ध्यावलिलाई सम्मान गर्न केही क्षण मौन नै बस्नुभयो)।

**विन्ध्यावलिरुवाच** (विन्ध्यावलिले भनिन्)

**क्रीडार्थमात्मन इदं त्रिजगत्कृतं ते**
**स्वाम्यं तु तत्र कुधियोऽपर ईश कुर्युः।**

**कर्तुः प्रभोस्तव किमस्यत आवहन्ति**

**त्यक्तह्रियस्त्वदवरोपितकर्तृवादाः ॥ २० ॥**

**पदार्थ–**
**ईश** = हे सर्वसमर्थ भगवान्
**आत्मनः** = आफ्नो
**क्रीडार्थम्** = क्रीडाका लागि
**इदं** = यो
**त्रिजगत्** = तीन लोकात्मक सम्पूर्ण जगत्
**कृतं** = बनाउनुभएको हो
**तत्र** = यो जगत्मा
**अपरे** = अरू कोही
**त्यक्तह्रियः** = लाज नभएका
**त्वदवरोपितकर्तृवादाः** = हजुरकै मायाका कारण आफैंलाई कर्ता मान्ने
**कुधियः** = कुबुद्धि भएका
**ते तु** = त्यस्ता व्यक्तिहरू चाहिँ
**स्वाम्यं** = पृथिवीमा सत्त्वबुद्धि
**कुर्युः** = गरिरहून्
**कर्तुः** = जगत्स्रष्टा
**प्रभोः** = जगत्पालक
**अस्यतः** = जगत्हर्ता
**तव** = हजुरलाई (तिनीहरूले)
**किं** = के
**आवहन्ति** = समर्पण गर्न सक्छन्

**वाक्यार्थ–** हे सर्वसमर्थ भगवान् ! हजुरले आफ्नो क्रीडाका लागि यो त्रिलोकात्मक सम्पूर्ण जगत्को सृष्टि गर्नुभएको हो। हजुरको क्रीडाभूमि भएको यो जगत्मा कोही-कोही त्यस्ता लाज नभएका मूर्खहरू छन् जो हजुरकै मायाका कारण वशीभूत भएर आफैंलाई जगत्को कर्ता ठान्दछन्। त्यस्ता मूर्खहरू यस जगत्मा सत्त्वबुद्धि गरी आफूलाई दाता ठानिरहून् तर यस जगत्को कर्ता, पालक र हर्ता भएका हजुरलाई ती मूर्खहरूले के दिन सक्छन् ? (दिने वस्तु नै छैन)।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**भूतभावन भूतेश देवदेव जगन्मय।**

**मुञ्चैनं हृतसर्वस्वं नायमर्हति निग्रहम् ॥ २१ ॥**

**पदार्थ–**
**भूतभावन** = हे प्राणीहरूका जीवनदाता
**भूतेश** = हे प्राणीहरूका मालिक
**देवदेव** = हे देवाधिदेव
**जगन्मय** = हे जगद्रूप भगवान्
**हृतसर्वस्वं** = सम्पूर्ण सम्पत्ति खोसिएका
**एनं** = यी बलिलाई
**मुञ्च** = छोडिदिनुहोस् (अब)
**अयं** = यी बलि
**निग्रहं** = दण्ड पाउन
**न अर्हति** = योग्य छैनन्

**वाक्यार्थ–** हे प्राणीहरूका जीवनदाता, स्वामी र देवाधिदेव भगवान् ! सम्पूर्ण सम्पत्ति खोसिएका यी बलिलाई छाडिदिनुहोस्। अब बलि दण्ड पाउन योग्य छैनन्।

**कृत्स्ना तेऽनेन दत्ता भूर्लोकाः कर्मार्जिताश्च ये।**

**निवेदितं च सर्वस्वमात्माविक्लवया धिया ॥ २२ ॥**

**पदार्थ–**
**अविक्लवया** = स्थिर
**धिया** = बुद्धिद्वारा
**अनेन** = यी बलिद्वारा
**कृत्स्ना** = सम्पूर्ण
**भूः** = पृथिवी

**ये** = जुन
**कर्मार्जिताः** = कर्मद्वारा प्राप्त
**लोकाः च** = स्वर्ग आदि
लोकहरू पनि छन्
**ते** = ती सबै
**दत्ताः** = हजुरलाई दिइएका छन्
**आत्मा** = शरीर
**सर्वस्वं च** = सम्पूर्ण सम्पत्ति
पनि
**निवेदितं** = चढाइएको छ

**वाक्यार्थ–** स्थिर बुद्धि भएका बलिले सम्पूर्ण पृथिवी, आफ्नो कर्मद्वारा प्राप्त सम्पूर्ण सम्पत्ति एवं स्वर्ग आदि लोकहरू अनि आफ्नै शरीर समेत हजुरलाई चढाइसकेका छन्।

**यत्पादयोरशठधीः सलिलं प्रदाय**
**दूर्वाङ्कुरैरपि विधाय सतीं सपर्याम्।**
**अप्युत्तमां गतिमसौ भजते त्रिलोकीं**
**दाश्वानविक्लवमनाः कथमार्तिमृच्छेत्॥ २३॥**

**पदार्थ–**
**अशठधीः** = निष्कपट भाव
भएको व्यक्तिले
**यत्पादयोः** = जुन हजुरको
चरणकमलमा
**सलिलं** = अर्घ्यजल
**प्रदाय** = समर्पण गरेर
**दूर्वाङ्कुरैः अपि** = दुबोको
अङ्कुरद्वारा पनि
**सतीं** = राम्रो
**सपर्यां** = पूजा
**विधाय अपि** = गरेर पनि
**उत्तमां** = वैकुण्ठ आदि उत्तम
**गतिं** = गति
**भजते** = प्राप्त गर्दछ
**असौ** = यी बलिले त
**अविक्लवमनाः** = निश्चल मनले
(हजुरलाई)
**त्रिलोकीं** = तीनै लोक
**दाश्वान्** = चढाएका छन्, अतः
**कथं** = कसरी
**आर्तिं** = दुःख
**ऋच्छेत्** = पाउन सक्छन्

**वाक्यार्थ–** हे देवाधिदेव ! निष्कपट भाव भएको व्यक्तिले हजुरको चरणकमलमा अर्घ्यजल अथवा दूर्वाङ्कुर नै भए पनि भक्तिपूर्वक चढाएर पूजा गर्दछ भने उसले वैकुण्ठ आदि उत्तम लोकको गति प्राप्त गर्दछ। यी बलिले त निश्चल मनले तीनै लोक हजुरलाई समर्पण गरेका छन् भने अब कसरी यिनले दुःख पाउन सक्छन् ?

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**ब्रह्मन् यमनुगृह्णामि तद्विशो विधुनोम्यहम्।**
**यन्मदः पुरुषः स्तब्धो लोकं मां चावमन्यते॥ २४॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मदेव
**अहं** = म
**यं** = जसलाई
**अनुगृह्णामि** = अनुग्रह गर्न
चाहन्छु
**तद्विशः** = त्यसको सम्पत्ति
**विधुनोमि** = खोस्दछु
**यन्मदः** = जुन धनादिजन्य
मदका कारण
**स्तब्धः** = शिष्टताहीन भएको
**पुरुषः** = व्यक्तिले

**लोकं** = प्राणीहरू र
**मां च** = मलाई पनि
**अवमन्यते** = तिरस्कार गर्दछ

**वाक्यार्थ–** हे ब्रह्मदेव ! म जसलाई अनुग्रह गर्न चाहन्छु, त्यसका सम्पूर्ण धनहरू खोसेर लिन्छु किनभने मानिस त्यही धनका कारण मदोन्मत्त भई शिष्टताहीन बन्दछ र अरू प्राणीहरू र मलाई समेत तिरस्कार गर्दछ।

**यदा कदाचिज्जीवात्मा संसरन्निजकर्मभिः।**
**नानायोनिष्वनीशोऽयं पौरुषीं गतिमाव्रजेत्॥ २५॥**

**पदार्थ–**
**अनीशः** = असमर्थ (कर्मको वशीभूत भएको)
**अयं** = यो
**जीवात्मा** = जीव
**निजकर्मभिः** = आफ्नै कर्मद्वारा
**नानायोनिषु** = अनेक प्रकारका योनिहरूमा
**संसरन्** = घुम्दै
**यदा कदाचित्** = जुनसुकै समयमा (शुभ कर्मको परिपाक भएपछि)
**पौरुषीं** = मनुष्यको
**गतिं** = जन्म
**आव्रजेत्** = प्राप्त गर्दछ

**वाक्यार्थ–** कर्मको अधीनमा भएको जीवात्मा आफ्नो कर्मअनुसार कीटपतङ्ग आदि विभिन्न प्रकारका योनिहरूमा घुमिरहन्छ। जब उसको शुभ कर्मको परिपाक हुन्छ, तब मात्र उसले मनुष्यजन्म प्राप्त गर्दछ।

**जन्मकर्मवयोरूपविद्यैश्वर्यधनादिभिः।**
**यद्यस्य न भवेत् स्तम्भस्तत्रायं मदनुग्रहः॥ २६॥**

**पदार्थ–**
**तत्र** = मनुष्य शरीर प्राप्ति भएको वेला
**यदि** = यदि
**अस्य** = यस जीवात्मालाई
**जन्मकर्मवयोरूपविद्यैश्वर्यधनादिभिः** = जन्म, कर्म, उमेर, रूप, विद्या, ऐश्वर्य र धन आदिद्वारा
**स्तम्भः** = घमन्ड
**न भवेत्** = भएन भने
**अयं** = यो घमन्ड नहुनु
**मदनुग्रहः** = मेरो कृपा हो

**वाक्यार्थ–** मनुष्यजन्म प्राप्त गरेको व्यक्तिमा यदि जन्म, कर्म, उमेर, रूप, विद्या, ऐश्वर्य र धन आदिका कारण घमन्ड हुँदैन भने त्यो मेरो अनुग्रह हो।

**मानस्तम्भनिमित्तानां जन्मादीनां समन्ततः।**
**सर्वश्रेयःप्रतीपानां हन्त मुह्येन्न मत्परः॥ २७॥**

**पदार्थ–**
**मानस्तम्भनिमित्तानां** = घमन्ड र अशिष्टताको कारण भएको
**समन्ततः** = सबैतिरबाट
**सर्वश्रेयःप्रतीपानां** = सम्पूर्ण कल्याणहरूको नाश गर्ने
**जन्मादीनां** = जन्म, कर्म आदिद्वारा
**हन्त** = निश्चय नै
**मत्परः** = मेरो भक्त
**न मुह्येत्** = मोहित हुँदैन

**वाक्यार्थ–** घमन्ड र अशिष्टताको कारण भएको र सम्पूर्ण कल्याणहरूको नाश गर्ने जन्म, कर्म आदिद्वारा मेरो भक्त मोहित हुँदैन र ऊ यिनीहरूमा घमन्ड पनि गर्दैन।

**एष दानवदैत्यानामग्रणीः कीर्तिवर्धनः।**
**अजैषीदजयां मायां सीदन्नपि न मुह्यति ॥ २८ ॥**

पदार्थ–
**दानवदैत्यानां** = दानव र दैत्यहरूका
**अग्रणीः** = अधिपति
**कीर्तिवर्धनः** = कीर्ति बढाएका
**एषः** = यी बलिले
**अजयां** = अजेय
**मायां** = मेरो मायालाई
**अजैषीत्** = जिते (किनभने)
**सीदन् अपि** = दुःख पाएर पनि
**न मुह्यति** = मोहित भएका छैनन्

**वाक्यार्थ–** दानव र दैत्यहरूका अधिपति यी बलिले मेरो अजेय मायालाई समेत जित्न सके किनभने दुःख पाएर (सर्वस्व खोसिएर) पनि यिनी मोहित भएका छैनन्।

**क्षीणरिक्थश्च्युतः स्थानात् क्षिप्तो बद्धश्च शत्रुभिः।**
**ज्ञातिभिश्च परित्यक्तो यातनामनुयापितः ॥ २९ ॥**
**गुरुणा भर्त्सितः शप्तो जहौ सत्यं न सुव्रतः।**
**छलैरुक्तो मया धर्मो नायं त्यजति सत्यवाक् ॥ ३० ॥**

पदार्थ–
**क्षीणरिक्थः** = धन क्षय भएका
**स्थानात्** = तीनै लोकको आधिपत्यबाट
**च्युतः** = भ्रष्ट भएका
**शत्रुभिः** = शत्रुहरूद्वारा
**क्षिप्तः** = तिरस्कृत गरिएका
**बद्धः च** = बाँधिएका
**ज्ञातिभिः च** = आफन्तहरूद्वारा पनि
**परित्यक्तः** = त्यागिएका
**यातनां** = यातना
**अनुयापितः** = प्राप्त गरेका
**गुरुणा** = गुरु शुक्राचार्यद्वारा
**भर्त्सितः** = हप्काइएका
**शप्तः** = श्राप दिइएका (तापनि)
**सुव्रतः** = आफ्नो विचारमा दृढ बलिले
**सत्यं** = सत्यलाई
**न जहौ** = त्यागेनन्
**मया** = मैले
**छलैः** = छलपूर्वक
**धर्मः** = धर्म
**उक्तः** = बताएँ (तापनि)
**अयं** = यी
**सत्यवाक्** = सत्यवादी बलिले
**न त्यजति** = धर्म त्यागेनन्

**वाक्यार्थ–** धन खोसिएका, तीनै लोकको आधिपत्यबाट भ्रष्ट गराइएका, शत्रुको वचनद्वारा तिरस्कृत भएका, वरुणपाशद्वारा बाँधिएका, आफन्तजनबाट त्यागिएका, अनेक यातना पाएका एवं गुरु शुक्राचार्यबाट गाली र श्राप पाए पनि आफ्नो विचारमा दृढ भएर रहेका बलिले सत्यलाई त्यागेनन्। मैले छलपूर्वक धर्मको उपदेश गर्दा पनि सत्यवादी बलिले आफ्नो धर्म त्यागेनन्।

**विवरण–** माथिका तीन श्लोकमा भगवान्ले ब्रह्माजीको अघि बलिको प्रशंसा गर्नुभएको छ। भगवान् आफ्ना भक्तहरूलाई कठिन परीक्षामा रगड्नुहुन्छ, अनि मात्र तिनलाई स्विकार्नुहुन्छ। यहाँ भगवान्ले पनि कठिन परीक्षापछि मात्र बलिलाई श्रेष्ठ भक्त भनी स्वीकार गर्नुभएको छ। परम

कृपालु परमात्माले बलिलाई त्रिलोकविजयी मात्र होइन जो-कोहीले जित्न नसक्ने मायालाई नै जितिदिने व्यक्ति बनाउन चाहनुभएको थियो भन्ने कुरा उहाँको भनाइबाट प्रकट भएको छ। विभिन्न आपत्ति र आक्षेपको बीचमा पनि जो व्यक्ति अटल भएर रहन्छ, त्यो नै उत्तम भक्त हो। सामान्य मानिसहरू त थोरै प्रतिकूलतामा पनि भक्तिलाई त्यागिदिन तयार हुन्छन्। सर्वप्रथम त बलिको सम्पत्ति नष्ट गरियो, उनलाई गाली गरियो अनि पाशले बाँधियो। यी सबै काम गर्ने भगवान् नै हुनुहुन्थ्यो। तैपनि बलिमा भगवान्प्रति द्वेषभाव देखिएन। भगवान्प्रति समर्पित हुन लागेकैले गर्दा आफन्तहरूले उनलाई त्यागिदिए। बलि त्यो मूल्य चुकाउन पनि तयार भए। अरू उनका गुरु शुक्राचार्यले श्राप नै दिए, तैपनि उनले परमात्मालाई छाडेनन्। उनी सम्पत्ति, इष्टमित्र, गुरु, राज्य आदि सबैलाई छोड्न तयार भए, तर परमात्मालाई छोड्न तयार भएनन्। सन्तहरू के भन्छन् भने जसले परमात्मालाई प्रथम आवश्यकताका रूपमा स्थान नदिई व्यवहारभन्दा दोस्रो स्थान दिन्छ, त्यसले परमात्मालाई कुनै स्थान दिएको ठहर्दैन। सम्पूर्ण पारिवारिक प्रतिकूलताको बीच पनि बलिले गरेको अटुट धैर्य र उनको समर्पणको भगवान्ले स्पष्ट शब्दमा प्रशंसा गर्नुभएको छ।

**एष मे प्रापितः स्थानं दुष्प्रापममरैरपि।**
**सावर्णेरन्तरस्यायं भवितेन्द्रो मदाश्रयः॥ ३१॥**

**पदार्थ–**
**मदाश्रयः** = म नै एक मात्र आश्रय भएका
**एषः** = यी बलि
**मे** = मद्वारा
**अमरैः अपि** = देवताहरूद्वारा पनि
**दुष्प्रापं** = पाउन कठिन हुने
**स्थानं** = स्थानमा
**प्रापितः** = पुऱ्याइएका छन्
**अयं** = यी बलि
**सावर्णेः** = सावर्णि
**अन्तरस्य** = मन्वन्तरमा
**इन्द्रः** = इन्द्र
**भविता** = हुनेछन्

**वाक्यार्थ–** मलाई मात्र आश्रय बनाएका यी बलिलाई देवताहरूले पनि सजिलै प्राप्त गर्न नसक्ने ठाउँ प्रदान गरेको छु। यिनी सावर्णि मन्वन्तरमा इन्द्र हुनेछन्।

**तावत् सुतलमध्यास्तां विश्वकर्मविनिर्मितम्।**
**यन्नाधयो व्याधयश्च क्लमस्तन्द्रा पराभवः।**
**नोपसर्गा निवसतां सम्भवन्ति ममेक्षया॥ ३२॥**

**पदार्थ–**
**तावत्** = सावर्णि मन्वन्तर नआउन्जेल (यिनी)
**विश्वकर्मविनिर्मितं** = विश्वकर्माद्वारा रचना गरिएको
**सुतलं** = सुतलमा
**अध्यास्तां** = बसून्
**यत्** = जहाँ
**निवसतां** = बस्ने व्यक्तिहरूलाई
**मम** = मेरो
**इच्छया** = इच्छाद्वारा
**आधयः** = मनोरोग
**व्याधयः च** = शारीरिक रोग
**क्लमः** = थकाइ
**तन्द्रा** = आलस्य

**पराभवः** = पराजय
**न सम्भवन्ति** = हुँदैनन्
**उपसर्गाः च** = विघ्नहरू पनि
**न** = हुँदैनन्

**वाक्यार्थ–** त्यसैले सावर्णि मन्वन्तर नआउन्जेल यिनी विश्वकर्माले बनाएको सुतल लोकमा गएर बसून्। मेरो कृपादृष्टिका कारण त्यहाँ बस्ने व्यक्तिहरूलाई मनोरोग, शारीरिक रोग, थकाइ, आलस्य, शत्रुबाट हुने पराजय र कुनै पनि प्रकारका विघ्नहरू हुँदैनन्।

**इन्द्रसेन महाराज याहि भो भद्रमस्तु ते।**
**सुतलं स्वर्गिभिः प्रार्थ्यं ज्ञातिभिः परिवारितः॥ ३३॥**

**पदार्थ–**
**इन्द्रसेन** = इन्द्रपद प्राप्त गरेका
**भो महाराज** = हे महाराज बलि
**ज्ञातिभिः** = आफन्तजनहरूले
**परिवारितः** = युक्त भई
**स्वर्गिभिः** = स्वर्गलोकमा बस्ने देवताहरूद्वारा पनि
**प्रार्थ्यं** = प्राप्त गर्न खोजिने
**सुतलं** = सुतल लोकमा
**याहि** = जाऊ (त्यहाँ)
**ते** = तिम्रो
**भद्रं** = कल्याण
**अस्तु** = होस्

**वाक्यार्थ–** (बलिलाई सम्बोधन गरेर भगवान् भन्नुहुन्छ) इन्द्रपद समेत प्राप्त गरेका हे महाराज बलि ! तिमी आफ्ना सम्पूर्ण आफन्तहरूलाई लिएर देवताहरूद्वारा पनि प्राप्त गर्न खोजिने सुतललोकमा जाऊ, त्यहाँ तिम्रो कल्याण होस्।

**न त्वामभिभविष्यन्ति लोकेशाः किमुतापरे।**
**त्वच्छासनातिगान् दैत्यांश्चक्रं मे सूदयिष्यति॥ ३४॥**

**पदार्थ–**
**लोकेशाः** = लोकपालहरूले पनि
**त्वां** = सुतलमा बसेका तिमीलाई
**न अभिभविष्यन्ति** = पराजित गर्न सक्ने छैनन्
**अपरे** = अरूको त
**किम् उत** = के कुरा गर्नु
**त्वच्छासनातिगान्** = तिम्रो शासनलाई अतिक्रमण गर्ने
**दैत्यान्** = दैत्यहरूलाई
**मे** = मेरो
**चक्रं** = चक्रले
**सूदयिष्यति** = मार्नेछ

**वाक्यार्थ–** सुतलमा बसेको समयमा तिमीलाई लोकपालहरूले पनि पराजित गर्न सक्ने छैनन्। अरूको त के कुरा ? तिम्रो शासनलाई अतिक्रमण गर्ने दैत्यहरूलाई मेरो चक्रले मारिदिनेछ।

**रक्षिष्ये सर्वतोऽहं त्वां सानुगं सपरिच्छदम्।**
**सदा सन्निहितं वीर तत्र मां द्रक्ष्यते भवान्॥ ३५॥**

**पदार्थ–**
**वीर** = हे वीर बलि
**अहं** = म
**सर्वतः** = सम्पूर्ण विघ्नहरूबाट
**सानुगं** = अनुचरले सहित
**सपरिच्छदं** = भोगका साधनहरूले सहित
**त्वां** = तिमीलाई
**रक्षिष्ये** = रक्षा गर्नेछु

**तत्र** = त्यस सुतलमा
**भवान्** = तिमीले
**मां** = मलाई
**सदा** = सधैँ
**सन्निहितं** = नजिकमा (ढोकामा)
**द्रक्ष्यते** = देख्नेछौ

**वाक्यार्थ–** हे वीर बलि ! म तिम्रा सम्पूर्ण अनुचर र भोगसाधनले सहित तिमीलाई पनि विघ्नहरूबाट रक्षा गर्नेछु। त्यस सुतलमा सधैँ तिमीले मलाई आफ्नै नजिकमा (ढोकामा) देख्न पाउनेछौ।

**तत्र दानवदैत्यानां सङ्गात् ते भाव आसुरः।**
**दृष्ट्वा मदनुभावं वै सद्यः कुण्ठो विनङ्क्ष्यति॥ ३६॥**

**पदार्थ–**
**दानवदैत्यानां** = दानव र दैत्यहरूको
**सङ्गात्** = संसर्गबाट
**ते** = तिम्रो
**आसुरः** = असुरसम्बन्धी
**भावः** = भाव छ (त्यो)
**तत्र** = त्यस सुतल लोकमा
**मदनुभावं** = मेरो प्रभावलाई
**दृष्ट्वा** = देखेर
**वै** = निश्चय नै
**कुण्ठः** = दमित भई
**सद्यः** = तुरुन्त
**विनङ्क्ष्यति** = नष्ट हुनेछ

**वाक्यार्थ–** दानव र दैत्यहरूसँगको संसर्गका कारण तिमीमा रहेको जुन आसुरभाव छ त्यो पनि सुतललोकमा मेरो प्रभावलाई देखेर दमित भई तुरुन्त नष्ट हुनेछ।

**विवरण–** माथिका चार श्लोकमा भगवान्ले बलिलाई सम्बोधन गरी उनलाई सुतल लोकमा रहन आज्ञा दिनुभएको छ। भगवान्को लीला पनि विचित्र छ। जुन वेला बलि तीनै लोकका राजा थिए, त्यो वेला उहाँ बलिको विरोधी बनेर आउनुभयो। अब जब बलि निष्किञ्चन बनेका छन् तब उहाँ बलिलाई **महाराज** भनी सम्बोधन गर्नुहुन्छ। आफ्ना परिवारसहित सुतलमा रहँदा तिमीलाई मैले नै द्वारपाल भई रक्षा गर्नेछु र कुनै लोकपालले पनि तिमीमाथि दुर्भावना राख्न सक्ने छैनन् भनी भगवान्ले बताउनुभएको छ। त्यहाँ दानवहरूसँग बस्दा फेरि दानवी स्वभावले मलाई हजुरबाट विमुख बनाउला नि ? भन्ने बलिको मनभित्रकै आशङ्कालाई जानी भगवान् उत्तर दिनुहुन्छ कि हे बलि ! त्यहाँ तिम्रो मनमा असुरहरूको सङ्गतद्वारा जुन अलि–अलि दुर्भाव उत्पन्न हुन्छ, त्यो मलाई देख्नाले नष्ट भइहाल्छ। सर्वसमर्थ परमात्माले बलिले जहिले चाहन्छन् तैले देखिने गरी उनको अनुचर भई रहनु बलिको लागि सानो सम्मान र गौरवको कुरा थिएन। भगवान्ले आफ्ना भक्तहरूको गौरवलाई कहिले पनि तिरस्कार गर्नुहुन्न। असुरराज बलिलाई उहाँले अकिञ्चन त बनाइदिनुभयो, तर आफैँलाई समेत सुम्पी फेरि अनन्त सम्पदाको मालिक बनाइदिनुभयो। अरू कुनै भक्तको लागि भगवान्ले सेवकको रूप लिएको कुनै चरित्रमा सुनिँदैन। वास्तवमा बलिको आत्मनिवेदनको यही विशेषता हो कि यसबाट भगवान् उनैको सेवक बन्नुभएको छ। भगवान्बाट केही पाउने इच्छा नराखी आफ्नो सम्पूर्ण वस्तु उहाँमा अर्पण गर्ने र अकिञ्चन भई मग्न रहने भक्तहरू भगवान्लाई पनि सेवक बनाउन सक्छन्। बलिको जीवनमा भगवान्को कृपा समुद्रको छाल जस्तो बनेर आएको छ। समुद्रको छालले पहिले त नजिकको चट्टानलाई फुटाउनै खोजे झैँ

झ्याप्पै आक्रमण गर्छ, तर जब त्यस प्रहारद्वारा पनि चट्टानलाई केही हुँदैन तब त्यो छालले सललल बगी त्यही चट्टानकै चरण पखाल्न पुग्छ। भगवान्ले पनि बलिको धैर्यलाई फुटाउने गरी सर्वस्व नै उनबाट खिच्नुभयो, बलि त्यसबाट अविचलित भएपछि उहाँ बलिकै सेवक भई सुतलमा गई रहनुभयो। यसरी यस प्रसङ्गले भगवान्ले भक्तमाथि गर्ने हदैसम्मको परीक्षा र पछि गर्ने अनन्त कृपा दुबैलाई देखाएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**वामनप्रादुर्भावे बलिवामनसंवादो नाम द्वाविंशोऽध्यायः ॥ २२ ॥**

# अथ त्रयोविंशोऽध्यायः

## बन्धनमुक्त भएपछि बलि सुतल लोक जानु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्तवन्तं पुरुषं पुरातनं महानुभावोऽखिलसाधुसम्मतः ।**
**बद्धाञ्जलिर्बाष्पकलाकुलेक्षणो भक्त्युद्गलो गद्गदया गिराब्रवीत् ॥ १ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**उक्तवन्तं** = बोलिसक्नुभएका
**पुरातनं** = सनातन
**पुरुषं** = पुरुष वामन भगवान्लाई
**महानुभावः** = महानुभाव
**अखिलसाधुसम्मतः** = लोकमा सम्पूर्ण सज्जनहरूद्वारा प्रशंसित
**बाष्पकलाकुलेक्षणः** = आँसुका थोपाहरूले भिजेको आँखा भएका
**भक्त्युद्गलः** = भक्तिभावका कारण गला अवरुद्ध भएका
**बद्धाञ्जलिः** = हात जोडेर बसेका बलिले
**गद्गदया** = गद्गद भएको
**गिरा** = वाणीले
**अब्रवीत्** = भने

**वाक्यार्थ–** यसरी सनातन पुरुष भगवान् वामनले भन्नुभएपछि लोकमा सज्जनहरूद्वारा प्रशंसित महानुभाव बलिका आँखा आँसुले भिजे। प्रबल भक्तिभावका कारण गला अवरुद्ध भएका उनले हात जोडेर र हर्षले गद्गद भएको वाणीद्वारा भगवान्लाई भने।

**बलिरुवाच** (बलिले भने)

**अहो प्रणामाय कृतः समुद्यमः प्रपन्नभक्तार्थविधौ समाहितः ।**
**यल्लोकपालैस्त्वदनुग्रहोऽमरैरलब्धपूर्वोऽपसदेऽसुरेऽर्पितः ॥ २ ॥**

**पदार्थ–**
**अहो** = अहो
**प्रणामाय** = नमस्कारका लागि
**कृतः** = गरिएको
**समुद्यमः** = मेरो प्रयासले नै
**प्रपन्नभक्तार्थविधौ** = शरणमा आएका भक्तहरूलाई दिइने पुरुषार्थको प्राप्तिमा
**समाहितः** = मलाई पनि राखियो
**यत्** = जुन प्रयासका कारण
**लोकपालैः** = लोकपाल
**अमरैः** = देवताहरूद्वारा पनि
**अलब्धपूर्वः** = अगाडि कहिल्यै प्राप्त नगरिएको
**त्वदनुग्रहः** = हजुरको अनुग्रह
**अपसदे** = नीच
**असुरे** = म असुरमा
**अर्पितः** = अर्पण गरियो

**वाक्यार्थ–** अहो ! हजुरलाई गरिने नमस्कारका लागि गरिएको प्रयासद्वारा मात्र मलाई यस्तो पुरुषार्थको प्राप्ति भयो, जो हजुरको शरणमा आएका भक्तहरूले मात्र प्राप्त गर्दछन्। हजुरलाई भक्तिपूर्वक नमस्कार गरेर लोकपालहरू र देवताहरूले पनि प्राप्त गर्न नसक्ने हजुरको अनुग्रह आज मजस्तो नीच असुरलाई प्राप्त भयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्त्वा हरिमानम्य ब्रह्माणं सभवं ततः।**

**विवेश सुतलं प्रीतो बलिर्मुक्तः सहासुरैः॥ ३॥**

**पदार्थ–**
**इति** = यति कुरा (प्रार्थना)
**उक्त्वा** = भनेर
**मुक्तः** = पाशमुक्त भएका
**बलिः** = बलि
**प्रीतः** = अति प्रसन्न भई
**हरिं** = वामनरूप भगवान्लाई
**ततः** = त्यसपछि
**सभवं** = शिवजीले सहित भएका
**ब्रह्माणं** = ब्रह्माजीलाई
**आनम्य** = नमस्कार गरेर
**असुरैः सह** = सम्पूर्ण असुरले सहित भएर
**सुतलं** = सुतलमा
**विवेश** = प्रवेश गरे

**वाक्यार्थ–** यस्तो प्रार्थना गरिसेकपछि पाशबाट मुक्त भएका बलिले अति प्रसन्न भई वामनरूप भगवान् श्रीहरिलाई, ब्रह्माजीलाई र शङ्करजीलाई सादर नमस्कार गरे र सम्पूर्ण असुरहरूलाई साथमा लिई सुतल लोकमा प्रवेश गरे।

**एवमिन्द्राय भगवान् प्रत्यानीय त्रिविष्टपम्।**

**पूरयित्वादितेः काममशासत् सकलं जगत्॥ ४॥**

**पदार्थ–**
**एवम्** = यसरी बलिबाट खोसिएको
**त्रिविष्टपम्** = स्वर्ग
**इन्द्राय** = इन्द्रलाई
**प्रत्यानीय** = फर्काएर
**अदितेः** = अदितिको
**कामं** = इच्छालाई
**पूरयित्वा** = पूर्ण गराई
**भगवान्** = भगवान् नारायणले
**सकलं** = सम्पूर्ण
**जगत्** = जगत्लाई
**अशासत्** = पालन गर्नुभयो

**वाक्यार्थ–** यसरी भगवान् नारायणले बलिबाट खोसिएको स्वर्गलोक इन्द्रलाई फर्काएर देवमाता अदितिको मनोरथ पूर्ण गर्नुभयो र सम्पूर्ण जगत्को पालन गर्नुभयो।

**लब्धप्रसादं निर्मुक्तं पौत्रं वंशधरं बलिम्।**

**निशाम्य भक्तिप्रवणः प्रह्लाद इदमब्रवीत्॥ ५॥**

**पदार्थ–**
**भक्तिप्रवणः** = भक्ति गर्न तत्पर
**प्रह्लादः** = प्रह्लादले
**लब्धप्रसादं** = भगवान्को अनुग्रह पाएका
**निर्मुक्तं** = पाशमुक्त
**वंशधरं** = आफ्नो वंशलाई निरन्तरता दिने
**पौत्रं** = नाति
**बलिम्** = बलिलाई
**निशाम्य** = देखेर
**इदं** = यसो
**अब्रवीत्** = भने

**वाक्यार्थ–** भगवान्को भक्ति गर्न सदा तत्पर रहने प्रह्लादले आफ्नो वंशलाई बढाउने नाति बलिले भगवान्को अनुग्रह प्राप्त गरेको र उनी वरुणपाशबाट पनि मुक्त भएको देखेर भने।

**प्रह्लाद उवाच** (प्रह्लादले भने)

**नेमं विरिञ्चो लभते प्रसादं न श्रीर्न शर्वः किमुतापरे ते।**

**यन्नोऽसुराणामसि दुर्गपालो विश्वाभिवन्द्यैरपि वन्दिताङ्घ्रिः॥ ६॥**

**पदार्थ–**
**विश्वाभिवन्द्यैः अपि** = सम्पूर्ण जगत्का पूज्य ब्रह्मा आदि देवताहरूद्वारा पनि
**वन्दिताङ्घ्रिः** = चरणको वन्दना गरिएका हजुर
**नः** = हामी
**असुराणां** = असुरहरूको
**दुर्गपालः** = किल्लाको रक्षक
**असि** = हुनुभएको छ
**यत् इमं** = जुन यो
**प्रसादं** = हजुरको प्रसन्नता
**विरिञ्चः** = ब्रह्माजीले
**न लभते** = पाउनुभएको छैन
**श्रीः** = लक्ष्मीजीले
**न** = पाउनुभएको छैन
**शर्वः** = शङ्करले पनि
**न** = पाउनुभएको छैन
**उत अपरे** = अरू
**ते** = ती इन्द्र आदि देवताहरूले पनि पाएनन् भनी
**किम्** = के भनिरहनु

**वाक्यार्थ–** सम्पूर्ण जगत्का पूज्य ब्रह्मा आदि देवताहरूद्वारा पनि चरणकमलको वन्दना गरिएका हजुर हामीजस्ता असुरहरूको रक्षक हुनुभएको छ। हजुरबाट यस्तो अपूर्व प्रसाद ब्रह्माजीले, शङ्करजीले र स्वयं माता लक्ष्मीजीले पनि प्राप्त गर्नुभएको छैन भने अरू इन्द्र आदि देवताहरूको त के कुरा गर्नु ?

**यत्पादपद्ममकरन्दनिषेवणेन**

**ब्रह्मादयः शरणदाश्नुवते विभूतीः।**

**कस्माद् वयं कुसृतयः खलयोनयस्ते**

**दाक्षिण्यदृष्टिपदवीं भवतः प्रणीताः॥ ७॥**

**पदार्थ–**
**शरणद** = हे आश्रयदाता
**ब्रह्मादयः** = ब्रह्मा आदि देवताहरूले
**यत्पादपद्ममकरन्दनिषेवणेन** = जसको चरणकमलको पुष्परसको सेवनद्वारा
**विभूतीः** = सृष्टि, स्थिति, लय आदि काम गर्ने सामर्थ्य
**अश्नुवते** = प्राप्त गर्नुहुन्छ
**भवतः** = त्यस्ता हजुरको
**कुसृतयः** = दुराचारी
**खलयोनयः** = उग्र असुर जातिमा उत्पन्न भएका
**ते वयं** = त्यस्ता हामीहरू
**दाक्षिण्यदृष्टिपदवीं** = अनुग्रहणपूर्ण दृष्टिपथमा
**कस्मात्** = कसरी
**प्रणीताः** = प्राप्त भयौँ

**वाक्यार्थ–** हे आश्रयदाता ! हजुरको चरणकमलको पुष्परसको सेवनद्वारा नै ब्रह्मा आदि देवताहरूले जगत्को सृष्टि, स्थिति, लय आदि कामहरू गर्ने सामर्थ्य प्राप्त गर्नुहुन्छ। त्यस्ता अनन्त महिमाले सम्पन्न हजुरको कृपादृष्टिमा हामी दुराचारी र स्वभावैले उग्र असुरजातिमा उत्पन्न भएकाहरू कसरी पर्न सक्यौँ ?

**चित्रं तवेहितमहोऽमितयोगमाया-**
**लीलाविसृष्टभुवनस्य विशारदस्य ।**
**सर्वात्मनः समदृशो विषमः स्वभावो**
**भक्तप्रियो यदसि कल्पतरुस्वभावः ॥ ८ ॥**

**पदार्थ—**
**अमितयोगमायालीलाविसृष्ट-भुवनस्य** = अचिन्त्य योगमायाको लीलाद्वारा सम्पूर्ण लोकको सृष्टि गर्न
**विशारदस्य** = निपुण
**सर्वात्मनः** = सर्वात्मा
**समदृशः** = समदर्शी हजुरको
**विषमः** = पक्षपातपूर्ण
**स्वभावः** = स्वभाव छ
**इति** = यस प्रकारको
**तव** = हजुरको
**ईहितं** = चेष्टा
**अहो** = आश्चर्य
**चित्रं** = विचित्र छ
**यत्** = किनभने
**कल्पतरुस्वभावः** = कल्पवृक्ष झैं समस्वभाववाला भएकाले
**भक्तप्रियः** = भक्तहरूका प्रिय
**असि** = हुनुहुन्छ (र भक्तकै मनोरथ पूर्ण गर्नुहुन्छ)

**वाक्यार्थ—** हे भगवान् ! आफ्नो अचिन्त्य शक्ति भएको योगमायाको लीलाद्वारा सम्पूर्ण लोकको सृष्टि गर्न निपुण हजुर सर्वात्मा र समदर्शी हुनुहुन्छ। तापनि हजुरको स्वभाव पक्षपातपूर्ण देखिन्छ (किनभने हजुर आफ्ना भक्तहरूको मात्र मनोरथ पूर्ण गर्नुहुन्छ) यस्तो हजुरको चेष्टा बडो विचित्रको लाग्छ। हजुर कल्पवृक्ष झैं समस्वभाववाला भएकाले आफ्नो शरणमा आउने भक्तहरूलाई नै प्रेम गर्नुहुन्छ र उनीहरूको मनोरथ पूर्ण गर्नुहुन्छ।

**विवरण—** यस श्लोकमा भगवान्ले आफ्ना भक्तहरूमाथि परम अनुग्रह गर्नुहुन्छ, तर पनि यसबाट उहाँमा विषमताको दोष आउँदैन भनी बताइएको छ। परमात्मा सर्वसमर्थ हुनुहुन्छ। उहाँले आफ्ना भक्तहरूको संसाररूपी सङ्कटलाई नष्ट गरिदिनुहुन्छ कि गर्नुहुन्न ? यदि गर्नुहुन्छ भने आफूलाई पूजा गर्नेहरूको मात्र उद्धार गर्ने भगवान् पक्षपाती या विषम व्यवहार गर्ने हुनुहुन्छ। यदि भक्तहरूको दुःख नष्ट गर्नुहुन्न र कर्महरूको कारणले हुने सुख-दुःख व्यवस्थालाई हेरिरहनुहुन्छ भन्ने हो भने पनि त्यस्ता असमर्थ एवं मूकदर्शक भगवान्को स्तुति किन गर्ने ? आखिर आफ्ना भक्तहरूलाई दुःखबाट नबचाए त भक्तिको कुनै प्रयोजन पनि हुँदैन। यी आपत्तिहरूको समाधान गर्न आचार्यहरूले कल्पवृक्षको दृष्टान्त प्रस्तुत गर्नुभएको छ। जसरी कल्पवृक्षको मुनि गएर जसले जे माग्यो त्यसले त्यही पाउँछ, नजिक नजाने व्यक्ति त्यो अवसरबाट वञ्चित हुन्छ। त्यसै गरी जगत्कर्ता परमात्माको भक्ति गरी उहाँको नजिक जाने व्यक्ति उसले चाहेअनुसार संसारबाट छुट्न समर्थ हुन्छ भने दम्भी व्यक्ति, जो भगवान्को शरणमा जाँदैन, ऊ त्यो कृपाबाट वञ्चित हुन्छ। आफ्नो वरिपरि आउनेलाई नै आगो-पानी या रुख आदि सबै पदार्थले हित गर्ने हुन्, त्यसबाट आगोमा या वृक्षमा आफ्नो नजिककालाई मात्र ताप या शीतलता दिने भन्ने आरोप नआए झैं भगवान्मा पनि आरोप आउँदैन। बरु भगवान्को कृपा चाहने भए भक्तिपूर्वक उहाँको निकटमा जानुपर्दछ भन्ने भाव दृष्टान्तपूर्वक यहाँ बताइएको छ।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**वत्स प्रह्लाद भद्रं ते प्रयाहि सुतलालयम्।**

**मोदमानः स्वपौत्रेण ज्ञातीनां सुखमावह ॥ ९॥**

**पदार्थ–**
**वत्स** = बाबु
**प्रह्लाद** = प्रह्लाद
**ते** = तिम्रो
**भद्रं** = कल्याण होस्
**सुतलालयम्** = सुतलरूप घरमा
**प्रयाहि** = जाऊ (त्यहाँ)
**स्वपौत्रेण** = आफ्नो नातिका साथ
**मोदमानः** = प्रसन्न रही
**ज्ञातीनां** = कुलकुटुम्बहरूलाई
**सुखं** = सुख
**आवह** = प्राप्त गराऊ

**वाक्यार्थ–** हे बाबु प्रह्लाद ! तिम्रो कल्याण होस्। अब तिमी पनि सुतललोक जाऊ। त्यहाँ गएर आफ्ना नाति बलिका साथ सुखपूर्वक बस र आफ्ना कुलकुटुम्बहरूलाई पनि सुखी गराऊ।

**नित्यं द्रष्टासि मां तत्र गदापाणिमवस्थितम्।**

**मद्दर्शनमहाह्लादध्वस्तकर्मनिबन्धनः ॥ १० ॥**

**पदार्थ–**
**तत्र** = त्यो सुतलमा
**गदापाणिं** = गदा हातमा लिएको
**अवस्थितम्** = उभिइरहेको
**मां** = मलाई
**नित्यं** = सधैँ
**द्रष्टासि** = देख्नेछौ
**मद्दर्शनमहाह्लादध्वस्तकर्मनिबन्धनः** = मेरो दर्शनबाट उत्पन्न परमानन्दद्वारा तिम्रो सम्पूर्ण कर्मबन्धन नष्ट हुनेछ

**वाक्यार्थ–** सुतलमा तिमीले गदा हातमा लिएर उभिइरहेको मलाई सधैँ दर्शन गर्न पाउनेछौ। मेरो दर्शनजन्य परमानन्दका कारण तिम्रो सम्पूर्ण कर्मबन्धन पनि नष्ट हुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**आज्ञां भगवतो राजन् प्रह्लादो बलिना सह।**

**बाढमित्यमलप्रज्ञो मूर्ध्न्याधाय कृताञ्जलिः ॥ ११ ॥**

**परिक्रम्यादिपुरुषं सर्वासुरचमूपतिः।**

**प्रणतस्तदनुज्ञातः प्रविवेश महाबिलम् ॥ १२ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**भगवतः** = भगवान्‌को
**आज्ञां** = आज्ञालाई
**मूर्ध्नि** = शिरोपर गरी
**बाढम् इति** = हवस् भनी
**आधाय** = स्वीकार गरेर
**अमलप्रज्ञः** = शुद्धबुद्धि भएका
**सर्वासुरचमूपतिः** = सम्पूर्ण असुरसेनाका स्वामी
**प्रह्लादः** = प्रह्लादले
**कृताञ्जलिः** = हात जोडेर

**आदिपुरुषं** = आदिपुरुष भगवान्‌लाई
**परिक्रम्य** = प्रदक्षिणा गरेर
**प्रणतः** = पुनः प्रणाम गरी
**तदनुज्ञातः** = भगवान्‌बाट आज्ञा लिई
**बलिना सह** = बलिले सहित
**महाबिलम्** = सुतल लोकमा
**प्रविवेश** = प्रवेश गरे

**वाक्यार्थ—** हे राजा परीक्षित् ! भगवान् वामनको आज्ञालाई शिरोपर गरी 'हवस्' भनेर शुद्धबुद्धि भएका सम्पूर्ण असुरसेनाका स्वामी प्रह्लादले स्वीकार गर्नुभयो। त्यसपछि आदिपुरुष भगवान्‌लाई नमस्कारपूर्वक प्रदक्षिणा गरेर प्रणाम गरी भगवान्‌को आज्ञा लिई प्रह्लाद बलिलाई लिएर सुतल लोकमा प्रवेश गरे।

**अथाहोशनसं राजन् हरिर्नारायणोऽन्तिके।**

**आसीनमृत्विजां मध्ये सदसि ब्रह्मवादिनाम्॥ १३॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**अथ** = त्यसपछि
**ब्रह्मवादिनाम्** = ब्रह्मज्ञानीहरूको
**सदसि** = सभामा
**ऋत्विजां** = ऋत्विक्‌हरूको
**मध्ये** = बीचमा
**अन्तिके** = आफ्नै नजिकमा
**आसीनं** = बसेका
**उशनसं** = शुक्राचार्यलाई
**हरिः** = श्रीहरि
**नारायणः** = नारायणले
**आह** = भन्नुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! त्यसपछि ब्रह्मज्ञानीहरूको सभामा यज्ञका ऋत्विक्‌हरूको बीचमा आफ्नै नजिक बसेका दैत्यगुरु शुक्राचार्यलाई भगवान् श्रीहरिले भन्नुभयो।

**ब्रह्मन् सन्तनु शिष्यस्य कर्मच्छिद्रं वितन्वतः।**

**यत् तत् कर्मसु वैषम्यं ब्रह्मदृष्टं समं भवेत्॥ १४॥**

**पदार्थ—**
**ब्रह्मन्** = हे ब्राह्मण
**कर्म** = यज्ञ आदि कर्म
**वितन्वतः** = गर्ने
**शिष्यस्य** = शिष्यको
**यत्** = जुन
**छिद्रं** = त्रुटि (न्यूनता भयो)
**तत्** = त्यसलाई
**सन्तनु** = पूर्ण गराउनुहोस्
**कर्मसु** = कर्ममा भएको
**वैषम्यं** = तलमाथि
**ब्रह्मदृष्टं** = ब्राह्मणहरूको कृपादृष्टिले
**समं** = परिपूर्ण
**भवेत्** = हुन्छ

**वाक्यार्थ—** हे ब्राह्मण ! आफ्नो शिष्य बलिले गरेको यस अश्वमेध यज्ञमा जे-जे त्रुटि वा अपूर्णता भएको छ त्यसलाई अब तपाईंले पूर्ण गराउनुहोस्। किनभने कर्ममा भएका त्रुटिहरू ब्राह्मणहरूको कृपापूर्ण दृष्टिले नै पूर्ण हुन्छन्।

**शुक्र उवाच** (शुक्राचार्यले भने)

**कुतस्तत्कर्मवैषम्यं यस्य कर्मेश्वरो भवान्।**

**यज्ञेशो यज्ञपुरुषः सर्वभावेन पूजितः॥ १५॥**

**पदार्थ–**
**यस्य** = जुन बलिद्वारा
**सर्वभावेन** = परमभक्तिपूर्वक
**कर्मेश्वरः** = कर्मका प्रवर्तक
**यज्ञेशः** = यज्ञका फलदाता
**यज्ञपुरुषः** = यज्ञरूपले उपास्य
**भवान्** = हजुर
**पूजितः** = पूजित हुनुभयो
**तत्कर्मवैषम्यं** = त्यस्ता बलिको यज्ञमा दोष
**कुतः** = कसरी हुन सक्दछ

**वाक्यार्थ–** हे प्रभु ! बलिले (सर्वस्व समर्पण गरी) परमभक्तिभावपूर्वक यज्ञ आदि कर्मका प्रवर्तक, यज्ञफलदाता, यज्ञपुरुष स्वयं हजुरको पूजा गरेका छन्। अतः बलिको यज्ञमा कुनै पनि दोष कसरी होला र ?

**मन्त्रतस्तन्त्रतश्छिद्रं देशकालार्हवस्तुतः।**
**सर्वं करोति निश्छिद्रं नामसङ्कीर्तनं तव ॥ १६ ॥**

**पदार्थ–**
**मन्त्रतः** = मन्त्रबाट
**तन्त्रतः** = विधिबाट
**देशकालार्हवस्तुतः** = देश, काल, पात्र र वस्तुबाट हुने
**सर्वं** = सम्पूर्ण
**छिद्रं** = त्रुटिलाई
**तव** = हजुरको
**नामसङ्कीर्तनं** = नामकीर्तनले मात्र पनि
**निश्छिद्रं** = त्रुटिरहित
**करोति** = गराइदिन्छ

**वाक्यार्थ–** स्वर आदि बिग्रिएर हुने मन्त्रदोष, अनुष्ठान विपरीत भएर हुने तन्त्रदोष, त्यसै गरी देश, काल, पात्र र वस्तु (दक्षिणा आदि)बाट हुने सबै त्रुटिहरू हजुरको नामसङ्कीर्तनबाट नै त्रुटिरहित हुन्छन्।

**तथापि वदतो भूमन् करिष्याम्यनुशासनम्।**
**एतच्छ्रेयः परं पुंसां यत् तवाज्ञानुपालनम् ॥ १७ ॥**

**पदार्थ–**
**भूमन्** = हे सर्वात्मा
**तथा अपि** = त्यसो भए पनि
**वदतः** = आज्ञा दिने हजुरको
**अनुशासनम्** = आज्ञालाई
**करिष्यामि** = सम्पन्न गर्नेछु
(किनभने)
**यत्** = जुन
**तव** = हजुरको
**आज्ञानुपालनम्** = आज्ञाको पालन
**एतत्** = यो
**पुंसां** = पुरुषहरूको लागि
**परं श्रेयः** = परम कल्याणको विषय हो

**वाक्यार्थ–** हे सर्वात्मा ! (यद्यपि हजुरको कृपादृष्टि रहेको हुँदा यो कर्ममा कुनै वैगुण्य वा त्रुटिहरू छैनन्) तापनि हजुरले मलाई आज्ञा दिनुभएको हुनाले म त्यो हजुरको आज्ञापालन अवश्य गर्नेछु किनभने हजुरको आज्ञापालन गर्नु नै पुरुषहरूको सबैभन्दा ठुलो कल्याण हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अभिनन्द्य हरेराज्ञामुशना भगवानिति।**
**यज्ञच्छिद्रं समाधत्त बलेर्विप्रर्षिभिः सह ॥ १८ ॥**

पदार्थ—
**इति** = यसरी
**हरेः** = भगवान् श्रीहरिको
**आज्ञां** = आज्ञालाई
**अभिनन्द्य** = स्वीकार गरेर
**भगवान्** = भगवान्
**उशना** = शुक्राचार्यले
**बलेः** = बलिको
**यज्ञच्छिद्रं** = यज्ञमा गर्न बाँकी रहेका कर्महरू
**विप्रर्षिभिः सह** = ब्रह्मर्षिहरूसँग मिलेर
**समाधत्त** = पूरा गरे

**वाक्यार्थ—** यसरी शुक्राचार्यले भगवान् श्रीहरिको आज्ञालाई स्वीकार गरेर बलिको यज्ञमा गर्न बाँकी रहेका कर्महरू ब्रह्मर्षिहरूका साथ मिलेर पूर्ण गरे।

**एवं बलेर्महीं राजन् भिक्षित्वा वामनो हरिः।**
**ददौ भ्रात्रे महेन्द्राय त्रिदिवं यत् परैर्हृतम्॥ १९॥**

पदार्थ—
**राजन्** = हे राजा परीक्षित्
**वामनः** = वामनरूप
**हरिः** = भगवान् श्रीहरिले
**एवं** = यसरी
**बलेः** = बलिबाट
**महीं** = पृथिवीलाई
**भिक्षित्वा** = भिक्षा मागेर
**यत्** = जुन
**परैः** = शत्रुद्वारा
**हृतम्** = हरण गरिएको
**त्रिदिवं** = स्वर्ग थियो (त्यो)
**भ्रात्रे** = दाजु
**महेन्द्राय** = महेन्द्र (इन्द्र)लाई
**ददौ** = दिनुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! यसप्रकार दैत्यराज बलिसँग पृथिवीको भिक्षा मागेर वामनरूप भगवान् श्रीहरिले स्वर्गलोक आफ्ना दाजु इन्द्रलाई दिनुभयो।

**प्रजापतिपतिर्ब्रह्मा देवर्षिपितृभूमिपैः।**
**दक्षभृग्वङ्गिरोमुख्यैः कुमारेण भवेन च॥ २०॥**
**कश्यपस्यादितेः प्रीत्यै सर्वभूतभवाय च।**
**लोकानां लोकपालानामकरोद् वामनं पतिम्॥ २१॥**

पदार्थ—
**प्रजापतिपतिः** = प्रजापतिहरूका स्वामी
**ब्रह्मा** = ब्रह्माजीले
**देवर्षिपितृभूमिपैः** = देवता, ऋषि, पितृ, मनु
**दक्षभृग्वङ्गिरोमुख्यैः** = दक्ष, भृगु, अङ्गिरा आदि
**कुमारेण** = सनत्कुमार र
**भवेन च** = भगवान् शङ्करले सहित भई
**कश्यपस्य** = कश्यप र
**अदितेः च** = अदितिको
**प्रीत्यै** = प्रसन्नताका लागि र
**सर्वभूतभवाय** = सम्पूर्ण प्राणीहरूको कल्याणका लागि
**वामनं** = भगवान् वामनलाई
**लोकानां** = सम्पूर्ण लोक र
**लोकपालानां** = लोकपालहरूको
**पतिम्** = पति
**अकरोत्** = बनाउनुभयो

**वाक्यार्थ—** प्रजापतिहरूका स्वामी ब्रह्माजीले देवता, ऋषि, पितृ, मनु, मनुपुत्र दक्ष, भृगु, अङ्गिरा, सनत्कुमार र भगवान् शङ्कर आदिको साथमा कश्यप र अदितिको प्रसन्नता र सम्पूर्ण प्राणीहरूको कल्याणका लागि भगवान् वामनलाई सम्पूर्ण लोक र लोकपालहरूको पति बनाउनुभयो।

**वेदानां सर्वदेवानां धर्मस्य यशसः श्रियः ।**
**मङ्गलानां व्रतानां च कल्पं स्वर्गापवर्गयोः ॥ २२ ॥**
**उपेन्द्रं कल्पयाञ्चक्रे पतिं सर्वविभूतये ।**
**तदा सर्वाणि भूतानि भृशं मुमुदिरे नृप ॥ २३ ॥**

**पदार्थ–**
**सर्वविभूतये** = सबैको कल्याणका लागि
**सर्वदेवानां** = सम्पूर्ण देवताहरूको
**वेदानां** = वेदहरूको
**धर्मस्य** = धर्मको
**यशसः** = यशको
**श्रियः** = लक्ष्मीको
**मङ्गलानां** = मङ्गलको
**व्रतानां** = व्रतहरूको
**स्वर्गापवर्गयोः च** = स्वर्ग तथा मोक्षको पनि
**कल्पं** = रक्षा गर्न समर्थ
**उपेन्द्रं** = उपेन्द्र (वामन)लाई
**पतिं** = रक्षक
**कल्पयाञ्चक्रे** = बनाउनुभयो
**नृप** = हे राजा परीक्षित्
**तदा** = त्यो वेलामा
**सर्वाणि** = सम्पूर्ण
**भूतानि** = प्राणीहरू
**भृशं** = अत्यन्त
**मुमुदिरे** = प्रसन्न भए

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूको कल्याणका लागि सम्पूर्ण देवता, वेद, धर्म, यश, लक्ष्मी, मङ्गल, व्रत, स्वर्ग र मोक्षको रक्षा गर्न समर्थ सर्वेश्वर भगवान् उपेन्द्र (वामन)लाई ब्रह्माजीले रक्षक बनाउनुभयो। हे राजा परीक्षित् ! त्यस वेलामा सम्पूर्ण प्राणीहरू अत्यन्त प्रसन्न भए।

**ततस्त्विन्द्रः पुरस्कृत्य देवयानेन वामनम् ।**
**लोकपालैर्दिवं निन्ये ब्रह्मणा चानुमोदितः ॥ २४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**ब्रह्मणा** = ब्रह्माजीद्वारा
**अनुमोदितः** = आज्ञा पाएका
**इन्द्रः च** = इन्द्रले पनि
**लोकपालैः** = लोकपालहरूले सहित भई
**वामनम्** = भगवान् वामनलाई
**पुरस्कृत्य** = अगाडि राखेर
**देवयानेन** = देवयान (पुष्पक विमान)द्वारा
**दिवं** = स्वर्गलोक
**निन्ये** = लगे

**वाक्यार्थ–** त्यसपछि ब्रह्माजीबाट आज्ञा लिएर सम्पूर्ण लोकपालहरूले सहित भएका देवराज इन्द्रले विमानमा भगवान् वामनलाई सबैभन्दा अगाडि राखेर स्वर्गलोक लगे।

**प्राप्य त्रिभुवनं चेन्द्र उपेन्द्रभुजपालितः ।**
**श्रिया परमया जुष्टो मुमुदे गतसाध्वसः ॥ २५ ॥**

**पदार्थ–**
**उपेन्द्रभुजपालितः** = उपेन्द्र भगवान्को बाहुद्वारा रक्षित
**इन्द्रः च** = इन्द्रले पनि
**त्रिभुवनं** = तीनै लोक
**प्राप्य** = प्राप्त गरेर

**परमया** = सर्वश्रेष्ठ
**श्रिया** = राजलक्ष्मीद्वारा
**जुष्टः** = सेवित भई
**गतसाध्वसः** = निर्भय भई
**मुमुदे** = प्रसन्न भए

**वाक्यार्थ–** उपेन्द्र भगवान्‌द्वारा सुरक्षित इन्द्रले पनि तीनै लोकको साम्राज्य प्राप्त गरे। यसपछि सर्वश्रेष्ठ राजलक्ष्मीद्वारा सेवित भएका इन्द्र निर्भय एवं प्रसन्न भए।

**ब्रह्मा शर्वः कुमारश्च भृग्वाद्या मुनयो नृप ।**
**पितरः सर्वभूतानि सिद्धा वैमानिकाश्च ये ॥ २६ ॥**
**सुमहत् कर्म तद् विष्णोर्गायन्तः परमद्भुतम् ।**
**धिष्ण्यानि स्वानि ते जग्मुरदितिं च शशंसिरे ॥ २७ ॥**

**पदार्थ–**
**नृप** = हे राजा
**ब्रह्मा** = ब्रह्माजी
**शर्वः** = शङ्करजी
**कुमारः** = सनत्कुमार
**भृग्वाद्याः** = भृगु आदि
**मुनयः** = मुनिहरू र
**पितरः च** = पितृहरू
**सर्वभूतानि** = सम्पूर्ण प्राणीहरू
**सिद्धाः** = सिद्धगण
**ये च** = जो अरू
**वैमानिकाः** = विमानारोही देवगणहरू
**ते** = ती सबै
**विष्णोः** = वामनरूप विष्णुको
**परम् अद्भुतम्** = अत्यन्त आश्चर्यजनक
**सुमहत्** = ज्यादै ठुलो (अरूले गर्न नसक्ने)
**तत् कर्म** = त्यो कर्मलाई
**गायन्तः** = गाउँदै
**स्वानि** = आ-आफ्नो
**धिष्ण्यानि** = धाम(लोक)मा
**जग्मुः** = गए
**अदितिं च** = अदितिलाई पनि
**शशंसिरे** = प्रशंसा गरे

**वाक्यार्थ–** हे परीक्षित् ! ब्रह्माजी, शङ्करजी, सनत्कुमार, भृगु आदि मुनिहरू, पितृहरू, सम्पूर्ण प्राणीहरू, सिद्धगण र विमानारोही देवताहरू वामनरूप भगवान् विष्णुले गरेको अत्यन्त आश्चर्यजनक एवं अरूले गर्नै नसक्ने त्यस कर्मको महत्त्वगान गर्दै आ-आफ्नो लोकमा गए। उनीहरूले अदितिको पनि प्रशंसा गरे।

**सर्वमेतन्मयाख्यातं भवतः कुलनन्दन ।**
**उरुक्रमस्य चरितं श्रोतॄणामघमोचनम् ॥ २८ ॥**

**पदार्थ–**
**कुलनन्दन** = हे कुलवर्द्धक परीक्षित्
**मया** = मैले
**श्रोतॄणां** = श्रोताहरूको पनि
**अघमोचनम्** = पापनाशक
**उरुक्रमस्य** = भगवान् वामनको
**एतत्** = यो
**सर्वम्** = सबै
**चरितं** = चरित्र
**भवतः** = तपाईंलाई
**आख्यातम्** = बताएँ

**वाक्यार्थ–** हे परीक्षित् ! मैले तपाईंलाई भगवान् वामनको सम्पूर्ण चरित्र बताएँ। यो चरित्र सुन्ने श्रोताहरूका सम्पूर्ण पापहरू नष्ट हुन्छन्।

**पारं महिम्न उरुविक्रमतो गृणानो**
**यः पार्थिवानि विममे स रजांसि मर्त्यः।**
**किं जायमान उत जात उपैति मर्त्य**
**इत्याह मन्त्रदृगृषिः पुरुषस्य यस्य॥ २९॥**

**पदार्थ—**
**यः** = जसले
**उरुविक्रमतः** = उरुक्रम (वामन) भगवान्‌को
**महिम्नः** = महिमाको
**पारं** = पार
**गृणानः** = पाउँछ
**सः** = त्यस
**मर्त्यः** = मानिसले
**पार्थिवानि** = पृथिवीका
**रजांसि** = कणहरू
**विममे** = गन्दछ
**जायमानः** = जन्मिनेवाला
**उत** = अथवा
**जातः** = जन्मिएको
**मर्त्यः** = मानिस
**किं** = के
**यस्य** = जुन
**पुरुषस्य** = परिपूर्ण भगवान्‌को (महिमाको पार)
**उपैति** = प्राप्त गर्न सक्छ ?
**इति** = यस्तो
**मन्त्रदृक्** = मन्त्रद्रष्टा
**ऋषिः** = ऋषि वसिष्ठले
**आह** = भन्नुभएको छ

**वाक्यार्थ—** जुन मानिस भगवान् उरुक्रम (वामन)को महिमाको पार पाउन चाहन्छ भने त्यसले पृथिवीका परमाणुहरू गन्न चाहन्छ। त्यसैले मन्त्रद्रष्टा ऋषि वसिष्ठले के भन्नुभएको छ भने त्यस्तो व्यक्ति न जन्मिएको थियो, न त जन्मिने नै छ, जसले परिपूर्ण भगवान्‌को महिमालाई पूर्णतः जानेको होस्।

**य इदं देवदेवस्य हरेरद्भुतकर्मणः।**
**अवतारानुचरितं शृण्वन् याति परां गतिम्॥ ३०॥**

**पदार्थ—**
**यः** = जसले
**इदं** = यो
**देवदेवस्य** = देवाधिदेव
**अद्भुतकर्मणः** = अद्भुत कर्म गर्न समर्थ
**हरेः** = भगवान् श्रीहरिको
**अवतारानुचरितं** = अवतार चरित्र भएको आख्यान
**शृण्वन्** = सुन्दछ भने (त्यसले)
**परां गतिम्** = सर्वोत्कृष्ट गति
**याति** = प्राप्त गर्दछ

**वाक्यार्थ—** अद्भुत कर्म गर्ने देवाधिदेव भगवान् वामनको अवतार र चरित्र वर्णित यो आख्यान जसले सुन्दछ, त्यसले सर्वोत्कृष्ट गति प्राप्त गर्दछ।

**क्रियमाणे कर्मणीदं दैवे पित्र्येऽथ मानुषे।**
**यत्र यत्रानुकीर्त्येत तत् तेषां सुकृतं विदुः॥ ३१॥**

**पदार्थ—**
**दैवे** = देवतासँग सम्बन्धित
**पित्र्ये** = पितृसँग सम्बन्धित

**अथ** = तथा
**मानुषे** = मनुष्यसँग सम्बन्धित
**कर्मणि** = कर्म
**क्रियमाणे** = गर्दा
**यत्र यत्र** = जहाँ-जहाँ
**इदं** = यो भगवान् वामनको चरित्र
**अनुकीर्त्येत** = कीर्तन गरिन्छ
**तेषां** = ती कर्मकर्ताहरूको
**तत्** = त्यो कर्म
**सुकृतं** = विधिपूर्वक सम्पन्न हुन्छ भन्ने कुरा
**विदुः** = (विद्वान्हरू) जान्दछन्

**वाक्यार्थ–** जहाँ-जहाँ देवतासम्बन्धी, पितृसम्बन्धी र मनुष्यसँग सम्बन्धित कर्महरू गरिन्छन् त्यहाँ-त्यहाँ भगवान् वामनको यो चरित्रकीर्तन गरिन्छ भने ती-ती कर्महरू विधिपूर्वक सम्पन्न हुन्छन् भन्ने कुरा विद्वान्हरू जान्दछन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**

**वामनावतारचरिते त्रयोविंशोऽध्यायः ॥ २३ ॥**

# अथ चतुर्विंशोऽध्यायः

## भगवान्को मत्स्यावतार

**राजोवाच** (महाराज परीक्षित्ले भन्नुभयो)

**भगवञ्छ्रोतुमिच्छामि हरेरद्भुतकर्मणः।**

**अवतारकथामाद्यां मायामत्स्यविडम्बनम्॥ १॥**

**पदार्थ—**
**भगवन्** = हे भगवान्
**मायामत्स्यविडम्बनम्** = मायाद्वारा माछोको अभिनय गरिएको (मत्स्यावतार)
**अद्भुतकर्मणः** = अद्भुत कर्महरू गर्ने
**हरेः** = भगवान् श्रीहरिको
**आद्यां** = पहिलो
**अवतारकथां** = अवतारकथा
**श्रोतुम्** = सुन्न
**इच्छामि** = इच्छा गर्दछु

**वाक्यार्थ—** हे भगवान् शुकदेवजी ! आफ्नो मायाद्वारा मत्स्यावतार लिई अद्भुत कर्महरू गर्ने भगवान्को त्यही पहिलो अवतारको कथा सुन्न चाहन्छु।

**यदर्थमदधाद् रूपं मात्स्यं लोकजुगुप्सितम्।**

**तमःप्रकृति दुर्मर्षं कर्मग्रस्त इवेश्वरः॥ २॥**

**एतन्नो भगवन् सर्वं यथावद् वक्तुमर्हसि।**

**उत्तमश्लोकचरितं सर्वलोकसुखावहम्॥ ३॥**

**पदार्थ—**
**ईश्वरः** = साक्षात् ईश्वर (भएर)
**कर्मग्रस्तः इव** = कर्मबन्धनद्वारा बद्ध झैँ भई
**यदर्थम्** = जुन प्रयोजनका लागि
**लोकजुगुप्सितम्** = लोकमा निन्दित
**तमःप्रकृति** = तमोगुणी स्वभाव भएको
**दुर्मर्षं** = असह्य
**मात्स्यं** = माछोको
**रूपं** = रूप
**अदधात्** = धारण गर्नुभयो
**भगवन्** = हे भगवान् !
**एतत्** = त्यो
**सर्वं** = सबै
**सर्वलोकसुखावहम्** = सम्पूर्ण प्राणीहरूलाई सुख दिने
**उत्तमश्लोकचरितं** = पवित्र कीर्ति भएका भगवान्को चरित्र
**यथावत्** = जस्ताको तस्तै
**नः** = मलाई
**वक्तुं** = बताउन
**अर्हसि** = सक्नुहुन्छ

**वाक्यार्थ—** साक्षात् ईश्वर भएर पनि कर्मबन्धनद्वारा बद्ध झैँ भई भगवान्ले लोकमा निन्दित, तमोगुणी स्वभाव भएको एवं असह्य माछोको रूप किन धारण गर्नुभयो ? हे शुकदेवजी ! पवित्र कीर्ति भएका भगवान्को सम्पूर्ण प्राणीहरूलाई सुखप्रदान गर्ने त्यो चरित्र मलाई यथावत्रूपमा बताउनुहोस्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**इत्युक्तो विष्णुरातेन भगवान् बादरायणिः ।**
**उवाच चरितं विष्णोर्मत्स्यरूपेण यत् कृतम् ॥ ४ ॥**

**पदार्थ–**
**विष्णुरातेन** = परीक्षित्‌द्वारा
**इति** = यसप्रकार
**उक्तः** = सोधिएका
**भगवान्** = सर्वज्ञ
**बादरायणिः** = शुकदेवजीले
**मत्स्यरूपेण** = मत्स्य अवतार लिई
**यत्** = जे-जे चरित्र
**कृतम्** = गर्नुभयो
**विष्णोः** = भगवान् विष्णुको
**चरितं** = त्यो चरित्र
**उवाच** = बताउनुभयो

**वाक्यार्थ–** (हे शौनक आदि ऋषिगण !) महाराज परीक्षित्‌ले यस्तो प्रश्न सोधेपछि सर्वज्ञ शुकदेवजीले मत्स्यरूप धारण गरी भगवान् विष्णुले जे-जस्ता लीलाचरित्रहरू गर्नुभयो त्यो सबै बताउनुभयो ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोविप्रसुरसाधूनां छन्दसामपि चेश्वरः ।**
**रक्षामिच्छंस्तनूर्धत्ते धर्मस्यार्थस्य चैव हि ॥ ५ ॥**

**पदार्थ–**
**ईश्वरः** = सर्वसमर्थ भगवान्‌ले
**गोविप्रसुरसाधूनां** = गाई, ब्राह्मण, देवता र साधुहरूको
**छन्दसाम् अपि** = वेदहरूको
**धर्मस्य** = धर्मको
**अर्थस्य च एव** = अर्थको पनि
**रक्षां** = रक्षा
**इच्छन्** = चाहेर
**हि** = निश्चय नै
**तनूः** = विभिन्न शरीर
**धत्ते** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** हे परीक्षित् ! सर्वसमर्थ भगवान्‌ले गाई, ब्राह्मण, देवता, वेद, धर्म र अर्थको रक्षा गर्न चाहेर नै विभिन्न शरीर धारण गर्नुहुन्छ।

**उच्चावचेषु भूतेषु चरन् वायुरिवेश्वरः ।**
**नोच्चावचत्वं भजते निर्गुणत्वाद् धियो गुणैः ॥ ६ ॥**

**पदार्थ–**
**उच्चावचेषु** = उचनीच
**भूतेषु** = सबै प्राणीहरूमा
**चरन्** = अन्तर्यामीरूपले रहने
**ईश्वरः** = भगवान्
**निर्गुणत्वात्** = निर्गुण हुनुभएका कारण
**वायुः इव** = वायु झैं
**धियः** = प्रकृतिको
**गुणैः** = गुणहरूद्वारा
**उच्चावचत्वं** = उच्चता र नीचतालाई
**न भजते** = प्राप्त गर्नुहुन्न

**वाक्यार्थ–** भगवान् उचनीच सबै प्राणीहरूमा अन्तर्यामीरूपले वायु झैं बस्नुभएको छ तापनि

निर्गुण भएका कारण ती-ती प्राणीहरूको प्रकृतिगत गुणहरूद्वारा उहाँ उच्च र नीच बन्नुहुन्न।

**आसीदतीतकल्पान्ते ब्राह्मो नैमित्तिको लयः।**
**समुद्रोपप्लुतास्तत्र लोका भूरादयो नृप॥ ७॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**अतीतकल्पान्ते** = गएको कल्पको अन्त्यमा
**ब्राह्मः** = ब्राह्म (ब्रह्माजी निदाउनुभएको अवस्थामा हुने)
**नैमित्तिकः** = नैमित्तिक
**लयः** = प्रलय
**आसीत्** = भयो
**तत्र** = त्यो वेलामा
**भूरादयः** = भूः आदि
**लोकाः** = तीनै लोकहरू
**समुद्रोपप्लुताः** = समुद्रमा डुबे

**वाक्यार्थ–** हे राजा परीक्षित्! गएको कल्पको अन्त्यमा जब ब्रह्माजी निदाउनुभएको अवस्थामा हुने नैमित्तिक प्रलय भयो तब भूः, भुवः र स्वः यी तीनै लोकहरू समुद्रमा डुबे।

**कालेनागतनिद्रस्य धातुः शिशयिषोर्बली।**
**मुखतो निःसृतान् वेदान् हयग्रीवोऽन्तिकेऽहरत्॥ ८॥**

**पदार्थ–**
**कालेन** = समयले (दिन समाप्त भई रात्रिकाल आएको हुनाले)
**आगतनिद्रस्य** = निद्रा आइसकेका
**शिशयिषोः** = सुत्न चाहने
**धातुः** = ब्रह्माजीको
**मुखतः** = मुखबाट
**निःसृतान्** = निस्किएका
**वेदान्** = वेदहरूलाई
**अन्तिके** = नजिकै आएर
**बली** = महाबलशाली
**हयग्रीवः** = हयग्रीव नामक दैत्यले
**अहरत्** = हरण गऱ्यो

**वाक्यार्थ–** दिन समाप्त भएर रात्रिकाल लागेको हुनाले ब्रह्माजीलाई निद्रा लाग्यो र उहाँ सुत्न चाहनुभयो। सुत्दा ब्रह्माजीको मुखबाट निस्किएका वेदहरूलाई हयग्रीव नामक दैत्यले हरण गऱ्यो।

**ज्ञात्वा तद् दानवेन्द्रस्य हयग्रीवस्य चेष्टितम्।**
**दधार शफरीरूपं भगवान् हरिरीश्वरः॥ ९॥**

**पदार्थ–**
**दानवेन्द्रस्य** = दानवराज
**हयग्रीवस्य** = हयग्रीवको
**तत्** = वेदहरण गर्ने त्यो
**चेष्टितम्** = चेष्टालाई
**ज्ञात्वा** = जानेर
**ईश्वरः** = सर्वसमर्थ
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरिले
**शफरीरूपं** = मत्स्यरूप
**दधार** = धारण गर्नुभयो

**वाक्यार्थ–** वेदहरूलाई हरण गर्ने दानवराज हयग्रीवको चेष्टालाई बुझेर सर्वसमर्थ भगवान् श्रीहरिले मत्स्यरूप धारण गर्नुभयो।

**तत्र राजऋषिः कश्चिन्नाम्ना सत्यव्रतो महान्।**
**नारायणपरोऽतप्यत् तपः स सलिलाशनः॥ १०॥**

**पदार्थ–**
**तत्र** = त्यही कल्पमा
**नारायणपरः** = नारायणका परमभक्त
**नाम्ना** = नामले
**सत्यव्रतः** = सत्यव्रत
**कश्चित्** = कुनै
**महान्** = ठुला
**राजऋषिः** = राजर्षि थिए
**सः** = तिनी
**सलिलाशनः** = जल मात्र पिएर
**तपः** = तपस्या
**अतप्यत्** = गर्दथे

**वाक्यार्थ–** त्यही कल्पमा सत्यव्रत नाम गरेका भगवान् नारायणका परमभक्त कुनै महान् राजर्षि थिए। उनी जल मात्र पिएर तपस्या गर्दथे।

**योऽसावस्मिन् महाकल्पे तनयः स विवस्वतः।**
**श्राद्धदेव इति ख्यातो मनुत्वे हरिणार्पितः॥ ११॥**

**पदार्थ–**
**यः** = (पूर्व कल्पमा तपस्या गर्ने) जुन सत्यव्रत (थिए)
**सः असौ** = तिनै यी
**अस्मिन्** = यो
**महाकल्पे** = महाकल्पमा
**विवस्वतः** = सूर्यको
**तनयः** = पुत्र भई
**श्राद्धदेवः इति** = श्राद्धदेव नामले
**ख्यातः** = प्रसिद्ध भए (उनलाई)
**हरिणा** = भगवान् श्रीहरिले
**मनुत्वे** = मनुको रूपमा
**अर्पितः** = स्थापित गराउनुभयो

**वाक्यार्थ–** पहिलेको कल्पमा पानी मात्र पिएर तपस्या गर्ने तिनै सत्यव्रत यस महाकल्पमा सूर्यको पुत्रको रूपमा उत्पन्न भई श्राद्धदेवको नामले प्रसिद्ध भए। पछि भगवान् श्रीहरिले यिनलाई मनुको रूपमा स्थापित गराउनुभयो।

**एकदा कृतमालायां कुर्वतो जलतर्पणम्।**
**तस्याञ्जल्युदके काचिच्छफर्येकाभ्यपद्यत॥ १२॥**

**पदार्थ–**
**एकदा** = कुनै दिन
**कृतमालायां** = कृतमाला नदीमा
**जलतर्पणम्** = जलले तर्पण
**कुर्वतः** = गरिरहेका
**तस्य** = ती राजर्षि सत्यव्रतको
**अञ्जल्युदके** = अँजुलीको जलमा
**काचित्** = कुनै
**एका** = एउटा
**शफरी** = सानो माछो
**अभ्यपद्यत** = पऱ्यो

**वाक्यार्थ–** कुनै एक दिन कृतमाला नदीमा जलले तर्पण गरिरहेका राजर्षि सत्यव्रतको अँजुलीको जलमा कुनै एउटा सानो माछो पऱ्यो।

**सत्यव्रतोऽञ्जलिगतां सह तोयेन भारत।**
**उत्ससर्ज नदीतोये शफरीं द्रविडेश्वरः॥ १३॥**

**पदार्थ–**
**भारत** = हे परीक्षित्
**द्रविडेश्वरः** = द्रविड देशका राजा
**सत्यव्रतः** = सत्यव्रतले
**अञ्जलिगतां** = अँजुलीमा

आएको
**शफरीं** = माछालाई
**तोयेन सह** = अँजुलीमा भएको पानी सहित
**नदीतोये** = नदीको पानीमा
**उत्ससर्ज** = त्यागिदिए

**वाक्यार्थ–** हे परीक्षित् ! द्रविड देशका राजा सत्यव्रतले आफ्नो अँजुलीमा आएको माछालाई अँजुलीमा लिएको जलका साथ नदीको जलमा नै त्यागिदिए।

**तमाह सातिकरुणं महाकारुणिकं नृपम्।**
**यादोभ्यो ज्ञातिघातिभ्यो दीनां मां दीनवत्सल।**
**कथं विसृजसे राजन् भीतामस्मिन् सरिज्जले॥ १४॥**

**पदार्थ–**
**सा** = त्यो माछाले
**महाकारुणिकं** = अत्यन्त दयालु
**तं** = ती (आफूलाई त्याग्ने)
**नृपम्** = राजालाई
**अतिकरुणं** = अत्यन्त करुणभावमा
**आह** = भन्यो
**दीनवत्सल** = दुःखीहरूका उपकारक
**राजन्** = हे राजा
**ज्ञातिघातिभ्यः** = आफ्नै जातिहरूको हिंसा गर्ने
**यादोभ्यः** = जलजन्तुहरूबाट
**भीतां** = डराएको
**दीनां** = दुःखी
**मां** = मलाई
**अस्मिन्** = यो (हिंस्रक जलजन्तुहरूले भरिएको)
**सरिज्जले** = नदीजलमा
**कथं** = किन
**विसृजसे** = त्यागिदिनुहुन्छ

**वाक्यार्थ–** नदीमा त्यागिएको माछाले अति करुणभावमा अत्यन्त दयालु राजा सत्यव्रतलाई भन्यो– दुःखीहरूका उपकारक हे राजा ! आफ्नै जातिका जन्तुको हिंसा गर्ने जलजन्तुहरूबाट म डराएको छु, दुःखी छु। त्यसैले त्यस्ता हिंस्रक जन्तुहरू भएको यो नदीजलमा मलाई किन त्यागिदिनुहुन्छ ?

**तमात्मनोऽनुग्रहार्थं प्रीत्या मत्स्यवपुर्धरम्।**
**अजानन् रक्षणार्थाय शफर्याः स मनो दधे॥ १५॥**

**पदार्थ–**
**सः** = ती सत्यव्रतले
**आत्मनः** = आफ्नो
**अनुग्रहार्थं** = अनुग्रहका लागि
**प्रीत्या** = प्रसन्नतापूर्वक
**मत्स्यवपुर्धरम्** = माछाको शरीर धारण गरेका
**तं** = ती भगवान्लाई
**अजानन्** = नबुझीकन
**शफर्याः** = माछाको
**रक्षणार्थाय** = रक्षा गर्नका लागि
**मनः** = मन
**दधे** = लगाए

**वाक्यार्थ–** राजा सत्यव्रतले आफूमाथि नै अनुग्रह गर्नका लागि प्रसन्नतापूर्वक माछाको शरीर धारण गर्नुहुने भगवान्लाई चिन्न सकेनन्। यसैले भगवान्लाई नचिनीकन (माछाद्वारा रक्षाका लागि गरिएको अनुरोधलाई स्वीकार गरेर) उनले माछाको सुरक्षा गर्ने निश्चय गरे।

**तस्या दीनतरं वाक्यमाश्रुत्य स महीपतिः।**
**कलशाप्सु निधायैनां दयालुर्निन्य आश्रमम्॥ १६॥**

| पदार्थ– | **सः** = ती | **निधाय** = राखेर |
|---|---|---|
| **तस्याः** = त्यो माछाको | **दयालुः** = दयालु | **आश्रमम्** = कुटीमा |
| **दीनतरं** = अत्यन्त करुणापूर्ण | **महीपतिः** = राजा सत्यव्रतले | **निन्ये** = ल्याए |
| **वाक्यं** = बोली | **एनां** = त्यो माछालाई | |
| **आश्रुत्य** = सुनेर | **कलशाप्सु** = कलशको जलमा | |

**वाक्यार्थ–** त्यो माछाको करुणाले भरिएको बोली सुनेर दयालु राजा सत्यव्रतले माछालाई कलशको जलमा राखेर आफ्नो कुटीमा ल्याए।

**सा तु तत्रैकरात्रेण वर्धमाना कमण्डलौ।**
**अलब्ध्वात्मावकाशं वा इदमाह महीपतिम्॥ १७॥**

| पदार्थ– | **तत्र** = कमण्डलुमा | **महीपतिम्** = राजालाई |
|---|---|---|
| **एकरात्रेण** = एकै रातमा | **आत्मावकाशं** = आफूलाई बस्न चाहिने स्थान | **इदं** = यसो |
| **कमण्डलौ** = कमण्डलुभित्र | | **आह** = भन्यो |
| **वर्धमाना** = बढ्दै गएको | **अलब्ध्वा** = नपाएर | |
| **सा तु** = त्यो माछाले चाहिँ | **वै** = निश्चय नै | |

**वाक्यार्थ–** आफ्नो कुटीमा ल्याएपछि एकै रातमा बढ्दै गएको त्यो माछाले कमण्डलुभित्र आफूलाई बस्ने पर्याप्त ठाउँ नपाएपछि राजा सत्यव्रतलाई भन्यो।

**नाहं कमण्डलावस्मिन् कृच्छ्रं वस्तुमिहोत्सहे।**
**कल्पयौकः सुविपुलं यत्राहं निवसे सुखम्॥ १८॥**

| पदार्थ– | **वस्तुम्** = बस्न | **कल्पय** = बनाइदिनुहोस् |
|---|---|---|
| **अस्मिन्** = यो | **न उत्सहे** = सक्दिनँ | **यत्र** = जहाँ |
| **कमण्डलौ** = कमण्डलुभित्र | **इह** = यहाँ | **अहं** = म |
| **अहं** = म | **सुविपुलं** = ठुलो | **सुखम्** = सुखपूर्वक |
| **कृच्छ्रं** = कष्टपूर्वक | **ओकः** = बस्ने ठाउँ | **निवसे** = बस्न सकूँ |

**वाक्यार्थ–** अब म यो साना कमण्डलुभित्र कष्टपूर्वक बस्न सक्दिनँ। त्यसैले मेरो लागि यहाँ एउटा ठुलो बस्ने ठाउँ बनाइदिनुहोस् जहाँ म सुखपूर्वक बस्न सकूँ।

**स एनां तत आदाय न्यधादौदञ्चनोदके।**
**तत्र क्षिप्ता मुहूर्तेन हस्तत्रयमवर्धत॥ १९॥**

**पदार्थ–**
**सः** = (माछाद्वारा ठुलो ठाउँका लागि प्रार्थित) ती सत्यव्रतले
**ततः** = त्यस कमण्डलुबाट
**एनां** = त्यो माछालाई
**आदाय** = निकालेर
**औदञ्चनोदके** = ठुलो घ्याम्पोको जलमा
**न्यधात्** = राखिदिए
**तत्र** = त्यो घ्याम्पोको जलमा
**क्षिप्ता** = राखिएको माछा
**मुहूर्तेन** = एक मुहूर्त (४८ मिनेट)मा नै
**हस्तत्रयम्** = तीन हात
**अवर्धत** = बढ्यो

**वाक्यार्थ–** राजा सत्यव्रतलाई माछाले ठुलो ठाउँमा राखिदिन प्रार्थना गरेपछि उनले माछालाई कमण्डलुबाट झिकेर एउटा ठुलो घ्याम्पोमा राखिदिए। घ्याम्पोमा राखिएको माछा एक मुहूर्तमा नै तीन हात बढ्यो।

**न म एतदलं राजन् सुखं वस्तुमुदञ्चनम्।**
**पृथु देहि पदं मह्यं यत् त्वाहं शरणं गता ॥ २० ॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**मे** = मलाई
**सुखं** = सुखपूर्वक
**वस्तुं** = बस्नलाई
**एतत्** = यो
**उदञ्चनम्** = थोरै पानी
**न अलं** = पर्याप्त छैन (त्यसैले)
**मह्यं** = मलाई
**पृथु** = ठुलो
**पदं** = बस्ने ठाउँ
**देहि** = दिनुहोस्
**यत्** = किनभने
**अहं** = म
**त्वा** = हजुरको
**शरणं** = शरणमा
**गता** = आएको छु

**वाक्यार्थ–** हे राजा ! मलाई सुखपूर्वक बस्न यो थोरै पानी पर्याप्त भइरहेको छैन। त्यसैले मलाई अझै ठुलो बस्ने ठाउँ दिनुहोस् किनभने म हजुरको शरणमा आएको छु।

**तत आदाय सा राज्ञा क्षिप्ता राजन् सरोवरे।**
**तदावृत्यात्मना सोऽयं महामीनोऽन्ववर्धत ॥ २१ ॥**

**पदार्थ–**
**राज्ञा** = राजाद्वारा
**ततः** = त्यो घ्याम्पोबाट
**आदाय** = झिकेर
**सा** = त्यो माछो
**सरोवरे** = पोखरीमा
**क्षिप्ता** = राखियो
**राजन्** = हे राजा
**सः अयं** = त्यो माछो
**महामीनः** = महामत्स्य भई
**आत्मना** = आफ्नो शरीरद्वारा
**तत्** = त्यो पोखरीलाई
**आवृत्य** = ढाकेर
**अन्ववर्धत** = बढ्यो

**वाक्यार्थ–** यसरी माछाद्वारा बस्नका लागि ठुलो ठाउँ दिन प्रार्थना गरिएका राजा सत्यव्रतले त्यसलाई पोखरीमा राखिदिए। हे राजा परीक्षित् ! पोखरीमा राखिएको माछाले बढेर महामत्स्यको रूप लिई आफ्नो शरीरले पूरा पोखरीलाई ढाकिदियो।

**नैतन्मे स्वस्तये राजन्नुदकं सलिलौकसः।**
**निधेहि रक्षायोगेन ह्रदे मामविदासिनि ॥ २२ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा सत्यव्रत
**सलिलौकसः** = पानी नै निवासस्थान भएको
**मे** = मेरो
**एतत्** = यो
**उदकं** = पोखरीको पानी
**स्वस्तये** = सुखका लागि
**न** = हुन सकेन (त्यसैले)
**रक्षायोगेन** = मेरो रक्षाको उपायको लागि
**अविदासिनि** = जल नसकिने
**ह्रदे** = तालमा
**मां** = मलाई
**निधेहि** = राखिदिनुहोस्

**वाक्यार्थ—** (त्यसपछि त्यो महामत्स्यले भन्यो) हे राजा सत्यव्रत ! पानीमा बस्ने मलाई यो पोखरीको पानी पनि सुखदायक हुन सकेन। त्यसैले मेरो रक्षाका लागि कहिल्यै जलक्षय नहुने तालमा लगेर मलाई राखिदिनुहोस्।

**इत्युक्तः सोऽनयन्मत्स्यं तत्र तत्राविदासिनि।**
**जलाशये सम्मितं तं समुद्रे प्राक्षिपज्झषम्॥ २३॥**

**पदार्थ—**
**इति** = यसरी
**उक्तः** = (महामत्स्यद्वारा) अनुरोध गरिएका
**सः** = ती सत्यव्रतले
**मत्स्यं** = मत्स्यलाई
**अविदासिनि** = पानी नसकिने
**तत्र तत्र** = ती-ती (धेरै ओटा)
**जलाशये** = जलाशयमा
**अनयत्** = लगे
**सम्मितं** = (बढ्दै गएर) ती-ती जलाशय बराबर भएको
**तं** = त्यो
**झषम्** = महामत्स्यलाई
**समुद्रे** = समुद्रमा
**प्राक्षिपत्** = राखिदिए

**वाक्यार्थ—** यसरी महामत्स्यले अनुरोध गरेपछि सत्यव्रतले तिनलाई अगाध जलराशि भएको धेरै ओटा जलाशयमा लगेर राखे तर झन्-झन् बढ्दै गएर प्रत्येक जलाशयबराबरको आकारमा बढिरहेको त्यो महामत्स्यलाई सत्यव्रतले समुद्रमा लगेर राखिदिए।

**क्षिप्यमाणस्तमाहेदमिह मां मकरादयः।**
**अदन्त्यतिबला वीर मां नेहोत्स्रष्टुमर्हसि॥ २४॥**

**पदार्थ—**
**क्षिप्यमाणः** = समुद्रमा राखिएको महामत्स्यले
**तं** = ती राजा सत्यव्रतलाई
**इदम्** = यो कुरा
**आह** = भन्यो
**वीर** = हे वीर
**इह** = यो समुद्रमा
**मां** = मलाई
**अतिबलाः** = अत्यन्त बलवान्
**मकरादयः** = गोही आदि जलजन्तुहरूले
**अदन्ति** = खान्छन् (त्यसैले)
**इह** = यो समुद्रमा
**मां** = मलाई
**उत्स्रष्टुं** = त्याग्न
**न अर्हसि** = योग्य हुनुहुन्न

**वाक्यार्थ—** समुद्रमा राखिएको महामत्स्यले राजा सत्यव्रतलाई भन्यो— हे वीर ! यस समुद्रमा मलाई अति बलवान् गोही आदि जलजन्तुहरूले खान्छन्। त्यसैले मलाई यो समुद्रमा नछाड्नुहोस्।

**एवं विमोहितस्तेन वदता वल्गुभारतीम् ।**

**तमाह को भवानस्मान् मत्स्यरूपेण मोहयन् ॥ २५ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**वल्गुभारतीम्** = सुन्दर वाणी
**वदता** = बोल्ने
**तेन** = ती मत्स्यद्वारा
**विमोहितः** = मोहित भएका सत्यव्रतले
**तं** = ती महामत्स्यलाई
**आह** = भने
**भवान्** = हजुर
**मत्स्यरूपेण** = माछोको स्वरूपद्वारा
**अस्मान्** = हामीलाई
**मोहयन्** = मोहित गराउने
**कः** = को हुनुहुन्छ

**वाक्यार्थ–** यसरी महामत्स्यको मिठो वाणी सुनेर मोहित भएका राजा सत्यव्रतले भने– माछोको स्वरूप धारण गरी मलाई मोहित गराउने हजुर को हुनुहुन्छ ?

**नैवंवीर्यो जलचरो दृष्टोऽस्माभिः श्रुतोऽपि च ।**

**यो भवान् योजनशतमह्नाभिव्यानशे सरः ॥ २६ ॥**

**पदार्थ–**
**एवंवीर्यः** = यति धेरै प्रभावशाली
**जलचरः** = जलचर
**अस्माभिः** = हामीद्वारा
**दृष्टः** = देखिएको
**श्रुतः अपि च** = सुनिएको पनि
**न** = छैन
**यः** = जुन
**भवान्** = हजुरले
**अह्ना** = एक दिनमा नै
**योजनशतं** = सय योजन
**सरः** = ताललाई
**अभिव्यानशे** = ढाकिदिनुभयो

**वाक्यार्थ–** यति धेरै प्रभावशाली जलचर हामीले देखेको पनि छैन र सुनेको पनि छैन। हजुरले त एक दिनमा नै सय योजन फैलिएको ताललाई आफ्नै शरीरले ढाकिदिनुभयो।

**नूनं त्वं भगवान् साक्षाद्धरिर्नारायणोऽव्ययः ।**

**अनुग्रहाय भूतानां धत्से रूपं जलौकसाम् ॥ २७ ॥**

**पदार्थ–**
**त्वं** = हजुर
**नूनं** = निश्चय नै
**अव्ययः** = अविनाशी
**साक्षात्** = प्रत्यक्ष
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**नारायणः** = नारायण (हुनुहुन्छ)
**भूतानां** = प्राणीहरूको
**अनुग्रहाय** = अनुग्रहका लागि
**जलौकसाम्** = जलचरको
**रूपं** = रूप
**धत्से** = धारण गर्नुभएको छ

**वाक्यार्थ–** निश्चय नै हजुर अविनाशी भगवान् साक्षात् श्रीहरि नारायण हुनुहुन्छ र हजुरले प्राणीहरूलाई अनुग्रह गर्न जलचर मत्स्यको रूप धारण गर्नुभएको हो।

**नमस्ते पुरुषश्रेष्ठ स्थित्युत्पत्त्यप्ययेश्वर ।**

**भक्तानां नः प्रपन्नानां मुख्यो ह्यात्मगतिर्विभो ॥ २८ ॥**

**पदार्थ–**
**पुरुषश्रेष्ठ** = हे पुरुषोत्तम
**विभो** = हे सर्वव्यापक
**स्थित्युत्पत्त्यप्ययेश्वर** = जगत्को उत्पत्ति, स्थिति र लयको नियामक हे भगवान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**प्रपन्नानां** = शरणमा आएका
**नः** = हामी
**भक्तानां** = भक्तहरूको
**हि** = निश्चय नै
**मुख्यः** = एक मात्र
**आत्मगतिः** = आत्माको आश्रय (हजुर नै हुनुहुन्छ)

**वाक्यार्थ–** हे भगवान् ! हे सर्वव्यापक ! जगत्को उत्पत्ति, स्थिति र लयका नियामक हे भगवान् ! म हजुरलाई नमस्कार गर्दछु। शरणमा आएका हामी भक्तहरूको एक मात्र आश्रय पनि हजुर नै हुनुहुन्छ।

**सर्वे लीलावतारास्ते भूतानां भूतिहेतवः।**
**ज्ञातुमिच्छाम्यदो रूपं यदर्थं भवता धृतम्॥ २९॥**

**पदार्थ–**
**ते** = हजुरका
**सर्वे** = सम्पूर्ण
**लीलावताराः** = लीलावतारहरू
**भूतानां** = प्राणीहरूको
**भूतिहेतवः** = उन्नतिकै लागि हुन्छन् (तापनि)
**यदर्थं** = जुन प्रयोजनका लागि
**अदः** = यो मत्स्यको
**रूपं** = रूप
**भवता** = हजुरले
**धृतम्** = धारण गर्नुभयो (त्यसको प्रयोजन)
**ज्ञातुम्** = जान्न
**इच्छामि** = चाहन्छु

**वाक्यार्थ–** यद्यपि हजुरका सम्पूर्ण लीलाअवतारहरू प्राणीहरूकै उन्नतिका लागि हुन्छन् तापनि हजुरले यो माछाको रूप चाहिँ कुन प्रयोजनका लागि धारण गर्नुभयो ? त्यो प्रयोजन म जान्न चाहन्छु।

**न तेऽरविन्दाक्ष पदोपसर्पणं मृषा भवेत् सर्वसुहृत्प्रियात्मनः।**
**यथेतरेषां पृथगात्मनां सतामदीदृशो यद् वपुरद्भुतं हि नः॥ ३०॥**

**पदार्थ–**
**अरविन्दाक्ष** = हे कमलनयन
**पृथगात्मनां** = देहादिमा अभिमान भएका
**इतरेषां** = अन्य संसारी व्यक्तिहरूको
**यथा** = जसरी
**पदोपसर्पणं** = चरणको शरणमा जानु
**मृषा** = व्यर्थ हुन्छ (त्यसरी)
**सर्वसुहृत्प्रियात्मनः** = सम्पूर्ण प्राणीहरूका मित्र परमप्रिय
**ते** = हजुरको (शरणमा जानु)
**न भवेत्** = व्यर्थ हुँदैन
**यत्** = किनभने
**हि** = निश्चय नै
**सतां** = आफ्ना भक्त
**नः** = हामीहरूलाई
**अद्भुतं** = यो अद्भुत
**वपुः** = मत्स्यशरीर
**अदीदृशः** = देखाउनुभएको छ

**वाक्यार्थ–** हे कमलनयन प्रभु ! जसरी देहादिमा अभिमान भएका संसारी व्यक्तिहरूको शरणमा जानु व्यर्थ हुन्छ त्यसरी सम्पूर्ण प्राणीहरूका मित्र र परमप्रिय भएका हजुरको शरणमा जानु व्यर्थ हुँदैन यसैको लागि हजुरले अहिले आफ्नो भक्त मलाई यो अत्यन्त अद्भुत मत्स्यशरीर

देखाउनुभएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति ब्रुवाणं नृपतिं जगत्पतिः सत्यव्रतं मत्स्यवपुर्युगक्षये।**

**विहर्तुकामः प्रलयार्णवेऽब्रवीच्चिकीर्षुरेकान्तजनप्रियः प्रियम्॥ ३१॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**ब्रुवाणं** = प्रार्थना गरिरहेका
**नृपतिं** = राजा
**सत्यव्रतं** = सत्यव्रतलाई
**एकान्तजनप्रियः** = आफ्नो शरणमा आएका भक्तहरूका प्रेमी
**जगत्पतिः** = जगत्का मालिक
**मत्स्यवपुः** = माछोको शरीर धारण गर्नुभएका भगवान्ले
**युगक्षये** = कल्पको अन्त्यमा
**प्रलयार्णवे** = प्रलयकालीन समुद्रमा
**विहर्तुकामः** = विहार गर्ने इच्छा लिई
**प्रियम्** = (सत्यव्रतको) कल्याण
**चिकीर्षुः** = गर्न इच्छा गर्दै
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** यसप्रकार राजर्षि सत्यव्रतले प्रार्थना गरिसकेपछि आफ्ना शरणागत भक्तहरूको अनन्य प्रेमी भएकाले नै मत्स्यावतार लिएका जगत्पति भगवान्ले कल्पान्तको प्रलयकालीन समुद्रमा विहार गर्ने र आफ्ना परमभक्त सत्यव्रतको कल्याण गर्ने इच्छा गरी उनलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**सप्तमेऽद्यतनादूर्ध्वमहन्येतदरिन्दम।**

**निमङ्क्ष्यत्यप्ययाम्भोधौ त्रैलोक्यं भूर्भुवादिकम्॥ ३२॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुमर्दन सत्यव्रत
**अद्यतनात्** = आजको दिनदेखि
**ऊर्ध्वम्** = अगाडि
**सप्तमे** = सातौँ
**अहनि** = दिनमा
**एतत्** = यो
**भूर्भुवादिकम्** = भूः, भुवः आदि
**त्रैलोक्यं** = तीनै लोक
**अप्ययाम्भोधौ** = प्रलयकालको समुद्रमा
**निमङ्क्ष्यति** = डुब्नेछ

**वाक्यार्थ–** शत्रुमर्दन हे सत्यव्रत ! आजको दिनदेखि सातौँ दिनमा भूः, भुवः आदि तीनै लोकहरू प्रलयकालीन समुद्रमा डुब्नेछन्।

**त्रिलोक्यां लीयमानायां संवर्ताम्भसि वै तदा।**

**उपस्थास्यति नौः काचिद् विशाला त्वां मयेरिता॥ ३३॥**

**पदार्थ–**
**संवर्ताम्भसि** = प्रलयकालीन जलमा
**त्रिलोक्यां** = तीनै लोक
**लीयमानायां** = लीन हुँदा
**तदा** = त्यो वेलामा
**वै** = निश्चय नै
**मया** = मद्वारा
**ईरिता** = प्रेरित भई

**काचित्** = कुनै
**विशाला** = ठुलो
**नौः** = डुङ्गा
**त्वां** = तिम्रोसामु
**उपस्थास्यति** = उपस्थित हुनेछ

**वाक्यार्थ–** तीनै लोक प्रलयकालीन जलमा लीन हुँदा मेरो प्रेरणाद्वारा तिम्रा सामु एउटा ठुलो डुङ्गा आउनेछ।

**त्वं तावदोषधीः सर्वा बीजान्युच्चावचानि च।**
**सप्तर्षिभिः परिवृतः सर्वसत्त्वोपबृंहितः॥ ३४॥**
**आरुह्य बृहतीं नावं विचरिष्यस्यविक्लवः।**
**एकार्णवे निरालोके ऋषीणामेव वर्चसा॥ ३५॥**

**पदार्थ–**
**त्वं** = तिमी
**तावत्** = त्यो वेलामा
**सर्वाः** = सम्पूर्ण
**ओषधीः** = वनस्पतिहरू
**उच्चावचानि** = साना–ठूला
**बीजानि च** = बिउहरू पनि (लिएर)
**सर्वसत्त्वोपबृंहितः** = सम्पूर्ण जन्तुहरूको सूक्ष्म शरीरले सहित भई
**सप्तर्षिभिः** = सप्तर्षिहरूद्वारा
**परिवृतः** = युक्त भई
**बृहतीं** = त्यो ठुलो
**नावं** = डुङ्गामा
**आरुह्य** = चढेर
**अविक्लवः** = दीनताले रहित भएर
**निरालोके** = सूर्य आदिको पनि प्रकाश नभएको (अँध्यारो)
**एकार्णवे** = प्रलयकालीन समुद्रमा
**ऋषीणाम्** = सप्तर्षिहरूको
**वर्चसा एव** = प्रकाशद्वारा नै
**विचरिष्यसि** = विचरण गर्नेछौ

**वाक्यार्थ–** त्यस समयमा तिमीले सम्पूर्ण वनस्पतिहरू, साना–ठुला सबै किसिमका बिउहरू तथा सम्पूर्ण प्राणीहरूको सूक्ष्म शरीरलाई लिएर सप्तर्षिहरूका साथ त्यो मैले पठाएको ठुलो डुङ्गामा चढ्नू। सूर्य आदि नक्षत्रहरूको पनि प्रकाश नभएको प्रलयकालीन त्यस समुद्रमा कुनै पनि प्रकारको भय वा दीनताले रहित भएर तिमीले सप्तर्षिहरूको दिव्य प्रकाशको भरमा समुद्रमा विचरण गर्नुपर्नेछ।

**दोधूयमानां तां नावं समीरेण बलीयसा।**
**उपस्थितस्य मे शृङ्गे निबध्नीहि महाहिना॥ ३६॥**

**पदार्थ–**
**बलीयसा** = प्रचण्ड
**समीरेण** = वायुका कारण
**दोधूयमानां** = अत्यन्तै हल्लिएको
**तां** = त्यो
**नावं** = डुङ्गालाई
**उपस्थितस्य** = माछाको रूपमा त्यहीँ उपस्थित
**मे** = मेरो
**शृङ्गे** = सिङ्मा
**महाहिना** = (ठुलो सर्पद्वारा) वासुकि नागद्वारा
**निबध्नीहि** = बाँधिदेऊ

**वाक्यार्थ–** प्रचण्ड तुफान चलेर मैले पठाएको डुङ्गा जब समुद्रमा हल्लिन थाल्दछ तब म त्यहीँ

माछाको रूपमा उपस्थित हुनेछु र तिमीले त्यहीँ आएका वासुकि नागद्वारा मेरो सिङ्मा डुङ्गालाई बाँधिदेऊ।

**अहं त्वामृषिभिः साकं सहनावमुदन्वति।**
**विकर्षन् विचरिष्यामि यावद् ब्राह्मी निशा प्रभो॥ ३७॥**

**पदार्थ—**
**प्रभो** = हे समर्थ सत्यव्रत
**अहं** = म
**ऋषिभिः साकं** = ऋषिहरूले सहित भएर
**सहनावं** = डुङ्गाले सहित भएको
**त्वां** = तिमीलाई
**उदन्वति** = त्यस समुद्रमा
**विकर्षन्** = तान्दै
**यावत्** = जबसम्म
**ब्राह्मी** = ब्रह्माजीको
**निशा** = रात रहन्छ, (तबसम्म)
**विचरिष्यामि** = विचरण गर्नेछु

**वाक्यार्थ—** हे समर्थ सत्यव्रत! त्यसपछि म सप्तर्षिहरूले सहित भई डुङ्गामा बसेका तिमीलाई लिएर तबसम्म त्यस प्रलयकालीन समुद्रमा विचरण गरिरहनेछु जबसम्म ब्रह्माजीको रात रहिरहनेछ।

**मदीयं महिमानं च परं ब्रह्मेति शब्दितम्।**
**वेत्स्यस्यनुगृहीतं मे सम्प्रश्नैर्विवृतं हृदि॥ ३८॥**

**पदार्थ—**
**परं ब्रह्म इति** = परब्रह्म यो शब्दद्वारा
**शब्दितम्** = बताइएको
**मदीयं** = मेरो
**महिमानं च** = महान् स्वरूपलाई पनि
**सम्प्रश्नैः** = तिमीले गरेका प्रश्नहरूद्वारा
**मे** = मैले
**विवृतं** = दिएको उत्तरद्वारा
**हृदि** = हृदयमा
**अनुगृहीतं** = अनुग्रह गरी दिएकैँ
**वेत्स्यसि** = (अपरोक्षरूपले) जान्नेछौ

**वाक्यार्थ—** त्यस वेला तिमी मलाई प्रश्न गर्नेछौ र म तिमीलाई अनुग्रह गरी उपदेश दिनेछु। त्यसपछि परब्रह्मशब्दद्वारा बोधित मेरो वास्तविक स्वरूप तिम्रो हृदयमा प्रकाशित हुनेछ र त्यसलाई तिमी अपरोक्षरूपले जान्नेछौ।

**इत्थमादिश्य राजानं हरिरन्तरधीयत।**
**सोऽन्ववैक्षत तं कालं यं हृषीकेश आदिशत्॥ ३९॥**

**पदार्थ—**
**इत्थं** = यसप्रकार
**हरिः** = मत्स्यावतारधारी भगवान् श्रीहरिले
**राजानं** = राजा सत्यव्रतलाई
**आदिश्य** = आदेश दिएर
**अन्तरधीयत** = अन्तर्धान हुनुभयो
**सः** = ती सत्यव्रतले
**यं** = जुन समय
**हृषीकेशः** = भगवान् हृषीकेशले
**आदिशत्** = आज्ञा दिनुभएको थियो
**तं** = त्यो
**कालं** = समयलाई
**अन्ववैक्षत** = प्रतीक्षा गर्न लागे

**वाक्यार्थ–** यसप्रकार मत्स्यावतारधारी भगवान् श्रीहरि राजा सत्यव्रतलाई आदेश दिएर अन्तर्धान हुनुभयो। त्यसपछि राजा सत्यव्रतले त्यो समयको प्रतीक्षा गर्न लागे, जुन समयमा भगवान्ले प्रलय हुने आज्ञा गर्नुभएको थियो।

**आस्तीर्य दर्भान् प्राक्कूलान् राजर्षिः प्रागुदङ्मुखः।**
**निषसाद हरेः पादौ चिन्तयन् मत्स्यरूपिणः॥ ४०॥**

**पदार्थ–**
**प्राक्कूलान्** = पूर्वतिर टुप्पो फर्काइएका
**दर्भान्** = कुशहरू
**आस्तीर्य** = बिछ्याएर (त्यसमा)
**प्रागुदङ्मुखः** = पूर्वउत्तर (ईशान) दिशातर्फ फर्किएर बसेका
**राजर्षिः** = राजर्षि सत्यव्रतले
**मत्स्यरूपिणः** = मत्स्यरूप
**हरेः** = भगवान् हरिको
**पादौ** = चरणकमललाई
**चिन्तयन्** = ध्यान गर्दै
**निषसाद** = बसे

**वाक्यार्थ–** पूर्वतिर टुप्पो फर्काइएका कुशमाथि आफू ईशानतर्फ मुख गरी बसेर राजर्षि सत्यव्रत मत्स्यरूप भगवान् हरिको चरणकमलको चिन्तन गर्न थाले।

**ततः समुद्र उद्वेलः सर्वतः प्लावयन् महीम्।**
**वर्धमानो महामेघैर्वर्षद्भिः समदृश्यत॥ ४१॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**वर्षद्भिः** = वृष्टि गरिरहेका
**महामेघैः** = डरलाग्दा मेघहरूद्वारा
**वर्धमानः** = बढिरहेको
**उद्वेलः** = किनारालाई नाघ्दै गरेको
**सर्वतः** = चारैतिरबाट
**महीम्** = पृथिवीलाई
**प्लावयन्** = डुबाउँदै गरेको
**समुद्रः** = समुद्र
**समदृश्यत** = देखियो

**वाक्यार्थ–** त्यसपछि (भगवान्ले निर्देश गरेअनुरूप) भयङ्कर ठुल्ठुला मेघहरूले मुसलधारे वृष्टि गरेकाले बढिरहेको, किनाराको अतिक्रमण गरिरहेको एवं चारैतिरबाट सम्पूर्ण पृथिवीलाई डुबाउँदै गरेको समुद्र देखियो।

**ध्यायन् भगवदादेशं ददृशे नावमागताम्।**
**तामारुरोह विप्रेन्द्रैरादायौषधिवीरुधः॥ ४२॥**

**पदार्थ–**
**भगवदादेशं** = भगवान्को आदेशलाई
**ध्यायन्** = चिन्तन गर्दै (सत्यव्रतले)
**आगताम्** = आफ्नो अगाडि आएको
**नावं** = डुङ्गालाई
**ददृशे** = देखे (त्यसपछि)
**ओषधिवीरुधः** = विभिन्न प्रकारका वनस्पति र बिउहरू
**आदाय** = लिएर
**विप्रेन्द्रैः** = सप्तर्षिहरूका साथमा
**तां** = त्यस डुङ्गामा
**आरुरोह** = चढे

**वाक्यार्थ–** मत्स्यरूप भगवान्को आज्ञालाई चिन्तन गर्दै बसिरहेका सत्यव्रतले आफ्नो अगाडि आएको डुङ्गालाई देखे र विभिन्न प्रकारका वनस्पति र बिउहरू लिएर उनी सप्तर्षिहरूका साथमा त्यस डुङ्गामा चढे।

**तमूचुर्मुनयः प्रीता राजन् ध्यायस्व केशवम्।**

**स वै नः सङ्कटादस्मादविता शं विधास्यति॥ ४३॥**

**पदार्थ–**
**प्रीताः** = प्रसन्न भएका
**मुनयः** = सप्तर्षिहरूले
**तं** = ती राजा सत्यव्रतलाई
**ऊचुः** = भने
**राजन्** = हे राजा
**केशवम्** = भगवान् केशवलाई
**ध्यायस्व** = ध्यान गर्नुहोस्
**सः** = ती भगवान् केशवले नै
**वै** = निश्चय पनि
**नः** = हामीहरूलाई
**अस्मात्** = यो
**सङ्कटात्** = सङ्कटबाट
**अविता** = रक्षा गर्नुहुनेछ
**शं** = कल्याण पनि
**विधास्यति** = गर्नुहुनेछ

**वाक्यार्थ–** डुङ्गामा चढेका सप्तर्षिहरूले अत्यन्त प्रसन्न भई राजा सत्यव्रतलाई भने– हे राजा सत्यव्रत ! तपाईं भगवान् केशवको ध्यान गर्नुहोस् किनभने उहाँले नै हामीलाई यो प्रलयजन्य सङ्कटबाट रक्षा गर्नुहुनेछ र हाम्रो कल्याण गर्नुहुनेछ।

**सोऽनुध्यातस्ततो राज्ञा प्रादुरासीन्महार्णवे।**

**एकशृङ्गधरो मत्स्यो हैमो नियुतयोजनः॥ ४४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**राज्ञा** = राजा सत्यव्रतद्वारा
**अनुध्यातः** = ध्यान गरिएका
**एकशृङ्गधरः** = एउटा सिङ धारण गरेका
**हैमः** = सुनौलो कान्ति भएको
**नियुतयोजनः** = दश लाख योजनभरि शरीर फैलिएको
**मत्स्यः** = मत्स्यरूप
**सः** = ती भगवान्
**महार्णवे** = त्यो विशाल समुद्रमा
**प्रादुरासीत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** त्यसपछि राजा सत्यव्रतले मत्स्यरूप भगवान् नारायणको ध्यान गर्नुभयो। त्यसै वेलामा एउटा मात्र सिङ भएका, सुनौलो कान्ति भएका र दश लाख योजनसम्म शरीर फैलिएका मत्स्यरूप भगवान् त्यो विशाल समुद्रमा प्रकट हुनुभयो।

**निबध्य नावं तच्छृङ्गे यथोक्तो हरिणा पुरा।**

**वरत्रेणाहिना तुष्टस्तुष्टाव मधुसूदनम्॥ ४५॥**

**पदार्थ–**
**हरिणा** = भगवान् श्रीहरिले
**पुरा** = पहिले
**यथा उक्तः** = जसरी भन्नुभएको थियो (त्यसै गरी राजाले)
**वरत्रेण** = डोरीजस्तो भएको
**अहिना** = वासुकि नागद्वारा
**नावं** = डुङ्गालाई
**तच्छृङ्गे** = ती मत्स्यको सिङमा

| | | |
|---|---|---|
| **निबध्य** = बाँधेर | **मधुसूदनम्** = भगवान् | **तुष्टाव** = स्तुति गरे |
| **तुष्टः** = प्रसन्न भई | मधुसूदनलाई | |

**वाक्यार्थ–** भगवान्‌ले पहिले जसरी आज्ञा गर्नुभएको थियो त्यहीअनुरूप वासुकि नागलाई डोरी बनाई राजा सत्यव्रतले आफूहरू चढेको डुङ्गालाई ती मत्स्यरूप भगवान्‌को सिङमा बाँधिदिए। त्यसपछि प्रसन्न भई उनी भगवान् मधुसूदनको स्तुति गर्न थाले।

**राजोवाच** (राजा सत्यव्रतले भने)

**अनाद्यविद्योपहतात्मसंविदस्तन्मूलसंसारपरिश्रमातुराः।**
**यदृच्छयेहोपसृता यमाप्नुयुर्विमुक्तिदो नः परमो गुरुर्भवान्॥ ४६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अनाद्यविद्योपहतात्मसंविदः** = अनादि अविद्याका कारण आत्मज्ञान ढाकिएका | **इह** = यो लोकमा | (त्यस्ता) |
| **तन्मूलसंसारपरिश्रमातुराः** = अविद्याजन्य सांसारिक दुःखहरूद्वारा पीडित जीवहरू | **यदृच्छया** = आकस्मिक कृपाद्वारा | **विमुक्तिदः** = मुक्तिदाता |
| | **उपसृताः** = हजुरको शरणमा आएर | **भवान्** = हजुर नै |
| | **यं** = जुन हजुरलाई | **नः** = हाम्रा |
| | **आप्नुयुः** = प्राप्त गर्दछन् | **परमः** = परम |
| | | **गुरुः** = गुरु हुनुहुन्छ |

**वाक्यार्थ–** हे भगवान्! अनादि अविद्याका कारण आत्मज्ञान ढाकिएकाले सांसारिक दुःखहरूद्वारा पीडित जीवहरूलाई जब हजुरको आकस्मिक रूपमा कृपा प्राप्त हुन्छ तब तिनीहरू हजुरको शरणमा आउँछन् र उनीहरूले हजुरलाई प्राप्त गर्न सक्दछन्। यसरी सांसारिक बन्धनबाट मुक्ति दिनुहुने हजुर नै हाम्रा एक मात्र परम गुरु हुनुहुन्छ।

**जनोऽबुधोऽयं निजकर्मबन्धनः सुखेच्छया कर्म समीहतेऽसुखम्।**
**यत्सेवया तां विधुनोत्यसन्मतिं ग्रन्थिं स भिन्द्याद्धृदयं स नो गुरुः॥४७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **निजकर्मबन्धनः** = आफ्नै कर्मको बन्धनमा परेको | **कर्म** = कर्म | **नः** = मेरो |
| **अबुधः** = अज्ञानी | **समीहते** = गर्दछ | **हृदयं** = हृदयको |
| **अयं** = यो | **यत्सेवया** = जुन हजुरको सेवाद्वारा | **ग्रन्थिं** = ग्रन्थि (गाँठो)लाई |
| **जनः** = जीवले | **तां** = त्यो | **भिन्द्यात्** = भेदन गरिदिनुहोस् (फुकाइदिनुहोस्) |
| **सुखेच्छया** = सुखको इच्छाले | **असन्मतिं** = अविवेक | **सः** = त्यस्ता हजुर नै (हाम्रो) |
| **असुखम्** = दुःखदायी | **विधुनोति** = निरस्त हुन्छ | **गुरुः** = परमगुरु हुनुहुन्छ |
| | **सः** = त्यस्ता हजुरले | |

**वाक्यार्थ–** आफैँले गरेका कर्महरूका कारण बन्धनमा परेका अज्ञानी जीवहरू सुखको इच्छा

गरी दुःखदायी कर्महरू गर्दछन्। हजुरको सेवाबाट अविवेक स्वतः नष्ट हुन्छ। त्यस्ता हजुरले मेरो हृदयको ग्रन्थि भेदन गरिदिनुहोस्। हजुर मेरा परमगुरु हुनुहुन्छ।

**यत्सेवयाग्नेरिव रुद्ररोदनं पुमान् विजह्यान्मलमात्मनस्तमः।**
**भजेत वर्णं निजमेष सोऽव्ययो भूयात् स ईशः परमो गुरोर्गुरुः॥ ४८॥**

**पदार्थ—**
**पुमान्** = मुमुक्षुले
**यत्सेवया** = जुन हजुरको सेवाद्वारा
**आत्मनः** = मनको
**तमः** = अज्ञानरूप
**मलं** = मललाई
**अग्नेः** = अग्निको सम्पर्कबाट
**रुद्ररोदनं इव** = सुन र चाँदीले झैँ
**विजह्यात्** = त्याग्दछ
**निजं** = आफ्नो
**वर्णं** = शुद्ध स्वरूपलाई पनि
**भजेत** = प्राप्त गर्दछ
**सः** = त्यस्ता हजुर
**अव्ययः** = अविनाशी हुनुहुन्छ
**सः एषः** = त्यही हजुर
**ईशः** = परमेश्वर
**गुरोः** = गुरुको पनि
**परमः** = परम
**गुरुः** = गुरु
**भूयात्** = हुनुहोस्

**वाक्यार्थ—** जसरी आगोको सम्पर्कबाट सुन, चाँदी जस्ता धातुहरूले आफूमा रहेको अशुद्धताई त्याग्दछन्, त्यसै गरी मुमुक्षुले पनि हजुरकै सेवा गरेर आफ्नो मनमा रहेका अज्ञान आदि सम्पूर्ण मलहरूलाई त्याग्दछ र आफ्नो विशुद्ध आत्मस्वरूपलाई प्राप्त गर्दछ। त्यस्ता अविनाशी परमेश्वर हजुर नै मेरो गुरुको पनि परमगुरु हुनुहोस्।

**विवरण—** राजा सत्यव्रतले यहाँ भगवत्सेवाद्वारा नै अविद्याग्रन्थिको नाश हुने बताएका छन्। सम्पूर्ण मानिसहरू आत्मा हुन्, तर उनीहरूको **आत्मसंवित्** अर्थात् म आत्मा हुँ भन्ने ज्ञानलाई अनादि अविद्याले ढाकिदिएको छ। त्यही अज्ञानका कारणले नै सबै जीवहरू संसारको चक्करमा घुमिरहेका छन्। यसबाट मुक्तिका लागि तपस्या, दान, व्रत, यज्ञ आदि अनेकौँ साधनहरू बताइएका छन्, तर मुख्य रूपमा चाहिँ परमात्माको सेवा गरेर मात्र यो असद्बुद्धिलाई हटाउन सकिन्छ। किन अरू साधनहरूले हटाउन सक्तैनन् ? यो शङ्काको उत्तरमा यहाँ चाँदीको दृष्टान्त दिइएको छ। जसरी सुन या चाँदीलाई पखालेर या सुकाएर त्यसमा रहेको कालोपन हट्दैन, त्यसलाई त आगोमैँ तताउनुपर्दछ, त्यसै गरी सम्पूर्ण पाप र असद्बुद्धिलाई हटाउन पनि भगवान्कै सेवा गर्नुपर्दछ। जसरी सुन–चाँदी आदि तैजस पदार्थहरू आफ्नो मूल स्वरूप आगोमा पगालिएपछि मात्र शुद्ध बन्दछन्, त्यसै गरी जीव पनि परमात्मामा गई पग्लिएपछि मात्र शुद्ध बन्दछ। त्यसैले आन्तरिक भावले परमात्माको नजिकमा जानु नै अविद्याग्रन्थिलाई फुकाउने उत्तम साधन हो भनी यहाँ बताइएको छ।

**न यत्प्रसादायुतभागलेशमन्ये च देवा गुरवो जनाः स्वयम्।**
**कर्तुं समेताः प्रभवन्ति पुंसस्तमीश्वरं त्वां शरणं प्रपद्ये॥ ४९॥**

**पदार्थ—**
**पुंसः** = (हजुरबाट विमुख भई अरू कसैको उपासना गर्ने) व्यक्तिलाई
**देवाः** = देवताहरू
**गुरवः** = गुरुजनहरू

**अन्ये च** = अरू
**जनाः** = मान्छेहरू पनि
**समेताः** = सबै मिलेर
**स्वयम्** = स्वतन्त्ररूपमा
**यत्प्रसादायुतभागलेशं** = हजुरको अनुग्रहको दश हजार भागमध्ये एकभागको लेश मात्र पनि (बराबर)
**कर्तुं** = बनाउन
**न प्रभवन्ति** = समर्थ हुँदैनन्
**तं** = त्यस्ता
**ईश्वरं** = सर्वसमर्थ
**त्वां** = हजुरको
**शरणं** = शरणमा
**प्रपद्ये** = आएको छु

**वाक्यार्थ–** हजुरबाट विमुख भई अरू कसैको उपासना गर्ने व्यक्तिलाई अरू जति पनि देवता, गुरुजन र अन्य मनुष्यहरू छन्, ती सबैले मिलेर वा स्वतन्त्ररूपमा गरेको अनुग्रह हजुरले गर्ने अनुग्रहको दश हजार भागको एक भागको एक लेश बराबर पनि हुन सक्दैन। त्यस्ता सर्वसमर्थ हजुरको शरणमा म आएको छु।

**अचक्षुरन्धस्य यथाग्रणीः कृतस्तथा जनस्याविदुषोऽबुधो गुरुः।**
**त्वमर्कदृक् सर्वदृशां समीक्षणो वृतो गुरुर्नः स्वगतिं बुभुत्सताम्॥ ५० ॥**

**पदार्थ–**
**यथा** = जसरी
**अचक्षुः** = अन्धो मान्छे
**अन्धस्य** = अन्धाको
**अग्रणीः** = पथप्रदर्शक नेता
**कृतः** = बनाइयो
**तथा** = त्यसै गरी
**अविदुषः** = अज्ञानी
**जनस्य** = मानिसको
**अबुधः** = अज्ञानी मानिस नै
**गुरुः** = गुरु भएका छन्
**अर्कदृक्** = सूर्य आदिको पनि प्रकाशक
**त्वं** = हजुर चाहिँ
**सर्वदृशां** = सम्पूर्ण इन्द्रिय र अन्तःकरणहरूको
**समीक्षणः** = प्रकाशक हुनुहुन्छ (अतः)
**स्वगतिं** = आत्मतत्त्व
**बुभुत्सताम्** = जान्न चाहने
**नः** = हामीहरूद्वारा
**गुरुः** = गुरुरूपमा
**वृतः** = वरण गरिनुभएको छ

**वाक्यार्थ–** अन्धो मानिसलाई अन्य अन्धाहरूको पथप्रदर्शक नेता बनाए झैं (यसो गर्दा त्यस अन्धोले आफूसहित अरू अन्धाहरूलाई पनि कुमार्गमा हिँडाउँछ) अज्ञानीहरूले अज्ञानी मानिसहरूलाई नै गुरु बनाएका छन् (त्यो अज्ञानी गुरुले आफूसहित शिष्यहरूलाई पनि नरकादिमा फसाउँछ)। हे प्रभु ! हजुर त सूर्य आदि नक्षत्रहरूको पनि प्रकाशक हुनुहुन्छ र अन्तःकरण सहित सम्पूर्ण इन्द्रियहरूको पनि प्रकाशक हुनुहुन्छ। त्यसैले तत्त्वजिज्ञासु हामीहरू हजुरलाई गुरुको रूपमा वरण गर्दछौँ।

**जनो जनस्यादिशतेऽसतीं मतिं यया प्रपद्येत दुरत्ययं तमः।**
**त्वं त्वव्ययं ज्ञानममोघमञ्जसा प्रपद्यते येन जनो निजं पदम्॥ ५१ ॥**

**पदार्थ–**
**जनः** = अज्ञानी मनुष्यले
**जनस्य** = अज्ञानी मनुष्यलाई
**असतीं** = परमार्थको लागि अनुपयोगी
**मतिं** = ज्ञान
**आदिशते** = उपदेश गर्दछ
**यया** = जुन अपारमार्थिक ज्ञानद्वारा (अज्ञानी मानिस)
**दुरत्ययं** = अतिक्रमण गर्न गाह्रो हुने
**तमः** = अन्धकारमा

**प्रपद्येत** = प्राप्त हुन्छ
**त्वं तु** = हजुर त
**अव्ययं** = अविनाशी
**अमोघं** = व्यर्थ नहुने
**ज्ञानं** = आत्मज्ञान (उपदेश गर्नुहुन्छ)
**येन** = जुन ज्ञानद्वारा
**जनः** = मनुष्य
**अञ्जसा** = सलिलैसँग
**निजं** = आफ्नो
**पदं** = स्वरूपलाई
**प्रपद्यते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** अज्ञानी मनुष्यले अज्ञानी मनुष्यलाई जुन ज्ञानको उपदेश गर्दछ त्यो ज्ञान परमार्थका लागि अनुपयोगी हुन्छ र यस्तो अपारमार्थिक ज्ञानद्वारा मनुष्य अतिक्रमण गर्न कठिन हुने अन्धकारमा (अज्ञानमा) प्राप्त हुन्छ। तर हजुर त जहिले पनि अविनाशी र अमोघ आत्मज्ञानको उपदेश गर्नुहुन्छ, जुन ज्ञानद्वारा मनुष्यले सजिलैसँग आफ्नो वास्तविक स्वरूपलाई प्राप्त गर्दछ।

**त्वं सर्वलोकस्य सुहृत् प्रियेश्वरो ह्यात्मा गुरुर्ज्ञानमभीष्टसिद्धिः।**
**तथापि लोको न भवन्तमन्धधीर्जानाति सन्तं हृदि बद्धकामः॥ ५२॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**त्वं** = हजुर
**सर्वलोकस्य** = सम्पूर्ण लोकको
**सुहृत्** = परममित्र
**प्रियेश्वरः** = प्रिय ईश्वर
**आत्मा** = आत्मा
**गुरुः** = गुरु
**ज्ञानं** = ज्ञान र
**अभीष्टसिद्धिः** = इच्छा अनुसारको सिद्धि स्वरूप पनि हुनुहुन्छ
**तथा अपि** = तर पनि
**अन्धधीः** = अविवेकी
**बद्धकामः** = विभिन्न कामनाहरूद्वारा बाँधिएको
**लोकः** = मानिसले
**हृदि** = हृदयमा
**सन्तं** = विराजमान
**भवन्तं** = हजुरलाई
**न जानाति** = जान्न सक्दैन

**वाक्यार्थ–** हे भगवान्! हजुर सम्पूर्ण लोकको परममित्र, प्रिय ईश्वर, आत्मा, गुरु, ज्ञान र (त्यो ज्ञानद्वारा प्राप्त हुने) अभीष्टसिद्धिरूप पनि हुनुहुन्छ। यति भएर पनि विभिन्न कामनाहरूद्वारा बाँधिएका अविवेकी मानिसहरू आफ्नै हृदयभित्र विराजमान हजुरलाई जान्न सक्दैनन्।

**तं त्वामहं देववरं वरेण्यं प्रपद्य ईशं प्रतिबोधनाय।**
**छिन्ध्यर्थदीपैर्भगवन् वचोभिर्ग्रन्थीन् हृदय्यान् विवृणु स्वमोकः॥ ५३॥**

**पदार्थ–**
**अहं** = म
**तं** = ती
**देववरं** = देवताहरूका पनि पूज्य
**वरेण्यं** = आश्रयका लागि वरण गर्न योग्य
**ईशं** = सर्वेश्वर
**त्वां** = हजुरको शरणमा
**प्रतिबोधनाय** = तत्त्वज्ञानका लागि
**प्रपद्ये** = आएको छु
**भगवन्** = हे प्रभु
**अर्थदीपैः** = परमार्थलाई प्रकाशित गर्ने
**वचोभिः** = वाणीहरूद्वारा
**हृदय्यान्** = मेरो हृदयमा भएका
**ग्रन्थीन्** = ग्रन्थिहरू (अहङ्कार आदि)लाई
**छिन्धि** = काटिदिनुहोस्
**स्वं** = आफ्नो
**ओकः** = स्वरूपलाई
**विवृणु** = प्रकाशित गरिदिनुहोस्

**वाक्यार्थ–** म तत्त्वज्ञानका लागि देवताहरूका पनि पूजनीय एवं भक्तहरूको एक मात्र आश्रयका

रूपमा वरण गर्न योग्य सर्वेश्वर हजुरको शरणमा आएको छु। हे प्रभु ! परमार्थतत्त्वलाई प्रकाशित गर्ने हजुरका वाणीहरूद्वारा मेरो हृदयका ग्रन्थिहरू (अहङ्कार आदि)लाई काटिदिनुहोस्, अनि आफ्नो वास्तविक स्वरूपलाई पनि प्रकाशित गरिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्तवन्तं नृपतिं भगवानादिपूरुषः।**

**मत्स्यरूपी महाम्भोधौ विहरंस्तत्त्वमब्रवीत्॥ ५४॥**

**पदार्थ—**
**इति** = यसप्रकार
**उक्तवन्तं** = प्रार्थना गरिरहेका
**नृपतिं** = राजा सत्यव्रतलाई
**महाम्भोधौ** = प्रलयकालीन महासागरमा
**विहरन्** = विहार गर्दै
**मत्स्यरूपी** = मत्स्यावतारधारी
**भगवान्** = भगवान्
**आदिपूरुषः** = आदिपुरुष नारायणले
**तत्त्वं** = तत्त्वज्ञान उपदेश गर्दै
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ—** हे परीक्षित् ! यसप्रकार प्रार्थना गरिरहेका राजा सत्यव्रतलाई मत्स्यावतारधारी भगवान् आदिपुरुष नारायणले प्रलयकालीन महासागरमा विहार गर्दै आत्मतत्त्वको उपदेश गर्नुभयो।

**पुराणसंहितां दिव्यां साङ्ख्ययोगक्रियावतीम्।**

**सत्यव्रतस्य राजर्षेरात्मगुह्यमशेषतः॥ ५५॥**

**पदार्थ—**
**राजर्षेः** = राजर्षि
**सत्यव्रतस्य** = सत्यव्रतलाई
**दिव्यां** = दिव्य
**साङ्ख्ययोगक्रियावतीम्** = साङ्ख्य, भक्तियोग र कर्मयोगले युक्त
**पुराणसंहितां** = पुराणरूप संहिता (मत्स्यपुराण)
**अशेषतः** = सम्पूर्णरूपमा
**आत्मगुह्यम्** = आफ्नो रहस्य पनि (सुनाउनुभयो)

**वाक्यार्थ—** भगवान्ले राजर्षि सत्यव्रतलाई साङ्ख्ययोग, भक्तियोग र कर्मयोगको प्रतिपादन भएको दिव्य पुराणसंहिता (मत्स्यपुराण) र आफ्नो रहस्यसमेत सुनाउनुभयो।

**अश्रौषीदृषिभिः साकमात्मतत्त्वमसंशयम्।**

**नाव्यासीनो भगवता प्रोक्तं ब्रह्म सनातनम्॥ ५६॥**

**पदार्थ—**
**ऋषिभिः साकं** = सप्तर्षिहरूले सहित
**नावि** = डुङ्गामा
**आसीनः** = बसेका सत्यव्रतले
**भगवता** = मत्स्यरूप भगवान्द्वारा
**प्रोक्तं** = बताइएको
**आत्मतत्त्वं** = आत्मतत्त्व
**सनातनम्** = सनातन
**ब्रह्म** = ब्रह्मस्वरूपलाई
**असंशयम्** = संशयरहित भएर
**अश्रौषीत्** = श्रवण गरे

**वाक्यार्थ—** सप्तर्षिहरूले सहित भई डुङ्गामा बसेका सत्यव्रतले मत्स्यरूप भगवान्द्वारा बताइएको सनातन ब्रह्मस्वरूप आत्मतत्त्वको उपदेश संशयरहित भएर सुने।

**अतीतप्रलयापाय उत्थिताय स वेधसे ।**

**हत्वासुरं हयग्रीवं वेदान् प्रत्याहरद्धरिः ॥ ५७ ॥**

**पदार्थ—**
**सः** = ती मत्स्यावतारधारी
**हरिः** = भगवान् श्रीहरिले
**हयग्रीवं** = हयग्रीव नामक
**असुरं** = दानवलाई
**हत्वा** = मारेर
**अतीतप्रलयापाये** = बितेको प्रलयको समाप्ति भएपछि
**उत्थिताय** = ब्युँझेका
**वेधसे** = ब्रह्माजीलाई
**वेदान्** = वेदहरू
**प्रत्याहरत्** = ल्याएर दिनुभयो

**वाक्यार्थ—** त्यसपछि मत्स्यावतारधारी भगवान् श्रीहरिले हयग्रीव नामको असुरलाई मारेर उसबाट फर्काएर ल्याएको वेद प्रलयको समाप्ति भएपछि ब्युँझेका ब्रह्माजीलाई दिनुभयो ।

**स तु सत्यव्रतो राजा ज्ञानविज्ञानसंयुतः ।**

**विष्णोः प्रसादात् कल्पेऽस्मिन्नासीद् वैवस्वतो मनुः ॥ ५८ ॥**

**पदार्थ—**
**सः** = ती
**राजा** = राजा
**सत्यव्रतः तु** = सत्यव्रत चाहिँ
**विष्णोः** = भगवान् विष्णुको
**प्रसादात्** = अनुग्रहबाट
**ज्ञानविज्ञानसंयुतः** = ज्ञान र विज्ञानले सम्पन्न भई
**अस्मिन्** = यो
**कल्पे** = कल्पमा
**वैवस्वतः** = वैवस्वत
**मनुः** = मनु
**आसीत्** = भए

**वाक्यार्थ—** भगवान्बाट तत्त्वको उपदेश सुनेका राजा सत्यव्रत भगवान् विष्णुको अनुग्रहबाट शास्त्रीय ज्ञान र विज्ञान (अपरोक्ष ज्ञान)बाट सम्पन्न भई यस कल्पमा वैवस्वत मनु भए ।

**सत्यव्रतस्य राजर्षेर्मायामत्स्यस्य शार्ङ्गिणः ।**

**संवादं महदाख्यानं श्रुत्वा मुच्येत किल्बिषात् ॥ ५९ ॥**

**पदार्थ—**
**राजर्षेः** = राजर्षि
**सत्यव्रतस्य** = सत्यव्रतको र
**मायामत्स्यस्य** = आफ्नो मायाशक्तिद्वारा मत्स्यको रूप धारण गर्ने
**शार्ङ्गिणः** = शार्ङ्ग धनुर्धर भगवान् विष्णुको
**संवादं** = संवादात्मक
**महद्** = महान् (शुभप्रद)
**आख्यानं** = लीलाचरित्र
**श्रुत्वा** = सुनेर
**किल्बिषात्** = पापबाट
**मुच्येत** = मुक्त हुनेछ

**वाक्यार्थ—** आफ्नो मायाशक्तिद्वारा मत्स्यको शरीर धारण गर्नुहुने भगवान् विष्णु र राजर्षि सत्यव्रतको शुभप्रद यो संवादात्मक लीलाचरित्र सुन्ने व्यक्ति पापबाट मुक्त हुन्छ ।

**अवतारः हरेर्योऽयं कीर्तयेदन्वहं नरः ।**

**सङ्कल्पास्तस्य सिध्यन्ति स याति परमां गतिम् ॥ ६० ॥**

**पदार्थ–**
**अयं** = यो
**हरेः** = भगवान् श्रीहरिको
**अवतारः** = मत्स्यावतार छ
(यसको कथालाई)
**यः** = जुन
**नरः** = मानिसले
**अन्वहं** = प्रतिदिन
**कीर्तयेत्** = कीर्तन गर्दछ
**तस्य** = त्यस मानिसका
**सङ्कल्पाः** = सम्पूर्ण सङ्कल्पहरू
**सिध्यन्ति** = सिद्ध हुन्छन् र
**सः** = ऊ
**परमां** = उत्तम
**गतिम्** = गति (मुक्ति)मा
**याति** = पुग्दछ

**वाक्यार्थ–** जुन मानिसले प्रतिदिन भगवान् श्रीहरिको मत्स्यावतारको कथा भन्दछ त्यसका सम्पूर्ण सङ्कल्पहरू सिद्ध हुन्छन् र उसले उत्तम भगवद्‌गति (मुक्ति) पनि प्राप्त गर्दछ।

**प्रलयपयसि धातुः सुप्तशक्तेर्मुखेभ्यः**
**श्रुतिगणमपनीतं प्रत्युपादत्त हत्वा ।**
**दितिजमकथयद् यो ब्रह्म सत्यव्रतानां**
**तमहमखिलहेतुं जिह्ममीनं नतोऽस्मि ॥ ६१ ॥**

**पदार्थ–**
**यः** = जसले
**प्रलयपयसि** = प्रलयकालीन समुद्रमा (विहार गर्दै)
**सुप्तशक्तेः** = सृष्टि गर्ने शक्ति लुप्त भएका (निदाएका)
**धातुः** = ब्रह्माजीको
**मुखेभ्यः** = मुखबाट (निस्किएको)
**अपनीतं** = हयग्रीवद्वारा अपहरण गरिएका
**श्रुतिगणं** = वेदहरू
**दितिजं** = दैत्य हयग्रीवलाई
**हत्वा** = मारेर
**प्रत्युपादत्त** = ल्याएर ब्रह्माजीलाई दिनुभयो (तथा)
**सत्यव्रतानां** = सप्तर्षिसहित सत्यव्रतलाई
**ब्रह्म** = ब्रह्मज्ञान
**अकथयत्** = बताउनुभयो
**अखिलहेतुं** = सर्वकारण
**जिह्ममीनं** = मायाद्वारा मत्स्यरूप ग्रहण गर्नुभएका
**तं** = ती मत्स्यावतारधारी भगवान्‌लाई
**अहं** = म
**नतः अस्मि** = नमस्कार गर्दछु

**वाक्यार्थ–** निदाएका कारण सृष्टिशक्ति लुप्त भएका ब्रह्माजीको मुखबाट निस्किएका वेदहरूलाई जब हयग्रीव असुरले हरण गर्‍यो तब भगवान्‌ले प्रलयकालीन समुद्रमा विहार गर्दै त्यस हयग्रीवलाई मारेर उसबाट वेद फर्काएर ल्याई ब्रह्माजीलाई दिनुभयो अनि जसले सप्तर्षिहरूले सहित भएका राजा सत्यव्रतलाई ब्रह्मज्ञान बताउनुभयो, आफ्नै मायाद्वारा मत्स्यको शरीर धारण गर्नुभएका सर्वकारण त्यस्ता मत्स्यावतारधारी भगवान्‌लाई म नमस्कार गर्दछु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामष्टमस्कन्धे**
**मत्स्यावतारचरितानुवर्णनं नाम चतुर्विंशोऽध्यायः ॥ २४ ॥**

**इति अष्टमः स्कन्धः समाप्तः ॥**

# अथ नवमः स्कन्धः

## अथ प्रथमोऽध्यायः

### राजा सुद्युम्नको कथा

**राजोवाच** (महाराज परीक्षित्ले भन्नुभयो)

**मन्वन्तराणि सर्वाणि त्वयोक्तानि श्रुतानि मे ।**

**वीर्याण्यनन्तवीर्यस्य हरेस्तत्र कृतानि च ॥ १ ॥**

**पदार्थ–**
**त्वया** = हजुरले
**सर्वाणि** = सबै
**मन्वन्तराणि** = मन्वन्तरहरू
**उक्तानि** = बताउनुभयो
**तत्र** = ती मन्वन्तरहरूमा
**अनन्तवीर्यस्य** = अनन्त पराक्रमशाली
**हरेः** = भगवान् श्रीहरिद्वारा
**कृतानि** = गरिएका
**वीर्याणि च** = पराक्रमहरू पनि
**मे** = मैले
**श्रुतानि** = सुनेँ

**वाक्यार्थ–** हे मुनिवर ! हजुरले सबै मन्वन्तरहरूको कथा बताउनुभयो र अनन्त पराक्रमशाली भगवान् श्रीहरिले ती–ती मन्वन्तरमा गरेका पराक्रमहरू पनि बताउनुभयो, मैले सबै सुनेँ।

**योऽसौ सत्यव्रतो नाम राजर्षिर्द्रविडेश्वरः ।**

**ज्ञानं योऽतीतकल्पान्ते लेभे पुरुषसेवया ॥ २ ॥**

**पदार्थ–**
**यः** = जुन
**असौ** = यी
**द्रविडेश्वरः** = द्रविड देशका मालिक
**सत्यव्रतः नाम** = सत्यव्रत नामका
**राजर्षिः** = राजर्षि (थिए)
**यः** = जसले
**पुरुषसेवया** = मत्स्यरूप भगवान्को सेवाद्वारा
**अतीतकल्पान्ते** = बितेको कल्पको अन्तिममा
**ज्ञानं** = ज्ञान
**लेभे** = प्राप्त गरे

**वाक्यार्थ–** हजुरले द्रविड देशका राजा राजर्षि सत्यव्रतको कथा सुनाउनुभयो। उनले बितेको कल्पको अन्तिममा मत्स्यरूप भगवान्को सेवा गरेर आत्मज्ञान प्राप्त गरेका रहेछन्।

**स वै विवस्वतः पुत्रो मनुरासीदिति श्रुतम् ।**

**त्वत्तस्तस्य सुताः प्रोक्ता इक्ष्वाकुप्रमुखा नृपाः ॥ ३ ॥**

**पदार्थ–**

**वै** = निश्चय नै
**सः** = ती राजर्षि सत्यव्रत
**विवस्वतः** = सूर्यका
**पुत्रः** = छोरा
**मनुः** = (वैवस्वत) मनु
**आसीत्** = थिए
**इति** = भनेर
**त्वत्तः** = हजुरबाट
**श्रुतम्** = सुनेँ
**तस्य** = तिनै मनुका
**सुताः** = पुत्रहरू नै
**इक्ष्वाकुप्रमुखाः** = इक्ष्वाकु आदि
**नृपाः च** = राजाहरू हुन् भनेर
**प्रोक्ताः** = बताउनुभयो

**वाक्यार्थ–** ती सूर्यपुत्र राजर्षि सत्यव्रत नै यस कल्पमा मनु भए। यिनै मनुका पुत्र इक्ष्वाकु आदि राजाहरूको वर्णन पनि मैले हजुरबाट सुनेँ।

**तेषां वंशं पृथग् ब्रह्मन् वंश्यानुचरितानि च।**
**कीर्तयस्व महाभाग नित्यं शुश्रूषतां हि नः॥ ४॥**

**पदार्थ–**

**ब्रह्मन्** = हे ब्रह्मज्ञ
**महाभाग** = पूज्य गुरुदेव
**तेषां** = ती मनुहरूको
**वंशं** = वंश
**वंश्यानुचरितानि च** = वंशमा उत्पन्न राजाहरूको चरित्र
**पृथक्** = अलग–अलगरूपमा
**नित्यं हि** = सधैँ नै
**शुश्रूषतां** = सुन्न चाहने
**नः** = हामीहरूलाई
**कीर्तयस्व** = बताउनुहोस्

**वाक्यार्थ–** ब्रह्मज्ञ हे गुरुदेव ! अब म वैवस्वत मनुको वंश र त्यो वंशमा उत्पन्न भएका राजाहरूको चरित्र अलग–अलग रूपमा सुन्न चाहन्छु। सधैँ सुनिरहन चाहने मलाई यी कथाहरू बताउनुहोस्।

**ये भूता ये भविष्याश्च भवन्त्यद्यतनाश्च ये।**
**तेषां नः पुण्यकीर्तीनां सर्वेषां वद विक्रमान्॥ ५॥**

**पदार्थ–**

**ये** = जो–जो
**भूताः** = भए
**ये** = जो–जो
**भविष्याः च** = हुनेछन्
**ये च** = जो
**अद्यतनाः** = अहिले
**भवन्ति** = छन्
**पुण्यकीर्तीनां** = पवित्र कीर्ति भएका
**तेषां** = ती मनुको वंशमा उत्पन्न
**सर्वेषां** = सबै राजाहरूको
**विक्रमान्** = पराक्रम
**नः** = हामीहरूलाई
**वद** = बताउनुहोस्

**वाक्यार्थ–** ती मनुको वंशमा पहिले जो–जो राजाहरू भए, अहिले जो छन् र भविष्यमा जो–जो हुनेछन्, ती सबै पवित्र कीर्ति भएका राजाहरूको पराक्रम (चरित्र)का बारेमा मलाई बताउनुहोस्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**एवं परीक्षिता राज्ञा सदसि ब्रह्मवादिनाम्।**
**पृष्टः प्रोवाच भगवाञ्छुकः परमधर्मवित्॥ ६॥**

**पदार्थ—**
**एवं** = यसरी
**राज्ञा** = राजा
**परीक्षिता** = परीक्षित्द्वारा
**ब्रह्मवादिनाम्** = ब्रह्मज्ञ ऋषिहरूको
**सदसि** = सभामा
**पृष्टः** = प्रश्न गरिएका
**परमधर्मवित्** = वास्तविक धर्मको रहस्य जान्ने
**भगवान्** = भगवान्
**शुकः** = शुकदेवले
**प्रोवाच** = भन्नुभयो

**वाक्यार्थ—** ब्रह्मज्ञ ऋषिहरूको सभामा महाराज परीक्षित्ले यसरी प्रश्न गरिसकेपछि वास्तविक धर्मको रहस्य जानेका भगवान् शुकदेवले भन्नुभयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**श्रूयतां मानवो वंशः प्राचुर्येण परन्तप।**
**न शक्यते विस्तरतो वक्तुं वर्षशतैरपि॥ ७॥**

**पदार्थ—**
**परन्तप** = हे शत्रुपीडक परीक्षित्
**मानवः** = वैवस्वत मनुको
**वंशः** = वंश
**प्राचुर्येण** = सङ्क्षेपमा
**श्रूयतां** = सुन्नुहोस्
**विस्तरतः** = विस्तारपूर्वक त
**वर्षशतैः अपि** = सयौँ वर्षमा पनि
**वक्तुं** = बताउन
**न शक्यते** = सकिँदैन

**वाक्यार्थ—** हे परीक्षित्! मनुको वंशको वर्णन सङ्क्षेपमा सुन्नुहोस्, किनभने मनुवंशको विस्तारित वर्णन त सयौँ वर्षसम्ममा पनि गर्न सकिँदैन।

**परावरेषां भूतानामात्मा यः पुरुषः परः।**
**स एवासीदिदं विश्वं कल्पान्तेऽन्यन्न किञ्चन॥ ८॥**

**पदार्थ—**
**यः** = जुन
**परावरेषां** = उचनीच सबै
**भूतानां** = प्राणीहरूका
**आत्मा** = आत्मा
**परः** = श्रेष्ठ
**पुरुषः** = पुरुष हुनुहुन्छ
**सः एव** = ती भगवान्ले नै
**कल्पान्ते** = कल्पको अन्त्यमा (प्रलयकालमा)
**इदं** = यो
**विश्वं** = जगत्लाई (आफूमा लीन गराउनुभएको थियो)
**अन्यत्** = भगवान्देखि बाहेक अरू
**किञ्चन** = केही कुरा पनि
**न आसीत्** = थिएन

**वाक्यार्थ—** जुन भगवान् उचनीच सबै प्रकारका प्राणीहरूको आत्मा हुनुहुन्छ, तिनै पुरुषोत्तम भगवान्ले प्रलयकालमा यस जगत्लाई आफूभित्रै लीन गराउनुभएको थियो, भगवान्देखि बाहेक कुनै वस्तु पनि थिएन।

**विवरण—** यो जगत् परमात्माबाट नै उत्पन्न हुन्छ र अन्त्यमा परमात्मामा नै लीन हुन्छ। उत्पत्ति र नाशको अघि र पछि पनि जे रहन्छ त्यही नै सत्य हो, बीचमा जे देखिन्छ त्यो मिथ्या हो। जगत्को उत्पत्तिभन्दा अघि र नाशपछि पनि रहने परमात्मा मात्र हुनुहन्छ। एउटा सृष्टि समाप्तिपछि

अर्को सृष्टि हुनुभन्दा अधिको प्रलयकालमा एउटै मात्र तत्त्व रहन्छ र त्यो तत्त्व परम पुरुष भगवान् हुनुहुन्छ। छान्दोग्य उपनिषद् (६/२/१)मा पनि **सदेव सोम्येदमग्र आसीदेक-मेवाद्वितीयम्** अर्थात् जगत्को रचना हुनुभन्दा अघि यो जगत् अद्वितीय सत् परमात्मरूप नै थियो भनी बताइएको छ। यस कुराले परमात्मा नै जगत्को रूपमा देखिनुभएको हो भन्ने तथ्यलाई स्पष्ट पार्छ। माटो आफ्नो रूप नछाडी घैंटो आदिको रूपमा परिणत भए जैँ परमात्मा पनि आफ्नो स्वरूप नछाडी जगत्को रूपमा देखिनुभएको हो भन्ने ब्रह्मविवर्तवादलाई यस प्रसङ्गले स्पष्ट पारेको छ।

**तस्य नाभेः समभवत् पद्मकोषो हिरण्मयः।**

**तस्मिन् जज्ञे महाराज स्वयम्भूश्चतुराननः॥ ९॥**

**पदार्थ–**

**महाराज** = हे महाराज
**तस्य** = ती भगवान्को
**नाभेः** = नाभिबाट
**हिरण्मयः** = सुवर्णमय
**पद्मकोषः** = कमलकोश
**समभवत्** = उत्पन्न भयो
**तस्मिन्** = त्यसमा
**चतुराननः** = चतुर्मुख
**स्वयम्भूः** = ब्रह्माजी
**जज्ञे** = प्रकट हुनुभयो

**वाक्यार्थ–** हे महाराज परीक्षित् ! भगवान् नारायणको नाभिबाट सुवर्णमय कमलकोश (कमलको फूल) उत्पन्न भयो र त्यस कमलकोशमा चतुर्मुख ब्रह्माजी प्रकट हुनुभयो।

**मरीचिर्मनसस्तस्य जज्ञे तस्यापि कश्यपः।**

**दाक्षायण्यां ततोऽदित्यां विवस्वानभवत् सुतः॥ १०॥**

**पदार्थ–**

**तस्य** = ती ब्रह्माजीको
**मनसः** = मनबाट
**मरीचिः** = मरीचि
**जज्ञे** = जन्मिए
**तस्य अपि** = ती मरीचिको (पुत्रको रूपमा)
**कश्यपः** = कश्यप जन्मिए
**ततः** = ती कश्यपबाट
**दाक्षायण्यां** = दक्षपुत्री
**अदित्यां** = अदितिमा
**विवस्वान्** = विवस्वान् (सूर्य)
**सुतः** = छोरा
**अभवत्** = भए

**वाक्यार्थ–** ब्रह्माजीको मनबाट पुत्रको रूपमा मरीचि जन्मिए र मरीचिको पुत्र कश्यप भए। कश्यपकी पत्नी दक्षकी पुत्री अदितिबाट विवस्वान् (सूर्य) जन्मिए।

**ततो मनुः श्राद्धदेवः संज्ञायामास भारत।**

**श्रद्धायां जनयामास दश पुत्रान् स आत्मवान्॥ ११॥**

**पदार्थ–**

**भारत** = हे भरतवंशी परीक्षित्
**ततः** = ती विवस्वान्बाट
**संज्ञायां** = संज्ञा नामकी पत्नीमा
**श्राद्धदेवः** = श्राद्धदेव नामका
**मनुः** = मनु
**आस** = (पुत्र) भए
**आत्मवान्** = उदार चित्त भएका
**सः** = ती श्राद्धदेवले
**श्रद्धायां** = श्रद्धा नामकी पत्नीमा
**दश पुत्रान्** = दश ओटा छोराहरू
**जनयामास** = जन्माए

**वाक्यार्थ–** हे परीक्षित् ! विवस्वान्ले आफ्नी पत्नी संज्ञाबाट श्राद्धदेव नाम गरेका मनुलाई जन्माए। उदार चित्त भएका ती श्राद्धदेवले श्रद्धा नामकी पत्नीबाट दश ओटा पुत्रहरू जन्माए।

**इक्ष्वाकुनृगशर्यातिदिष्टधृष्टकरूषकान्।**

**नरिष्यन्तं पृषध्रं च नभगं च कविं विभुः॥ १२॥**

**पदार्थ–**
**विभुः** = प्रभावशाली श्राद्धदेवले
**इक्ष्वाकुनृगशर्यातिदिष्टधृष्ट-करूषकान्** = इक्ष्वाकु, नृग, शर्याति, दिष्ट, धृष्ट, करूषक
**नरिष्यन्तं** = नरिष्यन्त
**पृषध्रं च** = पृषध्र अनि
**नभगं** = नभग र
**कविं च** = कवि (समेतका दश जना छोराहरू जन्माए)

**वाक्यार्थ–** प्रभावशाली श्राद्धदेव मनुले इक्ष्वाकु, नृग, शर्याति, दिष्ट, धृष्ट, करूषक, नरिष्यन्त, पृषध्र, नभग र कवि गरी दश जना छोराहरू जन्माए।

**अप्रजस्य मनोः पूर्वं वसिष्ठो भगवान् किल।**

**मित्रावरुणयोरिष्टिं प्रजार्थमकरोत् प्रभुः॥ १३॥**

**पदार्थ–**
**पूर्वं** = (इक्ष्वाकु आदिको जन्म हुनुभन्दा) पहिले
**अप्रजस्य** = सन्तान नभएका
**मनोः** = वैवस्वत मनुको
**प्रजार्थम्** = सन्तानप्राप्तिका लागि
**प्रभुः** = समर्थ
**भगवान्** = भगवान्
**वसिष्ठः** = वसिष्ठले
**किल** = निश्चय नै
**मित्रावरुणयोः** = मित्रावरुण देवतात्मक
**इष्टिं** = यज्ञ
**अकरोत्** = गराए

**वाक्यार्थ–** इक्ष्वाकु आदि राजाहरूको जन्म हुनुभन्दा पहिले सन्तान नभएका वैवस्वत मनुलाई सन्तानप्राप्ति होस् भनेर सामर्थ्यवान् ऋषि वसिष्ठले मित्रावरुण देवतात्मक यज्ञ गर्न लगाए।

**तत्र श्रद्धा मनोः पत्नी होतारं समयाचत।**

**दुहित्रर्थमुपागम्य प्रणिपत्य पयोव्रता॥ १४॥**

**पदार्थ–**
**तत्र** = त्यस यज्ञको समयमा
**पयोव्रता** = पयोव्रत (दुध मात्र पिउने व्रत) लिएकी
**मनोः** = वैवस्वत मनुकी
**पत्नी** = पत्नी
**श्रद्धा** = श्रद्धाले
**होतारं** = होताको
**उपागम्य** = नजिकै आएर
**प्रणिपत्य** = प्रणाम गरी
**दुहित्रर्थम्** = छोरी पाउनका लागि
**समयाचत** = प्रार्थना गरिन्

**वाक्यार्थ–** यज्ञको समयमा पयोव्रत लिएकी वैवस्वत मनुकी पत्नी श्रद्धाले होताको नजिकै आई विनयपूर्वक प्रणाम गरी छोरी पाउने विधि गरिदिन अनुरोध गरिन्।

**प्रेषितोऽध्वर्युणा होता ध्यायंस्तत् सुसमाहितः।**

**हविषि व्यचरत् तेन वषट्कारं गृणन् द्विजः ॥ १५ ॥**

**पदार्थ—**
**अध्वर्युणा** = अध्वर्युद्वारा
**प्रेषितः** = प्रेरित भएका
**होता** = होता
**द्विजः** = ब्राह्मणले
**हविषि** = हवि लिएपछि
**वाचा** = वाणीले पनि
**वषट्कारं** = वषट्कार
**गृणन्** = उच्चारण गर्दै
**तेन** = (हातमा लिएको) त्यस हविले
**सुसमाहितः** = एकाग्रचित्त भई
**ध्यायन्** = (श्रद्धाको चाहनानुरूप छोरी होस् भन्ने) चिन्तन गर्दै
**व्यचरत्** = हवन गरे

**वाक्यार्थ—** अध्वर्युद्वारा प्रेरणा गरिएका होताले हवनका लागि हातमा हवि लिएर एकाग्र भई यजमानकी पत्नी श्रद्धाको इच्छाअनुसार छोरी नै उत्पन्न होस् भन्ने चिन्तन गर्दै वषट्कारको उच्चारण गरी हवन गरे।

**होतुस्तद्व्यभिचारेण कन्येला नाम साभवत् ।**
**तां विलोक्य मनुः प्राह नातिहृष्टमना गुरुम् ॥ १६ ॥**

**पदार्थ—**
**होतुः** = होताको
**तद्व्यभिचारेण** = त्यो दोषका कारण
**इला नाम** = इला नाम गरेकी
**सा कन्या** = ती कन्या
**अभवत्** = (उत्पन्न) भइन्
**तां** = ती कन्यालाई
**विलोक्य** = देखेर
**नातिहृष्टमनाः** = त्यति धेरै प्रसन्न मन नभएका
**मनुः** = श्राद्धदेव मनुले
**गुरुम्** = गुरु वसिष्ठलाई
**प्राह** = भने

**वाक्यार्थ—** होताको दोषका कारण पुत्री जन्मेको देखेर (पुत्रप्राप्तिको लागि यज्ञ गर्ने) श्राद्धदेव मनु त्यति प्रसन्न भएनन्। त्यसैले उनले गुरु वसिष्ठसमक्ष गएर भने।

**भगवन् किमिदं जातं कर्म वो ब्रह्मवादिनाम् ।**
**विपर्ययमहो कष्टं मैवं स्याद् ब्रह्मविक्रिया ॥ १७ ॥**

**पदार्थ—**
**भगवन्** = हे भगवान् वसिष्ठ
**ब्रह्मवादिनाम्** = ब्रह्मज्ञ
**वः** = हजुरको
**इदं** = यो
**कर्म** = कर्म (मित्रावरुण यज्ञ)
**विपर्ययं** = विपरीतफलवाला
**किम्** = कसरी
**जातं** = भयो
**अहो** = अहो
**कष्टं** = यो दुःखको कुरो हो
**एवं** = यसप्रकारको
**ब्रह्मविक्रिया** = ब्रह्मज्ञहरूले गरेको कर्ममा विपरीत फल
**मा स्यात्** = नहोस्

**वाक्यार्थ—** हे गुरुदेव ! ब्रह्मज्ञानी हजुरहरूद्वारा गरिएको मित्रावरुण यज्ञबाट कसरी विपरीत फलको प्राप्ति भयो ? अहो ! यो ज्यादै दुःखको कुरो हो। ब्रह्मज्ञ ऋषिहरूले गरेको वैदिक कर्ममा विपरीत फल प्राप्ति हुनुहुँदैन।

**यूयं मन्त्रविदो युक्तास्तपसा दग्धकिल्बिषाः ।**

**कुतः सङ्कल्पवैषम्यमनृतं विबुधेष्विव ॥ १८ ॥**

**पदार्थ–**
**मन्त्रविदः** = मन्त्र (मन्त्रको अर्थ र त्यसको प्रयोग) जान्ने
**युक्ताः** = जितेन्द्रिय
**तपसा** = तपस्याद्वारा
**दग्धकिल्बिषाः** = निष्पाप भएका हजुरहरूको
**विबुधेषु** = देवताहरूमा
**अनृतं इव** = असत्य झैँ
**सङ्कल्पवैषम्यं** = सङ्कल्पमा विपरीतता
**कुतः** = कसरी भयो

**वाक्यार्थ–** मन्त्र, मन्त्रको अर्थ र त्यसको उचित प्रयोग जान्ने जितेन्द्रिय हजुरहरूले तपस्याद्वारा सम्पूर्ण पापहरूलाई नष्ट गरिसक्नुभएको छ। देवताहरूमा असत्यता झैँ त्यस्ता हजुरको सङ्कल्पमा विपरीत फलको प्राप्ति कसरी भयो ?

**तन्निशम्य वचस्तस्य भगवान् प्रपितामहः ।**
**होतुर्व्यतिक्रमं ज्ञात्वा बभाषे रविनन्दनम् ॥ १९ ॥**

**पदार्थ–**
**तस्य** = ती श्राद्धदेव मनुको
**तद् वचः** = यस्तो भनाइ
**निशम्य** = सुनेर
**प्रपितामहः** = मेरा (श्रीशुकदेवका) बुढा हजुरबा
**भगवान्** = भगवान् वसिष्ठले
**होतुः** = होताको
**व्यतिक्रमं** = विपरीत सङ्कल्पलाई
**ज्ञात्वा** = बुझेर
**रविनन्दनम्** = सूर्यपुत्र श्राद्धदेवलाई
**बभाषे** = भन्नुभयो

**वाक्यार्थ–** श्राद्धदेव मनुको यस्तो भनाइ सुनेर मेरा बुढा हजुरबा भगवान् वसिष्ठले विचार गरेर यज्ञमा होताले उद्देश्यविपरीत गरेको सङ्कल्पलाई बुझ्नुभयो र त्यसपछि सूर्यपुत्र श्राद्धदेवलाई भन्नुभयो।

**एतत् सङ्कल्पवैषम्यं होतुस्ते व्यभिचारतः ।**
**तथापि साधयिष्ये ते सुप्रजास्त्वं स्वतेजसा ॥ २० ॥**

**पदार्थ–**
**होतुः** = होताको
**व्यभिचारतः** = दोषका कारण
**ते** = तिम्रो
**एतत्** = यो यज्ञमा गरिएको
**सङ्कल्पवैषम्यं** = सङ्कल्पको विपरीत फल भयो
**तथा अपि** = तापनि
**स्वतेजसा** = आफ्नो तपोबलद्वारा
**ते** = तिम्रो
**सुप्रजास्त्वं** = पुत्रवत्व
**साधयिष्ये** = सिद्ध गराउनेछु

**वाक्यार्थ–** होताको दोषका कारण यज्ञमा तिमीले जे सङ्कल्प गरेका थियौ त्यसको विपरीत फल प्राप्त भएको हो, तापनि म मेरो तपोबलद्वारा तिमीलाई पुत्रवान् नै बनाउनेछु। (यिनै कन्यालाई पुत्र बनाइदिनेछु)।

**एवं व्यवसितो राजन् भगवान् स महायशाः ।**

**अस्तौषीदादिपुरुषमिलायाः पुंस्त्वकाम्यया ॥ २१ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**एवं** = यस्तो
**व्यवसितः** = निश्चय गरेका
**महायशाः** = परम यशस्वी
**भगवान्** = भगवान्
**सः** = ती वसिष्ठले
**इलायाः** = इलालाई
**पुंस्त्वकाम्यया** = पुरुष बनाउने इच्छाले
**आदिपुरुषम्** = आदिपुरुष भगवान्लाई
**अस्तौषीत्** = स्तुति गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसप्रकार श्राद्धदेव मनुलाई पुत्र प्रदान गर्ने निश्चय गरेका परमयशस्वी भगवान् वसिष्ठले तिनै इलालाई पुरुष बनाउनका लागि आदिपुरुष भगवान् नारायणको स्तुति गर्नुभयो।

**तस्मै कामवरं तुष्टो भगवान् हरिरीश्वरः।**
**ददाविलाभवत् तेन सुद्युम्नः पुरुषर्षभः॥ २२ ॥**

**पदार्थ–**
**ईश्वरः** = सर्वसमर्थ
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**तुष्टः** = प्रसन्न भएर
**तस्मै** = ती वसिष्ठलाई
**कामवरं** = इच्छानुसारको वर
**ददौ** = दिनुभयो
**तेन** = त्यही वरद्वारा
**इला** = इला
**सुद्युम्नः** = सुद्युम्न नामको
**पुरुषर्षभः** = श्रेष्ठ पुरुष
**अभवत्** = भइन्

**वाक्यार्थ–** स्तुतिबाट प्रसन्न भएका सर्वसमर्थ भगवान् श्रीहरिले वसिष्ठलाई इच्छाअनुसारको वर दिनुभयो। त्यही वरका कारण इला सुद्युम्न नाम गरेको श्रेष्ठ पुरुष भइन्।

**स एकदा महाराज विचरन् मृगयां वने।**
**वृतः कतिपयामात्यैरश्वमारुह्य सैन्धवम्॥ २३ ॥**
**प्रगृह्य रुचिरं चापं शरांश्च परमाद्भुतान्।**
**दंशितोऽनुमृगं वीरो जगाम दिशमुत्तराम्॥ २४ ॥**

**पदार्थ–**
**महाराज** = हे महाराज
**दंशितः** = कवच लगाएर
**कतिपयामात्यैः** = केही मन्त्रीहरूद्वारा
**वृतः** = घेरिएर (युक्त भई)
**सः** = ती
**वीरः** = वीर सुद्युम्न
**एकदा** = एक दिन
**वने** = जङ्गलमा
**मृगयां** = शिकार खेल्न
**विचरन्** = घुम्दै
**रुचिरं** = सुन्दर
**चापं** = धनु
**परमाद्भुतान्** = अत्यन्त अद्भुत (तिखा)
**शरान् च** = बाणहरू पनि
**प्रगृह्य** = लिएर
**सैन्धवम्** = सिन्धुदेशीय
**अश्वं** = घोडामा
**आरुह्य** = चढेर

**अनुमृगं** = मृगलाई पछ्याउँदै
**उत्तराम्** = उत्तर
**दिशां** = दिशातिर
**जगाम** = गए

**वाक्यार्थ–** हे महाराज परीक्षित् ! एक दिन श्राद्धदेवका पुत्र तिनै वीर सुद्युम्न शरीरमा कवच लगाएर साथमा केही मन्त्रीहरू लिएर शिकार खेल्न जङ्गलमा गए। एउटा सुन्दर धनु र अत्यन्त तिखा अद्‌भुत बाणहरू लिएका उनी सिन्धुदेशीय घोडामा चढेर मृगलाई पछ्याउँदै उत्तर दिशातिर गए।

**स कुमारो वनं मेरोरधस्तात् प्रविवेश ह।**
**यत्रास्ते भगवाञ्छर्वो रममाणः सहोमया॥ २५॥**

**पदार्थ–**
**सः** = (उत्तर दिशामा गएका) ती
**कुमारः** = राजकुमार सुद्युम्न
**यत्र** = जहाँ
**भगवान्** = भगवान्
**शर्वः** = शङ्कर
**उमया सह** = पार्वतीका साथ
**रममाणः** = रमाउँदै
**आस्ते** = बस्नुहुन्छ (त्यो)
**मेरोः** = सुमेरु पर्वतको
**अधस्तात्** = तलपट्टि रहेको
**वनं** = जङ्गलमा
**ह** = निश्चय नै
**प्रविवेश** = प्रवेश गरे

**वाक्यार्थ–** उत्तर दिशामा गएका मनुपुत्र राजकुमार सुद्युम्न सुमेरु पर्वतको फेदीमा रहेको जङ्गलमा पुगे जहाँ भगवान् शङ्कर पार्वतीको साथमा रमाउँदै बस्नुहुन्छ।

**तस्मिन् प्रविष्ट एवासौ सुद्युम्नः परवीरहा।**
**अपश्यत् स्त्रियमात्मानमश्वं च वडवां नृप॥ २६॥**

**पदार्थ–**
**नृप** = हे राजा
**परवीरहा** = वीर शत्रुहरूलाई मार्ने
**असौ** = यी
**सुद्युम्नः** = सुद्युम्नले
**तस्मिन्** = त्यो वनमा
**प्रविष्टे एव** = प्रवेश गर्नासाथ
**आत्मानं** = आफूलाई
**स्त्रियं** = स्त्रीरूपमा र
**अश्वं च** = घोडालाई चाहिँ
**वडवां** = घोडीको रूपमा
**अपश्यत्** = देखे

**वाक्यार्थ–** हे राजा ! परमवीर सुद्युम्नले त्यस वनमा प्रवेश गर्नासाथ आफूलाई स्त्रीरूपमा र घोडालाई घोडीको रूपमा देखे।

**तथा तदनुगाः सर्वे आत्मलिङ्गविपर्ययम्।**
**दृष्ट्वा विमनसोऽभूवन् वीक्षमाणाः परस्परम्॥ २७॥**

**पदार्थ–**
**तथा** = त्यसै गरी
**तदनुगाः** = सुद्युम्नका अनुगामी सेवकहरू
**सर्वे** = सबैले
**आत्मलिङ्गविपर्ययम्** = आफ्नो लिङ्ग विपरीत भएको
**दृष्ट्वा** = देखेर
**परस्परम्** = एक-आपसमा

**वीक्षमाणाः** = हेर्दै | **विमनसः** = अत्यन्त खिन्न | **अभूवन्** = भए

**वाक्यार्थ–** त्यसै गरी राजकुमार सुद्युम्नका मन्त्री आदि सेवकहरूले पनि लिङ्गपरिवर्तन भई आफूलाई स्त्रीरूपमा देखे। त्यसपछि एकले अर्कालाई हेर्दै उनीहरू अत्यन्त खिन्न भए।

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**कथमेवं गुणो देशः केन वा भगवन् कृतः।**

**प्रश्नमेनं समाचक्ष्व परं कौतूहलं हि नः॥ २८॥**

**पदार्थ–**

**भगवन्** = हे भगवान्
**एवं गुणः** = यस्तो गुण (प्रवेश गर्नासाथ स्त्रीत्वप्राप्ति हुने) भएको
**देशः** = ठाउँ
**कथं** = कसरी सम्भव हुन्छ
**वा** = अथवा
**केन** = कसले
**कृतः** = त्यस्तो बनायो
**एनं** = यो मैले गरेको
**प्रश्नं** = प्रश्नलाई
**समाचक्ष्व** = समाधान गर्नुहोस्
**हि** = किनभने
**नः** = मलाई (यसको उत्तर सुन्ने)
**परं** = अत्यधिक
**कौतूहलम्** = उत्सुकता छ

**वाक्यार्थ–** प्रवेश गर्नासाथ स्त्रीत्व प्राप्ति हुने त्यस्तो विचित्र ठाउँ कसरी हुन सक्छ ? अथवा त्यो ठाउँलाई त्यस्तो अद्‌भुत कसले बनायो ? हे भगवान् शुकदेव ! मलाई यो प्रश्नको उत्तर बताउनुहोस् किनभने मलाई यस विषयमा जान्न अत्यन्त उत्सुकता भइरहेको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा गिरिशं द्रष्टुमृषयस्तत्र सुव्रताः।**

**दिशो वितिमिराभासाः कुर्वन्तः समुपागमन्॥ २९॥**

**पदार्थ–**

**एकदा** = एक दिन
**दिशः** = दिशाहरूलाई
**वितिमिराभासाः** = अन्धकारको उपस्थितिले रहित
**कुर्वन्तः** = बनाउँदै
**सुव्रताः** = तपस्वी
**ऋषयः** = ऋषिहरू
**गिरिशं** = भगवान् शङ्करलाई
**द्रष्टुम्** = दर्शन गर्न
**तत्र** = त्यो जङ्गलमा
**समुपागमन्** = आए

**वाक्यार्थ–** एक दिन तपस्वी ऋषिहरू आफ्नो शरीरको प्रकाशले दिशाहरूलाई अन्धकाररहित बनाउँदै भगवान् शङ्करको दर्शनको लागि त्यस जङ्गलमा आए।

**तान् विलोक्याम्बिका देवी विवासा व्रीडिता भृशम्।**

**भर्तुरङ्कात् समुत्थाय नीवीमाश्वथ पर्यधात्॥ ३०॥**

**पदार्थ–**

**तान्** = आएका ती ऋषिहरूलाई
**विलोक्य** = देखेर
**अम्बिका** = पार्वती
**देवी** = भगवती
**विवासाः** = वस्त्ररहित भएकी

हुनाले
**भृशम्** = अत्यन्त
**व्रीडिता** = लज्जित हुनुभयो
**अथ** = त्यसपछि
**भर्तुः** = पतिदेव शङ्करको
**अङ्कात्** = काखबाट
**समुत्थाय** = उठेर
**आशु** = झटपट
**नीवीम्** = कटीवस्त्र (साडी आदि)
**पर्यधात्** = धारण गर्नुभयो

**वाक्यार्थ–** अचानक ऋषिहरू आएको देखेर वस्त्ररहित भएकी हुनाले भगवती पार्वती अत्यन्त लज्जित हुनुभयो। अतः ऋषिहरूलाई देख्नासाथ उहाँले पतिदेव शङ्करको काखबाट उठेर झटपट वस्त्र धारण गर्नुभयो।

**ऋषयोऽपि तयोर्वीक्ष्य प्रसङ्गं रममाणयोः।**

**निवृत्ताः प्रययुस्तस्मान्नरनारायणाश्रमम्॥ ३१॥**

पदार्थ–
**ऋषयः अपि** = ऋषिहरू पनि
**रममाणयोः** = विहार गरिरहेका
**तयोः** = ती शिवपार्वतीको
**प्रसङ्गं** = क्रीडाप्रसङ्गलाई
**वीक्ष्य** = देखेर
**तस्मात्** = त्यो जङ्गलबाट
**निवृत्ताः** = फर्किएर
**नरनारायणाश्रमम्** = भगवान् नरनारायणको आश्रममा
**प्रययुः** = गए

**वाक्यार्थ–** ऋषिहरू पनि विहार गरिरहेका शिवपार्वतीको क्रीडाप्रसङ्ग देखेर (त्यहाँ बस्न अनुचित सम्झिएर) त्यस जङ्गलबाट फर्किएर भगवान् नरनारायणको आश्रमतिर गए।

**तदिदं भगवानाह प्रियायाः प्रियकाम्यया।**

**स्थानं यः प्रविशेदेतत् स वै योषिद् भवेदिति॥ ३२॥**

पदार्थ–
**तत्** = त्यसै वेला
**प्रियायाः** = पत्नी पार्वतीको
**प्रियकाम्यया** = प्रसन्नताको लागि
**भगवान्** = भगवान् शङ्करले
**इदं** = यो कुरा
**आह** = भन्नुभयो
**यः** = जुन पुरुष
**एतत्** = यो
**स्थानं** = ठाउँमा
**प्रविशेत्** = प्रवेश गर्दछ
**सः** = त्यो पुरुष
**वै** = निश्चय नै
**योषित्** = स्त्री
**भवेत् इति** = होस्

**वाक्यार्थ–** त्यसपछि भगवान् शङ्करले आफ्नी प्रिया पार्वतीलाई प्रसन्न गराउने उद्देश्यले 'जुन पुरुष यस जङ्गलमा प्रवेश गर्दछ त्यो पुरुष तुरुन्त स्त्री होस्' भन्नुभयो।

**तत ऊर्ध्वं वनं तद् वै पुरुषा वर्जयन्ति हि।**

**सा चानुचरसंयुक्ता विचचार वनाद् वनम्॥ ३३॥**

पदार्थ–
**ततः ऊर्ध्वं** = त्यसपछि (भगवान् शङ्करले यस्तो व्यवस्था बनाउनुभएपछि)
**पुरुषाः** = पुरुषहरू
**तत्** = त्यो
**वनं** = जङ्गललाई
**वै** = निश्चय नै
**वर्जयन्ति** = छोड्दछन् (स्त्रीत्व प्राप्तिको डरले प्रवेश गर्दैनन्)
**सा च** = ती स्त्रीरूपा सुद्युम्न
**अनुचरसंयुक्ता** = स्त्री भएका

| | | |
|---|---|---|
| आफ्ना सेविकाहरूका साथ | **वनात्** = एउटा वनबाट | **विचचार** = घुम्न थालिन् |
| **हि** = निश्चय नै | **वनम्** = अर्को वनमा | |

**वाक्यार्थ–** पार्वतीलाई खुसी बनाउन भगवान् शङ्करले यस्तो अवस्था बनाउनुभएपछि पुरुषहरू स्त्री हुने डरले त्यस जङ्गलमा प्रवेश गर्दैनन्। स्त्रीरूपा सुद्युम्न स्त्री भइसकेका आफ्ना सेविकाका साथ एउटा वनबाट अर्को वनमा घुमेर विचरण गर्न थालिन्।

**अथ तामाश्रमाभ्याशे चरन्तीं प्रमदोत्तमाम्।**

**स्त्रीभिः परिवृतां वीक्ष्य चकमे भगवान् बुधः॥ ३४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | आश्रमको नजिकमा | **भगवान्** = भगवान् |
| **अथ** = त्यसपछि | **चरन्तीं** = घुम्दै गरेकी | **बुधः** = बुध (चन्द्रमाका छोरा)ले |
| **स्त्रीभिः** = स्त्रीहरूद्वारा | **प्रमदोत्तमाम्** = श्रेष्ठ स्त्रीलाई | **चकमे** = प्राप्त गर्ने इच्छा गरे |
| **परिवृतां** = युक्त भई | **वीक्ष्य** = देखेर | |
| **आश्रमाभ्याशे** = आफ्नो | **तां** = ती स्त्रीलाई | |

**वाक्यार्थ–** त्यसपछि अनुचर स्त्रीहरूका साथमा आफ्नो कुटीको वरिपरि घुमिरहेकी ती परमसुन्दरी स्त्रीलाई देखेर भगवान् बुधले उनलाई प्राप्त गर्ने इच्छा गरे।

**सापि तं चकमे सुभ्रूः सोमराजसुतं पतिम्।**

**स तस्यां जनयामास पुरूरवसमात्मजम्॥ ३५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | बुधलाई | **पुरूरवसम्** = पुरूरवा नामका |
| **सा** = ती | **पतिम्** = पतिको रूपमा | **आत्मजम्** = छोरो |
| **सुभ्रूः अपि** = सुन्दरीले पनि | **चकमे** = इच्छा गरिन् | **जनयामास** = जन्माए |
| **तं** = ती | **सः** = ती बुधले | |
| **सोमराजसुतं** = चन्द्रमाका छोरा | **तस्यां** = ती स्त्री (इला)बाट | |

**वाक्यार्थ–** ती सुन्दरी इलाले पनि आश्रममा बसेका चन्द्रमाका छोरा बुधलाई पतिको रूपमा प्राप्त गर्न इच्छा गरिन्। त्यसपछि बुधले उनबाट पुरूरवा नाम गरेको छोरो जन्माए।

**एवं स्त्रीत्वमनुप्राप्तः सुद्युम्नो मानवो नृपः।**

**सस्मार स्वकुलाचार्यं वसिष्ठमिति शुश्रुम॥ ३६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **मानवः** = श्राद्धदेव मनुका छोरा | **वसिष्ठम्** = वसिष्ठलाई |
| **एवं** = यसरी | **नृपः** = राजा | **सस्मार** = स्मरण गरे |
| **स्त्रीत्वं** = स्त्रीरूप | **सुद्युम्नः** = सुद्युम्नले | **इति** = भन्ने कुरा |
| **अनुप्राप्तः** = प्राप्त गरेका | **स्वकुलाचार्यं** = आफ्ना कुलगुरु | **शुश्रुम** = हामीले सुनेका छौं |

**वाक्यार्थ–** यसरी स्त्रीरूपमा रहँदा-रहँदै एक दिन श्राद्धदेव मनुका छोरा सुद्युम्नले आफ्नो

उद्धारका लागि कुलगुरु वसिष्ठको स्मरण गरे भन्ने कुरा हामीले सुनेका छौँ।

**स तस्य तां दशां दृष्ट्वा कृपया भृशपीडितः।**

**सुद्युम्नस्याशयन् पुंस्त्वमुपाधावत शङ्करम्॥ ३७॥**

**पदार्थ—**
**सः** = ती कुलगुरु वसिष्ठले
**तस्य** = ती सुद्युम्नको
**तां** = त्यस्तो स्त्रीरूप
**दशां** = अवस्थालाई
**दृष्ट्वा** = देखेर
**कृपया** = कृपापूर्वक
**भृशपीडितः** = अत्यन्त दुःखी भई
**सुद्युम्नस्य** = सुद्युम्नको
**पुंस्त्वं** = पुरुषरूपता
**आशयन्** = इच्छा गरेर
**शङ्करम्** = भगवान् शङ्करको
**उपाधावत** = शरणमा जानुभयो

**वाक्यार्थ—** सुद्युम्नले आफूलाई स्मरण गरेपछि कुलगुरु वसिष्ठ त्यहाँ आउनुभयो। त्यहाँ सुद्युम्नको स्त्रीरूप अवस्था देखेर उहाँ अत्यन्त दुःखी हुनुभयो र कृपावश सुद्युम्नलाई पुनः पुरुष बनाउने इच्छा गरी भगवान् शङ्करको शरणमा जानुभयो (र भगवान् शङ्करको स्तुति गर्नुभयो)।

**तुष्टस्तस्मै स भगवानृषये प्रियमावहन्।**

**स्वां च वाचमृतां कुर्वन्निदमाह विशाम्पते॥ ३८॥**

**पदार्थ—**
**विशाम्पते** = हे राजा परीक्षित्
**सः** = ती
**भगवान्** = भगवान् शङ्कर
**तुष्टः** = प्रसन्न भएर
**तस्मै** = ती
**ऋषये** = ऋषि वसिष्ठलाई
**प्रियं** = वसिष्ठको अभीष्ट
**आवहन्** = पूर्ण गराउन
**स्वां** = आफ्नो
**वाचं च** = वाणीलाई पनि
**ऋतां** = सत्य
**कुर्वन्** = बनाउँदै
**इदं** = यो कुरा
**आह** = भन्नुभयो

**वाक्यार्थ—** हे परीक्षित्! वसिष्ठले स्तुति गरिसकेपछि प्रसन्न हुनुभएका भगवान् शङ्करले स्तुतिकर्ता ब्रह्मर्षि वसिष्ठको इच्छालाई पनि पूरा गराउन र 'यो जङ्गलमा प्रवेश गर्ने पुरुष स्त्री होस्' भन्ने आफ्नो वाणीलाई पनि सत्य गराउनका लागि वसिष्ठलाई भन्नुभयो।

**मासं पुमान् स भविता मासं स्त्री तव गोत्रजः।**

**इत्थं व्यवस्थया कामं सुद्युम्नोऽवतु मेदिनीम्॥ ३९॥**

**पदार्थ—**
**तव** = तिम्रो
**गोत्रजः** = यजमान
**सुद्युम्नः** = (स्त्रीरूपी) सुद्युम्न
**मासं** = एक महिना
**पुमान्** = पुरुष
**मासं** = अर्को एक महिना
**स्त्री** = स्त्री
**भविता** = हुनेछन्
**इत्थं** = यस्तो
**व्यवस्थया** = व्यवस्थाद्वारा
**सः** = ती सुद्युम्नले
**कामं** = इच्छाअनुसार
**मेदिनीम्** = पृथिवीलाई
**अवतु** = रक्षा गरून्

**वाक्यार्थ—** हे वसिष्ठ! तिम्रो यजमान सुद्युम्न, जो अहिले स्त्री भएका छन् उनी एक महिना पुरुष र अर्को एक महिना स्त्री हुनेछन्। यही व्यवस्थाअनुसार सुद्युम्नले इच्छाअनुसार पृथिवीको

रक्षा गरून्।

**आचार्यानुग्रहात् कामं लब्ध्वा पुंस्त्वं व्यवस्थया।**

**पालयामास जगतीं नाभ्यनन्दन् स्म तं प्रजाः॥ ४०॥**

**पदार्थ—**
**आचार्यानुग्रहात्** = कुलगुरु वसिष्ठको अनुग्रहले
**व्यवस्थया** = (एक महिना पुरुष र अर्को एक महिना स्त्री हुने) व्यवस्था अनुसार
**कामं** = आफ्नो इच्छाअनुसार
**पुंस्त्वं** = पुरुषत्व
**लब्ध्वा** = पाएर
**जगतीं** = पृथिवीलाई
**पालयामास** = पालन गरे (तर)
**प्रजाः** = प्रजाहरूले
**तं** = ती राजा सुद्युम्नलाई
**न अभ्यनन्दन् स्म** = मन पराउँदैनथे

**वाक्यार्थ—** आफ्ना कुलगुरु वसिष्ठको अनुग्रहले एक-एक महिनाको अन्तरालमैं भए पनि आफ्नो इच्छाअनुसारको पुरुषत्व प्राप्त गरेर राजा सुद्युम्नले पृथिवीको पालन गरे। तर प्रजाहरू उनलाई मन पराउँदैनथे।

**तस्योत्कलो गयो राजन् विमलश्च सुतास्त्रयः।**

**दक्षिणापथराजानो बभूवुर्धर्मवत्सलाः॥ ४१॥**

**पदार्थ—**
**राजन्** = हे राजा
**तस्य** = ती सुद्युम्नको
**उत्कलः** = उत्कल
**गयः** = गय
**विमलः च** = विमल (गरी)
**त्रयः** = तीन जना
**सुताः** = छोराहरू थिए
**धर्मवत्सलाः** = धर्ममा प्रेम भएका ती छोराहरू
**दक्षिणापथराजानः** = दक्षिण देशका राजा
**बभूवुः** = भए

**वाक्यार्थ—** हे राजा परीक्षित्! सुद्युम्नका तीन जना छोराहरू थिए— उत्कल, गय र विमल। धर्ममा प्रेम भएका यी तीनै जना छोराहरू दक्षिण देशका राजा भए।

**ततः परिणते काले प्रतिष्ठानपतिः प्रभुः।**

**पुरूरवस उत्सृज्य गां पुत्राय गतो वनम्॥ ४२॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**काले** = धेरै समय
**परिणते** = बितेपछि
**प्रतिष्ठानपतिः** = प्रतिष्ठान नगरीका अधिपति
**प्रभुः** = सामर्थ्यवान् सुद्युम्नले
**पुत्राय** = आफ्नो छोरो
**पुरूरवसे** = पुरूरवालाई
**गां** = पृथिवी (राज्य)
**उत्सृज्य** = दिएर
**वनम्** = जङ्गलतिर
**गतः** = गए

**वाक्यार्थ—** समय बित्दै गएपछि प्रतिष्ठान नगरीका राजा सुद्युम्नले आफ्ना छोरा पुरूरवालाई राज्य दिएर आफू चाहिँ जङ्गलतिर गए।

# अथ द्वितीयोऽध्यायः

## मनुका पृषध्र आदि पाँच पुत्रको वंशवर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं गतेऽथ सुद्युम्ने मनुर्वैवस्वतः सुते ।**

**पुत्रकामस्तपस्तेपे यमुनायां शतं समाः ॥ १ ॥**

**पदार्थ—**
**एवं** = यसरी
**सुते** = पुत्र
**सुद्युम्ने** = सुद्युम्न
**गते** = वन गएपछि
**अथ** = त्यसपछि
**वैवस्वतः** = वैवस्वत
**मनुः** = मनुले
**पुत्रकामः** = पुत्रको इच्छा गरी
**यमुनायां** = यमुनाको तीरमा
**शतं समाः** = सय वर्ष
**तपः** = तपस्या
**तेपे** = गरे

**वाक्यार्थ—** यसरी आफ्नो छोरो सुद्युम्न वन गएपछि वैवस्वत मनुले पुत्रको इच्छा गरी यमुनाको तीरमा गएर सय वर्षसम्म तपस्या गरे।

**ततोऽयजन्मनुर्देवमपत्यार्थं हरिं प्रभुम् ।**

**इक्ष्वाकुपूर्वजान् पुत्रान् लेभे स्वसदृशान् दश ॥ २ ॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**मनुः** = वैवस्वत मनुले
**अपत्यार्थं** = सन्तानप्राप्तिका लागि
**प्रभुम्** = सर्वसमर्थ
**देवं** = भगवान्
**हरिं** = श्रीहरिलाई
**अयजत्** = आराधना गरे
**स्वसदृशान्** = आफू जस्तै
**इक्ष्वाकुपूर्वजान्** = जेठो इक्ष्वाकु लगायत
**दश पुत्रान्** = दश जना छोराहरू
**लेभे** = प्राप्त गरे

**वाक्यार्थ—** त्यसपछि तपस्यारत वैवस्वत मनुले सन्तानप्राप्तिका लागि सर्वमसर्थ भगवान् श्रीहरिको आराधना गरे। भगवान्‌को अनुग्रहले गर्दा उनले आफू जस्तै दश पुत्रहरू प्राप्त गरे। तीमध्ये इक्ष्वाकु सबैभन्दा जेठा थिए।

**पृषध्रस्तु मनोः पुत्रो गोपालो गुरुणा कृतः ।**

**पालयामास गा यत्तो रात्र्यां वीरासनव्रतः ॥ ३ ॥**

**पदार्थ—**
**मनोः** = मनुको
**पुत्रः** = छोरो
**पृषध्रः तु** = पृषध्र चाहिँ
**गुरुणा** = गुरु वसिष्ठद्वारा
**गोपालः** = गाईका रक्षक
**कृतः** = बनाइए (उनी)
**यत्तः** = सावधान भई
**वीरासनव्रतः** = वीरासनमा बसेर

**रात्र्यां** = रातमा | **गाः** = गाईहरूलाई | **पालयामास** = रक्षा गर्दथे

**वाक्यार्थ–** मनुपुत्र पृषध्रलाई कुलगुरु वसिष्ठले आफ्ना गाईहरूको पालन (रक्षा) गर्ने काममा लगाइदिए। त्यसैले उनी वीरासनमा बसेर सावधानपूर्वक रातमा गाईहरूको रक्षा गर्दथे।

**एकदा प्राविशद् गोष्ठं शार्दूलो निशि वर्षति।**
**शयाना गाव उत्थाय भीतास्ता बभ्रमुर्व्रजे॥ ४॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**निशि** = रातमा
**वर्षति** = पानी परिरहेको समयमा
**शार्दूलः** = बाघ
**गोष्ठं** = गोठमा
**प्राविशत्** = पस्यो
**ताः** = गोठमा भएका ती
**शयानाः** = सुतेका
**गावः** = गाईहरू
**भीताः** = डराएर
**उत्थाय** = उठेर
**व्रजे** = गोठमा
**बभ्रमुः** = भाग्न थाले

**वाक्यार्थ–** एक दिन रातमा खुब पानी परिरहेको वेला एउटा बाघ गोठभित्र पस्यो। बाघलाई देखेर सुतेका गाईहरू उठे अनि भयभीत भई गोठभित्र यताउता भाग्न थाले।

**एकां जग्राह बलवान् सा चुक्रोश भयातुरा।**
**तस्यास्तत् क्रन्दितं श्रुत्वा पृषध्रोऽभिससार ह॥ ५॥**

**पदार्थ–**
**बलवान्** = बलवान् बाघले
**एकां** = एउटी गाईलाई
**जग्राह** = समात्यो
**सा** = ती गाई
**भयातुरा** = भयव्याकुल भई
**चुक्रोश** = कराइन्
**तस्याः** = ती गाईको
**तत्** = त्यो
**क्रन्दितं** = चित्कार
**श्रुत्वा** = सुनेर
**ह** = निश्चय नै
**पृषध्रः** = पृषध्र
**अभिससार** = (गाईको) नजिकै आइपुगे

**वाक्यार्थ–** बलवान् त्यस बाघले एउटी गाईलाई समात्यो। बाघले समातेपछि ती गाई भयव्याकुल भएर कराइन्। गाईको चित्कार सुनेर पृषध्र गाईको नजिकै आइपुगे।

**खड्गमादाय तरसा प्रलीनोडुगणे निशि।**
**अजानन्नहनद् बभ्रोः शिरः शार्दूलशङ्कया॥ ६॥**

**पदार्थ–**
**निशि** = रातमा
**प्रलीनोडुगणे** = ताराहरू पनि (मेघले) ढाकिएको समयमा
**खड्गं** = तरबार
**आदाय** = लिएर
**तरसा** = वेगपूर्वक (आएर)
**अजानन्** = भुलवश पृषध्रले
**शार्दूलशङ्कया** = बाघको शङ्काले
**बभ्रोः** = कैली गाईको
**शिरः** = शिर
**अहनत्** = काटे

**वाक्यार्थ–** रातको समय, त्यसमा पनि बादलले ताराहरूलाई ढाकेर झन् अन्धकार भएको वेलामा

पृषध्र हातमा तरबार लिएर वेगपूर्वक आए र उनले बाघ भन्ने ठानेर प्रहार गर्दा भुलवश कैली गाईको शिर काटियो।

**व्याघ्रोऽपि वृक्णश्रवणो निस्त्रिंशाग्राहतस्ततः।**

**निश्चक्राम भृशं भीतो रक्तं पथि समुत्सृजन्॥ ७॥**

**पदार्थ—**
**निस्त्रिंशाग्राहतः** = तरबारको अग्रभागले लागेर
**वृक्णश्रवणः** = कान काटिएको
**व्याघ्रः अपि** = बाघ पनि
**भृशं** = ज्यादै
**भीतः** = डराउँदै
**पथि** = बाटोमा
**रक्तं** = रगत
**समुत्सृजन्** = चुहाउँदै
**ततः** = त्यहाँबाट
**निश्चक्राम** = निस्कियो

**वाक्यार्थ—** पृषध्रले चलाएको तरबारको टुप्पोले लागेर बाघको पनि कान काटियो। त्यसपछि बाघ डराएर बाटोमा रगत चुहाउँदै त्यहाँबाट भाग्यो।

**मन्यमानो हतं व्याघ्रं पृषध्रः परवीरहा।**

**अद्राक्षीत् स्वहतां बभ्रुं व्युष्टायां निशि दुःखितः॥ ८॥**

**पदार्थ—**
**परवीरहा** = वीर शत्रुहरूलाई परास्त गर्ने
**पृषध्रः** = पृषध्रले
**व्याघ्रं** = बाघलाई
**हतं** = मर्‍यो भन्ने
**मन्यमानः** = ठानिरहेका भए पनि
**निशि** = रात
**व्युष्टायां** = बितेपछि
**स्वहतां** = आफूद्वारा मारिएकी
**बभ्रुं** = कैली गाईलाई
**अद्राक्षीत्** = देखे (त्यो देखेर उनी)
**दुःखितः** = अत्यन्त दुःखी भए

**वाक्यार्थ—** वीर शत्रुहरूलाई परास्त गर्ने पृषध्रले बाघ मर्‍यो भन्ने ठानेका थिए, तर जब रात बितेर बिहान भयो तब आफूद्वारा मारिएकी कैली गाईलाई देखेर उनी अत्यन्त दुःखी भए।

**तं शशाप कुलाचार्यः कृतागसमकामतः।**

**न क्षत्रबन्धुः शूद्रस्त्वं कर्मणा भवितामुना॥ ९॥**

**पदार्थ—**
**अकामतः** = अनजानमा
**कृतागसं** = अपराध गरेका
**तं** = ती पृषध्रलाई
**कुलाचार्यः** = कुलगुरु वसिष्ठले
**शशाप** = श्राप दिए
**त्वं** = तँ
**क्षत्रबन्धुः** = अधम क्षत्रिय पनि
**न भविता** = हुन योग्य छैनस्
**अमुना** = यो
**कर्मणा** = गोहत्यारूप कर्मद्वारा
**शूद्रः** = शूद्र (हुनेछस्)

**वाक्यार्थ—** यद्यपि पृषध्रले अनजानमा गोहत्यारूप अपराध गरेका थिए तापनि कुलगुरु वसिष्ठले उनलाई श्राप दिँदै भने— तँ अधम क्षत्रिय पनि हुन योग्य छैनस्। त्यसैले यस गोहत्याका कारण तँ शूद्र हुनेछस्।

**एवं शप्तस्तु गुरुणा प्रत्यगृह्णात् कृताञ्जलिः।**

**अधारयद् व्रतं वीर ऊर्ध्वरेता मुनिप्रियम् ॥ १० ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**गुरुणा** = गुरु वसिष्ठद्वारा
**शप्तः तु** = श्राप दिइएका पृषध्रले
**कृताञ्जलिः** = हात जोडेर
**प्रत्यगृह्णात्** = (श्रापलाई) स्वीकार गरे
**वीरः** = वीर
**ऊर्ध्वरेताः** = जितेन्द्रिय भई
**मुनिप्रियम्** = मुनिहरूलाई मन पर्ने
**व्रतं** = ब्रह्मचर्य व्रत
**अधारयत्** = धारण गरे

**वाक्यार्थ–** यसरी आफ्ना गुरु वसिष्ठले श्राप दिएपछि, त्यसलाई वीर पृषध्रले अँजुली थापेर स्वीकार गरे। त्यसपछि उनले आफ्ना इन्द्रियहरूलाई वशमा राख्दै मुनिहरूलाई मन पर्ने ब्रह्मचर्यव्रत धारण गरे।

**वासुदेवे भगवति सर्वात्मनि परेऽमले ।**
**एकान्तित्वं गतो भक्त्या सर्वभूतसुहृत् समः ॥ ११ ॥**

**पदार्थ–**
**सर्वभूतसुहृत्** = सम्पूर्ण प्राणीहरूका मित्र
**समः** = सबैमा समभाव राख्ने पृषध्र
**सर्वात्मनि** = सर्वात्मा
**परे** = परम
**अमले** = शुद्ध
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**भक्त्या** = भक्तिद्वारा
**एकान्तित्वं** = एकचित्ततामा
**गतः** = प्राप्त भए

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूको मित्र भई तिनीहरूमा समभाव राख्ने पृषध्रले सर्वात्मा परमशुद्ध स्वरूप भएका भगवान् वासुदेवको भक्ति गरी वासुदेवमा नै हरक्षण चित्त लगाउन थाले।

**विमुक्तसङ्गः शान्तात्मा संयताक्षोऽपरिग्रहः ।**
**यदृच्छयोपपन्नेन कल्पयन् वृत्तिमात्मनः ॥ १२ ॥**

**पदार्थ–**
**विमुक्तसङ्गः** = भोगमा अनासक्त
**शान्तात्मा** = शान्त (राग आदिले रहित) मन भएका
**संयताक्षः** = जितेन्द्रिय
**अपरिग्रहः** = (शरीरलाई आवश्यक पर्ने वस्तुहरूको पनि) सङ्ग्रह नगर्ने पृषध्रले
**यदृच्छया** = भाग्यवश
**उपपन्नेन** = प्राप्त पदार्थद्वारा
**आत्मनः** = शरीरको
**वृत्तिं** = जीविका
**कल्पयन्** = चलाउन थाले

**वाक्यार्थ–** भोगमा आसक्ति नगर्ने एवं रागद्वेषले समेत रहित भएका जितेन्द्रिय पृषध्र शरीरलाई आवश्यक पर्ने वा अरू कुनै पनि प्रकारका पदार्थहरूको सङ्ग्रह गर्दैनथे। यसरी भाग्यवश जे-जस्तो वस्तु प्राप्त भयो, त्यसैबाट उनी आफ्नो जीविका चलाउँथे।

**आत्मन्यात्मानमाधाय ज्ञानतृप्तः समाहितः ।**

**विचचार महीमेतां जडान्धबधिराकृतिः ॥ १३ ॥**

**पदार्थ–**
**आत्मनि** = सर्वात्मा भगवान्मा
**आत्मानं** = आफ्नो मनलाई
**आधाय** = स्थिर राखेर
**समाहितः** = इन्द्रियवृत्तिलाई नियन्त्रित गरी
**ज्ञानतृप्तः** = आत्मज्ञानद्वारा तुष्ट पृषध्र
**जडान्धबधिराकृतिः** = जड, अन्धो र बहिरो जस्तो भई
**एतां** = यो
**महीं** = पृथिवीमा
**विचचार** = घुम्न थाले

**वाक्यार्थ–** मनलाई सर्वात्मा भगवान्मा स्थिर बनाई इन्द्रियवृत्तिलाई नियन्त्रित गरेर आत्मज्ञानद्वारा सन्तुष्ट भएका पृषध्र यस पृथिवीमा कहिले जडजस्तो, कहिले अन्धोजस्तो र कहिले बहिरोजस्तो भएर घुम्न थाले।

**एवं वृत्तो वनं गत्वा दृष्ट्वा दावाग्निमुत्थितम्।**
**तेनोपयुक्तकरणो ब्रह्म प्राप परं मुनिः ॥ १४ ॥**

**पदार्थ–**
**एवं वृत्तः** = यसरी जीवन निर्वाह गरिरहेका पृषध्रले
**वनं** = वन
**गत्वा** = गएर (त्यहाँ)
**उत्थितम्** = बलिरहेको
**दावाग्निं** = डढेलो
**दृष्ट्वा** = देखेर
**तेन** = त्यही डढेलोको आगोद्वारा
**उपयुक्तकरणः** = हात, गोडा आदि सम्पूर्ण अङ्गहरू डढाएर
**मुनिः** = मुनि पृषध्रले
**परं ब्रह्म** = परब्रह्म परमात्मालाई
**प्राप** = प्राप्त गरे

**वाक्यार्थ–** यसरी आफ्नो जीवन निर्वाह गरिरहेका पृषध्रले एक दिन वन गएको वेलामा त्यहाँ डढेलो लागिरहेको देखे। त्यसपछि उनले त्यही डढेलोको आगोमा हात, गोडा, आदि सम्पूर्ण अङ्गहरूलाई डढाएर भस्म बनाए र परब्रह्म परमात्मालाई प्राप्त गरे।

**कविः कनीयान् विषयेषु निःस्पृहो विसृज्य राज्यं सह बन्धुभिर्वनम्।**
**निवेश्य चित्ते पुरुषं स्वरोचिषं विवेश कैशोरवयाः परं गतः ॥ १५ ॥**

**पदार्थ–**
**कनीयान्** = इक्ष्वाकुहरूको कान्छो
**कविः** = कवि
**कैशोरवयाः** = किशोर अवस्थाको भए पनि
**विषयेषु** = विषयहरूमा
**निःस्पृहः** = अनासक्त थिए (त्यसैले)
**बन्धुभिः सह** = आफ्ना बन्धुहरूका साथ
**राज्यं** = राज्य
**विसृज्य** = छाडेर
**स्वरोचिषं** = स्वयंप्रकाश
**पुरुषं** = भगवान्लाई
**चित्ते** = हृदयमा
**निवेश्य** = राखेर
**वनम्** = वन
**गतः** = गए (र उनले)
**परं** = परमपुरुष भगवान्लाई
**विवेश** = प्राप्त गरे

**वाक्यार्थ–** इक्ष्वाकुहरूमा सबैभन्दा कान्छो कवि किशोर भए पनि विषयहरूमा अनासक्त थिए।

त्यसैले उनले किशोर अवस्थामा नै राज्य छाडेर आफ्ना बन्धुहरूका साथ जङ्गल गई स्वयंप्रकाश भगवान्लाई हरक्षण आफ्नो हृदयमा ध्यान गर्दै अन्त्यमा परमपुरुष भगवान्लाई प्राप्त गरे।

**करूषान्मानवादासन् कारूषाः क्षत्रजातयः।**

**उत्तरापथगोप्तारो ब्रह्मण्या धर्मवत्सलाः॥ १६॥**

**पदार्थ–**
**मानवात्** = मनुपुत्र
**करूषात्** = करूषबाट
**कारूषाः** = कारूष नामका
**उत्तरापथगोप्तारः** = उत्तर देशका रक्षक
**ब्रह्मण्याः** = ब्राह्मणप्रेमी
**धर्मवत्सलाः** = धर्मनिष्ठ
**क्षत्रजातयः** = क्षत्रियहरू
**आसन्** = उत्पन्न भएका थिए

**वाक्यार्थ–** मनुका पुत्र करूषबाट उत्तर देशका रक्षक, ब्राह्मणप्रेमी एवं धर्मनिष्ठ कारूष नाम भएका क्षत्रियहरू उत्पन्न भए।

**धृष्टाद् धार्ष्टमभूत् क्षत्रं ब्रह्मभूयं गतं क्षितौ।**

**नृगस्य वंशः सुमतिर्भूतज्योतिस्ततो वसुः॥ १७॥**

**पदार्थ–**
**धृष्टात्** = मनुपुत्र धृष्टबाट
**धार्ष्टम्** = धार्ष्ट नामका
**क्षत्रं** = क्षत्रिय
**अभूत्** = जन्मे (ती क्षत्रियहरूले)
**क्षितौ** = पृथिवीमा नै
**ब्रह्मभूयं** = ब्राह्मणत्वलाई
**गतं** = प्राप्त गरे
**नृगस्य** = मनुपुत्र नृगको
**वंशः** = सन्तान
**सुमतिः** = सुमति भए (उनका छोरा)
**भूतज्योतिः** = भूतज्योति भए
**ततः** = ती भूतज्योतिबाट
**वसुः** = वसु भए

**वाक्यार्थ–** मनुपुत्र धृष्टका धार्ष्ट नामका क्षत्रिय पुत्रहरू थिए। उनीहरूले यही पृथिवीमा त्यही शरीरद्वारा ब्राह्मणत्व प्राप्त गरे। अर्को मनुपुत्र नृगका छोरा सुमति थिए। सुमतिका छोरा भूतज्योति र उनका छोरा वसु भए।

**वसोः प्रतीकस्तत्पुत्र ओघवानोघवत्पिता।**

**कन्या चौघवती नाम सुदर्शन उवाह ताम्॥ १८॥**

**पदार्थ–**
**वसोः** = वसुका (छोरा)
**प्रतीकः** = प्रतीक
**तत्पुत्रः** = तिनका छोरा
**ओघवान्** = ओघवान्
**ओघवत्पिता** = ओघवान्कै पिता थिए
**कन्या च** = छोरी चाहिँ
**ओघवती नाम** = ओघवती नामकी थिइन्
**सुदर्शनः** = सुदर्शनले
**ताम्** = ती ओघवतीलाई
**उवाह** = विवाह गरे

**वाक्यार्थ–** वसुका पुत्र प्रतीक र प्रतीकका पुत्र ओघवान् थिए। ओघवान्को ओघवान् नामकै एउटा छोरा र ओघवती नामकी एउटी छोरी थिइन्। ओघवतीलाई सुदर्शनले विवाह गरे।

**चित्रसेनो नरिष्यन्तादृक्षस्तस्य सुतोऽभवत्।**
**तस्य मीढ्वांस्ततः कूर्च इन्द्रसेनस्तु तत्सुतः॥ १९॥**

| | | |
|---|---|---|
| पदार्थ– | **तस्य** = ती चित्रसेनका | **ततः** = ती मीढ्वान्बाट |
| **नरिष्यन्तात्** = नरिष्यन्तबाट | **ऋक्षः** = ऋक्ष नामका छोरा भए | **कूर्चः** = कूर्च |
| **चित्रसेनः** = चित्रसेन नामका | **तस्य** = ती ऋक्षको | **तत्सुतः तु** = ती कूर्चका छोरा |
| **सुतः** = छोरा | **मीढ्वान्** = मीढ्वान् नामका | चाहिँ |
| **अभवत्** = भए | छोरा भए | **इन्द्रसेनः** = इन्द्रसेन भए |

**वाक्यार्थ–** मनुपुत्र नरिष्यन्तका छोरा चित्रसेन, चित्रसेनका ऋक्ष, ऋक्षका मीढ्वान्, मीढ्वान्का कूर्च र कूर्चका छोरा इन्द्रसेन भए।

**वीतिहोत्रस्त्विन्द्रसेनात् तस्य सत्यश्रवा अभूत्।**
**उरुश्रवाः सुतस्तस्य देवदत्तस्ततोऽभवत्॥ २०॥**

| | | |
|---|---|---|
| पदार्थ– | **सत्यश्रवाः** = सत्यश्रवा नामका | **उरुश्रवाः** = उरुश्रवा |
| **इद्रसेनात् तु** = इन्द्रसेनबाट | **सुतः** = छोरा | **ततः** = ती उरुश्रवाबाट |
| **वीतिहोत्रः** = वीतिहोत्र | **अभूत्** = भए | **देवदत्तः** = देवदत्त |
| **तस्य** = ती वीतिहोत्रका | **तस्य** = ती सत्यश्रवाका | **अभवत्** = भए |

**वाक्यार्थ–** इन्द्रसेनबाट वीतिहोत्र र वीतिहोत्रबाट सत्यश्रवा नामका छोरा भए। सत्यश्रवाबाट उरुश्रवा र उरुश्रवाबाट देवदत्त नामका छोरा जन्मिए।

**ततोऽग्निवेश्यो भगवानग्निः स्वयमभूत् सुतः।**
**कानीन इति विख्यातो जातूकर्ण्यो महानृषिः॥ २१॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अग्निवेश्यः** = अग्निवेश्य | **ऋषिः** = ऋषि |
| **ततः** = ती देवदत्तबाट | नामका | **कानीनः इति** = कानीन र |
| **स्वयं** = स्वयं | **सुतः** = छोराका रूपमा | **जातूकर्ण्यः** = जातूकर्ण्यको |
| **भगवान्** = भगवान् | **अभूत्** = भए (जन्मिए) | नामले |
| **अग्निः** = अग्नि | **महान्** = महान् | **विख्यातः** = प्रसिद्ध भए |

**वाक्यार्थ–** देवदत्तबाट अग्निवेश्य नामका छोराका रूपमा साक्षात् भगवान् अग्निदेव जन्मिए। यिनै महर्षि अग्निवेश्य पछि गएर कानीन र जातूकर्ण्यको नामले प्रसिद्ध भए।

**ततो ब्रह्मकुलं जातमाग्निवेश्यायनं नृप।**
**नरिष्यन्तान्वयः प्रोक्तो दिष्टवंशमतः शृणु॥ २२॥**

**पदार्थ–**
**नृप** = हे राजा
**ततः** = ती अग्निवेश्यबाट
**आग्निवेश्यायनं** = आग्निवेश्यायन नामक
**ब्रह्मकुलं** = ब्राह्मणगोत्र
**जातं** = प्रारम्भ भयो
**नरिष्यन्तान्वयः** = नरिष्यन्तको वंश
**प्रोक्तः** = सुनाएँ
**अतः** = अब
**दिष्टवंशं** = दिष्टको वंश
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! अग्निवेश्यबाट आग्निवेश्यायन नामक ब्राह्मणगोत्रको प्रारम्भ भयो। यसप्रकार नरिष्यन्तको वंशको वर्णन मैले गरेँ अब दिष्टको वंशवर्णन पनि सुन्नुहोस्।

**नाभागो दिष्टपुत्रोऽन्यः कर्मणा वैश्यतां गतः।**
**भलन्दनः सुतस्तस्य वत्सप्रीतिर्भलन्दनात्॥ २३॥**

**पदार्थ–**
**दिष्टपुत्रः** = दिष्टका छोरा
**नाभागः** = नाभाग थिए (उनी)
**अन्यः** = (पछि बताइने नाभागभन्दा) भिन्न, यिनी
**कर्मणा** = (कृषि, वाणिज्य आदि) कर्मका कारण
**वैश्यतां** = वैश्य जातिमा
**गतः** = गए
**तस्य** = ती नाभागको
**सुतः** = छोरो
**भलन्दनः** = भलन्दन
**भलन्दनात्** = भलन्दनबाट
**वत्सप्रीतिः** = वत्सप्रीति नामका छोरा भए

**वाक्यार्थ–** दिष्टका छोरा नाभाग भए। पछि मैले बताउने नाभागभन्दा यिनी भिन्न हुन्। कृषि, वाणिज्य आदि कर्म गरेका हुनाले यिनी पछि वैश्य भए। यिनका छोरा भलन्दन भए र तिनबाट वत्सप्रीति नामका छोरा भए।

**वत्सप्रीतेः सुतः प्रांशुस्तत्सुतं प्रमतिं विदुः।**
**खनित्रः प्रमतेस्तस्माच्चाक्षुषोऽथ विविंशतिः॥ २४॥**

**पदार्थ–**
**वत्सप्रीतेः** = वत्सप्रीतिका
**सुतः** = छोरा
**प्रांशुः** = प्रांशु
**तत्सुतं** = ती प्रांशुका छोरा
**प्रमतिं** = प्रमति
**विदुः** = भन्दछन्
**प्रमतेः** = प्रमतिका
**खनित्रः** = खनित्र
**तस्मात्** = ती खनित्रबाट
**चाक्षुषः** = चाक्षुष
**अथ** = यसपछि (चाक्षुषका)
**विविंशतिः** = विविंशति नामका छोरा भए

**वाक्यार्थ–** वत्सप्रीतिका छोरा प्रांशु थिए भने प्रांशुका छोरा प्रमति थिए। प्रमतिका छोरा खनित्र, खनित्रका चाक्षुष र चाक्षुषका छोरा विविंशति नामका भए।

**विविंशतिसुतो रम्भः खनिनेत्रोऽस्य धार्मिकः।**
**करन्धमो महाराज तस्यासीदात्मजो नृप॥ २५॥**

**पदार्थ—**
**महाराज** = हे महाराज
**विविंशतिसुतः** = विविंशतिका छोरा
**रम्भः** = रम्भ
**अस्य** = यी रम्भका छोरा
**खनिनेत्रः** = खनिनेत्र (जो)
**धार्मिकः** = धार्मिक थिए
**तस्य** = ती खनिनेत्रका
**आत्मजः** = छोरा
**करन्धमः** = करन्धम नामका
**नृपः** = राजा
**आसीत्** = भए

**वाक्यार्थ—** हे परीक्षित् ! विविंशतिका छोरा रम्भ र यिनका छोरा खनिनेत्र थिए। यिनी धार्मिक थिए। यिनका छोरा करन्धम नामका राजा भए।

**तस्यावीक्षित् सुतो यस्य मरुत्तश्चक्रवर्त्यभूत् ।**
**संवर्तोऽयाजयद् यं वै महायोग्यङ्गिरःसुतः ॥ २६ ॥**

**पदार्थ—**
**तस्य** = ती करन्धमको
**अवीक्षित्** = अवीक्षित् नामका
**सुतः** = छोरा भए
**यस्य** = जुन अवीक्षित्का
**मरुत्तः** = मरुत्त नामका छोरा
**चक्रवर्ती** = चक्रवर्ती राजा
**अभूत्** = भए
**यं** = जुन मरुत्तलाई
**वै** = निश्चय नै
**महायोगी** = महायोगी
**अङ्गिरःसुतः** = अङ्गिराका छोरा
**संवर्तः** = संवर्तले
**अयाजयत्** = यज्ञ गराए

**वाक्यार्थ—** करन्धमका छोरा अवीक्षित्, अवीक्षित्का छोरा मरुत्त भए। मरुत्त चक्रवर्ती राजा भए। अङ्गिरा ऋषिका छोरा महायोगी संवर्तले मरुत्तलाई यज्ञ गराएका थिए।

**मरुत्तस्य यथा यज्ञो न तथान्यस्य कश्चन ।**
**सर्वं हिरण्मयं त्वासीद् यत्किञ्चिच्चास्य शोभनम् ॥ २७ ॥**

**पदार्थ—**
**मरुत्तस्य** = मरुत्तको
**यथा** = जस्तो
**यज्ञः** = यज्ञ भएको थियो
**तथा** = त्यस्तो यज्ञ
**अन्यस्य** = अरूको
**कश्चन** = कुनै पनि
**न** = भएको थिएन
**अस्य** = यी मरुत्तको यज्ञमा
**यत् च किञ्चित्** = जुन कुनै पनि यज्ञसामग्री
**सर्वं** = सबै
**शोभनम्** = सुन्दर
**हिरण्मयं तु** = सुवर्णमय नै
**आसीत्** = थियो

**वाक्यार्थ—** मरुत्तले जस्तो यज्ञ गरेका थिए त्यस्तो यज्ञ संसारमा अर्को भएको थिएन। किनभने उनको यज्ञमा साना-ठुला जुन-कुनै पनि यज्ञसामग्रीहरू थिए, ती सबै सुनले बनेका अति सुन्दर थिए।

**अमाद्यदिन्द्रः सोमेन दक्षिणाभिर्द्विजातयः ।**
**मरुतः परिवेष्टारो विश्वेदेवाः सभासदः ॥ २८ ॥**

**पदार्थ—**
**इन्द्रः** = देवराज इन्द्र
**सोमेन** = सोमरसद्वारा
**अमाद्यत्** = मात्त थाले
**द्विजातयः** = ब्राह्मणहरू
**दक्षिणाभिः** = दक्षिणाद्वारा (तृप्त

भए)
**मरुतः** = मरुद्गण
**परिवेष्टारः** = भोजन पस्किनेवाला थिए
**विश्वेदेवाः** = विश्वेदेवहरू
**सभासदः** = सभासद् थिए

**वाक्यार्थ—** मरुत्तको त्यस यज्ञमा सोमरस पान गरेर देवराज इन्द्र तृप्त भई मात्त थाले। यज्ञका ऋत्विक् आदि ब्राह्मणहरू पनि यथेच्छ दक्षिणा पाएर सन्तुष्ट भए। त्यस यज्ञमा स्वयं मरुद्गण भोजन पस्किने भान्से थिए भने विश्वेदेवहरू सभासद् थिए।

**मरुत्तस्य दमः पुत्रस्तस्यासीद् राज्यवर्धनः।**
**सुधृतिस्तत्सुतो जज्ञे सौधृतेयो नरः सुतः॥ २९॥**

**पदार्थ—**
**मरुत्तस्य** = मरुत्तका
**दमः** = दम नामका
**पुत्रः** = छोरा
**आसीत्** = थिए
**तस्य** = ती दमका
**राज्यवर्धनः** = राज्यवर्धन
**तत्सुतः** = ती राज्यवर्धनका छोरा
**सुधृतिः** = सुधृति
**सौधृतेयः** = सुधृतिका
**नरः** = नर नाम गरेका
**सुतः** = छोरा
**जज्ञे** = जन्मे

**वाक्यार्थ—** मरुत्तका दम नाम गरेका छोरा भए। दमको राज्यवर्धन, राज्यवर्धनको सुधृति र सुधृतिका नर नाम गरेका छोरा भए।

**तत्सुतः केवलस्तस्माद् बन्धुमान् वेगवांस्ततः।**
**बन्धुस्तस्याभवद् यस्य तृणबिन्दुर्महीपतिः॥ ३०॥**

**पदार्थ—**
**तत्सुतः** = ती नरका छोरा
**केवलः** = केवल
**तस्मात्** = ती केवलबाट
**बन्धुमान्** = बन्धुमान्
**ततः** = ती बन्धुमान्बाट
**वेगवान्** = वेगवान्
**तस्य** = ती वेगवान्का
**बन्धुः** = बन्धु
**यस्य** = जुन बन्धुको
**तृणबिन्दुः** = तृणबिन्दु नामक पुत्र
**महीपतिः** = राजा
**अभवत्** = भए

**वाक्यार्थ—** नरका केवल, केवलका बन्धुमान्, बन्धुमान्का वेगवान्, वेगवान्का बन्धु र बन्धुका तृणबिन्दु नामका पुत्र राजा भए।

**तं भेजेऽलम्बुषा देवी भजनीयगुणालयम्।**
**वराप्सरा यतः पुत्राः कन्या चेडविडाभवत्॥ ३१॥**

**पदार्थ—**
**वरा** = श्रेष्ठ
**अप्सरा** = अप्सरा
**अलम्बुषा** = अलम्बुषा नामकी
**देवी** = देवीले
**भजनीयगुणालयम्** = प्रशंसनीय गुण भएका
**तं** = ती राजा तृणबिन्दुलाई
**भेजे** = विवाह गरिन्
**यतः** = जुन अप्सराबाट
**पुत्राः** = (तीन) पुत्रहरू
**इडविडा** = इडविडा नाम गरेकी

| | |
|---|---|
| **कन्या च** = छोरी पनि | **अभवत्** = जन्मिइन् |

**वाक्यार्थ–** प्रशंसनीय गुणहरूले युक्त राजा तृणबिन्दुलाई अलम्बुषा नाम गरेकी श्रेष्ठ अप्सराले वरण गरिन्। तृणबिन्दुको अलम्बुषाबाट तीन पुत्रहरू र इडविडा नाम गरेकी एक छोरी पनि जन्मिइन्।

**तस्यामुत्पादयामास विश्रवा धनदं सुतम्।**
**प्रादाय विद्यां परमामृषिर्योगेश्वरात् पितुः॥ ३२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **योगेश्वरात्** = योगेश्वर पुलस्त्यबाट | **तस्यां** = ती इडविडामा |
| **ऋषिः** = मुनिवर | **परमां** = उत्तम | **धनदं** = कुबेरलाई |
| **विश्रवाः** = विश्रवा (पुलस्त्यका छोरा)ले | **विद्यां** = विद्या | **सुतम्** = पुत्ररूपमा |
| **पितुः** = आफ्ना पिता | **प्रादाय** = प्राप्त गरेर | **उत्पादयामास** = जन्माए |

**वाक्यार्थ–** मुनिवर विश्रवाले आफ्ना पिताजी योगेश्वर पुलस्त्यबाट उत्तम विद्या प्राप्त गरी राजा तृणबिन्दुकी छोरी इडविडाको गर्भबाट कुबेरलाई पुत्ररूपमा उत्पन्न गरे।

**विशालः शून्यबन्धुश्च धूम्रकेतुश्च तत्सुताः।**
**विशालो वंशकृद् राजा वैशालीं निर्ममे पुरीम्॥ ३३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तत्सुताः** = ती तृणबिन्दुका तीन छोरा भए | **विशालः** = विशालले |
| **विशालः** = विशाल | **वंशकृत्** = वंशवर्धन | **वैशालीं** = वैशाली नामको |
| **शून्यबन्धुः च** = शून्यबन्धु | **राजा** = राजा | **पुरीम्** = नगरी |
| **धूम्रकेतुः च** = धूम्रकेतु | | **निर्ममे** = बनाए |

**वाक्यार्थ–** तृणबिन्दुका विशाल, शून्यबन्धु र धूम्रकेतु नामका तीन छोरा भए। त्यसमध्ये जेठा छोरा विशालले तृणबिन्दुको वंशविस्तार गरे। उनले वैशाली नामको सुन्दर नगरी पनि बनाए।

**हेमचन्द्रः सुतस्तस्य धूम्राक्षस्तस्य चात्मजः।**
**तत्पुत्रात् संयमादासीत् कृशाश्वः सहदेवजः॥ ३४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **आत्मजः** = छोरा | भएका |
| **तस्य** = ती विशालको | **धूम्राक्षः** = धूम्राक्ष भए | **कृशाश्वः** = कृशाश्व नामका |
| **हेमचन्द्रः** = हेमचन्द्र नामका | **तत्पुत्रात्** = ती धूम्राक्षका छोरा | **आसीत्** = छोरा थिए |
| **सुतः** = छोरा थिए | **संयमात्** = संयमबाट | |
| **तस्य च** = ती हेमचन्द्रका | **सहदेवजः** = देवजले सहित | |

**वाक्यार्थ–** विशालका छोरा हेमचन्द्र र तिनका छोरा धूम्राक्ष भए। धूम्राक्षका छोरा संयम भए। संयमका कृशाश्व र देवज नामका दुई जना छोरा जन्मिए।

**कृशाश्वात् सोमदत्तोऽभूद् योऽश्वमेधैरिडस्पतिम्।**
**इष्ट्वा पुरुषमापाग्र्यां गतिं योगेश्वराश्रितः॥ ३५॥**

**पदार्थ–**
**कृशाश्वात्** = कृशाश्वबाट
**सोमदत्तः** = सोमदत्त नामका छोरा
**अभूत्** = भए
**योगेश्वराश्रितः** = भगवान् योगेश्वरको आश्रय लिएका
**यः** = जुन सोमदत्तले
**अश्वमेधैः** = अश्वमेध यज्ञद्वारा
**इडस्पतिम्** = यज्ञेश्वर
**पुरुषम्** = यज्ञफलदाता भगवान्लाई
**इष्ट्वा** = आराधना गरेर
**अग्र्यां** = उत्तम
**गतिं** = गति
**आप** = प्राप्त गरे

**वाक्यार्थ–** कृशाश्वका सोमदत्त नामका छोरा भए। भगवान् योगेश्वरको आश्रय लिएका उनले अश्वमेध यज्ञ गरेर यज्ञेश्वर भगवान्लाई आराधना गरी सर्वोत्तम गति (भगवद्गति) प्राप्त गरे।

**सौमदत्तिस्तु सुमतिस्तत्सुतो जनमेजयः।**
**एते वैशालभूपालास्तृणबिन्दोर्यशोधराः॥ ३६॥**

**पदार्थ–**
**सौमदत्तिः तु** = सोमदत्तका छोरा
**सुमतिः** = सुमति थिए
**तत्सुतः** = ती सुमतिका छोरा
**जनमेजयः** = जनमेजय भए
**एते** = यी सबै
**वैशालभूपालाः** = विशालको वंशमा जन्मेका राजाहरूले
**तृणबिन्दोः** = तृणबिन्दुको
**यशोधराः** = कीर्तिलाई (धारण) विस्तार गरे

**वाक्यार्थ–** सोमदत्तका छोरा सुमति र सुमतिका छोरा जनमेजय भए। यी सबै राजाहरू विशालको वंशमा जन्मिएका हुन् र यिनीहरूले राजा तृणबिन्दुको कीर्तिलाई विस्तार गरे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे द्वितीयोऽध्यायः॥ २॥**

# अथ तृतीयोऽध्यायः

## महर्षि च्यवन, राजा शर्याति र उनकी छोरी सुकन्याको कथा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**शर्यातिर्मानवो राजा ब्रह्मिष्ठः सः बभूव ह ।**

**यो वा अङ्गिरसां सत्रे द्वितीयमहरूचिवान् ॥ १ ॥**

**पदार्थ–**
**सः** = ती
**मानवः** = मनुका छोरा
**शर्यातिः** = शर्याति नाम गरेका
**राजा** = राजा
**ह** = निश्चय नै
**ब्रह्मिष्ठः** = वेदज्ञ विद्वान्
**बभूव** = भए
**यः** = जसले
**वै** = निश्चय नै
**अङ्गिरसां** = अङ्गिरा गोत्रीयहरूको
**सत्रे** = यज्ञमा
**द्वितीयम् अहः** = दोस्रो दिनमा गर्नुपर्ने कर्म
**ऊचिवान्** = बताएका थिए

**वाक्यार्थ–** मनुका छोरा राजा शर्याति वेदज्ञ विद्वान् भए, उनले अङ्गिरा गोत्रीय ऋषिहरूको यज्ञमा दोस्रो दिनमा गर्नुपर्ने कर्म बताएका थिए।

**सुकन्या नाम तस्यासीत् कन्या कमललोचना ।**

**तया सार्धं वनगतो ह्यगमच्च्यवनाश्रमम् ॥ २ ॥**

**पदार्थ–**
**तस्य** = ती शर्यातिकी
**कमललोचना** = कमलजस्ता सुन्दर आँखा भएकी
**सुकन्या नाम** = सुकन्या नामकी
**कन्या** = छोरी
**आसीत्** = थिइन्
**तया** = तिनै सुकन्याका
**सार्धं** = साथमा
**वनगतः** = वनमा गएका (राजा शर्याति)
**हि** = निश्चय नै
**च्यवनाश्रमम्** = च्यवन ऋषिको आश्रममा
**अगमत्** = पुगे

**वाक्यार्थ–** राजा शर्यातिकी कमलजस्ता सुन्दर आँखा भएकी सुकन्या नामकी छोरी थिइन्, तिनै सुकन्याको साथमा वनमा गएका राजा शर्याति च्यवन ऋषिको आश्रममा पुगे।

**सा सखीभिः परिवृता विचिन्वत्यङ्घ्रिपान् वने ।**

**वल्मीकरन्ध्रे ददृशे खद्योते इव ज्योतिषी ॥ ३ ॥**

**पदार्थ–**
**सखीभिः** = साथीहरूद्वारा
**परिवृता** = घेरिएकी
**सा** = ती सुकन्याले
**वने** = वनमा
**अङ्घ्रिपान्** = वृक्षहरू
**विचिन्वती** = हेर्दा-हेर्दै
**वल्मीकरन्ध्रे** = धमिराका गोलाको प्वालमा

**खद्योते इव** = जुनकिरीजस्ता | **ज्योतिषी** = दुई ओटा ज्योति | **ददृशे** = देखिन्

**वाक्यार्थ–** शर्यातिकी छोरी सुकन्याले एक दिन साथीहरूको साथमा वनमा वृक्षहरू हेर्दा-हेर्दै धमिराको गोलाको प्वालमा जुनकिरीजस्ता दुई ओटा ज्योति देखिन्।

**ते दैवचोदिता बाला ज्योतिषी कण्टकेन वै।**
**अविध्यन्मुग्धभावेन सुस्रावासृक् ततो बहु ॥४ ॥**

**पदार्थ–**

**दैवचोदिता** = प्रारब्धद्वारा प्रेरित
**बाला** = बालिका सुकन्याले
**मुग्धभावेन** = अन्जानमा नै
**ते ज्योतिषी** = ती दुई ज्योतिलाई
**कण्टकेन** = काँडाले
**अविध्यत्** = घोचिदिइन्
**वै** = निश्चय नै
**ततः** = त्यो घोचिएको ठाउँबाट
**बहु** = धेरै
**असृक्** = रगत
**सुस्राव** = बग्न थाल्यो

**वाक्यार्थ–** ती सुकन्याले प्रारब्धवश धमिराको प्वालमा देखिएका दुई ज्योतिलाई अन्जानमा नै काँडाले घोचिदिइन्। त्यसपछि ती प्वालबाट धेरै रगत बग्न थाल्यो।

**शकृन्मूत्रनिरोधोऽभूत् सैनिकानां च तत्क्षणात्।**
**राजर्षिस्तमुपालक्ष्य पुरुषान् विस्मितोऽब्रवीत्॥ ५॥**

**पदार्थ–**

**तत्क्षणात्** = तत्काल
**सैनिकानां** = सैनिकहरूको
**शकृन्मूत्रनिरोधः च** = मल र मूत्र रोकिने
**अभूत्** = भयो
**तम्** = त्यस्तो मलमूत्र रोकिएको
**उपालक्ष्य** = देखेर
**विस्मितः** = छक्क परेका
**राजर्षिः** = राजा शर्यातिले
**पुरुषान्** = सैनिकहरूलाई
**अब्रवीत्** = भन्न लागे

**वाक्यार्थ–** उत्तिखेरै ती राजाका सम्पूर्ण सैनिकहरूको मलमूत्र रोकियो। त्यो देखेर आश्चर्यचकित भएका राजा शर्यातिले आफ्ना सैनिकहरूलाई भन्न लागे।

**अप्यभद्रं न युष्माभिर्भार्गवस्य विचेष्टितम्।**
**व्यक्तं केनापि नस्तस्य कृतमाश्रमदूषणम्॥ ६॥**

**पदार्थ–**

**अपि** = कतै
**युष्माभिः** = तिमीहरूद्वारा
**भार्गवस्य** = भृगुवंशी च्यवन ऋषिको
**अभद्रं** = नराम्रो हुने काम त
**न विचेष्टितम्** = गरिएन
**व्यक्तं** = पक्कै पनि
**नः** = हामीहरूमध्ये
**केन अपि** = कसैले पनि
**तस्य** = ती च्यवन ऋषिको
**आश्रमदूषणम्** = आश्रममा उपद्रो
**कृतम्** = गरेको हुनुपर्छ

**वाक्यार्थ–** कतै तिमीहरूले च्यवन ऋषिप्रति नराम्रो व्यवहार त गरेनौ ? पक्कै पनि हामीहरूमध्ये कसैले ती च्यवन ऋषिको आश्रममा उपद्रो गरेको हुनुपर्छ।

**सुकन्या प्राह पितरं भीता किञ्चित् कृतं मया ।**
**द्वे ज्योतिषी अजानन्त्या निर्भिन्ने कण्टकेन वै ॥ ७ ॥**

**पदार्थ–**
**भीता** = डराएकी
**सुकन्या** = सुकन्याले
**पितरं** = बाबु शर्यातिलाई
**प्राह** = बताइन्
**मया** = मैले
**किञ्चित्** = केही (अपराध)
**कृतं** = गरेकी छु
**अजानन्त्या** = नजानेकी (मद्वारा)
**द्वे** = दुई ओटा
**ज्योतिषी** = ज्योतिहरू
**वै** = निश्चय नै
**कण्टकेन** = काँडाद्वारा
**निर्भिन्ने** = फुटाइए

**वाक्यार्थ–** सुकन्याले डराई-डराई आफ्ना बाबु शर्यातिलाई भन्न लागिन्– मबाट अन्जानमा केही अपराध भएको छ, मैले काँडाले घोचेर दुई ओटा ज्योतिलाई फुटाएकी थिएँ ।

**दुहितुस्तद् वचः श्रुत्वा शर्यातिर्जातसाध्वसः ।**
**मुनिं प्रसादयामास वल्मीकान्तर्हितं शनैः ॥ ८ ॥**

**पदार्थ–**
**दुहितुः** = छोरीको
**तत्** = त्यो
**वचः** = कुरा
**श्रुत्वा** = सुनेर
**जातसाध्वसः** = डराएका
**शर्यातिः** = राजा शर्यातिले
**वल्मीकान्तर्हितं** = धमिराको गोलाभित्र रहेका
**मुनिं** = मुनिलाई
**शनैः** = बिस्तारै
**प्रसादयामास** = खुसी बनाए

**वाक्यार्थ–** छोरीको त्यस्तो कुरा सुनेर ज्यादै डराएका राजा शर्यातिले धमिराको गोलाभित्र रहेका मुनिलाई बिस्तारै खुसी बनाए ।

**तदभिप्रायमाज्ञाय प्रादाद् दुहितरं मुनेः ।**
**कृच्छ्रान्मुक्तस्तमामन्त्र्य पुरं प्रायात् समाहितः ॥ ९ ॥**

**पदार्थ–**
**तत्** = त्यो (उनको)
**अभिप्रायम्** = आशय
**आज्ञाय** = बुझेर (राजाले)
**मुनेः** = मुनिलाई
**दुहितरं** = छोरी (सुकन्या)
**प्रादात्** = प्रदान गरे (त्यसपछि)
**कृच्छ्रात्** = दुःखबाट
**मुक्तः** = मुक्त भएर
**तम्** = ती मुनिसँग
**आमन्त्र्य** = अनुमति लिएर
**समाहितः** = सावधान हुँदै
**पुरं** = आफ्नो सहरतिर
**प्रायात्** = हिँडे

**वाक्यार्थ–** मुनिको अभिप्राय बुझेर राजा शर्यातिले उनै मुनिलाई आफ्नी छोरी सुकन्या दिए र मुनिसँग अनुमति लिएर सावधान हुँदै उनी आफ्नो सहरतिर हिँडे ।

**सुकन्या च्यवनं प्राप्य पतिं परमकोपनम् ।**

**प्रीणयामास चित्तज्ञा अप्रमत्तानुवृत्तिभिः ॥ १० ॥**

पदार्थ–
**सुकन्या** = सुकन्याले
**परमकोपनम्** = ज्यादै रिसाहा
**च्यवनं** = च्यवन ऋषिलाई
**पतिं** = पतिका रूपमा
**प्राप्य** = पाएर
**चित्तज्ञा** = मनको कुरा बुझेर
**अप्रमत्तानुवृत्तिभिः** = सावधानीपूर्वक सेवा गरेर
**प्रीणयामास** = खुसी बनाइन्

**वाक्यार्थ–** सुकन्याले ज्यादै रिसाहा च्यवन ऋषिलाई पतिको रूपमा प्राप्त गरे तापनि उनको मनको कुरा बुझेर सावधानीपूर्वक सेवा गर्दै उनलाई खुसी बनाइन्।

**कस्यचित् त्वथ कालस्य नासत्यावाश्रमागतौ ।**
**तौ पूजयित्वा प्रोवाच वयो मे दत्तमीश्वरौ ॥ ११ ॥**

पदार्थ–
**अथ तु** = त्यसपछि
**कस्यचित्** = केही
**कालस्य** = समय (बितेपछि)
**आश्रमागतौ** = आश्रममा आएका
**नासत्यौ** = अश्विनीकुमारहरूलाई
**पूजयित्वा** = पूजा गरेर
**तौ** = ती दुईलाई
**ईश्वरौ** = हे सामर्थ्यवान् भगवान्
**मे** = म (च्यवन ऋषि)लाई
**वयः** = तरुण अवस्था
**दत्तम्** = दिनुहोस् भनेर
**प्रोवाच** = भने

**वाक्यार्थ–** केही समय बितेपछि च्यवन ऋषिको आश्रममा स्वर्गका वैद्य अश्विनीकुमारहरू आइपुगे। ती दुईको पूजा-सत्कार गरिसकेपछि च्यवन ऋषिले हे अश्विनीकुमारहरू ! हजुरहरू सामर्थ्यवान् हुनुहुन्छ, त्यसैले मलाई तरुण अवस्था दिनुहोस् भने।

**ग्रहं ग्रहीष्ये सोमस्य यज्ञे वामप्यसोमपोः ।**
**क्रियतां मे वयोरूपं प्रमदानां यदीप्सितम् ॥ १२ ॥**

पदार्थ–
**यज्ञे** = यज्ञमा
**असोमपोः अपि** = सोमपान गर्ने अधिकार नभए पनि
**वां** = हजुर दुईलाई
**सोमस्य** = सोमरसको
**ग्रहं** = भाग
**ग्रहीष्ये** = दिलाउनेछु
**मे** = मेरो
**वयः** = उमेर र
**रूपं** = रूपलाई
**क्रियतां** = सुन्दर बनाइदिनुहोस्
**यत्** = जुन रूप
**प्रमदानां** = स्त्रीहरूका लागि
**ईप्सितम्** = प्रिय हुन्छ

**वाक्यार्थ–** यज्ञमा सोमरसको अधिकार नभए पनि हजुरहरू दुबैलाई म सोमरस दिलाइदिनेछु। हजुरहरूले मेरो शरीर र रूपलाई स्त्रीहरूले मन पराउने किसिमको बनाइदिनुहोस्।

**बाढमित्यूचतुर्विप्रमभिनन्द्य भिषक्तमौ ।**
**निमज्जतां भवानस्मिन् ह्रदे सिद्धविनिर्मिते ॥ १३ ॥**

**पदार्थ–**
**भिषक्तमौ** = उत्तम वैद्य अश्विनीकुमारहरूले
**विप्रम्** = ब्राह्मण च्यवन ऋषिलाई
**अभिनन्द्य** = अभिनन्दन गरेर
**बाढम्** = ठीक छ भन्दै
**सिद्धविनिर्मिते** = सिद्धहरूद्वारा बनाइएको
**अस्मिन्** = यस
**ह्रदे** = कुण्डमा
**भवान्** = हजुर
**निमज्जतां** = डुब्नुहोस्
**इति** = यसो
**ऊचतुः** = भने

**वाक्यार्थ–** उत्तम वैद्य अश्विनीकुमारले च्यवन ऋषिलाई सम्मानपूर्वक हुन्छ भनी यो सिद्धहरूले बनाएको कुण्डमा हजुर डुब्नुहोस् भने।

**इत्युक्त्वा जरया ग्रस्तदेहो धमनिसन्ततः।**
**ह्रदं प्रवेशितोऽश्विभ्यां वलीपलितविप्रियः॥ १४॥**

**पदार्थ–**
**इति** = यस्तो
**उक्त्वा** = भनेर
**जरया** = बुढ्यौलीले
**ग्रस्तदेहः** = गाँजेको शरीर भएका
**धमनिसन्ततः** = नसाहरू देखिएका
**वलीपलितविप्रियः** = चाउरी पर्नाले र कपाल फुल्नाले नराम्रो देखिएका च्यवन ऋषि
**अश्विभ्यां** = अश्विनीकुमारहरूद्वारा
**ह्रदं** = कुण्डमा
**प्रवेशितः** = प्रवेश गराइए

**वाक्यार्थ–** बुढ्यौलीले गर्दा नसा नै नसा देखिने, चाउरी परेका र कपाल फुलेका कुरूप च्यवन ऋषिलाई अश्विनीकुमारले सिद्धकुण्डमा प्रवेश गराए।

**पुरुषास्त्रय उत्तस्थुरपीच्या वनिताप्रियाः।**
**पद्मस्रजः कुण्डलिनस्तुल्यरूपाः सुवाससः॥ १५॥**

**पदार्थ–**
(त्यस कुण्डबाट)
**अपीच्याः** = अत्यन्त सुन्दर
**वनिताप्रियाः** = स्त्रीहरूलाई राम्रो लाग्ने
**पद्मस्रजः** = कमलको माला र
**कुण्डलिनः** = कुण्डल लगाएका
**तुल्यरूपाः** = समान रूप भएका
**सुवाससः** = राम्रा लुगा लगाएका
**त्रयः** = तीन
**पुरुषाः** = पुरुषहरू
**उत्तस्थुः** = प्रकट भए

**वाक्यार्थ–** त्यस सिद्धकुण्डबाट कमलको माला र कुण्डल लगाएका उस्तै-उस्ता सुन्दर रूप भएका राम्रा-राम्रा लुगा लगाएका अनि स्त्रीहरूलाई मनपर्ने अत्यन्त सुन्दर तीन पुरुषहरू प्रकट भए।

**तान् निरीक्ष्य वरारोहा सरूपान् सूर्यवर्चसः।**
**अजानती पतिं साध्वी अश्विनौ शरणं ययौ॥ १६॥**

**पदार्थ–**
**सरूपान्** = समान रूप भएका
**सूर्यवर्चसः** = सूर्यजस्ता तेजिला
**तान्** = ती तीन पुरुषलाई
**निरीक्ष्य** = हेरेर
**वरारोहा** = सुन्दरी

| | | |
|---|---|---|
| **साध्वी** = पतिव्रता सुकन्या | **अजानती** = नचिनेर | **शरणं** = नजिक |
| **पतिं** = पतिलाई | **अश्विनौ** = अश्विनीकुमारको | **ययौ** = गइन् |

**वाक्यार्थ–** सूर्यजस्ता तेजिला ती समान रूपवाला तीन पुरुषलाई देख्दा आफ्ना पतिलाई चिन्न नसकेर पतिव्रता सुन्दरी सुकन्या अश्विनीकुमारको नजिक गइन्।

**दर्शयित्वा पतिं तस्यै पातिव्रत्येन तोषितौ।**
**ऋषिमामन्त्र्य ययतुर्विमानेन त्रिविष्टपम्॥ १७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| | (अश्विनीकुमारले) | **आमन्त्र्य** = सोधेर |
| **तस्यै** = ती सुकन्याको | **पतिं** = पति (च्यवन ऋषिलाई) | **विमानेन** = विमानद्वारा |
| **पातिव्रत्येन** = पतिव्रता धर्मदेखि | **दर्शयित्वा** = देखाएर (चिनाएर) | **त्रिविष्टपम्** = स्वर्ग |
| **तोषितौ** = प्रसन्न भएका | **ऋषिम्** = ऋषिलाई | **ययतुः** = गए |

**वाक्यार्थ–** सुकन्याको पतिव्रता धर्मदेखि प्रसन्न भएका अश्विनीकुमार उनका पतिलाई चिनाइदिएर ऋषिसँग विदा मागी विमानद्वारा स्वर्गलोकतिर लागे।

**यक्ष्यमाणोऽथ शर्यातिश्च्यवनस्याश्रमं गतः।**
**ददर्श दुहितुः पार्श्वे पुरुषं सूर्यवर्चसम्॥ १८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| | **आश्रमं** = आश्रममा | **पार्श्वे** = नजिकमा |
| **अथ** = त्यसपछि | **गतः** = गएका | **सूर्यवर्चसम्** = सूर्य झैं चम्किला |
| **यक्ष्यमाणः** = यज्ञ गर्ने इच्छाले | **शर्यातिः** = राजा शर्यातिले | **पुरुषं** = पुरुषलाई |
| **च्यवनस्य** = च्यवन ऋषिको | **दुहितुः** = छोरीको | **ददर्श** = देखे |

**वाक्यार्थ–** केही समयपछि यज्ञ गर्ने इच्छाले च्यवन ऋषिको आश्रममा पुगेका राजा शर्यातिले आफ्नी छोरी सुकन्याका नजिकमा सूर्य जस्तै चम्किला पुरुषलाई देखे।

**राजा दुहितरं प्राह कृतपादाभिवन्दनाम्।**
**आशिषश्चाप्रयुञ्जानो नातिप्रीतिमना इव॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| | **आशिषः च** = आशीर्वाद पनि | **इव** = जस्ता |
| **कृतपादाभिवन्दनाम्** = चरणको वन्दना गरिसकेकी | **अप्रयुञ्जानः** = नदिएका र | **राजा** = राजा शर्यातिले |
| **दुहितरं** = छोरीलाई | **न अतिप्रीतिमनाः** = धेरै प्रसन्नचित्त नभएका | **प्राह** = भने |

**वाक्यार्थ–** आफूलाई स्वागतसत्कार र अभिवादन गरिसकेकी छोरीलाई आशीर्वाद नदिएका तथा धेरै प्रसन्नचित्त नभएका राजा शर्यातिले भने।

**चिकीर्षितं ते किमिदं पतिस्त्वया प्रलम्भितो लोकनमस्कृतो मुनिः।**
**यत् त्वं जराग्रस्तमसत्यसम्मतं विहाय जारं भजसेऽमुमध्वगम्॥ २०॥**

**पदार्थ–**
**ते** = तैँले
**इदं** = यो
**किम्** = के
**चिकीर्षितं** = गर्न खोजेको हो ?
**त्वया** = तैँले
**लोकनमस्कृतः** = सबैद्वारा मानिएका
**मुनिः** = ऋषि
**पतिः** = पतिलाई
**प्रलम्भितः** = धोका दिइस्
**यत्** = जुन पतिलाई
**त्वं** = तैँले
**जराग्रस्तम्** = बुढ्यौलीले गाँजेको
**असत्यसम्मतं** = बेकारको सम्झिएर
**विहाय** = छाडेर
**अमुम्** = यस
**अध्वगम्** = बटुवा
**जारं** = जार (पर) पुरुषलाई
**भजसे** = सेवा गरिरहेकी छेस्

**वाक्यार्थ–** सबैले मानेका मुनि पतिलाई बुढ्यौलीले गाँजेको र बेकारको सम्झी छाडेर यस बटुवा जार पुरुषको सेवा गरिहेकी छेस् ? तैँले यो के गर्न खोजेकी होस् ?

**कथं मतिस्तेऽवगतान्यथा सतां कुलप्रसूते कुलदूषणं त्विदम्।**
**बिभर्षि जारं यदपत्रपा कुलं पितुश्च भर्तुश्च नयस्यधस्तमः॥ २१॥**

**पदार्थ–**
**सतां** = सज्जनहरूको
**कुलप्रसूते** = वंशमा जन्मेकी
**ते** = तँलाई
**अन्यथा** = यो उल्टो
**मतिः** = बुद्धि
**कथं** = कसरी
**अवगता** = प्राप्त भयो
**इदम् तु** = तेरो यो काम त
**कुलदूषणं** = कुलको कलङ्क हो
**यत्** = जो तँ
**अपत्रपा** = निर्लज्ज भएर
**जारं** = जार पुरुषलाई
**बिभर्षि** = सेवा गरिरहेकी छस्
**पितुः च** = पिताको र
**भर्तुः च** = पतिको पनि
**कुलं** = कुललाई
**अधः तमः** = नरकमा
**नयसि** = लैजाँदैछेस्

**वाक्यार्थ–** सज्जनहरूको वंशमा जन्मेकी तँलाई यो उल्टो बुद्धि कसरी आयो ? तेरो यो काम त हाम्रो कुलको कलङ्क हो। निर्लज्ज भएर जार पुरुषको सेवा गर्ने तैँले तेरा पिता र पतिको कुललाई समेत नरकमा लैजाँदैछेस्।

**एवं ब्रुवाणं पितरं स्मयमाना शुचिस्मिता।**
**उवाच तात जामाता तवैष भृगुनन्दनः॥ २२॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**ब्रुवाणं** = बोल्दै गरेका
**पितरं** = बाबुलाई
**शुचिस्मिता** = पवित्र मुस्कान भएकी सुकन्याले
**स्मयमाना** = मुस्कुराउँदै
**तात** = हे पिताजी
**एषः** = यी (सुन्दर पुरुष)

| | | |
|---|---|---|
| **तव** = हजुरका | **भृगुनन्दनः** = भृगुका छोरा | कुरा |
| **जामाता** = ज्वाइँ | च्यवन ऋषि नै हुनुहुन्छ भन्ने | **उवाच** = बताइन् |

**वाक्यार्थ–** यसप्रकार बोल्दै गरेका बाबुलाई सुन्दरी सुकन्याले मुस्कुराउँदै हे पिताजी ! यी मेरा साथमा बस्ने सुन्दर पुरुष हजुरका ज्वाइँ च्यवन ऋषि नै हुनुहुन्छ भन्ने कुरा बताइन्।

**शशंस पित्रे तत्सर्वं वयोरूपाभिलम्भनम्।**

**विस्मितः परमप्रीतस्तनयां परिषस्वजे ॥ २३ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सर्वं** = सम्पूर्ण वृत्तान्त | परेका राजाले |
| **वयोरूपाभिलम्भनम्** = तरुण | **पित्रे** = बाबुलाई | **परमप्रीतः** = अत्यन्त प्रसन्न भएर |
| अवस्था र सुन्दररूप प्राप्तिको | **शशंस** = (सुकन्याले) बताइन् | **तनयां** = छोरी सुकन्यालाई |
| **तत्** = त्यो | **विस्मितः** = (त्यो सुनेर) छक्क | **परिषस्वजे** = अँगालो हाले |

**वाक्यार्थ–** सुकन्याले तरुण अवस्था र सुन्दररूप प्राप्तिको सम्पूर्ण वृत्तान्त बाबुलाई बताइन्। उनको कुरा सुनेर आश्चर्यचकित भएका राजाले अत्यन्त प्रसन्न भएर छोरीलाई अँगालो हाले।

**सोमेन याजयन् वीरं ग्रहं सोमस्य चाग्रहीत्।**

**असोमपोरप्यश्विनोश्च्यवनः स्वेन तेजसा ॥ २४ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **स्वेन** = आफ्नो | **सोमस्य** = सोमरसको |
| **च्यवनः** = च्यवन ऋषिले | **तेजसा** = प्रभावले | **ग्रहं च** = भाग समेत |
| **वीरं** = वीर राजा शर्यातिलाई | **असोमपोः अपि** = सोमरस पान | **अग्रहीत्** = दिलाए |
| **सोमेन** = सोमयागको | गर्ने अधिकार नभए पनि | |
| **याजयन्** = अनुष्ठान गराउँदै | **अश्विनोः** = अश्विनीकुमारलाई | |

**वाक्यार्थ–** राजा शर्यातिलाई सोमयागको अनुष्ठान गराइरहेका च्यवन ऋषिले सोमरस पिउन अधिकार नदिइएका अश्विनीकुमारलाई समेत आफ्नो प्रभावद्वारा सोमरसको भाग दिलाए।

**हन्तुं तमाददे वज्रं सद्यो मन्युरमर्षितः।**

**सवज्रं स्तम्भयामास भुजमिन्द्रस्य भार्गवः ॥ २५ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **हन्तुं** = मार्नका लागि | **सवज्रं** = वज्रसहित |
| **सद्यः** = तत्काल | **वज्रं** = वज्र | **भुजम्** = हातलाई |
| **मन्युः** = रिसाउने | **आददे** = उठाए | **स्तम्भयामास** = रोकिदिए |
| **अमर्षितः** = असहनशील इन्द्रले | **भार्गवः** = भृगुपुत्र च्यवन ऋषिले | |
| **तम्** = ती राजा शर्यातिलाई | **इन्द्रस्य** = इन्द्रको | |

**वाक्यार्थ–** छिट्टै रिसाउने र सहन गर्ने शक्ति नभएका देवराज इन्द्रले राजा शर्यातिलाई मार्ने

उद्देश्यले हातमा वज्र लिए। भृगुपुत्र च्यवन ऋषिले इन्द्रको वज्रसहितको त्यो हातलाई जहाँको त्यहीं रोकिदिए।

**अन्वजानंस्ततः सर्वे ग्रहं सोमस्य चाश्विनोः।**

**भिषजाविति यत् पूर्वं सोमाहुत्या बहिष्कृतौ ॥ २६ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सर्वे** = सम्पूर्ण देवताहरूले
**अश्विनोः** = अश्विनीकुमारलाई
**च** = पनि
**सोमस्य** = सोमरसको
**ग्रहं** = भाग दिने कुरा
**अन्वजानन्** = स्वीकार गरे
**यत्** = जसलाई
**पूर्वं** = पहिला
**भिषजौ** = वैद्य हुन्
**इति** = यस्तो भनेर
**सोमाहुत्या** = सोमरसको आहुति (भाग)देखि
**बहिष्कृतौ** = वञ्चित गरिएको थियो

**वाक्यार्थ–** त्यसपछि सम्पूर्ण देवताहरूले अश्विनीकुमारलाई पनि सोमरस पिउन अधिकार दिने कुरा स्वीकार गरे, जसलाई पहिला वैद्य हुन् भनेर सोमरसको भागदेखि वञ्चित गरिएको थियो।

**उत्तानबर्हिरानर्तो भूरिषेण इति त्रयः।**

**शर्यातेरभवन् पुत्रा आनर्ताद् रेवतोऽभवत् ॥ २७ ॥**

**पदार्थ–**
**शर्यातेः** = राजा शर्यातिका
**उत्तानबर्हिः** = उत्तानबर्हि
**आनर्तः** = आनर्त
**भूरिषेणः** = भूरिषेण
**इति** = यी नाम गरेका
**त्रयः** = तीन
**पुत्राः** = छोराहरू
**अभवन्** = भए
**आनर्तात्** = आनर्तबाट
**रेवतः** = रेवत नाम गरेका छोरा
**अभवत्** = उत्पन्न भए

**वाक्यार्थ–** राजा शर्यातिका उत्तानबर्हि, आनर्त र भूरिषेण नामका तीन छोरा र आनर्तबाट रेवत नाम गरेका छोरा उत्पन्न भए।

**सोऽन्तःसमुद्रे नगरीं विनिर्माय कुशस्थलीम्।**

**आस्थितोऽभुङ्क्त विषयानानर्तादीनरिन्दम ॥ २८ ॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुदमनकारी परीक्षित्
**सः** = ती आनर्तका पुत्र रेवतले
**अन्तःसमुद्रे** = समुद्रभित्र
**कुशस्थलीम्** = कुशस्थली नामक
**नगरीं** = नगर
**विनिर्माय** = निर्माण गरी
**आस्थितः** = त्यसैमा बसेर
**आनर्तादीन्** = आनर्त आदि
**विषयान्** = राज्यहरू
**अभुङ्क्त** = भोग गरे

**वाक्यार्थ–** हे परीक्षित् ! ती आनर्तका पुत्र रेवतले समुद्रभित्र कुशस्थली नामक नगर निर्माण गरी त्यसैमा बसेर आनर्त आदि राज्यहरूको भोग गरे।

**तस्य पुत्रशतं जज्ञे ककुद्मिज्येष्ठमुत्तमम्।**
**ककुद्मी रेवतीं कन्यां स्वामादाय विभुं गतः॥ २९॥**

**पदार्थ–**
**तस्य** = ती रेवतका
**ककुद्मिज्येष्ठम्** = जेठा छोरा ककुद्मी सहितका
**उत्तमम्** = श्रेष्ठ
**पुत्रशतं** = सय भाइ छोरा
**जज्ञे** = उत्पन्न भए
**ककुद्मी** = ती ककुद्मीले
**स्वाम्** = आफ्नी
**कन्यां** = छोरी
**रेवतीं** = रेवतीलाई
**आदाय** = साथमा लिएर
**विभुं** = ब्रह्माजीकहाँ
**गतः** = गए

**वाक्यार्थ–** रेवतका सय भाइ असल छोरा भए। तीमध्ये ककुद्मी जेठा थिए। ती ककुद्मीले आफ्नी छोरी रेवतीलाई लिएर ब्रह्माजीकहाँ गए।

**कन्यां वरं परिप्रष्टुं ब्रह्मलोकमपावृतम्।**
**आवर्तमाने गान्धर्वे स्थितोऽलब्धक्षणः क्षणम्॥ ३०॥**

**पदार्थ–**
**कन्यां** = छोरी रेवतीलाई
**वरं** = योग्य वर
**परिप्रष्टुं** = सोधखोज गर्न
**अपावृतम्** = विना रोकटोक
**ब्रह्मलोकम्** = ब्रह्माजीको लोकमा पुगेका ककुद्मी
**गान्धर्वे** = नाचगान
**आवर्तमाने** = चलिरहेका कारण
**अलब्धक्षणः** = अवसर नपाएर
**क्षणम्** = केही समय
**स्थितः** = कुरेर बसिरहे

**वाक्यार्थ–** छोरीको निम्ति योग्य वरको सोधखोज गर्ने उद्देश्यले ब्रह्मलोकमा पुगेका ककुद्मी त्यहाँ गन्धर्वहरूको नाचगान चलिरहेका कारण केही समय कुरेर बसिरहे।

**तदन्त आद्यमानम्य स्वाभिप्रायं न्यवेदयत्।**
**तच्छ्रुत्वा भगवान् ब्रह्मा प्रहस्य तमुवाच ह॥ ३१॥**

**पदार्थ–**
**तदन्ते** = नाचगान सकिएपछि
**आद्यम्** = ब्रह्माजीलाई
**आनम्य** = प्रणाम गरेर (ककुद्मीले)
**स्वाभिप्रायं** = आफ्नो विचार
**न्यवेदयत्** = निवेदन गरे
**तत्** = ककुद्मीको त्यो निवेदन
**श्रुत्वा** = सुनेर
**भगवान्** = सामर्थ्यवान्
**ब्रह्मा** = ब्रह्माजीले
**प्रहस्य** = हाँसेर
**तम्** = ती ककुद्मीलाई
**ह** = निश्चय नै
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** नाचगान सकिएपछि ककुद्मीले अभिवादनपूर्वक ब्रह्माजीलाई आफ्नो कुरा बताए। त्यो कुरा सुनेर भगवान् ब्रह्माजीले हाँस्दै ककुद्मीलाई यसो भन्नुभयो।

**अहो राजन् निरुद्धास्ते कालेन हृदि ये कृताः।**
**तत्पुत्रपौत्रनप्तॄणां गोत्राणि च न शृण्महे॥ ३२॥**

**पदार्थ–**
**अहो** = ए
**राजन्** = राजा
**ये** = जसलाई (तिमीले)
**हृदि** = मनमा
**कृताः** = राखेका थियौ
**ते** = तिनीहरू सबै
**कालेन** = समयले
**निरुद्धाः** = रोकिइसके
**तत्** = तिनीहरूका
**पुत्रपौत्रनप्तॄणां** = छोरा, पौत्र (छोराको छोरो) तथा नप्ता (छोरीको छोरा)हरूको
**गोत्राणि** = वंशपरम्परा
**च** = समेत
**न शृण्महे** = कतै सुनिँदैन

**वाक्यार्थ–** हे राजा ककुद्मी ! तिमीले जसलाई मनले सोचेका थियौ ती सबै समयको प्रवाहमा हराइसके। अब त तिनका छोरा–नातिहरूको वंशपरम्परा समेत कतै सुनिँदैन।

**कालोऽभियातस्त्रिणव चतुर्युगविकल्पितः।**
**तद् गच्छ देवदेवांशो बलदेवो महाबलः॥ ३३॥**

**पदार्थ–**
**त्रिणव** = सत्ताइस ओटा
**चतुर्युगविकल्पितः** = चतुर्युग बराबरको
**कालः** = समय (अहिले सम्ममा)
**अभियातः** = बितिसक्यो
**तत्** = त्यसकारण
**गच्छ** = (आफ्नै घर) जाऊ (त्यहाँ)
**देवदेवांशः** = भगवान् नारायणका अवतार
**महाबलः** = अत्यन्त बलशाली
**बलदेवः** = बलदेवजी हुनुहुन्छ

**वाक्यार्थ–** तिमी ब्रह्मलोकमा आएपछि पृथिवी लोकमा सत्ताइस ओटा चतुर्युग बराबरको समय बितिसक्यो। त्यसकारण हे ककुद्मी ! तिमी पृथिवी लोकमा फर्क, त्यहाँ अहिले भगवान् नारायणका अंशावतार अति बलवान् बलदेवजी हुनुहुन्छ।

**विवरण–** ककुद्मीले आफ्नी छोरी रेवतीलाई योग्य हुने वर देखाइदिन ब्रह्माजीलाई नै भने। ब्रह्मलोकमा पुग्दा त्यहाँ उनी केही समय रोकिनु पर्‍यो, त्यति वेलासम्म त पृथिवीमा **त्रिणवचतुर्युग** अर्थात् सत्ताइस चतुर्युगी बितिसकेछ। ब्रह्मलोकको एक दिवस वा बाह्र घण्टाको समयमा पृथिवी लोकमा १००० चतुर्युगी बित्छन् (मनुस्मृति १/७२)। ब्रह्माजीकहाँ लगभग बीस मिनेट बित्दा पृथिवीमा सत्ताइस चतुर्युगी बित्छन्। यही कारणले सत्ययुगकी रेवतीसँग द्वापरयुगका बलरामको विवाह भएको हो।

**कन्यारत्नमिदं राजन् नररत्नाय देहि भोः।**
**भुवो भारावताराय भगवान् भूतभावनः॥ ३४॥**

**पदार्थ–**
**भोः** = हे
**राजन्** = राजा
**इदं** = यी
**कन्यारत्नम्** = श्रेष्ठ कन्या
**नररत्नाय** = पुरुषश्रेष्ठ बलदेवजीलाई
**देहि** = देऊ
**भूतभावनः** = प्राणीहरूको जीवन स्वरूप
**भगवान्** = भगवान् बलदेवजी
**भुवः** = पृथिवीको
**भारावताराय** = भार हरण गर्नका निम्ति पृथिवीमा अवतीर्ण हुनुभएको हो

**वाक्यार्थ–** हे राजा ! यी तिम्री छोरी उत्तम कन्या श्रेष्ठ पुरुष बलदेवजीलाई अर्पण गर। भगवान् बलदेवजी पृथिवीको भार हरण गर्नकै लागि पृथिवीमा अवतीर्ण हुनुभएको हो।

**अवतीर्णो निजांशेन पुण्यश्रवणकीर्तनः।**

**इत्यादिष्टोऽभिवन्द्याजं नृपः स्वपुरमागतः॥**

**त्यक्तं पुण्यजनत्रासाद् भ्रातृभिर्दिक्ष्ववस्थितैः॥ ३५॥**

| पदार्थ– | **आदिष्टः** = उपदेश प्राप्त गरेका | **पुण्यजनत्रासात्** = यक्षहरूको डरले |
|---|---|---|
| **पुण्यश्रवणकीर्तनः** = पवित्र यश र कीर्ति भएका बलदेवजी | **नृपः** = राजा ककुद्मी | **त्यक्तं** = छाडिएको |
| **निजांशेन** = भगवान्को अंशबाट | **अजं** = ब्रह्माजीलाई | **स्वपुरम्** = आफ्नो नगरमा |
| **अवतीर्णः** = अवतीर्ण हुनुभएको हो | **अभिवन्द्य** = अभिवादन गरेर | **आगतः** = आए |
| **इति** = यसप्रकार | **दिक्षु** = दिशा-दिशामा छरिएर | |
| | **अवस्थितैः** = बसेका | |
| | **भ्रातृभिः** = आफ्ना वंशजहरूद्वारा | |

**वाक्यार्थ–** पवित्र यश र कीर्ति भएका बलदेवजी भगवान्का अंशावतार हुनुहुन्छ भन्ने जानकारी पाएका राजा ककुद्मी ब्रह्माजीलाई अभिवादन गरेर आफ्नो नगरमा आए। त्यहाँ उनका वंशजहरू यक्षहरूको डरले राज्य छाडेर चारैतिर छरिएर बसेका थिए।

**सुतां दत्त्वानवद्याङ्गीं बलाय बलशालिने।**

**बदर्याख्यं गतो राजा तप्तुं नारायणाश्रमम्॥ ३६॥**

| पदार्थ– | **बलशालिने** = बलवान् | **नारायणाश्रमम्** = भगवान् नारायणको आश्रममा |
|---|---|---|
| **राजा** = राजा ककुद्मी | **बलाय** = बलदेवजीलाई | **तप्तुं** = तपस्या गर्न |
| **अनवद्याङ्गीं** = सुन्दर अङ्ग भएकी | **दत्त्वा** = दिएर | **गतः** = गए |
| **सुतां** = छोरी (रेवती) | **बदर्याख्यं** = बदरी नाम गरेको | |

**वाक्यार्थ–** राजा ककुद्मी आफ्नी सुन्दरी छोरी रेवती बलशाली बलरामलाई दिएर भगवान् नारायणको बदरीनामक आश्रममा तपस्या गर्न गए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे तृतीयोऽध्यायः॥ ३॥**

# अथ चतुर्थोऽध्यायः

## नाभाग र अम्बरीषको कथा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**नाभागो नभगापत्यं यं ततं भ्रातरः कविम्।**
**यविष्ठं व्यभजन् दायं ब्रह्मचारिणमागतम्॥ १॥**

**पदार्थ–**
**नभगापत्यं** = नभग (मनुपुत्र)का छोरा
**नाभागः** = नाभाग थिए
**कविम्** = विद्वान् र
**ब्रह्मचारिणम्** = ब्रह्मचारी भएर
**आगतम्** = आएका
**यविष्ठं** = सबैभन्दा कान्छा
**यं** = जुन नाभागलाई
**भ्रातरः** = दाजुहरूले
**दायं** = अंशका रूपमा
**ततं** = बाबुलाई
**व्यभजन्** = भाग लगाइदिए

**वाक्यार्थ–** नभगका छोरा नाभाग थिए। ती नाभागलाई उनका दाजुहरूले गुरुकुलबाट विद्वान् र ब्रह्मचारी बनी फर्कंदा अंशको रूपमा बाबु नै भाग लगाइदिएका थिए।

**भ्रातरोऽभाङ्क्त किं मह्यं भजाम पितरं तव।**
**त्वां ममार्यास्तताभाङ्क्षुर्मा पुत्रक तदादृथाः॥ २॥**

**पदार्थ–**
**भ्रातरः** = हे दाजुहरू
**मह्यं** = म नाभागलाई
**किं** = के
**अभाङ्क्त** = भाग लगाइदिनुभएको छ (भन्ने प्रश्न गर्दा दाजुहरूले)
**तव** = तिम्रो भागमा
**पितरं** = बाबुलाई
**भजाम** = दिन्छौं (भन्ने उत्तर दिए त्यसपछि उनले पिताजीसँग भने)
**तात** = हे पिताजी
**आर्याः** = दाजुहरूले
**त्वां** = हजुरलाई
**मम** = मेरो भागमा
**अभाङ्क्षुः** = दिएका छन् (त्यो सुनेर पिताले भने)
**पुत्रक** = हे छोरा
**तत्** = त्यो कुरा
**मा आदृथाः** = स्वीकार नगर

**वाक्यार्थ–** हे दाजुहरू ! मेरो भागमा के दिनुभएको छ भन्ने नाभागको जिज्ञासामा उनका दाजुहरूले तिमीलाई पिता नै दिएका छौं भन्ने उत्तर दिए। त्यसपछि नाभागले पितालाई दाजुहरूले हजुरलाई मेरो भाग लगाएका छन् भन्ने सुनाए। त्यो सुनेर पिताले हे छोरा ! तिनीहरूको कुरा स्वीकार नगर भने।

**विवरण–** यस अध्यायमा नाभागपुत्र अम्बरीषको भगवद्भक्तिको महिमा बताउने उद्देश्यले उनका पिता नाभागको निष्कपट जीवनचरित्र बताइएको छ। नाभाग धैरै वर्षसम्म गुरुकुलमा ब्रह्मचारी बनेर नै बसिरहे। अब यो घर फर्कंदैन भन्ने विचार गरेर उनका दाजुहरूले अंशबण्डा गरे, उनलाई

केही भाग लगाएनन्। त्यसपछि नाभाग आइपुगे र उनले आफ्नो भाग माग्दा दाजुहरूले 'तिम्रो भागमा त पिताजी हुनुहुन्छ' भनी पिताजीलाई देखाइदिए। त्यसपछि सोझा नाभागले पिताजीकहाँ गएर भने– 'हे पिताजी ! दाजुहरूले त हजुरलाई नै मेरो भाग लगाइदिनुभएको रहेछ।' उनका पिताजीले पनि 'हे बाबु ! म कहाँ अंशबण्डा गरिने वस्तु हुँ र ? यो कुरामा विश्वास नगर' भने। यस प्रसङ्गबाट नाभागको जीवन कति निष्कपट थियो भन्ने थाहा पाउन सकिन्छ। यस्तै निश्छल व्यक्तिहरूको वंशमा नै उत्तम भगवद्भक्त एवं ज्ञानीहरू जन्मिन्छन्। यो प्रसङ्गले अम्बरीषको कुलश्रेष्ठतालाई बुझाएको देखिन्छ।

**इमे अङ्गिरसः सत्रमासतेऽद्य सुमेधसः।**

**षष्ठं षष्ठमुपेत्याहः कवे मुह्यन्ति कर्मणि ॥ ३ ॥**

**पदार्थ–**

**कवे** = हे विद्वान् पुत्र नाभाग
**इमे** = यी
**अङ्गिरसः** = अङ्गिरा गोत्रीय
**सुमेधसः** = बुद्धिमान् ब्राह्मणले
**अद्य** = यस समयमा
**सत्रम्** = यज्ञ
**आसते** = गरिरहेका छन् तर
**षष्ठं षष्ठं** = प्रत्येक छैटौं
**अहः** = दिनमा
**उपेत्य** = आएर
**कर्मणि** = (आफूले गर्नुपर्ने) कर्ममा
**मुह्यन्ति** = भुल गरिरहेका छन्

**वाक्यार्थ–** हे विद्वान् पुत्र नाभाग ! अङ्गिरा गोत्रमा जन्मेका यी बुद्धिमान् ब्राह्मणले अहिले यज्ञ गरिरहेका छन्, तर प्रत्येक छैटौं दिनमा उनीहरूले आफूले गर्नुपर्ने कर्म नै बिर्सिरहेका छन्।

**तांस्त्वं शंसय सूक्ते द्वे वैश्वदेवे महात्मनः।**

**ते स्वर्यन्तो धनं सत्रपरिशेषितमात्मनः ॥ ४ ॥**

**दास्यन्ति तेऽथ तान् गच्छ तथा स कृतवान् यथा।**

**तस्मै दत्त्वा ययुः स्वर्गं ते सत्रपरिशेषितम् ॥ ५ ॥**

**पदार्थ–**

**त्वं** = तिमी
**तान्** = ती
**महात्मनः** = सज्जन ब्राह्मणलाई
**वैश्वदेवे** = वैश्वदेव सम्बन्धी
**द्वे** = दुई ओटा
**सूक्ते** = (वेदका) सूक्त
**शंसय** = बताइदेऊ (त्यसबाट प्रसन्न भएर)
**ते** = ती सज्जनहरू
**स्वर्यन्तः** = स्वर्ग जाने वेलामा
**आत्मनः** = आफ्नो
**सत्रपरिशेषितम्** = यज्ञमा बाँकी रहेको
**धनं** = धनसम्पत्ति
**ते** = तिमीलाई
**दास्यन्ति** = दिनेछन्
**तान्** = ती ब्राह्मणकहाँ
**गच्छ** = जाऊ
**अथ** = त्यसपछि
**सः** = ती नाभागले
**तथा** = त्यसै
**कृतवान्** = गरे
**यथा** = जस्तो (बाबुले बताएका थिए)
**ते** = ती ब्राह्मणहरूले पनि
**तस्मै** = ती नाभागलाई

**सत्रपरिशेषितम्** = यज्ञमा बाँकी रहेको धन
**दत्त्वा** = दिएर
**स्वर्गं** = स्वर्गलोक
**ययुः** = गए

**वाक्यार्थ–** तिमी ती सज्जन ब्राह्मणलाई वैश्वदेवसम्बन्धी दुई ओटा सूक्त बताइदेऊ। यसबाट प्रसन्न भएका उनीहरूले स्वर्ग जाने वेलामा यज्ञमा बाँकी रहेको धनसम्पत्ति तिमीलाई दिनेछन्। त्यसैले तिमी उनीहरूकहाँ जाऊ। नाभागले बाबुको आज्ञाअनुसार त्यसै गरे। अङ्गिरा गोत्रीय ब्राह्मणहरू पनि यज्ञमा बाँकी रहेको सम्पूर्ण धनसम्पत्ति नाभागलाई दिएर स्वर्ग गए।

**तं कश्चित् स्वीकरिष्यन्तं पुरुषः कृष्णदर्शनः।**
**उवाचोत्तरतोऽभ्येत्य ममेदं वास्तुकं वसु ॥ ६ ॥**

**पदार्थ–**
**कृष्णदर्शनः** = हेर्दामा कालो वर्ण भएका
**कश्चित्** = कुनै
**पुरुषः** = पुरुष
**उत्तरतः** = उत्तर दिशाबाट
**अभ्येत्य** = आएर
**स्वीकरिष्यन्तं** = यज्ञशेष धन ग्रहण गर्दै गरेका
**तं** = ती नाभागलाई
**इदं** = यो
**वास्तुकं** = यज्ञशेष
**वसु** = धन
**मम** = मेरो हो भन्ने कुरा
**उवाच** = भने

**वाक्यार्थ–** (नाभागले धनसम्पत्ति लिन लाग्दा) कालो वर्णको कुनै पुरुष उत्तर दिशाबाट आएर यज्ञशेष धन ग्रहण गर्दै गरेका नाभागलाई यो यज्ञशेष धन मेरो हो भने।

**ममेदमृषिभिर्दत्तमिति तर्हि स्म मानवः।**
**स्यान्नौ ते पितरि प्रश्नः पृष्टवान् पितरं तथा ॥ ७ ॥**

**पदार्थ–**
**इदं** = यो
**ऋषिभिः** = ब्राह्मणहरूद्वारा
**दत्तम्** = दिइएको धन
**मम इति** = मेरो हो भनेर (नाभागले बताए)
**तर्हि स्म** = त्यसै वेला
**मानवः** = त्यस कालो पुरुषले (यो धन)
**नौ** = हामी दुबैको
**स्यात्** = हुन सक्छ (त्यसैले यो कुरा)
**ते** = तिम्रो
**पितरि** = पितालाई
**प्रश्नः** = सोध
**तथा** = त्यो सुनेर नाभागले
**पितरं** = पितालाई
**पृष्टवान्** = सोधे

**वाक्यार्थ–** ब्राह्मणहरूले दिएको सम्पत्ति सबै मेरो हो भन्ने नाभागलाई ती कालो पुरुषले यो धन तिम्रो र मेरो दुबैको हुन सक्छ, अतः यो कुरा पिताजीलाई सोध भनेपछि नाभागले पनि पितासँग त्यो कुरा सोधे।

**यज्ञवास्तुगतं सर्वमुच्छिष्टमृषयः क्वचित्।**
**चक्रुर्विभागं रुद्राय स देवः सर्वमर्हति ॥ ८ ॥**

**पदार्थ–**
(नाभागका पिताले भने)
**ऋषयः** = ऋषिहरूले

**क्वचित्** = कुनै समय
**यज्ञवास्तुगतं** = (दक्षको) यज्ञभूमिमा रहेको
**सर्वम्** = सबै
**उच्छिष्टं** = यज्ञशेष
**रुद्राय** = भगवान् रुद्रलाई
**विभागं** = भाग लगाउने काम
**चक्रुः** = गरेका थिए (त्यसकारण यहाँ पनि)
**सः** = ती (कालो पुरुष)
**देवः** = देवता
**सर्वम्** = यो सबै सम्पत्ति
**अर्हति** = पाउन योग्य छन्

**वाक्यार्थ–** ऋषिहरूले दक्षको यज्ञमा सम्पूर्ण यज्ञशेष वस्तु भगवान् रुद्रको हुन्छ भन्ने निर्णय गरेकाले यो ब्राह्मणहरूको यज्ञशेष पनि उनैको हुन्छ भनी नाभागका पिताले भने।

**नाभागस्तं प्रणम्याह तवेश किल वास्तुकम्।**
**इत्याह मे पिता ब्रह्मञ्छिरसा त्वां प्रसादये॥ ९॥**

**पदार्थ–**
**नाभागः** = नाभागले
**तं** = कालो पुरुषरूप ती रुद्रलाई
**प्रणम्य** = नमस्कार गरेर
**आह** = भने
**ईश** = हे प्रभु
**किल** = निश्चय नै
**वास्तुकम्** = यज्ञमा बाँकी रहेको धन
**तव इति** = हजुरको हो भनेर
**मे** = मेरा
**पिता** = पिताजीले
**आह** = बताउनुभयो
**ब्रह्मन्** = हे भगवान्
**त्वां** = हजुरलाई (म)
**शिरसा** = शिर झुकाएर
**प्रसादये** = प्रणाम गर्दछु

**वाक्यार्थ–** नाभागले कालो पुरुषको रूपमा आउनुभएका भगवान् रुद्रलाई नमस्कार गरेर भने– हे प्रभु ! यो सबै यज्ञशेष हजुरको नै हो, मेरा पिताजीले पनि यही बताउनुभयो त्यसैले म हजुरलाई श्रद्धापूर्वक शिर झुकाएर प्रणाम गर्दछु।

**यत् ते पितावदद् धर्मं त्वं च सत्यं प्रभाषसे।**
**ददामि ते मन्त्रदृशे ज्ञानं ब्रह्म सनातनम्॥ १०॥**

**पदार्थ–**
(भगवान् रुद्रले भन्नुभयो)
**ते** = तिम्रा
**पिता** = पिताले
**यत्** = जुन
**धर्मं** = वास्तविक कुरा
**अवदत्** = भने
**त्वं च** = तिमी पनि
**सत्यं** = साँचो
**प्रभाषसे** = बोलिरहेका छौ अतः
**मन्त्रदृशे** = वेदका मन्त्र जान्ने
**ते** = तिमीलाई
**सनातनम्** = कहिल्यै नाश नहुने
**ब्रह्मज्ञानं** = ब्रह्मज्ञान
**ददामि** = दिन्छु

**वाक्यार्थ–** भगवान् रुद्रले नाभागलाई तिम्रा पिताले यथार्थ निर्णय गरेकाले र तिमीले पनि साँचो कुरा बताएकाले वेदका मन्त्र जान्ने तिमीलाई म कहिल्यै नाश नहुने ब्रह्मज्ञान दिन्छु भन्नुभयो।

**गृहाण द्रविणं दत्तं मत्सत्रे परिशेषितम्।**
**इत्युक्त्वान्तर्हितो रुद्रो भगवान् धर्मवत्सलः॥ ११॥**

**पदार्थ–**
**मत्सत्रे** = मलाई समर्पण गरिएको यस यज्ञमा
**परिशेषितम्** = बाँकी रहेको
**दत्तं** = (मद्वारा) प्रदान गरिएको
**द्रविणं** = धन पनि
**गृहाण** = ग्रहण गर
**इति** = यसो
**उक्त्वा** = भनेर
**धर्मवत्सलः** = धर्मप्रेमी
**भगवान्** = भगवान्
**रुद्रः** = रुद्र
**अन्तर्हितः** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** मलाई समर्पण गरिएको यस यज्ञमा बाँकी रहेको यज्ञशेषरूप धन पनि ग्रहण गर भनी नाभागलाई भनेर धर्मप्रेमी भगवान् रुद्र अन्तर्धान हुनुभयो।

**य एतत् संस्मरेत् प्रातः सायं च सुसमाहितः।**
**कविर्भवति मन्त्रज्ञो गतिं चैव तथात्मनः॥ १२॥**

**पदार्थ–**
**यः** = जो
**सुसमाहितः** = एकाग्रचित्त भएर
**प्रातः** = बिहान
**सायं च** = बेलुका पनि
**एतत्** = यस कथालाई
**संस्मरेत्** = स्मरण गर्दछ, त्यो
**मन्त्रज्ञः** = वेदका मन्त्र जान्ने
**कविः** = विद्वान्
**भवति** = हुन्छ
**तथा** = त्यसै गरी
**आत्मनः** = आफ्नो
**गतिं** = स्वरूपलाई
**च** = पनि
**एव** = जान्दछ

**वाक्यार्थ–** जसले एकाग्रचित्त बनेर प्रत्येक बिहान र बेलुका यो कथा सम्झन्छ त्यो व्यक्ति विद्वान्, मन्त्रज्ञ र आत्मज्ञानी बन्दछ।

**नाभागादम्बरीषोऽभून्महाभागवतः कृती।**
**नास्पृशद् ब्रह्मशापोऽपि यं न प्रतिहतः क्वचित्॥ १३॥**

**पदार्थ–**
**नाभागात्** = नाभागबाट
**कृती** = धर्मात्मा
**महाभागवतः** = भगवान्का अत्यन्त भक्त
**अम्बरीषः** = अम्बरीष
**अभूत्** = उत्पन्न भए
**यं** = जसलाई (अम्बरीषलाई)
**क्वचित्** = कहीँ कतै
**न प्रतिहतः** = रोक्न नसकिने
**ब्रह्मशापः** = ब्रह्मश्रापले
**अपि** = पनि
**न अस्पृशत्** = छुन सकेन

**वाक्यार्थ–** नाभागबाट भगवान्का अति भक्त धर्मात्मा अम्बरीष उत्पन्न भए। ती अम्बरीषलाई कहीँ कतै रोक्न नसकिने ब्रह्मश्रापले पनि छुन सकेन।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो )

**भगवञ्छ्रोतुमिच्छामि राजर्षेस्तस्य धीमतः।**
**न प्राभूद् यत्र निर्मुक्तो ब्रह्मदण्डो दुरत्ययः॥ १४॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान् शुकदेव
(म)

**तस्य** = ती
**धीमतः** = बुद्धिमान्
**राजर्षेः** = राजर्षि अम्बरीषको चरित्र
**श्रोतुम्** = सुन्न
**इच्छामि** = चाहन्छु
**दुरत्ययः** = टार्न नसकिने
**निर्मुक्तः** = प्रयोग गरिएको
**ब्रह्मदण्डः** = ब्रह्मदण्डले पनि
**यत्र** = जसमा
**न प्राभूत्** = आफ्नो प्रभाव देखाउन सकेन

**वाक्यार्थ–** हे भगवान् शुकदेव ! म ती बुद्धिमान् राजर्षि अम्बरीषको चरित्र सुन्न चाहन्छु। जसलाई टार्नै नसकिने ब्रह्मदण्डले पनि केही गर्न सकेको थिएन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अम्बरीषो महाभागः सप्तद्वीपवतीं महीम्।**
**अव्ययां च श्रियं लब्ध्वा विभवं चातुलं भुवि ॥ १५ ॥**
**मेनेऽतिदुर्लभं पुंसां सर्वं तत् स्वप्नसंस्तुतम्।**
**विद्वान् विभवनिर्वाणं तमो विशति यत् पुमान् ॥ १६ ॥**

**पदार्थ–**
**महाभागः** = महाभाग्यमानी
**अम्बरीषः** = अम्बरीष
**सप्तद्वीपवतीं** = सातद्वीपवाला
**महीम्** = पृथिवी
**अव्ययां** = अचल
**श्रियं** = सम्पत्ति
**अतुलं** = अतुलनीय
**विभवं च** = ऐश्वर्य समेत
**लब्ध्वा च** = पाएर पनि
**विद्वान्** = ती विद्वान् अम्बरीष
**भुवि** = पृथिवीमा
**पुंसां** = मनुष्यका लागि
**अतिदुर्लभं** = अत्यन्त दुर्लभ
**तत्** = त्यो
**सर्वं** = सम्पूर्ण सम्पत्तिलाई
**स्वप्नसंस्तुतम्** = स्वप्नको वस्तुसमान
**मेने** = मान्दथे
**यत्** = जुन
**विभवनिर्वाणं** = सम्पत्तिको लोभका कारण
**पुमान्** = मनुष्य
**तमः** = नरकमा
**विशति** = पर्दछ

**वाक्यार्थ–** अति भाग्यमानी अम्बरीषले सातद्वीपले युक्त पृथिवी, अचल सम्पत्ति र अतुलनीय ऐश्वर्य प्राप्त गरेका थिए तर विद्वान् अम्बरीष मनुष्यका लागि अत्यन्त दुर्लभ त्यस सम्पत्तिलाई स्वप्नको वस्तुसमान मान्दथे। त्यही सम्पत्तिको लोभ गर्नाले नै मनुष्यहरू नरकमा पर्दछन्।

**वासुदेवे भगवति तद्भक्तेषु च साधुषु।**
**प्राप्तो भावं परं विश्वं येनेदं लोष्टवत् स्मृतम् ॥ १७ ॥**

**पदार्थ–**
(अम्बरीषले)
**भगवति** = भगवान्
**वासुदेवे** = श्रीकृष्णमा
**तद्भक्तेषु** = उहाँका भक्तहरूमा
**साधुषु च** = साधुहरूमा पनि
**परं** = अत्यन्त
**भावं** = प्रेम
**प्राप्तः** = प्राप्त गरेका थिए

**येन** = जसका कारण (उनले)
**इदं** = यो
**विश्वं** = संसारलाई
**लोष्टवत्** = माटाको डल्लो समान
**स्मृतम्** = मानेका थिए

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण, उहाँका भक्त तथा साधुहरूसँग अत्यन्त प्रेममय सम्बन्ध भएका कारण अम्बरीषले यो सारा विश्वलाई माटाको डल्लो समान तुच्छ मानेका थिए।

**स वै मनः कृष्णपदारविन्दयोर्वचांसि वैकुण्ठगुणानुवर्णने ।**
**करौ हरेर्मन्दिरमार्जनादिषु श्रुतिं चकाराच्युतसत्कथोदये ॥ १८ ॥**

**पदार्थ–**
**सः** = ती अम्बरीषले
**वै** = निश्चय नै
**मनः** = आफ्नो मनलाई
**कृष्णपदारविन्दयोः** = भगवान् श्रीकृष्णको चरणकमलमा
**वचांसि** = वाणीहरूलाई
**वैकुण्ठगुणानुवर्णने** = भगवान्का गुणहरूको वर्णनमा
**करौ** = दुई हातलाई
**हरेः** = श्रीहरिको
**मन्दिरमार्जनादिषु** = मन्दिर सफासुग्घर गर्ने आदि काममा
**श्रुतिं** = कानलाई
**अच्युतसत्कथोदये** = श्रीकृष्णको मङ्गलकथा सुन्नमा
**चकार** = लगाएका थिए

**वाक्यार्थ–** ती अम्बरीषले आफ्नो मनलाई भगवान् श्रीकृष्णको चरणकमलमा, वाणीलाई भगवान्कै गुणवर्णनमा, हातलाई भगवान्को मन्दिर सफासुग्घर गर्ने आदि काममा र कानलाई भगवान्को मङ्गलकारी कथा सुन्नमा लगाएका थिए।

**मुकुन्दलिङ्गालयदर्शने दृशौ तद्भृत्यगात्रस्पर्शेऽङ्गसङ्गमम् ।**
**घ्राणं च तत्पादसरोजसौरभे श्रीमत्तुलस्या रसनां तदर्पिते ॥ १९ ॥**

**पदार्थ–**
**दृशौ** = आँखालाई
**मुकुन्दलिङ्गालयदर्शने** = भगवान् विष्णुको मूर्ति र मन्दिर दर्शन गर्नमा
**अङ्गसङ्गमम्** = इन्द्रियसमूहलाई
**तद्भृत्यगात्रस्पर्शे** = भगवान्का भक्तहरूको शरीरको स्पर्श गर्नमा
**घ्राणं** = नाकलाई
**श्रीमत्तुलस्याः** = शोभायमान तुलसीदलको तथा
**तत्पादसरोजसौरभे** = भगवान्का चरणकमलको सुगन्ध लिनमा
**रसनां** = जिब्रोलाई
**तदर्पिते च** = भगवान्लाई अर्पण गरेका प्रसाद सेवनमा लगाएका थिए

**वाक्यार्थ–** त्यसै गरी अम्बरीषले आफ्ना आँखालाई भगवान् विष्णुका मूर्ति र मन्दिरको दर्शन गर्नमा, इन्द्रियहरूलाई भगवान्का भक्तहरूको शरीर स्पर्श गर्नमा, नाकलाई भगवान्का पाउमा शोभायमान तुलसीको सुगन्ध लिनमा र जिब्रोलाई भगवान्को प्रसाद सेवन गर्नमा लगाएका थिए।

**पादौ हरेः क्षेत्रपदानुसर्पणे शिरो हृषीकेशपदाभिवन्दने ।**
**कामं च दास्ये न तु कामकाम्यया यथोत्तमश्लोकजनाश्रया रतिः ॥ २० ॥**

**पदार्थ–**
**पादौ** = पाउहरू
**हरेः** = भगवान् श्रीहरिका

**क्षेत्रपदानुसर्पणे** = तीर्थहरूको भ्रमण गर्नमा
**शिरः** = शिर
**हृषीकेशपदाभिवन्दने** = भगवान् हृषीकेशका चरणको वन्दना गर्नमा र
**कामं** = भोग्य पदार्थलाई
**दास्ये च** = भगवान्को सेवामा लगाएका थिए
**कामकाम्यया** = भोग गर्ने चाहनाले
**न तु** = नभएर
**यथा** = जसद्वारा
**उत्तमश्लोकजनाश्रया** = पवित्रकीर्ति भगवान्का भक्तहरूमा रहेको
**रतिः** = प्रेम (प्राप्त होस् त्यसका लागि लगाएका थिए)

**वाक्यार्थ–** राजा अम्बरीषले भोग गर्ने इच्छाले नभएर भगवान् श्रीहरिका भक्तहरूमा रहेको प्रेम प्राप्त गर्ने उद्देश्यले आफ्ना पाउलाई भगवान्का पवित्र क्षेत्रहरूको भ्रमण गर्नमा, शिरलाई भगवान्का चरणको दर्शन गर्नमा र भोग्य पदार्थलाई भगवान्को सेवामा लगाएका थिए।

**विवरण–** माथिका तीन श्लोकमा राजा अम्बरीषको भगवद्भक्तिको वर्णन गरिएको छ। राजा अम्बरीषको मन भगवच्चरणमा, वचन भगवान्को गुणवर्णनमा, हात भगवान्को मन्दिर, मूर्ति आदिको सेवामा र स्मृति भगवान्कै सम्बन्धमा लागेको थियो। उहाँका आँखा भगवान्कै दर्शनमा, छाला भक्तहरूलाई छुनमा, नाक भगवान्को चरणकमलको सुगन्ध सुँघ्नमा, जिब्रो प्रसादको आस्वादन गर्नमा, चरण तीर्थभ्रमणमा, शिर वन्दनामा र इच्छा भगवत्सेवामा लागेका थिए। संसारी व्यक्ति संसारमा जति आसक्त हुन्छ भगवान्को भक्त त्योभन्दा कैयौँ गुणा बढी भगवान्मा आसक्त हुन्छ। संसारका पदार्थहरू एक-एक विशेष इन्द्रियका मात्र विषय हुन सक्छन्। रूपलाई आँखाले, रसलाई जिब्रोले मात्र ग्रहण गर्न सक्छ। त्यसैले संसारमा आसक्त मान्छे इन्द्रियका छुट्टाछुट्टै विषयहरूमा छुट्टाछुट्टै आसक्त हुन्छ। एकैपटक कुनै पनि विषयमा पूरा आसक्त हुन सक्दैन। संसारको आसक्ति र भोगबाट आउने आनन्द भन्ने बित्तिकै छरिएको या बाँडिएको आनन्द हुन्छ। यसबाट पूर्ण आनन्द या तृप्तिको आशा गर्न सकिँदैन। भगवान् भने सर्वव्यापी, अनन्त एवं एकरूप हुनुहुन्छ। उहाँलाई हरेक इन्द्रियले आस्वादन गर्न सक्छन्। राम्रो रूपको खोजीमा संसारमा भड्किरहेको आँखा भगवान्मा परिपूर्ण सौन्दर्य पाउँछ र भड्किन छोड्छ। मिठो रसको खोजीमा लागेको जिब्रो, राम्रो स्पर्शको खोजीमा आत्तिएको छाला, सुमधुर शब्दको लागि छटपटाएको कान र मधुर सुगन्ध सुँघ्न आत्तिएको नाक सबै भगवान्कहाँ पुगेपछि अपरिमित एवं सीमातीत आनन्दको सागरमा डुबी त्यहीँ लुटपुटिन्छन्। भगवान्का भक्तहरूको भगवान्प्रतिको आसक्ति वास्तवमा मधुर एवं रमणीय हुन्छ। छिन-छिनमैं भिन्न-भिन्न विषयतर्फ दौडिने अधुरो आसक्तिको नाम राग हो भने, पूर्ण आसक्ति, जो सम्पूर्ण इन्द्रियहरूलाई लिई एउटै वस्तुतर्फ नित्य दौडन्छ, त्यसको नाम भक्ति हो। यहाँ भक्तिको यही **सर्वेन्द्रियवेद्य** स्वरूपको वर्णन गरिएको छ।

**एवं सदा कर्मकलापमात्मनः परेऽधियज्ञे भगवत्यधोक्षजे।**
**सर्वात्मभावं विदधन्महीमिमां तन्निष्ठविप्राभिहितः शशास ह॥ २१॥**

**पदार्थ–**
**एवं** = यसप्रकार (राजा अम्बरीषले)
**सदा** = सधैँ
**आत्मनः** = आफ्ना
**कर्मकलापम्** = सम्पूर्ण

कर्महरूलाई
**अधोक्षजे** = इन्द्रियद्वारा प्राप्त गर्न नसकिने
**अधियज्ञे** = यज्ञपुरुष
**परे** = परमात्मा
**भगवति** = भगवान्मा
**सर्वात्मभावं** = सर्वात्मभावले
**विदधत्** = समर्पण गरेर
**तन्निष्ठविप्राभिहितः** = भगवान्मा श्रद्धा राख्ने ब्राह्मणहरूको आदेश अनुसार
**इमां** = यी
**महीम्** = पृथिवीलाई
**ह शशास** = शासन गरे

**वाक्यार्थ–** यसप्रकार आफ्ना कर्महरूलाई सधैं सर्वात्मभावले इन्द्रियद्वारा प्राप्त गर्न नसकिने यज्ञपुरुष भगवान्मा समर्पण गर्ने राजा अम्बरीषले भगवान्का भक्त ब्राह्मणहरूको आदेश अनुसार पृथिवीमा शासन गरेका थिए।

**ईजेऽश्वमेधैरधियज्ञमीश्वरं महाविभूत्योपचिताङ्गदक्षिणैः।**
**ततैर्वसिष्ठासितगौतमादिभिर्धन्वन्यभिस्रोतमसौ सरस्वतीम्॥ २२॥**

**पदार्थ–**
**असौ** = यी अम्बरीषले
**धन्वनि** = धन्वनामक देशको
**सरस्वतीम्** = सरस्वती नदीको
**अभिस्रोतम्** = किनारमा
**वसिष्ठासितगौतमादिभिः** = वसिष्ठ, असित, गौतम आदि ऋषिद्वारा
**महाविभूत्या** = महान् ऐश्वर्यका कारण
**उपचिताङ्गदक्षिणैः** = यज्ञका अङ्ग र उचित दक्षिणाले युक्त भएका
**ततैः** = ठुला-ठुला
**अश्वमेधैः** = अश्वमेध यज्ञहरूद्वारा
**अधियज्ञम्** = यज्ञपुरुष
**ईश्वरं** = भगवान्लाई
**ईजे** = आराधना गरे

**वाक्यार्थ–** राजा अम्बरीषले धन्वनामक देशको सरस्वती नदीको किनारमा वसिष्ठ, गौतम, असित आदि ऋषिहरूलाई आचार्य बनाएर उचित दक्षिणा र पूर्ण अङ्गले युक्त भएका ठुला-ठुला अश्वमेध यज्ञ गरी भगवान् यज्ञपुरुषको आराधना गरे।

**यस्य क्रतुषु गीर्वाणैः सदस्या ऋत्विजो जनाः।**
**तुल्यरूपाश्चानिमिषा व्यदृश्यन्त सुवाससः॥ २३॥**

**पदार्थ–**
**यस्य** = जसका
**क्रतुषु** = यज्ञहरूमा
**सदस्याः** = सदस्यहरू
**ऋत्विजः** = होताहरू र
**जनाः च** = सामान्य जनहरू
**सुवाससः** = सुन्दर वस्त्र लगाएका र
**अनिमिषाः** = आँखै नझिम्क्याई रहेका
**गीर्वाणैः** = देवताहरूको
**तुल्यरूपाः** = समान रूप भएका
**व्यदृश्यन्त** = देखिन्थे

**वाक्यार्थ–** उनका यज्ञहरूमा सदस्य, होता र सामान्य जनहरू पनि सुन्दर वस्त्र लगाएर आँखै नझिम्क्याई बसेका देवताहरू जस्तै देखिन्थे।

**स्वर्गो न प्रार्थितो यस्य मनुजैरमरप्रियः।**
**शृण्वद्भिरुपगायद्भिरुत्तमश्लोकचेष्टितम्॥ २४॥**

**पदार्थ–**
**उत्तमश्लोकचेष्टितम्** = पवित्रकीर्ति भगवान् श्रीहरिका लीलाहरू
**उपगायद्भिः** = गाउँदै गरेका
**शृण्वद्भिः** = सुन्दै गरेका
**यस्य** = जुन अम्बरीषका
**मनुजैः** = प्रजाहरूले
**अमरप्रियः** = देवताहरूको प्यारो
**स्वर्गः** = स्वर्गलोक पनि
**न प्रार्थितः** = मागेनन्

**वाक्यार्थ–** पवित्रकीर्ति भगवान् श्रीहरिका लीलाहरू गाउन र सुन्नमा लागेका अम्बरीषका प्रजाहरूले देवताहरूको प्रिय स्वर्गलोकको पनि चाहना गरेनन्।

**समर्धयन्ति तान् कामाः स्वाराज्यपरिभाविताः।**
**दुर्लभा नापि सिद्धानां मुकुन्दं हृदि पश्यतः॥ २५॥**

**पदार्थ–**
**हृदि** = हृदयमा
**मुकुन्दं** = भगवान् श्रीहरिलाई
**पश्यतः** = देखेका (प्राप्त गरेका)
**तान्** = (अम्बरीषका) ती प्रजाहरूलाई
**स्वाराज्यपरिभाविताः** = आत्मानन्दका सामु तुच्छ लाग्ने
**सिद्धानां** = सिद्धपुरुषहरूका लागि
**अपि** = पनि
**दुर्लभाः** = दुर्लभ
**कामाः** = भोग सामग्रीहरूले
**न समर्धयन्ति** = खुसी पार्न सक्दैनथे

**वाक्यार्थ–** हृदयमा भगवान् श्रीहरिलाई प्राप्त गरेका अम्बरीषका प्रजाहरूलाई सिद्धहरूका निम्ति पनि दुर्लभ मानिने भोगका सामग्रीहरूले खुसी पार्न सक्दैनथे।

**स इत्थं भक्तियोगेन तपोयुक्तेन पार्थिवः।**
**स्वधर्मेण हरिं प्रीणन् सङ्गान् सर्वान् शनैर्जहौ॥ २६॥**

**पदार्थ–**
**सः** = ती
**पार्थिवः** = राजा अम्बरीषले
**इत्थं** = यसप्रकार
**तपोयुक्तेन** = तपस्याले युक्त भएको
**भक्तियोगेन** = भक्तियोग र
**स्वधर्मेण** = आफ्नो धर्मद्वारा
**हरिं** = भगवान् श्रीहरिलाई
**प्रीणन्** = प्रसन्न गराउँदै
**सर्वान्** = सबै
**सङ्गान्** = आसक्तिहरू
**शनैः** = बिस्तारै-बिस्तारै
**जहौ** = त्यागे

**वाक्यार्थ–** राजा अम्बरीषले यसप्रकार तपस्यायुक्त भक्तियोग र आफ्नो धर्मद्वारा भगवान् श्रीहरिलाई प्रसन्न गराएर बिस्तारै-बिस्तारै सबै आसक्तिहरू त्यागे।

**गृहेषु दारेषु सुतेषु बन्धुषु द्विपोत्तमस्यन्दनवाजिपत्तिषु।**
**अक्षय्यरत्नाभरणाम्बरादिष्वनन्तकोशेष्वकरोदसन्मतिम्॥ २७॥**

**पदार्थ–**
(राजा अम्बरीषले)
**गृहेषु** = घरमा
**दारेषु** = पत्नीमा
**सुतेषु** = छोराहरूमा
**बन्धुषु** = भाइबन्धुहरूमा
**द्विपोत्तमस्यन्दनवाजिपत्तिषु** = हात्ती, राम्रो रथ, घोडा, पैदल सेनामा
**अक्षय्यरत्नाभरणायुधादिषु** = कहिल्यै नाश नहुने रत्न, गरगहना, शस्त्र-अस्त्र आदि पदार्थमा र
**अनन्तकोशेषु** = कहिल्यै नसिद्धिने कोषमा
**असन्मतिम्** = असद्बुद्धि
**अकरोत्** = गरे

**वाक्यार्थ–** राजा अम्बरीषले घर, पत्नी, छोरा, भाइबन्धु, हात्ती, रथ, घोडा, सेना, नाश नहुने रत्न, गर-गहना, शस्त्र-अस्त्र आदि वस्तुलाई तथा अनन्त कोषलाई समेत असत् सम्झिन थाले।

**तस्मा अदाद्धरिश्चक्रं प्रत्यनीकभयावहम्।**
**एकान्तभक्तिभावेन प्रीतो भृत्याभिरक्षणम्॥ २८॥**

**पदार्थ–**
**एकान्तभक्तिभावेन** = अनन्य भक्तिभावले
**प्रीतः** = प्रसन्न हुनुभएका
**हरिः** = भगवान् श्रीहरिले
**प्रत्यनीकभयावहम्** = शत्रुहरूलाई डर दिने र
**भृत्याभिरक्षणम्** = आफ्ना भक्तहरूलाई रक्षा गर्ने
**चक्रं** = चक्र
**तस्मै** = ती अम्बरीषलाई
**अदात्** = दिनुभयो

**वाक्यार्थ–** अनन्य भक्तिभावले प्रसन्न हुनुभएका भगवान् श्रीहरिले राजा अम्बरीषलाई शत्रुहरूलाई डर दिने र भक्तहरूको रक्षा गर्ने सुदर्शन चक्र दिनुभयो।

**आरिराधयिषुः कृष्णं महिष्या तुल्यशीलया।**
**युक्तः सांवत्सरं वीरो दधार द्वादशीव्रतम्॥ २९॥**

**पदार्थ–**
**कृष्णं** = भगवान् श्रीकृष्णलाई
**आरिराधयिषुः** = आराधना गर्न चाहने
**वीरः** = वीर राजा अम्बरीषले
**तुल्यशीलया** = समान स्वभाव भएकी
**महिष्या** = रानीले
**युक्तः** = युक्त भएर
**सांवत्सरं** = एक वर्षसम्म
**द्वादशीव्रतम्** = द्वादशी प्रधान (द्वादशीमा पारणा गरिने) एकादशीव्रत
**दधार** = धारण गरे

**वाक्यार्थ–** भगवान् श्रीहरिको आराधना गर्न इच्छुक राजा अम्बरीषले आफ्नो जस्तै स्वभाव भएकी रानीका साथमा एकवर्षसम्म एकादशीव्रत ग्रहण गरे।

**व्रतान्ते कार्त्तिके मासि त्रिरात्रं समुपोषितः।**
**स्नातः कदाचित् कालिन्द्यां हरिं मधुवनेऽर्चयत्॥ ३०॥**

**पदार्थ–**
**व्रतान्ते** = व्रत समाप्तिका लागि
**कार्त्तिके** = कार्त्तिक

**मासि** = महिनामा
**त्रिरात्रं** = तीन रात
**समुपोषितः** = उपवास बसेका र
**कदाचित्** = एक दिन
**कालिन्द्यां** = कालिन्दी नदीमा
**स्नातः** = स्नान गरेका राजाले
**मधुवने** = मधुवनमा
**हरिं** = भगवान् श्रीहरिलाई
**अर्चयत्** = पूजा गरे

**वाक्यार्थ–** व्रत समापनका लागि कार्त्तिक महिनामा तीन रात उपवास बसेका राजा अम्बरीषले एक दिन कालिन्दीमा नुहाएर मधुवनमा भगवान् श्रीहरिको पूजा गरे।

**विवरण–** यस श्लोकमा राजा अम्बरीषले **त्रिरात्र** उपवास गरे भनिएको छ। तीन रात उपवासमा रहे भन्नुको तात्पर्य दशमी र द्वादशीमा गरिने भोजन मात्र गरे अनि एकादशीको दिन निराहार रहे भन्नु हो। एकादशी व्रत गर्दा दशमीको दिन एक छाक हविष्य लिने, एकादशीको दिन केही खान नहुने र द्वादशीको दिन ब्राह्मणभोजन गराएर मात्र खानुपर्ने शास्त्रीय विधान छ। यो व्रत भगवान् विष्णुलाई प्रसन्न पार्ने उत्तम अनुष्ठान हो। एकादशी व्रतको आध्यात्मिक रहस्य पनि छ। जीवात्माका मनसहित एघार इन्द्रिय छन्। तिनीहरूलाई परमात्मामा लगी जोडिदिनु नै एकादशी व्रतको दार्शनिक अर्थ हो। मनसहितका एघारै इन्द्रियहरू आत्मानन्दमा लीन भएको या हराएको जीवन्मुक्ति अवस्था नै एकादशीको परम लक्ष्य हो। यसैले पनि एकादशी व्रत गर्ने परम्परा देखिन्छ। एकादशीमा कुनै पनि आहार लिनु हुँदैन। **आह्रियन्ते इति आहाराः** अर्थात् इन्द्रियहरू जुन विषयहरूलाई देख्ने, सुँघ्ने र चाख्ने आदि गर्दछन् ती सबै आहार हुन्। इन्द्रियका सम्पूर्ण वृत्तिहरूलाई संसारबाट हटाई परमात्मातिर लगाउँदा मात्र व्रतको वास्तविक लाभ लिन सकिन्छ। उपवास शब्दले पनि परमात्माको नजिक बस्नु भन्ने अर्थ नै दिन्छ। यसप्रकार महिनाको दुई दिन मात्र भए पनि सबै इन्द्रियलाई भगवान्तिर उन्मुख बनाई तिनको आहार शुद्ध गर्दा चित्तशुद्धि हुन्छ। छान्दोग्य उपनिषद् (७/२६/२)मा पनि **आहारशुद्धौ सत्त्वशुद्धिः** अर्थात्, आहारमा शुद्धता हुँदा चित्तशुद्धि हुन्छ भनिएको छ। राजा अम्बरीषले एकादशीको यही आध्यात्मिक उपासनाको रहस्यलाई बुझेका थिए र उनका सम्पूर्ण शरीर, इन्द्रिय, मन र बुद्धि आदि भगवान्तिरै लागेका थिए।

**महाभिषेकविधिना सर्वोपस्करसम्पदा।**
**अभिषिच्याम्बराकल्पैर्गन्धमाल्यार्हणादिभिः॥ ३१॥**
**तद्गतान्तरभावेन पूजयामास केशवम्।**
**ब्राह्मणांश्च महाभागान् सिद्धार्थानपि भक्तितः॥ ३२॥**

**पदार्थ–**
**महाभिषेकविधिना** = महाभिषेक विधिद्वारा
**सर्वोपस्करसम्पदा** = सम्पूर्ण सामग्री र सम्पत्तिद्वारा
**अभिषिच्य** = अभिषेक गरेर
**अम्बराकल्पैः** = वस्त्र आदि आभूषणहरूद्वारा तथा
**गन्धमाल्यार्हणादिभिः** = चन्दन, माला, अर्घ्य आदि सामग्रीद्वारा
**तद्गतान्तरभावेन** = भगवान्मा लागेका चित्तले
**केशवम्** = भगवान् श्रीकृणलाई
**सिद्धार्थान्** = कामना पूर्ण भएका
**महाभागान्** = अति भाग्यमानी

**ब्राह्मणान्** = ब्राह्मणहरूलाई
**च अपि** = पनि
**भक्तितः** = श्रद्धापूर्वक
**पूजयामास** = पूजा गरे

**वाक्यार्थ–** भगवान्मा चित्त अर्पण गरेका राजा अम्बरीषले महाभिषेक विधिद्वारा, वस्त्र, चन्दन, माला, अर्घ्य आदि विविध उत्तम सामग्रीहरूले भगवान् श्रीहरिको पूजा गरे। साथमा सम्पूर्ण कामना पूरा गरेका अति भाग्यमानी ब्राह्मणहरूलाई पनि श्रद्धापूर्वक पूजा गरे।

**गवां रुक्मविषाणीनां रूप्याङ्घ्रीणां सुवाससाम्।**
**पयःशीलवयोरूपवत्सोपस्करसम्पदाम्॥ ३३॥**
**प्राहिणोत् साधुविप्रेभ्यो गृहेषु न्यर्बुदानि षट्।**
**भोजयित्वा द्विजानग्रे स्वाद्वन्नं गुणवत्तमम्॥ ३४॥**

**पदार्थ–**
**अग्रे** = पहिला
**द्विजान्** = ब्राह्मणहरूलाई
**गुणवत्तमं** = अत्यन्त हितकारी
**स्वादु** = मिठा-मिठा
**अन्नं** = खाने कुरा
**भोजयित्वा** = खुवाएर
**रुक्मविषाणीनां** = सुनले मोडिएका सिङ् भएका
**रूप्याङ्घ्रीणां** = चाँदीले मोडिएका खुर भएका
**सुवाससाम्** = सुन्दर वस्त्रले सुभोभित भएका
**पयःशीलवयोरूपवत्सोपस्कर-सम्पदाम्** = दुध, स्वभाव, उमेर, रूप, बाच्छा तथा दुहुने, बाँध्ने आदि सम्पूर्ण सामग्रीले युक्त भएका
**षट् न्यर्बुदानि** = छ गुणा दशकरोड (साठी करोड)
**गवां** = गाईलाई
**साधुविप्रेभ्यः** = सज्जन ब्राह्मणहरूका
**गृहेषु** = घरमा
**प्राहिणोत्** = पठाइदिए

**वाक्यार्थ–** राजा अम्बरीषले पहिला ब्राह्मणहरूलाई मिठो-मिठो हितकारी भोजन गराए। त्यसपछि उनीहरूका घरमा सुनले मोडेका सिङ् अनि चाँदीले मोडेका खुर भएका, सुन्दर वस्त्रले सजिएका, असल स्वभाव, उमेर, रूप र बाच्छा भएका दुहुने, बाँध्ने आदि आवश्यक सामग्रीले युक्त भएका साठी करोड दुधालु गाईहरू पठाइदिए।

**लब्धकामैरनुज्ञातः पारणायोपचक्रमे।**
**तस्य तर्ह्यतिथिः साक्षाद् दुर्वासा भगवानभूत्॥ ३५॥**

**पदार्थ–**
(राजा अम्बरीषले)
**लब्धकामैः** = इच्छाअनुसार प्राप्त गरेका ब्राह्मणहरूसँग
**अनुज्ञातः** = अनुमति लिएर
**पारणाय** = व्रतपारायण गर्न
**उपचक्रमे** = लागेका थिए
**तर्हि** = त्यही समयमा
**साक्षात्** = प्रत्यक्ष
**भगवान्** = श्रद्धेय
**दुर्वासा** = दुर्वासा ऋषि
**तस्य** = ती अम्बरीषका
**अतिथिः** = अतिथि बनेर
**अभूत्** = उपस्थित भए

**वाक्यार्थ–** जब राजा अम्बरीषले ब्राह्मणहरूसँग आज्ञा लिएर व्रतपारायण गर्न लागेका थिए तब उनका सामु श्रद्धेय दुर्वासा ऋषि अतिथि बनेर आइपुगे।

**तमानर्चातिथिं भूपः प्रत्युत्थानासनार्हणैः।**

**ययाचेऽभ्यवहाराय पादमूलमुपागतः॥ ३६॥**

**पदार्थ–**
**भूपः** = राजा अम्बरीषले
**तम्** = ती
**अतिथिं** = अतिथि दुर्वासालाई
**प्रत्युत्थानासनार्हणैः** = उठेर आसन आदि पूजासामग्रीद्वारा
**आनर्च** = पूजा गरे र
**पादमूलम् उपागतः** = उनको पाउमा प्रणाम गर्दै
**अभ्यवहाराय** = भोजनका लागि
**ययाचे** = अनुरोध गरे

**वाक्यार्थ–** राजा अम्बरीषले अतिथिका रूपमा आएका दुर्वासा ऋषिलाई उठेर आसन, अर्घ्य आदि पूजासामग्रीद्वारा पूजा गरेर पाउमा प्रणाम गर्दै भोजनका निम्ति अनुरोध गरे।

**प्रतिनन्द्य स तद् याच्ञां कर्तुमावश्यकं गतः।**

**निममज्ज बृहद्ध्यायन् कालिन्दीसलिले शुभे॥ ३७॥**

**पदार्थ–**
**सः** = ती दुर्वासाले
**तत्** = (अम्बरीषको) त्यो
**याच्ञां** = प्रार्थना
**प्रतिनन्द्य** = स्वीकार गरेर
**आवश्यकं** = आवश्यक कर्म
**कर्तुम्** = गर्न
**गतः** = गए (तथा)
**शुभे** = पवित्र
**कालिन्दीसलिले** = यमुनाको जलमा
**बृहद्ध्यायन्** = परब्रह्मको ध्यान गर्दै
**निममज्ज** = नुहाए

**वाक्यार्थ–** अम्बरीषको अनुरोधलाई स्वीकार गरेका दुर्वासाले स्नान, ध्यान आदि आवश्यक कर्म गर्न यमुनाको तटमा गएर पवित्र जलमा परब्रह्मको ध्यान गर्दै नुहाए।

**मुहूर्तार्धावशिष्टायां द्वादश्यां पारणं प्रति।**

**चिन्तयामास धर्मज्ञो द्विजैस्तद्धर्मसङ्कटे॥ ३८॥**

**पदार्थ–**
**पारणं प्रति** = व्रतपारणका लागि
**मुहूर्तार्ध** = आधा मुहूर्त (२४ मिनेट) मात्र
**द्वादश्यां** = द्वादशी
**अवशिष्टायां** = बाँकी रहेपछि
**धर्मज्ञः** = धर्मका ज्ञाता राजाले
**तद्धर्मसङ्कटे** = त्यो धर्मविषयक समस्याका बारेमा
**द्विजैः** = ब्राह्मणहरूसँग
**चिन्तयामास** = परामर्श (छलफल) गरे

**वाक्यार्थ–** जब व्रतपारणका लागि आधा मुहूर्त मात्र द्वादशी बाँकी भयो, तब राजा अम्बरीषलाई ठूलो धर्मसङ्कट पर्‍यो। उनले यस विषयमा ब्राह्मणहरूसँग छलफल गरे।

**ब्राह्मणातिक्रमे दोषो द्वादश्यां यदपारणे।**

**यत्कृत्वा साधु मे भूयादधर्मो वा न मां स्पृशेत् ॥ ३९ ॥**

**पदार्थ–**
**ब्राह्मणातिक्रमे** = अतिथिलाई भोजन नगराई आफूले खानु
**दोषः** = दोष हो
**यत्** = त्यही दोष
**द्वादश्यां** = द्वादशीमा
**अपारणे** = व्रतपारायण नगर्दा पनि लाग्छ
**यत्** = जे
**कृत्वा** = गरेर
**मे** = मेरो
**साधु** = कल्याण
**भूयात्** = हुन्छ
**वा** = अथवा
**मां** = मलाई
**अधर्मः** = पापले
**न स्पृशेत्** = छुँदैन (त्यो उपाय बताउनुहोस्)

**वाक्यार्थ–** हे ब्राह्मणहरू ! अतिथिलाई भोजन नगराईकन आफूले पहिला खानु ठुलो दोष हो। द्वादशीमा व्रतपारण नगर्नु पनि दोष हो। अतः जे गर्दा मेरो कल्याण हुन्छ अथवा मलाई पाप लाग्दैन त्यही उपाय बताउनुहोस्।

**अम्भसा केवलेनाथ करिष्ये व्रतपारणम्।**
**प्राहुरब्भक्षणं विप्रा ह्यशितं नाशितं च तत् ॥ ४० ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**विप्राः** = ब्राह्मणहरूले
**अब्भक्षणं** = पानी खानुलाई
**अशितं** = भोजन गर्नु र
**न अशितं च** = नगर्नु पनि दुबै हुन्छ भन्ने
**प्राहुः** = बताएका छन्
**तत्** = त्यसकारणले
**अथ** = अब म
**केवलेन** = केवल
**अम्भसा** = जल मात्रले
**व्रतपारणम्** = व्रतपारण
**करिष्ये** = गर्दछु

**वाक्यार्थ–** ब्राह्मणहरूले पानी खानुलाई भोजन गरेको पनि हुने र नगरेको पनि हुने दुबै कुरा बताएका छन्। अतः म केवल पानी खाएर व्रतपारण गर्दछु।

**इत्यपः प्राश्य राजर्षिश्चिन्तयन् मनसाच्युतम्।**
**प्रत्यचष्ट कुरुश्रेष्ठ द्विजागमनमेव सः ॥ ४१ ॥**

**पदार्थ–**
**कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ परीक्षित्
**इति** = यस्तो विचार गरेर
**सः** = ती
**राजर्षिः** = राजर्षि अम्बरीषले
**अपः** = पानी
**प्राश्य** = खाएर
**मनसा** = मनले
**अच्युतम्** = भगवान् श्रीकृष्णलाई
**चिन्तयन्** = स्मरण गर्दै
**द्विजागमनम्** = ब्राह्मण दुर्वासाको आगमनलाई
**एव** = नै
**प्रत्यचष्ट** = प्रतीक्षा गर्न थाले

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यसपछि अम्बरीषले व्रतपारणका निम्ति पानी खाएर भगवान् श्रीकृष्णको स्मरण गर्दै दुर्वासाको आगमनको प्रतीक्षा गर्न थाले।

**दुर्वासा यमुनाकूलात् कृतावश्यक आगतः।**

**राज्ञाभिनन्दितस्तस्य बुबुधे चेष्टितं धिया ॥ ४२ ॥**

**पदार्थ–**
**कृतावश्यकः** = आवश्यक कर्म गरेर
**यमुनाकूलात्** = यमुना नदीको किनारबाट
**आगतः** = आएका
**दुर्वासा** = दुर्वासा
**राज्ञा** = राजाद्वारा
**अभिनन्दितः** = अभिनन्दन गरिए (तर दुर्वासाले)
**तस्य** = ती अम्बरीषले
**चेष्टितं** = भोजन गरिसकेको कुरा
**धिया** = बुद्धियोगद्वारा
**बुबुधे** = थाहा पाए

**वाक्यार्थ–** आवश्यक कर्म समाप्त गरेर दुर्वासा ऋषि यमुनाको किनारबाट फर्किए। राजाले उनलाई अभिनन्दन गरे। उनले आफ्नो बुद्धियोगद्वारा राजाले व्रतपारण गरिसकेको कुरा थाहा पाए।

**मन्युना प्रचलद्गात्रो भ्रुकुटीकुटिलाननः।**
**बुभुक्षितश्च सुतरां कृताञ्जलिमभाषत ॥ ४३ ॥**

**पदार्थ–**
**मन्युना** = रिसले
**प्रचलद्गात्रः** = शरीर काँपेको
**भ्रुकुटीकुटिलाननः** = आँखीभौँ खुम्चिनाले विरूप अनुहार भएका
**सुतरां** = धेरै
**बुभुक्षितः च** = भोकाएका
दुर्वासाले
**कृताञ्जलिम्** = हात जोडेर बसेका राजालाई
**अभाषत** = यसो भने

**वाक्यार्थ–** रिसले थरथर काँपेका, आँखीभौँ खुम्च्याएर डरलाग्दो अनुहार बनाएका र ज्यादै भोकाएका दुर्वासाले हात जोडेर बसेका राजालाई यसो भन्न थाले।

**अहो अस्य नृशंसस्य श्रियोन्मत्तस्य पश्यत।**
**धर्मव्यतिक्रमं विष्णोरभक्तस्येशमानिनः ॥ ४४ ॥**

**पदार्थ–**
**अहो** = आश्चर्य
**नृशंसस्य** = क्रूर
**श्रिया** = सम्पत्तिले
**उन्मत्तस्य** = मात्तिएको
**ईशमानिनः** = आफैँलाई ईश्वर मान्ने
**अस्य** = यस
**विष्णोः** = भगवान्‌को
**अभक्तस्य** = अभक्तले गरेको
**धर्मव्यतिक्रमं** = धर्मउल्लङ्घन
**पश्यत** = हेर

**वाक्यार्थ–** आश्चर्यको कुरो ! अत्यन्त क्रूर, सम्पत्तिले मात्तिएको, आफैँलाई ईश्वर मान्ने, भगवान्‌को अभक्त यस राजाले गरेको धर्मको उल्लङ्घनलाई हेर।

**यो मामतिथिमायातमातिथ्येन निमन्त्र्य च।**
**अदत्त्वा भुक्तवांस्तस्य सद्यस्ते दर्शये फलम् ॥ ४५ ॥**

**पदार्थ–**
**यः** = जसले
**आयातं** = आएको

**अतिथिम्** = अतिथि
**माम्** = मलाई
**आतिथ्येन** = अतिथि सत्कारका लागि
**निमन्त्र्य च** = निम्तो गरेर पनि
**अदत्त्वा** = अतिथिलाई नदिईकन
**भुक्तवान्** = खायो
**तस्य** = त्यसको
**फलम्** = परिणाम
**ते** = तँलाई
**सद्यः** = अहिले नै
**दर्शये** = देखाइदिन्छु

**वाक्यार्थ–** अतिथिका रूपमा आएको मलाई भोजनका निम्ति निम्तो गरेर पनि मलाई भोजन नगराई आफैंले पहिला खानेलाई त्यसको परिणाम म अहिले नै देखाइदिन्छु।

**एवं ब्रुवाण उत्कृत्य जटां रोषविदीपितः।**
**तया स निर्ममे तस्मै कृत्यां कालानलोपमाम्॥ ४६॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**ब्रुवाणः** = बोल्दै गरेका
**रोषविदीपितः** = क्रोधले जलेका
**सः** = ती दुर्वासाले ऋषिले
**जटां** = आफ्नो एउटा जटालाई
**उत्कृत्य** = उखेलेर
**तया** = त्यो जटाबाट
**तस्मै** = ती अम्बरीषलाई नाश गर्नका लागि
**कालानलोपमाम्** = प्रलयकालको अग्निसमान
**कृत्यां** = कृत्यालाई
**निर्ममे** = उत्पन्न गरे

**वाक्यार्थ–** यसप्रकार अत्यन्त रिसाएका दुर्वासाले अम्बरीषको नाश गर्नका निम्ति आफ्नो एउटा जटा उखेलेर त्यसबाट प्रलयकालीन अग्निसमान भयङ्कर रूप भएकी कृत्यालाई उत्पन्न गरे।

**तामापतन्तीं ज्वलतीमसिहस्तां पदा भुवम्।**
**वेपयन्तीं समुद्वीक्ष्य न चचाल पदान्नृपः॥ ४७॥**

**पदार्थ–**
**ज्वलतीम्** = जाज्वल्यमान् स्वरूप भएकी
**असिहस्तां** = हातमा तरबार लिएकी
**पदा** = खुट्टाले
**भुवम्** = धर्तीलाई
**वेपयन्तीं** = कँपाउँदै गरेकी
**आपतन्तीं** = आक्रमण गर्दै गरेकी
**ताम्** = त्यो कृत्यालाई
**समुद्वीक्ष्य** = देखेर
**नृपः** = राजा अम्बरीष
**पदात्** = एक पाउ पनि
**न चचाल** = विचलित भएनन्

**वाक्यार्थ–** हातमा तरबार लिएकी खुट्टाले धर्तीलाई कँपाउँदै आक्रमण गर्दै गरेकी र क्रोधले धपक्क बलेकी कृत्यालाई देखेर राजा अम्बरीष अलिकति पनि विचलित भएनन्।

**प्राग्दिष्टं भृत्यरक्षायां पुरुषेण महात्मना।**
**ददाह कृत्यां तां चक्रं क्रुद्धाहिमिव पावकः॥ ४८॥**

**पदार्थ–**
**पुरुषेण** = परमपुरुष
**महात्मना** = परमात्माद्वारा
**भृत्यरक्षायां** = भक्तको सुरक्षाका लागि
**प्राग्दिष्टं** = पहिलेदेखि नै नियुक्त गरिएको
**चक्रं** = सुदर्शन चक्रले
**तां** = त्यो

**कृत्यां** = कृत्यालाई
**क्रुद्धाहिम्** = रिसाएको सर्पलाई
**पावकः इव** = अग्निले झैं
**ददाह** = जलायो

**वाक्यार्थ–** भक्तको सुरक्षाका लागि पहिलेदेखि नै भगवान्द्वारा नियुक्त भएको सुदर्शन चक्रले रिसाएको सर्पलाई अग्निले नष्ट गरे झैं त्यस कृत्यालाई जलाएर नष्ट गरिदियो।

**तदभिद्रवदुद्वीक्ष्य स्वप्रयासं च निष्फलम्।**
**दुर्वासा दुद्रुवे भीतो दिक्षु प्राणपरीप्सया॥ ४९॥**

**पदार्थ–**
**स्वप्रयासं** = आफ्नो प्रयत्न
**निष्फलं च** = विफल भएको र
**तत्** = त्यो सुदर्शन चक्र
**अभिद्रवत्** = आफैंतिर आउँदै गरेको
**उद्वीक्ष्य** = देखेर
**भीतः** = अत्यन्त डराएका
**दुर्वासाः** = दुर्वासा ऋषि
**प्राणपरीप्सया** = प्राण बचाउन
**दिक्षु** = विभिन्न दिशातिर
**दुद्रुवे** = दौडिन थाले

**वाक्यार्थ–** आफ्नो प्रयास विफल भएको तथा सुदर्शन चक्र आफैंतिर आइरहेको देखेर डराएका दुर्वासा ऋषि प्राण रक्षाका लागि विभिन्न दिशातर्फ दौडिन थाले।

**तमन्वधावद् भगवद्रथाङ्गं दावाग्निरुद्धूतशिखो यथाहिम्।**
**तथानुषक्तं मुनिरीक्षमाणो गुहां विविक्षुः प्रससार मेरोः॥ ५०॥**

**पदार्थ–**
**भगवद्रथाङ्गं** = भगवान्को सुदर्शन चक्र
**तं** = ती दुर्वासाको
**अन्वधावत्** = पछि लाग्यो
**यथा** = जसरी
**अहिम्** = सर्पको पछि
**उद्धूतशिखः** = ज्वालाले युक्त भएको
**दावाग्निः** = वनको आगो दौडिन्छ
**तथा** = त्यसै गरी
**अनुषक्तं** = आफ्नो पछि आउँदै गरेको चक्रलाई
**ईक्षमाणः** = देखेका
**मुनिः** = दुर्वासा ऋषि
**मेरोः** = सुमेरु पर्वतको
**गुहां** = गुफामा
**विविक्षुः** = पस्ने इच्छाले (लुक्ने इच्छाले)
**प्रससार** = दौडिए

**वाक्यार्थ–** भगवान्को चक्रले दुर्वासालाई ज्वालाले युक्त भएको वनको आगोले सर्पलाई लखेटे झैं लखेट्न लाग्यो। त्यो देखेर डराएका दुर्वासा प्राण रक्षाका लागि सुमेरु पर्वतको गुफातिर दौडिए।

**दिशो नभः क्ष्मां विवरान् समुद्रान् लोकान् सपालांस्त्रिदिवं गतः सः।**
**यतो यतो धावति तत्र तत्र सुदर्शनं दुष्प्रसहं ददर्श॥ ५१॥**

**पदार्थ–**
**दिशः** = दिशा
**नभः** = आकाश
**क्ष्मां** = पृथिवी
**विवरान्** = पाताल
**समुद्रान्** = समुद्र
**सपालान्** = लोकपालसहित
**लोकान्** = सम्पूर्ण लोकहरू तथा
**त्रिदिवं** = स्वर्ग समेत

**गतः** = गएका
**सः** = ती दुर्वासा ऋषि
**यतः यतः** = जहाँ-जहाँ
**धावति** = दौडिए
**तत्र तत्र** = त्यहाँ-त्यहाँ
**दुष्प्रसहं** = सहनै नसकिने
**सुदर्शनं** = सुदर्शन चक्रलाई
**ददर्श** = देखे

**वाक्यार्थ–** सुदर्शन चक्रदेखि डराएका दुर्वासा ऋषि प्राणरक्षाका लागि सम्पूर्ण दिशा, आकाश, पाताल, पृथिवी, समुद्र, विभिन्न लोक तथा स्वर्गमा समेत पुगे। उनी जहाँ-जहाँ पुग्थे, त्यहीँ-त्यहीँ सहनै नसकिने सुदर्शन चक्रले आफूलाई लखेटिरहेको देख्दथे।

**अलब्धनाथः स यदा कुतश्चित् सन्त्रस्तचित्तोऽरणमेषमाणः।**
**देवं विरिञ्चं समगाद् विधातस्त्राह्यात्मयोनेऽजिततेजसो माम्॥ ५२॥**

**पदार्थ–**
**कुतश्चित्** = कहीं पनि
**अलब्धनाथः** = संरक्षक नपाएका
**सः** = ती दुर्वासाले
**यदा** = जब
**सन्त्रस्तचित्तः** = अत्यन्त डराएर
**अरणं** = शरण
**एषमाणः** = खोज्दै
**देवं** = देवता
**विरिञ्चं** = ब्रह्माजी कहाँ
**समगात्** = गए (त्यहाँ)
**आत्मयोने** = स्वयं उत्पन्न भएका
**विधातः** = हे ब्रह्माजी
**माम्** = मलाई
**अजिततेजसः** = जित्न नसकिने चक्रको तेजबाट
**त्राहि** = रक्षा गर्नुहोस् (भने)

**वाक्यार्थ–** संसारभर डुल्दा पनि दुर्वासाले कतै कोही संरक्षक पाएनन्। त्यसपछि उनी ब्रह्माजी कहाँ पुगे। त्यहाँ उनले ब्रह्माजीलाई यो अजेय चक्रको तेजबाट मलाई बचाउनुहोस् भनी प्रार्थना गर्न थाले।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**स्थानं मदीयं सहविश्वमेतत् क्रीडावसाने द्विपरार्धसंज्ञे।**
**भ्रूभङ्गमात्रेण हि सन्दिधक्षोः कालात्मनो यस्य तिरोभविष्यति॥ ५३॥**

**पदार्थ–**
**द्विपरार्धसंज्ञे** = दुई परार्ध नामक
**क्रीडावसाने** = लीला अन्त्य भएपछि
**सन्दिधक्षोः** = डढाउन चाहने
**कालात्मनः** = कालस्वरूप
**यस्य** = जुन भगवान्‌को
**भ्रूभङ्गमात्रेण** = आँखीभौँ बाङ्गो गर्नाले मात्र
**हि** = निश्चय नै
**सहविश्वं** = संसारको साथमा
**एतत्** = यो
**मदीयं** = मेरो
**स्थानं** = लोक पनि
**तिरोभविष्यति** = लुप्त हुन्छ

**वाक्यार्थ–** जब मेरो दुई परार्धको आयु समाप्त हुन्छ, तब कालस्वरूप भगवान्‌ले आफ्नो सृष्टिलाई समेट्न चाहनुहुन्छ। त्यस वेला भगवान्‌को आँखीभौँको सङ्केत मात्रले सारा संसारसहित मेरो यो ब्रह्मलोक पनि लुप्त हुन्छ।

**अहं भवो दक्षभृगुप्रधानाः प्रजेशभूतेशसुरेशमुख्याः।**
**सर्वे वयं यन्नियमं प्रपन्ना मूर्ध्न्यार्पितं लोकहितं वहामः॥ ५४॥**

**पदार्थ–**
**अहं** = म
**भवः** = शङ्करजी
**दक्षभृगुप्रधानाः** = दक्ष, भृगु आदि तथा
**प्रजेशभूतेशसुरेशमुख्याः** = प्रजापति, भूतेश्वर, देवेश्वर आदि
**वयं** = हामीहरू
**सर्वे** = सबै
**यन्नियमं** = जसको नियममा
**प्रपन्नाः** = बाँधिएर (तथा)
**अर्पितं** = जसको आदेशलाई
**मूर्ध्नि** = शिरोधार्य गरी
**लोकहितं** = संसारको कल्याण
**वहामः** = गर्दछौँ (त्यस्ता भगवान्को भक्तको विरोधीलाई रक्षा गर्न सकिँदैन)

**वाक्यार्थ–** म, भगवान् शङ्कर, दक्ष, भृगु आदि प्रजापति तथा भूतेश्वर, देवेश्वर आदि हामी सबै जुन भगवान्ले बनाएका नियममा बसेर जसको आदेशअनुसार संसारको कल्याण गर्दछौँ त्यस्ता भगवान्का भक्तको विरोधीलाई रक्षा गर्न सकिँदैन।

**प्रत्याख्यातो विरिञ्चेन विष्णुचक्रोपतापितः।**
**दुर्वासाः शरणं यातः शर्वं कैलासवासिनम्॥ ५५॥**

**पदार्थ–**
**विरिञ्चेन** = ब्रह्माजीद्वारा
**प्रत्याख्यातः** = अस्वीकार गरिएका
**विष्णुचक्रोपतापितः** = भगवान् नारायणको सुदर्शन चक्रद्वारा सताइएका
**दुर्वासाः** = दुर्वासा ऋषि
**कैलासवासिनम्** = कैलासमा बस्ने
**शर्वं** = भगवान् शङ्करजीको
**शरणं** = शरणमा
**यातः** = गए

**वाक्यार्थ–** यसप्रकार ब्रह्माजीबाट अस्वीकार गरिएका तथा सुदर्शन चक्रद्वारा सताइएका दुर्वासा ऋषि कैलासवासी भगवान् शङ्करजीको शरणमा गए।

**रुद्र उवाच** (भगवान् रुद्रले भन्नुभयो)

**वयं न तात प्रभवाम भूम्नि यस्मिन् परेऽन्येऽप्यजजीवकोशाः।**
**भवन्ति काले न भवन्ति हीदृशाः सहस्रशो यत्र वयं भ्रमामः॥ ५६॥**

**पदार्थ–**
**तात** = हे प्रिय दुर्वासा
**यत्र** = जहाँ
**वयं** = हामीहरू
**भ्रमामः** = घुमिरहेका छौँ
**ईदृशाः** = यस्ता
**सहस्रशः** = हजारौँ लोकहरू र
**अन्ये अपि** = अरू पनि
**अजजीवकोशाः** = ब्रह्मा, प्राणी बस्ने ब्रह्माण्डहरू छन् (ती सबै)
**यस्मिन्** = जुन परमात्मामा
**काले** = समय आएपछि
**भवन्ति** = उत्पन्न हुन्छन् र
**न भवन्ति** = विलीन हुन्छन्, त्यस्ता
**भूम्नि** = व्यापक
**परे** = परमात्माका विषयमा
**वयं** = हामीहरूले

**न प्रभवामः** = केही गर्न सक्दैनौं

**वाक्यार्थ–** हे प्रिय दुर्वासा ! जुन परमात्माले चाहेको वेलामा हामीहरू घुम्ने यस्ता हजारौं ब्रह्माण्डहरू उत्पन्न गर्ने र संहार गर्ने गर्नुहुन्छ, त्यस्ता व्यापक परमात्माका विषयमा हामी केही पनि गर्न सक्दैनौं।

**अहं सनत्कुमारश्च नारदो भगवानजः।**
**कपिलोऽपान्तरतमो देवलो धर्म आसुरिः ॥ ५७ ॥**
**मरीचिप्रमुखाश्चान्ये सिद्धेशाः पारदर्शनाः।**
**विदाम न वयं सर्वे यन्मायां माययावृताः ॥ ५८ ॥**

पदार्थ–
**माया** = मायाद्वारा
**आवृताः** = घेरिएका
**अहं** = म शङ्कर
**सनत्कुमारः च** = सनत्कुमार र
**नारदः** = नारदजी
**भगवान्** = भगवान्
**अजः** = ब्रह्माजी
**कपिलः** = कपिल
**अपान्तरतमः** = अपान्तरतम
**देवलः** = देवल
**धर्मः** = धर्म
**आसुरिः** = आसुरि
**मरीचिप्रमुखाः** = मरीचि आदि ऋषिहरू
**अन्ये** = अरू
**पारदर्शनाः** = सर्वज्ञ
**सिद्धेशाः** = सिद्धेश्वरहरू तथा
**वयं** = हामी
**सर्वे च** = सबैले
**यन्मायां** = जसको मायाशक्तिलाई
**न विदाम** = जान्दैनौं

**वाक्यार्थ–** सनत्कुमार, नारद, भगवान् ब्रह्मा, कपिल, अपान्तरतम, देवल, धर्म, आसुरि, मरीचि आदि ऋषिहरू र अन्य सर्वज्ञ सिद्धेश्वर लगायत मायाले घेरिएका हामी कसैले पनि भगवान्को मायालाई बुझ्न सक्दैनौं।

**तस्य विश्वेश्वरस्येदं शस्त्रं दुर्विषहं हि नः।**
**तमेवं शरणं याहि हरिस्ते शं विधास्यति ॥ ५९ ॥**

पदार्थ–
**तस्य** = ती भगवान्
**विश्वेश्वरस्य** = विश्वेश्वरको
**इदं** = यो
**शस्त्रं** = शस्त्र चक्र
**नः** = हाम्रा लागि
**हि** = निश्चय नै
**दुर्विषहं** = असह्य छ (अतः)
**तम् एवं** = उनै भगवान् विश्वेश्वरको
**शरणं** = शरणमा
**याहि** = जाऊ
**हरिः** = भगवान् श्रीहरिले
**ते** = तिम्रो
**शं** = कल्याण
**विधास्यति** = गर्नुहुनेछ

**वाक्यार्थ–** भगवान् विश्वेश्वरको यो चक्र हाम्रा लागि पनि असह्य छ। त्यसैले तिमी उहाँकै शरणमा जाऊ। भगवान् श्रीहरिले नै तिम्रो कल्याण गर्नुहुनेछ।

**ततो निराशो दुर्वासाः पदं भगवतो ययौ ।**
**वैकुण्ठाख्यं यदध्यास्ते श्रीनिवासः श्रिया सह ॥ ६० ॥**

पदार्थ—
**निराशः** = निराश भएका
**दुर्वासाः** = दुर्वासा ऋषि
**ततः** = त्यस कैलासबाट
**भगवतः** = भगवान् नारायणको
**वैकुण्ठाख्यं** = वैकुण्ठ नामक
**पदं** = धाममा
**ययौ** = गए
**यत्** = जहाँ
**श्रीनिवासः** = भगवान् विष्णु
**श्रिया** = लक्ष्मीजीको
**सह** = साथमा
**अध्यास्ते** = बस्नुहुन्छ

**वाक्यार्थ—** निराश भएका दुर्वासा ऋषि कैलासबाट वैकुण्ठधाममा पुगे जहाँ भगवान् विष्णु लक्ष्मीजीको साथमा बस्नुहुन्छ।

**सन्दह्यमानोऽजितशस्त्रवह्निना तत्पादमूले पतितः सवेपथुः ।**
**आहाच्युतानन्त सदीप्सित प्रभो कृतागसं माव हि विश्वभावन ॥ ६१ ॥**

पदार्थ—
**अजितशस्त्रवह्निना** = जित्न नसकिने भगवान्को चक्रको ज्वालाले
**सन्दह्यमानः** = जल्दै गरेका
**सवेपथुः** = काँप्दै
**तत्पादमूले** = भगवान् नारायणको पाउमा
**पतितः** = परेका दुर्वासाले
**अच्युत** = हे अच्युत
**अनन्त** = हे अनन्त
**विश्वभावन** = विश्वलाई जीवन प्रदान गर्ने
**सदीप्सित** = हे सज्जनप्रिय
**प्रभो** = हे प्रभु
**कृतागसं** = गल्ती गरेको
**मा** = म दुर्वासालाई
**हि** = निश्चय नै
**अव** = रक्षा गर्नुहोस्
**आह** = भने

**वाक्यार्थ—** सुदर्शन चक्रको ज्वालाले पोलेर आत्तिएर काँप्दै गरेका दुर्वासा भगवान्को पाउमा परे र उनले भने— हे अच्युत ! हे अनन्त ! विश्वलाई नै जीवन प्रदान गर्नुहुने हे सज्जनप्रिय प्रभु ! गल्ती गरेको मलाई रक्षा गर्नुहोस्।

**अजानता ते परमानुभावं कृतं मयाघं भवतः प्रियाणाम् ।**
**विधेहि तस्यापचितिं विधातर्मुच्येत यन्नाम्न्युदिते नारकोऽपि ॥ ६२ ॥**

पदार्थ—
**ते** = हजुरको
**परमानुभावं** = परम प्रभावलाई
**अजानता** = नजानेको
**मया** = मैले
**भवतः** = हजुरका
**प्रियाणाम्** = प्रिय भक्तमाथि
**अघं** = अपराध
**कृतं** = गरेँ
**विधातः** = हे विधाता
**तस्य** = त्यस अपराधबाट
**अपचितिं** = दोषमुक्त
**विधेहि** = गर्नुहोस् किनभने
**यत्** = हजुरको
**नाम्नि** = नाम
**उदिते** = उच्चारण गर्नाले मात्र
**नारकः** = नरकमा परेको जीव
**अपि** = पनि

**मुच्येत** = मुक्त हुन्छ

**वाक्यार्थ–** हजुरको परम प्रभावलाई नजान्नाले मैले हजुरको प्रिय भक्तमाथि अपराध गरेको छु। त्यस अपराधबाट मलाई बचाउनुहोस् किनभने हजुरको नाम उच्चारण गर्नाले मात्र नरकमा परेको जीव पनि मुक्त हुन्छ।

**श्रीभगवानुवाच** (भगवान् विष्णुले भन्नुभयो)

## अहं भक्तपराधीनो ह्यस्वतन्त्र इव द्विज।
## साधुभिर्ग्रस्तहृदयो भक्तैर्भक्तजनप्रियः॥ ६३॥

**पदार्थ–**
**द्विज** = हे ब्राह्मणदेव
**साधुभिः** = सज्जन
**भक्तैः** = भक्तहरूद्वारा
**ग्रस्तहृदयः** = हृदय खोसिएको
**भक्तजनप्रियः** = भक्तजनको प्यारो
**अहं** = म
**हि** = निश्चय नै
**अस्वतन्त्रः** = पराधीन
**इव** = जस्तै
**भक्तपराधीनः** = भक्तहरूको अधीनमा छु

**वाक्यार्थ–** हे दुर्वासा! मेरा सज्जन भक्तहरूले आफूलाई ममा समर्पण गरेकाले मेरो हृदय जितेका छन्। यसैले पराधीन व्यक्ति झैँ म पनि ती भक्तको अधीनमा छु।

**विवरण–** यस श्लोकमा भक्त र भगवान्का बीचको प्रेमसम्बन्ध स्पष्ट पारिएको छ। सम्पूर्ण ऐश्वर्यले सम्पन्न परमसत्तालाई नै भगवान् भनिन्छ। तर उहाँ पनि भक्तपराधीन अर्थात् भक्तहरूको अधीनमा हुनुहुन्छ भन्ने कुरा यहाँ बताइएको छ। प्रेमसम्बन्धको कारणले नै भगवान् भक्तहरूको वशमा हुनुभएको हो। भगवान्बाहेक केही नचाहने विरक्त भक्तहरू भगवान्लाई असाध्यै प्यारा हुन्छन्। त्यसैले सर्वस्वतन्त्र परमात्मा पनि उनीहरूको वशमा हुनुहुन्छ। भगवान्का लागि सम्पूर्ण संसारलाई छोड्न सक्नेले नै भगवान्लाई वशमा राख्न सक्छ। यसरी सर्वस्व छाडी आफ्नो शरणमा आएकाहरूलाई भगवान्ले पनि छाड्न सक्नुहुन्न। यहाँ भगवान्लाई साधुहरूको हृदय र साधुहरूलाई भगवान्को हृदय भनी बताइएको छ। आफूलाई पनि परमात्मामा नै देख्ने ज्ञानीहरूलाई गीता (७/१८)मा पनि भगवान्ले **ज्ञानी त्वात्मैव मे मतं** अर्थात् ज्ञानी मेरो आत्मा नै हो भन्नुभएको छ। भगवान् र उहाँका भक्तहरू अलग अस्तित्व होइनन्। ती त एउटै अस्तित्वका दुई रूप हुन्। भगवान् भक्तको वशमा हुनु भनेको कोही अरू व्यक्तिको वशमा हुनु या परतन्त्र हुनु होइन अपि तु आफ्नै वशमा हुनु हो। यसैले यहाँ भगवान्लाई **अस्वतन्त्र इव** अर्थात् अस्वतन्त्र झैँ भनिएको छ।

## नाहमात्मानमाशासे मद्भक्तैः साधुभिर्विना।
## श्रियं चात्यन्तिकीं ब्रह्मन् येषां गतिरहं परा॥ ६४॥

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**येषां** = जुन भक्तहरूको

**अहं** = म
**परा** = परम
**गतिः** = आश्रय छु (ती)
**साधुभिः** = सज्जन
**मद्भक्तैः** = मेरा भक्तहरूलाई
**विना** = छाडेर
**अहं** = म
**आत्मानं** = आफैंलाई र
**आत्यन्तिकीं** = आफूमा नित्य समर्पित
**श्रियं च** = लक्ष्मीलाई पनि
**न आशासे** = चाहन्नँ

**वाक्यार्थ–** हे ब्राह्मण ! जुन भक्तहरूको म परम आश्रय बनेको छु, ती मेरा भक्तलाई छाडेर म आफूलाई र ममा नित्य समर्पित लक्ष्मीलाई पनि चाहन्नँ।

**ये दारागारपुत्राप्तान् प्राणान् वित्तमिमं परम्।**
**हित्वा मां शरणं याताः कथं तांस्त्यक्तुमुत्सहे ॥ ६५ ॥**

**पदार्थ–**
**ये** = जो भक्तहरू
**दारागारपुत्राप्तान्** = पत्नी, घर, सन्तान तथा बन्धुबान्धव
**प्राणान्** = प्राण
**वित्तम्** = धन अनि
**इमं** = यो लोक र
**परम्** = परलोक समेत
**हित्वा** = त्यागेर
**मां** = मेरो
**शरणं** = शरणमा
**याताः** = आएका छन्
**तान्** = तिनीहरूलाई
**कथं** = कसरी
**त्यक्तुं** = छोड्न
**उत्सहे** = सक्छु

**वाक्यार्थ–** जो भक्त आफ्ना पत्नी, घर, सन्तान, बन्धुबान्धव, प्राण, धन तथा यो लोक र परलोकलाई समेत त्यागेर मेरो शरणमा आएका छन्, तिनीहरूलाई म कसरी त्याग्न सक्छु ?

**मयि निर्बद्धहृदयाः साधवः समदर्शनाः।**
**वशीकुर्वन्ति मां भक्त्या सत्स्त्रियः सत्पतिं यथा ॥ ६६ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**सत्स्त्रियः** = पतिव्रता नारीहरू
**सत्पतिं** = सज्जन पतिलाई
**वशीकुर्वन्ति** = वशमा राख्दछन् (त्यसै गरी)
**मयि** = ममा
**निर्बद्धहृदयाः** = मन लगाएका
**समदर्शनाः** = समदर्शी
**साधवः** = सज्जन भक्तहरूले
**भक्त्या** = भक्तिद्वारा
**मां** = मलाई (वशमा राख्दछन्)

**वाक्यार्थ–** जसरी पतिव्रता नारीहरूले आफ्ना सज्जन पतिलाई वशमा राख्दछन् त्यसै गरी आफ्नो मन ममा अर्पण गरेका समदर्शी सज्जन भक्तहरूले भक्तिद्वारा मलाई वशमा राख्दछन्।

**मत्सेवया प्रतीतं च सालोक्यादिचतुष्टयम्।**
**नेच्छन्ति सेवया पूर्णाः कुतोऽन्यत् कालविद्रुतम् ॥ ६७ ॥**

**पदार्थ–**
**सेवया** = सेवाभावले
**पूर्णाः** = भरिपूर्ण (ती भक्तहरू)
**मत्सेवया** = मेरो सेवाद्वारा
**प्रतीतं** = प्राप्त भएका
**सालोक्यादिचतुष्टयम् च** = सालोक्य आदि चार प्रकारका मोक्ष पनि
**न इच्छन्ति** = चाहँदैनन् भने

| | |
|---|---|
| **कालविद्रुतम्** = कालद्वारा नष्ट हुने | **अन्यत्** = अरू वस्तु |
| | **कुतः** = कसरी चाहन्थे |

**वाक्यार्थ–** सेवाभावले परिपूर्ण भक्तहरू भगवान्‌को सेवाबाट प्राप्त हुने सालोक्य, सारूप्य, सायुज्य, सार्ष्टिरूप चार प्रकारका मुक्तिलाई त चाहँदैनन् भने कालद्वारा नष्ट हुने अरू वस्तुलाई कसरी चाहन्थे ?

**साधवो हृदयं मह्यं साधूनां हृदयं त्वहम् ।**

**मदन्यत् ते न जानन्ति नाहं तेभ्यो मनागपि ॥ ६८ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **साधूनां** = सज्जन भक्तहरूको | **अहं** = म पनि |
| **साधवः तु** = सज्जन भक्तहरू नै | **हृदयं** = हृदय हुँ | **तेभ्यः** = तिनीहरू बाहेक |
| **मह्यं** = मेरा | **ते** = ती भक्तहरू | **मनाक् अपि** = अरू केही पनि |
| **हृदयं** = हृदय हुन् | **मदन्यत्** = म बाहेक अरू केही | **न** = जान्दिनँ |
| **अहम्** = म | **न जानन्ति** = जान्दैनन् | |

**वाक्यार्थ–** प्रिय भक्तहरू मेरा हृदय वा सर्वस्व हुन्। म भक्तहरूको सर्वस्व हुँ। उनीहरू म बाहेक केही जान्दैनन्। म पनि उनीहरू बाहेक अरू केही जान्दिनँ।

**उपायं कथयिष्यामि तव विप्र शृणुष्व तत् ।**

**अयं ह्यात्माभिचारस्ते यतस्तं यातु वै भवान् ॥**

**साधुषु प्रहितं तेजः प्रहर्तुः कुरुतेऽशिवम् ॥ ६९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **हि** = निश्चय नै | **वै** = किनभने |
| **विप्र** = हे ब्राह्मण | **अयं** = यो | **साधुषु** = सज्जनहरूमा |
| **तव** = तपाईंलाई | **आत्माभिचारः** = आपत्ति | **प्रहितं** = प्रहार गरिएको |
| **उपायं** = (चक्रको आक्रमणबाट मुक्त हुने) उपाय | **ते** = तपाईंलाई | **तेजः** = शक्तिले |
| | **यतः** = जसबाट आइलाग्यो | **प्रहर्तुः** = प्रहार गर्नेको नै |
| **कथयिष्यामि** = बताउँछु | **भवान्** = तपाईं | **अशिवम्** = अमङ्गल |
| **तत्** = त्यो | **तं** = उनैको शरणमा | **कुरुते** = गर्दछ |
| **शृणुष्व** = सुन्नुहोस् | **यातु** = जानुहोस् | |

**वाक्यार्थ–** हे ब्राह्मणदेव ! चक्रबाट मुक्त हुने उपाय म तपाईंलाई सुनाउँछु, त्यो सुन्नुहोस्। तपाईंलाई यो आपत्ति जहाँबाट आइलाग्यो, तपाईं त्यहीँ जानुहोस्। सज्जनमाथि प्रयोग गरिएको शक्तिले प्रहारकर्ताको नै अमङ्गल गर्ने हुँदा उनले तपाईंको कल्याण गर्नेछन्।

**तपो विद्या च विप्राणां निःश्रेयसकरे उभे ।**

**ते एव दुर्विनीतस्य कल्पेते कर्तुरन्यथा ॥ ७० ॥**

**पदार्थ–**
**तपः** = तपस्या र
**विद्या च** = विद्या
**उभे** = यी दुबै
**विप्राणां** = ब्राह्मणहरूको
**निःश्रेयसकरे** = कल्याण गर्नेवाला हुन्, तर
**ते एव** = यिनै दुईले
**दुर्विनीतस्य** = उद्दण्ड व्यवहार
**कर्तुः** = गर्नेलाई
**अन्यथा** = उल्टो फल
**कल्पेते** = दिन्छन्

**वाक्यार्थ–** तपस्या र विद्या यी दुबैले ब्राह्मणलाई कल्याण गर्दछन्। उद्दण्ड व्यवहार गर्ने ब्राह्मणलाई चाहिँ यिनैले उल्टो फल वा अकल्याण गर्दछन्।

**ब्रह्मंस्तद् गच्छ भद्रं ते नाभागतनयं नृपम्।**
**क्षमापय महाभागं ततः शान्तिर्भविष्यति ॥ ७१ ॥**

**पदार्थ–**
**तत्** = त्यसकारण
**ब्रह्मन्** = हे ब्राह्मण
**गच्छ** = जानुहोस्
**ते** = तपाईंको
**भद्रं** = कल्याण होस्
**महाभागं** = अति भाग्यमानी
**नाभागतनयं** = नाभागका छोरा
**नृपम्** = राजा अम्बरीषसँग
**क्षमापय** = माफी माग्नुहोस्
**ततः** = त्यसपछि
**शान्तिः** = शान्ति
**भविष्यति** = हुनेछ

**वाक्यार्थ–** हे ब्राह्मण ! त्यसकारण तपाईं नाभागका छोरा राजा अम्बरीषकहाँ गएर क्षमा माग्नुहोस्, त्यसपछि तपाईंलाई शान्ति मिल्नेछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां**
**नवमस्कन्धेऽम्बरीषचरिते चतुर्थोऽध्यायः ॥ ४ ॥**

# अथ पञ्चमोऽध्यायः

## ऋषि दुर्वासाको कष्टनिवृत्ति

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं भगवतादिष्टो दुर्वासाश्चक्रतापितः।**

**अम्बरीषमुपावृत्य तत्पादौ दुःखितोऽग्रहीत्॥ १॥**

**पदार्थ—**
**एवं** = यसप्रकार
**भगवता** = भगवान् नारायणद्वारा
**आदिष्टः** = आज्ञा दिइएका
**चक्रतापितः** = चक्रबाट पीडित
**दुर्वासाः** = दुर्वासा ऋषि
**अम्बरीषम्** = राजा अम्बरीषको
**उपावृत्य** = नजिक गएर
**दुःखितः** = अत्यन्त दुःखी भएर
**तत्पादौ** = उनका दुबै पाउ
**अग्रहीत्** = समाते

**वाक्यार्थ—** यसप्रकार भगवान् नारायणबाट आज्ञा दिइएपछि चक्रबाट पीडित दुर्वासा ऋषिले अम्बरीषकहाँ पुगेर अत्यन्त दुःखी हुँदै उनका दुबै पाउ समाते।

**तस्य सोद्यमनं वीक्ष्य पादस्पर्शविलज्जितः।**

**अस्तावीत् तद्धरेरस्त्रं कृपया पीडितो भृशम्॥ २॥**

**पदार्थ—**
**पादस्पर्शविलज्जितः** = ऋषि दुर्वासाद्वारा पाउ छोइनाले लज्जित भएका तथा
**तस्य** = ती दुर्वासाको
**सोद्यमनं** = कार्य
**वीक्ष्य** = देखेर
**कृपया** = दया जाग्नाले
**भृशम्** = अत्यन्त
**पीडितः** = दुःखी भएका
अम्बरीषले
**तद्धरेः** = भगवान् श्रीहरिको त्यो
**अस्त्रं** = अस्त्रलाई
**अस्तावीत्** = स्तुति गर्न लागे

**वाक्यार्थ—** ऋषि दुर्वासाद्वारा पाउ छोइनाले लज्जित भएका तथा ती दुर्वासाले गरेका कार्य देखेर दया जाग्नाले अत्यन्त दुःखी भएका राजा अम्बरीषले भगवान् श्रीहरिको त्यस अस्त्र (सुदर्शन चक्र)को स्तुति गर्न लागे।

**अम्बरीष उवाच** (अम्बरीषले भने)

**त्वमग्निर्भगवान् सूर्यस्त्वं सोमो ज्योतिषां पतिः।**

**त्वमापस्त्वं क्षितिर्व्योम वायुर्मात्रेन्द्रियाणि च॥ ३॥**

**पदार्थ—**
**त्वं** = हजुर
**अग्निः** = अग्नि
**भगवान्** = सामर्थ्यवान्
**सूर्यः** = सूर्य (हुनुहुन्छ)
**त्वं** = हजुर नै

**ज्योतिषां** = नक्षत्रहरूका
**पतिः** = मालिक
**सोमः** = चन्द्रमा (हुनुहुन्छ)
**त्वं** = हजुर
**आपः** = जल (हुनुहुन्छ)
**त्वं** = हजुर
**क्षितिः** = पृथिवी
**व्योम** = आकाश
**वायुः** = वायु तथा
**मात्रा** = तन्मात्रा र
**इन्द्रियाणि च** = इन्द्रियहरू
हुनुहुन्छ

**वाक्यार्थ–** हे सुदर्शन चक्र ! हजुर अग्नि र सामर्थ्यवान् सूर्य हुनुहुन्छ। हजुर नै नक्षत्रका मालिक चन्द्रमा हुनुहन्छ, अनि हजुर नै जल, पृथिवी, आकाश, वायु, रूप, रस आदि पञ्चतन्मात्रा र चक्षु आदि इन्द्रिय हुनुहुन्छ।

**सुदर्शन नमस्तुभ्यं सहस्राराच्युतप्रिय।**
**सर्वास्त्रघातिन् विप्राय स्वस्ति भूया इडस्पते॥ ४॥**

**पदार्थ–**
**अच्युतप्रिय** = भगवान्का प्रिय
**सर्वास्त्रघातिन्** = सम्पूर्ण अस्त्रलाई नाश गर्ने
**इडस्पते** = पृथिवीका रक्षक
**सहस्रार** = हजार दाँते धार
**सुदर्शन** = हे सुदर्शन चक्र
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ
**विप्राय** = ब्राह्मणका लागि
**स्वस्ति** = कल्याणकारक
**भूयाः** = हुनुहोस्

**वाक्यार्थ–** हजार दाँते धार भएका, भगवान्का प्रिय, सम्पूर्ण अस्त्रका नाशक, पृथिवीका रक्षक हे सुदर्शन चक्र ! हजुरलाई नमस्कार छ। ब्राह्मणको कल्याण गर्नुहोस्।

**त्वं धर्मस्त्वमृतं सत्यं त्वं यज्ञोऽखिलयज्ञभुक्।**
**त्वं लोकपालः सर्वात्मा त्वं तेजः पौरुषं परम्॥ ५॥**

**पदार्थ–**
**त्वं** = हजुर
**धर्मः** = धर्म
**ऋतं** = उचित
**सत्यं** = सत्य हुनुहुन्छ
**त्वं** = हजुर नै
**यज्ञः** = यज्ञ (हुनुहुन्छ)
**अखिलयज्ञभुक्** = सम्पूर्ण यज्ञका भोक्ता
**त्वं** = हजुर नै
**लोकपालः** = लोकका रक्षक हुनुहुन्छ
**त्वं** = हजुर
**सर्वात्मा** = सम्पूर्ण प्राणीका आत्मा हुनुहुन्छ
**त्वं** = हजुर नै
**पौरुषं** = भगवान्को
**परम्** = परम
**तेजः** = तेज हुनुहुन्छ

**वाक्यार्थ–** हजुर धर्म हुनुहुन्छ, हजुर नै उचित तथा सत्य हुनुहुन्छ। हजुर नै यज्ञ र सम्पूर्ण यज्ञका फलभोक्ता हुनुहुन्छ। हजुर नै सम्पूर्ण लोकका रक्षक एवं सबैका आत्मस्वरूप भगवान्का परम तेज हुनुहुन्छ।

**नमः सुनाभाखिलधर्मसेतवे ह्यधर्मशीलासुरधूमकेतवे।**
**त्रैलोक्यगोपाय विशुद्धवर्चसे मनोजवायाद्भुतकर्मणे गृणे॥ ६॥**

**पदार्थ–**
**सुनाभ** = हे सुन्दर नाभि भएका सुदर्शन चक्र

**अखिलधर्मसेतवे** = सम्पूर्ण धर्ममर्यादाका रक्षक
**हि** = निश्चय नै
**अधर्मशीलासुरधूमकेतवे** = खराब स्वभाव भएका असुरहरूका लागि धूमकेतु (अग्नि)समान
**त्रैलोक्यगोपाय** = तीनै लोकको रक्षा गर्नेवाला
**विशुद्धवर्चसे** = शुद्ध तेज भएका
**मनोजवाय** = मनको जस्तो गति भएका
**अद्भुतकर्मणे** = आश्चर्य लाग्दा काम गर्ने हजुरलाई
**नमः** = नमस्कार
**गृणे** = गर्दछु

**वाक्यार्थ–** हे सुन्दर नाभि भएका सुदर्शन चक्र ! सम्पूर्ण धर्ममर्यादाका रक्षा गर्ने, खराब काम गर्ने राक्षसहरूलाई नष्ट गर्नका लागि अग्निसमान भएका, तीनै लोकको रक्षा गर्ने, विशुद्ध तेजवाला, मनको जस्तो गति भएका एवं आश्चर्यलाग्दा कर्म गर्ने हजुरलाई म नमस्कार गर्दछु।

**त्वत्तेजसा धर्ममयेन संहृतं तमः प्रकाशश्च धृतो महात्मनाम्।**
**दुरत्ययस्ते महिमा गिरां पते त्वद्रूपमेतत् सदसत्परावरम्॥ ७॥**

**पदार्थ–**
**गिरां पते** = हे वेदवाणीका रक्षक
**धर्ममयेन** = धर्मस्वरूप
**त्वत्तेजसा** = हजुरको प्रकाशले
**तमः** = अन्धकार
**संहृतं** = नाश हुन्छ र
**महात्मनाम्** = सूर्य आदि महापुरुषहरूको
**प्रकाशः च** = प्रकाश पनि
**धृतः** = सुरक्षित हुन्छ
**एतत्** = यो
**सदसत्परावरम्** = राम्रो-नराम्रो र सानो-ठुलो आदि भावले युक्त संसार
**त्वद्रूपं** = हजुरकै रूप हो
**ते** = हजुरको
**महिमा** = लीला
**दुरत्ययः** = पार पाइनसक्नु छ

**वाक्यार्थ–** हे वेदवाणीका रक्षक ! हजुरको धर्ममय तेजद्वारा अन्धकारको नाश हुन्छ र सूर्य, चन्द्र आदिको प्रकाशको रक्षा हुन्छ। राम्रो-नराम्रो, सानो-ठुलो आदि भेदभावले युक्त यो संसार हजुरकै स्वरूप हो। अतः हजुरको लीला पार पाइनसक्नु छ।

**यदा विसृष्टस्त्वमनञ्जनेन वै बलं प्रविष्टोऽजित दैत्यदानवम्।**
**बाहूदरोर्वङ्घ्रिशिरोधराणि वृक्णन्नजस्रं प्रधने विराजसे॥ ८॥**

**पदार्थ–**
**अजित** = हे कसैले जित्न नसक्ने चक्र
**त्वं** = हजुर
**यदा** = जब
**प्रधने** = युद्धमा
**अनञ्जनेन** = निरञ्जन भगवान्द्वारा
**विसृष्टः** = छोडिनुहुन्छ, तब
**वै** = निश्चय नै
**दैत्यदानवम्** = दैत्य र दानवको
**बलं** = सेनामा
**प्रविष्टः** = प्रवेश गरेर, ती सेनाहरूको
**बाहूदरोः** = हात, पेट तथा
**ऊर्वङ्घ्रिशिरोधराणि** = जाँघ, खुट्टा, गर्धन आदि
**अजस्रं** = निरन्तर
**वृक्णन्** = काट्दै गर्दा
**विराजसे** = शोभायमान देखिनुहुन्छ

**वाक्यार्थ–** हे कसैले जित्न नसक्ने सुदर्शन चक्र ! जब हजुरलाई भगवान्ले युद्धमा चलाउनुहुन्छ, तब दैत्यदानवको सेनामा प्रवेश गरेर, तिनीहरूको हात, पेट, जाँघ, खुट्टा र गर्धन आदि निरन्तर

काटिरहँदा हजुर अत्यन्त शोभायमान देखिनुहुन्छ।

**स त्वं जगत्त्राण खलप्रहाणये निरूपितः सर्वसहो गदाभृता।**

**विप्रस्य चास्मत्कुलदैवहेतवे विधेहि भद्रं तदनुग्रहो हि नः॥ ९॥**

**पदार्थ—**
**जगत्त्राण** = हे संसारका रक्षक
**सर्वसहः** = सबै कुरा सहन सक्ने
**सः** = त्यस्ता
**त्वं** = हजुर
**गदाभृता** = गदाधारी भगवान्द्वारा
**खलप्रहाणये** = दुष्टको नाश गर्न
**निरूपितः** = नियुक्त हुनुभएको हो
**अस्मत्कुलदैवहेतवे** = हाम्रो वंशको भाग्यवृद्धिका लागि
**विप्रस्य** = ब्राह्मण दुर्वासाको
**भद्रं च** = कल्याण
**विधेहि** = गर्नुहोस्
**हि** = निश्चय नै
**नः** = हामीहरूका लागि
**तदनुग्रहः** = त्यही हजुरको कृपा हुनेछ

**वाक्यार्थ—** हे संसारका रक्षक ! सबै कुरा सहन सक्ने हजुरलाई गदाधारी भगवान्ले दुष्टको नाश गर्न नियुक्त गर्नुभएको हो। हाम्रो वंशको भाग्यवृद्धिका लागि ब्राह्मण दुर्वासाको कल्याण गर्नुहोस्। त्यही नै हाम्रा लागि हजुरको कृपा हुनेछ।

**यद्यस्ति दत्तमिष्टं वा स्वधर्मो वा स्वनुष्ठितः।**

**कुलं नो विप्रदैवं चेद् द्विजो भवतु विज्वरः॥ १०॥**

**पदार्थ—**
**यदि** = यदि (मद्वारा)
**दत्तम्** = दान दिइएको
**अस्ति** = छ
**वा** = अथवा
**इष्टं** = यज्ञ गरिएको छ
**वा** = अथवा
**स्वधर्मः** = आफ्नो धर्म
**स्वनुष्ठितः** = राम्रोसँग पालन गरिएको छ (तथा)
**नः** = हाम्रो
**कुलं** = वंशले
**विप्रदैवं** = ब्राह्मणलाई देवता मानेको
**चेत्** = छ भने
**द्विजः** = ब्राह्मण दुर्वासा
**विज्वरः** = सन्तापरहित
**भवतु** = होऊन्

**वाक्यार्थ—** यदि मैले केही दान र यज्ञ गरेको छु अथवा आफ्नो धर्मको राम्रोसँग पालन गरेको छु तथा हाम्रो कुलमा ब्राह्मणलाई देवताको रूपमा मानिएको छ भने ब्राह्मण दुर्वासा तत्काल सन्तापरहित होऊन्।

**यदि नो भगवान् प्रीत एकः सर्वगुणाश्रयः।**

**सर्वभूतात्मभावेन द्विजो भवतु विज्वरः॥ ११॥**

**पदार्थ—**
**एकः** = एक मात्र
**सर्वगुणाश्रयः** = सम्पूर्ण ऐश्वर्यका आश्रय
**भगवान्** = भगवान् श्रीहरि
**यदि** = यदि

**नः** = हामी (म)देखि
**प्रीतः** = खुसी हुनुहुन्छ (तथा, मैले)
**सर्वभूतात्मभावेन** = सबै प्राणीलाई आत्मरूपले हेरेको छु भने
**द्विजः** = ब्राह्मण दुर्वासा
**विज्वरः** = सन्तापरहित
**भवतु** = होऊन्

**वाक्यार्थ–** यदि मैले सबै प्राणीलाई आत्मभावले हेरेको छु र सम्पूर्ण गुणका एक मात्र आश्रय भगवान् मदेखि प्रसन्न हुनुभएको छ भने ब्राह्मण दुर्वासा सन्तापरहित होऊन्।

**विवरण–** माथिका श्लोकहरूमा राजा अम्बरीषले आफैँलाई मार्न तयार हुने दुर्वासालाई बचाउन सुदर्शन चक्रसँग प्रार्थना गरेका छन्। उत्तम भगवद्भक्तहरू आफ्नो आपत्तिलाई होइन, अरूमाथि परेको सङ्कटलाई हेर्दछन्। दया र करुणा उनीहरूमा सधैँ रहने गुण हुन्। कुनै पनि दुःखी प्राणीलाई देख्दा हृदय पग्लिँदैन भने त्यो व्यक्ति असली भक्त होइन भन्ने बुझ्नुपर्दछ। भक्तहरूमा रहने अर्को गुण हो– विनम्रता। हुन त मानिसहरू देखाउनका लागि पनि नम्र व्यवहार र मिठो बोलीवचन गर्दछन्, तर कतिपयको नम्रता केवल प्रदर्शनका लागि मात्र हुन्छ। 'म केही जान्दिनँ, मसँग केही गुण छैनन्' भनिरहँदा पनि मानिसहरू सबैलाई आफू नम्र भएको देखाई भित्र-भित्र त्यसकै अभिमान गरिरहेका हुन्छन्। भक्तहरूमा यस्तो आडम्बरी नम्रता पाइँदैन, तर यो उनीहरूको स्वभाव-भित्रै हुन्छ। ऋषि दुर्वासाले पाउ छुन आएको देख्दा राजा अम्बरीष असाध्यै लज्जित एवं दुःखी भए भनी शुकदेव स्वामीले वर्णन गर्नुभएको छ। राजाले सुदर्शन चक्रको प्रार्थना गर्दा आफूले तपस्या, भक्ति एवं दान आदि गरेको भए शान्त हुन आग्रह गरेका छन्। यदि मैले सर्वात्मा श्रीहरि-लाई एकभावले भजन गरेको छु र यसबाट उहाँ प्रसन्न हुनुहुन्छ भने ऋषि यो कष्टबाट मुक्त हुनुहोस् भनी आफूलाई समाप्त पार्न कृत्या उत्पन्न गर्ने कुन चाहिँ व्यक्तिको लागि परमात्माको सच्चा भक्तबाहेक कसले प्रार्थना गर्ला र ? यहाँ भक्तहरूको यही दयामयताको उदाहरण दिइएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति संस्तुवतो राज्ञो विष्णुचक्रं सुदर्शनम्।**
**अशाम्यत् सर्वतो विप्रं प्रदहद् राजयाच्ञया ॥ १२ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**राज्ञः** = राजा अम्बरीषले
**संस्तुवतः** = स्तुति गरिसकेपछि
**विप्रं** = ब्राह्मण दुर्वासालाई
**सर्वतः** = चारैतिरबाट
**प्रदहत्** = पोल्दै गरेको
**सुदर्शनम्** = सुदर्शन नाम गरेको
**विष्णुचक्रं** = भगवान्को विष्णुको चक्र
**राजयाच्ञया** = राजाको प्रार्थनाले
**अशाम्यत्** = शान्त भयो

**वाक्यार्थ–** यसप्रकार राजा अम्बरीषले स्तुति गरिसकेपछि दुर्वासालाई चारैतिरबाट पोल्दै गरेको भगवान्को सुदर्शन चक्र राजाको प्रार्थनाबाट शान्त भयो।

**स मुक्तोऽस्त्राग्नितापेन दुर्वासाः स्वस्तिमांस्ततः।**
**प्रशशंस तमुर्वीशं युञ्जानः परमाशिषः ॥ १३ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**अस्त्राग्नितापेन** = अस्त्र (चक्र)को आगोको तापबाट
**मुक्तः** = मुक्त भएका
**स्वस्तिमान्** = स्वस्थचित्त भएका
**सः** = ती
**दुर्वासाः** = दुर्वासा ऋषिले
**तं** = ती
**उर्वीशं** = राजा अम्बरीषलाई
**परमाशिषः** = उत्तम आशीर्वाद
**युञ्जानः** = दिँदै
**प्रशशंस** = प्रशंसा गर्न लागे

**वाक्यार्थ–** चक्रको आगोको तापबाट मुक्त भई स्वस्थ भएका दुर्वासा ऋषिले राजा अम्बरीषलाई उत्तम आशीर्वाद दिँदै उनको प्रशंसा गर्न लागे।

**दुर्वासा उवाच** (दुर्वासाले भने)

**अहो अनन्तदासानां महत्त्वं दृष्टमद्य मे।**
**कृतागसोऽपि यद् राजन् मङ्गलानि समीहसे॥ १४॥**

**पदार्थ–**
**अहो** = आश्चर्य
**मे** = मैले
**अद्य** = आज
**अनन्तदासानां** = भगवान्का भक्तहरूको
**महत्त्वं** = प्रभाव
**दृष्टं** = देखेँ
**राजन्** = हे राजा
**यत्** = किनभने (तपाईंले)
**कृतागसः** = अपराधी मेरो
**अपि** = पनि
**मङ्गलानि** = कल्याणको कामना
**समीहसे** = गरिरहनुभएको छ

**वाक्यार्थ–** आश्चर्यको कुरो, मैले आज भगवान्का भक्तहरूको प्रभाव देखेँ। हे राजा ! मैले अपराध गरेँ, तर पनि तपाईं मेरो कल्याणको कामना गरिरहनुभएको छ।

**दुष्करः को नु साधूनां दुस्त्यजो वा महात्मनाम्।**
**यैः सङ्गृहीतो भगवान् सात्वतामृषभो हरिः॥ १५॥**

**पदार्थ–**
**यैः** = जसद्वारा
**सात्वतां** = भक्तहरूका
**ऋषभः** = पालक
**भगवान्** = ऐश्वर्यशाली
**हरिः** = श्रीहरि भगवान्
**सङ्गृहीतः** = प्रेमपूर्वक हृदयमा राखिनुभएको छ (त्यस्ता)
**साधूनां** = सज्जन
**महात्मनाम्** = महान् व्यक्तिहरूका लागि
**दुष्करः** = गर्न कठिन काम र
**दुस्त्यजः वा** = त्याग्न नसकिने वस्तु पनि
**कः नु** = के नै छ र

**वाक्यार्थ–** जसले भक्तहरूका प्यारा भगवान् श्रीहरिलाई प्रेमपूर्वक आफ्नो हृदयमा राखेको छ त्यस्ता सज्जन महापुरुषहरूका लागि गर्न नसकिने काम र त्याग्न नसकिने वस्तु के नै छ र ?

**यन्नामश्रुतिमात्रेण पुमान् भवति निर्मलः।**
**तस्य तीर्थपदः किं वा दासानामवशिष्यते॥ १६॥**

**पदार्थ–**
**यन्नामश्रुतिमात्रेण** = जसको नाम सुन्नाले मात्र

**पुमान्** = मनुष्य
**निर्मलः** = पवित्र
**भवति** = हुन्छ
**तस्य** = त्यस्ता
**तीर्थपदः** = पवित्रकारक भगवान्का
**दासानां** = भक्तहरूका लागि
**किं वा** = कुन काम
**अवशिष्यते** = बाँकी रहन्छ

**वाक्यार्थ–** जुन भगवान्को नाम सुन्नाले मात्र मनुष्य पवित्र बन्दछ त्यस्ता भगवान्का भक्तहरूका लागि कुन काम बाँकी रहन्छ र ?

**राजन्ननुगृहीतोऽहं त्वयातिकरुणात्मना ।**
**मदघं पृष्ठतः कृत्वा प्राणा यन्मेऽभिरक्षिताः ॥ १७ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**अतिकरुणात्मना** = अत्यन्त करुण हृदय भएका
**त्वया** = तपाईंद्वारा
**अहं** = म
**अनुगृहीतः** = अनुगृहीत भएको छु
**यत्** = जुन (तपाईंद्वारा)
**मदघं** = मेरो अपराधलाई
**पृष्ठतः कृत्वा** = (पछाडि गरेर) बिर्सिदिएर
**मे** = मेरो
**प्राणाः** = प्राणको
**अभिरक्षिताः** = रक्षा गरियो

**वाक्यार्थ–** अत्यन्त करुण हृदय भएका हे राजा ! तपाईंले ममाथि ठुलो अनुग्रह गर्भुभयो। मैले गरेको अपराधलाई बिर्सिदिएर तपाईंले मेरो प्राणको रक्षा गर्नुभयो।

**राजा तमकृताहारः प्रत्यागमनकाङ्क्षया ।**
**चरणावुपसङ्गृह्य प्रसाद्य समभोजयत् ॥ १८ ॥**

**पदार्थ–**
**तं** = ती दुर्वासा ऋषि
**प्रत्यागमनकाङ्क्षया** = फर्केर आउनुहुन्छ भन्ने आशयले
**अकृताहारः** = भोजन नगरेका
**राजा** = राजा अम्बरीषले
**चरणौ** = दुर्वासाको दुबै पाउ
**उपसङ्गृह्य** = समातेर
**प्रसाद्य** = खुसी बनाएर
**समभोजयत्** = भोजन गराए

**वाक्यार्थ–** ऋषि दुर्वासा स्नान गरिसकेपछि फर्केर आउनुहुन्छ भनेर भोजन नगरी बसेका राजा अम्बरीषले दुर्वासाको पाउ समाते र उनलाई प्रसन्न गराई भोजन गराए।

**सोऽशित्वादृतमानीतमातिथ्यं सार्वकामिकम् ।**
**तृप्तात्मा नृपतिं प्राह भुज्यतामिति सादरम् ॥ १९ ॥**

**पदार्थ–**
**आतिथ्यं** = अतिथि सत्कारका लागि
**आदृतं** = आदरपूर्वक
**आनीतं** = ल्याइएका
**सार्वकामिकम्** = सम्पूर्ण कामना पूर्ण गरिदिने भोजन
**अशित्वा** = खाएर
**तृप्तात्मा** = सन्तुष्ट भएका
**सः** = ती दुर्वासा ऋषिले
**नृपतिं** = राजालाई
**सादरम्** = आदरपूर्वक
**भुज्यताम्** = खानुहोस्
**इति** = यस्तो
**प्राह** = भने

**वाक्यार्थ–** अतिथि सत्कारका लागि आदरपूर्वक ल्याइएका सम्पूर्ण कामना पूर्ण गरिदिने भोजन

ग्रहण गरेर दुर्वासा ऋषि सन्तुष्ट बने। त्यसपछि उनले आदरपूर्वक राजालाई भोजन गर्न अनुरोध गरे।

**प्रीतोऽस्म्यनुगृहीतोऽस्मि तव भागवतस्य वै।**
**दर्शनस्पर्शनालापैरातिथ्येनात्ममेधसा ॥ २० ॥**

**पदार्थ–**
**भागवतस्य** = भगवान्का भक्त
**तव** = तपाईंको
**दर्शनस्पर्शनालापैः** = दर्शन, स्पर्श, कुराकानी र
**आत्ममेधसा** = मनलाई भगवान्मा प्रवृत्त गर्ने
**आतिथ्येन** = अथितिसत्कारले
**वै** = निश्चय नै म
**प्रीतः** = प्रसन्न भएको
**अस्मि** = छु
**अनुगृहीतः** = अनुगृहीत पनि
**अस्मि** = भएको छु

**वाक्यार्थ–** हे अम्बरीष ! भगवान्का परमभक्त तपाईंको दर्शन, स्पर्श, कुराकानी तथा मनलाई भगवान्मा प्रवृत्त गराउने अतिथि सत्कारले म अत्यन्त प्रसन्न र अनुगृहीत भएको छु।

**कर्मावदातमेतत् ते गायन्ति स्वःस्त्रियो मुहुः।**
**कीर्तिं परमपुण्यां च कीर्तयिष्यति भूरियम् ॥ २१ ॥**

**पदार्थ–**
**ते** = तपाईंको
**एतत्** = यो
**अवदातम्** = उज्ज्वल
**कर्म** = कर्मलाई
**स्वःस्त्रियः** = स्वर्गका अप्सराहरूले
**मुहुः** = बारम्बार
**गायन्ति** = गाउनेछन्
**इयम्** = यी
**भूः** = पृथिवीले
**परमपुण्यां** = तपाईंको परम पवित्र
**कीर्तिं** = कीर्ति
**कीर्तयिष्यति च** = गाउनेछिन्

**वाक्यार्थ–** तपाईंको यस उज्ज्वल कर्मलाई स्वर्गका अप्सराहरूले बारम्बार गाउनेछन् र पृथिवीले पनि तपाईंको परम पवित्र कीर्तिको सङ्कीर्तन गरिरहनेछिन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सङ्कीर्त्य राजानं दुर्वासाः परितोषितः।**
**ययौ विहायसामन्त्र्य ब्रह्मलोकमहैतुकम् ॥ २२ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**राजानं** = राजा अम्बरीषको
**सङ्कीर्त्य** = प्रशंसा गरेर
**परितोषितः** = सन्तुष्ट भएका
**दुर्वासाः** = दुर्वासा ऋषि
**आमन्त्र्य** = बिदा लिएर
**विहायसा** = आकाशमार्गबाट
**अहैतुकम्** = निष्काम कर्मले प्राप्त हुने
**ब्रह्मलोकं** = ब्रह्मलोकमा
**ययौ** = गए

**वाक्यार्थ–** यसप्रकार अत्यन्त सन्तुष्ट भएका दुर्वासाले राजा अम्बरीषको प्रशंसा गरे। त्यसपछि उनी राजाको आज्ञा लिएर आकाशमार्गबाट निष्काम कर्मद्वारा प्राप्त हुने ब्रह्मलोकतिर गए।

**संवत्सरोऽत्यगात् तावद् यावता नागतो गतः ।**
**मुनिस्तद्दर्शनाकाङ्क्षो राजाब्भक्षो बभूव ह ॥ २३ ॥**

**पदार्थ–**
**यावता** = जबसम्म
**गतः** = सुदर्शन चक्रदेखि डराएर भागेका
**मुनिः** = दुर्वासा ऋषि
**न आगतः** = फर्केर आएनन्
**तावत्** = तबसम्म
**संवत्सरः** = एक वर्ष
**अत्यगात्** = बित्यो
**तद्दर्शनाकाङ्क्षः** = दुर्वासाको दर्शन गर्न चाहने
**राजा** = राजा अम्बरीषले (त्यो एकवर्षसम्म)
**अब्भक्षः** = पानी मात्र खाएर
**बभूव ह** = रहे

**वाक्यार्थ–** सुदर्शन चक्रको डरले भागेका दुर्वासा ऋषि फर्केर नआउँदासम्म एक वर्ष बित्यो। दुर्वासाको दर्शन गर्न चाहने राजा अम्बरीष यस एक वर्षसम्म केवल पानी मात्र खाएर रहे।

**गतेऽथ दुर्वाससि सोऽम्बरीषो द्विजोपयोगातिपवित्रमाहरत् ।**
**ऋषेर्विमोक्षं व्यसनं च बुद्ध्वा मेने स्ववीर्यं च परानुभावम् ॥ २४ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**दुर्वाससि** = दुर्वासा ऋषि
**गते** = गएपछि
**सः** = ती
**अम्बरीषः** = अम्बरीषले
**द्विजोपयोगातिपवित्रम्** = ब्राह्मणले भोजन गर्नाले अत्यन्त पवित्र भएको भोजन
**आहरत्** = खाए
**ऋषेः** = ऋषिको
**व्यसनं** = सङ्कट र
**विमोक्षं च** = सङ्कटमोचन दुबैलाई अनि
**स्ववीर्यं च** = आफ्नो पराक्रमलाई पनि
**बुद्ध्वा** = बुझेर
**परानुभावम्** = भगवान्कै महिमा
**मेने** = सम्झिए

**वाक्यार्थ–** दुर्वासा ऋषि बिदा भएर गएपछि अम्बरीषले ब्राह्मणले भोजन गर्नाले अति पवित्र भएको भोजन ग्रहण गरे। त्यसपछि ऋषिको सङ्कट, सङ्कटबाट मुक्ति अनि आफ्नो पराक्रमलाई पनि बुझेर उनले यो सबै भगवान्कै महिमा हो भन्ने सम्झिए।

**एवंविधानेकगुणः स राजा परात्मनि ब्रह्मणि वासुदेवे ।**
**क्रियाकलापैः समुवाह भक्तिं ययाविरिञ्च्यान्निरयांश्चकार ॥ २५ ॥**

**पदार्थ–**
**एवंविधानेकगुणः** = यसप्रकारका अनेक गुणले युक्त
**सः** = ती
**राजा** = राजा अम्बरीषले
**क्रियाकलापैः** = आफ्नो धर्मको पालन आदि कर्म गरेर
**ब्रह्मणि** = परब्रह्म
**परात्मनि** = परमात्मा
**वासुदेवे** = भगवान् श्रीकृष्णमा
**भक्तिं** = भक्ति
**समुवाह** = बढाए
**यया** = जुन भक्तिको प्रभावले
**अविरिञ्च्यान्** = ब्रह्मलोक-सम्मका सम्पूर्ण भोगलाई
**निरयान्** = नरकसमान
**चकार** = गरे (सम्झे)

**वाक्यार्थ–** यसप्रकार अनेक गुणले युक्त राजा अम्बरीषले आफ्नो धर्मको पालन तथा श्रवण आदि कर्मद्वारा परब्रह्म परमात्मा भगवान् श्रीकृष्णमा भक्ति बढाए, जुन भक्तिको प्रभावले उनले ब्रह्मलोकसम्मका सम्पूर्ण भोग्य वस्तुलाई नरकसमान सम्झे।

**अथाम्बरीषस्तनयेषु राज्यं समानशीलेषु विसृज्य धीरः।**
**वनं विवेशात्मनि वासुदेवे मनो दधद् ध्वस्तगुणप्रवाहः॥ २६॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**धीरः** = धैर्यशाली
**अम्बरीषः** = राजा अम्बरीष
**समानशीलेषु** = आफ्नो जस्तै स्वभाव भएका
**तनयेषु** = छोराहरूमा
**राज्यं** = राज्यको भार
**विसृज्य** = सुम्पेर
**वनं** = वनमा
**विवेश** = गए र
**ध्वस्तगुणप्रवाहः** = (सुख, दुःख आदि) गुणको प्रवाहलाई नष्ट पार्दै
**आत्मनि** = आत्मस्वरूप
**वासुदेवे** = भगवान् वासुदेवमा
**मनः** = मन
**दधत्** = लगाए

**वाक्यार्थ–** त्यसपछि धैर्यशाली राजा अम्बरीषले आफ्नो जस्तै स्वभाव भएका छोराहरूलाई राज्यको भार सुम्पेर वन प्रवेश गरे। त्यहाँ उनले सुख, दुःख आदि गुणको प्रवाहलाई नष्ट पार्दै आत्मस्वरूप भगवान् वासुदेवमा मन लगाए।

**विवरण–** माथिका दुई श्लोकहरूमा सर्वात्मा परब्रह्म वासुदेवमा अनन्य भक्ति भएका राजा अम्बरीषले सम्पूर्ण लोकहरूलाई वास्ता गरेनन् भनिएको छ। उनमा ज्ञान, कर्म र भक्तियोग तीन ओटै कुरा थिए। वासुदेवलाई सर्वात्मा परब्रह्मको रूपमा जान्नु ज्ञान हो, क्रियाकलाप भनेका विभिन्न निष्काम कर्महरू हुन् र भक्ति निष्काम प्रेमसम्बन्ध हो। यी तीन कुरा नै अम्बरीषमा थिए। यसै कारण उनले ब्रह्मलोक पर्यन्तका सम्पूर्ण लोकहरूलाई नरक बराबर सम्झे। यद्यपि दिव्य लोकहरूमा जाने धेरैको चाहना हुन्छ, तर आत्मादेखि भिन्न ती मायाकल्पित लोकहरू एक दिन नष्ट हुन्छन्, अनि तिनको नाश भएपछि आसक्तियुक्त व्यक्ति अत्यन्त दुःखी हुन्छ। यसैले राजाले घरको आसक्ति छाडी वासुदेव परमतत्त्वमा मन लगाई वन पसे र गुणहरूको प्रवाहरूप यो संसारलाई यसको कारण अज्ञानसहित त्यागिदिए।

**इत्येतत् पुण्यमाख्यानमम्बरीषस्य भूपतेः।**
**सङ्कीर्तयन्ननुध्यायन् भक्तो भगवतो भवेत्॥ २७॥**

**पदार्थ–**
**इति** = यसप्रकारको
**भूपतेः** = राजा
**अम्बरीषस्य** = अम्बरीषको
**एतत्** = यो
**पुण्यम्** = पुण्य
**आख्यानं** = कथा
**सङ्कीर्तयन्** = सङ्कीर्तन तथा
**अनुध्यायन्** = ध्यान गर्नाले
**भगवतः** = भगवान्‌को
**भक्तः** = भक्त
**भवेत्** = होला

**वाक्यार्थ–** यसप्रकारको राजा अम्बरीषको यो पवित्र कथा कीर्तन तथा ध्यान गर्ने व्यक्ति

भगवान्को भक्त बन्दछ।

इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे-

ऽम्बरीषचरितं नाम पञ्चमोऽध्यायः॥ ५॥

# अथ षष्ठोऽध्यायः

## इक्ष्वाकु वंशको वर्णन एवं मान्धाता र सौभरि ऋषिको कथा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**विरूपः केतुमाञ्छम्भुरम्बरीषसुतास्त्रयः।**

**विरूपात् पृषदश्वोऽभूत् तत्पुत्रस्तु रथीतरः॥ १॥**

**पदार्थ–**
**विरूपः** = विरूप
**केतुमान्** = केतुमान् र
**शम्भुः** = शम्भु नाम गरेका
**त्रयः** = तीन जना
**अम्बरीषसुताः** = अम्बरीषका छोरा थिए (तीमध्ये)
**विरूपात्** = विरूप नामक छोराबाट
**पृषदश्वः** = पृषदश्व भए
**तत्पुत्रः तु** = पृषदश्वका छोरा चाहिँ
**रथीतरः** = रथीतर
**अभूत्** = भए

**वाक्यार्थ–** राजा अम्बरीषका विरूप, केतुमान् र शम्भु नाम गरेका तीन भाइ छोरा थिए। तीमध्ये विरूपबाट पृषदश्व तथा पृषदश्वबाट रथीतर नामक छोराहरू भए।

**रथीतरस्याप्रजस्य भार्यायां तन्तवेऽर्थितः।**

**अङ्गिरा जनयामास ब्रह्मवर्चस्विनः सुतान्॥ २॥**

**पदार्थ–**
**अप्रजस्य** = सन्तान नभएका
**रथीतरस्य** = रथीतरकी
**भार्यायां** = पत्नीमा
**तन्तवे** = वंशपरम्परा चलाउनका लागि
**अर्थितः** = प्रार्थना गरिएका
**अङ्गिराः** = अङ्गिरा ऋषिले
**ब्रह्मवर्चस्विनः** = ब्रह्मतेजले युक्त
**सुतान्** = छोराहरू
**जनयामास** = जन्माए

**वाक्यार्थ–** रथीतर सन्तानरहित थिए। वंशपरम्पराको रक्षाको लागि उनले अङ्गिरा ऋषिलाई प्रार्थना गरे। अङ्गिराले उनकी पत्नीबाट ब्रह्मतेजले युक्त छोराहरू जन्माए।

**एते क्षेत्रे प्रसूता वै पुनस्त्वाङ्गिरसाः स्मृताः।**

**रथीतराणां प्रवराः क्षेत्रोपेता द्विजातयः॥ ३॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**क्षेत्रे** = रथीतरकी क्षत्राणी पत्नीबाटै
**प्रसूताः** = उत्पन्न भएका थिए
**पुनः तु** = तर पनि
**एते** = यी रथीतरका सन्तान
**आङ्गिरसाः** = अङ्गिरसगोत्रीय
**स्मृताः** = कहलिए
**रथीतराणां** = रथीतरवंशका
**प्रवराः** = श्रेष्ठ पुरुषहरू
**क्षेत्रोपेताः** = क्षत्रियत्व युक्त
**द्विजातयः** = ब्राह्मणहरू थिए

**वाक्यार्थ–** रथीतरका सन्तानहरू उनकी क्षत्राणी पत्नीबाटै उत्पन्न भएका थिए, तर पनि तिनीहरू अङ्गिरस गोत्रीय भनी प्रसिद्ध भए। रथीतरवंशका यी श्रेष्ठ पुरुषहरू क्षत्रियत्व युक्त ब्राह्मणहरू थिए। (रथीतरवंशका यी श्रेष्ठ पुरुषहरूको क्षत्रिय र ब्राह्मण दुबै गोत्रसँग सम्बन्ध थियो)।

**क्षुवतस्तु मनोर्जज्ञे इक्ष्वाकुर्घ्राणतः सुतः।**

**तस्य पुत्रशतज्येष्ठा विकुक्षिनिमिदण्डकाः॥ ४॥**

**पदार्थ–**
**मनोः** = महाराज मनुले
**क्षुवतस्तु** = हाच्छ्युँ गर्दा
**घ्राणतः** = नाकबाट
**इक्ष्वाकुः** = इक्ष्वाकु नामक
**सुतः** = छोरा
**जज्ञे** = जन्मे
**तस्य** = ती इक्ष्वाकुका
**विकुक्षिनिमिदण्डकाः** = विकुक्षि, निमि र दण्डक आदि
**पुत्रशतज्येष्ठाः** = सयभाइ छोराहरूमा जेठा थिए

**वाक्यार्थ–** एकपटक महाराज मनुले हाच्छ्युँ गर्दा उनको नाकबाट इक्ष्वाकु नामक पुत्र उत्पन्न भए। ती इक्ष्वाकुका सयभाइ छोराहरूमध्ये विकुक्षि, निमि र दण्डक जेठा थिए।

**तेषां पुरस्तादभवन्नार्यावर्ते नृपा नृप।**

**पञ्चविंशतिः पश्चाच्च त्रयो मध्येऽपरेऽन्यतः॥ ५॥**

**पदार्थ–**
**नृप** = हे राजा
**तेषां** = ती इक्ष्वाकुका सयभाइ छोराहरूमध्ये
**पञ्चविंशतिः** = पच्चीस जना
**आर्यावर्ते** = आर्यावर्तको
**पुरस्तात्** = पूर्व भागका
**पश्चात् च** = पच्चीस जना पश्चिम भागका तथा
**त्रयः** = तीन जना
**मध्ये** = मध्य भागका र
**अपरे** = अरू बाँकी
**अन्यतः** = अन्य भागका
**नृपाः** = राजा
**अभवन्** = भए

**वाक्यार्थ–** हे राजा परीक्षित्! इक्ष्वाकुका सयभाइ छोराहरूमध्ये पच्चीस जना आर्यावर्तको पूर्व भागका राजा भए। पच्चीस जना पश्चिम भागका राजा भए। तीन जना मध्य भाग र अरू बाँकी अन्य भागका राजा भए।

**स एकदाष्टकाश्राद्धे इक्ष्वाकुः सुतमादिशत्।**

**मांसमानीयतां मेध्यं विकुक्षे गच्छ मा चिरम्॥ ६॥**

**पदार्थ–**
**एकदा** = एकपटक
**अष्टकाश्राद्धे** = अष्टका श्राद्धको समयमा
**सः** = ती
**इक्ष्वाकुः** = इक्ष्वाकुले
**विकुक्षे** = हे विकुक्षि
**गच्छ** = जाऊ र
**मा चिरम्** = छिट्टै
**मेध्यं** = पवित्र (श्राद्धको लागि उपयुक्त)
**मांसं** = मासु
**आनीयतां** = लिएर आऊ भनी
**सुतं** = छोरालाई
**आदिशत्** = आदेश दिए

**वाक्यार्थ–** एकपटक अष्टका श्राद्धको समयमा इक्ष्वाकुले छोरालाई हे विकुक्षि ! छिट्टै पवित्र मासु लिएर आऊ भनी अह्राए।

**तथेति स वनं गत्वा मृगान् हत्वा क्रियार्हणान्।**

**श्रान्तो बुभुक्षितो वीरः शशं चाददपस्मृतिः॥ ७॥**

**पदार्थ–**
**तथा इति** = हुन्छ भनी
**वनं** = वनमा
**गत्वा** = गएर
**क्रियार्हणान्** = श्राद्धका लागि उपयुक्त
**मृगान्** = पशुहरू
**हत्वा** = मारेर
**श्रान्तः** = थाकेका र
**बुभुक्षितः** = ज्यादै भोकाएका
**सः वीरः** = ती वीर विकुक्षिले
**अपस्मृतिः** = भुलवश
**शशं च** = एउटा खरायो पनि
**आदत्** = खाए

**वाक्यार्थ–** बाबुको आज्ञालाई स्वीकार गरेर वनमा गएका विकुक्षिले श्राद्धलाई उपयुक्त हुने पशुहरू मारे। त्यसपछि शिकार गर्दा धेरै थाकेका र ज्यादै भोकाएका ती विकुक्षिले श्राद्धका लागि मारेको पशु आफैँले खानु हुँदैन भन्ने भुलेर एउटा खरायो खाए।

**शेषं निवेदयामास पित्रे तेन च तद्गुरुः।**

**चोदितः प्रोक्षणायाह दुष्टमेतदकर्मकम्॥ ८॥**

**पदार्थ–**
**तेन** = ती विकुक्षिले
**शेषं** = बाँकी मासु
**पित्रे** = बाबु इक्ष्वाकुलाई
**निवेदयामास** = दिए
**तत् च** = त्यो मांसलाई
**प्रोक्षणाय** = शुद्ध गर्नका लागि
**चोदितः** = अनुरोध गरिएका
**गुरुः** = गुरुले
**एतत्** = यो मासु
**दुष्टं** = दूषित एवं
**अकर्मकम्** = श्राद्धका लागि अयोग्य छ
**आह** = भने

**वाक्यार्थ–** वनबाट फर्किएका विकुक्षिले बाँकी मासु बाबुलाई बुझाए। त्यो मासुलाई पवित्र पार्न अनुरोध गरिएका श्राद्धकर्मका गुरुले यो मासु दूषित र श्राद्धका लागि अयोग्य छ भने।

**ज्ञात्वा पुत्रस्य तत्कर्म गुरुणाभिहितं नृपः।**

**देशान्निःसारयामास सुतं त्यक्तविधिं रुषा॥ ९॥**

**पदार्थ–**
**गुरुणा** = गुरुले
**अभिहितं** = भनेको
**पुत्रस्य** = छोराको
**तत्कर्म** = त्यो दुष्कर्म
**ज्ञात्वा** = बुझेर
**नृपः** = राजा इक्ष्वाकुले
**त्यक्तविधिं** = विधि त्याग गर्ने
**सुतं** = छोरालाई
**रुषा** = रिसले
**देशात्** = आफ्नो राज्यबाट
**निःसारयामास** = निकालिदिए

**वाक्यार्थ–** गुरुले भनेको सुनेपछि छोराको दुष्कर्म बुझेर रिसाएका राजा इक्ष्वाकुले विधि उल्लङ्घन गर्ने छोरा विकुक्षिलाई आफ्नो राज्यबाट निकालिदिए।

**स तु विप्रेण संवादं जापकेन समाचरन्।**
**त्यक्त्वा कलेवरं योगी स तेनावाप यत्परम्॥ १० ॥**

| पदार्थ– | साथ | **कलेवरं** = शरीर |
|---|---|---|
| **सः तु** = ती राजा इक्ष्वाकुले | **संवादं** = ज्ञानविषयक चर्चा | **त्यक्त्वा** = त्यागेर |
| **जापकेन** = तपस्वी | **समाचरन्** = गरे | **यत्परम्** = परमपद |
| **तेन** = ती | **सः** = ती | **अवाप** = प्राप्त गरे |
| **विप्रेण** = ब्राह्मण वसिष्ठका | **योगी** = योगनिष्ठ राजाले | |

**वाक्यार्थ–** राजा इक्ष्वाकुले तपस्वी ब्राह्मण वसिष्ठसँग ज्ञानयोगका बारेमा छलफल गरेर योगबलद्वारा शरीर छाडी परमपद प्राप्त गरे।

**पितर्युपरतेऽभ्येत्य विकुक्षिः पृथिवीमिमाम्।**
**शासदीजे हरिं यज्ञैः शशाद इति विश्रुतः॥ ११ ॥**

| पदार्थ– | **इमाम्** = यस | **ईजे** = पूजा गरे (तापनि) |
|---|---|---|
| **पितरि** = बाबु | **पृथिवीम्** = पृथिवीलाई | **शशाद** = खरायो खाने |
| **उपरते** = मरेपछि | **शासत्** = शासन गर्न लागे | **इति** = यस नामले |
| **विकुक्षिः** = विकुक्षि | **यज्ञैः** = यज्ञयागादिद्वारा | **विश्रुतः** = प्रसिद्ध भए |
| **अभ्येत्य** = फर्केर आई | **हरिं** = भगवान् श्रीहरिलाई | |

**वाक्यार्थ–** राजा इक्ष्वाकु मरेपछि फर्किएका विकुक्षिले पृथिवीमा शासन गर्न थाले। उनले यज्ञहरू गरेर भगवान् श्रीहरिको आराधना गरे, तर पनि उनी 'शशाद' (खरायो खाने) नामले प्रसिद्ध भए।

**पुरञ्जयस्तस्य सुत इन्द्रवाह इतीरितः।**
**ककुत्स्थ इति चाप्युक्तः शृणु नामानि कर्मभिः॥ १२ ॥**

| पदार्थ– | **इति** = यस नामले | **उक्तः** = प्रसिद्ध भए |
|---|---|---|
| **तस्य** = ती विकुक्षिका | **ईरितः** = प्रसिद्ध भए (उनी नै) | **कर्मभिः** = कामअनुसार हुने |
| **सुतः** = छोरा | **ककुत्स्थः** = ककुत्स्थ | **नामानि** = नामहरू |
| **पुरञ्जयः** = पुरञ्जय भए (ती) | **इति** = यस नामले | **शृणु** = सुन्नुहोस् |
| **इन्द्रवाहः** = इन्द्रवाह | **च अपि** = पनि | |

**वाक्यार्थ–** विकुक्षिका छोरा पुरञ्जय भए। उनलाई कसैले इन्द्रवाह र कसैले ककुत्स्थ नामले सम्बोधन गर्दथे। जुन-जुन कर्मका कारण उनका यी नाम रहे, त्यो कुरा सुन्नुहोस्।

**कृतान्त आसीत् समरो देवानां सह दानवैः ।**
**पार्ष्णिग्राहो वृतो वीरो देवैर्दैत्यपराजितैः ॥ १३ ॥**

**पदार्थ–**
**कृतान्ते** = सत्य युगको अन्त्यमा
**देवानां** = देवताहरूको
**दानवैः सह** = दानवहरूसँग
**समरः** = युद्ध
**आसीत्** = भएको थियो
(त्यस वेला)
**दैत्यपराजितैः** = दैत्यहरूद्वारा पराजित
**देवैः** = देवताहरूद्वारा
**वीरः** = विकुक्षिपुत्र वीर पुरञ्जयलाई
**पार्ष्णिग्राहः** = युद्धमा विपक्षीको सेनालाई पछाडिबाट आक्रमण गर्ने योद्धाको रूपमा
**वृतः** = वरण गरियो

**वाक्यार्थ–** सत्ययुगको अन्त्यतिर देवता र दानवको ठुलो युद्ध चल्यो। त्यस युद्धमा दैत्यद्वारा हराइएका देवताहरूले विकुक्षिपुत्र वीर पुरञ्जयलाई आगामी युद्धमा विपक्षीको सेनालाई पछाडिबाट आक्रमण गर्ने योद्धाको रूपमा वरण गरे।

**वचनाद् देवदेवस्य विष्णोर्विश्वात्मनः प्रभोः ।**
**वाहनत्वे वृतस्तस्य बभूवेन्द्रो महावृषः ॥ १४ ॥**

**पदार्थ–**
**विश्वात्मनः** = विश्वका आत्मस्वरूप
**प्रभोः** = प्रभु
**देवदेवस्य** = देवताहरूका पनि देवता
**विष्णोः** = भगवान् विष्णुको
**वचनात्** = आज्ञाले
**इन्द्रः** = देवराज इन्द्रले
**तस्य** = ती पुरञ्जयको
**वाहनत्वे** = वाहन बन्न
**वृतः** = स्वीकार गरे र
**महावृषः** = ठुलो गोरु
**बभूव** = बने

**वाक्यार्थ–** (आफूलाई देवताहरूको पार्ष्णिग्राह बनाएपछि पुरञ्जयले देवराज इन्द्र आफ्नो वाहन बने मात्र सहयोग गर्ने सर्त राखे। इन्द्रले पहिला त्यो सर्त अस्वीकार गरे तर) विश्वात्मा देवाधिदेव भगवान् विष्णुको आज्ञाले देवराज इन्द्रले पुरञ्जयको वाहन बन्न स्वीकार गरे र ठुलो गोरुको रूप धारण गरे।

**स सन्नद्धो धनुर्दिव्यमादाय विशिखाञ्छितान् ।**
**स्तूयमानस्तमारुह्य युयुत्सुः ककुदि स्थितः ॥ १५ ॥**

**पदार्थ–**
**सः** = ती राजा पुरञ्जय
**दिव्यं** = अलौकिक
**धनुः** = धनुष र
**शितान्** = तिखा
**विशिखान्** = बाण
**आदाय** = लिएर
**सन्नद्धः** = युद्धका लागि तयार भएर
**युयुत्सुः** = युद्ध गर्ने इच्छाले
**स्तूयमानः** = देवताहरूद्वारा स्तुति गरिँदै

**तं आरुह्य** = त्यो गोरुमाथि चढेर | **ककुदि** = जुरोको नजिक | **स्थितः** = बसे

**वाक्यार्थ–** दिव्य धनु र तिखा बाण लिएर युद्धका लागि तयार भएका पुरञ्जय त्यो गोरुमाथि चढेर जुरो नजिकै बसे।

**तेजसाप्यायितो विष्णोः पुरुषस्य परात्मनः।**
**प्रतीच्यां दिशि दैत्यानां न्यरुणत् त्रिदशैः पुरम्॥ १६॥**

**पदार्थ–**
**परात्मनः** = परमात्मा
**पुरुषस्य** = परमपुरुष
**विष्णोः** = भगवान् विष्णुको
**तेजसा** = तेज (शक्ति)ले
**आप्यायितः** = युक्त भएका पुरञ्जयले
**त्रिदशैः** = देवताहरूको साथ
**प्रतीच्यां दिशि** = पश्चिम दिशामा
**दैत्यानां** = दैत्यहरूको
**पुरम्** = नगरलाई
**न्यरुणत्** = घेरे

**वाक्यार्थ–** परमपुरुष परमात्मा भगवान् विष्णुको शक्ति प्राप्त गरेका पुरञ्जयले देवताहरूलाई साथमा लिएर पश्चिम दिशामा रहेको दैत्यहरूको नगरलाई चारैतिरबाट घेरे।

**तैस्तस्य चाभूत् प्रधनं तुमुलं लोमहर्षणम्।**
**यमाय भल्लैरनयद् दैत्यान् येऽभिययुर्मृधे॥ १७॥**

**पदार्थ–**
**तैः च** = ती दैत्यहरूसँग
**तस्य** = ती पुरञ्जयको
**तुमुलं** = भयङ्कर
**लोमहर्षणम्** = रोमाञ्चकारी
**प्रधनं** = लडाइँ
**अभूत्** = भयो
**मृधे** = त्यस युद्धमा
**ये** = जो-जो
**अभिययुः** = पुरञ्जयका अगाडि आए (ती-ती)
**दैत्यान्** = दैत्यहरूलाई
**भल्लैः** = भालाले घोचेर
**यमाय** = यमराजकहाँ
**अनयत्** = पुऱ्याए

**वाक्यार्थ–** दैत्यहरूका साथ पुरञ्जयको भयङ्कर रोमाञ्चकारी लडाइँ भयो। युद्धमा जो-जो उनका सामु आए, ती सबैलाई भालाले घोचेर उनले यमराजकहाँ पुऱ्याइदिए।

**तस्येषुपाताभिमुखं युगान्ताग्निमिवोल्बणम्।**
**विसृज्य दुद्रुवुर्दैत्या हन्यमानाः स्वमालयम्॥ १८॥**

**पदार्थ–**
**युगान्ताग्निम् इव** = प्रलयकालीन अग्निसमान
**उल्बणम्** = असह्य
**तस्य** = ती पुरञ्जयले गरेको
**इषुपाताभिमुखं** = बाणवर्षालाई सामुन्ने देखेर
**हन्यमानाः** = मारिँदै गरेका
**दैत्याः** = दैत्यहरू
**विसृज्य** = युद्धभूमि छाडेर
**स्वमालयम्** = आ-आफ्ना घरतिर
**दुद्रुवुः** = भागे

**वाक्यार्थ–** पुरञ्जयको प्रलयकालीन अग्निजस्तो असह्य बाणवर्षालाई आफ्नै सामुन्ने देखेर आत्तिएका दैत्यहरू युद्धभूमि छाडेर आ–आफ्नो घरतिर भागे।

**जित्वा पुरं धनं सर्वं सश्रीकं वज्रपाणये।**

**प्रत्ययच्छत् स राजर्षिरिति नामभिराहृतः ॥ १९ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| | **धनं** = धन | **इति** = यसै कारण (उनी) |
| **सः** = ती | **सर्वं** = सबै | **नामभिः** = (इन्द्रवाह आदि) |
| **राजर्षिः** = राजा पुरञ्जयले | **जित्वा** = जितेर | नामहरूद्वारा |
| **सश्रीकं** = ऐश्वर्यसहित | **वज्रपाणये** = वज्रधारी इन्द्रलाई | **आहृतः** = सम्बोधित भए |
| **पुरं** = राज्य | **प्रत्ययच्छत्** = सुम्पिदिए | |

**वाक्यार्थ–** राजा पुरञ्जयले ऐश्वर्यसहित राज्य, धन आदि सबै कुरा जितेर इन्द्रलाई सुम्पिदिए। यसरी उनले इन्द्रलाई वाहन बनाएकाले इन्द्रवाह, पुर जितेकाले पुरञ्जय र वृषरूप वाहनको ककुद् (जुरोको नजिकको भाग)मा बसेकाले ककुत्स्थ उनका नाम भए।

**पुरञ्जयस्य पुत्रोऽभूदनेनास्तत्सुतः पृथुः।**

**विश्वरन्धिस्ततश्चन्द्रो युवनाश्वश्च तत्सुतः ॥ २० ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| | **तत्सुतः** = ती अनेनाका छोरा | **चन्द्रः** = चन्द्र भए |
| **पुरञ्जयस्य** = पुरञ्जयका | **पृथुः** = पृथु भए | **तत्सुतः च** = ती चन्द्रका छोरा |
| **पुत्रः** = छोरा | **ततः** = ती पृथुबाट | चाहिँ |
| **अनेनाः** = अनेना | **विश्वरन्धिः** = विश्वरन्धि जन्मे | **युवनाश्वः** = युवनाश्व भए |
| **अभूत्** = भए | (उनबाट) | |

**वाक्यार्थ–** पुरञ्जयका छोरा अनेना थिए। उनबाट पृथु नामका छोरा जन्मिए। पृथुबाट विश्वरन्धि र विश्वरन्धिबाट चन्द्र जन्मिए अनि चन्द्रबाट युवनाश्व नामका छोरा जन्मिए।

**शावस्तस्तत्सुतो येन शावस्ती निर्ममे पुरी।**

**बृहदश्वस्तु शावस्तिस्ततः कुवलयाश्वकः ॥ २१ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| | **शावस्ती** = शावस्ती नामको | **बृहदश्वः** = बृहदश्व भए |
| **तत्सुतः** = ती युवनाश्वका छोरा | **पुरी** = नगर | **ततः तु** = ती बृहदश्वका छोरा |
| **शावस्तः** = शावस्त भए | **निर्ममे** = (बनाए) बसाए | **कुवलयाश्वकः** = कुवलयाश्वक |
| **येन** = जसले | **शावस्तिः** = शावस्तका छोरा | (कुवलयाश्व) भए |

**वाक्यार्थ–** युवनाश्वका शावस्त नामका छोरा भए। उनले शावस्ती नामको नगर बसाए। शावस्तका छोरा बृहदश्व भए र बृहदश्वबाट कुवलयाश्व नामक पुत्र उत्पन्न भए।

**यः प्रियार्थमुतङ्कस्य धुन्धुनामासुरं बली।**
**सुतानामेकविंशत्या सहस्रैरहनद् वृतः॥ २२॥**

**पदार्थ–**
**यः** = जुन
**बली** = बलवान् कुवलयाश्वले
**उतङ्कस्य** = उतङ्क ऋषिलाई
**प्रियार्थम्** = खुसी पार्न
**सुतानाम्** = आफ्ना छोराहरूको
**एकविंशत्या** = एक्काइस
**सहस्रैः** = हजारद्वारा
**वृतः** = घेरेर
**धुन्धुनामासुरं** = धुन्धु नाम गरेको दैत्यलाई
**अहनत्** = मारे

**वाक्यार्थ–** बलवान् कुवलयाश्वले उतङ्क ऋषिलाई खुसी पार्न आफ्ना एक्काइस हजार छोराहरूद्वारा घेरेर धुन्धु नाम गरेको दैत्यलाई मारे।

**धुन्धुमार इति ख्यातस्तत्सुतास्ते च जज्वलुः।**
**धुन्धोर्मुखाग्निना सर्वे त्रय एवावशेषिताः॥ २३॥**

**पदार्थ–**
**धुन्धुमारः इति** = धुन्धुमार नामले
**ख्यातः** = प्रसिद्ध भएका
**तत्सुताः** = ती कुवलयाश्वका छोरा
**ते** = ती
**सर्वे च** = सबै
**धुन्धोः** = धुन्धु दैत्यको
**मुखाग्निना** = मुखबाट निस्केको आगोले
**जज्वलुः** = जले र
**त्रयः एव** = तीन जना मात्र
**अवशेषिताः** = बाँकी रहे

**वाक्यार्थ–** ती कुवलयाश्व धुन्धुमार नामले प्रसिद्ध भए। उनका सबै छोराहरू धुन्धु दैत्यको मुखबाट निस्केको आगोले जलेर नष्ट भए, केवल तीन जना मात्र बाँकी रहे।

**दृढाश्वः कपिलाश्वश्च भद्राश्व इति भारत।**
**दृढाश्वपुत्रो हर्यश्वो निकुम्भस्तत्सुतः स्मृतः॥ २४॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**दृढाश्वः** = (कुवलयाश्वका बाँकी छोराहरू) दृढाश्व
**कपिलाश्वः** = कपिलाश्व र
**भद्राश्वः च** = भद्राश्व
**इति** = यी थिए
**दृढाश्वपुत्रः** = दृढाश्वका छोरा
**हर्यश्वः** = हर्यश्व र
**तत्सुतः** = ती हर्यश्वका छोरा
**निकुम्भः** = निकुम्भ नामले
**स्मृतः** = प्रसिद्ध भए

**वाक्यार्थ–** हे परीक्षित्! कुवलयाश्वका दृढाश्व, कपिलाश्व र भद्राश्व नाम गरेका तीन छोरा बाँचेका थिए। तीमध्ये दृढाश्वका हर्यश्व नामका छोरा भए भने हर्यश्वका छोरा निकुम्भ नामले प्रसिद्ध भए।

**बर्हणाश्वो निकुम्भस्य कृशाश्वोऽथास्य सेनजित्।**
**युवनाश्वोऽभवत् तस्य सोऽनपत्यो वनं गतः॥ २५॥**

**भार्याशतेन निर्विण्ण ऋषयोऽस्य कृपालवः ।**
**इष्टिं स्म वर्तयाञ्चक्रुरैन्द्रीं ते सुसमाहिताः ॥ २६ ॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**निकुम्भस्य** = निकुम्भका छोरा
**बर्हणाश्वः** = बर्हणाश्व भए (उनका छोरा)
**कृशाश्वः** = कृशाश्व भए
**अस्य** = यी कृशाश्वका छोरा
**सेनजित्** = सेनजित् भए र
**तस्य** = तिनका छोरा
**युवनाश्वः** = युवनाश्व
**अभवत्** = भए
**सः** = ती युवनाश्व
**अनपत्यः** = सन्तानहीन हुनाले
**निर्विण्णः** = खिन्न मन गरेर
**भार्याशतेन** = आफ्ना सय पत्नीहरूका साथ
**वनं** = वन
**गतः** = गए
**ते** = ती (वनमा रहेका)
**कृपालवः** = दयालु
**सुसमाहिताः** = एकाग्रचित्त भएका
**ऋषयः** = ऋषिहरूले
**अस्य** = यी युवनाश्वको
**ऐन्द्रीं** = इन्द्रसम्बन्धी
**इष्टिं** = यज्ञ
**वर्तयाञ्चक्रुः स्म** = गरिदिए

**वाक्यार्थ—** निकुम्भका छोरा बर्हणाश्व, बर्हणाश्वका छोरा कृशाश्व र कृशाश्वका छोरा सेनजित् भए। सेनजित्का छोरा युवनाश्व भए। उनी सन्तानहीन भएका कारण अत्यन्त खिन्न भएर आफ्ना सय पत्नीका साथमा वन गए। त्यहाँ एकाग्र चित्त भएका दयालु ऋषिहरूले यिनका लागि इन्द्रसम्बन्धी यज्ञ गरिदिए।

**राजा तद्यज्ञसदनं प्रविष्टो निशि तर्षितः ।**
**दृष्ट्वा शयानान् विप्रांस्तान् पपौ मन्त्रजलं स्वयम् ॥ २७ ॥**

**पदार्थ—**
**राजा** = राजा युवनाश्व
**निशि** = रातमा
**तर्षितः** = तिर्खाएर
**तद्यज्ञसदनं** = ऋषिहरूको त्यस यज्ञशालामा
**प्रविष्टः** = प्रवेश गरे (त्यहाँ)
**तान्** = ती
**विप्रान्** = ब्राह्मणहरूलाई
**शयानान्** = सुतेका
**दृष्ट्वा** = देखेर
**मन्त्रजलं** = यज्ञमा अभिमन्त्रण गरी राखेको जल
**स्वयम्** = आफैँले
**पपौ** = पिए

**वाक्यार्थ—** राजा युवनाश्व रातको समयमा अत्यन्त तिर्खाएर ऋषिहरूको यज्ञशालामा प्रवेश गरे। त्यहाँ उनले ब्राह्मणहरू सुतिरहेको देखेर यज्ञमा अभिमन्त्रण गरी राखेको जल आफैँले झिकी पिए।

**उत्थितास्ते निशाम्याथ व्युदकं कलशं प्रभो ।**
**पप्रच्छुः कस्य कर्मेदं पीतं पुंसवनं जलम् ॥ २८ ॥**

**पदार्थ—**
**प्रभो** = हे राजा परीक्षित्
**अथ** = त्यसपछि (बिहान)
**उत्थिताः** = उठेका
**ते** = ती ब्राह्मणहरूले
**कलशं** = कलश
**व्युदकं** = जलरहित
**निशाम्य** = देखेर
**पुंसवनं** = पुत्र उत्पन्न गर्ने

**जलम्** = जल
**पीतं** = पिइएको छ
**इदं** = यो
**कस्य** = कसको
**कर्म** = काम हो (भनेर)
**पप्रच्छुः** = सोध्न थाले

**वाक्यार्थ–** हे परीक्षित् ! त्यसपछि बिहान उठेका ती ब्राह्मणहरूले कलशमा जल नभएको देखेर पुत्र प्राप्तिका लागि अभिमन्त्रण गरी राखेको कलशको जल कसले पियो ? भनी सोध्न लागे।

**राज्ञा पीतं विदित्वाथ ईश्वरप्रहितेन ते।**
**ईश्वराय नमश्चक्रुरहो दैवबलं बलम्॥ २९॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**ते** = ती ब्राह्मणहरूले
**ईश्वरप्रहितेन** = भगवान्को प्रेरणाले
**राज्ञा** = राजाद्वारा
**पीतं** = जल पिइएको कुरा
**विदित्वा** = थाहा पाएर
**ईश्वराय** = भगवान्लाई
**नमश्चक्रुः** = नमस्कार गरे
**अहो** = आश्चर्य
**दैवबलं** = ईश्वरको बल नै
**बलम्** = वास्तविक बल हो

**वाक्यार्थ–** ईश्वरको प्रेरणाले कलशको जल राजाले पिएको कुरा थाहा पाएका ब्राह्मणहरूले आश्चर्यचकित भई ईश्वरीय बल नै वास्तविक बल हो भन्दै भगवान्लाई नमस्कार गरे।

**ततः काल उपावृत्ते कुक्षिं निर्भिद्य दक्षिणम्।**
**युवनाश्वस्य तनयश्चक्रवर्ती जजान ह॥ ३०॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**काले** = योग्य समय
**उपावृत्ते** = आएपछि
**युवनाश्वस्य** = राजा युवनाश्वको
**दक्षिणम्** = दाहिने
**कुक्षिं** = कोखलाई
**निर्भिद्य** = फोरेर
**चक्रवर्ती** = चक्रवर्ती राजा बन्ने
**तनयः** = छोरो
**जजान ह** = उत्पन्न भयो

**वाक्यार्थ–** त्यसपछि समय पुगेपछि युवनाश्वको दाहिने कोख फोरेर चक्रवर्ती राजा बन्ने लक्षणको छोरो उत्पन्न भयो।

**कं धास्यति कुमारोऽयं स्तन्ये रोरूयते भृशम्।**
**मां धाता वत्स मा रोदीरितीन्द्रो देशिनीमदात्॥ ३१॥**

**पदार्थ–**
**अयं** = यो
**कुमारः** = शिशु
**भृशम्** = धेरै
**रोरूयते** = रोइरहेको छ (यसले)
**कं** = कसको
**स्तन्ये** = दुध
**धास्यति** = पिउँछ (भन्ने ऋषिहरूको जिज्ञासामा)
**इन्द्रः** = देवराज इन्द्रले
**मां** = मेरो
**धाता** = पिउँछ
**वत्स** = बाबु
**मा रोदीः** = नरोऊ
**इति** = यस्तो भन्दै
**देशिनीम्** = आफ्नो चोरी औँला
**अदात्** = दिए (बालकको मुखमा राखिदिए)

**वाक्यार्थ–** भोकाएर रोइरहेको त्यस शिशुलाई देखेर ऋषिहरूले यसले अब कसको दुध पिउँछ ? भन्ने जिज्ञासा राखे। त्यसै वेला देवराज इन्द्रले 'मेरो पिउँछ, बाबु नरोऊ' भन्दै आफ्नो चोरी औँलो बालकको मुखमा राखिदिए।

**न ममार पिता तस्य विप्रदेवप्रसादतः।**
**युवनाश्वोऽथ तत्रैव तपसा सिद्धिमन्वगात्॥ ३२॥**

**पदार्थ–**
**तस्य** = त्यस बालकका
**पिता** = बाबु
**युवनाश्वः** = राजा युवनाश्व
**विप्रदेवप्रसादतः** = ब्राह्मण र देवताको कृपाले
**न ममार** = मरेनन्
**अथ** = त्यसपछि उनले
**तत्र एव** = त्यहीँ नै
**तपसा** = तपस्याद्वारा
**सिद्धिम्** = मुक्ति
**अन्वगात्** = प्राप्त गरे

**वाक्यार्थ–** (पुत्र जन्मँदा कोख चिरिए तापनि) त्यस बालकका पिता युवनाश्व ब्राह्मण तथा देवताहरूको कृपाका कारण मरेनन्। त्यसपछि उनी त्यसै ठाउँमा तपस्या गरी मुक्त भए।

**त्रसद्दस्युरितीन्द्रोऽङ्ग विदधे नाम तस्य वै।**
**यस्मात् त्रसन्ति ह्युद्विग्ना दस्यवो रावणादयः॥ ३३॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**इन्द्रः** = इन्द्रले
**तस्य वै** = त्यस बालकको
**नाम** = नाम
**त्रसद्दस्युः** = त्रसद्दस्यु
**इति** = यस्तो
**विदधे** = राखे
**हि** = किनभने
**यस्मात्** = तिनीदेखि
**रावणादयः** = रावण आदि
**दस्यवः** = लुटेरा दानवहरू
**उद्विग्नाः** = डराएर
**त्रसन्ति** = तर्सिरहन्छन्

**वाक्यार्थ–** हे परीक्षित् ! त्यस बालकसित रावण आदि लुटेरा दानवहरू डराएर सधैँ तर्सिने हुनाले देवराज इन्द्रले उसको नाम त्रसद्दस्यु राखे।

**यौवनाश्वोऽथ मान्धाता चक्रवर्त्यवनीं प्रभुः।**
**सप्तद्वीपवतीमेकः शशासाच्युततेजसा॥ ३४॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**यौवनाश्वः** = युवनाश्वका छोरा
**मान्धाता** = मान्धाता (त्रसद्दस्यु)ले
**चक्रवर्ती** = चक्रवर्ती
**प्रभुः** = राजा भएर
**अच्युततेजसा** = भगवान् श्रीहरिको प्रभावले
**एकः** = एक्लै
**सप्तद्वीपवतीम्** = सात द्वीप भएको
**अवनीं** = पृथिवीमा
**शशास** = शासन गरे

**वाक्यार्थ–** त्यसपछि युवनाश्वका छोरा मान्धाता (त्रसद्दस्यु) चक्रवर्ती राजा भए। उनले भगवान् श्रीहरिको आशीर्वादले एक्लै सात द्वीप भएको समग्र पृथिवीमा शासन गरे।

**ईजे च यज्ञं क्रतुभिरात्मविद्भूरिदक्षिणैः।**
**सर्वदेवमयं देवं सर्वात्मकमतीन्द्रियम्॥ ३५॥**

**पदार्थ–**
**आत्मविद्** = आत्मज्ञानी मान्धाताले
**भूरिदक्षिणैः** = धेरै दक्षिणा दिइने
**क्रतुभिः** = यज्ञहरूद्वारा
**सर्वात्मकं** = सबैका आत्मस्वरूप
**अतीन्द्रियम्** = इन्द्रियद्वारा प्राप्त गर्न नसकिने
**सर्वदेवमयं च** = सम्पूर्ण देवतास्वरूप
**यज्ञं** = यज्ञपुरुष
**देवं** = भगवान्को
**ईजे** = आराधना गरे

**वाक्यार्थ–** आत्मज्ञानी मान्धाताले धेरै दक्षिणा दिइने यज्ञहरूद्वारा सम्पूर्ण जीवजगत्का आत्मस्वरूप, इन्द्रियद्वारा प्राप्त गर्न नसकिने सर्वदेवमय यज्ञपुरुष भगवान्को आराधना गरे।

**द्रव्यं मन्त्रो विधिर्यज्ञो यजमानस्तथर्त्विजः।**
**धर्मो देशश्च कालश्च सर्वमेतद् यदात्मकम्॥ ३६॥**

**पदार्थ–**
**द्रव्यं** = सम्पूर्ण द्रव्य
**मन्त्रः** = मन्त्रहरू
**विधिः** = विधि-विधान
**यज्ञः** = यज्ञ-यागादि अनुष्ठान
**यजमानः** = यज्ञकर्ता यजमान
**तथा** = तथा
**ऋत्विजः** = यज्ञ गराउने ब्राह्मणहरू
**धर्मः** = आचार-विचार
**देशः च** = स्थान र
**कालः च** = समय
**एतत्** = यी
**सर्वम्** = सबै
**यदात्मकम्** = जुन भगवान्कै स्वरूप हुन्

**वाक्यार्थ–** यज्ञमा आवश्यक द्रव्य, मन्त्र, विधि-विधान, यज्ञ-यागादि अनुष्ठान, यज्ञकर्ता यजमान तथा यज्ञ गराउने ब्राह्मण, आचार-विचार, स्थान र समय सबै भगवान्का नै स्वरूप हुन्।

**यावत् सूर्य उदेति स्म यावच्च प्रतितिष्ठति।**
**सर्वं तद् यौवनाश्वस्य मान्धातुः क्षेत्रमुच्यते॥ ३७॥**

**पदार्थ–**
**यावत्** = जहाँबाट
**सूर्यः** = सूर्य
**उदेति** = उदाउँछन्
**यावत् च** = जहाँ
**प्रतितिष्ठति** = अस्ताउँछन्
**सर्वं तत्** = त्यो सबै
**यौवनाश्वस्य** = युवनाश्वका छोरा
**मान्धातुः** = मान्धाताको
**क्षेत्रम्** = राज्य
**उच्यते स्म** = भनिन्थ्यो

**वाक्यार्थ–** जहाँबाट सूर्य उदाउँछन् र जहाँ अस्ताउँछन् त्यो सबै ठाउँ युवनाश्वका छोरा मान्धाताको राज्य भनिन्थ्यो।

**शशबिन्दोर्दुहितरि बिन्दुमत्यामधान्नृपः।**
**पुरुकुत्समम्बरीषं मुचुकुन्दं च योगिनम्॥**
**तेषां स्वसारः पञ्चाशत् सौभरिं वव्रिरे पतिम्॥ ३८॥**

**पदार्थ–**
**नृपः** = राजा मान्धाताले
**शशबिन्दोः** = शशबिन्दुकी
**दुहितरि** = छोरी
**बिन्दुमत्याम्** = बिन्दुमतीमा
**पुरुकुत्सं** = पुरुकुत्स
**अम्बरीषं** = अम्बरीष तथा
**योगिनम्** = योगी
**मुचुकुन्दं च** = मुचुकुन्द नामक (तीन छोरा)
**अधात्** = उत्पन्न गरे
**तेषां** = ती पुरुकुत्स आदिका
**पञ्चाशत्** = पचास
**स्वसारः** = बहिनीहरूले
**सौभरिं** = सौभरि ऋषिलाई
**पतिम्** = पतिको रूपमा
**वव्रिरे** = वरण गरे

**वाक्यार्थ–** राजा मान्धाताले शशबिन्दुकी छोरी बिन्दुमती नामकी पत्नीबाट पुरुकुत्स, अम्बरीष र मुचुकुन्द नामका तीन छोरा उत्पन्न गरे। यिनीहरूका पचास बहिनी थिए। तिनीहरूले सौभरि ऋषिलाई पतिको रूपमा वरण गरे।

**यमुनान्तर्जले मग्नस्तप्यमानः परं तपः।**
**निर्वृतिं मीनराजस्य वीक्ष्य मैथुनधर्मिणः॥ ३९॥**
**जातस्पृहो नृपं विप्रः कन्यामेकामयाचत।**
**सोऽप्याह गृह्यतां ब्रह्मन् कामं कन्या स्वयंवरे॥ ४०॥**

**पदार्थ–**
**यमुनान्तर्जले** = यमुनाको जलभित्र
**मग्नः** = डुबेर
**परं** = कठोर
**तपः** = तपस्या
**तप्यमानः** = गरिरहेका सौभरिले
**मैथुनधर्मिणः** = जोडी भएर रहने
**मीनराजस्य** = ठुलो माछाको
**निर्वृतिं** = आनन्द (मैथुनजन्य)
**वीक्ष्य** = देखेर
**जातस्पृहः** = कामभावना जागेका
**विप्रः** = ब्राह्मण सौभरिले
**नृपं** = राजा मान्धातासँग
**एकां** = एउटी
**कन्यां** = छोरी
**अयाचत** = मागे
**सः अपि** = ती मान्धाताले पनि
**ब्रह्मन्** = हे ब्राह्मणदेव
**स्वयंवरे** = स्वयंवरमा
**कामं** = इच्छाअनुसार
**कन्या** = कन्या
**गृह्यतां** = ग्रहण गर्नुहोस्
**आह** = भने

**वाक्यार्थ–** सौभरि ऋषिले यमुनाको जलभित्र डुबेर कठोर तपस्या गरिरहेका थिए। त्यस क्रममा एक दिन जोडी भएर रहेको ठुलो माछाको मैथुनजन्य सुख देखेर कामासक्त भएका उनले राजा मान्धातासँग एउटी कन्या मागे। राजाले पनि उनलाई स्वयंवरमा गई इच्छाअनुसार कन्या वरण गर्नुहोस् भने।

**स विचिन्त्याप्रियं स्त्रीणां जरठोऽयमसन्मतः।**

**वलीपलित एजत्क इत्यहं प्रत्युदाहृतः॥ ४१॥**

**पदार्थ–**
**सः** = ती सौभरि ऋषिले
**अहं** = मलाई
**अयं** = यो
**जरठः** = बुढो
**वलीपलितः** = चाउरी परेको तथा कपाल फुलेको
**एजत्कः** = शरीर काम्ने पुरुष
**स्त्रीणां** = स्त्रीहरूका लागि
**असन्मतः** = योग्य छैन भन्ने
**इति** = यस्तो
**विचिन्त्य** = सोचेर
**अप्रियं** = मन नपर्ने गरी
**प्रत्युदाहृतः** = उत्तर दिएका हुन् भन्ने बुझे

**वाक्यार्थ–** छाला चाउरिएको, कपाल फुलेको र थरथर काम्दै गरेको म जस्तो बुढो मान्छे स्त्रीहरूका लागि योग्य हुँदैन भन्ने सोचेर राजाले मलाई यस्तो अप्रिय उत्तर दिएका हुन् भन्ने कुरा सौभरि ऋषिले बुझे।

**साधयिष्ये तथात्मानं सुरस्त्रीणामपीप्सितम्।**

**किं पुनर्मनुजेन्द्राणामिति व्यवसितः प्रभुः॥ ४२॥**

**पदार्थ–**
**प्रभुः** = सामर्थ्यवान् सौभरि ऋषिले
**आत्मानं** = आफूलाई
**तथा** = त्यस्तो
**साधयिष्ये** = बनाउँछु, जुन
**सुरस्त्रीणां** = देवस्त्रीले
**अपि** = पनि
**ईप्सितम्** = चाहनेछन्
**पुनः** = फेरि
**मनुजेन्द्राणाम्** = मानव कन्याहरूको त
**किं** = के कुरा भयो र
**इति** = यस्तो
**व्यवसितः** = निश्चय गरे

**वाक्यार्थ–** सामर्थ्यवान् सौभरि ऋषिले आफू मानव कन्याका लागि मात्र नभएर देवस्त्रीहरूका लागि समेत राम्रो लाग्ने स्वरूपवाला बन्दछु भन्ने निश्चय गरे।

**मुनिः प्रवेशितः क्षत्त्रा कन्यान्तःपुरमृद्धिमत्।**

**वृतश्च राजकन्याभिरेकं पञ्चाशता वरः॥ ४३॥**

**पदार्थ–**
**क्षत्त्रा** = दरबारका रक्षकहरूद्वारा
**मुनिः** = दिव्य स्वरूप धारण गरेका सौभरि ऋषि
**ऋद्धिमत्** = वैभवशाली
**कन्यान्तःपुरं** = राजकुमारीहरूको निवासस्थानमा
**प्रवेशितः** = पुऱ्याइएका
**पञ्चाशता** = ती पचास
**राजकन्याभिः च** = राजकुमारीहरूद्वारा पनि
**एकः** = एउटै
**वरः** = (सौभरि ऋषि) पतिको रूपमा
**वृतः** = वरण गरिए

**वाक्यार्थ–** दिव्यस्वरूप धारण गरेका सौभरि ऋषिलाई दरबारका रक्षकहरूले राजकुमारीहरू भएको ठाउँमा पुऱ्याइदिए। ती पचासै राजकुमारीहरूले एउटै सौभरि ऋषिलाई पतिको रूपमा वरण गरे।

**तासां कलिरभूद् भूयांस्तदर्थेऽपोह्य सौहृदम्।**
**ममानुरूपो नायं व इति तद्गतचेतसाम्॥ ४४॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**तद्गतचेतसाम्** = ती सौभरि ऋषिमा चित्त आसक्त भएका
**तासां** = ती राजकन्याहरूको
**तदर्थे** = ती ऋषिका लागि
**सौहृदम्** = आपसको प्रेम
**अपोह्य** = त्यागेर
**अयं** = यी
**मम** = मेरा लागि
**अनुरूपः** = योग्य छन्
**वः** = तिमीहरूलाई
**न** = योग्य छैनन् भन्दै
**भूयान्** = ठुलो
**कलिः** = झगडा
**अभूत्** = भयो

**वाक्यार्थ–** यसप्रकार ऋषिमा आसक्त भएका राजकन्याहरूका बीचमा यी मेरा लागि योग्य छन्, अरूलाई योग्य छैनन् भन्दै आपसी प्रेम त्यागेर ठुलो झगडा भयो।

**स बह्वृचस्ताभिरपारणीय तपःश्रियानर्घ्यपरिच्छदेषु।**
**गृहेषु नानोपवनामलाम्भःसरःसु सौगन्धिककाननेषु॥ ४५॥**
**महार्हशय्यासनवस्त्रभूषणस्नानानुलेपाभ्यवहारमाल्यकैः।**
**स्वलङ्कृतस्त्रीपुरुषेषु नित्यदा रेमेऽनुगायद्द्विजभृङ्गवन्दिषु॥ ४६॥**

**पदार्थ–**
**बह्वृचः** = ऋग्वेदी
**सः** = ती सौभरि ऋषिले
**अपारणीयतपःश्रिया** = अपार तपस्याको प्रभावले
**अनर्घ्यपरिच्छदेषु** = अमूल्य सामग्रीले युक्त
**नानोपवनामलाम्भःसरःसु** = विविध बगैँचा, स्वच्छ पानी भएका पोखरी तथा
**सौगन्धिककाननेषु** = सुगन्धित वनहरूमा
**स्वलङ्कृतस्त्रीपुरुषेषु** = सुसज्जित स्त्री–पुरुषले युक्त
**अनुगायद्द्विजभृङ्गवन्दिषु** = मिठो स्वरमा गुन्गुनाउँदै गरेका पक्षी, भँवरा र स्तुतिपाठकर्ताहरूद्वारा सुशोभित
**गृहेषु** = महलहरूमा
**ताभिः** = ती राजकन्याहरूसँग
**महार्हशय्यासनवस्त्रभूषणस्नानानुलेपाभ्यवहारमाल्यकैः** = बहुमूल्य शय्या, आसन, कपडा, गरगहना, जलक्रीडा, सुगन्धित चन्दनादि लेपन, मिठा–मिठा भोजन तथा पुष्पमालाहरूद्वारा
**नित्यदा** = सधैँ
**रेमे** = रमण गरे

**वाक्यार्थ–** ती सौभरि ऋषिले आफ्नो अपार तपस्याको प्रभावले बहुमूल्य सामग्री, विविध बगैँचा, स्वच्छ पानी भएका पोखरी र सुगन्धित वन, सेवकका रूपमा रहेका सुसज्जित स्त्री–पुरुषले युक्त एवं मिठो स्वरमा गुन्गुनाउँदै गरेका पक्षी, भँवरा तथा स्तुतिपाठकर्ताहरूद्वारा सुशोभित भएका महलहरूमा बहुमूल्य शय्या, आसन, कपडा, गरगहना, जलक्रीडा, सुगन्धित चन्दनादि लेपन, मिठा–मिठा भोजन तथा पुष्पमालाहरूद्वारा सम्पन्न भई आफ्ना पत्नीहरूसँग विहार गर्न लागे।

**यद्गार्हस्थ्यं तु संवीक्ष्य सप्तद्वीपवतीपतिः ।**

**विस्मितः स्तम्भमजहात् सार्वभौमश्रियान्वितम् ॥ ४७ ॥**

**पदार्थ–**
**यद्गार्हस्थ्यं तु** = जसको गृहस्थी सुखलाई
**संवीक्ष्य** = देखेर
**सप्तद्वीपवतीपतिः** = सात द्वीपले युक्त पृथिवीका मालिक मान्धाताले
**विस्मितः** = आश्चर्यचकित भएर
**सार्वभौमश्रियान्वितम्** = चक्रवर्ती राजाको कान्तिले युक्त हुनुको
**स्तम्भं** = घमन्डलाई
**अजहात्** = त्यागिदिए

**वाक्यार्थ–** सौभरि ऋषिको गृहस्थी सुखलाई देखेर चकित भएका राजा मान्धाताले सात द्वीपले युक्त पृथिवीको राजा हुँ भन्ने घमन्ड त्यागिदिए।

**एवं गृहेष्वभिरतो विषयान् विविधैः सुखैः ।**

**सेवमानो न चातुष्यदाज्यस्तोकैरिवानलः ॥ ४८ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**गृहेषु** = घरमा (गृहस्थाश्रममा)
**अभिरतः** = आसक्त भएर
**विविधैः** = विविध प्रकारका
**सुखैः** = सुखहरू
**सेवमानः च** = सेवन गरे तापनि
**आज्यस्तोकैः** = घिउका थोपाले
**अनलः इव** = आगो झैं
**विषयान्** = ती विषयहरूबाट
**न अतुष्यत्** = सन्तुष्ट भएनन्

**वाक्यार्थ–** जसरी घिउका थोपा चढाउनाले आगो निभ्दैन झन् बल्छ त्यसै गरी गृहस्थाश्रममा आसक्त भएर अनेक प्रकारका विषय सुख प्राप्त गरे तापनि सौभरि ऋषि सन्तुष्ट भएनन्।

**स कदाचिदुपासीन आत्मापह्नवमात्मनः ।**

**ददर्श बह्वृचाचार्यो मीनसङ्गसमुत्थितम् ॥ ४९ ॥**

**पदार्थ–**
**कदाचित्** = कुनै समय
**उपासीनः** = उपासना गरेर बसेका
**बह्वृचाचार्यः** = ऋग्वेदका आचार्य
**सः** = ती सौभरि ऋषिले
**मीनसङ्गसमुत्थितम्** = माछाको सङ्गतले उत्पन्न भएको
**आत्मनः** = आफ्नो
**आत्मापह्नवं** = आत्माको पतन
**ददर्श** = देखे

**वाक्यार्थ–** कुनै समय ऋग्वेदका आचार्य सौभरि ऋषि उपासना गरेर बसेका थिए, त्यस वेला उनले माछाको सङ्गतबाट आफ्नो पतन भएको कुरा अनुभव गरे।

**अहो इमं पश्यत मे विनाशं तपस्विनः सच्चरितव्रतस्य ।**

**अन्तर्जले वारिचरप्रसङ्गात् प्रच्यावितं ब्रह्म चिरं धृतं यत् ॥ ५० ॥**

**पदार्थ–**
**अहो** = अहो
**सच्चरितव्रतस्य** =

सदाचारव्रतको पालना गर्ने
**तपस्विनः** = तपस्वी
**मे** = मेरो
**इमं** = यो
**विनाशं** = पतन
**पश्यत** = हेर
**अन्तर्जले** = यमुनाको जलभित्र देखेको
**वारिचरप्रसङ्गात्** = माछाको मैथुनप्रसङ्गले (मैले आफ्नो)
**यत्** = जुन
**चिरं** = धेरै समयदेखि
**धृतं** = धारण गरिराखेको
**ब्रह्म** = ब्रह्मतेज
**प्रच्यावितम्** = नष्ट गरियो

**वाक्यार्थ–** अहो !, तपस्वी, सदाचार व्रतको पालन गर्ने मेरो यसप्रकारको पतनलाई हेर। जलभित्र माछाको मैथुनक्रीडा देखेर मैले आफ्नो धेरै समयदेखि धारण गरेको ब्रह्मतेजलाई नष्ट पारेँ।

**सङ्गं त्यजेत मिथुनव्रतीनां मुमुक्षुः**
**सर्वात्मना न विसृजेद् बहिरिन्द्रियाणि ।**
**एकश्चरन् रहसि चित्तमनन्त ईशे**
**युञ्जीत तद्व्रतिषु साधुषु चेत् प्रसङ्गः ॥ ५१ ॥**

**पदार्थ–**
**मुमुक्षुः** = मोक्ष चाहने व्यक्तिले
**मिथुनव्रतीनां** = मैथुनकामी प्राणीहरूको
**सङ्गं** = सङ्गत
**त्यजेत** = त्यागोस्
**इन्द्रियाणि** = आफ्ना इन्द्रियहरूलाई
**सर्वात्मना** = कत्ति पनि
**बहिः** = बाहिरका विषयमा
**न विसृजेत्** = नलगाओस् (नछाडोस्)
**एकः चरन्** = एक्लै बसेर
**रहसि** = एकान्तमा
**चित्तं** = मनलाई
**अनन्ते** = सर्वव्यापक
**ईशे** = परमात्मामा
**युञ्जीत** = लगाओस्
**चेत्** = यदि कसैसँग
**प्रसङ्गः** = सङ्गत गर्नु छ भने
**तद्व्रतिषु** = ती भगवान्का प्रेमी
**साधुषु** = सज्जन भक्तहरूसँग गरोस्

**वाक्यार्थ–** मोक्षको चाहना गर्ने व्यक्तिले मैथुनकामी प्राणीहरूको सङ्गत छोडिदेओस्। इन्द्रियलाई बहिर्मुख हुन कत्ति पनि नदेओस्। एक्लै बसेर एकान्तमा मनलाई सर्वव्यापक परमात्मामा लगाइदेओस्। यदि कसैसँग सङ्गत गर्नु छ भने भगवान्का भक्तहरूसँग मात्र सङ्गत गरोस्।

**एकस्तपस्व्यहमथाम्भसि मत्स्यसङ्गात्**
**पञ्चाशदासमुत पञ्चसहस्रसर्गः ।**
**नान्तं व्रजाम्युभयकृत्यमनोरथानां**
**मायागुणैर्हृतमतिर्विषयेऽर्थभावः ॥ ५२ ॥**

**पदार्थ–**
**अहं** = म (पहिला)
**एकः** = एक्लै
**तपस्वी** = तपस्यामा लीन थिएँ
**अथ** = त्यसपछि
**अम्भसि** = जलभित्रको

**मत्स्यसङ्गात्** = माछाको सङ्गतले
**पञ्चाशत्** = पचास
**आसम्** = भएँ
**उत** = फेरि
**पञ्चसहस्रसर्गः** = सन्तानका रूपमा पाँच हजार भएँ
**मायागुणैः** = मायाका गुणले
**हृतमतिः** = बुद्धि खोसिएर
**विषये** = भोग विषयलाई
**अर्थभावः** = सत्य सम्झने म
**उभयकृत्यमनोरथानां** = इहलोक र परलोकका चाहनाहरूको
**अन्तं** = समाप्तिमा
**न व्रजामि** = कहिल्यै पुग्दिनँ

**वाक्यार्थ—** म पहिला एक्लै तपस्या गर्थें। त्यसपछि जलभित्र देखेको माछाको मैथुनप्रसङ्गबाट पचास ओटी पत्नीको पति बनें। फेरि सन्तानको रूपमा म पाँचहजार भएँ। मायाले बुद्धि हरण गर्नाले मैले संसारका विषयलाई नै सत्य सम्झिन थालें। इहलोक र परलोकसम्बन्धी मेरा चाहनाहरू कहिल्यै पूरा भएनन्।

**विवरण—** माथिका तीन श्लोकमा सौभरिको पश्चात्ताप वर्णन गरिएको छ। मानिस कहिलेकहीं यस्तो अप्रत्याशित गल्ती गर्न पुग्छ, जसको जानकारी उसलाई धेरै कुरा बिग्रिसकेपछि हुने गर्दछ। त्यसैले कामनाको वेगमा बग्ने व्यक्तिहरूको जीवन पश्चात्तापले भरिएको हुन्छ। कहाँ ब्रह्मचर्यव्रतमा रहेर ब्रह्मचिन्तनमा समय बिताउने ऋषि, कहाँ पचास पत्नीहरूसँग सुख भोगी संसारमा भुल्ने विषयी व्यक्ति। यी दुबै एउटै व्यक्ति हुन सक्लान् र ? तर यहाँ यस्तै भएको छ। यो सब गराउने सूत्रधार मन नै हो, जसमा उठेको कामनालाई सौभरिले वास्ता नगरी बढ्न दिएका थिए। पहाडबाट खसेको मान्छे फेदीमैं नपुगी नरोकिए झैं कामनाद्वारा वशीभूत भएको व्यक्ति पनि धेरै हन्डर नखाई चेत्दैन। यही आफ्नो अनुभूति अरूलाई सुनाउँदै सौभरि ऋषि भन्छन्— साधकले स्त्री-पुरुषमा आसक्त संसारीहरूको सङ्गत छाडिदिनुपर्छ। कसै गरी पनि इन्द्रियहरूलाई बाहिर जान दिनुहुँदैन। सङ्गत गर्नै परे भगवद्भक्तहरूसँग गर्नुपर्दछ। म पहिला एउटै तपस्वी थिएँ, दुईटा माछाले खेलेको देख्नाले कामवासनाद्वारा अभिभूत भई पचास पत्नीको पति भएँ र अब त छोराहरू समेत गर्दा हजारौंको सङ्ख्यामा भइसकें। अझै पनि मलाई यो लोक र परलोकका लागि गरिने कर्म र त्योद्वारा प्राप्त हुने फलको आसक्तिले छाडेको छैन। यो अनन्त तृष्णाको पूर्णता कहिल्यै हुन सक्दैन। सौभरिले यो अन्तहीन दुःखदायक यात्राको मूल क्षणिक विषयहरूमा गरिने सत्यताको धारणालाई मानेका छन्। संसारका पदार्थहरू मिथ्या हुन्, तर यिनमा सत्य बुद्धि गरियो भने मानिसको सम्पूर्ण ध्यान यसैलाई प्राप्त गर्नेतर्फ लाग्छ। सपनाको पदार्थ पाउन र सपनाको संसारलाई बनाउन कोही लागिपर्दछ र ? त्यसै गरी यो संसाररूप नाटक पनि प्राणीहरूको अनादि भ्रमको कारणले देखिएको मात्र हो। पदार्थहरूमा सद्बुद्धि गर्नु नै अनर्थको मूल हो भन्ने कुरा यहाँ प्रतिपादन गरिएको छ।

**एवं वसन् गृहे कालं विरक्तो न्यासमास्थितः।**
**वनं जगामानुययुस्तत्पत्न्यः पतिदेवताः॥ ५३॥**

**पदार्थ—**
**एवं** = यसप्रकार (विचार गर्दै)
**कालं** = केही समय
**गृहे** = घरमा
**वसन्** = बस्दै गरेका सौभरिले
**विरक्तः** = विषयभोगदेखि विरक्त

**वसिष्ठशापाद् रक्षोऽभूदनपत्यः स्वकर्मणा ॥ १८ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ततः** = ती सर्वकामबाट
**सुदासः** = सुदास नामका छोरा जन्मे
**तत्पुत्रः** = तिनका छोरा
**मदयन्तीपतिः** = मदयन्तीका पति सौदास भए
**यं वै** = जसलाई
**मित्रसहं** = मित्रसह पनि
**आहुः** = भन्दछन्
**उत** = अथवा
**क्वचित्** = कोही-कोहीले
**कल्माषाङ्घ्रिं** = कल्माषपाद (पनि भन्दछन् ती)
**वसिष्ठशापात्** = वसिष्ठ ऋषिको श्रापबाट
**रक्षः** = राक्षस तथा
**स्वकर्मणा** = आफ्नो कर्मका कारण
**अनपत्यः** = सन्तानहीन
**अभूत्** = भए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सर्वकामका छोरा सुदास भए। सुदासका छोरा सौदास भए। सौदासकी पत्नीको नाम मदयन्ती थियो। तिनै सौदासलाई कोही-कोही मित्रसह भन्दथे भने कोहीले कल्माषपाद पनि भन्दथे। उनी वसिष्ठ ऋषिको श्रापले राक्षस भएका थिए भने आफ्ना कर्मका कारण सन्तानहीन पनि थिए।

**राजोवाच** (राजा परीक्षित्‌ले सोध्नुभयो)

**किं निमित्तो गुरोः शापः सौदासस्य महात्मनः ।**
**एतद् वेदितुमिच्छामः कथ्यतां न रहो यदि ॥ १९ ॥**

**पदार्थ–**
**महात्मनः** = महात्मा
**सौदासस्य** = सौदासलाई
**गुरोः** = गुरु वसिष्ठको
**शापः** = श्राप
**किं निमित्तः** = के कारण लाग्यो
**एतत्** = यो कुरा
**वेदितुम्** = जान्न
**इच्छामः** = चाहन्छौं (चाहन्छु)
**यदि** = यदि
**रहः** = गोपनीय
**न** = छैन भने
**कथ्यताम्** = भन्नुहोस्

**वाक्यार्थ–** के कारणले गुरु वसिष्ठको श्राप महात्मा सौदासलाई लाग्यो ? म त्यो कुरा जान्न चाहन्छु। यदि त्यो गोपनीय छैन भने सुनाउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सौदासो मृगयां कञ्चिच्चरन् रक्षो जघान ह ।**
**मुमोच भ्रातरं सोऽथ गतः प्रतिचिकीर्षया ॥ २० ॥**

**पदार्थ–**
**मृगयां** = सिकार
**चरन्** = खेल्दै जाँदा
**सौदासः** = राजा सौदासले
**कञ्चित्** = कुनै
**रक्षः** = राक्षसलाई
**जघान ह** = मारे (तर)
**भ्रातरं** = त्यसको भाइलाई
**मुमोच** = छाडिदिए

**अथ** = त्यसपछि
**सः** = त्यो मृतराक्षसको भाइ
**प्रतिचिकीर्षया** = बदला लिने इच्छाले
**गतः** = (राजदरबारमा) गयो

**वाक्यार्थ–** एक दिन सिकार खेल्न जाँदा राजा सौदासले कुनै राक्षसलाई मारे, तर उसको भाइलाई त्यसै छाडिदिए। त्यसपछि त्यो मृतराक्षसको भाइ बदला लिने इच्छाले राजदरबारमा गयो।

**स चिन्तयन्नघं राज्ञः सूदरूपधरो गृहे।**
**गुरवे भोक्तुकामाय पक्त्वा निन्ये नरामिषम्॥ २१॥**

**पदार्थ–**
**राज्ञः** = राजाले गरेको
**अघं** = अपराध
**चिन्तयन्** = सम्झँदै
**सूदरूपधरः** = भान्सेको रूप धारण गरेको
**सः** = त्यो मृतराक्षसको भाइले
**गृहे** = राजदरबारमा
**भोक्तुकामाय** = भोजन गर्न इच्छुक
**गुरवे** = गुरु वसिष्ठलाई दिन
**नरामिषम्** = मान्छेको मासु
**पक्त्वा** = पकाएर
**निन्ये** = लग्यो

**वाक्यार्थ–** राजाले दाइलाई मारेर गरेको अपराधलाई सम्झँदै भान्सेको रूपमा राजदरबारमा पुगेको भाइ राक्षसले एक दिन भोजनका निम्ति दरबारमा आएका गुरु वसिष्ठलाई दिनका लागि मान्छेको मासु पकाएर लग्यो।

**परिवेक्ष्यमाणं भगवान् विलोक्याभक्ष्यमञ्जसा।**
**राजानमशपत् क्रुद्धो रक्षो ह्येवं भविष्यसि॥ २२॥**

**पदार्थ–**
**परिवेक्ष्यमाणं** = पस्केर तयार पारेको भोजन
**अभक्ष्यं** = खान नहुने
**विलोक्य** = देखेर
**क्रुद्धः** = रिसाएका
**भगवान्** = गुरु वसिष्ठले
**राजानं** = राजालाई
**अञ्जसा** = तत्काल
**रक्षः एवं हि** = राक्षस नै
**भविष्यसि** = हुनेछस् भनी
**अशपत्** = श्राप दिए

**वाक्यार्थ–** अभक्ष्य भोजन खान दिएको देखेर गुरु वसिष्ठ अत्यन्त रिसाए र उनले तत्काल राजालाई राक्षस नै हुनेछस् भनी श्राप दिए।

**रक्षःकृतं तद् विदित्वा चक्रे द्वादशवार्षिकम्।**
**सोऽप्यपोऽञ्जलिनादाय गुरुं शप्तुं समुद्यतः॥ २३॥**

**पदार्थ–**
**तत्** = त्यो सबै काम
**रक्षःकृतं** = राक्षसले गरेको
**विदित्वा** = बुझेर (गुरु वसिष्ठले त्यस श्रापलाई)
**द्वादशवार्षिकम्** = बाह्र वर्षको
**चक्रे** = बनाइदिए
**सः अपि** = ती राजा सौदास पनि
**अञ्जलिना** = अँजुलीले
**अपः** = पानी
**आदाय** = लिएर

| | | |
|---|---|---|
| **गुरुं** = गुरु वसिष्ठलाई | **शप्तुं** = श्राप दिन | **समुद्यतः** = तयार भए |

**वाक्यार्थ–** त्यो सबै काम राजाले नभएर राक्षसले गरेको कुरा बुझेपछि गुरु वसिष्ठले आफ्नो श्रापलाई बाह्र वर्षको बनाइदिए। राजा सौदास पनि अँजुलीमा पानी लिएर गुरु वसिष्ठलाई श्राप दिन तयार भए।

**वारितो मदयन्त्यापो रुशतीः पादयोर्जहौ।**

**दिशः खमवनीं सर्वं पश्यञ्जीवमयं नृपः॥ २४॥**

| पदार्थ– | | |
|---|---|---|
| | **खं** = आकाश र | **रुशतीः** = श्राप दिनका लागि मन्त्रणा गरिएको |
| **मदयन्त्या** = रानी मदयन्तीद्वारा | **अवनीं** = पृथिवी | |
| **वारितः** = रोकिएका | **सर्वं** = सबै ठाउँलाई | **आपः** = जललाई |
| **नृपः** = राजाले | **जीवमयं** = जीवहरू व्याप्त रहेको | **पादयोः** = आफ्नै खुट्टामा |
| **दिशः** = सम्पूर्ण दिशा | **पश्यन्** = देखेर | **जहौ** = छाडिदिए |

**वाक्यार्थ–** राजाले श्राप दिनका लागि जल मन्त्रेर छोड्नै लाग्दा रानी मदयन्तीले उनलाई रोकिदिइन्। त्यसपछि त्यस जललाई राजाले दिशा, आकाश र पृथिवी सबै ठाउँलाई जीवमय देखेर कहीँ पनि फाल्न नसकेर आफ्नै पाउमा छोडिदिए।

**विवरण–** यस श्लोकमा सम्पूर्ण जगत्‌लाई जीवमय देख्ने राजा सौदासले त्यो श्राप दिन ठिक पारिएको जल कतै नफाली आफ्नो पाउमा फाले भनिएको छ। उनले संसारका हरेक वस्तुमा चैतन्य देखे। चिद्रूप ब्रह्म नै जगत्‌का माटो हावा, नदी, पहाड, आकाश आदि पदार्थको रूपमा प्रकट भएको हो भन्ने ज्ञान भएका राजाले वशिष्ठलाई श्राप दिन ठिक्क पारेको जल कहीँ फाल्न सकेनन्, उनले दिशा-विदिशा, आकाश र पृथिवी सबैलाई जीवमय देखे र अन्त्यमा त्यो जल आफ्नै खुट्टामा छोडिदिए। त्यसैले राजा सौदास मित्रसह यो नामले पनि प्रसिद्ध भए।

**राक्षसं भावमापन्नः पादे कल्माषतां गतः।**

**व्यवायकाले ददृशे वनौकोदम्पती द्विजौ॥ २५॥**

| पदार्थ– | | |
|---|---|---|
| | **भावं** = स्वरूपलाई | **वनौकोदम्पती** = वनवासी दम्पतीलाई |
| **पादे** = दुबै पाउ | **आपन्नः** = प्राप्त गरेका (राजा कल्माषपाद (सौदास)ले | |
| **कल्माषतां** = काला | | **ददृशे** = देखे |
| **गतः** = भएका | **व्यवायकाले** = मैथुनकालमा | |
| **राक्षसं** = राक्षस | **द्विजौ** = ब्राह्मण | |

**वाक्यार्थ–** श्राप दिनका लागि अभिमन्त्रित जल पर्नाले राजाका दुबै पाउ काला बने। राक्षस स्वरूप प्राप्त गरेका ती कल्माषपादले एक दिन वनमा मैथुनक्रियामा लागेका ब्राह्मणदम्पतीलाई देखे।

**क्षुधार्तो जगृहे विप्रं तत्पत्न्याहाकृतार्थवत्।**

**न भवान् राक्षसः साक्षादिक्ष्वाकूणां महारथः॥ २६॥**

**मदयन्त्याः पतिर्वीर नाधर्मं कर्तुमर्हसि।**

**देहि मेऽपत्यकामाया अकृतार्थं पतिं द्विजम्॥ २७॥**

**पदार्थ–**
**क्षुधार्तः** = भोकले आत्तिएका कल्माषपादले
**विप्रं** = मैथुनक्रियामा लागेका ब्राह्मणलाई
**जगृहे** = समाते (त्यसपछि)
**अकृतार्थवत्** = कामनापूर्ण नभएकी
**तत्पत्नी** = त्यस ब्राह्मणकी पत्नीले
**साक्षात्** = साक्षात्
**इक्ष्वाकूणां** = इक्ष्वाकुवंशका
**महारथः** = महारथी
**भवान्** = तपाईं
**न राक्षसः** = राक्षस हुनुहुन्न, अतः
**मदयन्त्याः** = रानी मदयन्तीका
**पतिः** = स्वामी
**वीर** = हे वीर (तपाईं)
**अधर्मं** = अपराधकर्म
**कर्तुम्** = गर्न
**न अर्हसि** = योग्य हुनुहुन्न
**अपत्यकामायाः** = सन्तानको चाहना गर्ने
**मे** = मलाई
**अकृतार्थं** = सन्तानप्राप्तिको चाहना पूरा नभएका
**द्विजम्** = ब्राह्मण
**पतिं** = पति
**देहि** = दिनुहोस्
**आह** = भनिन्

**वाक्यार्थ–** भोकले आत्तिएका कल्माषपादले वनमा मैथुन क्रियामा लागेका ब्राह्मणलाई समाते। त्यसपछि मैथुनचाहना पूरा नभएकी ब्राह्मणकी पत्नीले 'इक्ष्वाकुवंशका महारथी अनि मदयन्तीका पति हे वीर ! तपाईं राक्षस हुनुहुन्न, तपाईंलाई यस्तो अधर्म गर्न सुहाउँदैन। मेरो सन्तान प्राप्त गर्ने इच्छा पनि पूरा भएको छैन। अतः सन्तानप्राप्तिको चाहना पूरा नभएका मेरा पति ब्राह्मणलाई छाडिदिनुहोस्' भनी प्रार्थना गरिन्।

**देहोऽयं मानुषो राजन् पुरुषस्याखिलार्थदः।**

**तस्मादस्य वधो वीर सर्वार्थवध उच्यते॥ २८॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**अयं** = यो
**मानुषः देहः** = मनुष्य शरीर
**अखिलार्थदः** = धर्म, अर्थ, काम, मोक्ष सबै पुरुषार्थ दिनेवाला छ
**तस्मात्** = त्यसकारण
**वीर** = हे वीर
**अस्य पुरुषस्य** = यस मनुष्य शरीरको
**वधः** = हत्यालाई
**सर्वार्थवधः** = सबै पुरुषार्थको हत्या
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** हे राजा ! यो मनुष्य शरीर धर्म, अर्थ, काम, मोक्षरूप सबै पुरुषार्थ दिनेवाला छ। त्यसैले हे वीर ! यस मनुष्य शरीरको हत्यालाई सबै पुरुषार्थको हत्या भनिन्छ।

**एष हि ब्राह्मणो विद्वांस्तपःशीलगुणान्वितः।**

**आरिराधयिषुर्ब्रह्म महापुरुषसंज्ञितम्।**
**सर्वभूतात्मभावेन भूतेष्वन्तर्हितं गुणैः॥ २९॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**एषः** = यी
**ब्राह्मणः** = ब्राह्मणदेव
**विद्वान्** = विद्वान् र
**तपःशीलगुणान्वितः** = तपस्या, शील र गुणले युक्त छन्, तथा
**सर्वभूतात्मभावेन** = सम्पूर्ण प्राणीको आत्मभावले
**गुणैः** = आफ्ना भिन्न-भिन्न गुणले
**भूतेषु** = जीवहरूमा
**अन्तर्हितं** = रहेका
**महापुरुषसंज्ञितम्** = महापुरुष नाम भएका
**ब्रह्म** = परब्रह्मको
**आरिराधयिषुः** = आराधना गर्न इच्छुक छन्

**वाक्यार्थ–** निश्चय नै यी ब्राह्मण विद्वान्, तपस्वी र सम्पूर्ण शील तथा गुणले युक्त भएका छन्। अर्को कुरा यिनी एउटै भएर पनि आफ्ना भिन्न-भिन्न गुणले सम्पूर्ण प्राणीहरूको आत्मस्वरूप बनेर रहेका महापुरुष परब्रह्म परमात्माको आराधना गर्न चाहन्छन्।

**सोऽयं ब्रह्मर्षिवर्यस्ते राजर्षिप्रवराद् विभो।**
**कथमर्हति धर्मज्ञ वधं पितुरिवात्मजः॥ ३०॥**

**पदार्थ–**
**विभो** = हे प्रभु
**धर्मज्ञ** = हे धर्मवेत्ता
**सः अयं** = त्यस्ता यी
**ब्रह्मर्षिवर्यः** = ब्रह्मर्षिहरूमा श्रेष्ठ ब्राह्मण
**राजर्षिप्रवरात्** = राजर्षिहरूमा श्रेष्ठ
**ते** = तपाईंद्वारा
**पितुः** = पिताबाट
**आत्मजः इव** = पुत्र झैं
**कथम्** = कसरी
**वधं** = वध
**अर्हति** = गर्न योग्य हुन्छ

**वाक्यार्थ–** हे धर्मवेत्ता महाराज ! पिताले पुत्रलाई वध गर्न नसुहाए झैं ब्रह्मर्षिहरूमा श्रेष्ठ यी ब्राह्मणलाई राजर्षिहरूमा श्रेष्ठ तपाईंले वध गर्न सुहाउँदैन।

**तस्य साधोरपापस्य भ्रूणस्य ब्रह्मवादिनः।**
**कथं वधं यथा बभ्रोर्मन्यते सन्मतो भवान्॥ ३१॥**

**पदार्थ–**
**तस्य** = त्यस्ता
**अपापस्य** = निरपराध
**भ्रूणस्य** = साङ्ग वेदाध्यायी
**ब्रह्मवादिनः** = ब्रह्मवेत्ता
**यथा बभ्रोः** = (खैरी) गाईजस्ता
**साधोः** = सज्जन ब्राह्मणको
**वधं** = वधलाई
**भवान्** = तपाईंले
**कथं** = कसरी
**सन्मतः** = उचित
**मन्यते** = मान्नुभएको छ

**वाक्यार्थ–** गाई झैं साधु निरपराध साङ्ग वेदाध्यायी ब्रह्मवेत्ता यी ब्राह्मणको वधलाई हे महाराज ! तपाईंले कसरी उचित मान्नुभएको छ ?

**यद्ययं क्रियते भक्ष्यस्तर्हि मां खाद पूर्वतः।**
**न जीविष्ये विना येन क्षणं च मृतकं यथा॥ ३२॥**

**पदार्थ—**
**यदि** = यदि
**अयं** = यी मेरा पतिलाई
**भक्ष्यः** = भोज्य
**क्रियते** = बनाइन्छ
**तर्हि** = त्यसो भए
**पूर्वतः** = पहिला
**मां** = मलाई
**खाद** = खानुहोस् (किनभने)
**येन विना** = जो विना म
**यथा मृतकं** = मुर्दा जस्तो (बनेर)
**क्षणं च** = एक क्षण पनि
**न जीविष्ये** = बाँच्न सक्दिनँ

**वाक्यार्थ—** यदि तपाईंले यिनलाई खानै चाहनुहुन्छ भने पहिला मलाई खानुहोस् किनभने पतिविना मुर्दाजस्ती बनेर म एक क्षण पनि बाँच्न सक्दिनँ।

**एवं करुणभाषिण्या विलपन्त्या अनाथवत्।**
**व्याघ्रः पशुमिवाखादत् सौदासः शापमोहितः॥ ३३॥**

**पदार्थ—**
**एवं** = यसप्रकार
**करुणभाषिण्याः** = कारुणिक बोली बोलिरहकी
**अनाथवत्** = सहाराविहीन व्यक्तिले झैं
**विलपन्त्याः** = विलाप गरिहेकी (ती ब्राह्मणीको बेवास्ता गरी)
**शापमोहितः** = श्रापले मोहित भएका
**सौदासः** = राजा सौदासले
**व्याघ्रः** = बाघले
**पशुम् इव** = पशुलाई झैं
**अखादत्** = (ब्राह्मणलाई) खाए

**वाक्यार्थ—** यसप्रकार ब्राह्मणीले कारुणिक बोलीले सहाराविहीन व्यक्तिले झैं विलाप गर्दा पनि श्रापका कारण बुद्धि भ्रष्ट भएका सौदासले ती ब्राह्मणलाई बाघले पशुलाई खाए झैं खाए।

**ब्राह्मणी वीक्ष्य दिधिषुं पुरुषादेन भक्षितम्।**
**शोचन्त्यात्मानमुर्वीशमशपत् कुपिता सती॥ ३४॥**

**पदार्थ—**
**दिधिषुं** = गर्भाधानका लागि तयार भएका पतिलाई
**पुरुषादेन** = राक्षसले
**भक्षितम्** = खाएको
**वीक्ष्य** = देखेर
**आत्मानं** = आफ्नो बारेमा
**शोचन्ती** = शोक गरिरहेकी
**कुपिता** = अत्यन्त रिसाएकी
**सती ब्राह्मणी** = पतिव्रता ब्राह्मणीले
**उर्वीशं** = राक्षसरूपधारी राजालाई
**अशपत्** = श्राप दिइन्

**वाक्यार्थ—** गर्भाधानका लागि तयार भएका आफ्ना पतिलाई राक्षसले खाएको देखेर अत्यन्त शोक गरिरहेकी र ज्यादै रिसाएकी पतिव्रता ब्राह्मणीले राक्षसरूपधारी राजालाई श्राप दिइन्।

**यस्मान्मे भक्षितः पाप कामार्तायाः पतिस्त्वया।**

**तवापि मृत्युराधानादकृतप्रज्ञ दर्शितः ॥ ३५ ॥**

**पदार्थ–**
**अकृतप्रज्ञ** = हे मूर्ख
**पाप** = हे पापी राक्षस
**त्वया** = तँद्वारा
**कामार्तायाः** = कामवासनाले
पीडित भएकी
**मे** = मेरा
**पतिः** = पति
**भक्षितः** = खाइए
**यस्मात्** = त्यसकारण
**तव अपि** = तेरो पनि
**आधानात्** = गर्भाधान गर्ने समयमा
**मृत्युः** = मृत्यु हुनेछ
(तँलाई यो कुरा मैले)
**दर्शितः** = बताइदिएँ

**वाक्यार्थ–** हे पापी राक्षस ! तैँले मेरा पतिलाई सहवासको समयमा खाइस् त्यसैले तेरो मृत्यु पनि सहवासको समयमा नै हुनेछ। हे मूर्ख ! यो कुरा मैले तँलाई बताइदिएँ।

**एवं मित्रसहं शप्त्वा पतिलोकपरायणा ।**
**तदस्थीनि समिद्धेऽग्नौ प्रास्य भर्तुर्गतिं गता ॥ ३६ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**मित्रसहं** = राजा मित्रसहलाई
**शप्त्वा** = श्राप दिएर
**पतिलोकपरायणा** = पतिले प्राप्त गरेकै लोक चाहने ब्राह्मणीले
**तदस्थीनि** = पतिका हड्डीहरूलाई
**समिद्धे** = बलेको
**अग्नौ** = आगोमा
**प्रास्य** = प्रक्षेपण गरी (आफू पनि त्यसैमा जली)
**भर्तुः** = पतिको
**गतिं** = अवस्था
**गता** = प्राप्त गरिन्

**वाक्यार्थ–** यसप्रकार मित्रसह राजालाई श्राप दिएर ब्राह्मणीले आफ्ना पतिका हड्डीलाई बल्दै गरेको अग्निमा होमिदिइन्। पतिकै लोकको इच्छा गर्ने उनले आफूलाई पनि त्यसै अग्निमा अर्पण गरिन् र पतिकै अवस्था प्राप्त गरिन्।

**विशापो द्वादशाब्दान्ते मैथुनाय समुद्यतः ।**
**विज्ञाप्य ब्राह्मणीशापं महिष्या स निवारितः ॥ ३७ ॥**

**पदार्थ–**
**द्वादशाब्दान्ते** = बाह्र वर्ष बितेपछि
**विशापः** = श्रापमुक्त भएका
**सः** = ती राजा
**मैथुनाय** = सहवासका लागि
**समुद्यतः** = प्रवृत्त भए
**महिष्या** = रानीद्वारा
**ब्राह्मणीशापं** = ब्राह्मणीले दिएको श्रापलाई
**विज्ञाप्य** = बुझेर
**निवारितः** = रोकिए

**वाक्यार्थ–** बाह्र वर्ष बितेपछि जब राजा श्रापमुक्त भए तब उनी सहवासका लागि तयार भए तर ब्राह्मणीको श्रापलाई बुझी रानीले उनलाई रोकिदिइन्।

**तत ऊर्ध्वं स तत्याज स्त्रीसुखं कर्मणाप्रजाः ।**
**वसिष्ठस्तदनुज्ञातो मदयन्त्यां प्रजामधात् ॥ ३८ ॥**

**पदार्थ—**
**ततः ऊर्ध्वं** = त्यसपछि
**सः** = ती राजाले
**स्त्रीसुखं** = स्त्रीसहवासजन्य सुखलाई
**तत्याज** = छोडिदिए
**कर्मणा** = आफ्ना अपराधकर्मले
**अप्रजाः** = सन्तान पनि भएनन्
**तदनुज्ञातः** = उनैको अनुरोधले
**वसिष्ठः** = वसिष्ठले
**मदयन्त्यां** = रानी मदयन्तीमा
**प्रजां** = गर्भाधान
**अधात्** = गराए

**वाक्यार्थ—** त्यसपछि राजाले स्त्रीसहवासजन्य सुख त्यागिदिए। आफ्ना कर्मका कारण उनका कुनै पनि सन्तान भएनन्। पछि उनैको अनुरोधले वसिष्ठ ऋषिले रानी मदयन्तीमा गर्भाधान गराए।

**सा वै सप्त समा गर्भमबिभ्रन्न व्यजायत।**
**जघ्नेऽश्मनोदरं तस्याः सोऽश्मकस्तेन कथ्यते॥ ३९॥**

**पदार्थ—**
**सा वै** = ती रानी मदयन्तीले
**सप्त समाः** = सात वर्षसम्म
**गर्भं** = गर्भलाई
**अबिभ्रत्** = धारण गरिन् (तर)
**न व्यजायत** = सन्तान भएनन्
(त्यसपछि ऋषि वसिष्ठले)
**तस्याः** = ती रानीको
**उदरं** = पेटमा
**अश्मना** = ढुंगाले
**जघ्ने** = प्रहार गरे
**तेन** = त्यसरी जन्मेको हुनाले
**सः** = त्यो बालक
**अश्मकः** = अश्मक
**कथ्यते** = भनिन्छ

**वाक्यार्थ—** रानी मदयन्तीले सात वर्षसम्म गर्भधारण गरिन्, परन्तु सन्तान भएनन्। त्यसपछि वसिष्ठले रानीको पेटमा ढुंगाले प्रहार गरे। ढुङ्गा (अश्म)ले हानेपछि जन्मेको हुँदा त्यो बालक अश्मक नामले प्रसिद्ध भयो।

**अश्मकान्मूलको जज्ञे यः स्त्रीभिः परिरक्षितः।**
**नारीकवच इत्युक्तो निःक्षत्रे मूलकोऽभवत्॥ ४०॥**

**पदार्थ—**
**अश्मकात्** = अश्मकबाट
**मूलकः** = मूलक
**जज्ञे** = जन्मिए
**यः** = जो
**स्त्रीभिः** = स्त्रीहरूद्वारा
**परिरक्षितः** = रक्षित भए
**इति** = यसै कारणले उनी
**नारीकवचः** = नारीकवच पनि
**उक्तः** = भनिए
**निःक्षत्रे** = पृथिवीमा क्षत्रिय नाश भएको समयमा
**मूलकः** = वंशको बीज
**अभवत्** = बने

**वाक्यार्थ—** अश्मकबाट मूलक नामका छोरा जन्मिए। (परशुरामले पृथिवीलाई क्षत्रियहीन पार्दै गरेको समयमा) मूलकलाई स्त्रीहरूले लुकाएर रक्षा गरे। त्यसैले यिनी नारीकवच नामले पनि प्रसिद्ध भए। यिनै मूलक पछि पृथिवी क्षत्रियहीन हुँदा क्षत्रियवंशको बीज बने।

**ततो दशरथस्तस्मात् पुत्र ऐडविडस्ततः।**
**राजा विश्वसहो यस्य खट्वाङ्गश्चक्रवर्त्यभूत्॥ ४१॥**

पदार्थ–
**ततः** = ती मूलकबाट
**दशरथः** = दशरथ जन्मे
**तस्मात्** = ती दशरथबाट
**ऐडविडः** = ऐडविड र
**ततः** = ती ऐडविडबाट
**राजा विश्वसहः** = राजा विश्वसह जन्मे
**यस्य** = यिनै विश्वसहका
**पुत्रः** = छोरा
**खट्वाङ्गः** = खट्वाङ्ग
**चक्रवर्ती** = चक्रवर्ती राजा
**अभूत्** = भए

**वाक्यार्थ–** मूलकबाट दशरथ उत्पन्न भए। दशरथका छोरा ऐडविड भए। उनका छोरा राजा विश्वसह भए भने विश्वसहका छोरा खट्वाङ्ग चक्रवर्ती राजा भए।

**यो देवैरर्थितो दैत्यानवधीद् युधि दुर्जयः।**
**मुहूर्तमायुर्ज्ञात्वैत्य स्वपुरं सन्दधे मनः॥ ४२॥**

पदार्थ–
**यः** = जुन
**देवैः** = देवताहरूद्वारा
**अर्थितः** = प्रार्थना गरिएका
**दुर्जयः** = अपराजेय राजा खट्वाङ्गले
**युधि** = युद्धमा
**दैत्यान्** = दैत्यहरूलाई
**अवधीत्** = मारेका थिए र
**मुहूर्तम्** = दुई घडी
**आयुः** = आयु बाँकी रहेको
**ज्ञात्वा** = जानेर
**स्वपुरं** = आफ्नो राज्यमा
**एत्य** = आएर
**मनः** = चित्तलाई
**सन्दधे** = भगवान्मा लगाए

**वाक्यार्थ–** राजा खट्वाङ्ग अत्यन्त शक्तिशाली थिए। उनले देवताहरूको अनुरोधले युद्धमा धेरै दैत्यहरूलाई मारे। पछि आफ्नो आयु केवल दुई घडी बाँकी रहेको थाहा पाएर उनले आफ्नै राज्यमा आएर चित्तलाई भगवान्मा लगाए।

**न मे ब्रह्मकुलात् प्राणाः कुलदैवान्न चात्मजाः।**
**न श्रियो न मही राज्यं न दाराश्चातिवल्लभाः॥ ४३॥**

पदार्थ–
**मे** = मलाई
**कुलदैवात्** = कुलका देवता
**ब्रह्मकुलात्** = ब्राह्मण वंशभन्दा
**न च** = न त
**आत्मजाः** = आफ्ना सन्तान
**प्राणाः** = प्राण
**न श्रियः** = न त सम्पत्ति
**न मही** = न पृथिवी
**न राज्यं** = न त राज्य
**न च दाराः** = न त पत्नी नै
**अतिवल्लभाः** = धेरै प्रिय लाग्दछन्

**वाक्यार्थ–** (भगवान्मा चित्त लगाएका राजा खट्वाङ्गले) मेरा लागि सन्तान, प्राण सम्पत्ति, पृथिवी, राज्य र स्त्रीहरूभन्दा पनि कुलका देवता ब्राह्मणहरू नै प्रिय छन् (भन्ने विचार गर्न लागे)।

**न बाल्येऽपि मतिर्मह्यमधर्मे रमते क्वचित्।**

**नापश्यमुत्तमश्लोकादन्यत् किञ्चन वस्त्वहम् ॥ ४४ ॥**

**पदार्थ–**
**बाल्ये** = बालककालमा
**अपि** = पनि
**मह्यं** = मेरो
**मतिः** = बुद्धि
**क्वचित्** = कुनै
**अधर्मे** = नराम्रो काममा
**न रमते** = लागेन र
**उत्तमश्लोकात्** = भगवान्भन्दा
**अन्यत्** = बाहेक
**किञ्चन** = कुनै पनि
**वस्तु** = पदार्थ
**अहम्** = मैले
**न अपश्यम्** = देखिनँ

**वाक्यार्थ–** बालककालमा पनि मेरो बुद्धि कुनै अधर्म कर्ममा लागेन र भगवान्देखि बाहेक अरू कुनै वस्तु पनि मैले देखिनँ।

**देवैः कामवरो दत्तो मह्यं त्रिभुवनेश्वरैः ।**

**न वृणे तमहं कामं भूतभावनभावनः ॥ ४५ ॥**

**पदार्थ–**
**त्रिभुवनेश्वरैः** = तीनै लोकका मालिक
**देवैः** = देवताहरूद्वारा
**मह्यं** = मलाई
**कामवरः** = चिताएअनुसार पुग्ने वरदान
**दत्तः** = दिइयो
**भूतभावनभावनः** = प्राणीमात्रका रक्षक भगवान्मा चित्त लगाएको
**अहं** = मैले
**तं** = त्यो वरदानरूप
**कामं** = कामनालाई
**न वृणे** = स्वीकार गरिनँ

**वाक्यार्थ–** तीनै लोकका मालिक देवताहरूले मलाई इच्छाअनुसार वर दिए, तर सम्पूर्ण प्राणीका आत्मस्वरूप भगवान्मा चित्त अर्पण गरेको मैले त्यसलाई स्वीकार गरिनँ।

**ये विक्षिप्तेन्द्रियधियो देवास्ते स्वहृदि स्थितम् ।**

**न विन्दन्ति प्रियं शश्वदात्मानं किमुतापरे ॥ ४६ ॥**

**पदार्थ–**
**ये** = जो
**विक्षिप्तेन्द्रियधियः** = चञ्चल इन्द्रिय तथा बुद्धिवाला
**देवाः** = (सत्त्वगुणी) देवताहरू छन्
**ते** = तिनीहरू पनि
**स्वहृदि** = आफ्नो हृदयमा
**स्थितम्** = विराजमान
**शश्वत्** = सर्वदा
**प्रियं** = प्रिय
**आत्मानं** = परमात्मालाई
**न विन्दन्ति** = जान्दैनन् भने
**अपरे** = अन्य (रजोगुणी र तमोगुणी) जनले
**किम् उत** = कसरी जान्ने

**वाक्यार्थ–** (सत्त्वगुणी भए तापनि) इन्द्रिय र बुद्धि चञ्चल हुनाले देवताले त आफ्नै हृदयमा विराजमान सर्वदा प्रिय परमात्मालाई जान्दैनन् भने अरूको के कुरा ?

**अथेशमायारचितेषु सङ्गं गुणेषु गन्धर्वपुरोपमेषु ।**

**रूढं प्रकृत्यात्मनि विश्वकर्तुर्भावेन हित्वा तमहं प्रपद्ये ॥ ४७ ॥**

**पदार्थ–**
**अथ** = त्यसकारण
**विश्वकर्तुः** = विश्वका रचयिता भगवान्को
**भावेन** = भावनाले
**ईशमायारचितेषु** = भगवान्को मायाद्वारा रचिएका
**गन्धर्वपुरोपमेषु** = (आकाशमा देखिने) गन्धर्वनगरजस्ता
**गुणेषु** = विषयमा
**प्रकृत्या** = प्रकृतिले
**आत्मनि** = चित्तमा
**रूढं** = आरूढ
**सङ्गं** = आसक्ति
**हित्वा** = छाडेर
**अहं** = म
**तं** = उनै भगवान्को
**प्रपद्ये** = शरणमा जान्छु

**वाक्यार्थ–** भगवान्को मायाद्वारा रचिएको संसार आकाशमा देखिने गन्धर्वनगर जस्तै अवास्तविक छ। त्यसकारण अब म भगवद्भावनाले युक्त भई चित्तमा आरूढ भएका यी सांसारिक विषयलाई छाडेर उनै भगवान्को शरणमा जान्छु।

**विवरण–** माथिका श्लोकहरूमा खट्वाङ्ग राजाको आत्मज्ञानप्रतिको निष्ठा बताइएको छ। दैत्यहरूलाई मारी देवताहरूको सहायता गर्न गएका राजाले देवताहरूले वर माग भन्दा आफ्नो आयु जान्न चाहे। विषयभोग गर्ने वेलामा मानिसले यसै गरी अनिश्चित आयुलाई सम्झिनुपर्दछ। जे होस्, परमात्माभन्दा अरू पदार्थको चिन्तन उनले कहिल्यै गरेका थिएनन्, यसैले उनलाई विषयभोग गर्ने समयमा कालको ख्याल आयो। एक मुहूर्त मात्र आयु बाँकी रहेको थाहा पाई उनी ऱ्हट-पट दरबार आए र एकान्तमा बसी भगवान्मा मन लगाए। उनको विचारमा आत्मा परमप्रिय छ। त्यस्तो आत्मालाई देवताहरूले पनि जान्न सक्दैनन्। किनभने उनीहरूका इन्द्रिय र बुद्धि पदार्थहरूतिर आकृष्ट र चञ्चल भइरहन्छन्। यी सम्पूर्ण पदार्थहरू त बादलमा सहर देखिएजस्ता हुन्। आत्मामा यो प्रपञ्च छैन, तर मायाद्वारा आरोपित भएको छ। यस्ता अध्यस्त पदार्थहरूमा म आसक्ति गर्दिनँ, म त परमात्माकै शरणमा जान्छु भन्ने निश्चय राजाले गरे। यसरी यहाँ बुद्धिमान् विवेकी व्यक्तिले एक मुहूर्तको पनि कसरी सदुपयोग गर्दछ र परमात्मालाई प्राप्त गर्दछ भन्ने कुरा बताइएको छ। मुमुक्षुहरूले पनि आफ्नो आयु सधैँ एक मुहूर्त मात्र बाँकी छ भन्ने सम्झिनुपर्दछ। हुन पनि आयु कहिले सकिन्छ, थाहै हुँदैन। यही विचार गरी आफ्नो प्रमुख लक्ष्य परमात्माबाट कहिल्यै दृष्टि हटाउनुहुँदैन भनी सिकाउनु यस प्रसङ्गको रहस्य हो।

**इति व्यवसितो बुद्ध्या नारायणगृहीतया ।**
**हित्वान्यभावमज्ञानं ततः स्वं भावमास्थितः ॥ ४८ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार राजा खट्वाङ्ग
**नारायणगृहीतया** = भगवान् नारायणमा लागेको
**बुद्ध्या** = बुद्धिले
**व्यवसितः** = निश्चय गरेर
**अन्यभावं** = अनात्मपदार्थमा आत्मभाव गर्ने
**अज्ञानं** = अज्ञानलाई
**हित्वा** = छाडेर
**ततः** = त्यसपछि
**स्वं भावं** = आफ्नो स्वरूपमा
**आस्थितः** = स्थित भए

**वाक्यार्थ–** यसप्रकार राजा खट्वाङ्ग भगवान्मा लागेको बुद्धिद्वारा निश्चय गरेर अनात्मपदार्थप्रतिको मोहलाई छोडी आत्मस्वरूप भगवान्मा लीन भए।

**यत्तद् ब्रह्म परं सूक्ष्ममशून्यं शून्यकल्पितम्।**

**भगवान् वासुदेवेति यं गृणन्ति हि सात्वताः॥ ४९॥**

**पदार्थ–**

**यत् तत्** = जुन ती भगवान्

**परं ब्रह्म** = परब्रह्म

**सूक्ष्मं** = सूक्ष्मस्वरूप

**अशून्यं** = शून्यरहित तथा

**शून्यकल्पितम्** = शून्यसमान हुनुहुन्छ

**यं** = जसलाई

**सात्वताः** = श्रीकृष्णका भक्तहरू

**भगवान्** = भगवान्

**वासुदेवः इति** = वासुदेव भनी

**हि** = निश्चय नै

**गृणन्ति** = भन्दछन्

**वाक्यार्थ–** आत्मस्वरूप भगवान् परब्रह्मरूप सूक्ष्म, शून्यरहित तथा शून्यसमान हुनुहुन्छ। श्रीकृष्णका भक्तहरू उहाँलाई नै भगवान् वासुदेव भन्दछन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**

**सूर्यवंशानुवर्णने नवमोऽध्यायः॥ ९॥**

# अथ दशमोऽध्यायः

## भगवान् श्रीरामको चरित्र

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**खट्वाङ्गाद् दीर्घबाहुश्च रघुस्तस्मात् पृथुश्रवाः ।**

**अजस्ततो महाराजस्तस्माद् दशरथोऽभवत् ॥ १ ॥**

**पदार्थ—**
**खट्वाङ्गात्** = राजा खट्वाङ्गबाट
**दीर्घबाहुः च** = दीर्घबाहु र
**तस्मात्** = ती दीर्घबाहुबाट
**पृथुश्रवाः** = परम यशस्वी
**रघुः** = रघु जन्मे
**ततः** = ती रघुबाट
**अजः** = अज र
**तस्मात्** = ती अजबाट
**महाराजः** = महाराज
**दशरथः** = दशरथ
**अभवत्** = उत्पन्न भए

**वाक्यार्थ—** राजा खट्वाङ्गका छोरा दीर्घबाहु र दीर्घबाहुका छोरा परम यशस्वी रघु भए। त्यसपछि क्रमशः रघुबाट अज र अजबाट महाराज दशरथको जन्म भयो।

**तस्यापि भगवानेष साक्षाद् ब्रह्ममयो हरिः ।**

**अंशांशेन चतुर्धागात् पुत्रत्वं प्रार्थितः सुरैः ।**

**रामलक्ष्मणभरतशत्रुघ्ना इति संज्ञया ॥ २ ॥**

**पदार्थ—**
**सुरैः** = देवताहरूद्वारा
**प्रार्थितः** = प्रार्थना गरिएका
**एषः** = यी
**साक्षात्** = साक्षात्
**ब्रह्ममयः** = ब्रह्मस्वरूप
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**अंशांशेन** = आफ्ना अंश-अंशले
**रामलक्ष्मणभरतशत्रुघ्नाः इति** = राम, लक्ष्मण, भरत र शत्रुघ्न यी
**चतुर्धा संज्ञया** = चार नामले
**तस्य अपि** = तिनै राजा दशरथको
**पुत्रत्वं** = पुत्रका रूपमा
**अगात्** = जन्मिनुभयो

**वाक्यार्थ—** देवताहरूले प्रार्थना गरेपछि साक्षात् ब्रह्मस्वरूप भगवान् श्रीहरि नै आफ्ना अंशद्वारा राम, लक्ष्मण, भरत र शत्रुघ्न नामले दशरथका पुत्रका रूपमा जन्मिनुभयो।

**तस्यानुचरितं राजन्नृषिभिस्तत्त्वदर्शिभिः ।**

**श्रुतं हि वर्णितं भूरि त्वया सीतापतेर्मुहुः ॥ ३ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**तस्य** = ती
**सीतापतेः** = सीतापति
रामचन्द्रको
**अनुचरितं** = पवित्र चरित्रको

**तत्त्वदर्शिभिः** = ज्ञानी
**ऋषिभिः** = मुनिहरूद्वारा
**भूरि** = धेरै
**वर्णितं** = वर्णन गरिएको छ
**त्वया** = तपाईंले पनि
**मुहुः** = बारम्बार
**श्रुतं हि** = सुन्नुभएकै छ

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सीतापति रामचन्द्रका पवित्र चरित्रहरूको वर्णन ज्ञानी ऋषिहरूले धेरै गरेका छन्। तपाईंले पनि त्यसलाई बारम्बार सुन्नुभएकै छ।

**गुर्वर्थे त्यक्तराज्यो व्यचरदनुवनं पद्मपद्भ्यां प्रियायाः**
**पाणिस्पर्शाक्षमाभ्यां मृजितपथरुजो यो हरीन्द्रानुजाभ्याम् ।**
**वैरूप्याच्छूर्पणख्याः प्रियविरहरुषारोपितभ्रूविजृम्भ-**
**त्रस्ताब्धिर्बद्धसेतुः खलदवदहनः कोसलेन्द्रोऽवतान्नः ॥ ४ ॥**

**पदार्थ–**
**गुर्वर्थे** = गुरु (पिता)को प्रतिज्ञा पूर्ण गर्नका लागि
**त्यक्तराज्यः** = राज्य त्यागेका
**प्रियायाः** = प्रिय पत्नी सीताका
**पाणिस्पर्शाक्षमाभ्यां** = हातको (कडा) स्पर्शलाई पनि सहन गर्न नसक्ने
**पद्मपद्भ्यां** = कोमल चरणकमलले
**अनुवनं** = जङ्गलै-जङ्गल
**व्यचरत्** = घुम्नुभयो
**यः** = जसको
**पथरुजः** = हिँडाइको थकाइ
**हरीन्द्रानुजाभ्याम्** = हनुमान् र लक्ष्मणद्वारा
**मृजितः** = हटाइयो
**शूर्पणख्याः** = शूर्पणखालाई
**वैरूप्यात्** = नाक काटेर विरूप बनाएका कारण
**प्रियविरहरुषा** = पत्नीवियोगको क्रोधले गर्दा
**आरोपितभ्रूविजृम्भत्रस्ताब्धिः** = खुम्चिएका भयङ्कर आँखीभौं देखी डराएको समुद्रमा
**बद्धसेतुः** = पुल बनाएर
**खलदवदहनः** = दावाग्निले झैं दुष्ट राक्षसहरूलाई डढाउने
**कोसलेन्द्रः** = कोसल देशका राजा भगवान् रामचन्द्रले
**नः** = हामीहरूलाई
**अवतात्** = रक्षा गर्नुहोस्

**वाक्यार्थ–** जसले पिताको प्रतिज्ञा पूर्ण गर्नका निम्ति राज्य नै त्याग्नुभयो, जो हातको कडा स्पर्शलाई पनि सहन गर्न नसक्ने पाउ भएकी आफ्नी प्यारी पत्नी सीताका साथ जङ्गलै-जङ्गल घुम्नुभयो, जसको बाटो हिँड्दाको थकाइ हनुमान् र भाइ लक्ष्मणद्वारा सेवा गरी हटाइयो तथा जसले नाक काटी शूर्पणखालाई विरूप बनाएका कारण पत्नीवियोग हुँदा रिसाएर टेढा-टेढा आँखीभौं बनाउँदा डराएको समुद्रमा बाँध बाँधी लङ्का पुगेर डढेलोले जङ्गललाई झैं दुष्ट राक्षसहरूलाई नाश गरिदिनुभयो त्यस्ता कोसलनरेश भगवान् रामचन्द्रले हाम्रो रक्षा गर्नुहोस्।

**विश्वामित्राध्वरे येन मारीचाद्या निशाचराः ।**
**पश्यतो लक्ष्मणस्यैव हता नैर्ऋतपुङ्गवाः ॥ ५ ॥**

**पदार्थ–**
**येन** = जुन भगवान् रामद्वारा
**विश्वामित्राध्वरे** = विश्वामित्रको

| | | |
|---|---|---|
| यज्ञमा | श्रेष्ठ | **लक्ष्मणस्य** = लक्ष्मणले |
| **मारीचाद्याः** = मारीच आदि | **निशाचराः** = ठुला-ठुला | **पश्यतः एव** = हेर्दाहेर्दै नै |
| **नैर्ऋतपुङ्गवाः** = राक्षसहरूमा | दानवहरूलाई | **हताः** = मारिए |

**वाक्यार्थ–** जुन भगवान् रामचन्द्रले विश्वामित्रको यज्ञमा लक्ष्मणले हेर्दाहेर्दै नै राक्षसहरूमा श्रेष्ठ मारीच आदि बलशाली दानवहरूलाई नाश गरिदिनुभएको थियो (त्यस्ता भगवान् रामले हाम्रो रक्षा गर्नुहोस्) ।

**यो लोकवीरसमितौ धनुरैशमुग्रं**
**सीतास्वयंवरगृहे त्रिशतोपनीतम् ।**
**आदाय बालगजलील इवेक्षुयष्टिं**
**सज्जीकृतं नृप विकृष्य बभञ्ज मध्ये ॥ ६ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **त्रिशतोपनीतम्** = तीन सय | **बालगजलीलः** = खेल्दै गरेको |
| **नृप** = हे राजा | वीरहरूद्वारा ल्याइएको | हात्तीको बच्चाले |
| **यः** = जसले | **ऐशं** = भगवान् शङ्करको | **इक्षुयष्टिं इव** = उखुको लाँक्रा |
| **सीतास्वयंवरगृहे** = सीताको | **उग्रं** = ज्यादै ठुलो | भाँचे जस्तै |
| स्वयंवरका निम्ति सजाइएको | **धनुः** = धनुलाई | **मध्ये** = बीचमा |
| राजभवनमा भएको | **आदाय** = उठाई | **बभञ्ज** = भाँचिदिनुभयो |
| **लोकवीरसमितौ** = संसारका | **सज्जीकृतं** = चढाइएको ताँदो | |
| वीरहरूद्वारा युक्त भएको सभामा | **विकृष्य** = तानेर | |

**वाक्यार्थ–** हे राजा ! जसले सीताको स्वयंवरका निम्ति सजाइएको राजभवनमा भएको संसारका वीरहरूद्वारा युक्त सभामा तीन सय जना वीरहरूद्वारा ल्याइएको भगवान् शिवको ज्यादै ठुलो धनुलाई उठाएर ताँदो चढाएर तान्न लाग्दा हात्तीको बच्चाले ख्यालख्यालमैं उखुको लाँक्रा भाँचे झैं त्यो धनुलाई बीचैमा भाँचिदिनुभयो ।

**जित्वानुरूपगुणशीलवयोऽङ्गरूपां**
**सीताभिधां श्रियमुरस्यभिलब्धमानाम् ।**
**मार्गे व्रजन् भृगुपतेर्व्यनयत् प्ररूढं**
**दर्पं महीमकृत यस्त्रिरराजबीजाम् ॥ ७ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | आफू सुहाउँदो रूप, गुण, शील, | **उरसि** = हृदयमा |
| **अनुरूपगुणशीलवयोऽङ्गरूपां** = | अवस्था, अङ्ग र शरीर भएकी | **अभिलब्धमानाम्** = सम्मानपूर्वक |

सजाइएकी
**सीताभिधां** = सीता नाम गरेकी
**श्रियं** = लक्ष्मीजीलाई
**जित्वा** = स्वयंवरमा जितेर
**मार्गे** = बाटोमा
**व्रजन्** = फर्कँदै गर्दा
**भृगुपतेः** = (भृगुवंशीय) परशुरामको
**प्ररूढं दर्पं** = बढेको घमन्डलाई
**व्यनयत्** = नाश गरिदिनुभयो
**यः** = जुन परशुरामले
**महीं** = पृथिवीलाई
**त्रिः** = तीन पटक
**अराजबीजाम्** = क्षत्रियरहित
**अकृत** = बनाएका थिए

**वाक्यार्थ–** भगवान् रामचन्द्र आफू सुहाउँदो रूप, गुण, शील, अवस्था, अङ्ग र शरीर भएकी र सम्मानपूर्वक हृदयमा सजाइएकी लक्ष्मीस्वरूप सीताजीलाई स्वयंवरमा जितेर अयोध्यातर्फ फर्कँदै हुनुहुन्थ्यो। त्यसै वेला तीन पटकसम्म पृथिवीलाई क्षत्रियरहित बनाउनाले बढेको परशुरामको घमन्डलाई भगवान्ले नाश गरिदिनुभयो।

**टिप्पणी–** परशुरामको विषयमा यसै स्कन्धको पन्ध्रौँ र सोह्रौँ अध्यायमा वर्णन गरिएको छ। यस श्लोकमा **त्रिः अराजबीजाम् अकृत** अथवा तीन पटकसम्म क्षत्रियरहित बनाए भनिए पनि यो त्रिशब्द **त्रिःसप्त** वा एक्काइसलाई नै बुझाउनका लागि उपलक्षणका रूपमा प्रयोग गरिएको हो। अन्यत्र (९/१५/१४, ९/१६/१९ मा) **त्रिःसप्त** नै भनिएको छ।

**यः सत्यपाशपरिवीतपितुर्निदेशं**
**स्त्रैणस्य चापि शिरसा जगृहे सभार्यः।**
**राज्यं श्रियं प्रणयिनः सुहृदो निवासं**
**त्यक्त्वा ययौ वनमसूनिव मुक्तसङ्गः॥ ८॥**

**पदार्थ–**
**यः** = जुन भगवान् श्रीरामले
**स्त्रैणस्य अपि** = पत्नीको वशमा परेका भए तापनि
**सत्यपाशपरिवीतपितुः** = (आफूले गरेको प्रतिज्ञा पालन गर्ने) सत्यतारूपी पासोले बाँधिएका पिताको
**निदेशं** = वनवासको आज्ञालाई
**सभार्यः** = पत्नीले सहित
**शिरसा** = शिर झुकाएर
**जगृहे** = स्वीकार गर्नुभयो र
**मुक्तसङ्गः** = आसक्तिरहित सिद्धयोगीले
**असून् इव** = प्राणलाई छाडे झैँ
**राज्यं** = राजकाज
**श्रियं** = श्रीसम्पत्ति
**प्रणयिनः** = प्रिय
**सुहृदः** = भाइबन्धु र
**निवासं च** = अयोध्या नगरीलाई पनि
**त्यक्त्वा** = छाडेर
**वनं** = वनमा
**ययौ** = जानुभयो

**वाक्यार्थ–** पत्नीको वशमा परेका भए तापनि सत्यवादी पिताको प्रतिज्ञालाई पूर्ण गर्न रामचन्द्रले उहाँको वनवासको आज्ञालाई सहर्ष स्वीकार गर्नुभयो र आसक्तिले रहित सिद्धयोगीले सजिलै प्राण छाडे झैँ राजकाज, श्रीसम्पत्ति, प्रिय भाइबन्धु र अयोध्या नगरीलाई समेत चटक्क छाडेर पत्नीसहित वनमा जानुभयो।

**रक्षःस्वसुर्व्यकृत रूपमशुद्धबुद्धे-**

**स्तस्याः खरत्रिशिरदूषणमुख्यबन्धून् ।**
**जघ्ने चतुर्दशसहस्रमपारणीय-**
**कोदण्डपाणिरटमान उवास कृच्छ्रम् ॥ ९ ॥**

**पदार्थ–**
**अशुद्धबुद्धेः** = दुष्टमति भएकी
**रक्षःस्वसुः** = राक्षस रावणकी बहिनी शूर्पणखाको (नाक काटी)
**रूपं** = रूप
**व्यकृत** = विरूप पारिदिनुभयो
**अपारणीयकोदण्डपाणिः**= दुर्लङ्घ्य धनु हातमा लिएर
**तस्याः** = ती शूर्पणखाका
**चतुर्दशसहस्रं** = चौध हजार
**खरत्रिशिरदूषणमुख्यबन्धून्** = खर, त्रिशिर, दूषण आदि मुख्य भाइबन्धुहरूलाई
**जघ्ने** = मारिदिनुभयो र
**अटमानः** = वनमा घुम्दै
**कृच्छ्रम्** = कष्टपूर्वक
**उवास** = बस्नुभयो

**वाक्यार्थ–** श्रीरामले दुष्टमति भएकी रावणकी बहिनी शूर्पणखालाई नाक काटी विरूप बनाइदिनुभयो। हातमा दुर्लङ्घ्य धनु लिएर त्यसका खर, त्रिशिर, दूषण आदि चौध हजार भाइबन्धुहरूलाई पनि नष्ट गर्नुभयो र त्यसपछि वनमा घुम्दै कष्टपूर्वक रहनुभयो।

**सीताकथाश्रवणदीपितहृच्छयेन**
**सृष्टं विलोक्य नृपते दशकन्धरेण ।**
**जघ्नेऽद्भुतैणवपुषाश्रमतोऽपकृष्टो**
**मारीचमाशु विशिखेन यथा कमुग्रः ॥ १० ॥**

**पदार्थ–**
**नृपते** = हे राजा परीक्षित्
**सीताकथाश्रवणदीपितहृच्छयेन** = सीताको कथा (रूप, गुण, सौन्दर्यको वर्णन) सुनेर कामवासनाले उद्दीप्त बनेको
**दशकन्धरेण** = दश टाउके रावणद्वारा
**सृष्टं** = पठाइएको मारीचलाई
**विलोक्य** = देखेर
**अद्भुतैणवपुषा** = आश्चर्यलाग्दो मृगरूपद्वारा (खिचिएर)
**आश्रमतः** = आश्रमबाट
**अपकृष्टः** = टाढा पुऱ्याइनुभएका भगवान् श्रीरामले
**यथा** = जसरी
**उग्रः** = वीरभद्रले
**कम्** = दक्षप्रजापतिलाई (मारेका थिए त्यसै गरी)
**आशु** = तत्काल
**विशिखेन** = बाणप्रहार गरेर
**मारीचं** = मृगरूपधारी मारीचलाई
**जघ्ने** = मारिदिनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सीताको रूप, गुण र सौन्दर्यको वर्णन सुनेर कामासक्त बनेको रावणद्वारा पठाइएको मारीचको आश्चर्यलाग्दो मृगरूपलाई देखेर त्यसको पछि लाग्दै टाढा पुग्नुभएका भगवान् रामचन्द्रले वीरभद्रले दक्षलाई मारे झैं मृगरूपधारी मारीचलाई बाण हानी तत्काल मारिदिनुभयो।

रक्षोऽधमेन वृकवद् विपिनेऽसमक्षं
वैदेहराजदुहितर्यपयापितायाम्।
भ्रात्रा वने कृपणवत् प्रियया वियुक्तः
स्त्रीसङ्गिनां गतिमिति प्रथयंश्चचार ॥ ११ ॥

पदार्थ–
**रक्षोऽधमेन** = राक्षसमा अधम रावणले
**विपिने** = जङ्गलमा
**असमक्षं** = राम, लक्ष्मण नभएको वेलामा
**वृकवत्** = ब्वाँसोले (भेडालाई) झैँ
**वैदेहराजदुहितरि** = विदेहराजकी पुत्री सीतालाई
**अपयापितायाम्** = अपहरण गरेर लगेपछि
**भ्रात्रा** = भाइ लक्ष्मणका साथमा
**वने** = वनमा
**कृपणवत्** = दुःखी झैँ
**प्रियया वियुक्तः** = प्रियादेखि बिछोडिएर
**स्त्रीसङ्गिनां** = स्त्रीसँग सम्बन्ध राख्नेहरूको
**गतिम् इति** = यस्तै गति हुन्छ भन्ने कुरा
**प्रथयन्** = स्पष्ट पार्दै
**चचार** = (वनमा) घुम्नुभयो

**वाक्यार्थ–** जङ्गलमा राम, लक्ष्मण नभएको मौका पारी पापी रावणले ब्वाँसोले भेडालाई हरण गरे झैँ विदेहराजकन्या सीतालाई अपहरण गरी लग्यो। त्यसपछि प्रियावियोगले दुःखी भएका भगवान् श्रीराम लोकलाई स्त्रीसँग सम्बन्ध राख्नेहरूको यस्तै गति हुन्छ भन्ने कुरा स्पष्ट पार्दै भाइ लक्ष्मणका साथमा वनमा घुम्नुभयो।

दग्ध्वात्मकृत्यहतकृत्यमहन् कबन्धं
सख्यं विधाय कपिभिर्दयितागतिं तैः।
बुद्ध्वाथ वालिनि हते प्लवगेन्द्रसैन्यै-
र्वेलामगात् समनुजोऽजभवार्चिताङ्घ्रिः ॥ १२ ॥

पदार्थ–
**आत्मकृत्यहतकृत्यं** = आफूले गर्नुपर्ने (भगवान्को सेवारूप) कर्मद्वारा सम्पूर्ण कर्मबन्धन समाप्त गरेका जटायुको
**दग्ध्वा** = दाहसंस्कार गरेर
**कबन्धं** = कबन्धासुरलाई
**अहन्** = मार्नुभयो
**कपिभिः** = बाँदरहरूसँग
**सख्यं** = मित्रता
**विधाय** = गरेर
**तैः** = ती बाँदरहरूद्वारा
**दयितागतिं** = प्रियपत्नी सीताको खबर
**बुद्ध्वा** = बुझेर
**अथ** = त्यसपछि
**वालिनि** = वालीलाई
**हते** = मारिसकेपछि
**प्लवगेन्द्रसैन्यैः** = वानरराज सुग्रीवका सेनाहरूका साथ
**अजभवार्चिताङ्घ्रिः** = ब्रह्मा र भगवान् शङ्करद्वारा पूजित चरणकमल भएका
**सः** = ती
**मनुजः** = मनुष्यावतार श्रीराम
**वेलां** = समुद्रको किनारमा
**अगात्** = पुग्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीरामचन्द्रले (पहिला सीतालाई बचाउन गरेको भगवत्सेवारूप) कर्मद्वारा सम्पूर्ण कर्मबन्धन समाप्त गरेका जटायुको दाहसंस्कार गर्नुभयो। त्यसपछि कबन्धासुरलाई मार्नुभयो र वालीको वध गरी वानरराज सुग्रीवसँग मित्रता गाँस्नुभयो। तिनै वानरसेनाद्वारा सीताको खबर प्राप्त गरेर ब्रह्मा र भगवान् शङ्करद्वारा समेत पूजित चरणकमल भएका भगवान् रामचन्द्र वानरसेनाका साथमा समुद्रको किनारमा पुग्नुभयो।

**यद्रोषविभ्रमविवृत्तकटाक्षपात-**
**सम्भ्रान्तनक्रमकरो भयगीर्णघोषः।**
**सिन्धुः शिरस्यर्हणं परिगृह्य रूपी**
**पादारविन्दमुपगम्य बभाष एतत्॥ १३॥**

**पदार्थ–**
**यद्रोषविभ्रमविवृत्तकटाक्षपात-सम्भ्रान्तनक्रमकरः** = जुन भगवान्को रिसले टेढिएका आँखीभौँयुक्त नजरको हेराइले छट्पटाएका माछा र गोहीले युक्त भएका
**भयगीर्णघोषः** = डरका कारण गर्जन छाडेका
**रूपी** = शरीर धारण गरेका
**सिन्धुः** = समुद्रले
**शिरसि** = शिरमा
**अर्हणं** = पूजाका सामग्री
**परिगृह्य** = लिएर
**पादारविन्दं** = भगवान् श्रीरामका चरणको शरणमा
**उपगम्य** = गएर
**एतत्** = यसप्रकार
**बभाषे** = भन्न लागे

**वाक्यार्थ–** (किनारमा पुगी पूजा-अर्चना गर्दा पनि समुद्रमा कुनै प्रभाव नपरेको देखी) भगवान् श्रीरामले रिसले टेढा-टेढा नजरले समुद्रलाई हेर्नुभयो। त्यस हेराइबाट समुद्रमा रहेका ठुला-ठुला माछा र गोहीहरू पनि आत्तिई छट्पटाउन लागे। यसपछि डरका कारण गर्जन छाडेका समुद्रले शरीर धारण गरेर शिरमा विभिन्न प्रकारका स्वागतसत्कारका सामग्री लिई भगवान् रामचन्द्रको शरणमा आएर यसप्रकार भन्न थाले।

**न त्वां वयं जडधियो नु विदाम भूमन्**
**कूटस्थमादिपुरुषं जगतामधीशम्।**
**यत्सत्त्वतः सुरगणा रजसः प्रजेशा**
**मन्योश्च भूतपतयः स भवान् गुणेशः॥ १४॥**

**पदार्थ–**
**भूमन्** = हे सर्वव्यापक भगवान्
**जगतां** = संसारका
**अधीशम्** = मालिक
**कूटस्थं** = निश्चल
**आदिपुरुषं** = आदिपुरुष
**त्वां** = हजुरलाई
**जडधियः** = मन्दबुद्धि भएका
**वयं** = हामीहरूले
**नु** = निश्चय नै
**न विदामः** = जान्न सक्दैनौँ
**यत्सत्त्वतः** = जुन हजुरको सत्त्वगुणबाट
**सुरगणाः** = देवसमूह
**रजसः** = रजोगुणबाट

**प्रजेशाः** = प्रजापतिहरू र
**मन्योः च** = तमोगुणबाट
**भूतपतयः** = रुद्रगण उत्पन्न हुन्छन्
**सः** = त्यस्ता
**भवान्** = हजुर
**गुणेशः** = गुणका मालिक हुनुहुन्छ

**वाक्यार्थ–** हे सर्वव्यापक भगवान् ! संसारका मालिक एवं निश्चल आदिपुरुष हजुरलाई जडबुद्धि भएका हामीले बुझ्न सक्दैनौँ। हजुरको सत्त्वगुणबाट देवसमूह, रजोगुणबाट प्रजापतिहरू र तमोगुणबाट रुद्रगण उत्पन्न हुन्छन्। अतः हजुर सम्पूर्ण गुणका मालिक हुनुहुन्छ।

**कामं प्रयाहि जहि विश्रवसोऽवमेहं**
**त्रैलोक्यरावणमवाप्नुहि वीर पत्नीम्।**
**बध्नीहि सेतुमिह ते यशसो वितत्यै**
**गायन्ति दिग्विजयिनो यमुपेत्य भूपाः॥ १५॥**

**पदार्थ–**
**वीर** = हे वीर
**कामं** = इच्छाअनुसार
**प्रयाहि** = (मलाई) पार गर्नुहोस्
**विश्रवसः** = विश्रवाको
**अवमेहं** = विष्ठातुल्य (कुपुत्र)
**त्रैलोक्यरावणं** = तीनै लोकलाई दुःख दिने रावणलाई
**जहि** = मार्नुहोस् र
**पत्नीम्** = आफ्नी पत्नीलाई
**अवाप्नुहि** = प्राप्त गर्नुहोस्
**इह** = यहाँ ममाथि
**सेतुम्** = पुल
**बध्नीहि** = बाँध्नुहोस्
**यं उपेत्य** = जुन कार्यलाई लिएर
**ते** = हजुरको
**यशसः** = कीर्ति
**वितत्यै** = फैलाउन
**दिग्विजयिनः** = दिग्विजय गर्न चाहने
**भूपाः** = राजाहरूले
**गायन्ति** = (हजुरको यश) गाउनेछन्

**वाक्यार्थ–** हे वीर ! इच्छाअनुसार मलाई पार गर्नुहोस्। विश्रवाको कुपुत्र, तीनै लोकलाई कष्ट दिने रावणलाई मार्नुहोस् र आफ्नी पत्नीलाई प्राप्त गर्नुहोस्। यहाँ ममाथि पुल बनाउनुहोस्। जसका कारण दिग्विजय गर्न चाहने ठुला–ठुला राजाहरूले समेत हजुरको गुणगान गर्नेछन्।

**बद्ध्वोदधौ रघुपतिर्विविधाद्रिकूटैः**
**सेतुं कपीन्द्रकरकम्पितभूरुहाङ्गैः।**
**सुग्रीवनीलहनुमत्प्रमुखैरनीकै–**
**र्लङ्कां विभीषणदृशाविशदग्रदग्धाम्॥ १६॥**

**पदार्थ–**
**रघुपतिः** = रघुवंश शिरोमणि रामचन्द्रले
**विविधाद्रिकूटैः** = विभिन्न पहाडका ढुङ्गाहरूद्वारा र
**कपीन्द्रकरकम्पितभूरुहाङ्गैः** = बाँदरसेनाका हातले हल्लाएर उखेलिएका वृक्षहरूद्वारा
**उदधौ** = समुद्रमा

**सेतुं** = पुल
**बद्ध्वा** = बनाएर
**सुग्रीवनीलहनुमत्प्रमुखैः** = सुग्रीव, नील, हनुमान् आदि प्रमुख वीरले सहित
**अनीकैः** = सेनाका साथमा
**विभीषणदृशा** = विभीषणको सल्लाहअनुसार
**अग्रदग्धाम्** = हनुमान्द्वारा पहिले नै जलाइएको
**लङ्कां** = लङ्कामा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीरामचन्द्रले विभिन्न पहाडका ढुङ्गाहरूद्वारा र वानरका हातद्वारा उखेलिएका वृक्षहरूद्वारा समुद्रमा पुल बनाउनुभयो। त्यसपछि सुग्रीव, नील र हनुमान् आदि प्रमुख वीरले सहित वानरसेनाका साथमा हनुमान्द्वारा पहिला नै जलाइएको लङ्कामा विभीषणले दिएको सल्लाहअनुसार प्रवेश गर्नुभयो।

**सा वानरेन्द्रबलरुद्धविहारकोष्ठ-**
**श्रीद्वारगोपुरसदोवलभीविटङ्का।**
**निर्भज्यमानधिषणध्वजहेमकुम्भ-**
**शृङ्गाटका गजकुलैर्ह्रदिनीव घूर्णा॥ १७॥**

**पदार्थ–**
**वानरेन्द्रबलरुद्धविहारकोष्ठ-श्रीद्वारगोपुरसदोवलभीविटङ्का** = वानरराजका सेनाद्वारा विहार गर्ने स्थान, अन्नभण्डार, खजानागृह, ढोका, चोक, सभाभवन, पक्षिगृह आदिले सहित सम्पूर्ण वस्तु घेरिएकी
**निर्भज्यमानधिषणध्वजहेमकुम्भ-शृङ्गाटकाः** = वेदी, ध्वजा, सुनका कलश र चोकहरू भत्काउँदै गरिएकी
**गजकुलैः** = हात्तीका समूहले
**ह्रदिनी इव** = सानो पोखरीलाई झैं
**सा** = ती लङ्का
**घूर्णा** = ध्वस्त पारिइन्

**वाक्यार्थ–** वानरराजका सेनाले विहारस्थान, अन्नभण्डार, खजानागृह, दरबारका ढोका, चोक, सभाभवन, पक्षिगृहसहित सम्पूर्ण लङ्कालाई घेरिदिए। त्यसपछि वानरसेनाले त्यहाँका वेदी, ध्वजा, द्वारकलश र चोकहरू भत्काउँदै हात्तीको समूहले सानो पोखरीलाई नष्ट पारे झैं सम्पूर्ण लङ्कालाई ध्वस्त पारिदिए।

**रक्षःपतिस्तदवलोक्य निकुम्भकुम्भ-**
**धूम्राक्षदुर्मुखसुरान्तनरान्तकादीन्।**
**पुत्रं प्रहस्तमतिकायविकम्पनादीन्**
**सर्वानुगान् समहिनोदथ कुम्भकर्णम्॥१८॥**

**पदार्थ–**
**रक्षःपतिः** = राक्षसराज रावणले
**तत्** = वानरसेनाले लङ्का घेरेको
**अवलोक्य** = देखेर
**निकुम्भकुम्भधूम्राक्षदुर्मुख-सुरान्तनरान्तकादीन्** = निकुम्भ,

कुम्भ, धूम्राक्ष, दुर्मुख, सुरान्त, नरान्तक आदि तथा
**प्रहस्तम्** = प्रहस्त
**अतिकायविकम्पनादीन्** = अतिकाय र विकम्पन आदि
**सर्वानुगान्** = सम्पूर्ण अनुचर र
**पुत्रं** = पुत्र मेघनाद
**अथ** = तथा
**कुम्भकर्णम्** = भाइ कुम्भकर्णलाई
**समहिनोत्** = युद्धमा पठायो

**वाक्यार्थ–** वानरसेनाले लङ्कालाई घेरी ध्वस्त पार्न लागेको देखेर राक्षसराज रावणले निकुम्भ, कुम्भ, धूम्राक्ष, दुर्मुख, सुरान्त, नरान्तक, प्रहस्त, विकम्पन आदि आफ्ना सबै अनुचर, पुत्र मेघनाद र भाइ कुम्भकर्णलाई युद्ध गर्न पठायो।

**तां यातुधानपृतनामसिशूलचाप-**
**प्रासर्ष्टिशक्तिशरतोमरखड्गदुर्गाम्।**
**सुग्रीवलक्ष्मणमरुत्सुतगन्धमाद-**
**नीलाङ्गदर्क्षपनसादिभिरन्वितोऽगात्॥ १९॥**

**पदार्थ–**
**सुग्रीवलक्ष्मणमरुत्सुतगन्धमादनीलाङ्गदर्क्षपनसादिभिः** = सुग्रीव, लक्ष्मण, वायुपुत्र हनुमान्, गन्धमाद, नील, अङ्गद, ऋक्ष, पनस आदि वीरहरूले
**अन्वितः** = सहित भगवान् श्रीरामचन्द्रले
**असिशूलचापप्रासर्ष्टिशक्तिशरतोमरखड्गदुर्गाम्** = तरबार, त्रिशूल, धनु, ऋष्टि, शक्ति, बाण, भाला, खड्ग आदि शस्त्रास्त्रले गर्दा आक्रमण गर्न कठिन
**तां** = त्यो रावणको
**यातुधानपृतनां** = राक्षससेनालाई
**अगात्** = आक्रमण गर्नुभयो

**वाक्यार्थ–** रावणको सेना तरबार, त्रिशूल, धनु, ऋष्टि, शक्ति, बाण, भाला, खड्ग आदि शस्त्रास्त्रले सुरक्षित भएका कारण आक्रमण गर्न नसकिने खालको थियो। तापनि भगवान् श्रीरामचन्द्रले सुग्रीव, लक्ष्मण, हनुमान्, गन्धमाद, नील, अङ्गद, ऋक्ष, पनस आदि वीरहरूलाई साथमा लिएर त्यस राक्षससेनालाई आक्रमण गर्नुभयो।

**तेऽनीकपा रघुपतेरभिपत्य सर्वे**
**द्वन्द्वं वरूथमिभपत्तिरथाश्वयोधैः।**
**जघ्नुर्द्रुमैर्गिरिगदेषुभिरङ्गदाद्याः**
**सीताभिमर्षहतमङ्गलरावणेशान्॥ २०॥**

**पदार्थ–**
**ते सर्वे** = ती सबै
**रघुपतेः** = भगवान् श्रीरामका
**अनीकपाः** = सेनापतिहरू
**इभपत्तिरथाश्वयोधैः** = हात्ती, पैदल योद्धा अनि रथ र घोडा चढेका योद्धाहरूको साथमा
**वरूथं** = राक्षस सेनासँग
**द्वन्द्वं** = आपसमा द्वन्द्वयुद्ध गर्दै

| | | |
|---|---|---|
| **अभिपत्य** = अगाडि बढेर | **गिरिगदेषुभिः** = ठुला-ठुला ढुङ्गा, | स्पर्श गर्दा नै मङ्गल नष्ट भएका |
| **अङ्गदाद्याः** = अङ्गद आदि | गदा र बाणको प्रहारले | रावणको सेनालाई |
| श्रीरामका सेनाहरूले | **सीताभिमर्षहतमङ्गलरावणेशान्** = | **जघ्नुः** = मार्न थाले |
| **द्रुमैः** = वृक्षहरूद्वारा | सीतालाई हरण गर्ने उद्देश्यले | |

**वाक्यार्थ–** भगवान् श्रीरामका सेनापतिहरूले हात्ती, घोडा, रथ र पैदल योद्धाहरूको साथमा अघि बढेको राक्षस सेनासँग द्वन्द्वयुद्ध गर्न थाले। अङ्गद आदि सेनापतिहरूले वृक्ष, ठुला-ठुला ढुङ्गा, गदा र बाण आदिको प्रहारले सीतालाई हरण गर्ने उद्देश्यले उहाँलाई स्पर्श गर्दा नै मङ्गल नष्ट भएका राक्षस सेनालाई मार्न थाले।

**रक्षःपतिः स्वबलनष्टिमवेक्ष्य रुष्ट**

**आरुह्य यानकमथाभिससार रामम्।**

**स्वःस्यन्दने द्युमति मातलिनोपनीते**

**विभ्राजमानमहनन्निशितैः क्षुरप्रैः॥२१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **आरुह्य** = चढेर | **द्युमति** = चम्किलो |
| **स्वबलनष्टिम्** = आफ्नो सेनाको | **रामम्** = श्रीरामचन्द्रको | **स्वःस्यन्दने** = स्वर्गीय रथमा |
| विनाशलाई | **अभिससार** = सामुन्ने आयो र | **विभ्राजमानं** = विराजमान |
| **अवेक्ष्य** = देखेर | **अथ** = त्यसपछि | श्रीरामलाई |
| **रुष्टः** = अत्यन्त रिसाएको | **मातलिना** = (इन्द्रका सारथि) | **क्षुरप्रैः** = तिखा-तिखा |
| **रक्षःपतिः** = राक्षसराज रावण | मातलिद्वारा | **निशितैः** = बाणहरूद्वारा |
| **यानकं** = विमानमा | **उपनीते** = ल्याइएको | **अहनत्** = प्रहार गर्‍यो |

**वाक्यार्थ–** आफ्नो सेनाको विनाशलाई देखेर अत्यन्त रिसाएको राक्षसराज रावण विमानमा चढी श्रीरामचन्द्रको सामुन्ने युद्ध गर्न आयो। त्यसपछि उसले मातलिद्वारा ल्याइएको इन्द्रको दिव्य रथमा विराजमान श्रीरामचन्द्रलाई तिखा-तिखा बाणहरूले प्रहार गर्‍यो।

**रामस्तमाह पुरुषादपुरीष यन्नः**

**कान्तासमक्षमसतापहृता श्ववत् ते।**

**त्यक्तत्रपस्य फलमद्य जुगुप्सितस्य**

**यच्छामि काल इव कर्तुरलङ्घ्यवीर्यः॥ २२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तं** = त्यो रावणलाई | **पुरुषादपुरीष** = पुरुषभक्षी |
| **रामः** = भगवान् श्रीरामले | **आह** = भन्नुभयो | राक्षसको विष्ठातुल्य हे राक्षस |

**असता** = तँ दुष्टले
**नः** = हाम्रो
**असमक्षं** = अनुपस्थितिमा
**श्ववत्** = कुकुरले झैँ
**यत्** = जुन हाम्री
**कान्ता** = प्रिय पत्नीलाई
**अपहृता** = अपहरण गरिस्
**त्यक्तत्रपस्य** = निर्लज्ज
**जुगुप्सितस्य कर्तुः** = खराब काम गर्ने
**ते** = तँलाई
**अद्य** = आज (म)
**अलङ्घ्यवीर्यः** = अतिपराक्रमी
**कालः इव** = कालले झैँ
**फलं** = (तैँले गरेको कुकर्मको) फल
**यच्छामि** = दिन्छु

**वाक्यार्थ–** भगवान् श्रीरामले रावणलाई भन्नुभयो– हे दुष्ट राक्षस ! तैँले हाम्रो अनुपस्थितिमा कुकुरले झैँ मेरी प्रिय पत्नी सीतालाई अपहरण गरिस्, लाज पचाएर खराब कर्म गर्ने तँलाई आज म सर्वशक्तिशाली कालले झैँ तेरो कुकर्मको फलरूप दण्ड दिन्छु।

**एवं क्षिपन् धनुषि सन्धितमुत्ससर्ज**
**बाणं स वज्रमिव तद्धृदयं बिभेद ।**
**सोऽसृग् वमन् दशमुखैर्न्यपतद् विमाना-**
**द्धाहेति जल्पति जने सुकृतीव रिक्तः ॥ २३ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**क्षिपन्** = हप्काउँदै
**धनुषि** = धनुमा
**सन्धितं** = चढाइएको
**बाणं** = बाण
**उत्ससर्ज** = छोड्नुभयो
**सः** = त्यो बाणले
**वज्रम् इव** = बज्र जस्तो
**तद्धृदयं** = रावणको छातीलाई
**बिभेद** = फुटायो
**सः** = त्यो रावण
**दशमुखैः** = दश मुखबाट
**असृक्** = रगत
**वमन्** = छाद्दै
**रिक्तः** = पुण्यभोग सकिएर स्वर्गबाट खसेको
**सुकृती इव** = पुण्यात्मा झैँ
**जने** = आफन्त जनहरू
**हाहा इति** = हाय-हाय गरी
**जल्पति** = चिच्याउँदै गर्दा
**विमानात्** = (पुष्पक) विमानबाट
**न्यपतत्** = खस्यो

**वाक्यार्थ–** यसप्रकार हप्काउँदै भगवान् श्रीरामले धनुमा बाण चढाएर रावणलाई प्रहार गर्नुभयो। त्यस बाणले वज्र जस्तो रावणको छाती फुटायो। त्यसपछि ऊ आफ्ना दसै मुखबाट रगत छाद्दै आफन्त जनहरू हाय-हाय गरी चिच्याइरहेकै वेलामा जसरी पुण्यभोग सकिएका व्यक्तिहरू स्वर्गबाट खस्दछन् त्यसै गरी पुष्पक विमानबाट तल खस्यो।

**ततो निष्क्रम्य लङ्काया यातुधान्यः सहस्रशः ।**
**मन्दोदर्या समं तस्मिन् प्ररुदन्त्य उपाद्रवन् ॥ २४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सहस्रशः** = हजारौँ
**यातुधान्यः** = राक्षसीहरू
**मन्दोदर्या** = मन्दोदरी
**समं** = सहित

**लङ्कायाः** = लङ्काबाट
**निष्क्रम्य** = निस्केर
**प्ररुदन्त्यः** = रुँदै
**तस्मिन्** = त्यो रणभूमिमा
**उपाद्रवन्** = दौडेर आए

**वाक्यार्थ–** त्यसपछि हजारौँ राक्षसीहरू मन्दोदरीका साथमा लङ्काबाट निस्केर रुँदै त्यस रणभूमिमा आए।

**स्वान् स्वान् बन्धून् परिष्वज्य लक्ष्मणेषुभिरर्दितान्।**
**रुरुदुः सुस्वरं दीना घ्नन्त्य आत्मानमात्मना॥ २५॥**

**पदार्थ–**
**लक्ष्मणेषुभिः** = लक्ष्मणका बाणहरूद्वारा
**अर्दितान्** = मारिएका
**स्वान् स्वान्** = आ–आफ्ना
**बन्धून्** = बन्धु (पति)हरूलाई
**परिष्वज्य** = अँगालो हालेर
**आत्मना** = आफैँले
**आत्मानं** = आफ्नो छातीमा
**घ्नन्त्यः** = पिट्दै
**दीनाः** = अत्यन्त दुःखी भएका राक्षसीहरू
**सुस्वरं** = डाँको छाडेर
**रुरुदुः** = रुन थाले

**वाक्यार्थ–** रणभूमिमा आउँदा अत्यन्त दुःखी भएका राक्षसपत्नीहरू लक्ष्मणका बाणले मारिएका आ–आफ्ना पतिहरूलाई अँगालो हाल्दै आफैँले आफ्नो छाती पिट्दै डाँको छाडेर रुन लागे।

**हा हताः स्म वयं नाथ लोकरावण रावण।**
**कं यायाच्छरणं लङ्का त्वद्विहीना परार्दिता॥ २६॥**

**पदार्थ–**
**हा नाथ** = हे नाथ
**वयं** = हामीहरू
**हताः स्म** = मारियौँ
**लोकरावण** = लोकलाई रुवाउने
**रावण** = हे रावण
**त्वद्विहीना** = हजुरद्वारा छाडिएकी
**परार्दिता** = शत्रुहरूद्वारा सताइएकी
**लङ्का** = यो लङ्का नगरी
**कं** = कसको
**शरणं** = शरणमा
**यायात्** = जान्छे

**वाक्यार्थ–** हे नाथ ! हामी (जिउँदै) मारियौँ। लोकलाई रुवाउने हे रावण ! हजुरद्वारा छाडिएकी र शत्रुहरूद्वारा सताइएकी यो लङ्का नगरी अब कसको शरणमा जान्छे ?

**नैवं वेद महाभाग भवान् कामवशं गतः।**
**तेजोऽनुभावं सीताया येन नीतो दशामिमाम्॥ २७॥**

**पदार्थ–**
**महाभाग** = हे महाभाग
**कामवशं** = कामको वशमा
**गतः** = परेका
**भवान्** = हजुरले
**सीतायाः** = सीताको
**एवं** = यसप्रकारको
**तेजोऽनुभावं** = तेजप्रभावलाई
**न वेद** = बुझ्नुभएन
**येन** = जुन भुलले
**इमां** = यो
**दशाम्** = अवस्था
**नीतः** = ल्यायो

**वाक्यार्थ–** हे महाभाग ! कामको वशमा परेर हजुरले सीताको प्रभावलाई बुझ्नुभएन (र उनलाई अपहरण गर्नुभयो) । त्यसै भुलका कारण आज यो अवस्था भयो।

**कृतैषा विधवा लङ्का वयं च कुलनन्दन।**
**देहः कृतोऽन्नं गृध्राणामात्मा नरकहेतवे॥ २८॥**

**पदार्थ–**
**कुलनन्दन** = हे राक्षसकुललाई आनन्द दिलाउने राक्षसराज रावण (हजुरद्वारा)
**एषा** = यी
**लङ्का** = लङ्का नगरी र
**वयं च** = हामीहरू पनि
**विधवा** = अनाथ
**कृता** = बनाइयौँ
**देहः** = हजुरको शरीर
**गृध्राणां** = गिद्धहरूको
**अन्नं** = भोजन तथा
**आत्मा** = जीवात्मा
**नरकहेतवे** = नरकको अधिकारी
**कृतः** = बनाइयो

**वाक्यार्थ–** हे राक्षसकुललाई आनन्दित पार्ने रावण ! हजुरले लङ्का नगरी र हामी राक्षसीहरूलाई विधवा बनाउनुभयो। आफ्नो शक्तिशाली शरीरलाई पनि गिद्धहरूको आहारा र जीवात्मालाई नरकको अधिकारी बनाउनुभयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स्वानां विभीषणश्चक्रे कोसलेन्द्रानुमोदितः।**
**पितृमेधविधानेन यदुक्तं साम्परायिकम्॥ २९॥**

**पदार्थ–**
**कोसलेन्द्रानुमोदितः** = कोशलाधीश भगवान् रामचन्द्रबाट आज्ञा प्राप्त गरेका
**विभीषणः** = विभीषणले
**पितृमेधविधानेन** = पितृयज्ञको विधिद्वारा
**यत् उक्तं** = जस्तो निर्देश गरिएको छ त्यस्तै गरी
**स्वानां** = युद्धमा मारिएका आफन्तहरूको
**साम्परायिकम्** = अन्त्येष्टि कर्म
**चक्रे** = गरे

**वाक्यार्थ–** भगवान् श्रीरामचन्द्रको आज्ञाले विभीषणले पितृयज्ञको विधिद्वारा निर्देश गरिएअनुसार युद्धमा मारिएका आफन्तहरूको अन्त्येष्टि कर्म गरे।

**ततो ददर्श भगवानशोकवनिकाश्रमे।**
**क्षामां स्वविरहव्याधिं शिंशपामूलमास्थिताम्॥ ३०॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**भगवान्** = भगवान् श्रीरामचन्द्रले
**अशोकवनिकाश्रमे** = अशोक वाटिकाको आश्रममा
**शिंशपामूलमास्थिताम्** = सिसौको वृक्षको फेदमा बसेकी
**क्षामां** = दुब्ली
**स्वविरहव्याधिं** = आफ्नो विरहले पीडित सीतालाई
**ददर्श** = देख्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीरामचन्द्रले अशोक वाटिकाको आश्रममा सिसौको फेदमा बसेकी अत्यन्त दुब्ली र पतिवियोगको पीडाले दुःखी भएकी सीतालाई देख्नुभयो।

**रामः प्रियतमां भार्यां दीनां वीक्ष्यान्वकम्पत।**
**आत्मसन्दर्शनाह्लाद विकसन्मुखपङ्कजाम्॥ ३१॥**

**पदार्थ–**
**रामः** = भगवान् श्रीराम
**आत्मसन्दर्शनाह्लादविकसन्मुख-पङ्कजाम्** = पतिदर्शनको खुसीले प्रसन्न मुखकमल भएकी
**प्रियतमां** = प्राणप्यारी
**भार्यां** = पत्नी सीतालाई
**दीनां** = दुःखी
**वीक्ष्य** = देखेर
**अन्वकम्पत** = (प्रेम र कृपाले) गद्गद हुनुभयो

**वाक्यार्थ–** भगवान् श्रीराम आफूलाई देखेर प्रसन्न मुख भएकी प्राणप्यारी पत्नी सीताको दीनहीन अवस्थालाई हेरेर प्रेम र करुणाले गद्गद हुनुभयो।

**आरोप्यारुरुहे यानं भ्रातृभ्यां हनुमद्युतः।**
**विभीषणाय भगवान् दत्त्वा रक्षोगणेशताम्॥ ३२॥**
**लङ्कामायुश्च कल्पान्तं ययौ चीर्णव्रतः पुरीम्।**
**अवकीर्यमाणः कुसुमैर्लोकपालार्पितैः पथि॥ ३३॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीरामचन्द्रले
**विभीषणाय** = विभीषणलाई
**रक्षोगणेशताम्** = राक्षसगणको स्वामित्व
**कल्पान्तं** = एक कल्प बराबरको
**आयुः** = आयु तथा
**लङ्कां च** = लङ्कापुरीको राज्य पनि
**दत्त्वा** = दिएर
**चीर्णव्रतः** = वनवासको व्रत पूरा गरी (पहिला सीतालाई)
**यानं** = विमानमा
**आरोप्य** = चढाएर
**भ्रातृभ्यां** = लक्ष्मण, सुग्रीव आदि भाइ तथा
**हनुमद्युतः** = हनुमान्का साथमा (आफू पनि)
**आरुरुहे** = (विमान) चढ्नुभयो र
**पथि** = मार्गमा
**लोकपालार्पितैः** = लोकपालहरूद्वारा चढाइएका
**कुसुमैः** = फूलहरूद्वारा
**अवकीर्यमाणः** = सुसज्जित भएर
**पुरीम्** = आफ्नो अयोध्यापुरीमा
**ययौ** = फर्किनुभयो

**वाक्यार्थ–** भगवान् श्रीरामचन्द्रले विभीषणलाई सम्पूर्ण राक्षसगणको स्वामित्व, एक कल्प बराबरको आयु र लङ्काको राज्य दिनुभयो। यसरी आफ्नो चौध वर्षको वनवास व्रत पूरा गरिसकेपछि उहाँ पहिला सीतालाई विमानमा चढाई लक्ष्मण, सुग्रीव आदि भाइ र हनुमान् आदि अनुचरका साथमा आफू पनि विमान चढ्नुभयो र लोकपालहरूद्वारा पुष्पवृष्टि गरिएको बाटो हुँदै आफ्नो अयोध्यानगरीतर्फ फर्किनुभयो।

**उपगीयमानचरितः शतधृत्यादिभिर्मुदा ।**
**गोमूत्रयावकं श्रुत्वा भ्रातरं वल्कलाम्बरम् ॥ ३४ ॥**
**महाकारुणिकोऽतप्यज्जटिलं स्थण्डिलेशयम् ।**
**भरतः प्राप्तमाकर्ण्य पौरामात्यपुरोहितैः ॥ ३५ ॥**
**पादुके शिरसि न्यस्य रामं प्रत्युद्यतोऽग्रजम् ।**
**नन्दिग्रामात् स्वशिबिराद् गीतवादित्रनिःस्वनैः ॥ ३६ ॥**
**ब्रह्मघोषेण च मुहुः पठद्भिर्ब्रह्मवादिभिः ।**
**स्वर्णकक्षपताकाभिर्हैमैश्चित्रध्वजै रथैः ॥ ३७ ॥**
**सदश्वै रुक्मसन्नाहैर्भटैः पुरटवर्मभिः ।**
**श्रेणीभिर्वारमुख्याभिर्भृत्यैश्चैव पदानुगैः ॥ ३८ ॥**
**पारमेष्ठ्यान्युपादाय पण्यान्युच्चावचानि च ।**
**पादयोर्न्यपतत् प्रेम्णा प्रक्लिन्नहृदयेक्षणः ॥ ३९ ॥**

**पदार्थ–**
**शतधृत्यादिभिः** = ब्रह्मा आदि देवताहरूद्वारा
**मुदा** = प्रसन्न भएर
**उपगीयमानचरितः** = लीलावर्णन गरिएका
**महाकारुणिकः** = अति दयालु श्रीरामचन्द्र
**भ्रातरं** = भाइ भरतले
**गोमूत्रयावकं** = गोमूत्रमा पकाएको अन्न मात्र खाने
**वल्कलाम्बरम्** = रुखका बोक्राको कपडा लगाउने
**जटिलं** = जटाधारी र
**स्थण्डिलेशयम्** = भुइँमा मात्र सुत्ने गर्दछन् भन्ने
**श्रुत्वा** = सुनेर
**अतप्यत्** = अत्यन्त दुःखी हुनुभयो
**भरतः** = भरत पनि
**अग्रजम्** = दाजु रामचन्द्र
**प्राप्तं** = फर्किनुभयो (भन्ने)
**आकर्ण्य** = सुनेर
**पादुके** = खराउ
**शिरसि** = शिरमा
**न्यस्य** = राखेर
**पौरामात्यपुरोहितैः** = नगरवासी, मन्त्रिगण र पुरोहितहरूका साथमा
**स्वशिबिरात्** = आफ्नो शिबिर
**नन्दिग्रामात्** = नन्दिग्रामदेखि
**गीतवादित्रनिःस्वनैः** = गाउने, बजाउने ध्वनि तथा
**ब्रह्मवादिभिः** = वैदिक ब्राह्मणहरूद्वारा
**मुहुः** = बारम्बार
**पठद्भिः** = पढिएका
**ब्रह्मघोषेण च** = वेदमन्त्र उच्चारणको ध्वनिका साथमा
**स्वर्णकक्षपताकाभिः** = सुवर्णमय किनारा भएका र
**हैमैः** = सुनौला
**चित्रध्वजैः** = रङ्गी–विरङ्गी ध्वजाले सजिएका
**रुक्मसन्नाहैः** = सुनका आभूषण लगाएका
**सदश्वैः** = श्रेष्ठ घोडाहरूले युक्त
**रथैः** = रथमा चढेर

**पुरटवर्मभिः** = सुनका कवच लगाएका
**भटैः** = सैनिकहरू
**श्रेणीभिः** = साहु, महाजनहरू
**वारमुख्याभिः** = राम्रा-राम्रा स्त्रीहरू
**एवं** = तथा
**पदानुगैः** = अनुयायी
**भृत्यैश्च** = सेवकहरूका साथमा
**पारमेष्ठ्यानि** = सबैभन्दा उत्तम
**उच्चावचानि** = ठुला-साना
**पण्यानि** = विभिन्न सामानहरू
**उपादाय** = लिएर
**रामं प्रत्युद्यतः** = श्रीरामचन्द्रको अगाडि पुगे
**प्रेम्णा** = अतिशय प्रेमका कारण
**प्रक्लिन्नहृदयेक्षणः** = छाती र आखा भिजाउँदै
**पादयोः** = श्रीरामका पाउमा
**न्यपतत् च** = परे

**वाक्यार्थ–** (श्रीराम वनवासबाट फर्किनुभएकोले) हर्षले युक्त भएका ब्रह्मा आदि देवताहरूद्वारा लीलावर्णन गरिएका भगवान् श्रीराम चाहिँ भाइ भरत गोमूत्रमा पकाएको अन्न मात्र खाने, रुखका बोक्राका बस्त्र मात्र लगाउने र भुइँमा मात्र सुत्ने व्रत धारण गरी जटाधारी तपस्वी बनेका छन् भन्ने सुनेर अत्यन्त दुःखी हुनुभयो। उता भरत पनि दाजु फर्किनुभयो भन्ने सुनेर नगरवासी, मन्त्री र गुरु-पुरोहितका साथमा दाजु श्रीरामका खराउलाई शिरमा राखेर स्वागतका निम्ति मङ्गलगान, बाजा र वेदपाठी ब्राह्मणहरूले उच्चारण गरेको वेदको ध्वनि, रङ्गी-विरङ्गी ध्वजाले सजिएका एवं सुनका आभूषण लगाएका घोडाहरू भएका रथ र सुनका कवच लगाएका सैनिकहरूका साथ आफ्नो शिविर नन्दिग्रामबाट हिँडे। नगरका साहु, महाजनहरू, राम्रा-राम्रा स्त्रीहरू र सेवकहरू पनि विभिन्न किसिमका साना-ठुला उत्कृष्ट सामग्रीहरू लिएर त्यस यात्रामा सामेल भए। यसरी सबैका साथमा विभिन्न सामग्रीले सुसज्जित भएर आएका भरत दाजु श्रीरामचन्द्रको अगाडि पुग्ने बित्तिकै प्रेमले गद्गद भई आँखाबाट हर्षका आँसु बगाउँदै दाजुको पाउमा परे।

**पादुके न्यस्य पुरतः प्राञ्जलिर्बाष्पलोचनः।**
**तमाश्लिष्य चिरं दोर्भ्यां स्नापयन्नेत्रजैर्जलैः॥ ४०॥**

पदार्थ–
**पादुके** = दुइटा खराउलाई
**पुरतः** = श्रीरामको अगाडि
**न्यस्य** = राखेर
**बाष्पलोचनः** = आँखाबाट आँसु बगाउँदै
**प्राञ्जलिः** = हात जोडेर उभिएका
**तं** = ती भरतलाई (श्रीरामले)
**दोर्भ्यां** = आफ्ना दुबै हातले
**चिरं** = धेरै समयसम्म
**आश्लिष्य** = अँगालो मारेर
**नेत्रजैः** = आँखाबाट बगेको
**जलैः** = आँसुले
**स्नापयत्** = भिजाइदिनुभयो

**वाक्यार्थ–** भरतले दाजु श्रीरामका खराउलाई उहाँकै अगाडि राखिदिए र आफू चाहिँ हर्षका आँसु बगाउँदै दुबै हात जोडेर सामुन्ने उभिए। त्यसपछि श्रीरामचन्द्रले आफ्ना दुबै हातले धेरै बेरसम्म अँगालो हाली आँखाबाट बगेका आँसुका धाराले भाइ भरतलाई भिजाइदिनुभयो।

**रामो लक्ष्मणसीताभ्यां विप्रेभ्यो येऽर्हसत्तमाः।**
**तेभ्यः स्वयं नमश्चक्रे प्रजाभिश्च नमस्कृतः॥ ४१॥**

पदार्थ–
**रामः** = श्रीरामले
**लक्ष्मणसीताभ्यां** = लक्ष्मण र

सीताका साथमा
**विप्रेभ्यः** = ब्राह्मणहरूलाई र
**ये** = जो (त्यहाँ)
**अर्हसत्तमाः** = पूज्यजन थिए
**तेभ्यः** = ती सबैलाई
**स्वयं** = आफैँले
**नमः** = नमस्कार
**चक्रे** = गर्नुभयो
**प्रजाभिः च** = प्रजाहरूद्वारा पनि
**नमस्कृतः** = (उहाँ) प्रणाम गरिनुभयो

**वाक्यार्थ–** त्यसपछि लक्ष्मण र सीताका साथमा श्रीरामले त्यहाँ उपस्थित सम्पूर्ण ब्राह्मण तथा पूज्यजनहरूलाई नमस्कार गर्नुभयो। प्रजाहरूले पनि उहाँलाई प्रणाम गरे।

**धुन्वन्त उत्तरासङ्गान् पतिं वीक्ष्य चिरागतम्।**
**उत्तराः कोसला माल्यैः किरन्तो ननृतुर्मुदा ॥ ४२ ॥**

**पदार्थ–**
**उत्तराः** = उत्तरदिशाका
**कोसलाः** = कोसलवासी प्रजाहरू
**चिरागतम्** = धेरै समयपछि आउनुभएका
**पतिं** = आफ्ना राजालाई
**वीक्ष्य** = देखेर
**उत्तरासङ्गान्** = उत्तरीय दोसल्ला आदि वस्त्र
**धुन्वन्तः** = हल्लाउँदै तथा
**माल्यैः** = पुष्पवृष्टि
**किरन्तः** = गर्दै
**मुदा** = खुसीले
**ननृतुः** = नाच्न थाले

**वाक्यार्थ–** उत्तर कोसल देशका सम्पूर्ण प्रजाहरू धेरै समयपछि आफ्ना राजा आउनुभएको देखेर दोसल्ला आदि उत्तरीय वस्त्रहरू हल्लाउँदै र पुष्पवृष्टि गर्दै खुसीले नाच्न थाले।

**पादुके भरतोऽगृह्णाच्चामरव्यजनोत्तमे।**
**विभीषणः ससुग्रीवः श्वेतच्छत्रं मरुत्सुतः ॥ ४३ ॥**

**पदार्थ–**
**भरतः** = भरतले
**पादुके** = भगवान्‌का दुबै खराउ
**ससुग्रीवः** = सुग्रीवले सहित
**विभीषणः** = विभीषणले
**चामरव्यजनोत्तमे** = श्रेष्ठ चामर र पङ्खा
**मरुत्सुतः** = पवनपुत्र हनुमान्‌ले
**श्वेतच्छत्रं** = सेतो छाता
**अगृह्णात्** = ग्रहण गरे

**वाक्यार्थ–** भरतले भगवान्‌का खराउ बोके। सुग्रीव सहित विभीषणले चामर र पङ्खा हम्किए। पवनपुत्र हनुमान्‌ले श्रीरामलाई सेतो छाता ओढाए।

**धनुर्निषङ्गाञ्छत्रुघ्नः सीता तीर्थकमण्डलुम्।**
**अबिभ्रदङ्गदः खड्गं हैमं चर्मर्क्षराण्नृप ॥ ४४ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**शत्रुघ्नः** = शत्रुघ्नले
**धनुर्निषङ्गान्** = धनु र बाण
**सीता** = सीताजीले
**हैमं** = सुवर्णमय
**तीर्थकमण्डलुम्** = तीर्थजलले पूर्ण कमण्डलु
**अङ्गदः** = अङ्गदले
**खड्गं** = तरबार
**ऋक्षराट्** = जाम्बवान्‌ले
**चर्म** = ढाल

**अबिभ्रत्** = बोके

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यसपछि शत्रुघ्नले धनु र बाण बोके अनि सीताजीले तीर्थजलले पूर्ण सुवर्णमय कमण्डलु धारण गर्नुभयो। त्यस्तै अङ्गदले तरबार र जाम्बवान्‌ले ढाल बोके।

**पुष्पकस्थोऽन्वितः स्त्रीभिः स्तूयमानश्च वन्दिभिः।**
**विरेजे भगवान् राजन् ग्रहैश्चन्द्र इवोदितः॥ ४५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**स्त्रीभिः** = स्त्रीहरूद्वारा
**अन्वितः** = घेरिएका
**वन्दिभिः** = स्तुतिपाठ गर्नेहरूद्वारा
**स्तूयमानः च** = स्तुति गरिएका
**पुष्पकस्थः** = पुष्पकविमानमा विराजमान
**भगवान्** = भगवान् श्रीराम
**ग्रहैः** = ग्रहहरूका साथमा
**उदितः** = उदाएको
**चन्द्रः इव** = चन्द्रमा झैँ
**विरेजे** = शोभायमान देखिनुभयो

**वाक्यार्थ–** स्त्रीहरूद्वारा घेरिएर बस्नुभएका तथा स्तुतिपाठ गर्नेहरूद्वारा स्तुतिगान गरिनुभएका पुष्पक विमानमा विराजमान भगवान् श्रीराम ग्रहहरूका साथमा उदाएका चन्द्रमा झैँ शोभायमान देखिनुभयो।

**भ्रातृभिर्नन्दितः सोऽपि सोत्सवां प्राविशत् पुरीम्।**
**प्रविश्य राजभवनं गुरुपत्नीः स्वमातरम्॥ ४६॥**
**गुरून् वयस्यावरजान् पूजितः प्रत्यपूजयत्।**
**वैदेही लक्ष्मणश्चैव यथावत् समुपेयतुः॥ ४७॥**

**पदार्थ–**
**भ्रातृभिः** = भाइहरूद्वारा
**नन्दितः** = अभिनन्दन गरिएका
**सः अपि** = उहाँ भगवान् श्रीराम पनि
**सोत्सवां** = उत्सवले युक्त
**पुरीम्** = आफ्नो नगरमा
**प्राविशत्** = प्रवेश गर्नुभयो र
**राजभवनं** = राजभवनमा
**प्रविश्य** = प्रवेश गरेर
**पूजितः** = (आफूभन्दा सानाद्वारा प्रणाम आदिद्वारा) पूजा गरिनुभएका (उहाँले)
**गुरुपत्नीः** = गुरु (पिता)की पत्नी कैकेयी आदिलाई
**स्वमातरम्** = आफ्नी आमा कौसल्या आदिलाई
**गुरून्** = वसिष्ठ आदि गुरुहरूलाई र
**वयसि** = उमेरमा आफूसमानका तथा
**अवरजान्** = आफूभन्दा साना सबैलाई
**प्रत्यपूजयत्** = यथायोग्य प्रणाम आदि गर्नुभयो
**वैदेही** = सीता र
**लक्ष्मणः च एव** = लक्ष्मणले पनि
**यथावत्** = आ-आफ्नो कर्तव्यअनुसार
**समुपेयतुः** = सबैलाई अभिवादन गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार भाइहरूद्वारा अभिनन्दन गरिनुभएका भगवान् श्रीराम उत्सवले युक्त

अयोध्यापुरीमा प्रवेश गर्नुभयो। राजभवनमा प्रवेश गरेपछि आफूभन्दा सानाले उहाँलाई प्रणाम आदि गरे भने उहाँले कौसल्या तथा अन्य माताहरूलाई, गुरुजन, मित्र तथा भाइहरूलाई यथायोग्य अभिवादन र सबैलाई सम्मान गर्नुभयो। सीता र लक्ष्मणले पनि भगवान्का साथमा लागेर यथायोग्य सबैलाई सम्मान एवं अभिवादन गर्नुभयो।

**पुत्रान् स्वमातरस्तास्तु प्राणांस्तन्व इवोत्थिताः।**
**आरोप्याङ्केऽभिषिञ्चन्त्यो बाष्पौघैर्विजहुः शुचः॥ ४८॥**

**पदार्थ–**
**तन्वः** = (मृत) शरीरले
**प्राणान् इव** = प्राण प्राप्त गरे झैं
**उत्थिताः** = (छोरालाई पाएर प्रसन्न भई) उठ्नुभएका
**ताः तु** = भगवान्का ती
**स्वमातरः** = कौसल्या आदि माताहरूले
**पुत्रान्** = राम, लक्ष्मण आदि पुत्रहरूलाई
**अङ्के** = काखमा
**आरोप्य** = राखेर
**बाष्पौघैः** = आँसुका धाराले
**अभिषिञ्चन्त्यः** = अभिषेक गर्दै
**शुचः** = सम्पूर्ण शोक
**विजहुः** = त्यागनुभयो

**वाक्यार्थ–** मृत शरीरमा प्राण सञ्चार भए झैं छोरालाई देखेर प्रसन्न भई उठ्नुभएका कौसल्या आदि माताहरूले राम, लक्ष्मण आदि छोराहरूलाई आफ्नो काखमा राख्दै आँखाबाट बगेको हर्षाश्रुका धाराले पुत्रहरूलाई अभिषेक गर्दै सम्पूर्ण शोक त्यागनुभयो।

**जटा निर्मुच्य विधिवत् कुलवृद्धैः समं गुरुः।**
**अभ्यषिञ्चद् यथैवेन्द्रं चतुःसिन्धुजलादिभिः॥ ४९॥**

**पदार्थ–**
**गुरुः** = गुरु वसिष्ठले
**कुलवृद्धैः** = कुलका श्रेष्ठ व्यक्तिहरूका
**समं** = साथमा
**विधिवत्** = विधिपूर्वक
**जटाः** = जटाहरू (केश)
**निर्मुच्य** = कटाएर
**यथा** = जसरी (बृहस्पतिले)
**इन्द्रं** = इन्द्रलाई (अभिषिक्त गर्नुभएको थियो)
**एव** = त्यसरी नै
**चतुःसिन्धुजलादिभिः** = चार समुद्रको जल आदि माङ्गलिक वस्तुद्वारा
**अभ्यषिञ्चत्** = श्रीरामचन्द्रको अभिषेक गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि कुलगुरु वसिष्ठले अन्य कुलवृद्ध पुरुषहरूका साथमा विधिपूर्वक श्रीरामचन्द्रको जटा कटाइदिएर जसरी बृहस्पतिले इन्द्रको अभिषेक गर्नुभएको थियो त्यसै गरी चार समुद्रको जल आदि माङ्गलिक वस्तुद्वारा उहाँको अभिषेक गर्नुभयो।

**एवं कृतशिरःस्नानः सुवासाः स्रग्व्यलङ्कृतः।**
**स्वलङ्कृतैः सुवासोभिर्भ्रातृभिर्भार्यया बभौ॥ ५०॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**कृतशिरःस्नानः** = अभिषेक गरेका
**सुवासाः** = सुन्दर वस्त्र लगाएका

**स्रग्वी** = पुष्पमाला धारण गरेका
**अलङ्कृतः** = अलङ्कार धारण गरेका भगवान् श्रीराम
**स्वलङ्कृतैः** = राम्रा-राम्रा आभूषणले सजिएका
**सुवासोभिः** = सुन्दर कपडा लगाएका
**भ्रातृभिः** = भाइहरू र
**भार्यया** = पत्नी सीताजीका साथमा
**बभौ** = सुशोभित हुनुभयो

**वाक्यार्थ–** यसप्रकार अभिषेक गरेर भगवान् श्रीरामले सुन्दर वस्त्र, पुष्पमाला तथा गरगहना धारण गर्नुभयो। राम्रा-राम्रा कपडा र आभूषणले सजिएका भाइहरू र पत्नी सीताजीका साथमा भगवान् श्रीराम अत्यन्त सुशोभित हुनुभयो।

**अग्रहीदासनं भ्रात्रा प्रणिपत्य प्रसादितः।**
**प्रजाः स्वधर्मनिरता वर्णाश्रमगुणान्विताः।**
**जुगोप पितृवद् रामो मेनिरे पितरं च तम्॥ ५१॥**

**पदार्थ–**
**भ्रात्रा** = भाइ भरतद्वारा
**प्रणिपत्य** = चरणमा परेर (अनुरोध गरी)
**प्रसादितः** = प्रसन्न गराइएका श्रीरामले
**आसनं** = राजसिंहासन
**अग्रहीत्** = ग्रहण गर्नुभयो र
**स्वधर्मनिरताः** = आ-आफ्नो कर्ममा लागेका
**वर्णाश्रमगुणान्विताः** = आ-आफ्नो वर्ण र आश्रमका गुणले युक्त भएका
**प्रजाः** = प्रजाहरूलाई
**रामः** = भगवान् श्रीरामले
**पितृवत्** = पिताले जसरी
**जुगोप** = रक्षा गर्नुभयो
**तं च** = ती भगवान् श्रीरामलाई पनि (प्रजाहरूले)
**पितरं** = पितासमान
**मेनिरे** = माने

**वाक्यार्थ–** भरतले चरणमा परेर अनुरोध गरेपछि प्रसन्न भएर भगवान् श्रीरामले राजसिंहासन ग्रहण गर्नुभयो। त्यसपछि उहाँले आ-आफ्नो कर्ममा लागेका वर्ण र आश्रमका गुणले युक्त भएका प्रजालाई पिताले झैँ पालन गर्नुभयो। प्रजाहरूले पनि भगवान् श्रीरामलाई पितासमान माने।

**त्रेतायां वर्तमानायां कालः कृतसमोऽभवत्।**
**रामे राजनि धर्मज्ञे सर्वभूतसुखावहे॥ ५२॥**

**पदार्थ–**
**सर्वभूतसुखावहे** = सम्पूर्ण प्राणीलाई सुख दिने
**धर्मज्ञे** = धर्मवेत्ता
**रामे** = श्रीराम
**राजनि** = राजा भएपछि
**त्रेतायां** = त्रेतायुगमा
**वर्तमानायां** = चल्दै गरेको
**कालः** = समय पनि
**कृतसमः** = सत्ययुगको जस्तो
**अभवत्** = भयो

**वाक्यार्थ–** सम्पूर्ण प्राणीलाई सुख प्रदान गर्ने धर्मज्ञ श्रीराम राजा बन्नुभएको त्यो समय त्रेतायुग भए तापनि सत्ययुग जस्तो भयो।

**वनानि नद्यो गिरयो वर्षाणि द्वीपसिन्धवः।**

**सर्वे कामदुघा आसन् प्रजानां भरतर्षभ ॥ ५३ ॥**

**पदार्थ–**
**भरतर्षभ** = भरतवंशीयहरूमा श्रेष्ठ हे परीक्षित् (रामराज्यमा)
**वनानि** = वनहरू
**नद्यः** = नदीहरू
**गिरयः** = पर्वतहरू
**वर्षाणि** = वर्षहरू
**द्वीपसिन्धवः** = द्वीप तथा समुद्रहरू
**सर्वे** = सबै
**प्रजानां** = प्रजाहरूका
**कामदुघा** = चाहना पूरा गरिदिने खालका
**आसन्** = थिए

**वाक्यार्थ–** हे परीक्षित् ! रामराज्यमा वन, नदी, पहाड, वर्ष, द्वीप तथा समुद्र सबै प्रजाका चाहना पूरा गरिदिने खालका थिए।

**नाधिव्याधिजराग्लानिदुःखशोकभयक्लमाः ।**
**मृत्युश्चानिच्छतां नासीद् रामे राजन्यधोक्षजे ॥ ५४ ॥**

**पदार्थ–**
**अधोक्षजे** = भगवान्
**रामे** = श्रीराम
**राजनि** = राजा भएपछि (प्रजाहरूलाई)
**आधिव्याधिजराग्लानिदुःखशोक-भयक्लमाः** = मानसिक रोग, शारीरिक रोग, बुढ्यौली, दुर्बलता, कष्ट, शोक, डर, थकाइ आदि र
**अनिच्छतां** = मर्न इच्छा नगर्नेहरूको
**मृत्युः च** = मृत्यु पनि
**न आसीत्** = भएको थिएन

**वाक्यार्थ–** भगवान् श्रीराम राजा भएपछि प्रजाहरूलाई कुनै पनि मानसिक एवं शारीरिक रोग, बुढ्यौली, दुर्बलता, दुःख, कष्ट, शोक, डर र थकाइले सताएको थिएन, अनि मर्न नचाहनेहरूको मृत्यु पनि हुँदैनथ्यो।

**एकपत्नीव्रतधरो राजर्षिचरितः शुचिः ।**
**स्वधर्मं गृहमेधीयं शिक्षयन् स्वयमाचरत् ॥ ५५ ॥**

**पदार्थ–**
**राजर्षिचरितः** = राजर्षिको चरित्रजस्तो
**शुचिः** = पवित्र चरित्र भएका तथा
**एकपत्नीव्रतधरः** = एकपत्नीव्रत धारण गरेका भगवान् श्रीरामले
**गृहमेधीयं** = गृहस्थले गर्नुपर्ने
**स्वधर्मं** = आफ्नो धर्म
**शिक्षयन्** = सबैलाई सिकाउँदै
**स्वयं** = आफूले पनि
**आचरत्** = पालन गर्नुहुन्थ्यो

**वाक्यार्थ–** राजर्षिको जस्तो चरित्र भएका र एकपत्नीव्रत धारण गरेका भगवान् श्रीरामले गृहस्थले गर्नुपर्ने धर्म सबैलाई सिकाउँदै आफूले पनि त्यसको पालन गर्नुहुन्थ्यो।

**प्रेम्णानुवृत्त्या शीलेन प्रश्रयावनता सती ।**
**धिया ह्रिया च भावज्ञा भर्तुः सीताहरन्मनः ॥ ५६ ॥**

**पदार्थ–**
**भावज्ञा** = भगवान्को भावनालाई बुझेकी
**प्रश्रयावनता** = विनम्रताले झुकेकी
**सती** = पतिव्रता
**सीता** = सीताजीले
**प्रेम्णा** = प्रेमद्वारा
**अनुवृत्त्या** = सेवाद्वारा
**शीलेन** = शीलस्वभावद्वारा
**धिया** = बुद्धिद्वारा
**ह्रिया च** = लज्जाद्वारा पनि
**भर्तुः** = पति श्रीरामको
**मनः** = मनलाई
**अहरत्** = हरण गर्नुभयो

**वाक्यार्थ–** भगवान्को भावनालाई बुझेकी र विनम्रताले झुकेकी पतिव्रता सीताजीले प्रेम, सेवासुश्रूषा, शीलस्वभाव, बुद्धि तथा लज्जा आदि उत्तम गुणहरूद्वारा आफ्ना पति श्रीरामको मन जित्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**

**रामचरिते दशमोऽध्यायः ॥ १० ॥**

# अथ एकादशोऽध्यायः

## भगवान् श्रीरामका अन्य लीलाहरू

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**भगवानात्मनात्मानं राम उत्तमकल्पकैः।**
**सर्वदेवमयं देवमीजेऽथाचार्यवान् मखैः॥ १॥**

**पदार्थ–**
**अथ** = यसपछि
**आचार्यवान्** = गुरु वसिष्ठलाई आचार्य बनाएका
**भगवान् रामः** = भगवान् श्रीरामले
**उत्तमकल्पकैः** = उत्तम-उत्तम यज्ञसामग्रीहरूले युक्त भएका
**मखैः** = यज्ञहरूद्वारा
**आत्मना** = आफू स्वयंले
**सर्वदेवमयं** = सर्वदेवस्वरूप
**देवं** = स्वयंप्रकाशरूप
**आत्मानं** = परमात्मालाई
**ईजे** = यजन गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीरामले गुरु वसिष्ठलाई आचार्य बनाएर उत्तम-उत्तम यज्ञसामग्रीहरूले युक्त भएका यज्ञहरूद्वारा आफैँले सर्वदेवस्वरूप स्वयंप्रकाश परमात्माको पूजा-आराधना गर्नुभयो।

**विवरण–** यस श्लोकमा भगवान् श्रीराम आफैँले आफैँलाई प्रसन्न पार्न यज्ञ गर्नुभयो भनिएको छ। सम्पूर्ण यज्ञ, दान आदि सत्कर्महरूको मूल लक्ष्य परमात्मालाई प्रसन्न बनाउनु हो। भगवान् त स्वयं प्रसन्न नै हुनुहुन्छ, त्यसैले उहाँलाई कुनै कर्म गर्न आवश्यक छैन। फेरि यज्ञमा जुन-जुन देवताहरूलाई भाग दिइन्छ ती सबै देवताहरूका मूल त भगवान् आफैँ नै हुनुहुन्छ। तै पनि आफ्ना अङ्गभूत ती-ती देवताहरूलाई प्रसन्न गराई सर्वदेवमय आफ्नै स्वरूपलाई खुसी पार्ने उद्देश्यले उहाँले यज्ञ गर्नुभएको हो। भगवान् श्रीकृष्णले गीता (३/२२-२३)मा बताउनुभएको छ– 'हे अर्जुन! संसारभरि कुनै त्यस्तो वस्तु छैन, जसलाई मैले प्राप्त गर्नुपर्ने होस्, त्यसैले मैले केही गर्नुपर्ने आवश्यकता छैन, तर मैले सावधान भई कर्म गरिनँ भने सम्पूर्ण मनुष्यहरू मैलाई हेरी मेरै उदाहरण दिई अकर्मण्य बन्नेछन्। त्यसैले म कर्म गर्दछु।' यहाँ पनि लोकशिक्षाकै लागि श्रीरामले कर्म गर्नुभएको बुझ्नुपर्दछ। यहाँ कर्ता, कर्म र करण एउटै भएको बताइएको छ। श्रीराम नै यज्ञको उद्देश्य या कर्म, अनि यज्ञका साधनको रूपमा हुनुहुन्थ्यो। सर्वत्र आत्मदृष्टि गर्ने ज्ञानीहरूले यज्ञका सम्पूर्ण अङ्गमा ब्रह्मदृष्टि गर्ने हुनाले (गीता ४/३४) श्रीरामले सर्वत्र आत्मदृष्टि गर्नुभएको कुरा यहाँ बताइएको छ।

**होत्रेऽददाद् दिशं प्राचीं ब्रह्मणे दक्षिणां प्रभुः।**
**अध्वर्यवे प्रतीचीं च उदीचीं सामगाय सः॥ २॥**
**आचार्याय ददौ शेषां यावती भूस्तदन्तरा।**
**मन्यमान इदं कृत्स्नं ब्राह्मणोऽर्हति निःस्पृहः॥ ३॥**

**पदार्थ—**
**इदं कृत्स्नं** = यो सम्पूर्ण (भूमण्डल)
**ब्राह्मणः** = ब्राह्मणहरूले मात्र
**अर्हति** = स्वीकार गर्न सक्छन् (अथवा यसका मुख्य अधिकारी ब्राह्मणहरू नै हुन् भन्ने)
**मन्यमानः** = विचार गरेर
**निःस्पृहः** = कामनारहित भएर
**सः प्रभुः** = ती भगवान् श्रीरामले
**प्राचीं दिशं** = पूर्व दिशा
**होत्रे** = होता (ऋग्वेदपाठी)लाई
**अददात्** = दिनुभयो
**दक्षिणां** = दक्षिण दिशा
**ब्रह्मणे** = ब्रह्मालाई दिनुभयो
**प्रतीचीं** = पश्चिम दिशा
**अध्वर्यवे** = अध्वर्यु (यजुर्वेदपाठी)लाई दिनुभयो
**उदीचीं च** = उत्तर दिशा
**सामगाय** = सामगान गर्ने उद्गातालाई दिनुभयो
**तदन्तरा** = यी चार दिशाको बीचमा
**यावती भूः** = जति भूमि बाँकी रह्यो
**शेषां** = बाँकी त्यो सबै
**आचार्याय** = आचार्यलाई
**ददौ** = दिनुभयो

**वाक्यार्थ—** यो सम्पूर्ण भूमण्डलका मुख्य अधिकारी ब्राह्मणहरू नै हुन् भन्ने विचार गरेर भगवान् श्रीरामले सबै कामनारहित बनेर होतालाई पूर्व दिशा र ब्रह्मालाई दक्षिण दिशा दिनुभयो, त्यस्तै अध्वर्युलाई पश्चिम दिशा र सामगान गर्ने उद्गातालाई उत्तर दिशा दिनुभयो। यी चार दिशाको बीचमा बाँकी रहेको जति सबै भूमि उहाँले आचार्यलाई दिनुभयो।

**इत्ययं तदलङ्कारवासोभ्यामवशेषितः।**
**तथा राज्ञ्यपि वैदेही सौमङ्गल्यावशेषिता॥ ४॥**

**पदार्थ—**
**इति** = यसप्रकार (दान गरेर)
**अयं** = यी भगवान् श्रीरामले
**तदलङ्कारवासोभ्यां** = आफ्नो शरीरका गहना र कपडा मात्रै
**अवशेषितः** = बाँकी राख्नुभयो
**तथा** = त्यसै गरी
**वैदेही** = विदेहराजकी छोरी
**राज्ञी अपि** = महारानी सीताले पनि
**सौमङ्गल्यावशेषिता** = माङ्गलिक केही कपडा र गहना मात्र साथमा राख्नुभयो

**वाक्यार्थ—** यसप्रकार सबै कुरा दान गरिसकेर भगवान् श्रीरामले केवल आफ्नो शरीरका केही गहना र कपडा मात्र बाँकी राख्नुभयो। यसै गरी विदेहराजपुत्री महारानी सीताले पनि केही माङ्गलिक कपडा र गहना मात्र बाँकी राख्नुभयो।

**ते तु ब्रह्मण्यदेवस्य वात्सल्यं वीक्ष्य संस्तुतम्।**
**प्रीताः क्लिन्नधियस्तस्मै प्रत्यर्प्येदं बभाषिरे॥ ५॥**

**पदार्थ—**
**ते तु** = (त्यसपछि) ती ब्राह्मणहरूले
**ब्रह्मण्यदेवस्य** = ब्राह्मणलाई नै इष्टदेव मान्ने भगवान् रामचन्द्रको
**वात्सल्यं** = प्रेम र
**संस्तुतम्** = सम्मानलाई
**वीक्ष्य** = देखेर
**प्रीताः** = अत्यन्त प्रसन्न हुँदै
**क्लिन्नधियः** = स्नेहले हृदय पगालेर

**तस्मै** = ती श्रीरामचन्द्रलाई नै
**इदं** = यो सारा भूमण्डल
**प्रत्यर्प्य** = समर्पण गरेर
**बभाषिरे** = भन्न थाले

**वाक्यार्थ–** ब्राह्मणलाई नै इष्टदेव मान्नुहुने भगवान् श्रीरामद्वारा आफूहरूप्रति गरिएको स्नेह र सम्मानलाई देखेर अत्यन्त प्रसन्न भएका आचार्य आदि ब्राह्मणहरूले आफूले प्राप्त गरेको सम्पूर्ण भूमण्डल भगवान्लाई नै समर्पण गरेर भन्न थाले।

**अप्रत्तं नस्त्वया किं नु भगवन् भुवनेश्वर।**
**यन्नोऽन्तर्हृदयं विश्य तमो हंसि स्वरोचिषा॥ ६॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**भुवनेश्वर** = संसारका मालिक
**त्वया** = हजुरले
**नः** = हामीहरूलाई
**किं नु** = के चाहिँ
**अप्रत्तं** = दिनुभएन र ? (सबै कुरा दिनुभएको छ)
**यत्** = जबकि (हजुरले)
**नः** = हामीहरूको
**अन्तर्हृदयं** = भित्री हृदयमा
**विश्य** = प्रवेश गरेर
**स्वरोचिषा** = आफ्नो दिव्य तेजले
**तमः** = अज्ञानरूपी अन्धकारलाई
**हंसि** = नाश गर्नुभएको छ

**वाक्यार्थ–** हे भगवान् ! संसारका मालिक हजुरले नै हाम्रो भित्री हृदयमा प्रवेश गरेर आफ्नो दिव्य तेजद्वारा त्यहाँ रहेको अज्ञानरूपी अन्धकारलाई नाश गरिदिनुभएको छ। अतः हजुरले हामीलाई सबै कुरा दिनुभएको छ, अब दिन बाँकी केही पनि छैन।

**नमो ब्रह्मण्यदेवाय रामायाकुण्ठमेधसे।**
**उत्तमश्लोकधुर्याय न्यस्तदण्डार्पिताङ्घ्रये॥ ७॥**

**पदार्थ–**
**ब्रह्मण्यदेवाय** = ब्राह्मणलाई इष्टदेव मान्ने
**अकुण्ठमेधसे** = अनन्त ज्ञानवाला
**उत्तमश्लोकधुर्याय** = पवित्र कीर्तिशालीहरूमा श्रेष्ठ
**न्यस्तदण्डार्पिताङ्घ्रये** = अरूलाई दुःख नदिने सज्जनहरूलाई आफ्ना चरण सुम्पने
**रामाय** = भगवान् श्रीरामलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** ब्राह्मणलाई आफ्ना इष्टदेव मान्ने, परमज्ञानी, पवित्र कीर्तिशालीहरूमा श्रेष्ठ एवं कहिल्यै अरूलाई दुःख नदिने सज्जनलाई आफ्ना चरण सुम्पने भगवान् श्रीरामलाई नमस्कार छ।

**कदाचिल्लोकजिज्ञासुर्गूढो रात्र्यामलक्षितः।**
**चरन् वाचोऽशृणोद् रामो भार्यामुद्दिश्य कस्यचित्॥ ८॥**

**पदार्थ–**
**कदाचित्** = कुनै समयमा
**लोकजिज्ञासुः** = लोकको स्थिति बुझ्ने इच्छाले
**गूढः** = कसैले नदेख्ने गरी
**अलक्षितः** = लुक्दै
**रामः** = भगवान् श्रीराम
**रात्र्यां** = रातमा
**चरन्** = घुम्दै गर्दा
**भार्याम्** = पत्नीलाई
**उद्दिश्य** = लक्ष्य गरेर भनेका
**कस्यचित्** = कुनै पुरुषका

**वाचः** = वचन
**अशृणोत्** = सुन्नुभयो

**वाक्यार्थ–** एकपटक आफ्ना प्रजाको स्थिति बुझ्नका निम्ति भगवान् श्रीराम रातमा कसैले नदेख्ने गरी सहरमा घुमिरहनुभएको थियो। त्यस बखतमा कसैले आफ्नी पत्नीलाई भनेका यी वचनहरू उहाँले सुन्नुभयो।

**नाहं बिभर्मि त्वां दुष्टामसतीं परवेश्मगाम्।**
**स्त्रीलोभी बिभृयात् सीतां रामो नाहं भजे पुनः॥ ९॥**

**पदार्थ–**
**अहं** = म
**दुष्टां** = दुष्ट स्वभाव भएकी
**असतीं** = व्यभिचारिणी
**परवेश्मगाम्** = अरूको घरमा गएकी
**त्वां** = तँलाई
**न बिभर्मि** = स्वीकार गर्दिनँ
**स्त्रीलोभी** = स्त्रीलम्पट
**रामः** = रामले
**सीतां** = सीतालाई
**बिभृयात्** = स्वीकार गरोस् तर
**अहं** = म
**पुनः** = तँलाई फेरि
**न भजे** = स्वीकार गर्दिनँ

**वाक्यार्थ–** दुष्ट स्वभाव भएकी व्यभिचारिणी, अर्काको घर गएकी तँलाई म स्वीकार गर्दिनँ। स्त्रीलम्पट रामले सीतालाई स्वीकार गरोस्, तर म तँलाई कुनै पनि हालतमा स्वीकार गर्दिनँ।

**इति लोकाद् बहुमुखाद् दुराराध्यादसंविदः।**
**पत्या भीतेन सा त्यक्ता प्राप्ता प्राचेतसाश्रमम्॥ १०॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**बहुमुखात्** = जे मन लाग्यो त्यही बोल्ने
**दुराराध्यात्** = सम्झाउनै नसकिने
**असंविदः** = मूर्खहरूले लगाएको
**लोकात्** = लोकापवादबाट
**भीतेन** = डराएका
**पत्या** = पति श्रीरामद्वारा
**त्यक्ता** = त्याग गरिएकी
**सा** = ती सीता
**प्राचेतसाश्रमम्** = महर्षि वाल्मीकिको आश्रममा
**प्राप्ता** = पुग्नुभयो

**वाक्यार्थ–** यसप्रकार जे मन लाग्यो त्यही बोल्ने मूर्खहरूद्वारा लगाइएको आरोपदेखि डराएर भगवान् श्रीरामले सीतालाई परित्याग गर्नुभयो। त्यसपछि पतिद्वारा त्याग गरिएकी सीता महर्षि वाल्मीकिको आश्रममा पुग्नुभयो।

**अन्तर्वत्न्यागते काले यमौ सा सुषुवे सुतौ।**
**कुशो लव इति ख्यातौ तयोश्चक्रे क्रिया मुनिः॥ ११॥**

**पदार्थ–**
**अन्तर्वत्नी** = गर्भिणी
**सा** = ती सीताले
**काले** = प्रसवकाल
**आगते** = आएपछि
**कुशः लवः इति** = कुश र लव नामले
**ख्यातौ** = प्रसिद्ध
**यमौ** = जुम्ल्याहा
**सुतौ** = दुई छोरा
**सुषुवे** = जन्माउनुभयो
**मुनिः** = मुनि वाल्मीकिले

**तयोः** = ती दुईको | **क्रियाः** = न्वारन आदि कर्म | **चक्रे** = गर्नुभयो

**वाक्यार्थ—** गर्भवती सीताले प्रसवकाल आएपछि कुश र लव नाम गरेका जुम्ल्याहा दुई भाइ छोरा जन्माउनुभयो। ती दुईको न्वारन आदि कर्म मुनि वाल्मीकिले नै गर्नुभयो।

**अङ्गदश्चित्रकेतुश्च लक्ष्मणस्यात्मजौ स्मृतौ।**

**तक्षः पुष्कल इत्यास्तां भरतस्य महीपते॥ १२॥**

**पदार्थ—**
**महीपते** = हे राजा परीक्षित्
**लक्ष्मणस्य** = लक्ष्मणका
**अङ्गदः चित्रकेतुः च** = अङ्गद र चित्रकेतु नामका
**आत्मजौ** = दुई भाइ छोरा
**स्मृतौ** = भए (त्यसै गरी)
**भरतस्य** = भरतका
**तक्षः पुष्कलः इति** = तक्ष र पुष्कल नामका दुई भाइ छोरा
**आस्ताम्** = थिए

**वाक्यार्थ—** हे राजा परीक्षित्! लक्ष्मणका अङ्गद र चित्रकेतु नामका दुई छोरा जन्मिए। त्यसै गरी भरतका पनि तक्ष र पुष्कल नाम गरेका दुई भाइ छोरा भए।

**सुबाहुः श्रुतसेनश्च शत्रुघ्नस्य बभूवतुः।**

**गन्धर्वान् कोटिशो जघ्ने भरतो विजये दिशाम्॥ १३॥**

**पदार्थ—**
**शत्रुघ्नस्य** = शत्रुघ्नका
**सुबाहुः श्रुतसेनः च** = सुबाहु र श्रुतसेन नामका दुई छोरा
**बभूवतुः** = भए
**भरतः** = भरतले
**दिशां विजये** = दिग्विजयको समयमा
**कोटिशः** = करौडौं
**गन्धर्वान्** = गन्धर्वहरूलाई
**जघ्ने** = मारे

**वाक्यार्थ—** शत्रुघ्नका सुबाहु र श्रुतसेन नाम गरेका दुई छोरा भए। भरतले दिग्विजयको क्रममा करोडौं गन्धर्वहरूलाई मारे।

**तदीयं धनमानीय सर्वं राज्ञे न्यवेदयत्।**

**शत्रुघ्नश्च मधोः पुत्रं लवणं नाम राक्षसम्।**

**हत्वा मधुवने चक्रे मथुरां नाम वै पुरीम्॥ १४॥**

**पदार्थ—**
**तदीयं** = ती गन्धर्वहरूको
**धनं** = सम्पत्ति
**आनीय** = ल्याएर
**सर्वं** = सबै
**राज्ञे** = राजा श्रीरामलाई
**न्यवेदयत्** = चढाए
**शत्रुघ्नः च** = शत्रुघ्नले पनि
**मधोः पुत्रं** = मधु नामक दानवको छोरा
**लवणं नाम** = लवण नाम गरेको
**राक्षसम्** = राक्षसलाई
**हत्वा** = मारेर
**मधुवने** = मधुवनमा
**वै** = निश्चय नै
**मथुरां नाम** = मथुरा नाम गरेको
**पुरीम्** = नगर
**चक्रे** = बनाए

**वाक्यार्थ–** भरतले गन्धर्वहरूलाई मारेर ल्याएको सबै धनसम्पत्ति राजा श्रीरामलाई चढाए। शत्रुघ्नले पनि मधुदानवको छोरो लवण नाम गरेको राक्षसलाई मारेर मधुवनमा मथुरा नाम गरेको सुन्दर सहर बनाए।

**मुनौ निक्षिप्य तनयौ सीता भर्त्रा विवासिता।**
**ध्यायन्ती रामचरणौ विवरं प्रविवेश ह॥ १५॥**

**पदार्थ–**
**ह** = निश्चय नै
**भर्त्रा** = पति श्रीरामद्वारा
**विवासिता** = परित्याग गरिएकी
**सीता** = सीताले
**तनयौ** = आफ्ना दुई छोरालाई
**मुनौ** = महर्षि वाल्मीकिलाई
**निक्षिप्य** = सुम्पिएर
**रामचरणौ** = श्रीरामको चरणलाई
**ध्यायन्ती** = ध्यान गर्दै
**विवरं** = पृथिवीको गर्भमा
**प्रविवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** पतिद्वारा परित्याग गरिएकी सीताले आफ्ना दुई छोरा महर्षि वाल्मीकिलाई सुम्पिनुभयो र आफू भगवान् श्रीरामचन्द्रका चरणको ध्यान गर्दै पृथिवीको गर्भमा प्रवेश गर्नुभयो।

**तच्छ्रुत्वा भगवान् रामो रुन्धन्नपि धिया शुचः।**
**स्मरंस्तस्या गुणांस्तांस्तान् नाशक्नोद् रोद्धुमीश्वरः॥ १६॥**

**पदार्थ–**
**तत्** = त्यो (सीताले पृथिवीको गर्भमा प्रवेश गरेको)
**श्रुत्वा** = सुनेर
**ईश्वरः** = सामर्थ्यवान्
**भगवान् रामः** = भगवान् रामचन्द्रले
**धिया** = विवेकपूर्वक
**शुचः** = शोकलाई
**रुन्धन् अपि** = रोक्न खोजे तापनि
**तस्याः** = ती सीताका
**तान् तान् गुणान्** = सुशीलता आदि ती–ती गुणलाई
**स्मरन्** = सम्झेर
**रोद्धुम्** = (शोकको वेग) रोक्न
**न अशक्नोत्** = सक्नुभएन

**वाक्यार्थ–** सीताले पृथिवीको गर्भमा प्रवेश गरेको खबर सुनेर सामर्थ्यवान् भगवान् श्रीरामले विवेकपूर्वक शोकको आवेगलाई रोक्न प्रयास गर्नुभयो, परन्तु सीताका सुशीलता आदि गुणहरूको सम्झनाले उहाँले त्यसलाई रोक्न सक्नुभएन।

**स्त्रीपुंप्रसङ्ग एतादृक् सर्वत्र त्रासमावहः।**
**अपीश्वराणां किमुत ग्राम्यस्य गृहचेतसः॥ १७॥**

**पदार्थ–**
**स्त्रीपुंप्रसङ्गः** = स्त्री र पुरुषबीचको सम्बन्ध
**ईश्वराणां अपि** = ईश्वरहरूका लागि पनि
**सर्वत्र** = सबै ठाउँमा
**एतादृक्** = यस्तै
**त्रासम् आवहः** = दुःख बोक्नेवाला (दुःखको कारण बन्दछ भने)
**गृहचेतसः** = घरपरिवारमा आसक्त

**ग्राम्यस्य** = सामान्य व्यक्तिका लागि
**किम् उत** = कस्तो हुन्छ होला ?

**वाक्यार्थ–** स्त्री र पुरुषका बीचको सम्बन्ध यसरी ईश्वरहरूका लागि पनि सधैँ दुःखको कारण बन्दछ भने घरपरिवार आदिमा लिप्त सामान्य व्यक्तिका लागि कस्तो हुन्छ होला ?

**विवरण–** भगवान् श्रीरामको सम्पूर्ण जीवन चरित्रमा दुःख, पीडा या वियोगको प्रसङ्ग नै धेरै देखिन्छ। राज्याभिषेक हुने वेलामा वनमा जानु, त्यहाँ पनि सीताजीको हरण भई बर्सौंसम्म पत्नीविहीन हुन पर्नु, वनमैं रहँदा पिताको मृत्यु हुनु, राज्यमा फर्किसकेपछि पनि एउटा मूर्खको दुर्वचन सुनी सीतात्याग गर्न पर्नु यी सबै पीडादायक प्रसङ्ग हुन्। ईश्वर भएर पनि किन यति धेरै दुःख पाउनुपर्‍यो त ? भन्ने शङ्का हुन सक्छ। यसको उत्तर के हो भने भगवान् श्रीरामको जीवनमा सीतावियोग र त्यससँग सम्बन्धित अन्य दुःखदायी घटना हुनुको रहस्य संसारलाई शिक्षा दिनु हो। परमात्मासँग उहाँको नित्यशक्तिको वियोग कहिले छ र ? सीताले पृथिवीको गर्भमा प्रवेश गरिन् भनी वियोगमा श्रीराम रुनु संसारलाई देखाउने लीला हो। स्त्री-पुरुष आदिको सांसारिक सम्बन्ध यस्तै दुःखदायक हुन्छ। ईश्वर भएर पनि श्रीरामले यो सबै भोग्नुपर्‍यो भने जो घरमा आसक्त व्यक्ति छ, त्यसले रुन् कति दुःख पाउला ? त्यसैले सांसारिक सम्बन्धबाट अन्त्यमा निश्चित रूपमा दुःख प्राप्त हुन्छ भन्ने कुरा भगवान् श्रीरामको जीवनचरित्रबाट स्पष्ट हुन्छ।

**तत ऊर्ध्वं ब्रह्मचर्यं धारयन्नजुहोत् प्रभुः।**
**त्रयोदशाब्दसाहस्रमग्निहोत्रमखण्डितम्॥ १८॥**

**पदार्थ–**
**ततः ऊर्ध्वं** = त्यसपछि
**प्रभुः** = भगवान् श्रीरामले
**ब्रह्मचर्यं** = ब्रह्मचर्य व्रतलाई
**धारयन्** = पालन गरेर
**त्रयोदशाब्दसाहस्रं** = तेह्र हजार वर्षसम्म
**अखण्डितम्** = अखण्डरूपले
**अग्निहोत्रं** = अग्निहोत्र याग
**अजुहोत्** = गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीरामले ब्रह्मचर्यव्रत पालन गरी तेह्र हजार वर्षसम्म लगातार अग्निहोत्र याग गर्नुभयो।

**स्मरतां हृदि विन्यस्य विद्धं दण्डककण्टकैः।**
**स्वपादपल्लवं राम आत्मज्योतिरगात् ततः॥ १९॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**रामः** = भगवान् श्रीरामचन्द्रले
**दण्डककण्टकैः** = दण्डकारण्यका काँडाद्वारा
**विद्धं** = घोचिएका
**स्वपादपल्लवं** = आफ्ना चरणरूप पालुवालाई
**स्मरतां** = स्मरण गर्ने प्रिय भक्तहरूको
**हृदि** = हृदयमा
**विन्यस्य** = राखेर
**आत्मज्योतिः** = आफ्नो ज्योतिर्मय धाममा
**अगात्** = जानुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीरामचन्द्र दण्डकारण्य घुम्दा काँडाद्वारा घोचिएका आफ्ना

चरणपल्लवलाई प्रिय भक्तहरूको हृदयमा राखेर आफ्नो ज्योतिर्मय धाममा जानुभयो।

**नेदं यशो रघुपतेः सुरयाच्ञयात्त-**
**लीलातनोरधिकसाम्यविमुक्तधाम्नः।**
**रक्षोवधो जलधिबन्धनमस्त्रपूगैः**
**किं तस्य शत्रुहनने कपयः सहायाः॥ २०॥**

**पदार्थ–**
**सुरयाच्ञया** = देवताहरूको अनुरोधले गर्दा
**आत्तलीलातनोः** = लीलामय शरीर धारण गरेका
**अधिकसाम्यविमुक्तधाम्नः** = अर्को कुनै आफूभन्दा धेरै वा समान तेजस्वी व्यक्ति नभएका
**रघुपतेः** = भगवान् श्रीरामका लागि
**अस्त्रपूगैः** = शस्त्रास्त्रद्वारा
**रक्षोवधः** = राक्षसहरूको वध गर्नु
**जलधिबन्धनं** = समुद्रमा पुल बाँध्नु जस्ता
**इदं** = यी सबै काम
**न यशः** = कुनै कीर्तिप्रद (आश्चर्यदायक) कुरा होइनन्
**शत्रुहनने** = शत्रुलाई मार्नका लागि
**तस्य** = ती भगवान् श्रीरामको
**कपयः** = वानरहरू
**सहायाः** = सहयोगी बने भन्ने कुराहरू
**किं** = के हो र (केवल लीला मात्र हो)

**वाक्यार्थ–** देवताहरूको अनुरोधलाई स्विकारेर लीलामय शरीर धारण गर्नुभएका भगवान् श्रीरामभन्दा धेरै वा समान तेजस्वी अर्को व्यक्ति यस संसारमा छैन। यस्ता सामर्थ्यवान् भगवान्ले शस्त्रास्त्रद्वारा राक्षसहरूको वध गर्नु, समुद्रमा पुल बाँध्नु आदि कुनै पनि कुरा आश्चर्यका होइनन्। त्यस्तै शत्रुनाश गर्न भगवान्ले वानरसेनाको सहायता लिनु पर्ने जरुरी थिएन। ती सबै भगवान् श्रीरामका लीला मात्र हुन्।

**यस्यामलं नृपसदःसु यशोऽधुनापि**
**गायन्त्यघघ्नमृषयो दिगिभेन्द्रपट्टम्।**
**तं नाकपालवसुपालकिरीटजुष्ट-**
**पादाम्बुजं रघुपतिं शरणं प्रपद्ये॥ २१॥**

**पदार्थ–**
**यस्य** = जुन भगवान्को
**अघघ्नं** = पाप नाश गर्ने
**दिगिभेन्द्रपट्टम्** = (दिग्गजहरू भएको ठाउँसम्म) चारैतिर फैलिएको
**अमलं** = निर्मल
**यशः** = कीर्तिलाई
**अधुना अपि** = आज पनि
**ऋषयः** = ऋषिहरू
**नृपसदःसु** = ठुला-ठुला राजसभाहरूमा
**गायन्ति** = चर्चा गर्दछन्
**तं** = त्यस्ता पवित्र कीर्तिशाली
**नाकपालवसुपालकिरीटजुष्ट-**

**पादाम्बुजं** = स्वर्गका देवता र पृथिवीका अधिपतिहरूद्वारा वन्दना गरिएका चरणकमलयुक्त
**रघुपतिं** = श्रीरामचन्द्रको
**शरणं** = शरणमा
**प्रपद्ये** = पर्दछौँ

**वाक्यार्थ–** सम्पूर्ण पापलाई नाश गरिदिने भगवान् श्रीरामचन्द्रको चारै दिशामा फैलिएको निर्मल कीर्तिको चर्चा आजसम्म पनि महर्षिहरू ठुला-ठुला राजसभाहरूमा गरिरहन्छन्। अनि जसका चरणकमललाई स्वर्गका देवता र पृथिवीका अधिपतिहरू वन्दना गरिरहन्छन् त्यस्ता भगवान् श्रीरामको शरणमा हामी पनि पर्दछौँ।

**स यैः स्पृष्टोऽभिदृष्टो वा संविष्टोऽनुगतोऽपि वा।**
**कोसलास्ते ययुः स्थानं यत्र गच्छन्ति योगिनः॥ २२॥**

**पदार्थ–**
**सः** = त्यस्ता भगवान् श्रीराम
**यैः** = जसद्वारा
**स्पृष्टः** = स्पर्श गरिनुभयो
**अभिदृष्टः** = दर्शन गरिनुभयो
**वा** = अथवा
**संविष्टः** = (जोसँग) सँगै बसिदिनुभयो
**वा** = अथवा
**अनुगतः अपि** = अनुसरण गरिनुभयो
**ते** = ती सबै
**कोसलाः** = कोसल (अयोध्या) वासीहरू
**यत्र** = जहाँ
**योगिनः** = योगीहरू
**गच्छन्ति** = जान्छन्
**स्थानं** = त्यही ठाउँमा
**ययुः** = गए

**वाक्यार्थ–** जो-जोले भगवान् श्रीरामलाई प्रत्यक्ष स्पर्श र दर्शन गरे अथवा भगवान्‌को सान्निध्यमा बस्ने वा भगवान्‌को अनुसरण गर्ने सुअवसर प्राप्त गरे ती सबै अयोध्यावासीहरूले योगीहरूद्वारा प्राप्त गरिने परमपदलाई प्राप्त गरे।

**पुरुषो रामचरितं श्रवणैरुपधारयन्।**
**आनृशंस्यपरो राजन् कर्मबन्धैर्विमुच्यते॥ २३॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**आनृशंस्यपरः** = क्रूरता आदि दोषले रहित भएको
**पुरुषः** = व्यक्ति
**श्रवणैः** = श्रवणेन्द्रियका वृत्तिहरूद्वारा
**रामचरितं** = भगवान् श्रीरामका चरित्रहरूलाई
**उपधारयन्** = चिन्तन गर्दै
**कर्मबन्धैः** = (संसारको कारण भएका पुण्य, पाप आदि) कर्मबाट प्राप्त हुने बन्धनहरूबाट
**विमुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** हे राजा परीक्षित्! क्रूरता आदि दोषले रहित भएको व्यक्ति भगवान् श्रीरामको चरित्रको श्रवण र चिन्तनद्वारा कर्मबन्धनबाट मुक्त हुन्छ।

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**कथं स भगवान् रामो भ्रातॄन् वा स्वयमात्मनः।**

**तस्मिन् वा तेऽन्ववर्तन्त प्रजाः पौराश्च ईश्वरे ॥ २४ ॥**

**पदार्थ–**
**सः भगवान्** = उहाँ भगवान्
**रामः** = श्रीरामले
**स्वयं** = आफूले
**आत्मनः** = आफ्ना
**भ्रातॄन्** = भाइहरूलाई
**कथं वा** = कस्तो व्यवहार गर्नुभयो
**तस्मिन् ईश्वरे** = उहाँ भगवान् श्रीरामलाई
**ते** = ती भाइहरू र
**पौराः** = नगरवासी
**प्रजाः च** = प्रजाहरूले
**अन्ववर्तन्त वा** = कस्तो व्यवहार गरे

**वाक्यार्थ–** भगवान् श्रीरामले भाइहरूप्रति कस्तो व्यवहार गर्नुभयो ? र भाइहरू तथा अयोध्यावासी प्रजाहरूले भगवान्प्रति कस्तो व्यवहार गरे ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथादिशद् दिग्विजये भ्रातॄंस्त्रिभुवनेश्वरः ।**
**आत्मानं दर्शयन् स्वानां पुरीमैक्षत सानुगः ॥ २५ ॥**

**पदार्थ–**
**अथ** = यसपछि (राजसिंहासन स्वीकार गरिसकेपछि)
**त्रिभुवनेश्वरः** = त्रिभुवनका मालिक भगवान् श्रीरामले
**भ्रातॄन्** = आफ्ना भाइहरूलाई
**दिग्विजये** = दिग्विजय गर्नका निम्ति
**आदिशत्** = आज्ञा दिनुभयो र
**सानुगः** = आफ्ना अनुचरले सहित भएर
**स्वानां** = आफ्ना प्रजाहरूलाई
**आत्मानं** = आफ्नो प्रभाव
**दर्शयन्** = देखाउँदै
**पुरीम्** = अयोध्यानगरीलाई
**ऐक्षत** = रेखदेख गर्नुभयो

**वाक्यार्थ–** राजसिंहासन स्वीकार गरेपछि तीनै लोकका मालिक भगवान् श्रीरामले आफ्ना भाइहरूलाई दिग्विजय गर्ने आदेश दिनुभयो। आफूले चाहिँ प्रजाहरूलाई आफ्नो प्रभाव देखाउँदै अयोध्या नगरीको रेखदेख गर्न लाग्नुभयो।

**आसिक्तमार्गां गन्धोदैः करिणां मदशीकरैः ।**
**स्वामिनं प्राप्तमालोक्य मत्तां वा सुतरामिव ॥ २६ ॥**

**पदार्थ–**
**गन्धोदैः** = सुगन्धित जलले र
**करिणां** = हात्तीहरूको
**मदशीकरैः** = मदधाराहरूले
**आसिक्तमार्गां** = सम्पूर्ण मार्गहरू सेचन गरिएकी अयोध्या नगरी
**प्राप्तं** = आफूलाई प्राप्त भएका
**स्वामिनं** = भूपति श्रीरामलाई
**आलोक्य** = देखेर
**सुतराम्** = अत्यन्त
**मत्तां इव वा** = उन्मत्त भएजस्ती देखिइन्

**वाक्यार्थ–** त्यस समयमा अयोध्या नगरीका मार्गहरू सुगन्धित जल र हात्तीका मदधाराहरूले सिञ्चित भएर सुगन्धित भएका कारण आफ्ना स्वामी श्रीरामलाई प्राप्त गरेर अयोध्या नगरी नै उन्मत्त बनेकी हुन् कि जस्तो देखिन्थ्यो।

**प्रासादगोपुरसभा चैत्यदेवगृहादिषु।**
**विन्यस्तहेमकलशैः पताकाभिश्च मण्डिताम्॥ २७॥**

**पदार्थ–**
**प्रासादगोपुरसभाचैत्यदेव-गृहादिषु** = राजभवन, मुख्य द्वार, सभाभवन, विहार तथा देवालय आदिमा
**विन्यस्तहेमकलशैः** = सुनका ठुला-ठुला कलश राखनाले र
**पताकाभिः च** = रङ्गीचङ्गी ध्वजापताकाहरूले
**मण्डिताम्** = अयोध्यानगरी सुशोभित बनेकी थिइन्

**वाक्यार्थ–** राजभवन, मुख्य द्वार, सभाभवन, विहार तथा देवालयहरूमा राखिएका सुनका ठुला-ठुला कलश र रङ्गीचङ्गी ध्वजापताका आदिले अयोध्यानगरी सुशोभित बनेकी थिइन्।

**पूगैः सवृन्तै रम्भाभिः पट्टिकाभिः सुवाससाम्।**
**आदर्शैरंशुकैः स्रग्भिः कृतकौतुकतोरणाम्॥ २८॥**

**पदार्थ–**
**सवृन्तैः** = भेटनाले सहित
**पूगैः** = सुपारीका वृक्ष र
**रम्भाभिः** = केराका थम्बाहरूले, त्यस्तै
**सुवाससाम्** = सुन्दर कपडाका
**पट्टिकाभिः** = ध्वजाहरूले सुशोभित तथा
**आदर्शैः** = ऐनाहरूले
**अंशुकैः** = रङ्गी-विरङ्गी कपडाका ध्वजाहरूले र
**स्रग्भिः** = मालाहरूले
**कृतकौतुकतोरणाम्** = विचित्र किसिमले बनाइएका तोरणहरूले सजिएकी (अयोध्या नगरी अत्यन्त सुशोभित थिइन्)

**वाक्यार्थ–** भेटना सहितका सुपारीका वृक्ष र केराका थम्बाहरूले तथा राम्रा-राम्रा कपडाका ध्वजाहरूले अयोध्या नगरीलाई सजाइएको थियो। ठाउँ-ठाउँमा ऐना र रङ्गीचङ्गी कपडाका ध्वजाहरू, फूलका माला तथा विचित्रका तोरणहरूले सिङ्गारिएकी अयोध्या नगरी अत्यन्त सुशोभित बनेकी थिइन्।

**तमुपेयुस्तत्र तत्र पौरा अर्हणपाणयः।**
**आशिषो युयुजुर्देव पाहीमां प्राक् त्वयोद्धृताम्॥ २९॥**

**पदार्थ–**
**अर्हणपाणयः** = हातमा स्वागतका सामग्री लिएका
**पौराः** = नगरवासीहरू
**तत्र तत्र** = ठाउँ-ठाउँबाट
**तम्** = ती भगवान् श्रीरामकहाँ
**उपेयुः** = आए
**आशिषः** = आशीर्वाद
**युयुजुः** = दिँदै
**देव** = हे भगवान्
**त्वया** = हजुरद्वारा
**प्राक्** = पहिला (वराह अवतारमा)
**उद्धृताम्** = उद्धार गरिएकी
**इमां** = यी पृथिवीलाई
**पाहि** = रक्षा गर्नुहोस् (भनी प्रार्थना गर्न थाले)

**वाक्यार्थ–** हातमा स्वागतका सामग्री लिएर ठाउँ-ठाउँबाट आएका पुरवासीहरूले महाराज

श्रीरामलाई आशीर्वाद दिए। त्यसपछि हे भगवान्! पहिला वराह अवतारमा हजुरद्वारा नै उद्धार गरिएकी यी पृथिवीलाई रक्षा गर्नुहोस् भन्दै उनीहरू प्रार्थना गर्न लागे।

**ततः प्रजा वीक्ष्य पतिं चिरागतं दिदृक्षयोत्सृष्टगृहाः स्त्रियो नराः।**
**आरुह्य हर्म्याण्यरविन्दलोचनमतृप्तनेत्राः कुसुमैरवाकिरन्॥ ३०॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**चिरागतं** = धेरै समयपछि आउनुभएका
**पतिं** = स्वामी श्रीरामलाई
**वीक्ष्य** = देखेर
**अतृप्तनेत्राः** = आँखा नअघाएका
**प्रजाः** = अयोध्यावासी
**स्त्रियः नराः** = स्त्री-पुरुषहरू
**दिदृक्षया** = दर्शन गर्ने इच्छाले
**उत्सृष्टगृहाः** = आफ्ना घरबार त्यागी
**हर्म्याणि**= (बाटो किनारका) अग्ला-अग्ला महलमा
**आरुह्य** = चढेर
**अरविन्दलोचनं** = कमलनयन भगवान् श्रीरामलाई
**कुसुमैः** = फूलहरू
**अवाकिरन्** = बर्साए

**वाक्यार्थ—** धेरै समयपछि भगवान् श्रीराम आउनुभएको छ भन्ने खबर सुनेका अयोध्यावासी सबै स्त्रीपुरुषहरू भगवान्को दर्शन गर्ने इच्छाले घरबार छाडी दौडिए। त्यसरी टाढाबाट आएका उनीहरूले बाटाका छेउछाउका अग्लाअग्ला महलमा चढेर अतृप्त नजरले भगवान्लाई हेर्दै पुष्पवृष्टि गर्न लागे।

**अथ प्रविष्टः स्वगृहं जुष्टं स्वैः पूर्वराजभिः।**
**अनन्ताखिलकोषाढ्यमनर्घ्योरुपरिच्छदम्॥ ३१॥**

**पदार्थ—**
**अथ** = त्यसपछि (भगवान् श्रीराम)
**स्वैः** = आफ्ना
**पूर्वराजभिः** = पूर्वराजाहरूद्वारा
**जुष्टं** = रक्षा गरिएको
**अनन्ताखिलकोषाढ्यं** = अनन्त खजानाले भरिएको तथा
**अनर्घ्योरुपरिच्छदम्** = बहुमूल्य सामग्रीले सजिएको
**स्वगृहं** = आफ्नो राजभवनमा
**प्रविष्टः** = प्रवेश गर्नुभयो

**वाक्यार्थ—** भगवान् श्रीराम (प्रजाहरूलाई दर्शन दिँदै) आफ्ना पूर्वज राजाहरूद्वारा संरक्षण गरिएको, अनन्त खजानाले भरिएको अनि बहुमूल्य सामग्रीले सजिएको राजभवनमा प्रवेश गर्नुभयो।

**विद्रुमोदुम्बरद्वारैर्वैदूर्यस्तम्भपङ्क्तिभिः।**
**स्थलैर्मारकतैः स्वच्छैर्भ्राजत्स्फटिकभित्तिभिः॥ ३२॥**

**पदार्थ—**
(भगवान्को राजमहल)
**विद्रुमोदुम्बरद्वारः** = मुगा र तामाका द्वारहरूले
**वैदूर्यस्तम्भपङ्क्तिभिः** = वैदूर्यमणिका खम्बाहरूले

**मारकतैः** = मरकतमणिले बनाइएका
**स्वच्छैः** = निर्मल
**स्थलैः** = प्राङ्गणहरूले
**भातस्फटिकभित्तिभिः** = चम्किएका स्फटिकका भित्ताहरूले युक्त थियो

**वाक्यार्थ–** भगवान्को त्यो राजमहल मुगा र तामाबाट निर्मित द्वारहरू, वैदूर्यमणिबाट बनाइएका सुन्दर खम्बाहरू, मरकतमणिले सजाइएका निर्मल स्थलहरू एवं चम्किएका स्फटिकका भित्ताहरूले गर्दा अत्यन्त सुशोभित थियो।

**चित्रस्त्रग्भिः पट्टिकाभिर्वासोमणिगणांशुकैः।**
**मुक्ताफलैश्चिदुल्लासैः कान्तकामोपपत्तिभिः॥ ३३॥**
**धूपदीपैः सुरभिभिर्मण्डितं पुष्पमण्डनैः।**
**स्त्रीपुम्भिः सुरसङ्काशैर्जुष्टं भूषणभूषणैः॥ ३४॥**

**पदार्थ–**
(त्यो राजमहल)
**चित्रस्त्रग्भिः** = रङ्गी–विरङ्गी मालाहरूद्वारा
**वासः** = राम्रा–राम्रा कपडाका
**पट्टिकाभिः** = ध्वजाहरूद्वारा
**मणिगणांशुकैः** = विभिन्न प्रकारका मणिका प्रकाशद्वारा
**चिदुल्लासैः** = शुद्ध चित्तजस्ता
**मुक्ताफलैः** = मोतीहरूद्वारा
**कान्तकामोपपत्तिभिः** = सुन्दर भोगविलासका सामग्रीहरूद्वारा
**सुरभिभिः** = सुगन्धित
**धूपदीपैः** = धूपदीपद्वारा र
**पुष्पमण्डनैः** = फूलका अलङ्कारहरूद्वारा
**मण्डितं** = सुशोभित तथा
**भूषणभूषणैः** = आभूषणलाई पनि भूषित गरिदिने
**सुरसङ्काशैः** = देवताहरूजस्ता
**स्त्रीपुम्भिः** = स्त्री–पुरुषहरूद्वारा
**जुष्टम्** = सेवित थियो

**वाक्यार्थ–** भगवान् श्रीरामचन्द्रको त्यो राजमहल रङ्गी–विरङ्गी माला, राम्रा–राम्रा कपडाका ध्वजापताका, विभिन्न मणिका प्रकाश, सुन्दर मोती, उत्तम–उत्तम भोगविलासका सामग्री, सुगन्धित धूपदीप र फूलका गहनाहरूले सिँगारिएको थियो। आभूषणहरूलाई पनि भूषित गरिदिने देवताजस्ता स्त्रीपुरुषहरू त्यहाँ सेवामा तत्पर थिए।

**तस्मिन् स भगवान् रामः स्निग्धया प्रिययेष्टया।**
**रेमे स्वारामधीराणामृषभः सीतया किल॥ ३५॥**

**पदार्थ–**
**किल** = निश्चय नै
**तस्मिन्** = त्यो दिव्य राजमहलमा
**स्वारामधीराणाम्** = आत्माराम जितेन्द्रियहरूमा
**ऋषभः** = श्रेष्ठ
**सः** = ती
**भगवान् रामः** = भगवान् रामचन्द्र
**स्निग्धया** = स्नेहमयी
**इष्टया प्रियया** = अत्यन्त प्यारी पत्नी
**सीतया** = सीताका साथमा
**रेमे** = रमण गर्नुहुन्थ्यो

**वाक्यार्थ–** जितेन्द्रियहरूमा श्रेष्ठ आत्माराम भगवान् श्रीरामचन्द्र ती दिव्य राजमहलहरूमा प्यारी

पत्नी सीताका साथमा रमण गर्नुहुन्थ्यो।

**बुभुजे च यथाकालं कामान् धर्ममपीडयन्।**
**वर्षपूगान् बहून् नृणामभिध्याताङ्घ्रिपल्लवः॥ ३६॥**

**पदार्थ–**
**नृणां** = प्रजाहरूद्वारा
**अभिध्याताङ्घ्रिपल्लवः** = नित्य ध्यान गरिएका चरणकमल भएका भगवान् श्रीरामले
**बहून्** = धेरै
**वर्षपूगान्** = वर्षहरूसम्म
**धर्मम्** = धर्मलाई
**अपीडयन्** = पीडित नबनाउँदै (धर्मपूर्वक)
**यथाकालं** = समयअनुसार
**कामान् च** = भोग्य वस्तुहरूलाई पनि
**बुभुजे** = भोग गर्नुभयो

**वाक्यार्थ–** प्रजाहरूद्वारा नित्य निरन्तर ध्यान गरिने चरणकमल भएका भगवान् श्रीरामले धेरै वर्षसम्म धर्मपूर्वक राज्य गर्दै समयअनुसारका भोग्य वस्तुहरूको पनि भोग गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**
**श्रीरामोपाख्याने एकादशोऽध्यायः॥ ११॥**

# अथ द्वादशोऽध्यायः

## इक्ष्वाकुवंशीय अन्य राजाहरूको वर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कुशस्य चातिथिस्तस्मान्निषधस्तत्सुतो नभः।**
**पुण्डरीकोऽथ तत्पुत्रः क्षेमधन्वाभवत् ततः॥ १॥**

**पदार्थ—**
**कुशस्य** = कुशका पुत्र
**अतिथिः** = अतिथि भए
**तस्मात्** = ती अतिथिबाट
**निषधः** = निषध भए
**तत्सुतः** = ती निषधका छोरा
**नभः** = नभ भए
**अथ** = यसपछि
**पुण्डरीकः** = पुण्डरीक भए
**ततः च** = त्यसपछि
**तत्पुत्रः** = ती पुण्डरीकका छोरा
**क्षेमधन्वा** = क्षेमधन्वा
**अभवत्** = भए

**वाक्यार्थ—** कुशका पुत्र अतिथि भए, अतिथिका छोरा निषध, निषधका छोरा नभ, नभका छोरा पुण्डरीक र पुण्डरीकका छोरा क्षेमधन्वा भए।

**देवानीकस्ततोऽनीहः पारियात्रोऽथ तत्सुतः।**
**ततो बलस्थलस्तस्माद् वज्रनाभोऽर्कसम्भवः॥ २॥**

**पदार्थ—**
(क्षेमधन्वाका छोरा)
**देवानीकः** = देवानीक भए
**ततः** = ती देवानीकबाट
**अनीहः** = अनीह भए
**अथ** = त्यसपछि
**तत्सुतः** = ती अनीहका छोरा
**पारियात्रः** = पारियात्र भए
**ततः** = उनीबाट
**बलस्थलः** = बलस्थल जन्मे
**तस्मात्** = ती बलस्थलबाट
**अर्कसम्भवः** = सूर्यका अंशबाट जन्मिएका
**वज्रनाभः** = वज्रनाभ भए

**वाक्यार्थ—** क्षेमधन्वाका छोरा देवानीक भए। उनका छोरा अनीह, अनीहका छोरा पारियात्र र पारियात्रका छोरा बलस्थल भए। बलस्थलका छोरा वज्रनाभ भए, यिनी सूर्यका अंशबाट जन्मिएका थिए।

**खगणस्तत्सुतस्तस्माद् विधृतिश्चाभवत् सुतः।**
**ततो हिरण्यनाभोऽभूद् योगाचार्यस्तु जैमिनेः॥ ३॥**

**पदार्थ—**
**तत्सुतः** = ती वज्रनाभका छोरा
**खगणः** = खगण भए
**तस्मात् च** = ती खगणबाट
**विधृतिः** = विधृति नामका
**सुतः** = छोरा
**अभवत्** = भए
**ततः** = ती विधृतिबाट उत्पन्न
**हिरण्यनाभः तु** = हिरण्यनाभ त

| | | |
|---|---|---|
| **जैमिनेः** = जैमिनिका शिष्य | **योगाचार्यः** = योगाचार्य | **अभूत्** = भए |

**वाक्यार्थ–** वज्रनाभबाट खगण, खगणबाट विधृति र विधृतिबाट हिरण्यनाभ उत्पन्न भए। यी हिरण्यनाभ जैमिनिका शिष्य र योगाचार्य विद्वान् थिए।

**शिष्यः कौसल्य आध्यात्मं याज्ञवल्क्योऽध्यगाद् यतः।**
**योगं महोदयमृषिर्हृदयग्रन्थिभेदकम्॥ ४॥**

| | | |
|---|---|---|
| पदार्थ– | **शिष्यः** = शिष्य बनेर | **महोदयं** = परमसिद्धि प्रदान गर्ने |
| **कौसल्यः** = कोसल देश निवासी | **यतः** = जसबाट | **आध्यात्मं** = अध्यात्मसम्बन्धी |
| **ऋषिः** = ऋषि | **हृदयग्रन्थिभेदकम्** = हृदयको | **योगं** = ज्ञान |
| **याज्ञवल्क्यः** = याज्ञवल्क्यले | अज्ञानरूपी गाँठोलाई फुकाइदिने | **अध्यगात्** = ग्रहण गरेका थिए |

**वाक्यार्थ–** कोसल देशमा बस्ने याज्ञवल्क्य ऋषिले तिनै हिरण्यनाभको शिष्य बनेर हृदयमा रहेको अज्ञानको गाँठो फुकाइदिने अनि परमसिद्धि प्रदान गर्ने अध्यात्मविद्या ग्रहण गरेका थिए।

**पुष्यो हिरण्यनाभस्य ध्रुवसन्धिस्ततोऽभवत्।**
**सुदर्शनोऽथाग्निवर्णः शीघ्रस्तस्य मरुः सुतः॥ ५॥**

| | | |
|---|---|---|
| पदार्थ– | **ध्रुवसन्धिः** = ध्रुवसन्धि | **शीघ्रः** = शीघ्र र |
| **हिरण्यनाभस्य** = हिरण्यनाभका | **अभवत्** = भए | **तस्य** = ती शीघ्रका |
| छोरा | **अथ** = यसपछि (ध्रुवसन्धिबाट) | **सुतः** = छोरा |
| **पुष्यः** = पुष्य भए | **सुदर्शनः** = सुदर्शन (तिनका) | **मरुः** = मरु भए |
| **ततः** = ती पुष्यबाट | **अग्निवर्णः** = अग्निवर्ण (तिनका) | |

**वाक्यार्थ–** हिरण्यनाभका छोरा पुष्य भए। पुष्यका ध्रुवसन्धि, ध्रुवसन्धिका सुदर्शन, सुदर्शनका अग्निवर्ण, अग्निवर्णका शीघ्र र शीघ्रका मरु नामका छोरा भए।

**योऽसावास्ते योगसिद्धः कलापग्राममास्थितः।**
**कलेरन्ते सूर्यवंशं नष्टं भावयिता पुनः॥ ६॥**

| | | |
|---|---|---|
| पदार्थ– | गाउँमा | **अन्ते** = अन्त्यमा |
| **यः** = जुन मरु | **आस्थितः** = आश्रय लिएर | **नष्टं** = मासिएको |
| **योगसिद्धः** = योगद्वारा सिद्ध | **आस्ते** = बसेका छन् | **सूर्यवंशं** = सूर्यवंशलाई |
| भएर | **असौ** = यिनै मरुले नै | **पुनः** = फेरि |
| **कलापग्रामं** = कलापनामक | **कलेः** = कलि युगको | **भावयिता** = पछि चलाउनेछन् |

**वाक्यार्थ–** राजा मरु योगद्वारा सिद्ध भएर कलाप नामक गाउँमा बसेका छन्। यिनले नै कलि

युगको अन्त्यमा मासिएको सूर्यवंशलाई फेरि पछि चलाउनेछन्।

**तस्मात् प्रसुश्रुतस्तस्य सन्धिस्तस्याप्यमर्षणः।**
**महस्वांस्तत्सुतस्तस्माद् विश्वसाह्वोऽन्ववजायत॥ ७॥**

**पदार्थ–**
**तस्मात्** = ती मरुबाट
**प्रसुश्रुतः** = प्रसुश्रुत
**तस्य** = ती प्रसुश्रुतका
**सन्धिः** = सन्धि
**तस्य अपि** = तिनका पनि
**अमर्षणः** = अमर्षण
**तत्सुतः** = उनका छोरा
**महस्वान्** = महस्वान् र
**तस्मात्** = ती महस्वान्‌बाट
**विश्वसाह्वः** = विश्वसाह्व
**अन्वजायत** = जन्मिए

**वाक्यार्थ–** मरुका छोरा प्रसुश्रुत भए। उनका छोरा सन्धि, सन्धिका छोरा अमर्षण, अमर्षणका छोरा महस्वान् र महस्वान्‌का छोरा विश्वसाह्व भए।

**ततः प्रसेनजित् तस्मात् तक्षको भविता पुनः।**
**ततो बृहद्बलो यस्तु पित्रा ते समरे हतः॥ ८॥**

**पदार्थ–**
**ततः** = ती विश्वसाह्वबाट
**प्रसेनजित्** = प्रसेनजित्
**तस्मात्** = उनबाट
**तक्षकः** = तक्षक
**भविता** = भए
**पुनः** = फेरि
**ततः** = ती तक्षकबाट
**बृहद्बलः** = बृहद्बल भए
**यः तु** = जुन बृहद्बल
**ते** = तपाईंका
**पित्रा** = पिताद्वारा
**समरे** = युद्धमा
**हतः** = मारिएका थिए

**वाक्यार्थ–** विश्वसाह्वका छोरा प्रसेनजित् भए। प्रसेनजित्का तक्षक र तक्षकका छोरा बृहद्बल भए। हे परीक्षित् ! यिनै बृहद्बल तपाईंका पिता अभिमन्युबाट युद्धमा मारिएका थिए।

**एते हीक्ष्वाकुभूपाला अतीताः शृण्वनागतान्।**
**बृहद्बलस्य भविता पुत्रो नाम बृहद्रणः॥ ९॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**एते** = यी वर्णन गरिएका
**अतीताः** = बितिसकेका
**इक्ष्वाकुभूपालाः** = इक्ष्वाकुवंशका राजाहरू हुन्, अब
**अनागतान्** = आउनेवालाका विषयमा
**शृणु** = सुन्नुहोस्
**बृहद्बलस्य** = बृहद्बलका
**पुत्रः** = छोरा
**बृहद्रणः नाम** = बृहद्रण नाम भएका
**भविता** = हुनेछन्

**वाक्यार्थ–** हे परीक्षित् ! यी माथि वर्णन गरिएका राजाहरू इक्ष्वाकुवंशमा पहिले जन्मिएका राजाहरू हुन्। अब पछि हुने राजाहरूको विषयमा सुन्नुहोस्। बृहद्बलका छोरा बृहद्रण हुनेछन्।

**ऊरुक्रियः सुतस्तस्य वत्सवृद्धो भविष्यति।**

**प्रतिव्योमस्ततो भानुर्दिवाको वाहिनीपतिः ॥ १० ॥**

**पदार्थ–**
**ततः** = ती बृहद्रणबाट
**ऊरुक्रियः** = ऊरुक्रिय हुनेछन्
**तस्य** = तिनका
**सुतः** = पुत्र
**वत्सवृद्धः** = वत्सवृद्ध
**ततः** = ती वत्सवृद्धबाट
**प्रतिव्योमः** = प्रतिव्योम (उनीबाट)
**भानुः** = भानु, उनीबाट
**वाहिनीपतिः** = सेनापति
**दिवाकः** = दिवाक
**भविष्यति** = हुनेछन्

**वाक्यार्थ–** बृहद्रणका छोरा ऊरुक्रिय हुनेछन्। ऊरुक्रियका छोरा वत्सवृद्ध, वत्सवृद्धका छोरा प्रतिव्योम, प्रतिव्योमका छोरा भानु र भानुका छोरा सेनापति दिवाक हुनेछन्।

**सहदेवस्ततो वीरो बृहदश्वोऽथ भानुमान्।**
**प्रतीकाश्वो भानुमतः सुप्रतीकोऽथ तत्सुतः ॥ ११ ॥**

**पदार्थ–**
**ततः** = ती दिवाकबाट
**वीरः** = वीर
**सहदेवः** = सहदेव हुनेछन्
**अथ** = यसपछि
**बृहदश्वः** = बृहदश्व (तिनका)
**भानुमान्** = भानुमान्
**भानुमतः** = भानुमान्बाट
**प्रतीकाश्वः** = प्रतीकाश्व
**अथ** = यसपछि
**तत्सुतः** = ती प्रतीकाश्वका छोरा
**सुप्रतीकः** = सुप्रतीक हुनेछन्

**वाक्यार्थ–** दिवाकका छोरा सहदेव हुनेछन्। सहदेवबाट बृहदश्व, उनीबाट भानुमान्, उनीबाट प्रतीकाश्व र प्रतीकाश्वबाट सुप्रतीक नामका छोरा हुनेछन्।

**भविता मरुदेवोऽथ सुनक्षत्रोऽथ पुष्करः।**
**तस्यान्तरिक्षस्तत्पुत्रः सुतपास्तदमित्रजित् ॥ १२ ॥**

**पदार्थ–**
**अथ** = यसपछि (सुप्रतीकबाट)
**मरुदेवः** = मरुदेव
**अथ** = यसपछि (मरुदेवबाट)
**सुनक्षत्रः** = सुनक्षत्र (उनीबाट)
**पुष्करः** = पुष्कर
**तस्य** = ती पुष्करका
**अन्तरिक्षः** = अन्तरिक्ष
**तत्पुत्रः** = ती अन्तरिक्षका छोरा
**सुतपाः** = सुतपा र (उनका पुत्र)
**तत्** = ती
**अमित्रजित्** = अमित्रजित्
**भविता** = हुनेछन्

**वाक्यार्थ–** सुप्रतीकबाट मरुदेव र मरुदेवबाट सुनक्षत्र हुनेछन्। सुनक्षत्रबाट पुष्कर, पुष्करबाट अन्तरिक्ष, अन्तरिक्षबाट सुतपा र सुतपाबाट अमित्रजित् नामका छोरा जन्मिनेछन्।

**बृहद्राजस्तु तस्यापि बर्हिस्तस्मात् कृतञ्जयः।**
**रणञ्जयस्तस्य सुतः सञ्जयो भविता ततः ॥ १३ ॥**

पदार्थ—
**तस्य** = ती अमित्रजित्‌का छोरा
**बृहद्राजः** = बृहद्राज (उनका छोरा)
**बर्हिः** = बर्हि
**तस्मात्** = ती बर्हिबाट
**कृतञ्जयः** = कृतञ्जय
**तस्य** = ती कृतञ्जयका
**सुतः** = छोरा
**रणञ्जयः** = रणञ्जय र
**ततः तु** = ती रणञ्जयबाट चाहिँ
**सञ्जयः अपि** = सञ्जय पनि
**भविता** = हुनेछन्

**वाक्यार्थ—** अमित्रजित्‌का छोरा बृहद्राज र उनका छोरा बर्हि हुनेछन्। त्यसपछि बर्हिबाट कृतञ्जय, कृतञ्जयबाट रणञ्जय र रणञ्जयबाट सञ्जय नामका छोरा हुनेछन्।

**तस्माच्छाक्योऽथ शुद्धोदो लाङ्गलस्तत्सुतः स्मृतः।**
**ततः प्रसेनजित् तस्मात् क्षुद्रको भविता ततः॥ १४॥**

पदार्थ—
**तस्मात्** = ती सञ्जयबाट
**शाक्यः** = शाक्य
**अथ** = यसपछि (शाक्यबाट)
**शुद्धोदः** = शुद्धोद
**तत्सुतः** = उनका छोरा
**लाङ्गलः** = लाङ्गल नामले
**स्मृतः** = प्रसिद्ध हुनेछन्
**ततः** = ती लाङ्गलबाट
**प्रसेनजित्** = प्रसेनजित्
**तस्मात्** = ती प्रसेनजित्‌बाट
**क्षुद्रकः** = क्षुद्रक
**भविता** = हुनेछन्

**वाक्यार्थ—** सञ्जयका छोरा शाक्य र शाक्यका छोरा शुद्धोद हुनेछन्। उनका छोरा लाङ्गल नामले प्रसिद्ध हुनेछन्। लाङ्गलका छोरा प्रसेनजित् र प्रसेनजित्‌का छोरा क्षुद्रक हुनेछन्।

**रणको भविता तस्मात् सुरथस्तनयस्ततः।**
**सुमित्रो नाम निष्ठान्त एते बार्हद्बलान्वयाः॥ १५॥**

पदार्थ—
**तस्मात्** = ती क्षुद्रकबाट
**रणकः** = रणक
**ततः** = ती रणकबाट
**सुरथः** = सुरथ नामका
**तनयः** = छोरा
**भविता** = हुनेछन्
**निष्ठान्ते** = वंशको अन्त्यमा
**सुमित्रः** = सुमित्र
**नाम** = नामका राजा हुनेछन्
**एते** = यी सबै
**बार्हद्बलान्वयाः** = बृहद्बलका वंशज हुनेछन्

**वाक्यार्थ—** क्षुद्रकका छोरा रणक हुनेछन्। रणकबाट सुरथ र सुरथबाट यस वंशका अन्तिम राजा सुमित्रको जन्म हुनेछ। यी सबै बृहद्बलका वंशज हुनेछन्।

**इक्ष्वाकूणामयं वंशः सुमित्रान्तो भविष्यति।**
**यतस्तं प्राप्य राजानं संस्थां प्राप्स्यति वै कलौ॥ १६॥**

पदार्थ—
**इक्ष्वाकूणां** = इक्ष्वाकुहरूको
**अयं** = यो
**वंशः** = वंशपरम्परा
**सुमित्रान्तः** = सुमित्रसम्म मात्र
**भविष्यति** = रहनेछ

**यतः** = किनभने
**वै** = निश्चय नै
**कलौ** = कलियुगमा
**तं** = ती सुमित्रलाई
**राजानं** = राजाका रूपमा
**प्राप्य** = पाएर त्यस वंशले
**संस्थां** = समाप्ति
**प्राप्स्यति** = प्राप्त गर्नेछ

**वाक्यार्थ–** इक्ष्वाकुहरूको यो वंशपरम्परा राजा सुमित्रसम्म मात्र रहनेछ किनभने कलियुगमा सुमित्र राजा बनेपछि यस वंशको समाप्ति हुनेछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**

**इक्ष्वाकुवंशवर्णनं नाम द्वादशोऽध्यायः ॥ १२ ॥**

# अथ त्रयोदशोऽध्यायः

## राजा निमिको वंश

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**निमिरिक्ष्वाकुतनयो वसिष्ठमवृतर्त्विजम्।**

**आरभ्य सत्रं सोऽप्याह शक्रेण प्राग्वृतोऽस्मि भोः॥ १॥**

**पदार्थ—**
**इक्ष्वाकुतनयः** = इक्ष्वाकुका छोरा
**निमिः** = निमि थिए (उनले)
**सत्रं** = यज्ञ
**आरभ्य** = प्रारम्भ गरेर
**वसिष्ठं** = वसिष्ठ ऋषिलाई
**ऋत्विजम्** = ऋत्विक्का रूपमा
**अवृत** = वरण गरे
**सः अपि** = ती ऋषि वसिष्ठले पनि
**भोः** = हे (राजा परीक्षित्)
**प्राक्** = पहिले नै
**शक्रेण** = इन्द्रद्वारा
**वृतः** = वरण गरिएको
**अस्मि** = छु
**आह** = भने

**वाक्यार्थ—** इक्ष्वाकुका पुत्र निमि थिए। उनले यज्ञ प्रारम्भ गरेर वसिष्ठ ऋषिलाई ऋत्विक्का रूपमा वरण गरे, तर वसिष्ठले आफूलाई पहिले नै इन्द्रले वरण गरिसकेको कुरा बताए।

**तं निर्वर्त्यागमिष्यामि तावन्मां प्रतिपालय।**

**तूष्णीमासीद् गृहपतिः सोऽपीन्द्रस्याकरोन्मखम्॥ २॥**

**पदार्थ—**
**तं** = त्यसलाई (इन्द्रको यज्ञलाई)
**निर्वर्त्य** = समाप्त गरेर
**आगमिष्यामि** = आउनेछु
**तावत्** = त्यति वेलासम्म
**मां** = मलाई
**प्रतिपालय** = प्रतीक्षा गरिरहनू भने (यो कुरा सुनेर)
**गृहपतिः** = गृहस्वामी राजा निमि
**तूष्णीं** = चुप (मौन)
**आसीत्** = भए
**सः अपि** = ती वसिष्ठले पनि
**इन्द्रस्य** = इन्द्रको
**मखम्** = यज्ञ
**अकरोत्** = गरे

**वाक्यार्थ—** इन्द्रको यज्ञ समाप्त गरेर म आउनेछु, तबसम्म मेरो प्रतीक्षा गर्नू भन्ने वसिष्ठको आज्ञा सुनेर राजा निमि चुप लागे। वसिष्ठ चाहिँ इन्द्रको यज्ञ गराउन गए।

**निमिश्चलमिदं विद्वान् सत्रमारभतामात्मवान्।**

**ऋत्विग्भिरपरैस्तावन्नागमद् यावता गुरुः॥ ३॥**

**पदार्थ—**
**आत्मवान्** = विचारवान्
**विद्वान्** = ज्ञानी
**निमिः** = राजा निमिले
**इदं** = यो जीवन
**चलम्** = क्षणिक छ भन्ने बुझेर

**यावता** = जबसम्म
**गुरुः** = गुरु वसिष्ठ
**न आगमत्** = फर्केर आउनुहुन्न
**तावत्** = तबसम्मका लागि
**अपरैः** = अन्य
**ऋत्विग्भिः** = ऋत्विक्‌हरूद्वारा
**सत्रं** = यज्ञ
**आरभत** = आरम्भ गरे

**वाक्यार्थ–** विचारवान् विद्वान् राजा निमिले यो जीवन क्षणिक छ भन्ने बुझेकाले गुरु वसिष्ठ नफर्किएसम्मका लागि अरू ऋत्विक्‌हरूद्वारा यज्ञ आरम्भ गरे।

**शिष्यव्यतिक्रमं वीक्ष्य निर्वर्त्य गुरुरागत ः।**
**अशपत् पतताद् देहो निमेः पण्डितमानिनः॥ ४॥**

**पदार्थ–**
**निर्वर्त्य** = इन्द्रको यज्ञबाट फर्केर
**आगतः** = आएका
**गुरुः** = गुरु वसिष्ठले
**शिष्यव्यतिक्रमं** = चेलाले गरेको आज्ञा उल्लङ्घन
**वीक्ष्य** = देखेर (ती निमिलाई)
**पण्डितमानिनः** = आफूलाई विद्वान् ठान्ने घमन्डी
**निमेः** = निमिको
**देहः** = शरीर
**पततात्** = पतित होस् भन्ने
**अशपत्** = श्राप दिए

**वाक्यार्थ–** इन्द्रको यज्ञ समाप्त गरी फर्केका वसिष्ठ आफ्नो आज्ञा पालन नगर्ने राजा निमिसँग अत्यन्त रिसाए। त्यसपछि उनले आफैँलाई विद्वान् ठान्ने घमन्डी निमिको शरीर पतित होस् भनी उनलाई श्राप दिए।

**निमिः प्रतिददौ शापं गुरवेऽधर्मवर्तिने।**
**तवापि पतताद् देहो लोभाद् धर्ममजानतः॥ ५॥**

**पदार्थ–**
**निमिः** = राजा निमिले पनि
**अधर्मवर्तिने** = अधर्म गर्ने
**गुरवे** = गुरु वसिष्ठलाई
**लोभात्** = लोभका कारण
**धर्मम्** = धर्मलाई
**अजानतः** = नजान्ने
**तव अपि** = तपाईंको पनि
**देहः** = शरीर
**पततात्** = पतित होस् भन्ने
**शापं** = श्राप
**प्रतिददौ** = फर्काइदिए

**वाक्यार्थ–** राजा निमिले पनि गुरु वसिष्ठलाई लोभका कारण धर्मविरुद्ध कार्य गर्ने तपाईंको शरीर पनि पतित होस् भन्ने श्राप दिए।

**इत्युत्ससर्ज स्वं देहं निमिरध्यात्मकोविदः।**
**मित्रावरुणयोर्जज्ञे उर्वश्यां प्रपितामहः॥ ६॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**अध्यात्मकोविदः** = आत्मविद्याका ज्ञानी
**निमिः** = निमि राजाले
**स्वं** = आफ्नो
**देहं** = शरीर
**उत्ससर्ज** = त्यागिदिए
**प्रपितामहः** = मेरा (शुकदेवका) बुढा हजुरबुवा वसिष्ठले (शरीर त्यागेर)
**मित्रावरुणयोः** = मित्रावरुणबाट

**उर्वश्यां** = उर्वशीमा | **जज्ञे** = जन्म लिए

**वाक्यार्थ–** यसरी आत्मविद्यामा निपुण राजा निमिले आफ्नो शरीर त्यागिदिए। मेरा बुढा हजुरबा वसिष्ठले पनि त्यो शरीर त्यागेर मित्रावरुणबाट उर्वशीको पुत्ररूपमा जन्म लिए।

**गन्धवस्तुषु तद्देहं निधाय मुनिसत्तमाः।**
**समाप्ते सत्रयागेऽथ देवानूचुः समागतान्॥ ७॥**

**पदार्थ–**
**मुनिसत्तमाः** = श्रेष्ठ मुनिहरूले
**तद्देहम्** = ती राजा निमिको शरीरलाई
**गन्धवस्तुषु** = सुगन्धित वस्तुमा
**निधाय** = राखेर
**अथ** = त्यसपछि
**सत्रयागे** = थालिएको यज्ञ
**समाप्ते** = समाप्त भएपछि
**समागतान्** = आएका
**देवान्** = देवताहरूलाई
**ऊचुः** = भने

**वाक्यार्थ–** श्रेष्ठ मुनिहरूले राजा निमिको शरीरलाई सुगन्धित वस्तुमा राखेर आरम्भ गरेको यज्ञ समाप्त गरे। त्यसपछि उनीहरूले यज्ञमा आएका देवताहरूलाई भने।

**राज्ञो जीवतु देहोऽयं प्रसन्नाः प्रभवो यदि।**
**तथेत्युक्ते निमिः प्राह मा भून्मे देहबन्धनम्॥ ८॥**

**पदार्थ–**
**यदि** = यदि
**प्रभवः** = सामर्थ्यवान् हजुरहरू
**प्रसन्नाः** = प्रसन्न हुनुहुन्छ भने
**अयं** = यो
**राज्ञः** = राजा निमिको
**देहः** = शरीर
**जीवतु** = जीवित होस् (त्यसपछि देवताहरूले)
**तथा इति** = त्यस्तै होस्
**उक्ते** = भनेपछि
**निमिः** = राजा निमिले
**मे** = मलाई
**देहबन्धनम्** = शरीररूपी बन्धन
**मा भूत्** = प्राप्त नहोस्
**प्राह** = भने

**वाक्यार्थ–** मुनिहरूले देवताहरूसँग यदि हजुरहरू प्रसन्न हुनुहुन्छ भने राजा निमि जीवित होऊन् भन्ने प्रार्थना गरे। देवताहरूले पनि त्यस्तै होस् भने तर स्वयं राजा निमिले मलाई शरीरको बन्धन प्राप्त नहोस् भने।

**यस्य योगं न वाञ्छन्ति वियोगभयकातराः।**
**भजन्ति चरणाम्भोजं मुनयो हरिमेधसः॥ ९॥**

**पदार्थ–**
**हरिमेधसः** = भगवान्मा बुद्धि लगाएका
**वियोगभयकातराः** = भगवान्सँग वियोग होला कि भन्ने डरले आत्तिएका
**मुनयः** = मुनिहरू
**यस्य** = जुन शरीरसँगको
**योगं** = सम्बन्ध
**न वाञ्छन्ति** = चाहँदैनन्
**चरणाम्भोजं** = भगवान्का चरणकमलको
**भजन्ति** = भजन गर्दछन्

**वाक्यार्थ–** भगवान्मा बुद्धि लगाएका र भगवान्सँग वियोग होला कि भन्ने डरले आत्तिएका मुनिहरू शरीरसँग सम्बन्ध जोड्न चाहँदैनन्। उनीहरू त सधैँ भगवान्का चरणकमलको भजन गर्दछन्।

**देहं नावरुरुत्सेऽहं दुःखशोकभयावहम्।**
**सर्वत्रास्य यतो मृत्युर्मत्स्यानामुदके यथा ॥ १० ॥**

**पदार्थ–**
**दुःखशोकभयावहम्** = दुःख, शोक र भयको कारणरूप
**देहं** = शरीर
**अहं** = म
**न अवरुरुत्से** = धारण गर्न चाहन्नँ
**यतः** = किनभने
**यथा** = जसरी
**उदके** = पानीमा
**मत्स्यानां** = माछाका लागि (जताततै मृत्यु छ, त्यसै गरी)
**अस्य** = यो शरीरको लागि पनि
**सर्वत्र** = सबैतिर
**मृत्युः** = मृत्यु (मात्र व्याप्त छ)

**वाक्यार्थ–** म यो दुःख, शोक र भयको कारणरूप शरीर धारण गर्न चाहन्नँ किनभने जसरी माछालाई पानीमा जताततै मृत्युको डर छ त्यसै गरी यो शरीरका लागि सबैतिर मृत्यु मात्र छ।

**देवा ऊचुः** (देवताहरूले भने)

**विदेह उष्यतां कामं लोचनेषु शरीरिणाम्।**
**उन्मेषणनिमेषाभ्यां लक्षितोऽध्यात्मसंस्थितः ॥ ११ ॥**

**पदार्थ–**
**विदेह** = हे शरीरधारण गर्न नचाहने राजा निमि
**शरीरिणाम्** = प्राणीहरूको
**लोचनेषु** = आँखामा
**कामं** = इच्छाअनुसार
**उष्यतां** = बस
**उन्मेषणनिमेषाभ्यां** = परेला खोल्ने र बन्द गर्ने क्रियाद्वारा
**अध्यात्मसंस्थितः** = सूक्ष्मरूपमा आत्मचिन्तन गर्ने तिमी
**लक्षितः** = देखिनेछौ

**वाक्यार्थ–** हे शरीरधारण गर्न नचाहने राजा निमि ! आफ्नो इच्छाअनुसार तिमी प्राणीहरूका आँखामा बस। आँखा खोल्ने र चिम्लिने क्रियाद्वारा सूक्ष्मरूपमा आत्माको चिन्तन गर्ने तिम्रो अस्तित्वको जानकारी हुनेछ।

**अराजकभयं नृणां मन्यमाना महर्षयः।**
**देहं ममन्थुः स्म निमेः कुमारः समजायत ॥ १२ ॥**

**पदार्थ–**
**नृणां** = प्रजाहरूका लागि
**अराजकभयं** = अराजकताको डर
**मन्यमानाः** = मानेका
**महर्षयः** = ठुला ऋषिहरूले
**निमेः** = राजा निमिको
**देहं** = शरीरलाई
**ममन्थुः स्म** = मन्थन गरेका थिए (त्यसबाट)
**कुमारः** = राजकुमार
**समजायत** = उत्पन्न भए

**वाक्यार्थ–** राजा नहुँदा अराजकता फैलन्छ भनेर डराएका महर्षिहरूले राजा निमिको शरीरलाई मन्थन गरे। त्यसबाट राजकुमार उत्पन्न भए।

**जन्मना जनकः सोऽभूद् वैदेहस्तु विदेहजः।**
**मिथिलो मथनाज्जातो मिथिला येन निर्मिता ॥ १३ ॥**

**पदार्थ–**
**सः** = ती बालक
**जन्मना** = जन्म लिएको हुँदा
**जनकः** = जनक नामले प्रसिद्ध
**अभूत्** = भए (त्यस्तै)
**विदेहजः** = देह धारण गर्न नचाहनेबाट जन्मेको हुनाले
**वैदेहः** = वैदेह नामले र
**मथनात्** = मन्थन गर्नाले
**जातः** = जन्मेको हुँदा
**मिथिलः** = मिथिल (नामले प्रसिद्ध भए)
**येन तु** = जसद्वारा
**मिथिला** = मिथिला नगरी
**निर्मिता** = बनाइयो

**वाक्यार्थ–** जन्म लिएका कारण ती बालकको नाम जनक भयो। त्यस्तै ती बालक देह धारण गर्न नचाहनेबाट जन्मेको हुनाले वैदेह र मन्थनबाट जन्मेका कारण मिथिल नामले प्रसिद्ध भए। यिनैले मिथिला नगरी बसाए।

**तस्मादुदावसुस्तस्य पुत्रोऽभून्नन्दिवर्धनः।**
**ततः सुकेतुस्तस्यापि देवरातो महीपते ॥ १४ ॥**

**पदार्थ–**
**महीपते** = हे राजा
**तस्मात्** = ती वैदेहबाट
**उदावसुः** = उदावसु जन्मिए
**तस्य पुत्रः** = ती उदावसुका छोरा
**नन्दिवर्धनः** = नन्दिवर्धन
**अभूत्** = भए
**ततः** = ती नन्दिवर्धनबाट
**सुकेतुः** = सुकेतु र
**तस्य अपि** = ती सुकेतुका पनि
**देवरातः** = देवरात नामका छोरा जन्मिए

**वाक्यार्थ–** हे राजा परीक्षित्! ती वैदेहबाट उदावसु नामका छोरा जन्मिए। त्यसपछि उदावसुका छोरा नन्दिवर्धन, उनका छोरा सुकेतु र सुकेतुका छोरा देवरात जन्मिए।

**तस्माद् बृहद्रथस्तस्य महावीर्यः सुधृत्पिता।**
**सुधृतेर्धृष्टकेतुर्वै हर्यश्वोऽथ मरुस्ततः ॥ १५ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**तस्मात्** = ती देवरातबाट
**बृहद्रथः** = बृहद्रथ जन्मिए
**तस्य** = ती बृहद्रथका छोरा
**सुधृत्पिता** = सुधृत्का बाबु
**महावीर्यः** = महावीर्य भए
**सुधृतेः** = सुधृति (सुधृत्)का छोरा
**धृष्टकेतुः** = धृष्टकेतु भए
**अथ** = यसपछि (धृष्टकेतुका छोरा)
**हर्यश्वः** = हर्यश्व र
**ततः** = ती हर्यश्वका छोरा
**मरुः** = मरु भए

**वाक्यार्थ–** देवरातबाट बृहद्रथ नामका छोरा जन्मिए। उनीबाट महावीर्य र महावीर्यबाट सुधृत्

जन्मिए। त्यसपछि सुधृत्का छोरा धृष्टकेतु, धृष्टकेतुका छोरा हर्यश्व र हर्यश्वका छोरा मरु भए।

**टिप्पणी–** मूल श्लोकमा सुधृत् र सुधृति शब्दको प्रयोग एउटै व्यक्तिलाई बुझाउनका लागि भएको छ।

**मरोः प्रतीपकस्तस्माज्जातः कृतिरथो यतः।**
**देवमीढस्तस्य सुतो विश्रुतोऽथ महाधृतिः॥ १६॥**

| पदार्थ– | **कृतिरथः** = कृतिरथ | **तस्य सुतः** = तिनका छोरा |
|---|---|---|
| **मरोः** = मरुबाट | **जातः** = जन्मिए | **विश्रुतः** = विश्रुत भए |
| **प्रतीपकः** = प्रतीपक जन्मिए | **यतः** = जुन कृतिरथबाट | **अथ** = त्यसपछि ती विश्रुतबाट |
| **तस्मात्** = ती प्रतीपकबाट | **देवमीढः** = देवमीढ जन्मिए | **महाधृतिः** = महाधृति जन्मिए |

**वाक्यार्थ–** मरुका छोरा प्रतीपक भए। उनीबाट कृतिरथ र कृतिरथबाट देवमीढ जन्मिए। उनका छोरा विश्रुत र विश्रुतका छोरा महाधृति भए।

**कृतिरातस्ततस्तस्मान्महारोमाथ तत्सुतः।**
**स्वर्णरोमा सुतस्तस्य ह्रस्वरोमा व्यजायत॥ १७॥**

| पदार्थ– | **महारोमा** = महारोमा र | **तस्य** = ती स्वर्णरोमाका |
|---|---|---|
| **ततः** = ती महाधृतिबाट | **अथ** = त्यसपछि | **सुतः** = छोरा |
| **कृतिरातः** = कृतिरात भए | **तत्सुतः** = ती महारोमाका छोरा | **ह्रस्वरोमा** = ह्रस्वरोमा |
| **तस्मात्** = ती कृतिरातबाट | **स्वर्णरोमा** = स्वर्णरोमा | **व्यजायत** = जन्मिए |

**वाक्यार्थ–** त्यसपछि महाधृतिबाट कृतिरात, कृतिरातबाट महारोमा, महारोमाबाट स्वर्णरोमा र स्वर्णरोमाबाट ह्रस्वरोमा नामका छोराहरू जन्मिए।

**ततः सीरध्वजो जज्ञे यज्ञार्थं कर्षतो महीम्।**
**सीता सीराग्रतो जाता तस्मात् सीरध्वजः स्मृतः॥ १८॥**

| पदार्थ– | **महीम्** = पृथिवीलाई | **जाता** = उत्पन्न भइन् |
|---|---|---|
| **ततः** = ती ह्रस्वरोमाबाट | **कर्षतः** = जोत्दै गर्दा | **तस्मात्** = त्यसै कारण (राजा) |
| **सीरध्वजः** = सीरध्वज | **सीराग्रतः** = हलोको टुप्पोमा रहेको फालीबाट | **सीरध्वजः** = सीरध्वज नामले |
| **जज्ञे** = जन्मिए (उनले) | **सीता** = सीता (नामकी कन्या) | **स्मृतः** = प्रसिद्ध भए |
| **यज्ञार्थं** = यज्ञ गर्नका लागि | | |

**वाक्यार्थ–** ह्रस्वरोमाबाट सीरध्वज जन्मिए। यिनै सीरध्वजले यज्ञ गर्नका लागि पृथिवी जोत्दा हलोको टुप्पोमा रहने फालीबाट सीता नाम गरेकी कन्या उत्पन्न भइन्। त्यसै कारण यी राजा सीरध्वज नामले प्रसिद्ध भए।

**कुशध्वजस्तस्य पुत्रस्ततो धर्मध्वजो नृपः।**

**धर्मध्वजस्य द्वौ पुत्रौ कृतध्वजमितध्वजौ ॥ १९ ॥**

**पदार्थ–**
**तस्य** = ती सीरध्वजका
**पुत्रः** = छोरा
**कुशध्वजः** = कुशध्वज भए
**ततः** = ती कुशध्वजबाट
**धर्मध्वजः** = धर्मध्वज नामका
**नृपः** = राजा जन्मिए
**धर्मध्वजस्य** = धर्मध्वजका
**कृतध्वजमितध्वजौ** = कृतध्वज र मितध्वज नामका
**द्वौ** = दुई जना
**पुत्रौ** = छोरा भए

**वाक्यार्थ–** सीरध्वजका छोरा कुशध्वज भए। कुशध्वजबाट धर्मध्वज नामका राजा जन्मिए। धर्मध्वजका कृतध्वज र मितध्वज नामका दुई जना छोरा भए।

**कृतध्वजात् केशिध्वजः खाण्डिक्यस्तु मितध्वजात् ।**
**कृतध्वजसुतो राजन्नात्मविद्याविशारदः ॥ २० ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**कृतध्वजात्** = कृतध्वजबाट
**केशिध्वजः** = केशिध्वज र
**मितध्वजात् तु** = मितध्वजबाट चाहिँ
**खाण्डिक्यः** = खाण्डिक्य (नामका छोरा) भए
**कृतध्वजसुतः** = कृतध्वजका छोरा केशिध्वज
**आत्मविद्याविशारदः** = आत्मविद्यामा निपुण थिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! कृतध्वजबाट केशिध्वज र मितध्वजबाट खाण्डिक्य नामका छोरा भए। कृतध्वजका छोरा केशिध्वज आत्मविद्यामा निपुण थिए।

**खाण्डिक्यः कर्मतत्त्वज्ञो भीतः केशिध्वजाद् द्रुतः ।**
**भानुमांस्तस्य पुत्रोऽभूच्छतद्युम्नस्तु तत्सुतः ॥ २१ ॥**

**पदार्थ–**
**खाण्डिक्यः** = खाण्डिक्य
**कर्मतत्त्वज्ञः** = कर्मकाण्डका ज्ञाता थिए (उनी)
**केशिध्वजात्** = केशिध्वजबाट
**भीतः** = डराएर
**द्रुतः** = भागे
**तस्य पुत्रः** = तिनै केशिध्वजका छोरा
**भानुमान्** = भानुमान् र
**तत्सुतः तु** = ती भानुमान्का छोरा
**शतद्युम्नः** = शतद्युम्न
**अभूत्** = भए

**वाक्यार्थ–** मितध्वजका पुत्र खाण्डिक्य कर्मकाण्डका ज्ञाता थिए। उनी केशिध्वजबाट डराएर भागे। केशिध्वजका छोरा भानुमान् र भानुमान्का छोरा शतद्युम्न भए।

**शुचिस्तत्तनयस्तस्मात् सनद्वाजस्ततोऽभवत् ।**
**ऊर्जकेतुः सनद्वाजादजोऽथ पुरुजित्सुतः ॥ २२ ॥**
**अरिष्टनेमिस्तस्यापि श्रुतायुस्तत्सुपार्श्वकः ।**

**ततश्चित्ररथो यस्य क्षेमधिर्मिथिलाधिपः ॥ २३ ॥**

**पदार्थ–**
**तत्तनयः** = ती शतद्युम्नका छोरा
**शुचिः** = शुचि भए
**तस्मात्** = ती शुचिबाट
**सनद्वाजः** = सनद्वाज भए
**सनद्वाजात्** = सनद्वाजबाट
**ऊर्जकेतुः** = ऊर्जकेतु
**ततः** = उनीबाट
**अजः** = अज
**अथ** = यसपछि (अजबाट)
**पुरुजित्सुतः** = पुरुजित् नामका छोरा भए
**तस्य अपि** = ती पुरुजित्का पनि
**अरिष्टनेमिः** = अरिष्टनेमि भए (उनका)
**श्रुतायुः** = श्रुतायु
**तत्सुपार्श्वकः** = तिनका सुपार्श्वक
**ततः** = ती सुपार्श्वकबाट
**चित्ररथः** = चित्ररथ
**यस्य** = जुन चित्ररथका
**मिथिलाधिपः** = मिथिलाका मालिक
**क्षेमधिः** = क्षेमधि नामका छोरा
**अभवत्** = उत्पन्न भए

**वाक्यार्थ–** शतद्युम्नका छोरा शुचि भए। त्यसपछि शुचिबाट सनद्वाज, सनद्वाजबाट ऊर्ध्वकेतु, ऊर्ध्वकेतुबाट अज, अजबाट पुरुजित्, पुरुजित्बाट अरिष्टनेमि, अरिष्टनेमिबाट श्रुतायु, श्रुतायुबाट सुपार्श्वक, सुपार्श्वकबाट चित्ररथ, चित्ररथबाट मिथिलापति क्षेमधि नामका छोरा उत्पन्न भए।

**तस्मात् समरथस्तस्य सुतः सत्यरथस्ततः।**
**आसीदुपगुरुस्तस्मादुपगुप्तोऽग्निसम्भवः ॥ २४ ॥**

**पदार्थ–**
**तस्मात्** = ती क्षेमधिबाट
**समरथः** = समरथ
**तस्य सुतः** = तिनका छोरा
**सत्यरथः** = सत्यरथ
**ततः** = ती सत्यरथबाट
**उपगुरुः** = उपगुरु
**आसीत्** = उत्पन्न भए
**तस्मात्** = ती उपगुरुबाट
**अग्निसम्भवः** = अग्निका अंशस्वरूप
**उपगुप्तः** = उपगुप्त नामका पुत्र उत्पन्न भए

**वाक्यार्थ–** क्षेमधिका छोरा समरथ, समरथका छोरा सत्यरथ र सत्यरथका छोरा उपगुरु थिए। उपगुरुबाट अग्निका अंशस्वरूप उपगुप्त नामका छोरा भए।

**वस्वनन्तोऽथ तत्पुत्रो युयुधो यत्सुभाषणः।**
**श्रुतस्ततो जयस्तस्माद् विजयोऽस्मादृतः सुतः ॥ २५ ॥**

**पदार्थ–**
**अथ** = यसपछि (उपगुप्तबाट)
**वस्वनन्तः** = वस्वनन्त भए
**तत्पुत्रः** = ती वस्वनन्तका छोरा
**युयुधः** = युयुध भए
**यत्सुभाषणः** = जसबाट सुभाषण भए
**ततः** = ती सुभाषणबाट
**श्रुतः** = श्रुत भए
**तस्मात्** = ती श्रुतबाट
**जयः** = जय (उनीबाट)
**विजयः** = विजय र
**अस्मात्** = यी विजयबाट
**ऋतः** = ऋत नामका
**सुतः** = छोरा भए

**वाक्यार्थ–** उपगुप्तबाट वस्वनन्त, वस्वनन्तबाट युयुध, युयुधबाट सुभाषण, सुभाषणबाट श्रुत, श्रुतबाट जय, जयबाट विजय र विजयबाट ऋत नामका छोरा भए।

**शुनकस्तत्सुतो जज्ञे वीतहव्यो धृतिस्ततः ।**
**बहुलाश्वो धृतेस्तस्य कृतिरस्य महावशी ॥ २६ ॥**

**पदार्थ–**
**तत्सुतः** = ती ऋतका छोरा
**शुनकः** = शुनक भए (उनका)
**वीतहव्यः** = वीतहव्य
**ततः** = ती वीतहव्यबाट
**धृतिः** = धृति
**धृतेः** = धृतिबाट
**बहुलाश्वः** = बहुलाश्व
**तस्य** = ती बहुलाश्वका
**कृतिः** = कृति र
**अस्य** = यी कृतिका
**महावशी** = महावशी नामका छोरा
**जज्ञे** = जन्मिए

**वाक्यार्थ–** ऋतका छोरा शुनक भए। शुनकका छोरा वीतहव्य, वीतहव्यका छोरा धृति, धृतिका बहुलाश्व, बहुलाश्वका कृति र कृतिका महावशी नामका छोरा जन्मिए।

**एते वै मैथिला राजन्नात्मविद्याविशारदाः ।**
**योगेश्वरप्रसादेन द्वन्द्वैर्मुक्ता गृहेष्वपि ॥ २७ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**वै** = निश्चय नै
**एते** = यी
**मैथिलाः** = मैथिल राजाहरू
**आत्मविद्याविशारदाः** = आत्मविद्यामा निपुण थिए
**योगेश्वरप्रसादेन** = योगेश्वर याज्ञवल्क्यको कृपाले यिनीहरू
**गृहेषु अपि** = घरमैं बसेर पनि
**द्वन्द्वैः** = सुखदुःखरूप द्वन्द्वबाट
**मुक्ताः** = मुक्त भएका थिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! निश्चय नै यी मैथिल राजाहरू आत्मविद्यामा निपुण थिए। योगेश्वर याज्ञवल्क्यको कृपाले यिनीहरू घरमैं बसेर पनि सुखदुःखरूप द्वन्द्वबाट मुक्त भएका थिए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**
**निमिवंशानुवर्णनं नाम त्रयोदशोऽध्यायः ॥ १३ ॥**

# अथ चतुर्दशोऽध्यायः

## चन्द्रवंशको वर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथातः श्रूयतां राजन् वंशः सोमस्य पावनः।**
**यस्मिन्नैलादयो भूपाः कीर्त्यन्ते पुण्यकीर्तयः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**अथ अतः** = अब यसपछि
**सोमस्य** = चन्द्रमाको
**पावनः** = पवित्र
**वंशः** = वंशवर्णन
**श्रूयतां** = सुन्नुहोस्
**यस्मिन्** = जुन वंशमा
**पुण्यकीर्तयः** = पवित्र कीर्ति भएका
**ऐलादयः** = ऐल आदि
**भूपाः** = राजाहरूको
**कीर्त्यन्ते** = कीर्ति गाइन्छ

**वाक्यार्थ–** हे राजा परीक्षित्! अब म त्यस्तो पवित्र चन्द्रवंशको वर्णन गर्दछु जुन चन्द्रवंशमा पवित्र कीर्ति भएका ऐल आदि राजाहरूको कीर्ति गाइन्छ, त्यो सुन्नुहोस्।

**सहस्रशिरसः पुंसो नाभिह्रदसरोरुहात्।**
**जातस्यासीत् सुतो धातुरत्रिः पितृसमो गुणैः॥ २॥**

**पदार्थ–**
**सहस्रशिरसः** = हजार शिर भएका
**पुंसः** = विराट् पुरुषको
**नाभिह्रदसरोरुहात्** = नाभिसरोवरमा रहेको कमलबाट
**जातस्य** = जन्मिनुभएका
**धातुः** = ब्रह्माजीका
**सुतः** = छोरा
**अत्रिः** = अत्रि
**गुणैः** = विभिन्न गुणहरूले
**पितृसमः** = पितासमान
**आसीत्** = थिए

**वाक्यार्थ–** हजार शिर भएका विराट्पुरुष नारायणको नाभिसरोवरमा रहेको कमलबाट ब्रह्माजी जन्मिनुभयो। उहाँका छोरा अत्रि विभिन्न गुणले आफ्ना पितासमान थिए।

**तस्य दृग्भ्योऽभवत् पुत्रः सोमोऽमृतमयः किल।**
**विप्रौषध्युडुगणानां ब्रह्मणा कल्पितः पतिः॥ ३॥**

**पदार्थ–**
**किल** = निश्चय नै
**तस्य** = ती अत्रिका
**दृग्भ्यः** = आँखाबाट
**अमृतमयः** = अमृतमय
**सोमः** = चन्द्रमा
**पुत्रः** = छोरा
**अभवत्** = भए (जो)
**ब्रह्मणा** = ब्रह्माजीद्वारा
**विप्रौषध्युडुगणानां** = ब्राह्मण, औषधि र नक्षत्रसमूहको
**पतिः** = मालिक
**कल्पितः** = बनाइए

**वाक्यार्थ–** उनै अत्रिका आँखाबाट अमृतमय चन्द्रमाको जन्म भयो। ब्रह्माजीले चन्द्रमालाई ब्राह्मण, औषधि र नक्षत्रसमूहका मालिक बनाउनुभयो।

**सोऽयजद् राजसूयेन विजित्य भुवनत्रयम्।**
**पत्नीं बृहस्पतेर्दर्पात् तारां नामाहरद् बलात्॥ ४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सः** = ती चन्द्रमाले | **राजसूयेन** = राजसूय यज्ञद्वारा | **बृहस्पतेः** = बृहस्पतिकी |
| **भुवनत्रयम्** = तीनै लोक | **अयजत्** = भगवान्‌को पूजा गरे | **पत्नीं** = पत्नीलाई |
| **विजित्य** = जितेर | **दर्पात्** = घमन्डका कारण | **बलात्** = जबरजस्ती |
| | **तारां नाम** = तारा नामकी | **अहरत्** = हरण गरे |

**वाक्यार्थ–** चन्द्रमाले तीनै भुवनलाई जितेर राजसूय यज्ञद्वारा भगवान् यज्ञपुरुषको आराधना गरे, तर घमन्डका कारण बृहस्पतिकी पत्नी तारालाई उनले जबरजस्ती हरण गरे।

**यदा स देवगुरुणा याचितोऽभीक्ष्णशो मदात्।**
**नात्यजत् तत्कृते जज्ञे सुरदानवविग्रहः॥ ५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यदा** = जब | **याचितः** = अनुरोध गर्दा पनि | **तत्कृते** = उनका लागि |
| **देवगुरुणा** = देवगुरु बृहस्पतिले | **सः** = ती चन्द्रमाले | **सुरदानवविग्रहः** = देवता र दानवको युद्ध |
| **अभीक्ष्णशः** = बारम्बार | **मदात्** = घमन्डका कारण | **जज्ञे** = चल्यो |
| | **न अत्यजत्** = तारालाई छाडेनन् | |

**वाक्यार्थ–** देवगुरु बृहस्पतिले बारम्बार अनुरोध गर्दा पनि घमन्डले मात्तिएका चन्द्रमाले तारालाई छोडेनन्। त्यसपछि ताराका लागि देवता र दानवका बीच ठुलो युद्ध चल्यो।

**शुक्रो बृहस्पतेर्द्वेषादग्रहीत् सासुरोडुपम्।**
**हरो गुरुसुतं स्नेहात् सर्वभूतगणावृतः॥ ६॥**

पदार्थ–

| | | |
|---|---|---|
| (युद्धमा) | **सासुरोडुपम्** = असुरले सहित भएका चन्द्रमालाई | **हरः** = भगवान् शङ्करले |
| **शुक्रः** = शुक्राचार्यले | **अग्रहीत्** = साथ दिए | **स्नेहात्** = प्रेमका कारण |
| **बृहस्पतेः** = बृहस्पतिसँगको | **सर्वभूतगणावृतः** = सम्पूर्ण भूतगणले युक्त | **गुरुसुतम्** = गुरु (अङ्गिरा)का पुत्र बृहस्पतिको पक्ष लिनुभयो |
| **द्वेषात्** = शत्रुताको कारण | | |

**वाक्यार्थ–** त्यस देवदानवयुद्धमा बृहस्पतिसँगको शत्रुताको कारणले असुरले सहित भएका शुक्राचार्यले चन्द्रमाको पक्ष लिए। सम्पूर्ण भूतगणले युक्त हुनुभएका भगवान् शङ्करले प्रेमका कारण अङ्गिराका पुत्र बृहस्पतिको पक्ष लिनुभयो।

**सर्वदेवगणोपेतो महेन्द्रो गुरुमन्वयात्।**
**सुरासुरविनाशोऽभूत् समरस्तारकामयः॥ ७॥**

**पदार्थ–**
**सर्वदेवगणोपेतः** = सम्पूर्ण देवगणले युक्त भएका
**महेन्द्रः** = देवराज इन्द्रले
**गुरुं** = गुरु बृहस्पतिको
**अन्वयात्** = पक्ष लिए
**तारकामयः** = ताराका निम्ति
**सुरासुरविनाशः** = धेरै देवता र दानवहरूको नाश गर्ने
**समरः** = युद्ध
**अभूत्** = भयो

**वाक्यार्थ–** सम्पूर्ण देवगणले सहित भएका देवराज इन्द्रले बृहस्पतिको पक्ष लिए। यसरी ताराका निम्ति धेरै देवता र दानवहरूको नाश हुने गरी भीषण युद्ध भयो।

**निवेदितोऽथाङ्गिरसा सोमं निर्भर्त्स्य विश्वकृत्।**
**तारां स्वभर्त्रे प्रायच्छदन्तर्वत्नीमवैत् पतिः॥ ८॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**अङ्गिरसा** = अङ्गिरा ऋषिद्वारा
**निवेदितः** = अनुरोध गरिएका
**विश्वकृत्** = ब्रह्माजीले
**सोमं** = चन्द्रमालाई
**निर्भर्त्स्य** = हप्काएर
**तारां** = तारालाई
**स्वभर्त्रे** = आफ्ना पति बृहस्पतिलाई
**प्रायच्छत्** = सुम्पिदिए
**पतिः** = बृहस्पतिले (तारा)
**अन्तर्वत्नीम्** = गर्भवती रहेको
**अवैत्** = थाहा पाए

**वाक्यार्थ–** त्यसपछि अङ्गिरा ऋषिले अनुरोध गरेपछि ब्रह्माजीले चन्द्रमालाई बेसरी गाली गर्नुभयो, त्यसपछि चन्द्रमाले तारालाई उनका पति बृहस्पतिलाई सुम्पिदिए। बृहस्पतिले तारा गर्भवती रहेको थाहा पाए।

**त्यज त्यजाशु दुष्प्रज्ञे मत्क्षेत्रादाहितं परैः।**
**नाहं त्वां भस्मसात्कुर्यां स्त्रियं सान्तानिकः सति॥ ९॥**

**पदार्थ–**
**दुष्प्रज्ञे** = हे दुष्ट बुद्धि भएकी स्त्री
**मत्क्षेत्रात्** = मेरो मात्र अधिकार रहेको तिम्रो गर्भबाट
**परैः** = शत्रुले
**आहितं** = आधान गरेको गर्भ
**आशु** = चाँडै
**त्यज त्यज** = फालिहाल
**सति** = हे सती
**सान्तानिकः** = पुत्र चाहने
**अहं** = मैले
**स्त्रियं** = नारी
**त्वां** = तिमीलाई
**भस्मसात्** = डढाउने काम
**न कुर्याम्** = नगरौँ

**वाक्यार्थ–** हे खराब बुद्धि भएकी स्त्री ! म बृहस्पतिको मात्र अधिकार भएको आफ्नो गर्भबाट शत्रुको गर्भलाई छिट्टै फालिदेऊ, ता कि हे सती ! म आफैँ गर्भवती नारीलाई डढाउने काम नगरौँ।

**तत्याज व्रीडिता तारा कुमारं कनकप्रभम्।**
**स्पृहामाङ्गिरसश्चक्रे कुमारे सोम एव च॥ १०॥**

**पदार्थ–**
**व्रीडिता** = लजाएकी
**तारा** = ताराले
**कनकप्रभम्** = सुवर्णमय कान्ति भएको
**कुमारं** = बालकलाई
**तत्याज** = त्यागिदिइन्
**आङ्गिरसः** = बृहस्पति र
**सोमः च** = चन्द्रमा (दुबैले)
**कुमारे एव** = त्यस बालकको
**स्पृहां** = इच्छा
**चक्रे** = गरे

**वाक्यार्थ–** लजाएकी ताराले सुवर्णमय कान्ति भएको बालकलाई गर्भबाट त्यागिदिइन्। सुन्दर त्यस बालकलाई बृहस्पति र चन्द्रमा दुबैले आफ्नो बनाउने इच्छा गरे।

**ममायं न तवेत्युच्चैस्तस्मिन् विवदमानयोः।**
**पप्रच्छुर्ऋषयो देवा नैवोचे व्रीडिता तु सा॥ ११॥**

**पदार्थ–**
**अयं** = यो बालक
**मम** = मेरो हो
**न तव** = तेरो होइन
**इति** = यसप्रकार
**तस्मिन्** = त्यस बालकका निम्ति
**उच्चैः** = ठुलो स्वरले
**विवदमानयोः** = (बृहस्पति र चन्द्रमा) विवाद गर्न लाग्दा
**देवाः** = देवताहरू र
**ऋषयः** = ऋषिहरूले
**पप्रच्छुः** = तारालाई नै सोधे
**व्रीडिता** = लजाएकी
**सा तु** = ताराले त
**न एव ऊचे** = केही पनि भनिनन्

**वाक्यार्थ–** यो मेरो हो, तेरो होइन भन्दै बृहस्पति र चन्द्रमाले आपसमा विवाद गर्न थालेपछि देवता तथा ऋषिहरूले त्यो कुरा तारालाई नै सोधे। तर लजाएकी ताराले केही पनि भनिनन्।

**कुमारो मातरं प्राह कुपितोऽलीकलज्जया।**
**किं न वोचस्यसद्वृत्ते आत्मावद्यं वदाशु मे॥ १२॥**

**पदार्थ–**
**अलीकलज्जया** = (ताराले देखाएको) झुटो लाजका कारण
**कुपितः** = रिसाएको
**कुमारः** = त्यस बालकले
**मातरं** = आमा तारालाई
**प्राह** = भन्यो
**असद्वृत्ते** = हे असत् कर्म गर्ने भएकी
**किं न वोचसि** = किन बोल्दिनौ
**आत्मावद्यं** = आफ्ना कुकर्म
**मे** = मलाई
**आशु** = शीघ्र
**वद** = भन

**वाक्यार्थ–** ताराको देखावटी लाजलाई देखेर रिसाएको त्यस बालकले आमालाई भन्यो– हे असत् कर्म गर्ने नारी ! किन बोल्दिनौ ? आफ्ना कुकर्म मलाई छिट्टै भन।

**ब्रह्मा तां रह आहूय समप्राक्षीच्च सान्त्वयन्।**
**सोमस्येत्याह शनकैः सोमस्तं तावदग्रहीत्॥ १३॥**

**पदार्थ–**
**ब्रह्मा** = ब्रह्माजीले
**तां** = ती तारालाई
**रहः** = एकान्तमा
**आहूय** = बोलाएर
**सान्त्वयन् च** = सान्त्वना दिँदै
**समप्राक्षीत्** = सोधे (त्यसपछि ताराले)
**शनकैः** = बिस्तारै
**सोमस्य इति** = चन्द्रमाको हो भनेर
**आह** = भनिन्
**तावत्** = त्यसै वेला
**सोमः** = चन्द्रमाले
**तं** = त्यस बालकलाई
**अग्रहीत्** = स्वीकार गरे

**वाक्यार्थ–** ब्रह्माजीले तारालाई एकान्तमा लगेर सान्त्वना दिँदै सबै कुरा सोधे। ताराले चन्द्रमाको हो भनेर बिस्तारै भनिन्। त्यसपछि चन्द्रमाले बालकलाई स्वीकार गरे।

**तस्यात्मयोनिरकृत बुध इत्यभिधां नृप।**
**बुद्ध्या गम्भीरया येन पुत्रेणापोडुराण्मुदम्॥ १४॥**

**पदार्थ–**
**नृप** = हे राजा
**आत्मयोनिः** = ब्रह्माजीले
**गम्भीरया** = गहन
**बुद्ध्या** = बुद्धि भएका कारण
**तस्य** = त्यस बालकको
**बुधः इति** = बुध भन्ने
**अभिधां** = नाम
**अकृत** = राखे
**येन** = जुन
**पुत्रेण** = छोराबाट
**उडुराट्** = नक्षत्रपति चन्द्रमाले
**मुदम्** = धेरै खुसी
**आप** = प्राप्त गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! ब्रह्माजीले गहन बुद्धि भएका कारण त्यस बालकको नाम बुध राखिदिए। ती बुधबाट चन्द्रमाले धेरै खुसी प्राप्त गरे।

**ततः पुरूरवा जज्ञे इलायां य उदाहृतः।**
**तस्य रूपगुणौदार्यशीलद्रविणविक्रमान्॥ १५॥**
**श्रुत्वोर्वशीन्द्रभवने गीयमानान् सुरर्षिणा।**
**तदन्तिकमुपेयाय देवी स्मरशरार्दिता॥ १६॥**

**पदार्थ–**
**ततः** = तिनै बुधबाट
**इलायां** = इलामा
**पुरूरवा** = पुरूरवा नामका पुत्र
**जज्ञे** = जन्मिए
**यः** = जसका बारे
**उदाहृतः** = पहिले बताइसकियो
**तस्य** = ती पुरूरवाको
**रूपगुणौदार्यशीलद्रविण-विक्रमान्** = रूप, गुण, उदारता, शील, सम्पत्ति र पराक्रमलाई
**इन्द्रभवने** = इन्द्रको दरबारमा
**सुरर्षिणा** = देवर्षि नारदद्वारा
**गीयमानान्** = गाउँदै गरिएको
**श्रुत्वा** = सुनेर
**स्मरशरार्दिता** = कामदेवको बाणले पीडित भएकी
**उर्वशी** = उर्वशी (नामकी)
**देवी** = देवाङ्गना (अप्सरा)
**तदन्तिकं** = ती पुरूरवाको नजिकमा
**उपेयाय** = आइपुगिन्

**वाक्यार्थ–** इलाको गर्भबाट बुधका छोरा पुरूरवा जन्मिए। एकपटक इन्द्रको सभामा देवर्षि नारदले गरेको पुरूरवाको रूप, गुण, उदारता, शील, सम्पत्ति र पराक्रमको वर्णन सुनेर कामवासनाले पीडित भएकी उर्वशी नामकी अप्सरा पुरूरवाको नजिक आइपुगिन्।

**मित्रावरुणयोः शापादापन्ना नरलोकताम्।**
**निशम्य पुरुषश्रेष्ठं कन्दर्पमिव रूपिणम्।**
**धृतिं विष्टभ्य ललना उपतस्थे तदन्तिके॥ १७॥**

पदार्थ–
**मित्रावरुणयोः** = मित्रावरुणको
**शापात्** = श्रापबाट
**नरलोकताम्** = नरलोक
**आपन्ना** = प्राप्त गरेकी
**ललना** = कामुकी उर्वशी
**पुरुषश्रेष्ठं** = पुरुषश्रेष्ठ राजा पुरूरवालाई
**कन्दर्पम् इव** = कामदेवजस्तै
**रूपिणम्** = सुन्दर रूपवाला छन् भन्ने
**निशम्य** = सुनेर
**धृतिं** = धैर्य
**विष्टभ्य** = धारण गरी
**तदन्तिके** = पुरूरवाको नजिकमा
**उपतस्थे** = उपस्थित भइन्

**वाक्यार्थ–** मित्रावरुणले दिएको श्रापका कारण उर्वशीलाई नरलोकमा आउनुपरेको थियो, त्यसैले कामुकी उर्वशी पुरूरवा कामदेवजस्तै सुन्दर छन् भन्ने सुनेर धैर्यपूर्वक उनको नजिकमा पुगिन्।

**स तां विलोक्य नृपतिर्हर्षेणोत्फुल्ललोचनः।**
**उवाच श्लक्ष्णया वाचा देवीं हृष्टतनूरुहः॥ १८॥**

पदार्थ–
**तां** = ती
**देवीं** = देवाङ्गना उर्वशीलाई
**विलोक्य** = (आफ्नो नजिकमा उपस्थित) देखेर
**हर्षेण** = आनन्दले
**उत्फुल्ललोचनः** = ठुला आँखा भएका
**हृष्टतनूरुहः** = शरीर रोमाञ्चित भएका
**सः** = ती
**नृपतिः** = राजा पुरूरवाले
**श्लक्ष्णया** = मिठो
**वाचा** = बोलीले
**उवाच** = भन्न थाले

**वाक्यार्थ–** आफ्नो नजिकमा देवाङ्गना उर्वशीलाई देखेर आनन्दले प्रसन्न आँखा र रोमाञ्चित शरीरले युक्त भएका राजा पुरूरवाले मिठो बोलीले भन्न लागे।

**राजोवाच** (राजा पुरूरवाले भने)

**स्वागतं ते वरारोहे आस्यतां करवाम किम्।**
**संरमस्व मया साकं रतिर्नौ शाश्वतीः समाः॥ १९॥**

पदार्थ–
**वरारोहे** = हे सुन्दरी
**ते** = तिमीलाई

**स्वागतं** = स्वागत छ
**आस्यतां** = बस
**किम् करवाम** = (म तिम्रा लागि) के गरूँ
**मया साकं** = मसँग
**संरमस्व** = विहार गर
**नौ** = हामी दुईको
**रतिः** = प्रेमविहार
**शाश्वतीः समाः** = वर्षौंसम्म (चलिरहोस्)

**वाक्यार्थ–** हे सुन्दरी ! तिमीलाई स्वागत छ। बस, म तिम्रो के सेवा गरूँ ? तिमी मसँग विहार गर र हामी दुईको प्रेमविहार वर्षौंसम्म चलिरहोस्।

**उर्वश्युवाच** (उर्वशीले भनिन्)

**कस्यास्त्वयि न सज्जेत मनो दृष्टिश्च सुन्दर।**
**यदङ्गान्तरमासाद्य च्यवते ह रिरंसया॥ २०॥**

**पदार्थ–**
**सुन्दर** = हे सुन्दर राजा
**त्वयि** = तपाईंमा
**कस्याः** = कुन स्त्रीको
**मनः** = मन र
**दृष्टिः च** = दृष्टि
**न सज्जेत** = आसक्त हुँदैन र
**यत्** = जुन तपाईंको
**अङ्गान्तरं** = अङ्गको सामीप्य
**आसाद्य** = पाएर
**रिरंसया** = रमण गर्ने इच्छाले
**ह** = निश्चय नै
**च्यवते** = मेरो मन चञ्चल भइरहेको छ

**वाक्यार्थ–** हे सुन्दर राजा ! तपाईंलाई देखेर कुन स्त्रीको मन र दृष्टि आसक्त नहोला र ? तपाईंको सामीप्यलाई पाएर मेरो मन त रमण गर्ने इच्छाले अत्यन्त चञ्चल भइरहेको छ।

**एतावुरणकौ राजन् न्यासौ रक्षस्व मानद।**
**संरंस्ये भवता साकं श्लाघ्यः स्त्रीणां वरः स्मृतः॥ २१॥**

**पदार्थ–**
**मानद** = हे सबको सम्मान गर्ने
**राजन्** = राजा
**एतौ** = यी दुई
**उरणकौ** = भेडाको बच्चा
**न्यासौ** = मेरा नासो हुन्
**रक्षस्व** = यिनको रक्षा गर्नुहोस्
**भवता साकं** = तपाईंसँग
**संरंस्ये** = विहार गर्नेछु
**श्लाघ्यः** = सुन्दर
**वरः** = पुरुष
**स्त्रीणां** = हामी जस्ता स्त्रीहरूको लागि
**स्मृतः** = योग्य मानिन्छन्

**वाक्यार्थ–** हे सबैको सम्मान गर्ने महाराज ! मेरा दुई ओटा भेडाका बच्चा छन्, यिनलाई नासोको रूपमा संरक्षण गर्नुहोस्। म तपाईंसँग विहार गर्नेछु। हामीजस्ता अप्सराका निम्ति तपाईंजस्तै सुन्दर पुरुष नै योग्य मानिन्छन्।

**घृतं मे वीर भक्ष्यं स्यान्नेक्षे त्वान्यत्र मैथुनात्।**
**विवाससं तत् तथेति प्रतिपेदे महामनाः॥ २२॥**

पदार्थ–
**वीर** = हे वीर
**मे** = मेरो
**भक्ष्यं** = भोजन
**घृतं** = घिउ
**स्यात्** = हुनेछ
**त्वा** = हजुरलाई
**मैथुनात्** = मैथुनको समयदेखि
**अन्यत्र** = अन्य समयमा
**विवाससं** = वस्त्रहीन
**न ईक्षे** = नदेखूँ
**महामनाः** = महामनस्वी पुरूरवाले
**तत्** = (तिमीले जे भन्यौ) त्यो
**तथा इति** = त्यसै हुनेछ भनेर
**प्रतिपेदे** = स्वीकार गरे

**वाक्यार्थ–** उर्वशीले 'हे वीर ! मेरो भोजन घिउ हुनेछ र म तपाईंलाई मैथुनसमयमा बाहेक अन्य समयमा वस्त्रहीन भएको नदेखूँ' (यी मेरा दुई ओटा शर्त हुन्) भनिन्। महामनस्वी पुरूरवाले पनि त्यस्तै हुनेछ भन्दै त्यो स्वीकार गरे।

**अहो रूपमहो भावो नरलोकविमोहनम्।**
**को न सेवेत मनुजो देवीं त्वां स्वयमागताम्॥ २३॥**

पदार्थ–
**नरलोकविमोहनम्** = मनुष्यलाई मोहित पार्ने
**रूपं** = तिम्रो रूप
**अहो** = क्या आश्चर्यलाग्दो छ
**भावः** = तिम्रो भाव
**अहो** = क्या अचम्मको छ
**स्वयम्** = आफैं
**आगताम्** = आएकी
**त्वां** = तिमी
**देवीं** = देवाङ्गना अप्सरालाई
**कः मनुजः** = कुन मानिसले
**न सेवेत** = उपभोग नगर्ला

**वाक्यार्थ–** हे सुन्दरी ! मनुष्यलोकलाई नै मोहित पार्ने तिम्रो रूप क्या आश्चर्यलाग्दो छ। तिम्रो भाव पनि क्या अचम्मको छ। यसरी आफैं आइपुगेकी तिमीलाई कुन मानिसले उपभोग नगर्ला ?

**तया स पुरुषश्रेष्ठो रमयन्त्या यथार्हतः।**
**रेमे सुरविहारेषु कामं चैत्ररथादिषु॥ २४॥**

पदार्थ–
**पुरुषश्रेष्ठः** = श्रेष्ठ पुरुष
**सः** = ती पुरूरवाले
**रमयन्त्या** = रमण गर्न इच्छुक
**तया** = ती उर्वशीसँग
**चैत्ररथादिषु** = चैत्ररथ आदि
**सुरविहारेषु** = देवताका विहारस्थलहरूमा
**यथार्हतः** = यथायोग्य
**कामं** = इच्छाअनुसार
**रेमे** = रमण गर्न लागे

**वाक्यार्थ–** पुरुषश्रेष्ठ राजा पुरूरवाले रमण गर्न इच्छुक उर्वशीका साथमा चैत्ररथ आदि देवताहरूका विहारस्थलहरूमा यथायोग्य इच्छाअनुसार विहार गर्न लागे।

**रममाणस्तया देव्या पद्मकिञ्जल्कगन्धया।**
**तन्मुखामोदमुषितो मुमुदेऽहर्गणान् बहून्॥ २५॥**

पदार्थ–
**पद्मकिञ्जल्कगन्धया** = कमलको केसरको जस्तो सुगन्ध

भएकी
**तया** = ती
**देव्या** = उर्वशीको साथमा
**रममाणः** = रमण गर्दै गरेका
राजा पुरूरवाले
**तन्मुखामोदमुषितः** = उर्वशीको मुखको सुगन्धले लट्ठिएर
**बह्वन्** = धेरै
**अहर्गणान्** = वर्षसम्म
**मुमुदे** = विहार गरे

**वाक्यार्थ–** कमलको केसरको जस्तो सुगन्ध भएकी ती उर्वशीसँग रमण गरिरहेका राजा पुरूरवाले उनको मुखको सुगन्धबाट लट्ठिएर धेरै वर्षसम्म विहार गरे।

**अपश्यन्नुर्वशीमिन्द्रो गन्धर्वान् समचोदयत्।**
**उर्वशीरहितं मह्यमास्थानं नातिशोभते॥ २६॥**

**पदार्थ–**
**उर्वशीम्** = उर्वशीलाई
**अपश्यन्** = नदेखेका
**इन्द्रः** = देवराज इन्द्रले
**गन्धर्वान्** = गन्धर्वहरूलाई
**समचोदयत्** = उनलाई ल्याउन पठाए र
**उर्वशीरहितं** = उर्वशी नभएको
**आस्थानं** = स्वर्ग
**मह्यं** = मलाई
**न अतिशोभते** = राम्रो लाग्दैन भने

**वाक्यार्थ–** उता उर्वशीलाई नदेखेका देवराज इन्द्रले उर्वशी नभएको स्वर्ग मलाई राम्रो लाग्दैन भन्दै गन्धर्वहरूलाई उर्वशी ल्याउन पठाए।

**ते उपेत्य महारात्रे तमसि प्रत्युपस्थिते।**
**उर्वश्या उरणौ जह्रुर्न्यस्तौ राजनि जायया॥ २७॥**

**पदार्थ–**
**ते** = (इन्द्रद्वारा पठाइएका) ती गन्धर्वहरूले
**तमसि** = अन्धकार
**प्रत्युपस्थिते** = छाएपछि
**महारात्रे** = आधा रातमा
**उपेत्य** = गएर
**जायया** = पत्नी उर्वशीले
**राजनि** = राजा पुरूरवालाई
**न्यस्तौ** = नासोको रूपमा राख्न दिएको
**उर्वश्याः** = उर्वशीका
**उरणौ** = भेडालाई
**जह्रुः** = चोरे

**वाक्यार्थ–** इन्द्रद्वारा पठाइएका ती गन्धर्वहरूले मध्यरातमा गएर उर्वशीले राजालाई नासोको रूपमा राख्न दिएका भेडा चोरे।

**निशम्याक्रन्दितं देवी पुत्रयोर्नीयमानयोः।**
**हतास्म्यहं कुनाथेन नपुंसा वीरमानिना॥ २८॥**

**पदार्थ–**
**नीयमानयोः** = चोरेर लैंजादै गरेको
**पुत्रयोः** = पुत्ररूप भेडाले
**आक्रन्दितं** = कराएको
**निशम्य** = सुनेर
**देवी** = देवाङ्गना उर्वशीले
**नपुंसा** = नपुंसक
**वीरमानिना** = आफूलाई वीर ठान्ने
**कुनाथेन** = दुष्ट राजाद्वारा
**अहं** = म

**हता अस्मि** = मारिएँ (भन्दै शोक गर्न थालिन्)

**वाक्यार्थ–** गन्धर्वले चोरेर लैंजादै गरेका भेडाहरू बेसरी कराएको सुनेर उर्वशी 'आफू वीर ठान्ने नपुंसक दुष्ट राजाद्वारा म मारिएँ' भन्दै शोक गर्न लागिन्।

**यद्विश्रम्भादहं नष्टा हृतापत्या च दस्युभिः।**

**यः शेते निशि सन्त्रस्तो यथा नारी दिवा पुमान्॥ २९॥**

**पदार्थ–**
**यद्विश्रम्भात्** = जसको विश्वासमा परेर
**अहं** = म
**नष्टा** = मासिएँ
**दस्युभिः** = चोरहरूद्वारा
**हृतापत्या च** = सन्तानहरू (पुत्रसमान भएका भेडाहरू)को अपहरण गरिएकी भएँ
**यः** = जो (त्यो)
**दिवा** = दिनमा
**पुमान्** = पुरुषजस्तो स्वाँङ् पार्ने व्यक्ति
**निशि** = रातमा
**सन्त्रस्तः** = डराएर
**नारी यथा** = आइमाई झैँ
**शेते** = सुतिरहेको छ

**वाक्यार्थ–** मेरा छोरासमान भेडाहरू लुटिए, म त्यस्तो व्यक्तिको विश्वासमा परेर मासिएँ जो दिनमा पुरुषजस्तो स्वाङ् पार्थ्यो तर अहिले रातमा चाहिँ आइमाई झैँ डराएर सुतिरहेको छ (भन्दै उर्वशी शोक गर्न लागिन्)।

**इति वाक्सायकैर्बिद्धः प्रतोत्त्रैरिव कुञ्जरः।**

**निशि निस्त्रिंशमादाय विवस्त्रोऽभ्यद्रवद् रुषा॥ ३०॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**प्रतोत्त्रैः** = अङ्कुशले
**बिद्धः** = घायल भएको
**कुञ्जरः इव** = हात्ती झैँ
**वाक्सायकैः** = वाणीरूपी बाणद्वारा (घायल बनेका राजा)
**निशि** = राती
**विवस्त्रः** = नाङ्गै
**रुषा** = रिसले
**निस्त्रिंशम्** = तरबार
**आदाय** = लिएर
**अभ्यद्रवत्** = दौडिए

**वाक्यार्थ–** अङ्कुशले घायल भएको हात्ती झैँ उर्वशीका वचनबाणले घायल बनेका राजा पुरूरवा रातको समयमा हातमा तरबार लिएर रिसले चुर हुँदै नाङ्गै दौडिए।

**ते विसृज्योरणौ तत्र व्यद्योतन्त स्म विद्युतः।**

**आदाय मेषावायान्तं नग्नमैक्षत सा पतिम्॥ ३१॥**

**पदार्थ–**
**ते** = ती गन्धर्वहरू
**उरणौ** = भेडाहरूलाई
**विसृज्य** = छोडेर भागे
**तत्र** = त्यहाँ
**विद्युतः** = बिजुली
**व्यद्योतन्त स्म** = चम्किन थाल्यो (त्यसै वेला)
**सा** = ती उर्वशीले
**मेषौ** = दुई भेडा
**आदाय** = लिएर
**आयान्तं** = आउँदै गरेका

**पतिम्** = राजालाई | **नग्नं** = नाङ्गै | **ऐक्षत** = देखिन्

**वाक्यार्थ–** राजा आएको देखेर गन्धर्वहरू भेडा छोडेर भागे। त्यहाँ बिजुली चम्किन थाल्यो। त्यसै वेला उर्वशीले भेडा लिएर आउँदै गरेका राजालाई नाङ्गै देखिन्।

**ऐलोऽपि शयने जायामपश्यन् विमना इव।**
**तच्चित्तो विह्वलः शोचन् बभ्रामोन्मत्तवन्महीम्॥ ३२॥**

**पदार्थ–**
**ऐलः अपि** = इलापुत्र पुरूरवाले पनि
**शयने** = ओछ्यानमा
**जायां** = पत्नीलाई
**अपश्यन्** = नदेखेर
**विमनाः इव** = उदास हुँदै
**तच्चित्तः** = उनैमा मन लगाएर
**विह्वलः** = दुःखी हुँदै
**शोचन्** = शोक गर्दै
**उन्मत्तवत्** = पागल झैँ
**महीम्** = पृथिवीमा
**बभ्राम** = घुम्न थाले

**वाक्यार्थ–** फर्केर आएका राजा पुरूरवा ओछ्यानमा पत्नीलाई नदेखेर उदास भए। त्यसपछि उनैलाई सम्झेर अत्यन्त दुःखी भई शोक गर्दै पागल झैँ बनेर पुरूरवा पृथिवीमा घुम्न थाले।

**स तां वीक्ष्य कुरुक्षेत्रे सरस्वत्यां च तत्सखीः।**
**पञ्च प्रहृष्टवदनः प्राह सूक्तं पुरूरवाः॥ ३३॥**

**पदार्थ–**
**सः** = ती
**पुरूरवाः** = पुरूरवाले
**तां** = ती उर्वशीलाई
**कुरुक्षेत्रे** = कुरुक्षेत्रमा
**सरस्वत्यां च** = सरस्वती नदीको तटमा
**वीक्ष्य** = देखेर
**प्रहृष्टवदनः** = प्रसन्न मुहार भएका
**पञ्च** = पाँच ओटी
**तत्सखीः** = उनका साथीहरूसँग
**सूक्तं** = मिठो बोलीले
**प्राह** = भने

**वाक्यार्थ–** एक दिन पुरूरवाले कुरुक्षेत्रमा सरस्वती नदीको तटमा सुन्दर मुहार भएका पाँच सखीका साथ उर्वशीलाई देखे। त्यसपछि उनले ती उर्वशीलाई मिठो वचनले सोधे।

**अहो जाये तिष्ठ तिष्ठ घोरे न त्यक्तुमर्हसि।**
**मां त्वमद्याप्यनिर्वृत्य वचांसि कृणवावहै॥ ३४॥**

**पदार्थ–**
**अहो जाये** = हे प्रिये
**तिष्ठ तिष्ठ** = पख-पख
**घोरे** = हे निष्ठुरी
**अद्य अपि** = आज पनि
**त्वं** = तिमीले
**मां** = मलाई
**अनिर्वृत्य** = सन्तुष्ट नबनाईकन
**त्यक्तुं** = छोड्न
**न अर्हसि** = पाउन्नौ (आऊ)
**वचांसि** = कुराकानी
**कृणवावहै** = गरौँ

**वाक्यार्थ–** हे प्रिये ! पख-पख। हे निष्ठुरी ! आज पनि तिमीले मलाई सन्तुष्ट नबनाई जान

पाउन्नौ। आऊ केही कुराकानी गरौँ।

**सुदेहोऽयं पतत्यत्र देवि दूरं हृतस्त्वया।**

**खादन्त्येनं वृका गृध्रास्त्वत्प्रसादस्य नास्पदम्॥ ३५॥**

**पदार्थ–**
**देवि** = हे देवी
**त्वया** = तिमीद्वारा
**दूरं** = टाढा
**हृतः** = फालिएको
**अयं** = यो मेरो
**सुदेहः** = सुन्दर शरीर
**अत्र** = यहीँ नै
**पतति** = नाश हुन्छ (अब यो)
**त्वत्प्रसादस्य** = तिम्रो खुसीको
**आस्पदम्** = विषय
**न** = रहेन
**एनं** = यस शरीरलाई
**वृकाः** = ब्वाँसा र
**गृध्राः** = गिद्धहरूले
**खादन्ति** = खान्छन्

**वाक्यार्थ–** तिमीद्वारा टाढा फालिएको (तिरस्कार गरिएको) यो मेरो सुन्दर शरीर अब तिम्रो खुसीको विषय रहेन, अब यो यहीँ नष्ट हुन्छ, अनि यस शरीरलाई ब्वाँसा र गिद्धहरूले खान्छन्।

**उर्वश्युवाच** (उर्वशीले भनिन्)

**मा मृथाः पुरुषोऽसि त्वं मा स्म त्वाद्युर्वृका इमे।**

**क्वापि सख्यं न वै स्त्रीणां वृकाणां हृदयं यथा॥ ३६॥**

**पदार्थ–**
**त्वं** = तिमी
**पुरुषः** = पुरुष
**असि** = हौ
**मा मृथाः** = तिमी त्यसरी नमर
**इमे** = यी
**वृकाः** = ब्वाँसा (आदि जन्तु)हरूले
**त्वा** = तिमीलाई
**मा स्म अद्युः** = नखाऊन्
**वै** = निश्चय नै
**स्त्रीणां** = स्त्रीहरूको
**हृदयं** = हृदय त
**वृकाणां** = ब्वाँसाको
**यथा** = जस्तो हुन्छ
**क्व अपि** = कहीँ पनि
(यिनीहरूको)
**सख्यं** = मित्रता
**न** = हुँदैन

**वाक्यार्थ–** हे राजा! तिमी पुरुष हौ, यसरी तिमी नमर। यी ब्वाँसाहरूले पनि तिमीलाई नखाऊन्। स्त्रीहरूको हृदय त ब्वाँसाको जस्तै हुन्छ। त्यसैले यिनीहरूको कहीँ कसैसँग पनि मित्रता हुँदैन।

**स्त्रियो ह्यकरुणाः क्रूरा दुर्मर्षाः प्रियसाहसाः।**

**घ्नन्त्यल्पार्थेऽपि विश्रब्धं पतिं भ्रातरमप्युत॥ ३७॥**

**पदार्थ–**
**अकरुणाः** = दयारहित
**क्रूराः** = कठोर

**दुर्मर्षाः** = असहनशील
**प्रियसाहसाः** = स्वार्थपूर्तिका निम्ति जे पनि गर्ने
**स्त्रियः** = स्त्रीहरू
**हि** = निश्चय नै
**अल्पार्थे अपि** = सानो कुराका लागि पनि
**विश्रब्धं** = विश्वास गर्ने
**पतिं** = पति
**उत** = वा
**भ्रातरं अपि** = दाजुभाइलाई पनि
**घ्नन्ति** = मार्दछन्

**वाक्यार्थ–** स्त्रीहरू अत्यन्त कठोर र दयाहीन हुन्छन्। स्वार्थका निम्ति जे पनि गर्न तयार हुने यिनीहरू असहनशील हुन्छन्। यिनीहरूले सानो कुराको निम्ति पनि आफूमाथि विश्वास गर्ने पति अथवा भाइहरूलाई समेत मार्न सक्छन्।

**विधायालीकविश्रम्भमज्ञेषु त्यक्तसौहृदाः।**
**नवं नवमभीप्सन्त्यः पुंश्चल्यः स्वैरवृत्तयः॥ ३८॥**

**पदार्थ–**
**अज्ञेषु** = अन्जान व्यक्तिहरूलाई
**अलीकविश्रम्भं** = झुटो विश्वास
**विधाय** = दिलाएर
**त्यक्तसौहृदाः** = आफन्तलाई पनि त्याग्ने
**नवं नवं** = नयाँ-नयाँ पुरुष
**अभीप्सन्त्यः** = चाहने
**पुंश्चल्यः** = वेश्या स्त्रीहरू
**स्वैरवृत्तयः** = छाडा भएर घुम्छन्

**वाक्यार्थ–** अन्जान सोझासाझा व्यक्तिहरूलाई झुटो विश्वास दिलाएर आफन्तलाई समेत त्यागिदिने तथा नयाँ-नयाँ पुरुषको खोजीमा हिँड्ने वेश्या स्त्रीहरू छाडा भएर घुम्छन्।

**संवत्सरान्ते हि भवानेकरात्रं मयेश्वरः।**
**वत्स्यत्यपत्यानि च ते भविष्यन्त्यपराणि भोः॥ ३९॥**

**पदार्थ–**
**भोः ईश्वरः** = हे सामर्थ्यवान् महाराज
**हि** = निश्चय नै
**संवत्सरान्ते** = वर्षको अन्तमा
**भवान्** = तपाईं
**मया** = मेरो साथ
**एकरात्रं** = एक रात
**वत्स्यति** = वास गर्नुहुनेछ
**ते** = तपाईंका
**अपराणि** = अरू
**अपत्यानि च** = सन्तान पनि
**भविष्यन्ति** = हुनेछन्

**वाक्यार्थ–** हे सामर्थ्यवान् महाराज ! हरेक वर्षको अन्त्यमा फेरि तपाईंले मसँग एक रात बस्न पाउनुहुनेछ। तपाईंका अरू सन्तान पनि हुनेछन्।

**अन्तर्वत्नीमुपालक्ष्य देवीं स प्रययौ पुरीम्।**
**पुनस्तत्र गतोऽब्दान्ते उर्वशीं वीरमातरम्॥ ४०॥**

**पदार्थ–**
**देवीं** = देवाङ्गना उर्वशीलाई
**अन्तर्वत्नीं** = गर्भवती (भएको)
**उपालक्ष्य** = सोचेर
**सः** = ती राजा पुरूरवा
**पुरीम्** = आफ्नो नगर
**प्रययौ** = फर्किए
**पुनः** = फेरि
**अब्दान्ते** = एक वर्ष बितेपछि

**तत्र** = त्यो कुरुक्षेत्रमा
**वीरमातरम्** = वीर पुत्रकी आमा
**उर्वशीं** = उर्वशी भएको ठाउँमा
**गतः** = गए

**वाक्यार्थ—** उर्वशी गर्भवती छिन् भन्ने सोचेर राजा पुरुरवा आफ्नो नगरमा फर्किए। पछि फेरि एक वर्ष बितेपछि उनी वीर पुत्रकी आमा उर्वशीकहाँ गए।

**उपलभ्य मुदा युक्तः समुवास तया निशाम्।**
**अथैनमुर्वशी प्राह कृपणं विरहातुरम्॥ ४१॥**

**पदार्थ—**
**उपलभ्य** = उर्वशीलाई पाएर
**मुदा** = खुसीले
**युक्तः** = युक्त भएका (राजा)
**तया** = ती उर्वशीका साथ
**निशाम्** = एक रात
**समुवास** = बसे
**अथ** = त्यसपछि (बिहान)
**विरहातुरम्** = बिछोडको पीडाले व्याकुल भएका
**कृपणं** = दुःखी
**एनं** = यी राजालाई
**उर्वशी** = उर्वशीले
**प्राह** = यसो भनिन्

**वाक्यार्थ—** (धेरै समयपछि) उर्वशीलाई पाएर अत्यन्त खुसी भएका राजाले उनैको साथमा एक रात बिताए। विहान भएपछि बिछोडको पीडाले ग्रस्त दुःखी राजा पुरूरवालाई उर्वशीले यसप्रकार भन्न लागिन्।

**गन्धर्वानुपधावेमांस्तुभ्यं दास्यन्ति मामिति।**
**तस्य संस्तुवतस्तुष्टा अग्निस्थालीं ददुर्नृप।**
**उर्वशीं मन्यमानस्तां सोऽबुध्यत चरन् वने॥ ४२॥**

**पदार्थ—**
**नृप** = हे राजा
**इमान्** = यी
**गन्धर्वान्** = गन्धर्वहरूको
**उपधाव** = सेवा गर (यिनीहरूले)
**तुभ्यं** = तिमीलाई
**माम्** = मलाई
**दास्यन्ति** = दिनेछन्
**इति** = यसप्रकार (उर्वशीले भने झैं)
**संस्तुवतः** = गन्धर्वहरूको स्तुति गर्दै गरेका
**तस्य** = ती राजा पुरूरवाको सेवाबाट
**तुष्टाः** = सन्तुष्ट भएका गन्धर्वहरूले (राजालाई)
**अग्निस्थालीं** = अग्निस्थाली (हवनकार्यमा अग्नि राख्ने भाँडो)
**ददुः** = दिए
**सः** = ती राजा पुरूरवाले
**तां** = त्यो अग्निस्थालीलाई नै
**उर्वशीं** = उर्वशी
**मन्यमानः** = भन्ठान्दै
**वने** = वनमा
**चरन्** = घुम्दैगर्दा
**अबुध्यत** = (उर्वशी नभएर अग्निस्थाली पो रहेछ भन्ने कुरा) थाहा पाए

**वाक्यार्थ—** उर्वशीले राजालाई हे राजा ! तपाईं यी गन्धर्वहरूको स्तुति गर्नुहोस्, यिनीहरू प्रसन्न भए भने मलाई दिनेछन् भनी सल्लाह दिइन्। त्यसपछि राजाले गन्धर्वको स्तुति गरे। स्तुतिबाट प्रसन्न भएका गन्धर्वहरूले राजालाई एउटा अग्निस्थाली (हवनकार्यमा अग्नि राख्ने भाँडो) दिए।

(उनीहरूले त्यस स्थालीको सहायताले अग्निहोत्र आदि शुभ कर्म गरी त्यस पुण्यप्रभावले यसले उर्वशीलाई प्राप्त गर्नेछ भन्ने विचारले दिएका थिए, तर) राजाले त्यस स्थालीलाई नै उर्वशी भन्ठानेर वनमा घुम्दै गर्दा यो त उर्वशी नभएर अग्निस्थाली पो रहेछ भन्ने कुरा थाहा पाए।

**स्थालीं न्यस्य वने गत्वा गृहानाध्यायतो निशि।**

**त्रेतायां सम्प्रवृत्तायां मनसि त्र्यवर्तत ॥ ४३ ॥**

**पदार्थ–**
**स्थालीं** = त्यो अग्निस्थालीलाई
**वने** = वनमा
**न्यस्य** = राखेर
**गृहान्** = घरमा
**गत्वा** = गएर (पुरूरवाले)
**निशि** = रातमा
**आध्यायतः** = ध्यान गर्दागर्दै
**त्रेतायां** = त्रेतायुग
**सम्प्रवृत्तायां** = प्रारम्भ भएपछि
**मनसि** = उनको मनमा
**त्रयी** = तीन वेद
(ऋक्, यजु, साम)
**अवर्तत** = प्रकट भए

**वाक्यार्थ–** त्यस स्थालीलाई वनमा छाडेर पुरूरवा घर गए। त्यहाँ उनले रातमा ध्यान गर्दागर्दै त्रेतायुग प्रारम्भ भयो र त्यसपछि उनको मनमा तीन वेद प्रकट भए।

**स्थालीस्थानं गतोऽश्वत्थं शमीगर्भं विलक्ष्य सः।**

**तेन द्वे अरणी कृत्वा उर्वशीलोककाम्यया ॥ ४४ ॥**

**उर्वशीं मन्त्रतो ध्यायन्नधरारणिमुत्तराम्।**

**आत्मानमुभयोर्मध्ये यत् तत् प्रजननं प्रभुः ॥ ४५ ॥**

**पदार्थ–**
**स्थालीस्थानं** = अग्निस्थाली राखेको ठाउँमा
**गतः** = पुगेका
**सः प्रभुः** = ती राजा पुरूरवाले
**शमीगर्भं** = शमीवृक्षको टोड्कोमा
**अश्वत्थं** = पिपललाई
**विलक्ष्य** = देखेर
**तेन** = त्यस पिपलबाट
**उर्वशीलोककाम्यया** = उर्वशीलोक प्राप्त गर्ने इच्छाले
**द्वे** = दुई ओटा
**अरणी** = अग्निमन्थन गर्ने काठ
**कृत्वा** = बनाएर
**अधरारणिं** = तल्लो अरणिलाई
**उर्वशीं** = उर्वशी र
**उत्तराम्** = माथिल्लो अरणिलाई
**आत्मानं** = आफू स्वयं (तथा)
**उभयोः मध्ये** = दुबैको बीचमा
**यत्** = जुन काठ छ
**तत्** = त्यसलाई
**प्रजननं** = पुत्रको रूपमा सम्झिएर
**मन्त्रतः** = मन्त्रपूर्वक
**ध्यायन्** = ध्यान गर्दै (मन्थन गर्न थाले)

**वाक्यार्थ–** केही समयपछि राजा अग्निस्थाली राखेको ठाउँमा गए। त्यहाँ उनले शमीको वृक्षको टोड्कोमा पिपल पलाएको देखी त्यसबाट उर्वशीलोक प्राप्त गर्ने इच्छाले अग्निमन्थन गर्ने दुई ओटा काठ बनाए। त्यसपछि तल्लो अरणिरूप काठलाई उर्वशी र माथिल्लो अरणिरूप काठलाई आफू स्वयं तथा ती दुईको बीचमा रहेको मन्थन गर्ने काठलाई पुत्रका रूपमा सम्झँदै मन्त्रपूर्वक

ध्यान गर्दै अरणिमन्थन गर्न थाले।

**तस्य निर्मन्थनाज्जातो जातवेदा विभावसुः।**
**त्रय्या स विद्यया राज्ञा पुत्रत्वे कल्पितस्त्रिवृत्॥ ४६॥**

**पदार्थ–**
**तस्य** = ती राजा पुरूरवाले गरेको
**निर्मन्थनात्** = अरणिमन्थनबाट
**जातवेदाः** = जातवेद नामक
**विभावसुः** = अग्नि
**जातः** = जन्मे
**त्रिवृत्** = तीन भागमा विभक्त (आहवनीय, गार्हपत्य र दाक्षिण)
**सः** = ती अग्नि
**राज्ञा** = राजाद्वारा
**त्रय्या** = तीन वेदको
**विद्यया** = विद्याले
**पुत्रत्वे** = पुत्रका रूपमा
**कल्पितः** = स्वीकार गरिए

**वाक्यार्थ–** राजा पुरूरवाले गरेको अरणिमन्थनबाट जातवेदा नामक अग्नि उत्पन्न भए। राजा पुरूरवाले त्रयी (तीन वेद) विद्याका कारण (आहवनीय, गार्हपत्य र दाक्षिण गरी) तीन भागमा विभक्त अग्निलाई नै पुत्रका रूपमा स्वीकार गरे।

**तेनायजत यज्ञेशं भगवन्तमधोक्षजम्।**
**उर्वशीलोकमन्विच्छन् सर्वदेवमयं हरिम्॥ ४७॥**

**पदार्थ–**
**उर्वशीलोकं** = उर्वशीलोकलाई
**अन्विच्छन्** = प्राप्त गर्ने इच्छा गरिरहेका (राजा पुरूरवाले)
**तेन** = ती तीनै अग्निद्वारा
**यज्ञेशं** = यज्ञपति
**अधोक्षजम्** = इन्द्रियातीत
**सर्वदेवमयं** = सम्पूर्ण देवस्वरूप
**भगवन्तं** = भगवान्
**हरिम्** = श्रीहरिलाई
**अयजत** = पूजा गरे

**वाक्यार्थ–** उर्वशीलोक प्राप्त गर्न चाहने राजा पुरूरवाले ती तीनै अग्निद्वारा यज्ञपति, इन्द्रियातीत एवं सर्वदेवमय भगवान् श्रीहरिको पूजा गरे।

**एक एव पुरा वेदः प्रणवः सर्ववाङ्मयः।**
**देवो नारायणो नान्य एकोऽग्निर्वर्ण एव च॥ ४८॥**

**पदार्थ–**
**पुरा** = पहिला (सत्ययुगमा)
**एकः एव** = एउटै
**प्रणवः** = ॐकार
**सर्ववाङ्मयः** = सम्पूर्ण वाङ्मयरूप
**वेदः** = वेद थियो र
**देवः** = एक मात्र देवता
**नारायणः** = भगवान् नारायण हुनुहुन्थ्यो
**नान्यः** = दोस्रो कोही थिएन
**अग्निः** = अग्नि र
**वर्णः च** = वर्ण पनि
**एकः एव** = एउटा मात्र थियो

**वाक्यार्थ–** पहिला सत्ययुगमा ॐकार एक मात्र सम्पूर्ण वाङ्मयरूप वेद थियो। देवता पनि एक मात्र नारायण हुनुहुन्थ्यो (अरू कोही थिएन)। अग्नि र वर्ण पनि एक मात्र थियो।

**पुरूरवस एवासीत् त्रयी त्रेतामुखे नृप।**
**अग्निना प्रजया राजा लोकं गान्धर्वमेयिवान्॥ ४९॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**त्रेतामुखे** = त्रेतायुगको प्रारम्भमा
**पुरूरवसः एव** = पुरूरवाबाट नै
**त्रयी** = तीन वेद र तीन अग्नि
**आसीत्** = प्रकट भए
**राजा** = राजा पुरूरवा
**अग्निना** = अग्निरूप
**प्रजया** = सन्तानले
**गान्धर्वं लोकं** = गन्धर्वलोक
**एयिवान्** = गए

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्रेतायुगको प्रारम्भमा पुरूरवाबाट नै तीन वेद र तीन अग्नि प्रकट भएका हुन्। राजा पुरूरवाले अग्निलाई नै सन्तानको रूपमा स्वीकार गरेर गन्धर्वलोकलाई प्राप्त गरे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**
**ऐलोपाख्याने चतुर्दशोऽध्यायः॥ १४॥**

# अथ पञ्चदशोऽध्यायः

## जमदग्नि र परशुरामको कथा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**ऐलस्य चोर्वशीगर्भात् षडासन्नात्मजा नृप।**

**आयुः श्रुतायुः सत्यायू रयोऽथ विजयो जयः॥ १॥**

| **पदार्थ–** | **आयुः** = आयु | **अथ** = अनि |
|---|---|---|
| **नृप** = हे राजा परीक्षित् | **श्रुतायुः** = श्रुतायु | **जयः** = जय नामका |
| **ऐलस्य च** = इलापुत्र पुरूरवाका | **सत्यायुः** = सत्यायु | **षट्** = छ |
| **उर्वशीगर्भात्** = उर्वशीको गर्भबाट | **रयः** = रय | **आत्मजाः** = छोराहरू |
| | **विजयः** = विजय | **आसन्** = भए |

**वाक्यार्थ–** हे राजा परीक्षित्! उर्वशीको गर्भबाट राजा पुरूरवाका आयु, सत्यायु, श्रुतायु, रय, विजय र जय नामका छ भाइ छोराहरू भए।

**श्रुतायोर्वसुमान् पुत्रः सत्यायोश्च श्रुतञ्जयः।**

**रयस्य सुत एकश्च जयस्य तनयोऽमितः॥ २॥**

| **पदार्थ–** | **सत्यायोः च** = सत्यायुका चाहिँ | **एकः च** = एक र |
|---|---|---|
| **श्रुतायोः** = श्रुतायुका | **श्रुतञ्जयः** = श्रुतञ्जय भए | **जयस्य** = जयका |
| **पुत्रः** = छोरा | **रयस्य** = रयका | **तनयः** = छोरा |
| **वसुमान्** = वसुमान् भए | **सुतः** = छोरा | **अमितः** = अमित भए |

**वाक्यार्थ–** श्रुतायुका छोरा वसुमान् र सत्यायुका छोरा श्रुतञ्जय भए। रयका छोरा एक र जयका छोरा अमित भए।

**भीमस्तु विजयस्याथ काञ्चनो होत्रकस्ततः।**

**तस्य जह्नुः सुतो गङ्गां गण्डूषीकृत्य योऽपिबत्॥**

**जह्नोस्तु पुरुस्तत्पुत्रो बलाकश्चात्मजोऽजकः॥ ३॥**

| **पदार्थ–** | **भीमः** = भीम भए (उनका) | **होत्रकः** = होत्रक भए |
|---|---|---|
| **अथ** = त्यसपछि | **काञ्चनः** = काञ्चन भए | **तस्य** = ती होत्रकका |
| **विजयस्य** = विजयका पुत्र | **ततः** = ती काञ्चनबाट | **सुतः** = छोरा |

**जह्नुः** = जह्नु भए
**यः तु** = जुन जह्नुले
**गङ्गां** = गङ्गालाई
**गण्डूषीकृत्य** = अँजुलीमा लिएर
**अपिबत्** = पिएका थिए
**जन्होः** = तिनै जह्नुबाट
**पुरुः** = पुरु भए
**तत्पुत्रः** = ती पुरुका छोरा
**बलाकः च** = बलाक र (उनका)
**आत्मजः** = छोरा
**अजकः** = अजक भए

**वाक्यार्थ–** त्यसपछि विजयका छोरा भीम भए। भीमका काञ्चन, काञ्चनका होत्रक र होत्रकका छोरा जह्नु भए। यी जह्नुले गङ्गालाई अँजुलीमा लिएर पिएका थिए। तिनै जह्नुका छोरा पुरु, पुरुका छोरा बलाक र बलाकका छोरा अजक भए।

**ततः कुशः कुशस्यापि कुशाम्बुस्तनयो वसुः।**
**कुशनाभश्च चत्वारो गाधिरासीत् कुशाम्बुजः॥ ४॥**

**पदार्थ–**
**ततः** = ती अजकबाट
**कुशः** = कुश भए
**कुशस्य अपि** = कुशका पनि
**कुशाम्बुः** = कुशाम्बु
**तनयः** = तनय
**वसुः** = वसु र
**कुशनाभः च** = कुशनाभ समेतका
**चत्वारः** = चार छोरा भए
**गाधिः** = गाधि
**कुशाम्बुजः** = कुशाम्बुबाट जन्मिएका
**आसीत्** = थिए

**वाक्यार्थ–** अजकका छोरा कुश भए। ती कुशका कुशाम्बु, तनय, वसु र कुशनाभ नाम गरेका चार छोरा भए। कुशाम्बुबाट गाधि नामका छोरा भए।

**तस्य सत्यवतीं कन्यामृचीकोऽयाचत द्विजः।**
**वरं विसदृशं मत्वा गाधिर्भार्गवमब्रवीत्॥ ५॥**

**पदार्थ–**
**तस्य** = ती गाधिकी
**सत्यवतीं** = सत्यवती नाम गरेकी
**कन्यां** = कन्यालाई
**ऋचीकः** = ऋचीक नामका
**द्विजः** = ब्राह्मणले
**अयाचत** = मागे
**वरं** = ऋचीक वरलाई
**विसदृशं** = छोरीसँग नमिल्ने
**मत्वा** = मानेर
**गाधिः** = गाधिले
**भार्गवं** = भृगुवंशी ऋचीक ब्राह्मणलाई
**अब्रवीत्** = यस्तो भने

**वाक्यार्थ–** गाधिकी सत्यवती नामकी छोरी थिइन्। ऋचीक नामक ब्राह्मणले तिनै सत्यवतीलाई मागे। छोरीका निम्ति योग्य नदेखेर गाधिले ऋचीक ब्राह्मणलाई यस्तो भने।

**एकतः श्यामकर्णानां हयानां चन्द्रवर्चसाम्।**
**सहस्रं दीयतां शुल्कं कन्यायाः कुशिका वयम्॥ ६॥**

**पदार्थ–**
**वयं** = हामी
**कुशिकाः** = कुशिक वंशका हौँ
**कन्यायाः** = कन्याको
**शुल्कं** = शुल्कका रूपमा
**एकतः** = एकतिर

**श्यामकर्णानां** = कान कालो भएका
**चन्द्रवर्चसाम्** = चन्द्रमा जस्तो सेतो वर्ण भएका
**हयानां सहस्रं** = हजार घोडा
**दीयताम्** = दिनुहोस्

**वाक्यार्थ–** हामी कुशिक वंशीय हौँ। हाम्रो परम्पराअनुसार हाम्री कन्या चाहनेले शुल्क तिर्नुपर्दछ। अतः हे ब्राह्मण ! तपाईंले एउटा कान कालो र अन्य शरीर सेतो भएका एक हजार घोडा दिनुहोस्।

**इत्युक्तस्तन्मतं ज्ञात्वा गतः स वरुणान्तिकम्।**
**आनीय दत्त्वा तानश्वानुपयेमे वराननाम्॥ ७॥**

**पदार्थ–**
**इति उक्तः** = यसो भनिएका
**सः** = ती ऋचीक ब्राह्मण
**तन्मतं** = ती गाधिको विचार
**ज्ञात्वा** = बुझेर
**वरुणान्तिकम्** = वरुणकहाँ
**गतः** = गए र
**तान्** = ती (भनेका जस्तै)
**अश्वान्** = घोडाहरू
**आनीय** = ल्याई
**दत्त्वा** = राजालाई दिएर
**वराननाम्** = सुन्दरी सत्यवतीलाई
**उपयेमे** = विवाह गरे

**वाक्यार्थ–** गाधिको आशय बुझेका ऋचीक ब्राह्मण वरुणकहाँ गए। त्यहाँबाट गाधिले भनेजस्तै एक हजार श्यामकर्ण घोडा ल्याई दिएर उनले सुन्दरी सत्यवतीसँग विवाह गरे।

**स ऋषिः प्रार्थितः पत्न्या श्वश्र्वा चापत्यकाम्यया।**
**श्रपयित्वोभयैर्मन्त्रैश्चरुं स्नातुं गतो मुनिः॥ ८॥**

**पदार्थ–**
**अपत्यकाम्यया** = सन्तान प्राप्त गर्ने इच्छाले
**पत्न्या** = पत्नी र
**श्वश्र्वा च** = सासूद्वारा
**प्रार्थितः** = अनुरोध गरिएका
**सः** = ती
**ऋषिः** = ऋचीक नाम गरेका
**मुनिः** = मुनिले
**उभयैः मन्त्रैः** = दुबैका लागि अलग-अलग मन्त्रद्वारा
**चरुं** = चरु
**श्रपयित्वा** = पकाएर
**स्नातुं** = स्नान गर्न
**गतः** = गए

**वाक्यार्थ–** एकपटक महर्षि ऋचीकसँग उनकी पत्नी र सासूले सन्तान प्राप्तिका लागि प्रार्थना गरे। त्यस प्रार्थनालाई स्वीकार गरेका ऋषिले ती दुबैका लागि अलग-अलग मन्त्रद्वारा चरु पकाएर आफू चाहिँ स्नान गर्न गए।

**तावत् सत्यवती मात्रा स्वचरुं याचिता सती।**
**श्रेष्ठं मत्वा तयायच्छन्मात्रे मातुरदत् स्वयम्॥ ९॥**

**पदार्थ–**
**तावत्** = त्यसै वेला
**सती** = पतिव्रता
**सत्यवती** = सत्यवतीले
**तया** = ती आफ्नी
**मात्रा** = आमाले
**स्वचरुं** = आफ्नो (सत्यवतीको) भाग चरुलाई
**श्रेष्ठं** = उत्कृष्ट

**मत्वा** = मानेर
**याचिता** = मागिएपछि
**मात्रे** = आमालाई
**अयच्छत्** = दिइन् र
**मातुः** = आमाको भाग
**स्वयम्** = आफूले
**अदत्** = खाइन्

**वाक्यार्थ–** त्यसै वेला आमाले आफ्नो भागभन्दा छोरीको भाग चरु उत्कृष्ट छ भन्ने ठानेर मागेपछि सत्यवतीले आफ्नो भाग आमालाई दिइन् र आमाको भाग चरु आफूले खाइन्।

**तद् विज्ञाय मुनिः प्राह पत्नीं कष्टमकारषीः।**
**घोरो दण्डधरः पुत्रो भ्राता ते ब्रह्मवित्तमः॥ १०॥**

**पदार्थ–**
**तत्** = त्यो कुरा
**विज्ञाय** = थाहा पाएर
**मुनिः** = ऋचीक मुनिले
**पत्नीं** = पत्नीलाई
**प्राह** = बताए
**कष्टं** = अनर्थ
**अकारषीः** = गऱ्यौ (तसर्थ)
**पुत्रः** = तिम्रो छोरो
**घोरः** = कठोर
**दण्डधरः** = दण्ड दिनेवाला हुन्छ र
**ते** = तिम्रो
**भ्राता** = भाइ
**ब्रह्मवित्तमः** = ब्रह्मज्ञानीमा श्रेष्ठ (हुनेछ भन्ने कुरा)

**वाक्यार्थ–** पत्नीले अनर्थ गरेको बुझेर दुःखी भएका राजाले पत्नीलाई भने– अब तिम्रो छोरो कठोर दण्ड दिनेवाला र तिम्रो भाइ चाहिँ ब्रह्मवेत्तामा उत्तम हुनेछ।

**प्रसादितः सत्यवत्या मैवं भूदिति भार्गवः।**
**अथ तर्हि भवेत् पौत्रो जमदग्निस्ततोऽभवत्॥ ११॥**

**पदार्थ–**
(त्यसपछि)
**एवं** = यस्तो अनर्थ
**मा भूत् इति** = नहोस् भन्दै
**सत्यवत्या** = सत्यवतीद्वारा
**प्रसादितः** = प्रार्थना गरिएका
**भार्गवः** = भृगुवंशी ऋचीक ऋषिले
**अथ** = यदि पुत्र दुष्ट नहोस् भन्छ्यौ भने
**तर्हि** = त्यसो भए
**पौत्रः** = नाति
**भवेत्** = कठोर दण्ड दिनेवाला हुनेछ भने
**ततः** = ती सत्यवतीबाट
**जमदग्निः** = जमदग्नि नामका छोरा
**अभवत्** = जन्मिए

**वाक्यार्थ–** सत्यवतीले हे स्वामी ! यस्तो अनर्थ नहोस् भन्दै प्रार्थना गरिन्। उनको प्रार्थनापछि प्रसन्न भएका ऋषिले छोरो कठोर दण्ड दिनेवाला नहोस् भन्छ्यौ भने पनि नाति अवश्य त्यस्तो हुनेछ भन्ने कुरा बताए। त्यसपछि सत्यवतीबाट जमदग्नि जन्मिए।

**सा चाभत् सुमहत्पुण्या कौशिकी लोकपावनी।**
**रेणोः सुतां रेणुकां वै जमदग्निरुवाह याम्॥ १२॥**

**पदार्थ–**
**सा च** = ती सत्यवती
**लोकपावनी** = संसारलाई पवित्र

गर्ने
**सुमहत्पुण्या** = परमपवित्र
**कौशिकी** = कौशिकी नदी
**अभूत्** = भइन्
**रेणोः** = रेणु मुनिको
**सुतां** = कन्या (पुत्री)
**रेणुकां** = रेणुका थिइन्
**याम् वै** = जुन रेणुकालाई
**जमदग्निः** = जमदग्नि मुनिले
**उवाह** = विवाह गरे

**वाक्यार्थ–** सत्यवती सम्पूर्ण लोकलाई पवित्र गर्ने परमपवित्र कौशिकी नदी बनिन्। रेणु मुनिकी छोरी रेणुका थिइन्। यिनै रेणुकासँग जमदग्नि ऋषिले विवाह गरे।

**तस्यां वै भार्गवऋषेः सुता वसुमदादयः।**
**यवीयान् जज्ञ एतेषां राम इत्यभिविश्रुतः॥ १३॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**तस्यां** = ती रेणुकाको गर्भबाट
**भार्गवऋषेः** = भृगुवंशी जमदग्नि ऋषिका
**वसुमदादयः** = वसुमान् आदि
**सुताः** = छोराहरू
**जज्ञे** = जन्मे
**एतेषां** = यी छोराहरूमध्ये
**यवीयान्** = कान्छो
**रामः इति** = राम (परशुराम) यो नामले
**अभिविश्रुतः** = प्रसिद्ध हुनुभयो

**वाक्यार्थ–** रेणुकाको गर्भबाट जमदग्नि ऋषिका वसुमान् आदि पुत्र उत्पन्न भए। तीमध्ये सबैभन्दा कान्छा राम (परशुराम) नामले प्रसिद्ध हुनुभयो।

**यमाहुर्वासुदेवांशं हैहयानां कुलान्तकम्।**
**त्रिःसप्तकृत्वो य इमां चक्रे निःक्षत्रियां महीम्॥ १४॥**

**पदार्थ–**
**यं** = जुन परशुरामलाई
**वासुदेवांशं** = भगवान् वासुदेवको अंशावतार तथा
**हैहयानां** = हैहय वंशका
**कुलान्तकम्** = कुलनाशक
**आहुः** = भन्दछन्
**यः** = जुन परशुरामले
**इमां** = यी
**महीम्** = पृथिवीलाई
**त्रिःसप्तकृत्वः** = एक्काइस पटक
**निःक्षत्रियां** = क्षत्रियरहित
**चक्रे** = बनाउनुभएको थियो

**वाक्यार्थ–** यिनै परशुरामलाई भगवान्का अंशावतार तथा हैहय वंशका विनाशक पनि भन्दछन्। यिनै परशुरामले एक्काइस पटकसम्म पृथिवीलाई क्षत्रियरहित बनाउनुभएको थियो।

**दुष्टं क्षत्रं भुवो भारमब्रह्मण्यमनीनशत्।**
**रजस्तमोवृतमहन् फल्गुन्यपि कृतेंऽहसि॥ १५॥**

**पदार्थ–**
**दुष्टं** = दुष्ट स्वभाव भएका
**भुवः** = पृथिवीका
**भारं** = भार भएका
**अब्रह्मण्यं** = ब्राह्मणविरोधी
**रजस्तमोवृतं** = रजोगुण र तमोगुणले युक्त
**क्षत्रं** = क्षत्रियलाई
**फल्गुनि** = थोरै

थाले। त्यसपछि इन्द्रको प्रार्थनाबाट बृहस्पतिले ती रजिका छोराहरूको मति भ्रष्ट पार्नका लागि व्यभिचार विधिले अग्निमा हवन गरे। जसले गर्दा उनीहरू नीतिको मार्गबाट भ्रष्ट भए र इन्द्रले ती सबैलाई मारिदिए, एक जना पनि बाँकी रहेनन्। फेरि क्षत्रवृद्धको वंशमा क्षत्रवृद्धका पौत्र कुशबाट प्रति, प्रतिबाट सञ्जय र सञ्जयबाट जयको जन्म भयो।

**ततः कृतः कृतस्यापि जज्ञे हर्यवनो नृपः।**
**सहदेवस्ततो हीनो जयसेनस्तु तत्सुतः॥ १७॥**

**पदार्थ–**
**ततः** = ती जयबाट
**कृतः** = कृत जन्मिए
**कृतस्य अपि** = कृतका पनि
**नृपः** = राजा
**हर्यवनः** = हर्यवन
**जज्ञे** = जन्मिए
**ततः** = त्यसपछि
**सहदेवः** = सहदेव (त्यसपछि)
**हीनः** = हीन र
**तत्सुतः तु** = ती हीनको छोराको रूपमा चाहिँ
**जयसेनः** = जयसेन जन्मिए

**वाक्यार्थ–** जयबाट कृत, कृतबाट राजा हर्यवन, फेरि हर्यवनबाट सहदेव र सहदेवबाट हीन र हीनबाट जयसेन जन्मिए।

**सङ्कृतिस्तस्य च जयः क्षत्रधर्मा महारथः।**
**क्षत्रवृद्धान्वया भूपाः शृणु वंशं च नाहुषात्॥ १८॥**

**पदार्थ–**
**सङ्कृतिः** = (जयसेनबाट) सङ्कृति
**तस्य च** = ती सङ्कृतिबाट
**क्षत्रधर्मा** = क्षत्रियधर्ममा निष्ठ
**महारथः** = महारथी
**जयः** = जयको जन्म भयो (यी सबै)
**भूपाः** = राजाहरू
**क्षत्रवृद्धान्वयाः** = क्षत्रवृद्धको वंशपरम्परामा उत्पन्न भएका हुन् (अब)
**नाहुषात्** = राजा नहुषबाट उत्पन्न भएको
**वंशं च** = वंश पनि
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** जयसेनबाट सङ्कृति र सङ्कृतिबाट क्षत्रियधर्मनिष्ठ महारथी जय जन्मिए। यी सबै राजाहरू क्षत्रवृद्धको वंशपरम्परामा उत्पन्न भएका हुन्। हे राजा परीक्षित् ! अब नहुष राजाबाट चलेको वंशपरम्परा सुन्नुहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**
**चन्द्रवंशानुवर्णने सप्तदशोऽध्यायः॥ १७॥**

# अथ अष्टादशोऽध्यायः

## राजा ययातिको कथा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**यतिर्ययातिः संयातिरायतिर्वियतिः कृतिः।**

**षडिमे नहुषस्यासन्निन्द्रियाणीव देहिनः॥ १॥**

**पदार्थ—**
**नहुषस्य** = नहुषका
**यतिः** = यति
**ययातिः** = ययाति
**संयातिः** = संयाति
**आयतिः** = आयति
**वियतिः** = वियति र
**कृतिः** = कृति
**इमे षट्** = यी छ जना
**देहिनः** = प्राणीहरूको
**इन्द्रियाणि इव** = इन्द्रियहरू झैँ
**आसन्** = (छोराहरू) थिए

**वाक्यार्थ—** प्राणीहरूका छ ओटा इन्द्रिय भए झैँ नहुषका यति, ययाति, संयाति, आयति, वियति र कृति नामका छ जना छोराहरू थिए।

**राज्यं नैच्छद् यतिः पित्रा दत्तं तत्परिणामवित्।**

**यत्र प्रविष्टः पुरुष आत्मानं नावबुध्यते॥ २॥**

**पदार्थ—**
**तत्परिणामवित्** = राजकाजको परिणामलाई बुझेका
**यतिः** = जेठो छोरा यतिले
**पित्रा** = पिता नहुषद्वारा
**दत्तं** = दिइएको
**राज्यं** = राज्य
**न ऐच्छत्** = चाहेनन् (उनले के बुझेका थिए भने)
**यत्र** = जुन राज्यसञ्चालनको काममा
**प्रविष्टः** = प्रवेश गरेको
**पुरुषः** = व्यक्तिले
**आत्मानं** = आत्मस्वरूपलाई
**न अवबुध्यते** = बुझ्न सक्दैन

**वाक्यार्थ—** राजकाजको परिणामलाई बुझेका यतिले पिताले दिएको राज्य चाहेनन् किनभने उनलाई थाहा थियो— राज्य चलाउने व्यक्तिले कहिल्यै पनि आत्मस्वरूपलाई बुझ्न सक्दैन।

**विवरण—** यस श्लोकमा नहुषका जेठा छोरा यतिले राज्यलाई स्वीकार नगरेको बताइएको छ। यतिले राज्य आदि भोगको परिणामलाई जानेका थिए। यसैले उनले त्यसलाई नचाहेका हुन्। संसारमा सुख दिने भनिने सम्पूर्ण पदार्थहरूमा परिणाम-दुःख रहेको हुन्छ। परिणाम दुःख भनेको भोग गरिसकेपछि हुने इन्द्रियक्षमताको ह्रास, बुद्धिको विनाश र मोह आदि हुन्। भोगहरूले इन्द्रियको तेज हरण गर्दछन्। विषयभोगमा फसिसकेपछि व्यक्ति आफ्नो परम उद्देश्यलाई र आफ्नै स्वरूपलाई पनि भुल्दछ। त्यस्ता आफैँलाई बिर्साइदिने पदार्थहरूमा आसक्ति नगरी यतिले तिनलाई त्यागिदिएको कुरा यहाँ बताइएको छ।

**पितरि भ्रंशिते स्थानादिन्द्राण्या धर्षणाद् द्विजैः।**
**प्रापितेऽजगरत्वं वै ययातिरभवन्नृपः॥ ३॥**

**पदार्थ–**
**इन्द्राण्या** = इन्द्राणीको साथमा
**धर्षणात्** = भोग अभिलाषाको कारणले
**द्विजैः** = (अगस्ति आदि) ऋषिहरूद्वारा
**स्थानात्** = स्वर्गको अधिकारबाट
**पितरि** = पिता नहुष
**भ्रंशिते** = खसालिएपछि र
**वै** = निश्चय नै
**अजगरत्वं** = अजिङ्गर स्वरूपमा
**प्रापिते** = पुऱ्याइएपछि
**ययातिः** = (नहुषका छोरा) ययाति
**नृपः** = राजा
**अभवत्** = भए

**वाक्यार्थ–** इन्द्राणीसँगको भोग अभिलाषाको कारणले ऋषिहरूद्वारा नहुषलाई स्वर्गबाट खसालिएपछि नहुष अजिङ्गर स्वरूपमा प्राप्त भए र त्यसपछि नहुषका छोरा ययाति राजा भए।

**चतसृष्वादिशद् दिक्षु भ्रातॄन् भ्राता यवीयसः।**
**कृतदारो जुगोपोर्वीं काव्यस्य वृषपर्वणः॥ ४॥**

**पदार्थ–**
**भ्राता** = जेठा भाइ ययातिले
**यवीयसः** = साना
**भ्रातॄन्** = चार भाइलाई
**चतसृषु** = चार
**दिक्षु** = दिशामा
**आदिशत्** = (पृथिवीपालनका लागि) आदेश दिए
**काव्यस्य** = शुक्राचार्यकी (छोरी देवयानी र)
**वृषपर्वणः** = दैत्यराज वृषपर्वाकी (छोरी शर्मिष्ठासँग)
**कृतदारः** = विवाह गरेर
**उर्वीम्** = पृथिवीलाई
**जुगोप** = रक्षा गरे

**वाक्यार्थ–** ठुला दाजु ययातिले अरू बाँकी चार भाइलाई चार दिशा जिम्मा लगाएर शुक्राचार्यकी छोरी देवयानी र वृषपर्वाकी छोरी शर्मिष्ठासँग विवाह गरेर पृथिवीको पालन गरे।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**ब्रह्मर्षिर्भगवान् काव्यः क्षत्रबन्धुश्च नाहुषः।**
**राजन्यविप्रयोः कस्माद् विवाहः प्रतिलोमकः॥ ५॥**

**पदार्थ–**
**भगवान् काव्यः** = भगवान् शुक्राचार्य
**ब्रह्मर्षिः** = ब्राह्मण हुन् भने
**नाहुषः च** = नहुषपुत्र राजा ययाति
**क्षत्रबन्धुः** = क्षत्रिय हुन्
**राजन्यविप्रयोः** = क्षत्रिय वर र ब्राह्मणकन्याको बीचमा
**प्रतिलोमकः** = प्रतिलोम किसिमको
**विवाहः** = विवाह
**कस्मात्** = कसरी (भयो)

**वाक्यार्थ–** भगवान् शुक्राचार्य ब्राह्मण र राजा ययाति क्षत्रिय हुन् भने यो क्षत्रिय वर र

ब्राह्मणकन्याको बीचमा प्रतिलोम विवाह कसरी भयो ?

**टिप्पणी–** ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र यी चार जातमध्ये क्षत्रिय आदि पछिल्ला जातका वर र ब्राह्मण आदि अघिल्लो जातका वधूका बीच भएको विवाहलाई प्रतिलोम विवाह भनिन्छ (मनुस्मृति १०/६८)।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा दानवेन्द्रस्य शर्मिष्ठा नाम कन्यका।**
**सखीसहस्रसंयुक्ता गुरुपुत्र्या च भामिनी ॥ ६ ॥**
**देवयान्या पुरोद्याने पुष्पितद्रुमसङ्कुले।**
**व्यचरत् कलगीतालिनलिनीपुलिनेऽबला ॥ ७ ॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**दानवेन्द्रस्य** = दानवराज वृषपर्वाकी
**अबला भामिनी** = केही तारुण्यले युक्त भएकी
**शर्मिष्ठा नाम** = शर्मिष्ठा नामकी
**कन्यका** = कन्या
**गुरुपुत्र्या** = गरु शुक्राचार्यकी छोरी
**देवयान्या च** = देवयानी सहित
**सखीसहस्रसंयुक्ता** = हजारौं सखीहरूले सहित भएर
**पुष्पितद्रुमसङ्कुले** = फुलेका रुखहरूले भरिएको र
**कलगीतालिनलिनीपुलिने** = भँवराहरूको गुञ्जनले गुन्जिएको कमलयुक्त पोखरीका तीर भएको
**पुरोद्याने** = नगरको बगैँचामा
**व्यचरत्** = घुमिरहेकी थिइन्

**वाक्यार्थ–** कुनै दिन दानवराज वृषपर्वाकी तरुणी छोरी शर्मिष्ठा गुरुपुत्री देवायानी र हजारौं अरू सखीहरूसहित, फूलैफूलका रुखले भरिएको र भँवराहरूको गुञ्जनले गुन्जिएको कमलयुक्त पोखरीका छेउमा रहेको नगरको सुन्दर बगैँचामा घुमिरहेकी थिइन्।

**ता जलाशयमासाद्य कन्याः कमललोचनाः।**
**तीरे न्यस्य दुकूलानि विजह्रुः सिञ्चतीर्मिथः ॥ ८ ॥**

**पदार्थ–**
**कमललोचनाः** = कमलजस्ता आँखा भएका
**ताः** = ती
**कन्याः** = कन्याहरूले
**जलाशयं** = जलाशयमा
**आसाद्य** = पुगेर
**तीरे** = तीरमा
**दुकूलानि** = कपडाहरू
**न्यस्य** = राखेर
**मिथः** = आपसमा
**सिञ्चतीः** = पानी छ्यापाछ्याप गर्दै
**विजह्रुः** = जलविहार गरे

**वाक्यार्थ–** जलाशयमा पुगेपछि सबैले कपडा तीरमा राखे र कमलजस्ता आँखा भएका ती सुन्दरीहरू आपसमा पानी छ्यापाछ्याप गर्दै जलक्रीडा गर्न थाले।

**वीक्ष्य व्रजन्तं गिरिशं सह देव्या वृषस्थितम्।**

**सहसोत्तीर्य वासांसि पर्यधुर्व्रीडिताः स्त्रियः ॥ ९॥**

**पदार्थ–**
**देव्या सह** = देवी पार्वतीले सहित
**वृषस्थितम्** = साँढेमा बसेका र
**व्रजन्तं** = आउँदै गरेका
**गिरिशं** = भगवान् शङ्करलाई
**वीक्ष्य** = देखेर
**व्रीडिताः** = लजाएका
**स्त्रियः** = स्त्रीहरूले
**सहसा** = चाँडै-चाँडै
**उत्तीर्य** = पोखरीबाट उत्रिएर
**वासांसि** = कपडाहरू
**पर्यधुः** = लगाए

**वाक्यार्थ–** पार्वतीसहित भई गोरुमा चढेर आउँदै गर्नुभएका भगवान् शङ्करलाई देखेर ती नुहाइरहेका स्त्रीहरूले पोखरीबाट उत्रिएर तीरमा आई अति लजाउँदै चाँडै-चाँडै कपडाहरू लगाए।

**शर्मिष्ठाजानती वासो गुरुपुत्र्याः समव्ययत्।**
**स्वीयं मत्वा प्रकुपिता देवयानीदमब्रवीत्॥ १०॥**

**पदार्थ–**
**शर्मिष्ठा** = शर्मिष्ठाले
**अजानती** = थाहै नपाईकन
**गुरुपुत्र्याः** = गुरुपुत्री देवयानीको
**वासः** = कपडा
**स्वीयं मत्वा** = आफ्नो सम्झिएर
**समव्ययत्** = लगाइन्
**प्रकुपिता** = त्यसैले रिसाएकी
**देवयानी** = गुरुपुत्री देवयानीले (शर्मिष्ठालाई)
**इदं** = यस्तो
**अब्रवीत्** = भनिन्

**वाक्यार्थ–** शर्मिष्ठाले हतारमा कपडा लगाउँदा गुरुपुत्री देवयानीको कपडालाई आफ्नो सम्झिएर लगाइन्। त्यही निहुँमा रिसाएर देवयानीले शर्मिष्ठालाई यसो भनिन्।

**अहो निरीक्ष्यतामस्या दास्याः कर्म ह्यसाम्प्रतम्।**
**अस्मद्धार्यं धृतवती शुनीव हविरध्वरे॥ ११॥**

**पदार्थ–**
**अहो** = ओहो
**अस्याः** = यो
**दास्याः** = दासीको
**हि** = निश्चय नै
**असाम्प्रतम्** = अत्यन्त अनुचित
**कर्म** = काम
**निरीक्ष्यतां** = हेर
**अध्वरे** = यज्ञमा
**शुनी** = कुकुर्नीले
**हविः इव** = हवनीय वस्तु (जुठो हाले) झैँ
**अस्मद्धार्यं** = मैले लगाउने कपडा
**धृतवती** = लगाई

**वाक्यार्थ–** ओहो ! यो दासी समानकी शर्मिष्ठाले हेर कति अनुचित काम गरेकी ? यज्ञको हवि कुकुर्नीले खाए झैँ, मैले लगाउने कपडा त यसले पो लगाइछे।

**यैरिदं तपसा सृष्टं मुखं पुंसः परस्य ये।**
**धार्यते यैरिह ज्योतिः शिवः पन्थाश्च दर्शितः॥ १२॥**
**यान्वन्दन्त्युपतिष्ठन्ते लोकनाथाः सुरेश्वराः।**

**भगवानपि विश्वात्मा पावनः श्रीनिकेतनः ॥ १३ ॥**

**वयं तत्रापि भृगवः शिष्योऽस्या नः पितासुरः ।**

**अस्मद्धार्यं धृतवती शूद्रो वेदमिवासती ॥ १४ ॥**

**पदार्थ–**
**यैः** = जो प्रजापति आदि ब्राह्मणहरूद्वारा
**इदं** = यो विश्व
**तपसा** = तपोबलद्वारा
**सृष्टं** = सृष्टि गरियो
**ये** = जो ब्राह्मणहरू
**परस्य** = परब्रह्मरूप
**पुंसः** = भगवान्‌को
**मुखं** = मुख हुन् (मुखबाट उत्पन्न भएका हुनाले श्रेष्ठ हुन्)
**यैः** = जुन ब्राह्मणहरूद्वारा
**इह** = यो संसारमा
**ज्योतिः** = स्वयं प्रकाशस्वरूप ब्रह्म
**धार्यते** = (उपास्यरूपले हृदयमा) धारण गरिन्छन् (जुन ब्राह्मणहरूद्वारा यो संसारमा)
**शिवः** = कल्याणकारक
**पन्थाः च** = मार्ग पनि (सबैलाई)
**दर्शितः** = देखाइएको छ
**यान्** = जुन ब्राह्मणहरूलाई
**सुरेश्वराः** = इन्द्र आदि
**लोकनाथाः** = लोकपालहरूले पनि
**वन्दन्ति** = नमस्कार गर्दछन् र
**उपतिष्ठन्ते** = स्तुति पनि गर्दछन् (त्यति मात्र होइन)
**विश्वात्मा** = सबैका आत्मस्वरूप
**पावनः** = अत्यन्त पवित्र
**श्रीनिकेतनः** = लक्ष्मीपति
**भगवान्** = भगवान् विष्णुले
**अपि** = पनि (ब्राह्मणहरूलाई प्रणाम गर्नुहुन्छ)
**तत्र अपि** = त्यो पवित्र ब्राह्मणकुलमा पनि
**वयं** = हामीहरू
**भृगवः** = भृगुवंशमा उत्पन्न भएका श्रेष्ठ ब्राह्मण हौँ (त्यति मात्र नभएर)
**अस्याः** = यसको (शर्मिष्ठाको)
**पिता** = बुबा
**असुरः** = असुरराज वृषपर्वा
**नः** = हामीहरूको
**शिष्यः** = शिष्य हो
**असती** = (उसकी छोरी यो) दुष्टाले
**शूद्रः** = शूद्रले
**वेदम् इव** = वेदधारण गरे झैँ (पढे झैँ)
**अस्मद्धार्यं** = हामीले (मैले) लगाउने कपडा
**धृतवती** = धारण गरी

**वाक्यार्थ–** जुन ब्राह्मणहरूले आफ्नो तपोबलद्वारा यो सारा सृष्टि गरे, जुन ब्राह्मणहरू भगवान्‌का मुखबाट उत्पन्न भएका हुनाले संसारमा श्रेष्ठ मानिन्छन् तथा जुन ब्राह्मणहरूले स्वयंप्रकाशस्वरूप ब्रह्मलाई उपास्यरूपले हृदयमा धारण गर्दछन्, जुन ब्राह्मणहरूले संसारमा कल्याणकारक मार्ग देखाएका छन्, जुन ब्राह्मणहरूलाई इन्द्र आदि लोकपालहरूले पनि नमस्कार र स्तुति गर्दछन् र त्यति मात्र नभएर लक्ष्मीपति विश्वात्मा भगवान् श्रीहरिले पनि प्रणाम गर्नुहुन्छ, (म त्यस्तो कुलमा उत्पन्न भएकी हुँ) त्यस्तो पवित्र ब्राह्मणकुलमा पनि हामी भृगुवंशमा उत्पन्न भएका श्रेष्ठ ब्राह्मण हौँ। यो शर्मिष्ठाको पिता वृषपर्वा हामीहरूको शिष्य हो। यो शर्मिष्ठाले शूद्रले वेद धारण गरे जस्तै विना अधिकार मेरो कपडा कसरी धारण गरी ?

**एवं शपन्तीं शर्मिष्ठा गुरुपुत्रीमभाषत ।**

**रुषा श्वसन्त्युरङ्गीव धर्षिता दष्टदच्छदा ॥ १५ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**शपन्तीं** = तिरस्कारपूर्वक गाली गरिरहेकी
**गुरुपुत्रीम्** = गुरुपुत्री
देवयानीलाई
**रुषा** = रिसले
**श्वसन्ती** = लामा-लामा सास फेर्दै गरेकी र
**धर्षिता** = अति तिरस्कृत भएकी
तथा (रिसाएर)
**दष्टदच्छदा** = दाह्रा किटेकी
**उरङ्गी इव** = सर्पिणी झैँ भएकी
**शर्मिष्ठा** = शर्मिष्ठाले
**अभाषत** = भन्न लागिन्

**वाक्यार्थ–** यसरी आफूलाई तिरस्कारपूर्वक गाली गर्दै गरेकी गुरुपुत्री देवयानीलाई रिसले जलेर दाह्रा किटेकी तथा घाइते सर्पिणी जस्ती भएकी शर्मिष्ठाले भन्न लागिन्।

**आत्मवृत्तमविज्ञाय कत्थसे बहु भिक्षुकि ।**
**किं न प्रतीक्षसेऽस्माकं गृहान् बलिभुजो यथा ॥ १६ ॥**

**पदार्थ–**
**भिक्षुकि** = हे भिखारी देवयानी
**आत्मवृत्तं** = आफ्नो भिखारीपनालाई
**अविज्ञाय** = विचार नगरीकन
**बहु** = धेरै
**कत्थसे** = बोल्छेस्
**किं** = के तँ
**अस्माकं** = हाम्रो
**गृहान्** = घरको ढोकामा
**बलिभुजः यथा** = बलि खाने (काग, कुकुर आदि) झैँ
**न प्रतीक्षसे** = प्रतीक्षा गर्दिनस्

**वाक्यार्थ–** हे भिखारी देवयानी ! तँ आफ्नो भिखारीपनालाई विचार नगरी बढी बोल्छेस् ? हाम्रो घरको ढोकामा खान पाइन्छ कि भनेर बलि खाने काग र कुकुरले झैँ तँ प्रतीक्षा गर्दिनस् ?

**एवंविधैः सुपरुषैः क्षिप्त्वाचार्यसुतां सतीम् ।**
**शर्मिष्ठा प्राक्षिपत् कूपे वास आदाय मन्युना ॥ १७ ॥**

**पदार्थ–**
**शर्मिष्ठा** = शर्मिष्ठाले
**एवंविधैः** = यस्ता खालका
**सुपरुषैः** = कठोर वचनद्वारा
**सतीम्** = पूज्य
**आचार्यसुतां** = गुरुपुत्री देवयानीलाई
**क्षिप्त्वा** = गाली गरेर
**मन्युना** = क्रोधको आवेगमा
**वासः** = उनले लगाएको कपडा पनि
**आदाय** = बलजफ्ती फुकालिदिएर (उनलाई)
**कूपे** = नजिकैको कुवामा
**प्राक्षिपत्** = खसालिदिइन्

**वाक्यार्थ–** शर्मिष्ठाले यस्ता खालका कठोर वचनद्वारा गाली गर्दै क्रोधको आवेगमा पूज्य गुरुपुत्री देवयानीलाई लगाएको कपडा पनि बलजफ्ती फुकालिदिएर नजिकैको कुवामा खसालिदिइन्।

**तस्यां गतायां स्वगृहं ययातिर्मृगयां चरन् ।**

**प्राप्तो यदृच्छया कूपे जलार्थी तां ददर्श ह ॥ १८ ॥**

**पदार्थ–**
**तस्यां** = ती शर्मिष्ठा
**स्वगृहं** = आफ्नो घरतिर
**गतायां** = गएपछि
**मृगयां** = सिकारका लागि
**चरन्** = घुम्दै
**जलार्थी** = पानी खोज्दै गरेका
**ययातिः** = राजा ययाति
**यदृच्छया** = अकस्मात्
**कूपे** = त्यो कुवामा
**प्राप्तः** = आइपुगे र
**ह** = निश्चय नै
**तां** = ती कन्यालाई
**ददर्श** = देखे

**वाक्यार्थ–** राजपुत्री शर्मिष्ठा घरतिर गएपछि सिकारका लागि घुम्दै गरेका राजा ययाति पानी खोज्दै अकस्मात् त्यस कुवामा आइपुगे र ती कन्यालाई देखे।

**दत्त्वा स्वमुत्तरं वासस्तस्यै राजा विवाससे ।**
**गृहीत्वा पाणिना पाणिमुज्जहार दयापरः ॥ १९ ॥**

**पदार्थ–**
**दयापरः** = दयालु
**राजा** = राजा ययातिले
**विवाससे** = कपडा नलगाएकी
**तस्यै** = ती देवयानीलाई
**स्वम्** = आफ्नो
**उत्तरं वासः** = उत्तरीय कपडा
**दत्त्वा** = दिएर
**पाणिना** = आफ्नो हातले
**पाणिम्** = उनको हातलाई
**गृहीत्वा** = समातेर
**उज्जहार** = बाहिर निकाले

**वाक्यार्थ–** दयालु राजा ययातिले ती कपडा नलगाएकी देवयानीलाई आफ्नो उत्तरीय वस्त्र दिएर आफ्नो हातले उनको हात समातेर बाहिर निकाले।

**तं वीरमाहौशनसी प्रेमनिर्भरया गिरा ।**
**राजंस्त्वया गृहीतो मे पाणिः परपुरञ्जय ॥ २० ॥**
**हस्तग्राहोऽपरो मा भूद् गृहीतायास्त्वया हि मे ।**
**एष ईशकृतो वीर सम्बन्धो नौ न पौरुषः ॥**
**यदिदं कूपलग्नाया भवतो दर्शनं मम ॥ २१ ॥**

**पदार्थ–**
**औशनसी** = शुक्राचार्यकी पुत्री देवयानीले
**तं** = ती आफ्नो उद्धार गर्ने
**वीरं** = वीर ययातिलाई
**प्रेमनिर्भरया** = प्रेमले भरिएको
**गिरा** = वाणीले
**आह** = भनिन्
**राजन्** = हे राजा
**त्वया** = हजुरद्वारा
**मे** = मेरो
**पाणिः** = हात
**गृहीतः** = समाइयो
**परपुरञ्जय** = हे शत्रुनगर विजेता वीर
**त्वया** = हजुरद्वारा
**गृहीतायाः** = हात समाइएकी
**मे** = मेरो
**हि** = निश्चय नै
**हस्तग्राहः** = पाणिग्रहण गर्ने (विवाह गर्ने)
**अपरः** = अर्को व्यक्ति
**मा भूत्** = नहोस्
**वीर** = हे वीर

**नौ** = हामी दुईको
**एषः सम्बन्धः** = यो सम्बन्ध
**ईशकृतः** = ईश्वरले जुटाएको हो
**पौरुषः न** = मान्छेले गराएको
होइन
**यत्** = जो
**कूपकग्नायाः** = कुवामा खसेकी
**मम** = मेरो लागि
**भवतः** = हजुरको
**इदं दर्शनम्** = यो दर्शन भयो

**वाक्यार्थ–** त्यसपछि शुक्राचार्यकी पुत्री देवयानीले आफ्नो उद्धार गर्ने राजा ययातिलाई प्रेमपूर्वक भनिन्– हे राजा ! हजुरले मेरो पाणिग्रहण गरिसक्नुभयो, अब यो हजुरले ग्रहण गरेको मेरो हात फेरि अर्कोले ग्रहण नगरोस्। हे वीर ! हामीदुईको यो सम्बन्ध ईश्वरले जुटाएको हो, मान्छेले जुटाएको होइन। यसैले कुवामा खसेकी मलाई हजुरको दर्शन भयो।

**न ब्राह्मणो मे भविता हस्तग्राहो महाभुज।**
**कचस्य बार्हस्पत्यस्य शापाद् यमशपं पुरा॥ २२॥**

**पदार्थ–**
**महाभुज** = हे महाबाहु वीर
**पुरा** = पहिले मैले
**यं** = जसलाई (कचलाई)
**अशपं** = श्राप दिएको थिएँ
(त्यसैले)
**बार्हस्पत्यस्य** = बृहस्पतिपुत्र
**कचस्य** = कचको
**शापात्** = श्रापको कारणले गर्दा
**मे** = मेरो पनि
**हस्तग्राहः** = पाणिग्रहण गर्ने
**ब्राह्मणः** = कुनै पनि ब्राह्मण
**न भविता** = हुनेछैन

**वाक्यार्थ–** हे वीरवर ! पहिला मैले बृहस्पतिपुत्र कचलाई श्राप दिएको थिएँ। त्यसको बदलामा उसले पनि मलाई कुनै पनि ब्राह्मणले विवाह नगर्ने श्राप दिएको थियो। त्यसैले मेरो विवाह ब्राह्मणसँग हुनेछैन।

**विवरण–** यस श्लोकमा कच र देवयानीले परस्पर श्राप दिएको पूर्वप्रसङ्ग देवयानीले आफैं ययातिलाई बताएकी छिन्। बृहस्पतिका पुत्र कच मृतसञ्जीवनी विद्या सिकेर देवताहरूलाई बलियो बनाउन भनी शुक्राचार्यकहाँ गए। देवताहरूको पक्षबाट आएको कचलाई शुक्राचार्यले सञ्जीवनी विद्या देलान् भनी डराएका दैत्यहरूले उनलाई बारम्बार मारिरहे, तर हरेक पटक कचमा आसक्त भएकी देवयानीको अनुरोधमा शुक्राचार्यले उनलाई बचाइरहे। एकपटक त कचलाई मारी जलाएको खरानी मदिरामा मिलाई दैत्यहरूले शुक्राचार्यलाई नै पिलाइदिए। जतातते खोज्दा पनि कच पत्ता नलागेपछि शुक्राचार्यले ध्यानदृष्टिले हेर्दा ऊ त खरानी रूपमा आफ्नै पेटभित्र पुगेको थाहा पाए। पुत्री देवयानीको अत्यन्त अनुरोधलाई टार्न नसकी शुक्राचार्यले आफ्नो पेटभित्र रहेका कचलाई सञ्जीवनी विद्याद्वारा सचेत बनाए र त्यो विद्याको उपदेश समेत गरे। त्यसपछि कच गुरुको भुँडी फोरी निस्के र मरेका शुक्राचार्यलाई उनले त्यही विद्याद्वारा बचाइदिए। अब कच जाने वेला भयो भन्ने थाहा पाई उपयुक्त मौका पारेर देवयानीले उनीसँग विवाहको प्रस्ताव राखिन्, तर कचले गुरुपुत्रीसँग विवाह गर्न नमिल्ने कुरा बताए। यसबाट रिसाएकी देवयानीले कचलाई सञ्जीवनी विद्या निष्फल हुने श्राप दिइन् भने रिसाएका कचले पनि देवयानीलाई ब्राह्मणसँग विवाह नहुने श्राप दिए। यही प्रसङ्ग यहाँ देवयानीले ययातिलाई

बताएकी छिन्।

**ययातिरनभिप्रेतं दैवोपहृतमात्मनः।**
**मनस्तु तद् गतं बुद्ध्वा प्रतिजग्राह तद्वचः॥ २३॥**

**पदार्थ–**
**ययातिः** = राजा ययातिले
**अनभिप्रेतं** = (अशास्त्रीय भएकाले) उपयुक्त नभए पनि
**दैवोपहृतं** = ईश्वरले उपहारस्वरूप नै प्राप्त गराएको र
**आत्मनः** = आफ्नो
**मनः तु** = मन पनि
**तद्गतं** = ती देवायानीमा आकृष्ट भएको
**बुद्ध्वा** = विचार गरेर
**तद्वचः** = देवायानीको त्यो आग्रहलाई
**प्रतिजग्राह** = स्वीकार गरे

**वाक्यार्थ–** यो विधि अशास्त्रीय भएकाले राजा ययातिले विवाहलाई उपयुक्त त ठानेका थिएनन्, तथापि ईश्वरले जुटाएको र आफ्नो मन पनि उनीतिर आकृष्ट भएकाले देवयानीको त्यो आग्रहलाई उनले स्वीकार गरे।

**गते राजनि सा वीरे तत्र स्म रुदती पितुः।**
**न्यवेदयत् ततः सर्वमुक्तं शर्मिष्ठया कृतम्॥ २४॥**

**पदार्थ–**
**वीरे** = वीर
**राजनि** = राजा ययाति
**गते** = हिँडेपछि
**सा** = ती देवयानी
**रुदती** = रुँदै
**पितुः** = पिता शुक्राचार्यको नजिकमा गएर
**ततः** = त्यसपछि
**तत्र** = त्यहाँ
**शर्मिष्ठया** = शर्मिष्ठाद्वारा
**उक्तं** = भनिएका कुरा र
**कृतम्** = गरिएका कुराहरू पनि
**सर्वम्** = सबै
**न्यवेदयत् स्म** = निवेदन गरिन्

**वाक्यार्थ–** त्यसपछि राजा ययाति त्यहाँबाट हिँडेपछि देवायानी रुँदै पिताजीको नजिकमा पुगिन् र उनले शर्मिष्ठाले भनेका र गरेका सारा कुरा पिताजीलाई सुनाइन्।

**दुर्मना भगवान् काव्यः पौरोहित्यं विगर्हयन्।**
**स्तुवन् वृत्तिं च कापोतीं दुहित्रा स ययौ पुरात्॥ २५॥**

**पदार्थ–**
**दुर्मनाः** = (यी सबै कुरा सुनेर) दुःखित चित्त भएका
**भगवान् काव्यः** = भगवान् शुक्राचार्य
**पौरोहित्यं** = पौरोहित्य कर्मलाई
**विगर्हयन्** = निन्दा गर्दै
**कापोतीं** = परेवाको जस्तो सिला खोज्ने
**वृत्तिं** = वृत्तिलाई
**स्तुवन् च** = प्रशंसा गर्दै
**सः** = ती शुक्राचार्य
**दुहित्रा** = छोरी देवयानीले सहित
**पुरात्** = सहरबाट
**ययौ** = निक्लिए

**वाक्यार्थ–** त्यसपछि छोरीको कुरा सुनेर दुःखित चित्त हुँदै भगवान् शुक्राचार्य पौरोहित्य कर्मको निन्दा गर्दै बरु परेवाले झैं शिला खोजेर जीवननिर्वाह गर्नु नै राम्रो रहेछ भन्दै छोरीसहित

वृषपर्वाको सहरबाट निस्किए।

**वृषपर्वा तमाज्ञाय प्रत्यनीकविवक्षितम्।**
**गुरुं प्रसादयन्मूर्ध्ना पादयोः पतितः पथि ॥ २६ ॥**

**पदार्थ–**
**वृषपर्वा** = वृषपर्वाले
**प्रत्यनीकविवक्षितम्** = शत्रुपक्षका देवताहरूले चाहेको कुरा पुग्ने
**आज्ञाय** = बुझेर
**तं** = ती
**गुरुं** = गुरु शुक्राचार्यलाई
**प्रसादयन्** = खुसी पार्दै
**पथि** = बाटैमा
**मूर्ध्ना** = शिर झुकाएर
**पादयोः** = पाउमा
**पतितः** = परे

**वाक्यार्थ–** यसरी गुरु शुक्राचार्य हिँडेपछि वृषपर्वालाई अब शत्रु देवताहरूले चाहेको कुरा पुग्ने भयो भन्ने लाग्यो र उनी गुरुलाई खुसी पार्न बाटैमा शिर झुकाई गुरुको पाउमा परे।

**क्षणार्धमन्युर्भगवान् शिष्यं व्याचष्ट भार्गवः।**
**कामोऽस्याः क्रियतां राजन्नैनां त्यक्तुमिहोत्सहे ॥ २७ ॥**

**पदार्थ–**
**क्षणार्धमन्युः** = आधा क्षण मात्र रिसाउने
**भगवान् भार्गवः** = भगवान् भृगुवंशीय शुक्राचार्यले
**शिष्यं** = शिष्य वृषपर्वालाई
**व्याचष्ट** = भने
**राजन्** = हे राजा
**अस्याः** = यी देवयानीको
**कामः** = कामना
**क्रियतां** = पूरा गरिदेऊ
**इह** = यहाँ
**एनां** = यी देवयानीलाई
**त्यक्तुम्** = छाड्न
**न उत्सहे** = म सक्दिनँ

**वाक्यार्थ–** त्यसपछि थोरै समय मात्र रिसाउने स्वभाव भएका भगवान् शुक्राचार्यले शिष्य वृषपर्वालाई भने– हे राजा ! तिमी यी देवायानीले भनेको पूरा गरिदेऊ किनभने उसलाई यहाँ छाडेर म बस्न सक्दिनँ।

**तथेत्यवस्थिते प्राह देवयानी मनोगतम्।**
**पित्रा दत्ता यतो यास्ये सानुगा यातु मामनु ॥ २८ ॥**

**पदार्थ–**
(राजा वृषपर्वाले)
**तथा इति** = ल त्यस्तै हुनेछ भनेर
**अवस्थिते** = बसेपछि
**देवयानी** = देवायानीले
**मनोगतम्** = मनको कुरा
**प्राह** = भनिन्
**पित्रा** = पिताजीद्वारा
**दत्ता** = जो कसैलाई दिइएकी म
**यतः यास्ये** = जहाँ जानेछु
**माम् अनु** = मेरो पछि लागेर
**सानुगा** = सेविका सहित (यी शर्मिष्ठा)
**यातु** = जाऊन्

**वाक्यार्थ–** राजा वृषपर्वाले यो कुरालाई स्वीकार गरेपछि देवायानीले पिताले विवाह गरेर दिएपछि म आफू जहाँ-जहाँ जान्छु, त्यहाँ-त्यहाँ आफ्ना सेविकाले सहित भएर यी शर्मिष्ठा जाऊन् भनी आफ्नो इच्छा प्रकट गरिन्।

**स्वानां तत्सङ्कटं वीक्ष्य तदर्थस्य च गौरवम्।**
**देवयानीं पर्यचरत् स्त्रीसहस्रेण दासवत्॥ २९॥**

**पदार्थ–**
**स्वानां** = आफन्तहरूको लागि
**तत्सङ्कटं** = त्यो (देवयानी र शुक्राचार्य रिसाएमा हुने) आपत्तिलाई र
**तदर्थस्य च** = ती गुरुबाट हुने
**गौरवम्** = महत्त्वपूर्ण कार्य पनि
**वीक्ष्य** = विचार गरेर (शर्मिष्ठाले)
**दासवत्** = अरू दासको समान
**देवयानीम्** = ती देवयानीलाई
**स्त्रीसहस्रेण**= हजारौँ सङ्गिनीसहित भएर
**पर्यचरत्** = सेवा गरिन्

**वाक्यार्थ–** त्यसपछि शर्मिष्ठाले गुरु रिसाएमा आफन्तमाथि सङ्कट आउने र खुसी भएमा महत्त्वपूर्ण कार्य पनि सिद्ध हुने कुरा विचार गरी हजारौँ सङ्गिनीसहित भएर देवयानीको सेवा गर्न थालिन्।

**नाहुषाय सुतां दत्त्वा सह शर्मिष्ठयोशना।**
**तमाह राजञ्छर्मिष्ठामाधास्तल्पे न कर्हिचित्॥ ३०॥**

**पदार्थ–**
**उशना** = शुक्राचार्यले
**शर्मिष्ठया सह** = (दासीको रूपमा रहेकी) शर्मिष्ठासहित
**सुतां** = छोरी देवयानीलाई
**नाहुषाय** = नहुषपुत्र ययातिलाई
**दत्त्वा** = दिएर
**तं** = ती ययातिलाई
**आह** = भने
**राजन्** = हे राजा
**शर्मिष्ठां** = शर्मिष्ठालाई
**तल्पे** = ओछ्यानमा सँगै
**कर्हिचित्** = कहिल्यै पनि
**न आधाः** = नराख्नू

**वाक्यार्थ–** त्यसपछि शुक्राचार्यले दासीको रूपमा रहेकी शर्मिष्ठासहित पुत्री देवयानीलाई ययातिसँग विवाह गरेर दिए र उनले राजा ययातिलाई शर्मिष्ठालाई आफूसँग कहिल्यै पनि ओछ्यानमा सँगै नराख्नू (सहवास नगर्नू) भनेर पनि बताए।

**विलोक्यौशनसीं राजञ्छर्मिष्ठा सप्रजां क्वचित्।**
**तमेव वव्रे रहसि सख्याः पतिमृतौ सती॥ ३१॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**क्वचित्** = केही समयपछि
**सती** = सती (परपुरुष नभएकी)
**शर्मिष्ठा** = शर्मिष्ठाले
**औशनसीं** = देवयानीलाई
**सप्रजां** = पुत्रवती
**विलोक्य** = देखेर
**सख्याः** = सखी देवयानीका
**तम् एव** = तिनै
**पतिम्** = पति ययातिसँग
**ऋतौ** = ऋतुकालमा
**रहसि** = एकान्त ठाउँमा
**वव्रे** = (सहवासको लागि) अनुरोध गरिन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! केही समयपछि आफ्नै साथी देवयानी पुत्रवती भएको देखेर सती धर्ममा रहेकी शर्मिष्ठाले पनि ऋतुकालमा कुनै एकान्त ठाउँमा सखीकै पति ययातिसँग सहवासको

लागि अनुरोध गरिन्।

**राजपुत्र्यार्थितोऽपत्ये धर्मं चावेक्ष्य धर्मवित्।**
**स्मरञ्छुक्रवचः काले दिष्टमेवाभ्यपद्यत॥ ३२॥**

| पदार्थ– | **धर्मवित्** = धर्म जान्ने ययातिले | **स्मरन् च** = सम्झेर पनि |
|---|---|---|
| **अपत्ये** = सन्तानका लागि | **धर्मं अवेक्ष्य** = त्यसलाई धर्म नै ठानेर | **दिष्टम् एव** = प्रारब्ध नै सम्झी |
| **राजपुत्र्या** = राजपुत्री शर्मिष्ठाद्वारा | **शुक्रवचः** = शुक्राचार्यको वाणीलाई | **काले** = ऋतुकालमा |
| **अर्थितः** = प्रार्थना गरिएका | | **अभ्यपद्यत** = गमन गरे |

**वाक्यार्थ–** राजपुत्री शर्मिष्ठाले सन्तानका लागि आफूलाई प्रार्थना गरेको देखेर धर्म बुझेका ययातिले सन्तान दिनु नै धर्म हो भनी शुक्राचार्यको कुरा सम्झिएर पनि प्रारब्ध जे त होला भनी ऋतुकालमा गमन गरे।

**यदुं च तुर्वसुं चैव देवयानी व्यजायत।**
**द्रुह्युं चानुं च पूरुं च शर्मिष्ठा वार्षपर्वणी॥ ३३॥**

| पदार्थ– | दुई छोरा | **द्रुह्युं** = द्रुह्यु |
|---|---|---|
| **देवयानी** = देवयानीले | **व्यजायत** = जन्माइन् भने | **अनुं च** = अनु र |
| **यदुं** = यदु नामका र | **वार्षपर्वणी** = वृषपर्वाकी पुत्री | **पूरुं च** = पुरू (यी तीन भाइ छोरालाई जन्माइन्) |
| **तुर्वसुं एव च** = तुर्वसु नामका | **शर्मिष्ठा** = शर्मिष्ठाले चाहिँ | |

**वाक्यार्थ–** यसरी शुक्राचार्यकी पुत्री देवयानीले यदु र तुर्वसु दुई छोरा जन्माइन् भने यता वृषपर्वाकी पुत्री शर्मिष्ठाले द्रुह्यु, अनु र पुरू नामका तीन छोरा जन्माइन्।

**गर्भसम्भवमासुर्या भर्तुर्विज्ञाय मानिनी।**
**देवयानी पितुर्गेहं ययौ क्रोधविमूर्च्छिता॥ ३४॥**

| पदार्थ– | **आसुर्याः** = असुरपुत्री शर्मिष्ठाको | **क्रोधविमूर्च्छिता** = रिसले होस गुमाएकी (उनी) |
|---|---|---|
| **मानिनी** = मानवती | **गर्भसम्भवम्** = गर्भ रहेको कुरा | **पितुर्गेहं** = पिताको घरमा |
| **देवयानी** = देवयानीले | **विज्ञाय** = थाहा पाएर | **ययौ** = गइन् |
| **भर्तुः** = आफ्नै पति ययातिबाट | | |

**वाक्यार्थ–** मानवती देवयानीले शर्मिष्ठाको गर्भ पति ययातिबाट नै रहेको हो भन्ने कुरा थाहा पाइन् अनि रिसले होस गुमाएकी उनी पिताजीको घरमा गइन्।

**प्रियामनुगतः कामी वचोभिरुपमन्त्रयन्।**

**न प्रसादयितुं शेके पादसंवाहनादिभिः ॥ ३५ ॥**

**पदार्थ–**
**प्रियां** = देवायानीलाई
**अनुगतः** = फकाउन पछि लागेका
**कामी** = कामासक्त ययातिले
**वचोभिः** = मिठा–मिठा बोलीद्वारा
**उपमन्त्रयन्** = फकाउँदै र
**पादसंवाहनादिभिः** = खुट्टा समातेर पाउमा पर्दा पनि
**प्रसादयितुं** = (देवयानीलाई) प्रसन्न पार्न
**न शेके** = सकेनन्

**वाक्यार्थ–** त्यसपछि देवयानीलाई फकाउन पछि लागेका कामासक्त ययातिले मिठा–मिठा कुरा गरेर फकाउँदा र खुट्टा समातेर पाउ पर्दा पनि उनलाई प्रसन्न पार्न सकेनन्।

**शुक्रस्तमाह कुपितः स्त्रीकामानृतपुरुष ।**
**त्वां जरा विशतां मन्द विरूपकरणी नृणाम् ॥ ३६ ॥**

**पदार्थ–**
**कुपितः** = (छोरीको सबै कुरा सुनेर) रिसाएका
**शुक्रः** = शुक्राचार्यले
**तं** = ती राजा ययातिलाई
**आह** = भने
**स्त्रीकाम** = हे स्त्रीलम्पट
**अनृतपुरुष** = हे झूठो प्रतिज्ञावाला
**मन्द** = हे मूर्ख
**त्वां** = तिमीलाई
**नृणाम्** = मानिसहरूलाई
**विरूपकरणी** = विरूप बनाउने
**जरा** = वृद्धावस्थाले
**विशताम्** = सङ्क्रमण गरोस्

**वाक्यार्थ–** छोरीले बताएको सबै कुरा सुनेर रिसाएका शुक्राचार्यले राजा ययातिलाई 'हे स्त्रीलम्पट ! झूठो प्रतिज्ञावाला मूर्ख ! तिमीलाई मानिसलाई विरूप बनाउने वृद्धावस्थाले सङ्क्रमण गरोस्' भनी श्राप दिए।

**ययातिरुवाच** (ययातिले भने)

**अतृप्तोऽस्म्यद्य कामानां ब्रह्मन् दुहितरि स्म ते ।**
**व्यत्यस्यतां यथाकामं वयसा योऽभिधास्यति ॥ ३७ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मणदेव
**ते** = हजुरकी
**दुहितरि** = पुत्रीमा
**कामानां** = कामविषयक भोग भोगेर
**अद्य** = अहिले
**अतृप्तः अस्मि** = म तृप्त भइसकेको छैन (त्यसपछि शुक्राचार्यले भने)
**यथाकामं** = इच्छानुसार
**वयसा** = आफ्नो यौवनसँग
**यः अभिधास्यति** = यदि कसैले मान्छ भने
**व्यत्यस्यतां स्म** = साटेर फेरि युवावस्थामा परिवर्तित हुनेछौ

**वाक्यार्थ–** (श्राप दिएपछि ययातिले शुक्राचार्यसँग अनुरोध गरे) हे ब्राह्मणदेव ! म हजुरकी छोरी देवयानीमा कामविषयक भोग भोगेर तृप्त भएको छैन। यो सुनेर शुक्राचार्यले कसैले आफ्नो

युवावस्थासँग तिम्रो वृद्धावस्था साटेमा तिमी फेरि युवा बन्न सक्नेछौ भने।

**इति लब्धव्यवस्थानः पुत्रं ज्येष्ठमवोचत ।**
**यदो तात प्रतीच्छेमां जरां देहि निजं वयः ॥ ३८ ॥**
**मातामहकृतां वत्स न तृप्तो विषयेष्वहम् ।**
**वयसा भवदीयेन रंस्ये कतिपयाः समाः ॥ ३९ ॥**

**पदार्थ–**
**इति** = यसरी
**लब्धव्यवस्थानः** = उमेर साट्ने व्यवस्था प्राप्त गरेका ययातिले
**ज्येष्ठं** = जेठा
**पुत्रं** = छोरा यदुलाई
**अवोचत** = भने
**तात** = हे बाबु
**यदो** = हे प्रिय पुत्र यदु
**मातामहकृतां** = मावली हजुरबुबाले गराएको
**इमां** = यो
**जरां** = वृद्धावस्थालाई
**प्रतीच्छ** = स्वीकार गर र
**निजं** = आफ्नो
**वयः** = उमेर
**देहि** = मलाई देऊ
**वत्स** = हे बाबु
**अहम्** = म
**विषयेषु** = विषयहरूमा
**तृप्तः न** = तृप्त भएको छैन
**भवदीयेन** = तिम्रो
**वयसा** = उमेरले
**कतिपयाः समाः** = केही वर्षसम्म
**रंस्ये** = (विषयभोग गरेर) रमाउनेछु

**वाक्यार्थ–** यसरी उमेर साटेर युवा बन्न सक्ने व्यवस्था मिलेका ययातिले जेठा छोरा यदुसँग भने– हे प्रिय पुत्र यदु ! तिम्रो हजुरबाको कारणले गर्दा मलाई प्राप्त भएको यो वृद्धावस्थालाई तिमी स्वीकार गर र आफ्नो युवावस्था मलाई देऊ किनभने म विषयबाट तृप्त भएको छैन। अरू केही वर्ष तिम्रो उमेरले म विषयमा रमाउनेछु।

**यदुरुवाच** (यदुले भने)

**नोत्सहे जरसा स्थातुमन्तरा प्राप्तया तव ।**
**अविदित्वा सुखं ग्राम्यं वैतृष्ण्यं नैति पुरुषः ॥ ४० ॥**

**पदार्थ–**
**अन्तरा** = असमयमा नै
**प्राप्तया** = आएको
**तव** = हजुरको
**जरसा** = वृद्धावस्थालाई साथमा लिएर
**स्थातुम्** = रहन
**न उत्सहे** = म सक्दिनँ
**पुरुषः** = पुरुषले
**ग्राम्यं सुखं** = विषयादि भोगलाई
**अविदित्वा** = अनुभव नगरी
**वैतृष्ण्यं** = वैराग्यमा
**न एति** = प्राप्त हुँदैन

**वाक्यार्थ–** वेला नहुँदै प्राप्त भएको हजुरको यो वृद्धावस्थालाई लिएर म रहन सक्दिनँ किनभने कुनै पनि पुरुषले विषयादि भोगलाई अनुभव नगरी वैराग्य प्राप्त गर्न सक्दैन।

**तुर्वसुश्चोदितः पित्रा द्रुह्युश्चानुश्च भारत।**
**प्रत्याचख्युरधर्मज्ञा ह्यनित्ये नित्यबुद्धयः॥ ४१॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**पित्रा** = पिता ययातिद्वारा
**तुर्वसुः** = तुर्वसु
**द्रुह्युः** = द्रुह्यु र
**अनुः च** = अनु पनि
**चोदितः** = (उमेर साट्नका लागि) प्रेरित गरिए
**अनित्ये** = अनित्य शरीरमा
**हि** = नै
**नित्यबुद्धयः** = नित्य बुद्धि गरेर रहेका
**अधर्मज्ञाः** = धर्मको वास्तविक तत्त्व नबुझेका (ती पुत्रहरूले पनि यदुले झैँ)
**प्रत्याचख्युः** = स्वीकार गरेनन्

**वाक्यार्थ–** हे परीक्षित्! राजा ययातिले फेरि अरू पुत्रहरू तुर्वसु, द्रुह्यु र अनुलाई पनि आफूसँग उमेर साट्न आग्रह गरे, तर अनित्य देहादिमा नित्यबुद्धि गरेका धर्मको वास्तविक तत्त्व नबुझेका ती पुत्रहरूले पनि यदुले जस्तै पिताको कुरा मानेनन्।

**अपृच्छत् तनयं पूरुं वयसोनं गुणाधिकम्।**
**न त्वमग्रजवद् वत्स मां प्रत्याख्यातुमर्हसि॥ ४२॥**

**पदार्थ–**
**वयसा ऊनं** = उमेरले कान्छा
**गुणाधिकम्** = गुणले श्रेष्ठ
**तनयं** = पुत्र
**पूरुं** = पुरुलाई
**अपृच्छत्** = (ययातिले) सोधे
**वत्स** = हे बाबु
**त्वं** = तिमी
**अग्रजवत्** = अरू दाजुहरूले झैँ
**मां** = मेरो भनाइलाई
**प्रत्याख्यातुं** = अस्वीकार गर्न
**न अर्हसि** = योग्य छैनौँ

**वाक्यार्थ–** त्यसपछि ययातिले गुणहरूले श्रेष्ठ आफ्ना कान्छा छोरा पुरूसँग भने– हे बाबु! अरू दाजुहरूले झैँ मेरो कुरालाई तिमीले चाहिँ अस्वीकार नगर है।

**विवरण–** माथिका श्लोकहरूमा ययातिको मोहलाई दर्साइएको छ। शुक्राचार्यले बुढ्याइँले ग्रस्त हुने श्राप दिएपछि ययातिले आफूलाई विषयभोग गर्न नपुगेको बताई शुक्राचार्यबाट कसैसँग उमेर साट्न मिल्ने वर प्राप्त गरे। विषयासक्त मनुष्य सम्पूर्ण संसारलाई मैले मात्र भोग गरूँ भन्ने चाहन्छ। आफ्ना प्रेमी जनहरूले पनि यसमा सघाउँछन् भन्ने उसको विश्वास हुन्छ। कहीँ-कतैबाट यो भोगमा व्यवधान पर्न गयो भने मानिस आफन्तलाई पनि शत्रु मान्न थाल्दछ। यहाँ ययाति यही विषयभोगको मोहले ग्रस्त भएका छन् र आफ्ना छोराहरूसँग उनीहरूको यौवन माग्ने हदसम्म पुगेका छन्। तिम्रो उमेरलाई लिई म केही वर्ष विषय भोगमा रमाउनेछु, यतिन्जेल तिमी बुढ्यौली स्वीकार गर भनी कुनै बाबुले आफ्नो छोरालाई भनेको यो वचनद्वारा मानिसको आसक्ति कतिसम्म बलियो र अन्धो हुँदोरहेछ भन्ने देखाइएको छ।

**पूरुरुवाच** (पूरुले भने)

**को नु लोके मनुष्येन्द्र पितुरात्मकृतः पुमान्।**
**प्रतिकर्तुं क्षमो यस्य प्रसादाद् विन्दते परम्॥ ४३॥**

**पदार्थ–**
**मनुष्येन्द्र** = हे नरेश पिताजी
**यस्य** = जुन पिताको
**प्रसादात्** = अनुग्रहको कारणले
**पुमान्** = मान्छेले
**परम्** = परम पदलाई
**विन्दते** = प्राप्त गर्दछ भने
**लोके** = यो लोकमा
**आत्मकृतः** = आफूलाई जन्माउने
**पितुः** = पिताजीको
**प्रतिकर्तुं** = प्रत्युपकार गर्न
**को नु क्षमः** = कसले सक्ला

**वाक्यार्थ–** हे पिताजी ! पिताकै अनुग्रहको कारणले गर्दा मान्छेले परम पदलाई प्राप्त गर्दछ भने आफूलाई जन्माउने त्यस्ता पिताजीको उपकारको प्रत्युपकार गर्न कसले सक्ला ?

**उत्तमश्चिन्तितं कुर्यात् प्रोक्तकारी तु मध्यमः।**
**अधमोऽश्रद्धया कुर्यादकर्तोच्चरितं पितुः॥ ४४॥**

**पदार्थ–**
**चिन्तितं** = (पिताजीले मनले) सोचेको कुरा
**कुर्यात्** = (जो पुत्रले) गर्छ (त्यो)
**उत्तमः** = उत्तम पुत्र हो
**प्रोक्तकारी तु** = पिताजीले भनेपछि गर्ने पुत्र
**मध्यमः** = मध्यम खालको हो
**अश्रद्धया** = श्रद्धारहित भएर
**कुर्यात्** = पिताको आज्ञालाई मान्छ भने त्यो
**अधमः** = अधम पुत्र हो (जो पुत्र पिताको आज्ञालाई)
**अकर्ता** = मान्दैन (त्यो)
**पितुः** = पिताको
**उच्चरितम्** = विष्ठा नै हो

**वाक्यार्थ–** आफ्नो पिताले सोचेको कुरा बुझेर पालन गर्ने पुत्र उत्तम पुत्र हो, भनेपछि गर्ने मध्यम हो र भनेको आज्ञालाई अश्रद्धापूर्वक पालन गर्ने पुत्र अधम पुत्र हो। यदि कुनै पुत्र भनेको कुरालाई पनि मान्दैन भने त्यो पुत्र नभएर पिताको विष्ठा हो।

**इति प्रमुदितः पूरुः प्रत्यगृह्णाज्जरां पितुः।**
**सोऽपि तद्वयसा कामान् यथावज्जुजुषे नृप॥ ४५॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**इति** = यसरी
**प्रमुदितः** = प्रसन्न भएका
**पूरुः** = कान्छा छोरा पूरुले
**पितुः** = पिताजीको
**जरां** = वृद्धावस्थालाई
**प्रत्यगृह्णात्** = यौवनावस्था दिएर स्वीकार गरे
**सः अपि** = ती ययातिले पनि
**तद्वयसा** = पुत्रको त्यो उमेरले
**यथावत्** = पहिले झैं
**कामान्** = विविध विषयहरूलाई
**जुजुषे** = भोग गरे

**वाक्यार्थ–** हे परीक्षित् ! यसरी पिताको प्रत्युपकार गर्न पाएको हुनाले प्रसन्न भएका पुरुले आफ्नो यौवनावस्था दिएर पिताजीको वृद्धावस्थालाई स्वीकार गरे। त्यसपछि राजा ययातिले पनि

पुत्रको उमेरले पहिले झैँ विविध विषयहरूको भोग गरे।

**सप्तद्वीपपतिः सम्यक् पितृवत् पालयन् प्रजाः।**
**यथोपजोषं विषयाञ्जुजुषेऽव्याहतेन्द्रियः॥ ४६॥**

**पदार्थ—**
**सप्तद्वीपपतिः** = सात द्वीपका मालिक ययातिले
**पितृवत्** = पिताले झैँ
**प्रजाः** = जनतालाई
**संयक्** = राम्रोसँग
**पालयन्** = पालन गर्दै
**यथोपजोषं** = इच्छा अनुसार
**अव्याहतेन्द्रियः** = इन्द्रियशक्तिले सम्पन्न भएर
**विषयान्** = विषयहरूलाई
**जुजुषे** = भोग गरे

**वाक्यार्थ—** सातै द्वीपका राजा ययातिले सारा प्रजाहरूलाई पिताले झैँ पालन-पोषण गरे र इन्द्रियशक्तिले सम्पन्न भएर इच्छाअनुसार विषयको भोग गरे।

**देवयान्यप्यनुदिनं मनोवाग्देहवस्तुभिः।**
**प्रेयसः परमां प्रीतिमुवाह प्रेयसी रहः॥ ४७॥**

**पदार्थ—**
**प्रेयसी** = प्यारी
**देवयानी अपि** = देवयानीले पनि
**अनुदिनं** = दिनदिनै
**मनोवाग्देहवस्तुभिः** = मनले, वचनले, शरीरले र राम्रा वस्तुहरू समर्पण गरेर
**रहः** = एकान्तमा
**प्रेयसः** = प्रेमको
**परमां प्रीतिम्** = परम आनन्द
**उवाह** = प्रदान गरिन्

**वाक्यार्थ—** ययातिकी प्यारी देवयानीले पनि मन, वचन र शरीरले राम्रा वस्तुहरू अर्पण गरेर एकान्तमा प्रेमको परम आनन्द प्रदान गरिन्।

**अयजद् यज्ञपुरुषं क्रतुभिर्भूरिदक्षिणैः।**
**सर्वदेवमयं देवं सर्ववेदमयं हरिम्॥ ४८॥**

**पदार्थ—**
**भूरिदक्षिणैः** = धेरै दक्षिणा भएका
**क्रतुभिः** = विभिन्न यागहरूद्वारा
**सर्वदेवमयं** = सम्पूर्ण देवतास्वरूप
**देवं** = भगवान् र
**सर्ववेदमयं** = सम्पूर्ण वेदस्वरूप
**यज्ञपुरुषं** = यज्ञपुरुष
**हरिम्** = श्रीहरिलाई
**अयजत्** = पूजा गरे

**वाक्यार्थ—** त्यसपछि ययातिले धेरै धेरै दक्षिणायुक्त यज्ञका पद्धतिद्वारा सर्वदेवस्वरूप र सर्ववेदस्वरूप भगवान् यज्ञपुरुष श्रीहरिको पूजा गरे।

**यस्मिन्निदं विरचितं व्योम्नीव जलदावलिः।**
**नानेव भाति नाभाति स्वप्नमायामनोरथः॥ ४९॥**

**पदार्थ–**
**यस्मिन्** = जुन परमात्मामा
**स्वप्नमायामनोरथः** = स्वप्नका पदार्थ, मायावीका खेला र मनको इच्छासमान
**इदं** = यो सारा प्रपञ्च
**व्योम्नि** = आकाशमा
**जलदावलिः इव** = बादलको लहर झैँ
**विरचितं** = कल्पित छ (जाग्रत् र स्वप्नमा)
**नाना इव** = विभिन्न प्रकारको रूपमा
**भाति** = देखापर्दछ भने (सुषुप्ति र प्रलयमा)
**न आभाति** = देखिँदैन

**वाक्यार्थ–** स्वप्नका पदार्थ, मायावीका खेला र मनको इच्छासमान यो सारा प्रपञ्च आकाशमा बादल कल्पित भए झैँ परमात्मामा नै कल्पित छ, जुन कहिलेकाहीँ (जाग्रत् र स्वप्नमा) नाना रूपले देखापर्दछ भने कहिलेकाहीँ (सुषुप्ति र प्रलयमा) देखापर्दैन।

**तमेव हृदि विन्यस्य वासुदेवं गुहाशयम्।**
**नारायणमणीयांसं निराशीरयजत् प्रभुम्॥ ५०॥**

**पदार्थ–**
**तम् एव** = त्यस्ता
**वासुदेवं** = वासुदेवस्वरूप
**गुहाशयं** = सबैको हृदयमा विराजमान
**अणीयांसं** = अत्यन्त सूक्ष्मरूप
**नारायणं प्रभुम्** = भगवान् श्रीहरिलाई
**हृदि** = हृदयमा
**विन्यस्य** = राखेर
**निराशीः** = निष्काम भावनाले
**अयजत्** = यज्ञ गरे

**वाक्यार्थ–** राजा ययातिले सबैको हृदयमा विराजमान अत्यन्त सूक्ष्मरूप भएका भगवान् वासुदेवस्वरूप श्रीहरिलाई हृदयमा राखेर निष्काम भावनाले यज्ञ गरे।

**एवं वर्षसहस्राणि मनःषष्ठैर्मनःसुखम्।**
**विदधानोऽपि नातृप्यत् सार्वभौमः कदिन्द्रियैः॥ ५१॥**

**पदार्थ–**
**सार्वभौमः** = चक्रवर्ती राजा ययातिले
**एवं** = यसरी
**वर्षसहस्राणि** = एक हजार वर्षसम्म
**मनःषष्ठैः** = मनले सहित छ ओटा
**कदिन्द्रियैः** = दुष्ट (विषयासक्त) इन्द्रियहरूद्वारा
**मनःसुखम्** = मनलाई सुख दिने विषयका भोगहरू
**विदधानः अपि** = भोगे तापनि
**न अतृप्यत्** = तृप्त भएनन्

**वाक्यार्थ–** सार्वभौम सम्राट् ययातिले हजारौँ वर्षसम्म विषयासक्त भएर मन सहितका छ ओटै दुष्ट इन्द्रियले कामविषयक भोगहरू भोग्दा पनि उनी तृप्त भएनन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे अष्टादशोऽध्यायः॥ १८॥**

# अथ एकोनविंशोऽध्यायः

## राजा ययातिद्वारा गृहत्याग

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स इत्थमाचरन् कामान् स्त्रैणोऽपह्नवमात्मनः ।**

**बुद्ध्वा प्रियायै निर्विण्णो गाथामेतामगायत ॥ १ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **आचरन्** = भोग्दै | **प्रियायै** = आफ्नी प्रिया देवयानीलाई |
| **इत्थं** = यसप्रकार | **आत्मनः** = आफ्नो | **एतां** = यस्तो |
| **स्त्रैणः** = स्त्रीमा आसक्त | **अपह्नवं** = अधःपतन भएको | **गाथां** = कथा |
| **सः** = ती राजा ययातिले | **बुद्ध्वा** = बुझेर | **अगायत** = भने |
| **कामान्** = विषयभोगहरू | **निर्विण्णः** = विरक्त भई | |

**वाक्यार्थ–** यसप्रकार स्त्रीमा आसक्त भएका राजा ययातिले विभिन्न विषयका भोगहरू भोग्दै गर्दा आफ्नो अधःपतन भएको बुझेर विरक्त भई आफ्नी प्रिया देवयानीसँग यस्तो कथा भन्न थाले।

**शृणु भार्गव्यमूं गाथां मद्विधाचरितां भुवि ।**

**धीरा यस्यानुशोचन्ति वने ग्रामनिवासिनः ॥ २ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **धीराः** = धीर (विद्वान् तथा जितेन्द्रिय) व्यक्तिहरू | भोगपरायण चरित्रसम्बन्धी |
| **भार्गवि** = हे भृगुवंशी देवयानी | **अनुशोचन्ति** = (कल्याण कसरी होला भनेर) चिन्ता गर्दछन् | **अमूं** = यो |
| **यस्य** = जो | **भुवि** = पृथिवीमा | **गाथां** = प्रसिद्ध कथा |
| **ग्रामनिवासिनः** = गाउँमा बस्ने मजस्ता गृहस्थहरूको विषयमा | **मद्विधाचरितां** = मेरो जस्तै | **शृणु** = सुन |
| **वने** = वनमा बसेका | | |

**वाक्यार्थ–** हे भृगुवंशी देवयानी ! गाउँमा बस्ने मजस्ता गृहस्थहरूको बारेमा वनमा बसेका जितेन्द्रिय व्यक्तिहरू यिनीहरूको उद्धार कसरी होला भनेर खुब चिन्ता गर्दछन्। पृथिवीमा मजस्तै भोगपरायण चरित्रसम्बन्धी एउटा प्रसिद्ध कथा छ, त्यो म तिमीलाई सुनाउँछु, सुन।

**बस्त एको वने कश्चिद् विचिन्वन् प्रियमात्मनः ।**

**ददर्श कूपे पतितां स्वकर्मवशगामजाम् ॥३ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **कश्चित्** = कुनै | **बस्तः** = बोको थियो |
| **वने** = कुनै वनमा | **एकः** = एउटा | **आत्मनः** = आफ्नो |

**प्रियं** = प्रियवस्तु
**विचिन्वन्** = खोज्दै जाँदा
**कूपे** = कुवामा
**पतितां** = खसेकी
**स्वकर्मवशगां** = आफ्नै कर्मको वशमा रहेकी
**अजां** = बाख्रीलाई
**ददर्श** = देख्यो

**वाक्यार्थ–** कुनै वनमा एउटा बोको थियो। आफ्नो प्रिय वस्तुको खोजीमा घुम्दै जाँदा उसले कुनै कुवामा आफ्नै कर्मको प्रभावले खसेकी एउटी बाख्रीलाई देख्यो।

**तस्या उद्धरणोपायं बस्तः कामी विचिन्तयन्।**
**व्यधत्त तीर्थमुद्धृत्य विषाणाग्रेण रोधसी॥ ४॥**

**पदार्थ–**
**कामी** = कामुक
**बस्तः** = बोकाले
**तस्याः** = त्यो बाख्रीको
**उद्धरणोपायं** = उद्धार गर्ने उपायलाई
**विचिन्तयन्** = विचार गर्दै
**विषाणाग्रेण** = आफ्नो सिङको टुप्पाले
**रोधसी** = (कुवाको) डिललाई
**उद्धृत्य** = खनेर
**तीर्थम्** = निस्कने बाटो
**व्यधत्त** = बनायो

**वाक्यार्थ–** कामुक त्यस बोकाले यो बाख्रीको कसरी उद्धार गर्ने भनी विचार गऱ्यो र आफ्नो सिङको टुप्पाले कुवाको डिलको माटो खनेर निस्कने बाटो बनायो।

**सोत्तीर्य कूपात् सुश्रोणी तमेव चकमे किल।**
**तया वृतं समुद्वीक्ष्य बह्व्योऽजाः कान्तकामिनीः॥ ५॥**
**पीवानं श्मश्रुलं प्रेष्ठं मीढ्वांसं याभकोविदम्।**
**स एकोऽजवृषस्तासां बह्वीनां रतिवर्धनः॥**
**रेमे कामग्रहग्रस्त आत्मानं नावबुध्यत॥ ६॥**

**पदार्थ–**
**सा** = त्यो
**सुश्रोणी** = राम्रो नितम्ब भएकी बाख्री
**कूपात्** = कुवाबाट
**उत्तीर्य** = बाहिर निस्किएर
**किल** = निश्चय नै
**तम् एव** = त्यही बोकालाई
**चकमे** = प्रेमी बनाई
**तया** = (यसरी) त्यो बाख्रीले
**वृतं** = प्रेमी बनाएको
**समुद्वीक्ष्य** = देखेर
**बह्व्यः** = धेरै
**कान्तकामिनीः** = प्रेमीको इच्छा गरिरहेका
**अजाः** = बाख्रीहरूले पनि
**पीवानं** = अत्यन्त मोटो
**श्मश्रुलं** = दाडीवाला
**प्रेष्ठं** = जवान
**मीढ्वांसं** = समर्थ र
**याभकोविदम्** = रतिक्रीडामा कुशल (त्यही बोकालाई वरण गरे)
**सः** = त्यो
**एकः** = एउटै
**कामग्रहग्रस्तः** = कामरूपी ग्रहले ग्रस्त भएको
**तासां** = ती
**बह्वीनां** = सारा बाख्रीहरूको
**रतिवर्धनः** = प्रीतिवर्धक

**अजवृषः** = श्रेष्ठ बोको
**रेमे** = (सबैसँग) विहार गर्न थाल्यो र
**आत्मानं** = आफूलाई पनि
**न अवबुध्यते** = बिर्सियो

**वाक्यार्थ–** कुवाबाट निस्किएपछि त्यो बाख्रीले त्यही बोकालाई नै आफ्नो प्रेमी बनाई। यो कुरा प्रेमी खोजिरहेका अरू बाख्रीहरूले पनि देखे। उनीहरूले पनि अत्यन्त मोटो, दाडीवाला, जवान र रतिक्रीडामा कुशल त्यही बोकालाई प्रेमी बनाए। अब ती सारा बाख्रीहरूसँग कामरूपी ग्रहले समातिएको त्यो बोको एक्लै विहार गर्न थाल्यो र उसले आफूलाई पनि बिर्सियो।

**तमेव प्रेष्ठतमया रममाणमजान्यया।**
**विलोक्य कूपसंविग्ना नामृष्यद् बस्तकर्म तत्॥ ७॥**

**पदार्थ–**
**कूपसंविग्ना** = कुवामा खसेकी र पछि निकालिएकी बाख्रीले
**तम् एव** = त्यही आफ्नो प्रेमी (बोका)लाई
**प्रेष्ठतमया** = राम्रा-राम्रा
**अजान्यया** = अरू बाख्रीहरूसँग
**रममाणं** = रमण गर्दै गरेको
**विलोक्य** = देखेर
**तत्** = त्यस्तो
**बस्तकर्म** = बोकाको व्यवहारलाई
**न अमृष्यत्** = सहन गर्न सकिन

**वाक्यार्थ–** पहिले कुवामा खसेकी र पछि बोकाद्वारा उद्धार गरिएकी बाख्रीले आफ्नो प्रेमीले अरू राम्रा बाख्रीहरूसँग विहार गरेको देखेर बोकाको त्यस व्यवहारलाई सहन गर्न सकिन।

**तं दुर्हृदं सुहृद्रूपं कामिनं क्षणसौहृदम्।**
**इन्द्रियाराममुत्सृज्य स्वामिनं दुःखिता ययौ॥ ८॥**

**पदार्थ–**
**तं** = त्यस्तो
**दुर्हृदं** = कपटी
**सुहृद्रूपं** = साथीको रूपमा रहेको
**क्षणसौहृदम्** = स्वार्थका लागि साथी बनाएको
**कामिनं** = कामुक
**इन्द्रियारामं** = इन्द्रियलोलुप बोकालाई
**उत्सृज्य** = त्यागेर
**दुःखिता** = अत्यन्त दुःखित भएकी बाख्री
**स्वामिनं** = (आफ्नो) मालिकको शरणमा
**ययौ** = गई

**वाक्यार्थ–** अत्यन्त कपटी, स्वार्थी तथा कामासक्त र इन्द्रियलोलुप त्यस बोकालाई छाडेर अत्यन्त दुःखित भएकी बाख्री आफ्नो मालिकको शरणमा गई।

**सोऽपि चानुगतः स्त्रैणः कृपणस्तां प्रसादितुम्।**
**कुर्वन्निडविडाकारं नाशक्नोत् पथि सन्धितुम्॥ ९॥**

**पदार्थ–**
**स्त्रैणः** = स्त्रीलम्पट
**कृपणः** = अति दुःखी भएको
**सः अपि** = त्यो बोको पनि
**प्रसादितुम्** = बाख्रीलाई खुसी पार्न

**पथि** = बाटामा
**इडविडाकारं** = बोकाले निकाल्ने आवाज (म्याँ-म्याँ)
**कुर्वन्** = गर्दै
**अनुगतः** = पछि लाग्यो (तर)
**तां** = त्यो बाखीलाई
**सन्धितुम्** = मनाउन
**नाशक्नोत्** = सकेन

**वाक्यार्थ–** (बाखी रिसाएर गएको देखेर) स्त्रीलम्पट त्यो बोको पनि अति दुःखी हुँदै बाखीलाई फकाउन बाटामा म्याँ-म्याँ गर्दै पछि लाग्यो, तर बाकोले उसलाई मनाउन सकेन।

**तस्यास्तत्र द्विजः कश्चिदजास्वाम्यच्छिनद्रुषा।**
**लम्बन्तं वृषणं भूयः सन्दधेऽर्थाय योगवित्॥ १०॥**

**पदार्थ–**
**तत्र** = मालिकको घरमा
**तस्याः** = त्यो
**अजास्वामी** = बाखीको मालिक
**कश्चित्** = कुनै
**द्विजः** = ब्राह्मणले
**रुषा** = क्रोधको कारणले
**लम्बन्तं** = झुन्डिएको
**वृषणं** = बोकाको अण्डकोश
**अच्छिनत्** = काटिदिए र
**भूयः** = फेरि
**योगवित्** = सबै उपाय जानेको ब्राह्मणले
**अर्थाय** = आफ्नै बाखीको मैथुन आदि प्रयोजनका लागि
**सन्दधे** = जोडिदिए

**वाक्यार्थ–** बाखीको मालिक कुनै ब्राह्मण थिए। उनले रिसले त्यस बोकाको झुन्डिएको अण्डकोश काटिदिए। फेरि यो त बाखीको मैथुन आदि प्रयोजनका लागि चाहिन्छ भन्ने विचार गरेर सबै उपाय जानेका ती ब्राह्मणले अण्डकोश जोडिदिए।

**सम्बद्धवृषणः सोऽपि ह्यजया कूपलब्धया।**
**कालं बहुतिथं भद्रे कामैर्नाद्यापि तुष्यति॥ ११॥**

**पदार्थ–**
**भद्रे** = हे कल्याणी
**सम्बद्धवृषणः** = अण्डकोश जोडिएको
**सः अपि** = त्यो बोको पनि
**हि** = निश्चय नै
**कूपलब्धया** = कुवाबाट झिकिएकी
**अजया** = बाखीसँग
**बहुतिथं** = धेरै नै
**कालं** = समयसम्म (भोग गरेर)
**अद्य अपि** = अहिलेसम्म पनि
**कामैः** = ती विषयभोगहरूद्वारा
**न तुष्यति** = तृप्त भएको छैन

**वाक्यार्थ–** हे कल्याणी! यसरी अण्डकोश जोडिएपछि त्यो बोकाले कुवाबाट झिकिएकी बाखीसँग धेरै समयसम्म विषयभोगहरू भोग गऱ्यो तर अहिलेसम्म ती भोगहरूबाट ऊ तृप्त भएको छैन।

**तथाहं कृपणः सुभ्रु भवत्याः प्रेमयन्त्रितः।**
**आत्मानं नाभिजानामि मोहितस्तव मायया॥ १२॥**

**पदार्थ–**
**सुभ्रु** = हे राम्रा आँखीभौँ भएकी सुन्दरी

**तथा** = त्यसै गरी
**भवत्याः** = तिम्रो
**प्रेमयन्त्रितः** = प्रेमपाशमा बाँधिएर
**तव** = तिम्रो
**मायया** = मायाले
**मोहितः** = मोहित भएर
**कृपणः** = दयनीय भएको
**अहं** = मैले
**आत्मानं** = आफूलाई
**न अभिजानामि** = चिन्न सकेको छैन

**वाक्यार्थ–** हे सुन्दरी ! त्यही बोको झैँ दयनीय अवस्थामा पुगेको मैले पनि तिम्रो प्रेमपाशमा बाँधिएर तिम्रो मायाले मोहित हुँदा आफूलाई चिन्न सकेको छैन।

**यत् पृथिव्यां व्रीहियवं हिरण्यं पशवः स्त्रियः।**
**न दुह्यन्ति मनःप्रीतिं पुंसः कामहतस्य ते॥ १३॥**

**पदार्थ–**
**यत्** = जो
**पृथिव्यां** = पृथिवीमा
**व्रीहियवं** = धान, जौ आदि अन्नहरू
**हिरण्यं** = सुवर्ण आदि सम्पत्तिहरू
**पशवः** = पशुहरू र
**स्त्रियः** = स्त्रीहरू छन्
**ते** = ती विषयहरूले पनि
**कामहतस्य** = कामनाले ग्रस्त भएको
**पुंसः** = पुरुषलाई
**मनःप्रीतिं** = मनमा आनन्द
**न दुह्यन्ति** = दिँदैनन्

**वाक्यार्थ–** हे प्रिया ! पृथिवीमा जति पनि धान, जौ आदि अन्नहरू छन्, सुवर्ण आदि सम्पत्तिहरू छन् र पशु तथा स्त्रीहरू छन् ती साराले पनि कामनाले ग्रस्त भएको पुरुषलाई मनमा आनन्द दिँदैनन्।

**न जातु कामः कामानामुपभोगेन शाम्यति।**
**हविषा कृष्णवर्त्मेव भूय एवाभिवर्धते॥ १४॥**

**पदार्थ–**
**जातु** = कहिल्यै पनि
**कामानां** = विषयहरूको
**उपभोगेन** = उपभोगले
**कामः** = विषयवासना
**न शाम्यति** = शान्त हुँदैन (बरु)
**हविषा** = घिउ हालेर
**कृष्णवर्त्मा इव** = आगो (दन्किए) झैँ
**भूयः एव** = अझ बढी
**अभिवर्धते** = बढ्दछ

**वाक्यार्थ–** विषयलाई भोग गरेर कहिल्यै विषयप्रतिको वासना शान्त हुँदैन, घिउ थप्नाले आगो बढे झैँ भोगले वासना झन् बढ्दछ।

**विवरण–** यस प्रसङ्गमा ययातिले आफ्नी पत्नीलाई मोहका कारण आफ्नो दुरवस्था भएको बताएका छन्। हजारौँ वर्षको भोगबाट पनि इन्द्रिय र मन तृप्त नभएपछि ययातिले बल्ल तिनीहरूको साँचो वस्तुस्थिति बुझेका छन्। इन्द्रियहरूलाई र मनलाई शान्त गर्ने उपाय भोग हुँदै होइन, यसबाट त तिनीहरूमा त्यही भोगको संस्कार झन्–झन् दृढ हुँदै जान्छ। ययाति भन्छन्– हे देवयानी, जो व्यक्ति कामनाद्वारा जितिएको छ त्यस्तो व्यक्ति संसारभरि भएका अन्न, सम्पत्ति, स्त्री, पशु आदिको भोग गरिसक्दा पनि शान्त हुँदैन किनभने यो मनलाई शान्त गर्ने बाटो नै

होइन। सुख नभएको, तर सुखको आशामात्र भएको पदार्थहरूको भोग गर्दा यही अनन्त आशा या आसक्तिबाहेक केही हात नलाग्ने अनुभव गरेका ययातिले यही कुरा बताएका छन्। उनी दृष्टान्त दिँदै भन्छन्— जसरी आगो धेरै दन्किँदा त्यसलाई निभाउन घिउ खन्याइयो भने त्यो झन्-झन् बढेर जान्छ, त्यसै गरी कामनारूपी आगो पनि विषयभोगरूपी घिउ पाएपछि झन्-झनै बढ्न थाल्छ।

**यदा न कुरुते भावं सर्वभूतेष्वमङ्गलम्।**
**समदृष्टेस्तदा पुंसः सर्वाः सुखमया दिशः ॥ १५ ॥**

**पदार्थ—**
**यदा** = जब
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा र पदार्थहरूमा
**अमङ्गलम्** = नराम्रो
**भावं** = भाव
**न कुरुते** = गर्दैन
**तदा** = त्यही बखतमा नै
**समदृष्टेः** = सर्वत्र समदृष्टि भएको
**पुंसः** = त्यस मान्छेको
**सर्वाः दिशः** = सम्पूर्ण दिशाहरू
**सुखमयाः** = सुखदायी बन्दछन्

**वाक्यार्थ—** जब मान्छले सारा प्राणीहरूमा र पदार्थहरूमा नराम्रो भाव गर्दैन (सबैलाई राम्रो मान्दछ) त्यस बखतमा नै त्यस समदर्शी व्यक्तिका लागि सबै दिशाहरू सुखमय बन्दछन्।

**या दुस्त्यजा दुर्मतिभिर्जीर्यतो या न जीर्यते।**
**तां तृष्णां दुःखनिवहां शर्मकामो द्रुतं त्यजेत्॥ १६ ॥**

**पदार्थ—**
**या** = जो तृष्णा
**दुर्मतिभिः** = अविवेकीहरूद्वारा
**दुस्त्यजा** = त्याग्न नसकिने हुन्छ
**जीर्यतः** = शरीरले बुढो भएकाको पनि
**या** = जो तृष्णा
**न जीर्यते** = बुढो भएको हुँदैन (त्यसैले)
**शर्मकामः** = आफ्नो कल्याण चाहने व्यक्तिले
**दुःखनिवहां** = दुःखै-दुःखको घर भएको
**तां** = त्यो
**तृष्णां** = तृष्णालाई
**द्रुतं** = चाँडै
**त्यजेत्** = त्यागोस्

**वाक्यार्थ—** तृष्णा अविवेकी मनुष्यद्वारा त्याग्न नसकिने किसिमको हुन्छ। मानिस बुढो हुन्छ तर उसको तृष्णा बुढो हुँदैन। त्यसैले आफ्नो कल्याण चाहने व्यक्तिले दुःखै-दुःखको घर भएको त्यस तृष्णालाई चाँडै त्याग्नुपर्दछ।

**मात्रा स्वस्रा दुहित्रा वा नाविविक्तासनो भवेत्।**
**बलवानिन्द्रियग्रामो विद्वांसमपि कर्षति ॥ १७ ॥**

**पदार्थ—**
**मात्रा** = आमासँग
**स्वस्रा** = बहिनी आदिसँग
**दुहित्रा वा** = छोरीहरूसँग पनि
**अविविक्तासनः न भवेत्** = एकै आसनमा नबसोस् (किनभने)

**बलवान्** = अत्यन्त बलियो
**इन्द्रियग्रामः** = इन्द्रियको समूहले
**विद्वांसम्** = विद्वान्लाई
**अपि** = पनि
**कर्षति** = तान्दछ

**वाक्यार्थ–** आफ्नै आमा, दिदी-बहिनी र छोरीहरूसँग पनि एउटै आसनमा कहिल्यै नबस्नू, (अरू सँगको त के कुरो) किनभने इन्द्रियको समूह अत्यन्त बलियो हुन्छ, जसले थाहै नपाई विद्वान्लाई पनि तान्दछ।

**पूर्णं वर्षसहस्रं मे विषयान् सेवतोऽसकृत्।**
**तथापि चानुसवनं तृष्णा तेषूपजायते ॥ १८ ॥**

**पदार्थ–**
**असकृत्** = बारम्बार
**विषयान्** = विषयहरू
**सेवतः** = भोग गर्ने
**मे** = मेरो
**पूर्णं** = पूरा
**वर्षसहस्रं** = हजार वर्ष बित्यो
**तथा अपि च** = तैपनि
**अनुसवनं** = क्षणक्षणमा
**तेषु** = ती भोगिएका विषयहरूमा
**तृष्णा** = लालसा मात्रै
**उपजायते** = बढ्छ (तृष्णा शान्त हुँदैन)

**वाक्यार्थ–** बारम्बार विषयको भोग गर्दागर्दै मेरो हजार वर्ष बित्यो तैपनि ती भोगहरूमा लालसा मात्र बढिरहन्छ। (तृष्णा शान्त हुँदैन।)

**तस्मादेतामहं त्यक्त्वा ब्रह्मण्याधाय मानसम्।**
**निर्द्वन्द्वो निरहङ्कारश्चरिष्यामि मृगैः सह ॥ १९ ॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**निर्द्वन्द्वः** = द्वन्द्व (सुखदुःख आदि भाव)रहित
**निरहङ्कारः** = अहङ्काररहित
**अहं** = म
**एतां** = यी वासनालाई
**त्यक्त्वा** = त्याग गरी
**मानसम्** = चित्तलाई
**ब्रह्मणि** = ब्रह्ममा
**आधाय** = स्थिर गरेर
**मृगैः सह** = मृगहरूसँग (वनमा)
**चरिष्यामि** = घुम्नेछु

**वाक्यार्थ–** त्यसैले हे प्रिया ! निर्द्वन्द्व र अहङ्काररहित भएर म आफ्नो चित्तलाई परब्रह्ममा स्थिर गराएर मृगहरूसँगै वनमा घुम्नेछु।

**विवरण–** माथिका श्लोकहरूमा ययातिले अब आफूले तृष्णाको यो अनन्त यात्रालाई छाडिदिने निश्चय व्यक्त गरेका छन्। विषयभोगद्वारा तृष्णा कहिल्यै पनि जीर्ण या शान्त हुँदैन। जति-जति यसलाई शान्त गर्ने प्रयासमा व्यक्ति लाग्छ, त्यति-त्यति यो चाहिँ जीर्ण हुँदैन, व्यक्ति मात्र जीर्ण हुन्छ। ययाति भन्छन्– मैले हजार वर्षसम्म अखण्डरूपले विषयभोग गरेर यो तृष्णालाई शान्त गर्ने प्रयास गरैं, तर यो त झन् छिन-छिनै बढिरहेको छ। त्यसकारण म यसलाई छाडिदिन्छु। बाहिरी विषयहरूको तृष्णालाई नष्ट गर्ने उपाय भनेको आफ्नो स्वरूपमा मन लगाउनु नै हो। राग-द्वेषले रहित हुँदा नै तृष्णालाई जित्न सकिन्छ। संसारका पदार्थहरूलाई धेरै देख्नाले पनि तृष्णा बारम्बार

बढिरहेको हुन्छ, त्यसैले यहाँ तृष्णा छाड्न मृगहरूसँग वनमा घुम्छु भनेर ययाति भन्दछन्।

**दृष्टं श्रुतमसद् बुद्ध्वा नानुध्यायेन्न संविशेत्।**
**संसृतिं चात्मनाशं च तत्र विद्वान् स आत्मदृक्॥ २०॥**

**पदार्थ–**
**दृष्टं** = देखेका र
**श्रुतं च** = सुनेकालाई पनि
**असत्** = अनित्य
**बुद्ध्वा** = बुझेर
**न अनुध्यायेत्** = (तिनको) बारम्बार चिन्तन पनि नगर्नू र
**न संविशेत्** = आसक्त पनि नहुनू
**तत्र** = ती विषयहरूमा
**संसृतिं** = जन्ममृत्युयुक्त संसार र
**आत्मनाशं च** = आत्मस्वरूपको विनाश (गर्ने वस्तु छ भन्ने)
**विद्वान्** = बुझ्ने
**सः** = त्यो व्यक्ति
**आत्मदृक्** = आत्मज्ञानी हो

**वाक्यार्थ–** देखेका र सुनेका कुराहरू अनित्य हुन् भन्ने बुझेर ती वस्तुको चिन्तन पनि नगर्नू र ती वस्तुमा आसक्त पनि नहुनू। विषयहरूमा जन्ममृत्युयुक्त संसार र आत्मस्वरूपको विनाश गर्ने वस्तु छ भन्ने कुरा बुझ्ने व्यक्ति नै आत्मज्ञानी हो।

**इत्युक्त्वा नाहुषो जायां तदीयं पूरवे वयः।**
**दत्त्वा स्वां जरसं तस्मादाददे विगतस्पृहः॥ २१॥**

**पदार्थ–**
**विगतस्पृहः** = विषयबाट विरक्त भएका
**नाहुषः** = नहुषपुत्र ययातिले
**जायां** = आफ्नी पत्नी देवयानीलाई
**इति उक्त्वा** = यसो भनेर
**पूरवे** = छोरा पूरुलाई
**तदीयं** = उसैको
**वयः** = जवानी
**दत्त्वा** = दिएर
**तस्मात्** = ती पूरुबाट
**स्वां** = आफ्नो
**जरसं** = वृद्धावस्थालाई
**आददे** = लिए

**वाक्यार्थ–** त्यसपछि विषयबाट विरक्त भएका राजा ययातिले आफ्नी पत्नी देवयानीलाई यसरी सम्झाई छोरा पूरुलाई उनको जवानी फिर्ता दिए र आफ्नो वृद्धावस्था लिए।

**दिशि दक्षिणपूर्वस्यां द्रुह्युं दक्षिणतो यदुम्।**
**प्रतीच्यां तुर्वसुं चक्र उदीच्यामनुमीश्वरम्॥ २२॥**

**पदार्थ–**
**दक्षिणपूर्वस्यां** = दक्षिणपूर्व (आग्नेय)को
**दिशि** = दिशामा
**द्रुह्युं** = द्रुह्युलाई
**दक्षिणतः** = दक्षिणपट्टि
**यदुम्** = यदुलाई
**प्रतीच्यां** = पश्चिममा
**तुर्वसुं** = तुर्वसुलाई र
**उदीच्यां** = उत्तरमा
**अनुं** = अनुलाई
**ईश्वरम्** = अधिपति
**चक्रे** = बनाए

**वाक्यार्थ–** ययातिले दक्षिणपूर्व (आग्नेय) दिशामा द्रुह्युलाई, दक्षिणमा यदुलाई, पश्चिममा तुर्वसुलाई र उत्तरमा अनुलाई अधिपतिको रूपमा स्थापित गरे।

**पदार्थ–**
**पुरुजिद्रुक्मरुक्मेषुपृथुज्यामघ-संज्ञिताः** = पुरुजित्, रुक्म, रुक्मेषु, पृथु र ज्यामघ नामका छोरा (रुचकका हुन् तिनमा)
**शैब्यापतिः** = शैब्याका पति
**ज्यामघः तु** = ज्यामघ चाहिँ
**अप्रजः अपि** = सन्तानरहित भए पनि
**भयात्** = (पत्नीको) डरले
**अन्यां भार्यां** = अर्की पत्नी
**न अविन्दत्** = ल्याएनन् (कुनै समयमा)
**शत्रुभवनात्** = (शत्रुलाई जितेर) शत्रुको घरबाट
**भोज्यां कन्यां** = भोज्या नामकी कन्या
**अहारषीत्** = हरण गरेर लिएर आए
**रथस्थां** = रथमा रहेकी
**तां** = ती कन्यालाई
**निरीक्ष्य** = देखेर
**अमर्षिता** = रिसाएकी
**शैब्या** = शैब्याले
**पतिम्** = पतिलाई
**आह** = भनिन्

**वाक्यार्थ–** रुचकका छोराहरू पुरुजित्, रुक्म, रुक्मेषु, पृथु र ज्यामघ नामका थिए। तीमध्ये ज्यामघका सन्तान थिएनन्, तैपनि उनले पत्नीको डरले अर्को विवाह गरेका थिएनन्। एकपटक शत्रुलाई जितेर उसको घरबाट भोज्या नामकी कन्यालाई रथमा राखेर उनले ल्याइरहेका थिए। त्यो देखेर शैब्याले रिसाउँदै पतिलाई भनिन्।

**केयं कुहक मत्स्थानं रथमारोपितेति वै।**
**स्नुषा तवेत्यभिहिते स्मयन्ती पतिमब्रवीत्॥ ३७॥**

**पदार्थ–**
**कुहक** = हे कुटिल
**मत्स्थानं** = मेरो ठाउँमा
**रथं** = रथमा
**आरोपिता** = राखिएकी
**इयं** = यो
**का इति** = को हो भनेर
**वै** = निश्चयपूर्वक (सोधिन् त्यसपछि पतिले डरले)
**तव** = तिम्री
**स्नुषा इति** = बुहारी हुन् भनेर
**अभिहिते** = भनेपछि
**स्मयन्ती** = हाँस्दै (शैब्याले)
**पतिम्** = पतिलाई
**अब्रवीत्** = भनिन्

**वाक्यार्थ–** 'हे कुटिल ! मेरो ठाउँमा रथमा राखेर ल्याइएकी यो को हो ?' ज्यामघले डराउँदै उत्तर दिए– 'यी तिम्री बुहारी हुन्।' यसपछि हाँस्दै शैब्याले पतिलाई भनिन्।

**अहं बन्ध्यासपत्नी च स्नुषा मे युज्यते कथम्।**
**जनयिष्यसि यं राज्ञि तस्येयमुपयुज्यते॥ ३८॥**

**पदार्थ–**
**अहं** = म
**बन्ध्या** = सन्तानरहित छु
**असपत्नी च** = सौतारहित पनि छु (फेरि)
**मे** = मेरो
**स्नुषा** = यो बुहारी हुन
**कथं युज्यते** = कसरी सक्छे र
**राज्ञि** = हे रानी
**यं** = जो पुत्र
**जनयिष्यसि** = तिमीले जन्माउनेछौ
**तस्य** = उसैको लागि
**इयं** = यिनी
**उपयुज्यते** = उपयुक्त हुनेछिन्

**वाक्यार्थ–** 'म बाँझी छु र मेरा सौता पनि छैनन्। यिनी मेरी बुहारी कसरी भइन् ?' त्यसपछि

पतिले भने– 'हे रानी ! तिमीले जसलाई जन्माउनेछौ, उसैको लागि यिनी उपयुक्त हुनेछिन्।'

**अन्वमोदन्त तद् विश्वेदेवाः पितर एव च।**
**शैब्या गर्भमधात् काले कुमारं सुषुवे शुभम्।**
**स विदर्भ इति प्रोक्त उपयेमे स्नुषां सतीम्॥ ३९॥**

**पदार्थ–**
**तत्** = (ज्यामघको) त्यस्तो भनाइलाई
**विश्वेदेवाः** = विश्वेदेवहरूले र
**पितरः एव च** = पितृहरूले पनि
**अन्वमोदन्तः** = अनुमोदन गरे (त्यसैले)
**शैब्या** = शैब्याले
**गर्भम्** = गर्भ
**अधात्** = धारण गरिन् र
**काले** = समय आएपछि
**शुभं** = सुन्दर
**कुमारं** = कुमारलाई
**सुषुवे** = जन्माइन्
**सः** = ती कुमार
**विदर्भः इति** = विदर्भ नामले
**प्रोक्तः** = चिनिए (र पछि)
**सतीम्** = साध्वी
**स्नुषां** = शैब्याकी पुत्रवधू (भनेर राखिएकी) भोज्यालाई
**उपयेमे** = विवाह गरे

**वाक्यार्थ–** ज्यामघको यस्तो भनाइलाई उनका विश्वेदेव र पितृहरूले पनि अनुमोदन गरे र शैब्याले गर्भ धारण गरिन् अनि समय आएपछि सुन्दर कुमार जन्माइन्। तिनै कुमार विदर्भ नामले चिनिए र पछि उनले सती भोज्यालाई विवाह गरे।

**इति श्रीमद्‌भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे**
**यदुवंशानुवर्णने त्रयोविंशोऽध्यायः॥ २३॥**

# अथ चतुर्विंशोऽध्यायः

## राजा विदर्भको वंशवर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तस्यां विदर्भोऽजनयत् पुत्रौ नाम्ना कुशक्रथौ।**

**तृतीयं रोमपादं च विदर्भकुलनन्दनम्॥ १॥**

**पदार्थ–**
**तस्यां** = ती भोज्या नामकी भार्यामा
**विदर्भः** = विदर्भले
**नाम्ना** = नामले
**कुशक्रथौ** = कुश र क्रथ भएका
**पुत्रौ** = दुई छोरा र
**तृतीयं** = तेस्रा
**विदर्भकुलनन्दनम्** = विदर्भकुललाई खुसी दिने
**रोमपादं च** = रोमपादलाई पनि
**अजनयत्** = जन्माए

**वाक्यार्थ–** विदर्भले पत्नी भोज्याबाट कुश, क्रथ र रोमपाद नामका तीन पुत्र जन्माए। तिनमा रोमपाद विदर्भकुलका सुखप्रदायक थिए।

**रोमपादसुतो बभ्रुर्बभ्रोः कृतिरजायत।**

**उशिकस्तत्सुतस्तस्माच्चेदिश्चैद्यादयो नृप॥ २॥**

**पदार्थ–**
**रोमपादसुतः** = रोमपादका छोरा
**बभ्रुः** = बभ्रु भए
**बभ्रोः** = बभ्रुबाट
**कृतिः** = कृति
**अजायत** = जन्मिए
**तत्सुतः** = ती कृतिका छोरा
**उशिकः** = उशिक भए
**तस्मात्** = ती उशिकबाट
**चेदिः** = चेदि जन्मिए
**नृप** = हे राजा
**चैद्यादयः** = (चेदिकै वंशमा) दमघोष, शिशुपाल आदि राजाहरू भए

**वाक्यार्थ–** रोमपादबाट बभ्रु, बभ्रुबाट कृति, कृतिबाट उशिक र उशिकबाट चेदि जन्मिए। हे परीक्षित् ! चेदिको वंशमा दमघोष, शिशुपाल आदि जन्मिए।

**क्रथस्य कुन्तिः पुत्रोऽभूद् धृष्टिस्तस्याथ निर्वृतिः।**

**ततो दशार्हो नाम्नाभूत् तस्य व्योमः सुतस्ततः॥ ३॥**

**पदार्थ–**
**क्रथस्य** = क्रथका
**पुत्रः** = छोरा
**कुन्तिः** = कुन्ति
**अभूत्** = भए
**तस्य** = ती कुन्तिका
**धृष्टिः** = धृष्टि
**अथ** = यसपछि (धृष्टिका पनि)
**निर्वृतिः** = निर्वृति
**ततः** = ती निर्वृतिबाट
**नाम्ना दशार्हः** = दशार्ह नाम भएका छोरा
**अभूत्** = भए र
**ततः** = त्यसपछि
**तस्य** = ती दशार्हका

| | |
|---|---|
| **व्योमः** = व्योम नामका | **सुतः** = छोरा भए |

**वाक्यार्थ–** क्रथबाट कुन्ति, कुन्तिबाट धृष्टि, धृष्टिबाट निर्वृति, निर्वृतिबाट दशार्ह र दशार्हबाट व्योम जन्मिए।

**जीमूतो विकृतिस्तस्य यस्य भीमरथः सुतः।**
**ततो नवरथः पुत्रो जातो दशरथस्ततः॥ ४॥**

| पदार्थ– | | |
|---|---|---|
| **जीमूतः** = (व्योमका छोरा) जीमूत | **यस्य** = जो विकृतिका | **ततः** = ती नवरथबाट |
| **तस्य** = ती जीमूतका | **भीमरथः** = भीमरथ नामका | **दशरथः** = दशरथ |
| **विकृतिः** = विकृति भए | **सुतः** = छोरा भए | **पुत्रः** = छोरा |
| | **ततः** = ती भीमरथबाट | **जातः** = जन्मिए |
| | **नवरथः** = नवरथ भए | |

**वाक्यार्थ–** व्योमबाट जीमूत, जीमूतबाट विकृति, विकृतिबाट भीमरथ, भीमरथबाट नवरथ र नवरथबाट दशरथ जन्मिए।

**करम्भिः शकुनेः पुत्रो देवरातस्तदात्मजः।**
**देवक्षत्रस्ततस्तस्य मधुः कुरुवशादनुः॥ ५॥**

| पदार्थ– | | |
|---|---|---|
| **शकुनेः पुत्रः** = (दशरथका पुत्र) शकुनिका छोरा | **तदात्मजः** = ती करम्भिका छोरा | **तस्य** = ती देवक्षत्रको |
| **करम्भिः** = करम्भि भए | **देवरातः** = देवरात भए | **मधुः** = मधु (मधुको कुरुवश र) |
| | **ततः** = ती देवरातबाट | **कुरुवशात्** = कुरुवशबाट |
| | **देवक्षत्रः** = देवक्षत्र भए | **अनुः** = अनुको जन्म भयो |

**वाक्यार्थ–** दशरथबाट शकुनि, शकुनिबाट करम्भि, करम्भिबाट देवरात, देवरातबाट देवक्षत्र, देवक्षत्रबाट मधु, मधुबाट कुरुवश र कुरुवशबाट अनु जन्मिए।

**पुरुहोत्रस्त्वनोः पुत्रस्तस्यायुः सात्वतस्ततः।**
**भजमानो भजिर्दिव्यो वृष्णिर्देवावृधोऽन्धकः॥ ६॥**
**सात्वतस्य सुताः सप्त महाभोजश्च मारिष।**
**भजमानस्य निम्लोचिः किङ्कणो धृष्टिरेव च॥ ७॥**
**एकस्यामात्मजाः पत्न्यामन्यस्यां च त्रयः सुताः।**
**शताजिच्च सहस्राजिदयुताजिदिति प्रभो॥ ८॥**

| पदार्थ– | | |
|---|---|---|
| | **अनोः** = अनुबाट | **पुरुहोत्रः** = पुरुहोत्र |

**तस्य पुत्रः तु** = ती पुरुहोत्रका छोरा चाहिँ
**आयुः** = आयु भए
**ततः** = ती आयुबाट
**सात्वतः** = सात्वत भए
**मारिष** = हे आर्य !
**सात्वतस्य** = सात्वतका
**भजमानः** = भजमान
**भजिः** = भजि
**दिव्यः** = दिव्य
**वृष्णिः** = वृष्णि
**देवावृधः** = देवावृध
**अन्धकः** = अन्धक र
**महाभोजः च** = महाभोज पनि
**सप्त सुताः** = सात छोरा भए
**भजमानस्य** = भजमानका
**आत्मजाः** = छोराहरू चाहिँ
**एकस्यां पत्न्यां** = एउटी पत्नीमा
**निम्लोचिः** = निम्लोचि
**किङ्कणः** = किङ्कण र
**धृष्टिः एव च** = धृष्टि गरी तीन छोरा भए
**प्रभो** = हे राजा
**अन्यस्यां च** = फेरि अर्की पत्नीमा
**शताजित्** = शताजित्
**सहस्राजित्** = सहस्राजित् र
**अयुताजित् च इति** = अयुताजित् नामका पनि
**त्रयः सुताः** = तीन छोरा (गरी जम्मा छ छोराहरू भए)

**वाक्यार्थ–** अनुबाट पुरुहोत्र, पुरुहोत्रबाट आयु र आयुबाट सात्वत भए। सात्वतका भजमान, भजि, दिव्य, वृष्णि, देवावृध, अन्धक र महाभोज नामका सात छोरा भए। तीमध्ये भजमानबाट एउटी पत्नीमा निम्लोचि, किङ्कण र धृष्टि नामका तीन छोरा र अर्की पत्नीमा शताजित्, सहस्राजित् र अयुताजित् नामका तीन छोरा गरी जम्मा छ छोरा भए।

**बभ्रुर्देवावृधसुतस्तयोः श्लोकौ पठन्त्यमू।**
**यथैव शृणुमो दूरात् सम्पश्यामस्तथान्तिकात्॥ ९॥**
**बभ्रुः श्रेष्ठो मनुष्याणां देवैर्देवावृधः समः।**
**पुरुषाः पञ्चषष्टिश्च षट्सहस्राणि चाष्ट च॥ १०॥**
**येऽमृतत्वमनुप्राप्ता बभ्रोर्देवावृधादपि।**
**महाभोजोऽपि धर्मात्मा भोजा आसंस्तदन्वये॥ ११॥**

**पदार्थ–**
**देवावृधसुतः** = देवावृधका छोरा
**बभ्रुः** = बभ्रु थिए
**तयोः** = ती देवावृध र बभ्रुका विषयमा
**अमू** = यी दुई
**श्लोकौ** = श्लोक
**पठन्ति** = पढ्छन् (भन्दछन्)
**यथा एव** = जसरी
**दूरात्** = टाढाबाट
**शृणुमः** = सुन्थ्यौँ
**तथा** = त्यसै गरी
**अन्तिकात्** = नजिकबाट
**सम्पश्यामः** = देख्दैछौँ
**बभ्रुः** = बभ्रु
**मनुष्याणां** = मनुष्यहरूमा
**श्रेष्ठः** = श्रेष्ठ छन्
**देवावृधः** = देवावृध
**देवैः समः** = देवतातुल्य छन्
**बभ्रोः** = बभ्रुबाट र
**देवावृधात् अपि** = देवावृधबाट पनि (उपदेश पाएर)
**ये** = जो
**षट् अष्ट च सहस्राणि** = चौध हजार र
**पञ्चषष्टिः च** = पैँसठ्ठी
**पुरुषाः** = मानिसहरूले

**अमृतत्वं** = मुक्तिरूप अमृतपदलाई
**अनुप्राप्ताः** = प्राप्त गरे
**महाभोजः अपि** = महाभोज पनि
**धर्मात्मा** = धर्मात्मा थिए
**तदन्वये** = ती महाभोजको वंशमा
**भोजाः** = भोजवंशी यादवहरू
**आसन्** = भए

**वाक्यार्थ–** देवावृधका छोरा बभ्रु थिए, यी दुबैको विषयमा दुई ओटा श्लोक भन्ने गर्दछन्– 'जसरी टाढाबाट यिनीहरूको विषयमा सुन्थ्यौं, त्यसै गरी नजिकैबाट देख्दै पनि छौं, बभ्रु मनुष्यहरूमा श्रेष्ठ छन् र देवावृध देवतासमान छन्। बभ्रु र देवावृधको उपदेशबाट चौध हजार पैंसट्ठी जना मानिसहरूले मुक्तिरूप अमृतपदलाई प्राप्त गरे।' सात्वतका पुत्रमध्ये महाभोज पनि धर्मात्मा थिए, उनैको वंशमा भोजवंशी यादवहरू भए।

**वृष्णेः सुमित्रः पुत्रोऽभूद् युधाजिच्च परन्तप।**
**शिनिस्तस्यानमित्रश्च निम्नोऽभूदनमित्रतः॥ १२॥**

**पदार्थ–**
**परन्तप** = हे परमतपस्वी परीक्षित्
**वृष्णेः** = वृष्णिबाट
**सुमित्रः** = सुमित्र र
**युधाजित् च** = युधाजित् पनि
**पुत्रः** = छोरा
**अभूत्** = भए
**तस्य** = ती युधाजित्का
**शिनिः** = शिनि र
**अनमित्रः च** = अनमित्र दुई छोरा भए
**अनमित्रतः** = अनमित्रबाट
**निम्नः** = निम्न
**अभूत्** = भए

**वाक्यार्थ–** हे राजन् ! वृष्णिका सुमित्र र युधाजित् नामका दुई छोरा भए। फेरि युधाजित्का पनि शिनि र अनमित्र दुई छोरा भए। अनमित्रबाट निम्न नामका छोरा भए।

**सत्राजितः प्रसेनश्च निम्नस्याप्यासतुः सुतौ।**
**अनमित्रसुतो योऽन्यः शिनिस्तस्याथ सत्यकः॥ १३॥**

**पदार्थ–**
**निम्नस्य अपि** = निम्नका पनि
**सत्राजितः** = सत्राजित र
**प्रसेनः च** = प्रसेन
**सुतौ** = दुई छोरा
**आसतुः** = थिए
**यः** = जो
**अन्यः** = अर्को
**शिनिः** = शिनि नामका छोरा थिए ती
**अनमित्रसुतः** = अनमित्रका छोरा थिए
**तस्य** = तिनै शिनिका नै
**सत्यकः** = सत्यक छोरा भए

**वाक्यार्थ–** निम्नका पनि शताजित् र प्रसेन छोरा थिए। त्यसपछि अर्को शिनि अनमित्रका पुत्र थिए। तिनै अनमित्रबाट सत्यकको जन्म भएको थियो।

**युयुधानः सात्यकिर्वै जयस्तस्य कुणिस्ततः।**
**युगन्धरोऽनमित्रस्य वृष्णिः पुत्रोऽपरस्ततः॥ १४॥**

**श्वफल्कश्चित्ररथश्च गान्दिन्यां च श्वफल्कतः।**
**अक्रूरप्रमुखा आसन् पुत्रा द्वादश विश्रुताः॥ १५॥**
**आसङ्गः सारमेयश्च मृदुरो मृदुविद् गिरिः।**
**धर्मवृद्धः सुकर्मा च क्षेत्रोपेक्षोऽरिमर्दनः॥ १६॥**
**शत्रुघ्नो गन्धमादश्च प्रतिबाहुश्च द्वादश।**
**तेषां स्वसा सुचीराख्या द्वावक्रूरसुतावपि॥ १७॥**
**देववानुपदेवश्च तथा चित्ररथात्मजाः।**
**पृथुर्विदूरथाद्याश्च बहवो वृष्णिनन्दनाः॥ १८॥**

**पदार्थ–**
**युयुधानः** = (सत्यकका छोरा) ययुधान जो
**वै** = निश्चय नै
**सात्यकिः** = सात्यकि नामले प्रसिद्ध भए
**तस्य** = ती सात्यकिका
**जयः** = जय (पुत्र भए)
**ततः** = ती जयबाट
**कुणिः** = कुणि भए (कुणिपछि)
**युगन्धरः** = युगन्धर
**अनमित्रस्य** = अनमित्रका
**अपरः पुत्रः** = अर्का छोरा
**वृष्णिः** = वृष्णि
**ततः** = ती वष्णिबाट
**श्वफल्कः** = श्वफल्क र
**चित्ररथः च** = चित्ररथ पनि
**श्वफल्कतः** = श्वफल्कबाट
**गान्दिन्यां** = गान्दिनीमा
**विश्रुताः** = प्रसिद्ध
**अक्रूरप्रमुखाः** = अक्रूर आदि अरू
**द्वादश पुत्राः** = बाह्र छोरा
**आसन्** = भए (जेठा अक्रूर अरू)
**आसङ्गः** = आसङ्ग
**सारमेयः**= सारमेय
**मृदुरः** = मृदुर
**मृदुवित्** = मृदुवित्
**गिरिः** = गिरि
**धर्मवृद्धः** = धर्मवृद्ध
**सुकर्मा** = सुकर्मा
**क्षेत्रोपेक्षः** = क्षेत्रोपेक्ष
**अरिमर्दनः च** = अरिमर्दन
**शत्रुघ्नः च** = शत्रुघ्न
**गन्धमादः च** = गन्धमाद र
**प्रतिबाहुः च** = प्रतिबाहु पनि गरी
**द्वादश** = बाह्र जना थिए
**तेषां** = तिनीहरूकी
**स्वसा** = बहिनी
**सुचीराख्या** = सुचीरा नामकी थिइन्
**अक्रूरसुतौ अपि** = अक्रूरका छोराहरू पनि
**देववान्** = देववान् र
**उपदेवः च** = उपदेव पनि
**द्वौ** = दुई जना थिए
**तथा** = त्यसै गरी
**चित्ररथात्मजाः** = चित्ररथका छोराहरू
**पृथुः** = पृथु र
**विदूरथाद्याः च** = विदूरथ आदि पनि
**बहवः** = धेरै भए जो
**वृष्णिनन्दनाः** = वृष्णि वंशका सन्तानहरू थिए

**वाक्यार्थ–** सत्यकबाट युयुधान जन्मिए जसलाई सात्यकि पनि भन्छन्। सात्यकिबाट जय, जयबाट कुणि र कुणिबाट युगन्धर जन्मिए। अनमित्रका अर्का छोरा वृष्णिबाट श्वफल्क र

चित्ररथ जन्मिए। श्वफल्कबाट गान्दिनी नामकी पत्नीमा अक्रूरबाहेक प्रसिद्ध बाह्र भाइ छोरा (अक्रूरसहित तेह्र) भए। तिनीहरू अक्रूर, आसङ्ग, सारमेय, मृदुर, मृदुवित्, गिरि, धर्मवृद्ध, सुकर्मा, क्षेत्रोपेक्ष, अरिमर्दन, शत्रुघ्न, गन्धमाद र प्रतिबाहु थिए। तिनीहरूकी सुचीरा नामकी एउटी बहिनी पनि थिइन्। अक्रूरका देववान् र उपदेव गरी दुई छोरा भए। त्यसै गरी चित्ररथका पृथु, विदूरथ आदि धेरै छोराहरू भए जो वृष्णिवंशजहरू थिए।

**कुकुरो भजमानश्च शुचिः कम्बलबर्हिषः।**
**कुकुरस्य सुतो वह्निर्विलोमा तनयस्ततः॥ १९॥**
**कपोतरोमा तस्यानुः सखा यस्य च तुम्बुरुः।**
**अन्धको दुन्दुभिस्तस्मादरिद्योतः पुनर्वसुः॥ २०॥**
**तस्याहुकश्चाहुकी च कन्या चैवाहुकात्मजौ।**
**देवकश्चोग्रसेनश्च चत्वारो देवकात्मजाः॥ २१॥**

**पदार्थ—**
**कुकुरः** = (सात्वतपुत्र अन्धकबाट) कुकुर
**भजमानः** = भजमान
**शुचिः** = शुचि र
**कम्बलबर्हिषः च** = कम्बलबर्हिष चार छोरा भए
**कुकुरस्य** = कुकुरका
**सुतः** = छोरा
**वह्निः** = वह्नि भए
**ततः** = ती वह्निबाट
**तनयः** = छोरा
**विलोमा** = विलोमा भए (विलोमाबाट)
**कपोतरोमा** = कपोतरोमा भए
**तस्य** = ती कपोतरोमाका
**अनुः** = अनु भए
**यस्य च** = जुन अनुका
**सखा** = साथी
**तुम्बुरुः** = गन्धर्वराज तुम्बुरु थिए (अनुबाट)
**अन्धकः** = अन्धक
**तस्मात्** = ती अन्धकबाट
**दुन्दुभिः** = दुन्दुभि (दुन्दुभिबाट)
**अरिद्योतः** = अरिद्योत (तिनबाट)
**पुनर्वसुः** = पुनर्वसु
**तस्य** = ती पुनर्वसुका
**आहुकः च** = आहुक र
**कन्या** = छोरी
**आहुकी च** = आहुकी पनि भइन्
**देवकः च** = देवक र
**उग्रसेनः च** = उग्रसेन
**आहुकात्मजौ** = आहुकका छोरा थिए
**देवकात्मजाः** = देवकका छोराहरू
**चत्वारः** = चार जना थिए

**वाक्यार्थ—** सात्वतपुत्र अन्धकबाट कुकुर, भजमान, शुचि र कम्बलबर्हि नामका चार छोरा भए। कुकुरबाट वह्नि, वह्निबाट विलोमा, विलोमाबाट कपोतरोमा र कपोतरोमाबाट अनु जन्मिए। अनु गन्धर्वराज तुम्बुरुका मित्र थिए। अनुबाट अन्धक, अन्धकबाट दुन्दुभि, दुन्दुभिबाट अरिद्योत, अरिद्योतबाट पुनर्वसु जन्मिए र पुनर्वसुबाट आहुक नामका छोरा र आहुकी नामकी छोरी भइन्। आहुकबाट दुई छोरा देवक र उग्रसेन भए। देवकका चार छोरा भए।

**देववानुपदेवश्च सुदेवो देववर्धनः।**
**तेषां स्वसारः सप्तासन् धृतदेवादयो नृप ॥ २२ ॥**
**शान्तिदेवोपदेवा च श्रीदेवा देवरक्षिता।**
**सहदेवा देवकी च वसुदेव उवाह ताः ॥ २३ ॥**

**पदार्थ–**
**देववान्** = देववान्
**उपदेवः** = उपदेव
**सुदेवः** = सुदेव र
**देववर्धनः च** = देववर्धन नामका चार छोरा (देवकका हुन्)
**नृप** = हे राजा
**तेषां** = तिनीहरूका
**स्वसारः** = बहिनीहरू पनि
**धृतदेवादयः** = धृतदेवा आदि
**सप्त** = सात ओटी
**आसन्** = थिए (धृतदेवापछिका)
**शान्तिदेवा** = शान्तिदेवा
**उपदेवा** = उपदेवा
**श्रीदेवा** = श्रीदेवा
**देवरक्षिता** = देवरक्षिता
**सहदेवा च** = सहदेवा र
**देवकी च** = देवकी पनि थिइन्
**ताः** = ती सबैलाई
**वसुदेवः** = वसुदेवले
**उवाह** = विवाह गरे

**वाक्यार्थ–** देवकका देववान्, उपदेव, सुदेव र देववर्धन गरी चार भाइ छोरा भए। उनीहरूका बहिनी पनि सात ओटी थिए। जो धृतदेवा, शान्तिदेवा, उपदेवा, श्रीदेवा, देवरक्षिता, सहदेवा र देवकी हुन्। ती सबैलाई वसुदेवले विवाह गरे।

**कंसः सुनामा न्यग्रोधः कङ्कः शङ्कुः सुहूस्तथा।**
**राष्ट्रपालोऽथ सृष्टिश्च तुष्टिमानौग्रसेनयः ॥ २४ ॥**

**पदार्थ–**
**औग्रसेनयः** = (आहुकका छोरा) उग्रसेनका
**कंसः** = कंस
**सुनामा** = सुनामा
**न्यग्रोधः** = न्यग्रोध
**कङ्कः** = कङ्क
**शङ्कुः** = शङ्कु
**सुहूः** = सुहू
**तथा** = त्यस्तै
**राष्ट्रपालः** = राष्ट्रपाल
**अथ** = त्यसपछि
**सृष्टिः** = सृष्टि र
**तुष्टिमान् च** = तुष्टिमान् समेत गरेर जम्मा नौ छोरा भए

**वाक्यार्थ–** उग्रसेनका कंश, सुनामा, न्यग्रोध, कङ्क, शङ्कु, सुहू, राष्ट्रपाल, सृष्टि र तुष्टिमान् गरी जम्मा नौ जना छोरा भए।

**कंसा कंसवती कङ्का शूरभू राष्ट्रपालिका।**
**उग्रसेनदुहितरो वसुदेवानुजस्त्रियः ॥ २५ ॥**

**पदार्थ–**
**उग्रसेनदुहितरः** = उग्रसेनका छोरीहरू पनि
**कंसा** = कंसा
**कंसवती** = कंसवती
**कङ्का** = कङ्का
**शूरभू** = शूरभू र
**राष्ट्रपालिका** = राष्ट्रपालिका
**वसुदेवानुजस्त्रियः** = वसुदेवका

भाइका पत्नीहरू हुन्

**वाक्यार्थ–** उग्रसेनका कंसा, कंसवती, कङ्का, शूरभू र राष्ट्रपालिका नामका छोरीहरू वसुदेवका भाइका पत्नीहरू हुन्।

**शूरो विदूरथादासीद् भजमानसुतस्ततः।**
**शिनिस्तस्मात् स्वयं भोजो हृदिकस्तत्सुतो मतः॥ २६॥**

**पदार्थ–**
**विदूरथात्** = (चित्ररथका पुत्र) विदूरथबाट
**शूरः** = शूर
**आसीत्** = भए
**ततः** = ती शूरबाट
**भजमानः** = भजमान भए
**तत्सुतः** = ती भजमानका छोरा
**शिनिः** = शिनि भए
**तस्मात्** = ती शिनिबाट
**स्वयंभोजः** = स्वयंभोज र
**तत्सुतः** = ती स्वयंभोजका छोरा
**हृदिकः मतः** = हृदिक मानिए

**वाक्यार्थ–** चित्ररथका पुत्र विदूरथबाट शूर, शूरबाट भजमान, भजमानबाट शिनि, शिनिबाट स्वयंभोज र स्वयंभोजबाट हृदिक जन्मिए।

**देवबाहुः शतधनुः कृतवर्मेति तत्सुताः।**
**देवमीढस्य शूरस्य मारिषा नाम पत्न्यभूत्॥ २७॥**

**पदार्थ–**
**तत्सुताः** = ती हृदिकका छोराहरू
**देवबाहुः** = देवबाहु
**शतधनुः** = शतधनु र
**कृतवर्मा इति** = कृतवर्मा नामका तीन जना भए
**देवमीढस्य** = देवमीढका पुत्र
**शूरस्य** = शूरकी
**मारिषा नाम** = मारिषा नामकी
**पत्नी अभूत्** = पत्नी भइन्

**वाक्यार्थ–** देवबाहु, शतधनु र कृतवर्मा नामका हृदीकका तीन छोरा भए। अनि देवमीढपुत्र शूरकी मारिषा नामकी पत्नी भइन्।

**तस्यां स जनयामास दश पुत्रानकल्मषान्।**
**वसुदेवं देवभागं देवश्रवसमानकम्॥ २८॥**
**सृञ्जयं श्यामकं कङ्कं शमीकं वत्सकं वृकम्।**
**देवदुन्दुभयो नेदुरानका यस्य जन्मनि॥ २९॥**
**वसुदेवं हरेः स्थानं वदन्त्यानकदुन्दुभिम्।**
**पृथा च श्रुतदेवा च श्रुतकीर्तिः श्रुतश्रवाः॥ ३०॥**

**राजाधिदेवी चैतेषां भगिन्यः पञ्च कन्यकाः।**
**कुन्तेः सख्युः पिता शूरो ह्यपुत्रस्य पृथामदात्॥ ३१॥**

**पदार्थ–**
**सः** = ती शूरले
**तस्यां** = ती पत्नी (मारिषा)मा
**अकल्मषान्** = पवित्र
**वसुदेवं** = वसुदेव
**देवभागं** = देवभाग
**देवश्रवसं** = देवश्रवा
**आनकं** = आनक
**सृञ्जयं** = सृञ्जय
**श्यामकं** = श्यामक
**कङ्कं** = कङ्क
**शमीकं** = शमीक
**वत्सकं** = वत्सक र
**वृकं** = वृक गरी
**दश पुत्रान्** = दश छोरा
**जनयामास** = जन्माए
**यस्य** = जुन वसुदेवको
**जन्मनि** = जन्मको समयमा
**देवदुन्दुभयः** = आकाशमा देवबाजाहरू र
**आनकाः** = नगराहरू
**नेदुः** = बजेका थिए (त्यसैले)
**हरेः** = भगवान् श्रीहरिको
**स्थानं** = (कृष्ण) अवतार ग्रहण गर्ने पात्र
**वसुदेवं** = वसुदेवलाई
**आनकदुन्दुभिम्** = आनकदुन्दुभि पनि
**वदन्ति** = भन्दछन्
**पृथा** = पृथा
**श्रुतदेवा** = श्रुतदेवा
**श्रुतकीर्तिः च** = श्रुतकीर्ति
**श्रुतश्रवाः च** = श्रुतश्रवा र
**राजाधिदेवी च** = राजाधिदेवी पनि
**एतेषां** = ती वसुदेव आदिका
**पञ्च कन्यकाः** = पाँच कन्याहरू
**भगिन्यः** = बहिनीहरू थिए
**पिता शूरः** = (पृथाका) पिता शूरले
**अपुत्रस्य** = सन्तानरहित
**सख्युः कुन्तेः** = साथी कुन्तिभोजलाई
**हि** = निश्चय नै
**पृथां** = पृथा
**अदात्** = दिए

**वाक्यार्थ–** शूरले पत्नी मारिषामा वसुदेव, देवभाग, देवश्रवा, आनक, सृञ्जय, श्यामक, कङ्क, शमीक, वत्सक र वृक नामका दश पुत्र उत्पन्न गरे। उनीहरू सबै पुण्यात्मा थिए। वसुदेवको जन्म हुँदा आकाशमा आफैं देवबाजा र नगराहरू बजेका थिए, त्यसैले उहाँलाई आनकदुन्दुभि पनि भन्दछन्। भगवान् श्रीहरिले वसुदेवबाट नै कृष्णावतार ग्रहण गर्नुभएको थियो। वसुदेव आदिका पृथा, श्रुतदेवा, श्रुतकीर्ति, श्रुतश्रवा र राजाधिदेवी नामका पाँच ओटी बहिनीहरू पनि थिए। वसुदेवका पिता शूरका कुन्तिभोज नामका मित्रको सन्तान नहुँदा उनले आफ्नी छोरी पृथा तिनै कुन्तिभोजलाई (धर्मपुत्रीको रूपमा) दिए।

**साऽऽप दुर्वाससो विद्यां देवहूतीं प्रतोषितात्।**
**तस्या वीर्यपरीक्षार्थमाजुहाव रविं शुचिम्॥ ३२॥**

**पदार्थ–**
**सा** = ती पृथाले
**प्रतोषितात्** = प्रसन्न भएका
**दुर्वाससः** = दुर्वासाबाट
**देवहूतीं** = इच्छा लागेको देवतालाई बोलाउन सक्ने
**विद्यां** = विद्या
**आप** = प्राप्त गरेकी थिइन्
**तस्याः** = त्यो विद्याको
**वीर्यपरीक्षार्थम्** = प्रभावलाई परीक्षण गर्नको लागि (पृथाले)
**शुचिम्** = पवित्र

**रविं** = सूर्यदेवलाई
**आजुहाव** = आवाहन गरिन्

**वाक्यार्थ–** ती पृथाले प्रसन्न भएका दुर्वासाबाट आफूलाई इच्छा लागेको देवतालाई बोलाउन सक्ने विद्या प्राप्त गरेकी थिइन्। एक दिन त्यस विद्याको प्रभावको परीक्षणका लागि उनले सूर्यदेवलाई आवाहन गरिन्।

**तदैवोपागतं देवं वीक्ष्य विस्मितमानसा।**
**प्रत्ययार्थं प्रयुक्ता मे याहि देव क्षमस्व मे॥ ३३॥**

**पदार्थ–**
**तदा एव** = त्यसै बखतमा
**उपागतं** = उपस्थित भएका
**देवं** = सूर्यदेवलाई
**वीक्ष्य** = देखेर
**विस्मितमानसा** = अति चकित भएकी पृथाले (भनिन्)
**देव** = हे देव
**मे** = मलाई
**क्षमस्व** = क्षमा गर्नुहोस्
**मे** = मैले
**प्रत्ययार्थं** = मन्त्रको परीक्षणको लागि
**प्रयुक्ता** = प्रयोग गरेकी हुँ
**याहि** = हजुर जानुहोस्

**वाक्यार्थ–** आवाहन गर्नेबित्तिकै उपस्थित भएका सूर्यदेवलाई देखेर पृथा चकित भइन् र भनिन्– हे देव ! मलाई क्षमा गर्नुहोस्, मैले मन्त्रको परीक्षणका लागि त्यसको प्रयोग गरेकी हुँ, (परीक्षण भयो) अब हजुर जानुहोस्।

**अमोघं दर्शनं देवि आधित्से त्वयि चात्मजम्।**
**योनिर्यथा न दुष्येत कर्ताहं ते सुमध्यमे॥ ३४॥**

**पदार्थ–**
**देवि** = हे देवी पृथा (तिमीलाई)
**अमोघं** = निश्चय नै फल दिने
**दर्शनं** = मेरो दर्शन भयो (यसर्थ)
**त्वयि च** = तिमीमा
**आत्मजं** = पुत्र (गर्भको)
**आधित्से** = आधान गर्दछु
**सुमध्यमे** = हे सुन्दरी
**यथा** = जे गर्दा
**ते** = तिम्रो
**योनिः** = जननेन्द्रिय
**न दुष्येत** = दूषित हुँदैन
**अहम्** = म (त्यस्तो उपाय)
**कर्ता** = गर्नेछु

**वाक्यार्थ–** त्यसपछि सूर्यदेवले भने– हे देवी ! मेरो दर्शन निष्फल हुँदैन, म तिमीमा पुत्रको गर्भाधान गर्दछु, तर त्यसबाट तिम्रो जननेन्द्रिय दूषित नहुने उपाय पनि म गर्दछु।

**इति तस्यां स आधाय गर्भं सूर्यो दिवं गतः।**
**सद्यः कुमारः सञ्जज्ञे द्वितीय इव भास्करः॥ ३५॥**

**पदार्थ–**
**इति** = यसरी
**तस्यां** = ती पृथामा
**गर्भं आधाय** = गर्भाधान गरेर
**सः** = ती
**सूर्यः** = सूर्य
**दिवं** = स्वर्गतिर
**गतः** = गए
**सद्यः** = त्यसपछि तुरुन्तै
**द्वितीयः** = दोस्रो
**भास्करः इव** = सूर्य जस्तो
**कुमारः** = बालक

**सञ्जज्ञे** = जन्मिए

**वाक्यार्थ–** यसरी सूर्यदेव पृथामा गर्भाधान गरेर स्वर्गतिर गए। यता तुरुन्तै अर्को सूर्यजस्तो तेजस्वी बालकको जन्म भयो।

**तं सात्यजन्नदीतोये कृच्छ्राल्लोकस्य बिभ्यती।**
**प्रपितामहस्तामुवाह पाण्डुर्वै सत्यविक्रमः॥ ३६॥**

**पदार्थ–**
**सा** = ती पृथाले
**लोकस्य** = लोकानिन्दाबाट
**बिभ्यती** = डराउँदै
**तं** = त्यो बालकलाई
**कृच्छ्रात्** = (स्नेह भइकन पनि) अति कष्टसँग (बाकसमा राखेर)
**नदीतोये** = नदीको पानीमा
**अत्यजत्** = त्यागिदिइन्
**वै** = निश्चय नै
**सत्यविक्रमः** = सत्यका लागि लड्ने वीर
**प्रपितामहः** = (तपाईंका) बुढा हजुरबुबा
**पाण्डुः** = पाण्डुले
**तां** = तिनलाई
**उवाह** = विवाह गरे

**वाक्यार्थ–** ती पृथाले लोकनिन्दाको डरले गर्दा स्नेह हुँदाहुँदै पनि अति कष्टसँग त्यस बालकलाई बाकसमा राखेर नदीको पानीमा बगाइदिइन्। तिनै पृथालाई तपाईंका बुढा हजुरबुबा पाण्डुले विवाह गरे।

**श्रुतदेवां तु कारूषो वृद्धशर्मा समग्रहीत्।**
**यस्यामभूद् दन्तवक्त्र ऋषिशप्तो दितेः सुतः॥ ३७॥**

**पदार्थ–**
**श्रुतदेवां तु** = (पृथाकी बहिनी) श्रुतदेवालाई चाहिँ
**कारूषः** = करूष देशका राजा
**वृद्धशर्मा** = वृद्धशर्माले
**समग्रहीत्** = विवाह गरे
**यस्यां** = जसको गर्भमा
**ऋषिशप्तः** = ऋषिहरूद्वारा श्राप दिइएका (पूर्व जन्मका)
**दितेः** = दितिका
**सुतः** = छोरा (हिरण्याक्ष नै)
**दन्तवक्त्रः** = दन्तवक्त्रको रूपमा
**अभूत्** = जन्मियो

**वाक्यार्थ–** (पृथाकी बहिनी) श्रुतदेवालाई करूष देशका राजा वृद्धशर्माले विवाह गरे। उनैको गर्भबाट ऋषिको श्रापबाट पहिलो जन्ममा दितिबाट जन्मेको हिरण्याक्ष नै दन्तवक्त्र भएर जन्मियो।

**कैकेयो धृष्टकेतुश्च श्रुतकीर्तिमविन्दत।**
**सन्तर्दनादयस्तस्य पञ्चासन् कैकयाः सुताः॥ ३८॥**

**पदार्थ–**
**कैकेयः** = केकय देशका राजा
**धृष्टकेतुः च** = धृष्टकेतुले
**श्रुतकीर्तिम्** = श्रुतकीर्तिलाई
**अविन्दत** = विवाह गरे
**तस्य** = ती धृष्टकेतुका (श्रुतकीर्तिबाट)
**सन्तर्दनादयः** = सन्तर्दन आदि
**पञ्च** = पाँच जना

| | | |
|---|---|---|
| **कैकयाः सुताः** = केकय | कुमारहरू | **आसन्** = जन्मिएका थिए |

**वाक्यार्थ–** केकय देशका राजा धृष्टकेतुले (पृथाकी अर्की बहिनी) श्रुतकीर्तिसँग विवाह गरे जसबाट सन्तर्दन आदि पाँच केकय कुमारहरू जन्मिए।

**राजाधिदेव्यामावन्त्यौ जयसेनोऽजनिष्ट ह।**
**दमघोषश्चेदिराजः श्रुतश्रवसमग्रहीत्॥ ३९॥**

| पदार्थ– | (विन्द र अनुविन्दलाई) | **दमघोषः** = दमघोषले |
|---|---|---|
| **जयसेनः** = जयसेनले | **अजनिष्ट** = जन्माए | **श्रुतश्रवसं** = श्रुतश्रवालाई |
| **राजाधिदेव्यां** = राजाधिदेवीमा | **ह** = निश्चय नै | **अग्रहीत्** = विवाह गरे |
| **आवन्त्यौ** = अवन्तीका राजा | **चेदिराजः** = चेदि देशका राजा | |

**वाक्यार्थ–** राजा जयसेनले राजाधिदेवीसँग विवाह गरेर तिनमा विन्द र अनुविन्द नामका छोरा जन्माए, जो पछि अवन्ती देशका राजा भए। त्यसै गरी चेदि देशका राजा दमघोषले श्रुतश्रवालाई विवाह गरे।

**शिशुपालः सुतस्तस्याः कथितस्तस्य सम्भवः।**
**देवभागस्य कंसायां चित्रकेतुबृहद्बलौ॥ ४०॥**

| पदार्थ– | **तस्य** = त्यसको | देवभागका |
|---|---|---|
| **तस्याः** = ती श्रुतश्रवाको | **सम्भवः** = उत्पत्तिको विषयमा | **कंसायां** = कंसाको गर्भबाट |
| **सुतः** = छोरो | **कथितः** = (पहिले) भनियो | **चित्रकेतुबृहद्बलौ** = चित्रकेतु र |
| **शिशुपालः** = शिशुपाल थियो | **देवभागस्य** = (वसुदेवका भाइ) | बृहद्बल नामका दुई छोरा भए |

**वाक्यार्थ–** श्रुतश्रवाको छोरो शिशुपाल जन्मियो, जसको विषयमा पहिले (सप्तम स्कन्धको पहिलो अध्यायमा) नै बताइसकियो। वसुदेवका भाइ देवभागले कंसा नामकी पत्नीमा चित्रकेतु र बृहद्बल नामका दुई छोरा जन्माए।

**कंसवत्यां देवश्रवसः सुवीर इषुमांस्तथा।**
**कङ्कायामानकाज्जातः सत्यजित् पुरुजित् तथा॥ ४१॥**

| पदार्थ– | **इषुमान्** = इषुमान् छोरा जन्मिए | **सत्यजित्** = सत्यजित् |
|---|---|---|
| **देवश्रवसः** = देवश्रवाको | **तथा** = त्यसै गरी | **तथा** = र |
| **कंसवत्यां** = कंसवतीमा | **आनकात्** = आनकबाट | **पुरुजित्** = पुरुजित् |
| **सुवीरः** = सुवीर र | **कङ्कायां** = कङ्कामा | **जातः** = जन्मिए |

**वाक्यार्थ–** त्यसै गरी देवश्रवाको कंशवती पत्नीमा सुवीर र इषुमान् नामका दुई छोरा जन्मिए भने आनककी कङ्का नामकी पत्नीमा सत्यजित् र पुरुजित् नामका छोरा भए।

**सृञ्जयो राष्ट्रपाल्यां च वृषदुर्मर्षणादिकान्।**

**हरिकेशहिरण्याक्षौ शूरभूम्यां च श्यामकः ॥ ४२ ॥**

**पदार्थ–**
**सृञ्जयः** = सृञ्जयले
**राष्ट्रपाल्यां च** = राष्ट्रपालीमा
**वृषदुर्मर्षणादिकान्** = वृष, दुर्मर्षण आदि पुत्रहरू (जन्माए त्यसै गरी)
**श्यामकः** = श्यामकले
**शूरभूम्यां च** = शूरभूमिमा चाहिँ
**हरिकेशहिरण्याक्षौ** = हरिकेश र हिरण्याक्ष नामका छोराहरू जन्माए

**वाक्यार्थ–** सृञ्जयले राष्ट्रपालीमा वृष, दुर्मर्षण आदि छोराहरू र श्यामकले शूरभूमिमा हरिकेश र हिरण्याक्ष नामका छोराहरू जन्माए।

**मिश्रकेश्यामप्सरसि वृकादीन् वत्सकस्तथा।**

**तक्षपुष्करशालादीन् दुर्वाक्ष्यां वृक आदधे ॥ ४३ ॥**

**पदार्थ–**
**तथा** = त्यसै गरी
**वत्सकः** = वत्सकले
**मिश्रकेश्यां** = मिश्रकेशी नामकी
**अप्सरसि** = अप्सरामा
**वृकादीन्** = वृक आदि धेरै छोरा जन्माए भने
**वृकः** = वृकले
**दुर्वाक्ष्यां** = दुर्वाक्षी नामकी पत्नीमा
**तक्षपुष्करशालादीन्** = तक्ष, पुष्कर, शाल आदि छोराहरू
**आदधे** = जन्माए

**वाक्यार्थ–** त्यसै गरी वत्सकले मिश्रकेशी नामकी अप्सरामा वृक आदि छोराहरू र वृकले दुर्वाक्षी नामकी पत्नीमा तक्ष, पुष्कर र शाल आदि छोराहरू जन्माए।

**सुमित्रार्जुनपालादीञ्छमीकात् तु सुदामिनी।**

**कङ्कश्च कर्णिकायां वै ऋतधामजयावपि ॥ ४४ ॥**

**पदार्थ–**
**शमीकात् तु** = शमीकबाट चाहिँ
**सुदामिनी** = सुदामिनीले
**सुमित्रार्जुनपालादीन्** = सुमित्र र अर्जुनपाल आदि धेरै छोराहरू जन्माइन्
**वै** = निश्चय नै
**कङ्कः च** = कङ्कले पनि
**कर्णिकायां** = कर्णिकामा
**ऋतधामाजयौ अपि** = ऋतधाम र जय नामका छोराहरू जन्माए

**वाक्यार्थ–** शमीकले सुदामिनीबाट सुमित्र, अर्जुनपाल आदि पुत्रहरू जन्माए भने कङ्कले कर्णिकामा ऋतधाम र जय नामका छोरा जन्माए।

**पौरवी रोहिणी भद्रा मदिरा रोचना इला।**

**देवकीप्रमुखाश्चासन् पत्न्य आनकदुन्दुभेः ॥ ४५ ॥**

| पदार्थ– | **भद्रा** = भद्रा | **देवकीप्रमुखाः** = देवकी आदि प्रमुख |
|---|---|---|
| **आनकदुन्दुभेः** = वसुदेवका | **मदिरा** = मदिरा | **पत्न्यः** = पत्नीहरू |
| **पौरवी** = पौरवी | **रोचना** = रोचना | **आसन्** = थिए |
| **रोहिणी** = रोहिणी | **इला च** = इला र | |

**वाक्यार्थ–** वसुदेवका पत्नीहरू प्रमुख रूपमा पौरवी, रोहिणी, भद्रा, मदिरा, रोचना, इला र देवकी आदि थिए।

**बलं गदं सारणं च दुर्मदं विपुलं ध्रुवम् ।**

**वसुदेवस्तु रोहिण्यां कृतादीनुदपादयत् ॥ ४६ ॥**

| पदार्थ– | **गदं** = गद | **ध्रुवं** = ध्रुव तथा |
|---|---|---|
| **वसुदेवः तु** = वसुदेवले | **सारणं** = सारण | **कृतादीन् च** = कृत आदि अरू पनि पुत्रहरू |
| **रोहिण्यां** = रोहिणीमा | **दुर्मदं** = दुर्मद | **उदपादयत्** = जन्माउनुभयो |
| **बलं** = बलराम | **विपुलं** = विपुल | |

**वाक्यार्थ–** वसुदेवले रोहिणीमा बलराम, गद, सारण, दुर्मद, विपुल, ध्रुव र कृत आदि अरू पुत्रहरू पनि जन्माउनुभयो।

**सुभद्रो भद्रबाहुश्च दुर्मदो भद्र एव च ।**

**पौरव्यास्तनया ह्येते भूताद्या द्वादशाभवन् ॥ ४७ ॥**

| पदार्थ– | **भद्रवाहः च** = भद्रवाह | **एते** = यी |
|---|---|---|
| **हि** = निश्चय नै | **दुर्मदः** = दुर्मद | **द्वादश** = बाह्र जना |
| **पौरव्याः** = पौरवीबाट | **भद्र एव च** = भद्र र | **तनयाः** = छोराहरू |
| **सुभद्रः** = सुभद्र | **भूताद्याः** = भूत आदि अरू | **अभवन्** = जन्मिए |

**वाक्यार्थ–** वसुदेवको पौरवीबाट सुभद्र, भद्रवाह, दुर्मद, भद्र र भूत आदि बाह्र जना छोराहरू जन्मिए।

**नन्दोपनन्दकृतकशूराद्या मदिरात्मजाः ।**

**कौशल्या केशिनं त्वेकमसूत कुलनन्दनम् ॥ ४८ ॥**

| पदार्थ– | **नन्दोपनन्दकृतकशूराद्याः** = नन्द, उपनन्द, कृतक, शूर आदि थिए (तर) | **कौशल्या** = कौशल्याले चाहिँ |
|---|---|---|
| **मदिरात्मजाः** = मदिराका छोराहरू | | **कुलनन्दनम्** = कुलमा श्रेष्ठ |
| | | **एकं केशिनं** = एक केशीलाई |

मात्र | **असूत** = जन्माइन्

**वाक्यार्थ–** मदिराले नन्द, उपनन्द, कृतक र शूर आदि पुत्रहरू जन्माइन्। कौशल्याले कुलमा श्रेष्ठ केशी नामको एउटै छोरो जन्माइन्।

**रोचनायामतो जाता हस्तहेमाङ्गदादयः।**

**इलायामुरुवल्कादीन् यदुमुख्यानजीजनत् ॥ ४९ ॥**

**पदार्थ–**
**अतः** = त्यसपछि (वसुदेवका)
**रोचनायां** = रोचना नामकी पत्नीमा
**हस्तहेमाङ्गदादयः** = हस्त र हेमाङ्गद आदि पुत्रहरू
**जाताः** = जन्मिए (फेरि उहाँले)
**इलायां** = इलामा
**उरुवल्कादीन्** = उरुवल्क आदि
**यदुमुख्यान्** = यदुवंशमा मुख्य पुत्रहरू
**अजीजनत्** = जन्माउनुभयो

**वाक्यार्थ–** वसुदेवले रोचनामा हस्त, हेमाङ्गद आदि पुत्रहरू जन्माउनुभयो भने इलामा उरुवल्क आदि यदुवंशमा श्रेष्ठ गनिएका पुत्रहरू जन्माउनुभयो।

**विपृष्ठो धृतदेवायामेक आनकदुन्दुभेः।**

**शान्तिदेवात्मजा राजञ्छ्रमप्रतिश्रुतादयः ॥ ५० ॥**

**पदार्थ–**
**आनकदुन्दुभेः** = वसुदेवबाट
**धृतदेवायां** = धृतदेवामा
**एकः** = एउटै
**विपृष्ठः** = विपृष्ठ जन्मिए
**राजन्** = हे राजा परीक्षित्
**श्रमप्रतिश्रुतादयः** = श्रम, प्रतिश्रुत आदि
**शान्तिदेवात्मजाः** = शान्तिदेवाका छोरा हुन्

**वाक्यार्थ–** वसुदेवको धृतदेवामा एउटै विपृष्ठ जन्मिए भने शान्तिदेवाबाट श्रम, प्रतिश्रुत आदि छोरा जन्मिए।

**राजानः कल्पवर्षाद्या उपदेवासुता दश।**

**वसुहंससुवंशाद्याः श्रीदेवायास्तु षट् सुताः ॥ ५१ ॥**

**पदार्थ–**
**उपदेवासुताः** = उपदेवाका छोराहरू
**कल्पवर्षाद्याः** = कल्प, वर्ष आदि
**दश** = दश जना
**राजानः** = राजाहरू भए
**श्रीदेवायाः तु** = श्रीदेवाका चाहिँ
**वसुहंससुवंशाद्याः** = वसु, हंस, सुवंश आदि
**षट् सुताः** = छ छोरा भए

**वाक्यार्थ–** उपदेवाबाट जन्मिएका कल्पवर्ष आदि दश छोराहरू राजा भए भने श्रीदेवाबाट वसु, हंस, र सुवंश आदि छ छोराहरू भए।

**देवरक्षितया लब्धा नव चात्र गदादयः।**

**वसुदेवः सुतानष्टावादधे सहदेवया ॥ ५२ ॥**
**पुरुविश्रुतमुख्यांस्तु साक्षाद् धर्मो वसूनिव ।**
**वसुदेवस्तु देवक्यामष्ट पुत्रानजीजनत् ॥ ५३ ॥**
**कीर्तिमन्तं सुषेणं च भद्रसेनमुदारधीः ।**
**ऋजुं सम्मर्दनं भद्रं सङ्कर्षणमहीश्वरम् ॥ ५४ ॥**
**अष्टमस्तु तयोरासीत् स्वयमेव हरिः किल ।**
**सुभद्रा च महाभागा तव राजन् पितामही ॥ ५५ ॥**

**पदार्थ–**
**अत्र** = यस क्रममा
**वसुदेवः** = वसुदेवले
**देवरक्षितया च** = देवरक्षिताबाट
**गदादयः** = गद आदि
**नव** = नौ भाइ छोरा
**लब्धाः** = जन्माउनुभयो
**सहदेवया** = सहदेवाबाट
**साक्षात् धर्मः** = साक्षात् धर्मले
**वसून् इव** = वसुहरूलाई झैं
**पुरुविश्रुतमुख्यान्** = पुरुविश्रुत आदि
**अष्टौ सुतान् तु**= आठ भाइ छोरा चाहिँ
**आदधे** = जन्माउनुभयो
**उदारधीः** = उदारबुद्धि भएका
**वसुदेवः** = वसुदेवले
**देवक्यां तु** = देवकीमा त
**अष्ट पुत्रान्** = आठ भाइ छोरा
**अजीजनत्** = जन्माउनुभयो (जसमध्ये सात)
**कीर्तिमन्तं** = कीर्तिमान्
**सुषेणं** = सुषेण
**भद्रसेनं** = भद्रसेन
**ऋजुं** = ऋजु
**सम्मर्दनं** = सम्मर्दन
**भद्रं** = भद्र र
**अहीश्वरं** = शेषावतार
**सङ्कर्षणं च** = बलराम
**तयोः** = उहाँहरू दुईको
**अष्टमः तु** = आठौँ चाहिँ
**किल** = निश्चय नै
**स्वयं हरिः एव** = साक्षात् श्रीहरि नै (कृष्णको रूपमा)
**आसीत्** = हुनुहुन्थ्यो
**राजन्** = हे राजा परीक्षित्
**तव** = तपाईंकी
**पितामही** = हजुरआमा
**महाभागा** = परम सौभाग्यवती
**सुभद्रा च** = सुभद्रा पनि देवकीकै पुत्री हुन्

**वाक्यार्थ–** वसुदेवकी देवरक्षिताबाट गद आदि नौ पुत्र भए। साक्षात् धर्मबाट अष्टवसु जन्मे झैं सहदेवाबाट पुरुविश्रुत आदि आठ छोरा जन्मिए। उदारबुद्धिवाला वसुदेवका देवकीमा पनि आठ जना छोरा भए। जसमध्ये सात जना– कीर्तिमान्, सुषेण, भद्रसेन, ऋतु, सम्मर्दन, भद्रसेन, सम्मर्दन, भद्र र शेषावतार बलराम थिए भने आठौं साक्षात् भगवान् नारायण नै कृष्णका रूपमा हुनुहुन्थ्यो। हे राजा परीक्षित् ! तपाईंकी हजुरआमा सुभद्रा पनि देवकीकै पुत्री हुन्।

**यदा यदेह धर्मस्य क्षयो वृद्धिश्च पाप्मनः ।**
**तदा तु भगवानीश आत्मानं सृजते हरिः ॥ ५६ ॥**

**पदार्थ–**
**यदा यदा** = जहिले-जहिले
**इह** = यो संसारमा
**धर्मस्य** = धर्मको
**क्षयः** = नाश र
**पाप्मनः** = पापको
**वृद्धिः च** = वृद्धि हुन्छ
**तदा तु** = त्यस बखतमा
**ईशः** = सर्वनियन्ता
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरिले
**आत्मानं** = आफूलाई
**सृजते** = विभिन्न अवतारमा प्रकट गर्नुहुन्छ

**वाक्यार्थ–** जहिले-जहिले यस संसारमा धर्मको नाश र पापको वृद्धि हुन्छ त्यही-त्यही समयमा सर्वनियन्ता भगवान् श्रीहरिले आफूलाई विभिन्न अवतारमा प्रकट गर्नुहुन्छ।

**न ह्यस्य जन्मनो हेतुः कर्मणो वा महीपते।**
**आत्ममायां विनेशस्य परस्य द्रष्टुरात्मनः॥ ५७॥**

**पदार्थ–**
**महीपते** = हे राजा परीक्षित्
**ईशस्य** = सबैलाई नियमन गर्ने
**परस्य आत्मनः** = परमात्मस्वरूप
**द्रष्टुः** = सर्वद्रष्टा रूपले अवस्थित
**अस्य** = यी भगवान् श्रीहरिको
**जन्मनः** = जन्मको लागि र
**कर्मणः वा** = अथवा कर्मको लागि
**हेतुः** = कारण
**आत्ममायां विना** = योगमायाबाहेक अर्को
**न** = छैन

**वाक्यार्थ–** हे राजा परीक्षित्! सर्वनियामक र सर्वद्रष्टा परमात्माले पनि जन्म लिएर विविध कर्महरू गर्नुमा योगमाया बाहेक अर्को कुनै पनि कारण छैन।

**यन्मायाचेष्टितं पुंसः स्थित्युत्पत्त्यप्ययाय हि।**
**अनुग्रहस्तन्निवृत्तेरात्मलाभाय चेष्यते॥ ५८॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**यन्मायाचेष्टितं** = जसको मायाको विलास नै
**पुंसः** = सारा जीवका लागि
**स्थित्युत्पत्त्यप्ययाय** = जीवन अनि जन्म र मृत्युको कारण हुन्छ भने
**अनुग्रहः** = उनै भगवान्को कृपा
**तन्निवृत्तेः** = त्यो माया निवृत्तिका लागि र
**आत्मलाभाय च** = आत्मलाभ (मोक्ष)को लागि पनि
**इष्यते** = (कारण) हुन्छ

**वाक्यार्थ–** जुन परमात्माको मायाको विलास हामी जीवका लागि जन्म, जीवन र मृत्युको कारण हुन्छ भने परमात्माकै अनुग्रह मायानिवृत्ति र आत्मलाभ (मोक्ष)को लागि हुन्छ।

**अक्षौहिणीनां पतिभिरसुरैर्नृपलाञ्छनैः।**
**भुव आक्रम्यमाणाया अभाराय कृतोद्यमः॥ ५९॥**
**कर्माण्यपरिमेयाणि मनसापि सुरेश्वरैः।**

**सहसङ्कर्षणश्चक्रे भगवान् मधुसूदनः ॥ ६० ॥**

**पदार्थ–**
**नृपलाञ्छनैः** = राजाको स्वरूप धारण गरेका
**असुरैः** = असुरहरू
**अक्षौहिणीनां** = अक्षौहिणी सेनाका
**पतिभिः** = मालिक बनेका राजाहरूद्वारा
**आक्रम्यमाणायाः** = आक्रान्त भएकी
**भुवः** = पृथिवीको
**अभाराय** = भारहरणको लागि
**कृतोद्यमः** = विविध लीला गर्दै
**सहसङ्कर्षणः** = शेषावतार बलरामसहित
**भगवान्** = भगवान्
**मधुसूदनः** = मधुसूदनले
**सुरेश्वरैः** = ठुला-ठुला देवताहरूद्वारा
**मनसा अपि** = मनले पनि
**अपरिमेयाणि** = चिताउन वा सोच्न पनि नसकिने
**कर्माणि** = कर्महरू
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** राजाको स्वरूपमा रहेका अनि अक्षौहिणी सेनाका पति बनेका असुरहरूले पृथिवीलाई भाराक्रान्त बनाएका थिए। त्यो भारको हरणका लागि शेषावतार बलराम सहित भगवान् मधुसूदन अवतीर्ण हुनुभयो र ठुला-ठुला देवताहरूले समेत मनले पनि सोच्न नसक्ने कर्महरू गर्नुभयो।

**कलौ जनिष्यमाणानां दुःखशोकतमोनुदम्।**
**अनुग्रहाय भक्तानां सुपुण्यं व्यतनोद् यशः ॥ ६१ ॥**

**पदार्थ–**
**कलौ** = कलियुगमा
**जनिष्यमाणानां** = जन्मनेवाला
**भक्तानां** = भक्तहरूको
**अनुग्रहाय** = अनुग्रहका लागि
**दुःखशोकतमोनुदम्** = दुःख, शोक र अज्ञानलाई नाश गरिदिने
**सुपुण्यं** = अति पवित्र
**यशः** = कीर्तिलाई
**व्यतनोत्** = फिँजाउनुभयो

**वाक्यार्थ–** भगवान्ले कलियुगमा जन्मने भक्तहरूको लागि दुःख, शोक र सारा अज्ञानलाई नाश गरिदिने पवित्र कीर्ति फिँजाउनुभयो।

**यस्मिन् सत्कर्णपीयूषे यशस्तीर्थवरे सकृत्।**
**श्रोत्राञ्जलिरुपस्पृश्य धुनुते कर्मवासनाम् ॥ ६२ ॥**

**पदार्थ–**
**यस्मिन्** = जुन
**सत्कर्णपीयूषे** = सज्जनको लागि अमृत बराबरको
**यशस्तीर्थवरे** = भगवान्को यशरूपी महान् तीर्थमा
**सकृत्** = एकपटक मात्र पनि
**श्रोत्राञ्जलिः** = कानरूपी अँजुलीले
**उपस्पृश्य** = आचमन गरेपछि
**कर्मवासनां** = सारा कर्मका वासनाहरू
**धुनुते** = नष्ट भएर जान्छन्

**वाक्यार्थ–** सज्जनहरूका लागि अमृततुल्य भएको भगवान्को यशरूपी जुन महान् तीर्थ छ, त्यहाँ एकपटक मात्र पनि कानरूपी अँजुलीले आचमन गरेपछि सारा कर्मवासनाहरू नष्ट भएर जान्छन्।

**विवरण—** यस श्लोकमा भगवच्चरित्रको श्रवणले कर्मवासना नष्ट हुने बताइएको छ। भगवान्‌को यश सबैभन्दा श्रेष्ठ तीर्थ हो। अन्य तीर्थहरूको सेवनले सामान्य पापहरूलाई पखाल्न सक्छ तर पापवासनालाई अनि अशुभ संस्कारले युक्त मनलाई पखाल्न सक्दैन। भगवान्‌को चरित्रको श्रवण र निरन्तर भगवच्चिन्तनले चाहिँ शुभ-अशुभ सम्पूर्ण कर्मका संस्कारहरूलाई नै नष्ट गरिदिन्छ। त्यसैले भगवान्‌को चरित्र गाउनु सबैभन्दा ठुलो तीर्थसेवन गर्नु हो। भगवान्‌को कथा सज्जन व्यक्तिहरूको कानलाई अमृत समान मिठो लाग्दछ। भगवत्कथाको आचमन गर्ने अञ्जुलि भनेका दुई कान नै हुन्। एक चोटि मात्र कसैले यो कथामृतको स्वाद पायो भने फेरि त्यो व्यक्ति संसारका शुभ-अशुभ कर्महरूमा लाग्दैन। निरन्तर भगवच्चिन्तनमा लागी सबै कर्महरूलाई बिर्सिनु नै कर्मवासनाको क्षय हो।

**भोजवृष्ण्यन्धकमधुशूरसेनदशार्हकैः।**
**श्लाघनीयेहितः शश्वत् कुरुसृञ्जयपाण्डुभिः ॥ ६३ ॥**

**पदार्थ—**
**भोजवृष्ण्यन्धकमधुशूरसेन-दशार्हकैः** = भोज, वृष्णि, अन्धक, मधु, शूरसेन र दशार्हहरूद्वारा
**कुरुसृञ्जयपाण्डुभिः** = कुरु, सृञ्जय र पाण्डुवंशीहरूद्वारा पनि
**शश्वत्** = निरन्तर
**श्लाघनीयेहितः** = जसका (भगवान् श्रीकृष्णका) लीलाहरू प्रशंसित थिए

**वाक्यार्थ—** हे परीक्षित्! भोज, वृष्णि, अन्धक, मधु, शूरसेन, दशार्ह, कुरु, सृञ्जय र पाण्डुवंशीहरूद्वारा पनि भगवान्‌का लीलाहरू प्रशंसित थिए।

**स्निग्धस्मितेक्षितोदारैर्वाक्यैर्विक्रमलीलया।**
**नृलोकं रमयामास मूर्त्या सर्वाङ्गरम्यया ॥ ६४ ॥**

**पदार्थ—**
**स्निग्धस्मितेक्षितोदारैः वाक्यैः** = मधुर मुस्कान, प्रेमयुक्त हेराइ र उदार वचनहरूद्वारा तथा
**विक्रमलीलया** = पराक्रमपूर्ण अलौकिक लीलाद्वारा र
**सर्वाङ्गरम्यया** = सर्वाङ्ग सुन्दर
**मूर्त्या** = शरीरद्वारा (भगवान् श्रीकृष्णले)
**नृलोकं** = सारा मनुष्यहरूलाई
**रमयामास** = आनन्दित बनाउनुभयो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले मधुर मुस्कान, प्रेमपूर्ण हेराइ, उदार वचन र पराक्रमपूर्ण लीला तथा सर्वाङ्ग सुन्दर शरीरले सारा मनुष्यलोकलाई आनन्दित पार्नुभयो।

**यस्याननं मकरकुण्डलचारुकर्ण-**
**भ्राजत्कपोलसुभगं सविलासहासम्।**
**नित्योत्सवं न ततृपुर्दृशिभिः पिबन्त्यो**

**नार्यो नराश्च मुदिताः कुपिता निमेश्च ॥६५॥**

**पदार्थ–**
**यस्य** = जुन भगवान्‌को
**मकरकुण्डलचारुकर्ण-भ्राजत्कपोलसुभगं** = गोहीको आकृतियुक्त सुन्दर कुण्डलले विभूषित कान र दुई गालाले अझ मनोहर भएको अनि
**सविलाससहासम्** = विलासपूर्ण हाँसोले भरिएको
**नित्योत्सवं** = सर्वदा सुन्दर
**आननं** = मुखलाई
**दृशिभिः** = आँखाहरूद्वारा
**पिबन्त्यः** = पान गर्दै (हेर्दै)
**नार्यः** = नारीहरू र
**मुदिताः** = प्रसन्न भएका
**नराः च** = पुरुषहरू पनि
**न ततृपुः** = तृप्त भएनन्, बरु
**निमेः च** = आँखा झिम्कँदा (आँखाप्रति)
**कुपिताः** = रिसाए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको गोहीको आकृतियुक्त सुन्दर कुण्डलले विभूषित कान र दुई गालाले अझ मनोहर भएको अनि विलासपूर्ण हाँसोले युक्त भएको सर्वदा सुन्दर मुखकमललाई आफ्ना आँखाले हेरेर पनि सारा नरनारीहरू कहिल्यै तृप्त भएनन्। (उनीहरूलाई आँखा नझिम्क्याईकन हेरिरहन मन लाग्यो) आँखा झिम्कनाले उनीहरू आफ्ना आँखाप्रति रिसाउँथे।

**जातो गतः पितृगृहाद् व्रजमेधितार्थो**
**हत्वा रिपून् सुतशतानि कृतोरुदारः।**
**उत्पाद्य तेषु पुरुषः क्रतुभिः समीजे**
**आत्मानमात्मनिगमं प्रथयन् जनेषु ॥६६॥**

**पदार्थ–**
**पुरुषः** = भगवान् श्रीकृष्ण
**जातः** = मथुरामा जन्मेर
**पितृगृहात्** = पितृगृह (कारागार) बाट
**व्रजं** = गोकुलमा
**गतः** = जानुभयो (त्यहाँ)
**एधितार्थः** = व्रजवासीको इच्छा बढाएर (पूर्ण गरेर)
**रिपून्** = शत्रुहरूलाई
**हत्वा** = मारेर
**कृतोरुदारः** = धेरै स्त्रीहरूसँग विवाह गर्नुभयो
**तेषु** = ती स्त्रीहरूमा
**सुतशतानि** = सयौं छोराहरू
**उत्पाद्य** = जन्माएर
**जनेषु** = मानिसहरूमा
**आत्मनिगमं** = आफ्नो वेदमार्ग वा आत्मसाक्षात्कारको मर्यादा
**प्रथयन्** = स्थापित गराउँदै
**आत्मानं** = आफैँलाई
**क्रतुभिः** = विविध यज्ञहरूद्वारा
**समीजे** = यजन (आराधना) गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण मथुरामा जन्मेर कारागारबाट गोकुल (नन्दबाबाको घर)मा जानुभयो। त्यहाँ व्रजवासीहरूलाई प्रसन्न पार्दै सारा शत्रुहरूको संहार गर्नुभयो अनि धेरै स्त्रीहरू विवाह गर्नुभयो र सयौं छोराहरू जन्माउनुभयो। त्यसपछि मानिसहरूमा आत्मसाक्षात्कारको वैदिक मर्यादालाई स्थापित गर्नको लागि उहाँले आफैँलाई विविध यज्ञहरूद्वारा आराधना गर्नुभयो।

**पृथ्व्याः स वै गुरुभरं क्षपयन् कुरूणा-**

**मन्तःसमुत्थकलिना युधि भूपचम्वः ।**
**दृष्ट्या विधूय विजये जयमुद्विघोष्य-**
**प्रोच्योद्धवाय च परं समगात् स्वधाम ॥ ६७ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**सः** = ती भगवान् श्रीकृष्णले
**कुरूणां** = कौरव र पाण्डवबीचको
**अन्तःसमुत्थकलिना** = आन्तरिक रूपमा उठेको आपसी कलहद्वारा
**पृथ्व्याः** = पृथिवीको
**गुरुभरं** = ठुलो भारलाई
**क्षपयन्** = हरण गरेर
**युधि** = युद्धमा
**भूपचम्वः** = राजाहरूका सेनासमूहलाई
**दृष्ट्या** = आफ्नो हेराइले नै
**विधूय** = ध्वस्त गरेर
**विजये** = अर्जुनको पक्षमा
**जयं** = जित छ भन्ने
**उद्विघोष्य** = उद्घोष गरेर अनि
**उद्धवाय च** = उद्धवलाई
**परं** = परमतत्त्व
**प्रोच्य** = बताएर
**स्वधाम** = आफ्नो धाममा
**समगात्** = जानुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले कौरव र पाण्डवबीचको आन्तरिक कलहको माध्यमबाट पृथिवीको ठुलो भार हरण गर्नुभयो, युद्धमा आफ्नो हेराइबाट नै धेरै राजाका सेनासमूहलाई नष्ट पार्नुभयो र अर्जुनको विजयको उद्घोष गर्नुभयो अनि उद्धवलाई तत्त्वज्ञान बताएर आफ्नो धाममा जानुभयो ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां नवमस्कन्धे श्रीसोमवंशानुकीर्तने यदुवंशानुकीर्तनं नाम चतुर्विंशोऽध्यायः ॥ २४ ॥**

**इति नवमः स्कन्धः समाप्तः ॥**

# अथ दशमः स्कन्धः

## अथ प्रथमोऽध्यायः

### कृष्णावतारको क्रममा भगवान्‌द्वारा पृथिवी आश्वस्त
### कंसद्वारा वसुदेवका छ छोराको हत्या

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**कथितो वंशविस्तारो भवता सोमसूर्ययोः।**
**राज्ञां चोभयवंश्यानां चरितं परमाद्भुतम्॥ १॥**
**यदोश्च धर्मशीलस्य नितरां मुनिसत्तम।**
**तत्रांशेनावतीर्णस्य विष्णोर्वीर्याणि शंस नः॥ २॥**

**पदार्थ–**
**मुनिसत्तम** = हे मुनिश्रेष्ठ शुकदेव
**भवता** = हजुरद्वारा
**सोमसूर्ययोः** = चन्द्र र सूर्यको
**वंशविस्तारः** = वंशको विस्तार
**कथितः** = बताइयो (त्यसै गरी)
**उभयवंश्यानां** = दुबै वंशमा उत्पन्न भएका
**राज्ञां** = राजाहरूको
**परमाद्भुतं** = ज्यादै आश्चर्यजनक
**चरितं च** = चरित्र र
**नितरां** = सधैं
**धर्मशीलस्य** = धर्ममा निष्ठा राख्ने
**यदोः च** = यदुको चरित्र पनि बताइयो (अब)
**तत्र** = त्यो यदुवंशमा
**अंशेन** = अंशावतार बलरामजी सहित
**अवतीर्णस्य** = अवतार लिनुभएका
**विष्णोः** = भगवान् नारायणका
**वीर्याणि** = पराक्रमहरू
**नः** = हामीहरूलाई
**शंस** = बताउनुहोस्

**वाक्यार्थ–** हे मुनिश्रेष्ठ शुकदेव ! हजुरले चन्द्रवंश र सूर्यवंशको विस्तारपूर्वक वर्णन गर्नुभयो र ती दुबै वंशमा उत्पन्न भएका राजाहरूका ज्यादै आश्चर्यलाग्दा चरित्रहरू पनि सुनाउनुभयो। त्यसै गरी परम धर्मात्मा यदुको चरित्र पनि बताउनुभयो। अब हामीहरूलाई यदुकुलमा अंशावतार बलरामसहित अवतीर्ण हुनुभएका भगवान् नारायणका पराक्रमहरू बताउनुहोस्।

**अवतीर्य यदोर्वंशे भगवान् भूतभावनः।**
**कृतवान् यानि विश्वात्मा तानि नो वद विस्तरात्॥ ३॥**

**पदार्थ–**
**भूतभावनः** = सम्पूर्ण प्राणीका पालनकर्ता

**विश्वात्मा** = सबैका अन्तर्यामी
**भगवान्** = भगवान् नारायणले
**यदोः** = यदुको
**वंशे** = वंशमा
**अवतीर्य** = अवतार लिएर
**यानि** = जुन-जुन कामहरू
**कृतवान्** = गर्नुभयो
**तानि** = ती सबै कुरा
**नः** = हामीहरूलाई
**विस्तरात्** = विस्तारपूर्वक
**वद** = भन्नुहोस्

**वाक्यार्थ–** सम्पूर्ण प्राणीका पालक र सर्वान्तर्यामी भगवान् नारायणले यदुकुलमा अवतार लिएर जुन-जुन कामहरू गर्नुभयो, ती सबै हामीलाई विस्तारपूर्वक भन्नुहोस्।

**निवृत्ततर्षैरुपगीयमानाद् भवौषधाच्छ्रोत्रमनोऽभिरामात्।**
**क उत्तमश्लोकगुणानुवादात् पुमान् विरज्येत विना पशुघ्नात्॥ ४॥**

**पदार्थ–**
**निवृत्ततर्षैः** = तृष्णाबाट मुक्त भएका महापुरुषहरूद्वारा पनि
**उपगीयमानात्** = (प्रेमपूर्वक) गाइने
**भवौषधात्** = संसाररूपी रोगको परम औषधि
**श्रोत्रमनोऽभिरामात्** = कान र मनमा परम आनन्द दिने
**उत्तमश्लोकगुणानुवादात्** = भगवान् श्रीकृष्णको गुणगानबाट
**पशुघ्नात् विना** = आत्मघाती मनुष्यलाई छाडेर
**कः पुमान्** = को मानिस
**विरज्येत** = विमुख होला (सुन्न नचाहला)

**वाक्यार्थ–** सारा तृष्णाबाट मुक्त भएका महापुरुषहरूले पनि प्रेमपूर्वक गाउँदै हिँड्ने संसाररूपी रोगको महौषधि र (सुन्दा संसारी व्यक्तिलाई पनि) कान र मनमा आनन्द दिने यो भगवान् श्रीकृष्णको गुणगानरूप कार्यबाट आत्मघाती व्यक्तिहरू बाहेक को चाँहि मानिस विमुख होला ?

**विवरण–** यस श्लोकमा राजा परीक्षित्ले सच्चा मानव बन्नलाई पनि भगवत्कथा सुन्नै पर्ने भएकाले विस्तारमा कृष्णचरित्र बताउन आग्रह गरेका छन्। संसारमा तीन थरी मानिस हुन्छन्– विषयी, मुमुक्षु र मुक्त। जो मुक्त छन् उनीहरूलाई कुनै साधन गर्नुपर्ने आवश्यकता छैन, तर उनीहरू पनि निरन्तर भगवान्कै लीला-चरित्र गाइरहन्छन्। तृष्णारहित मुक्त व्यक्तिहरूमा अरू कुनै पदार्थहरूको चाहना नहुने हुनाले उनीहरू सधैं भगवान्कै गुणकीर्तन गरिरहन्छन्। मुमुक्षु व्यक्तिको लागि त संसाररूपी रोगलाई नष्ट गर्ने औषधि भनेकै भगवान्को कथा हो। विषयी व्यक्तिहरूले पनि एक छिन ध्यान दिएर भगवान्को चरित्र सुने भने उनीहरूको कान र मनलाई आनन्द र शान्ति मिल्छ। यसरी संसारी, मुमुक्षु र मुक्त तीनै थरी व्यक्तिलाई भगवान्को कथाले आनन्द दिन्छ। यसलाई मन नपराउने त आफ्नै अन्तरात्मालाई खुसी राख्न नचाहने आत्मघाती व्यक्ति हो। त्यसैले सबैथरी मानिसहरूलाई आनन्द दिने भगवत्कथा म विस्तारपूर्वक सुन्न चाहन्छु भन्ने परीक्षित्को आशय रहेको छ।

**पितामहा मे समरेऽमरञ्जयैर्देवव्रताद्यातिरथैस्तिमिङ्गिलैः।**
**दुरत्ययं कौरवसैन्यसागरं कृत्वातरन् वत्सपदं स्म यत्प्लवाः॥ ५॥**

**पदार्थ—**
**समरे** = (महाभारतको) युद्धमा
**अमरञ्जयैः** = देवताहरूलाई पनि जित्ने
**देवव्रताद्यातिरथैः** = देवव्रत (भीष्मपितामह) आदि अतिरथीहरूद्वारा
**तिमिङ्गिलैः** = तिमिङ्गिल (साना माछालाई सोझै निल्ने माछा)हरूद्वारा व्याप्त
**दुरत्ययं** = लडि नसक्नु वा तरि नसक्नु बनाइएको
**कौरवसैन्यसागरं** = कौरवसेनाको त्यो अपार समुद्रलाई
**यत्प्लवाः** = जुन श्रीकृष्णलाई डुङ्गा बनाएर
**मे** = मेरा
**पितामहाः** = हजुरबुबा युधिष्ठिर आदिले
**वत्सपदं कृत्वा** = एउटा बाच्छाको खुरले बनेको डोबिल्कोलाई झैँ
**अतरन् स्म** = तर्नुभएको थियो

**वाक्यार्थ—** महाभारतको युद्धमा देवताहरूलाई पनि जित्ने भीष्मपितामह जस्ता अतिरथीहरूले तिमिङ्गिल माछाहरूले समुद्रलाई भयाक्रान्त बनाए झैँ युद्धभूमिलाई भयाक्रान्त बनाएका थिए। यस्तो पार गर्न आँट नै गर्न नसकिने कौरवसेनाको अपार सागरलाई युधिष्ठिर आदि मेरा हजुरबुबाहरूले भगवान् श्रीकृष्णको चरणकमललाई नै डुङ्गा बनाएर बाछोको खुरले बनेको डोबिल्कोलाई सजिलै तरे झैँ तर्नुभएको थियो।

**विवरण—** यस श्लोकमा परीक्षित्‌ले भगवान् श्रीकृष्ण आफ्ना कुलसँग सम्बन्धित र प्रमुख आश्रयदाता भएकाले पनि उहाँको कथा आफूले सुन्नुपर्ने जनाएका छन्। महाभारतको युद्धमा कौरवसेना महासागर जस्तै थियो, जसलाई तर्न सक्नु पाण्डवहरूको लागि असम्भव झैँ थियो। त्यहाँ देवव्रत भीष्मजस्ता वीर थिए जसको मृत्यु उनकै इच्छाले मात्र हुन्थ्यो। अश्वत्थामा जस्ता चिरञ्जीवी, द्रोण र कर्णजस्ता अतिरथी वीरहरू थिए। यी सबै वीरहरू त्यो सागरमा घुम्ने भयङ्कर माछा, गोहीजस्ता थिए। भगवान्‌लाई नाउ बनाएर नै पाण्डवहरूले त्यो दुर्लङ्घ्य महासागरलाई तर्न सकेका थिए, महाभारत युद्ध जित्न सकेका थिए। महाभारत युद्धमा अनेकौँ पटक यस्ता परिस्थितिहरू उपस्थित भएका छन्, जसको सही समाधान या निराकरण भगवान् श्रीकृष्णबाट नै भएको छ। उहाँकै निर्देशनलाई मानेकाले नै पाण्डवहरूको विजय भएको थियो। त्यसैले आफ्ना पुर्खालाई सङ्कट र अन्यायबाट बचाउने भगवान् श्रीकृष्णको कथा आफूले विस्तारमा सुन्नुपर्ने परीक्षित्‌को धारणा रहेको छ।

**द्रौण्यस्त्रविप्लुष्टमिदं मदङ्गं सन्तानबीजं कुरुपाण्डवानाम्।**
**जुगोप कुक्षिं गत आत्तचक्रो मातुश्च मे यः शरणं गतायाः॥ ६॥**

**पदार्थ—**
**कुरुपाण्डवानां** = कौरव र पाण्डवहरूको
**सन्तानबीजं** = वंशको एक मात्र बिउ भएको
**इदं** = यो
**द्रौण्यस्त्रविप्लुष्टं** = अश्वत्थामाको ब्रह्मास्त्रद्वारा डढाइएको
**मदङ्गं** = मेरो शरीरलाई
**आत्तचक्रः** = हातमा चक्र लिएका
**यः** = जो भगवान् श्रीकृष्णले
**शरणं गतायाः** = शरणमा परेकी
**मे** = मेरो
**मातुः** = आमा उत्तराको
**कुक्षिं** = पेटमा
**गतः** = प्रवेश गर्नुभयो र

**जुगोप** = (मेरो) रक्षा गर्नुभयो

**वाक्यार्थ–** कौरव र पाण्डववंशको एक मात्र बिउ भएको मेरो यो शरीरलाई अश्वत्थामाको ब्रह्मास्त्रले डढाएको थियो। त्यस बखतमा मेरी आमा उत्तरा भगवान् श्रीकृष्णको शरणमा पर्नुभयो अनि उहाँले हातमा चक्र लिएर मेरी आमाको पेटमा प्रवेश गरेर मेरो रक्षा गर्नुभयो।

**वीर्याणि तस्याखिलदेहभाजामन्तर्बहिः पूरुषकालरूपैः।**

**प्रयच्छतो मृत्युमुतामृतं च मायामनुष्यस्य वदस्व विद्वन्॥ ७॥**

**पदार्थ–**
**विद्वन्** = हे सर्वज्ञ
**अखिलदेहभाजां** = सम्पूर्ण प्राणीहरूको
**अन्तर्बहिः** = भित्र र बाहिर
**पूरुषकालरूपैः** = अन्तर्यामी र कालरूपले रहेर
**मृत्युं** = (कालरूपले) मृत्यु र
**उत** = अथवा
**अमृतं च** = (अन्तर्यामी रूपले रहेर) मोक्ष पनि
**प्रयच्छतः** = प्रदान गर्नुहुने
**तस्य** = त्यस्तो
**मायामनुष्यस्य** = (लीलाका लागि) मायाद्वारा मनुष्यको स्वरूप ग्रहण गर्नुहुने भगवान्का
**वीर्याणि** = चरित्रहरू
**वदस्व** = भन्नुहोस्

**वाक्यार्थ–** हे सर्वज्ञ शुकदेव ! सारा प्राणीहरूमा भित्र अन्तर्यामीरूपले र बाहिर कालरूपले बसेर कालरूपले मृत्यु र अन्तर्यामीरूपले मोक्ष दिनुहुने, मायाद्वारा मनुष्यको स्वरूप ग्रहण गर्नुहुने भगवान्का चरित्रहरू बताउनुहोस्।

**रोहिण्यास्तनयः प्रोक्तो रामः सङ्कर्षणस्त्वया।**

**देवक्या गर्भसम्बन्धः कुतो देहान्तरं विना॥ ८॥**

**पदार्थ–**
**त्वया** = हजुरद्वारा
**रोहिण्याः** = रोहिणीका
**तनयः** = छोरा
**सङ्कर्षणः रामः** = शेषावतार बलरामजी
**देवक्याः** = देवकीका छोरा हुनुहुन्छ भनेर
**प्रोक्तः** = बताइयो
**देहान्तरं विना** = अर्को शरीर नलिईकन
**गर्भसम्बन्धः** = अर्को गर्भबाट जन्मने कुरो
**कुतः** = कसरी (भयो)

**वाक्यार्थ–** हजुरले रोहिणीको छोरा शेषावतार बलरामजीलाई देवकीको (सातौँ) छोरा भनेर बताउनुभयो। अर्को शरीर नलिईकन अर्को गर्भबाट जन्मने कुरा कसरी सम्भव भयो ?

**कस्मान्मुकुन्दो भगवान् पितुर्गेहाद् व्रजं गतः।**

**क्व वासं ज्ञातिभिः सार्धं कृतवान् सात्वतां पतिः॥ ९॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**मुकुन्दः** = मुकुन्द (श्रीकृष्ण)
**पितुः** = पिताजीको
**गेहात्** = घरबाट
**कस्मात्** = किन
**व्रजं** = व्रज (गोकुल)मा
**गतः** = जानुभयो
**सात्वतां पतिः** = भक्तवत्सल

प्रभुले
**ज्ञातिभिः सार्धं** = बन्धुबान्धवहरूसँग
**क्व** = कहाँ-कहाँ
**वासं** = निवास
**कृतवान्** = गर्नुभयो

**वाक्यार्थ–** भगवान् मुकुन्द (श्रीकृष्ण) आफ्नो पिताजीको घरबाट व्रज (गोकुल)मा किन जानुभयो र त्यहाँ उहाँले बन्धुबान्धवहरूसँग कहाँ-कहाँ निवास गर्नुभयो ?

**व्रजे वसन् किमकरोन्मधुपुर्यां च केशवः।**
**भ्रातरं चावधीत् कंसं मातुरद्धातदर्हणम्॥ १०॥**

**पदार्थ–**
**केशवः** = भगवान् कृष्णले
**व्रजे** = व्रजमा र
**मधुपुर्यां** = मथुरामा पनि
**वसन्** = बसेर
**किं** = के-के कुरा
**अकरोत्** = गर्नुभयो र
**अतदर्हणं** = त्यसो गर्न (मार्न) अयोग्य
**मातुः** = आमाका
**भ्रातरं च** = दाजु (आफ्नो मामा)
**कंसं** = कंसलाई
**अद्धा** = आफैँले (किन)
**अवधीत्** = मार्नुभयो

**वाक्यार्थ–** भगवान् कृष्णले व्रजमा र मथुरामा बसेर के-के गर्नुभयो ? र मार्न नहुने आमाका दाजु (आफ्नो मामा) कंसलाई आफैँले किन मार्नुभयो ?

**देहं मानुषमाश्रित्य कति वर्षाणि वृष्णिभिः।**
**यदुपुर्यां सहावात्सीत् पत्न्यः कत्यभवन् प्रभोः॥ ११॥**

**पदार्थ–**
**मानुषं** = मानिसको
**देहं** = शरीर
**आश्रित्य** = धारण गरेर
**वृष्णिभिः सह** = वृष्णिवंशीहरूसँग
**यदुपुर्यां** = मथुरामा
**कति वर्षाणि** = कति वर्षसम्म
**अवात्सीत्** = बस्नुभयो र
**प्रभोः** = भगवान्का
**पत्न्यः** = पत्नीहरू
**कति अभवन्** = कति भए

**वाक्यार्थ–** मानिसको शरीर धारण गरेर भगवान् श्रीकृष्ण मथुरामा वृष्णिवंशीहरूसँग कति वर्ष बस्नुभयो र उहाँका पत्नीहरू कति थिए ?

**एतदन्यच्च सर्वं मे मुने कृष्णविचेष्टितम्।**
**वक्तुमर्हसि सर्वज्ञ श्रद्दधानाय विस्तृतम्॥ १२॥**

**पदार्थ–**
**सर्वज्ञ** = हे सर्वज्ञ
**मुने** = मुनि शुकदेव
**एतत्** = यी (मैले सोधेका) कुराहरू र
**अन्यत् च** = अरू (नसोधेका कुराहरू पनि)
**सर्वं** = सबै
**कृष्णविचेष्टितं** = भगवान् श्रीकृष्णले गर्नुभएका कुराहरू
**श्रद्दधानाय** = श्रद्धापूर्वक सुन्न चाहने
**मे** = मलाई
**विस्तृतं** = विस्तारपूर्वक
**वक्तुं** = बताउन
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे सर्वज्ञ शुकदेव ! हजुरले यी मैले सोधेका र नसोधेका पनि भगवान्का चरित्रहरू श्रद्धापूर्वक सुन्न चाहने मलाई विस्तारपूर्वक बताउनुहोस्।

**नैषातिदुःसहा क्षुन्मां त्यक्तोदमपि बाधते।**
**पिबन्तं त्वन्मुखाम्भोजच्युतं हरिकथामृतम् ॥ १३ ॥**

**पदार्थ–**
**त्यक्तोदम् अपि** = पानी पनि त्यागेको भए पनि
**त्वन्मुखाम्भोजच्युतं** = हजुरको मुखारविन्दबाट निस्किरहेको
**हरिकथामृतं** = हरिकथारूपी अमृतलाई
**पिबन्तं** = पान गरिरहेको
**मां** = मलाई
**एषा** = यो
**दुःसहा** = सहन गर्न नसकिने
**क्षुत्** = भोकले
**न बाधते** = बाधा पुऱ्याएको छैन

**वाक्यार्थ–** पानी पनि नपिई बसे पनि मलाई भोकले कत्ति पनि बाधा पुऱ्याएको छैन किनभने मैले हजुरको मुखारविन्दबाट निस्किरहेको भगवान्को लीलाकथारूपी अमृतलाई पान गरेको छु।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**एवं निशम्य भृगुनन्दन साधुवादं**
**वैयासकिः स भगवानथ विष्णुरातम्।**
**प्रत्यर्च्य कृष्णचरितं कलिकल्मषघ्नं**
**व्याहर्तुमारभत भागवतप्रधानः ॥ १४ ॥**

**पदार्थ–**
**भृगुनन्दन** = हे भृगुवंशी शौनकजी
**एवं** = यसरी (राजा परीक्षित्को)
**साधुवादं** = राम्रो कुरा
**निशम्य** = सुनेर
**अथ** = त्यसपछि
**सः** = ती
**भागवतप्रधानः** = भगवत्प्रेमीमा अग्रगण्य
**वैयासकिः** = व्यासपुत्र
**भगवान्** = भगवान् शुकदेवजीले
**विष्णुरातं** = राजा परीक्षित्लाई
**प्रत्यर्च्य** = प्रशंसा गरेर
**कलिकल्मषघ्नं** = कलिको मललाई नाश गर्ने
**कृष्णचरितं** = भगवान् श्रीकृष्णको चरित्र
**व्याहर्तुं** = सुनाउन
**आरभत** = आरम्भ गर्नुभयो

**वाक्यार्थ–** हे शौनकजी ! यस्तो राम्रो कुरा सुनेर भगवत्प्रेमीमा अग्रगण्य व्यासपुत्र भगवान् शुकदेवजीले पहिला राजा परीक्षित्को प्रशंसा गर्नुभयो र कलिको मललाई नाश गर्ने भगवान् श्रीकृष्णको चरित्र सुनाउन लाग्नुभयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सम्यग्व्यवसिता बुद्धिस्तव राजर्षिसत्तम।**

**वासुदेवकथायां ते यज्जाता नैष्ठिकी रतिः ॥ १५ ॥**

**पदार्थ–**
**राजर्षिसत्तम** = हे राजर्षिश्रेष्ठ परीक्षित्
**तव** = तपाईंको
**बुद्धिः** = बुद्धिले
**सम्यक् व्यवसिता** = (भगवान्को लीला श्रवणको) पक्का निश्चय गरेको छ
**यत्** = किनभने
**वासुदेवकथायां** = भगवान् वासुदेवको चरित्रमा
**ते** = तपाईंको
**नैष्ठिकी** = सुदृढ
**रतिः** = प्रेम
**जाता** = भइसकेको छ

**वाक्यार्थ–** हे राजर्षिश्रेष्ठ परीक्षित् ! तपाईंको निर्मल बुद्धिले भगवान्को लीलाश्रवणको निश्चय गरेको छ किनभने भगवान् वासुदेवको चरित्रमा तपाईंको सुदृढ प्रेम भइसकेको छ।

**वासुदेवकथाप्रश्नः पुरुषांस्त्रीन् पुनाति हि ।**
**वक्तारं प्रच्छकं श्रोतॄंस्तत्पादसलिलं यथा ॥ १६ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**तत्पादसलिलं** = भगवान् श्रीहरिको चरणबाट झरेकी गङ्गाले (स्वर्ग, मर्त्य र पाताल तीन लोकलाई पवित्र पार्छिन्)
**तथा** = त्यसै गरी
**वासुदेवकथाप्रश्नः** = भगवान् श्रीकृष्णको विषयमा गरिएको प्रश्नले पनि
**हि** = निश्चय नै
**वक्तारं** = वक्ता
**प्रच्छकं** = सोध्ने व्यक्ति र
**श्रोतॄन्** = सुन्ने व्यक्ति गरी
**त्रीन् पुरुषान्** = तीन किसिमका मानिसलाई
**पुनाति** = पवित्र पार्दछ

**वाक्यार्थ–** जसरी भगवान् श्रीहरिको चरणबाट झरेकी गङ्गाले स्वर्ग, मर्त्य र पाताल तीनै लोकलाई पवित्र पार्दछिन् त्यसै गरी भगवान् श्रीकृष्णको विषयमा सोधिएको प्रश्नले पनि वक्ता, सोध्ने र सुन्ने गरी तीनै किसिमका मानिसलाई पवित्र पार्दछ।

**भूमिर्दृप्तनृपव्याजदैत्यानीकशतायुतैः ।**
**आक्रान्ता भूरिभारेण ब्रह्माणं शरणं ययौ ॥ १७ ॥**

**पदार्थ–**
**दृप्तनृपव्याजदैत्यानीक-शतायुतैः** = घमन्डी राजाहरूको रूपमा आएका हजारौँ दैत्यहरूको समूहले गर्दा
**भूरिभारेण** = असह्य भारका कारण
**आक्रान्ता** = दुःखी भएकी
**भूमिः** = पृथिवी
**ब्रह्माणं** = ब्रह्माजीको
**शरणं** = शरणमा
**ययौ** = गइन्

**वाक्यार्थ–** त्यस समयमा हजारौँ दैत्यका समूहले घमन्डी राजाको रूप लिँदा तिनीहरूको असह्य भारले आक्रान्त भएकी पृथिवी दुःखी भएर ब्रह्माजीको शरणमा गइन्।

**गौर्भूत्वाश्रुमुखी खिन्ना क्रन्दन्ती करुणं विभोः ।**

**उपस्थितान्तिके तस्मै व्यसनं स्वमवोचत ॥ १८ ॥**

**पदार्थ–**
**खिन्ना** = अति खिन्न भएकी
**अश्रुमुखी** = आँसु बगाइरहेकी र
**करुणं** = करुण स्वरमा
**क्रन्दन्ती** = रुँदै गरेकी पृथिवी
**गौः भूत्वा** = गाईको रूप धारण गरेर
**विभोः** = ब्रह्माजीको
**अन्तिके** = नजिकमा
**उपस्थिता** = उपस्थित भइन् र
**तस्मै** = ती ब्रह्माजीलाई
**स्वं** = आफ्ना
**व्यसनं** = कष्टहरू
**अवोचत** = भनिन्

**वाक्यार्थ–** चिन्ताले खिन्न भएकी र आँखाबाट आसु बगाएर करुण स्वरले रुँदै गरेकी गाईको रूप धारण गरेकी पृथिवीले ब्रह्माजीको नजिकमा गएर आफ्ना सारा कष्टहरू बताइन्।

**ब्रह्मा तदुपधार्याथ सह देवैस्तया सह ।**
**जगाम सत्रिनयनस्तीरं क्षीरपयोनिधेः ॥ १९ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**ब्रह्मा** = ब्रह्माजी
**तत्** = ती सबै कुरा
**उपधार्य** = सुनेर
**देवैः सह** = देवताहरूसहित
**सत्रिनयनः** = (तीन नेत्र भएका) शङ्करजीलाई पनि साथमा लिएर
**तया सह** = ती पृथिवीलाई पनि सँगै लिएर
**क्षीरपयोनिधेः** = क्षीरसागरको
**तीरं** = तीरमा
**जगाम** = जानुभयो

**वाक्यार्थ–** त्यसपछि सबै कुरा बुझेर ब्रह्माजी देवताहरू, शङ्करजी र पृथिवीलाई पनि साथमा लिई क्षीरसागरको तीरमा जानुभयो।

**तत्र गत्वा जगन्नाथं देवदेवं वृषाकपिम् ।**
**पुरुषं पुरुषसूक्तेन उपतस्थे समाहितः ॥ २० ॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**गत्वा** = गएर
**समाहितः** = एकाग्रचित्त भएका ब्रह्माजीले
**देवदेवं** = देवताहरूका पनि देवता
**जगन्नाथं** = जगत्का स्वामी
**वृषाकपिं पुरुषं** = परमपुरुष भगवान् विष्णुलाई
**पुरुषसूक्तेन** = पुरुषसूक्तद्वारा
**उपतस्थे** = स्तुति गर्न थाल्नुभयो

**वाक्यार्थ–** त्यो क्षीरसागरको तीरमा गएर ब्रह्माजीले एकाग्रचित्त भई देवाधिदेव जगन्नाथ परमपुरुष भगवान् विष्णुको पुरुषसूक्तद्वारा स्तुति गर्न थाल्नुभयो।

**गिरं समाधौ गगने समीरितां निशम्य वेधास्त्रिदशानुवाच ह ।**
**गां पौरुषीं मे शृणुतामराः पुनर्विधीयतामाशु तथैव मा चिरम् ॥ २१ ॥**

**पदार्थ–**
**वेधाः** = ब्रह्माजीले
**गगने** = आकाशमा

**समीरितां** = भनिएको
**गिरं** = बोलीलाई
**समाधौ** = समाधि अवस्थामा
**निशम्य** = सुनेर
**त्रिदशान्** = देवताहरूलाई
**ह** = निश्चय नै
**उवाच** = भन्नुभयो
**अमराः** = हे देवताहरू
**पौरुषीं** = भगवान्‌ले भन्नुभएको
**गां** = कुरा
**मे** = मबाट
**आशु** = चाँडै नै
**शृणुत** = सुन्नुहोस् र
**पुनः** = फेरि
**मा चिरं** = चाँडै नै
**तथा एव** = त्यस्तै नै
**विधीयताम्** = गर्नुहोस् पनि

**वाक्यार्थ–** आकाशवाणीले भनेको कुरा ब्रह्माजीले समाधि अवस्थामा सुन्नुभयो र अरू देवताहरूलाई भन्नुभयो– हे देवताहरू ! भगवान्‌ले भन्नुभएको कुरा मबाट सुन्नुहोस् र त्यसलाई चाँडै नै सबैले गर्नुहोस्।

**पुरैव पुंसावधृतो धराज्वरो भवद्भिरंशैर्यदुषूपजन्यताम्।**
**स यावदुर्व्या भरमीश्वरेश्वरः स्वकालशक्त्या क्षपयंश्चरेद् भुवि ॥ २२ ॥**

**पदार्थ–**
**पुंसा** = भगवान्‌द्वारा
**धराज्वरः** = पृथिवीको कष्ट
**पुरा एव** = पहिले नै
**अवधृतः** = बुझिसकिएको छ
**सः** = त्यस्ता
**ईश्वरेश्वरः** = ईश्वरका पनि ईश्वर परमात्माले
**स्वकालशक्त्या** = आफ्नो कालशक्तिको आधारमा
**यावत्** = जबसम्म
**उर्व्याः** = पृथिवीको
**भरं** = भारलाई
**क्षपयन्** = हरण गर्दै
**भुवि** = पृथिवीमा
**चरेत्** = घुमफिर गर्नुहुन्छ
(त्यसबखतसम्म)
**भवद्भिः** = तपाईंहरूद्वारा
**अंशैः** = अंशावतारद्वारा
**यदुषु** = यदुवंशमा
**उपजन्यताम्** = जन्म लिएर रहनुपर्छ

**वाक्यार्थ–** पृथिवीको यो कष्टलाई भगवान्‌ले पहिले नै बुझिसक्नुभएको छ। त्यसैले त्यो भारहरणको लागि भगवान्‌ले आफ्नो कालशक्तिको आधारमा पृथिवीमा अवतार लिएर जहिलेसम्म घुम्नुहुन्छ तहिलेसम्म तपाईंहरूले पनि उहाँको अंशावतारको रूपमा यदुकुलमा जन्म लिएर रहनुपर्छ।

**वसुदेवगृहे साक्षाद् भगवान् पुरुषः परः।**
**जनिष्यते तत्प्रियार्थं सम्भवन्तु सुरस्त्रियः॥ २३ ॥**

**पदार्थ–**
**वसुदेवगृहे** = वसुदेवको घरमा
**साक्षाद् भगवान्** = साक्षात् भगवान् नारायण
**परः पुरुषः** = परम पुरुष नै
**जनिष्यते** = जन्म लिँदै हुनुहुन्छ
**तत्प्रियार्थं** = उहाँको खुसीको लागि
**सुरस्त्रियः** = देवाङ्गनाहरूले पनि
**सम्भवन्तु** = जन्म लिनू

**वाक्यार्थ–** वसुदेवको घरमा साक्षात् परमपुरुष नारायणले जन्म लिँदै हुनुहुन्छ। त्यसैले उहाँको खुसीको लागि देवाङ्गनाहरूले पनि जन्म लिनू।

**वासुदेवकलानन्तः सहस्रवदनः स्वराट् ।**
**अग्रतो भविता देवो हरेः प्रियचिकीर्षया ॥ २४ ॥**

| पदार्थ– | **सहस्रवदनः** = हजारमुखी | **देवः** = भगवान् पनि |
|---|---|---|
| **हरेः** = श्रीहरिको | **स्वराट्** = स्वयंप्रकाश | **अग्रतः** = (जेठो दाजुको रूपमा) अगाडि नै |
| **प्रियचिकीर्षया** = प्रिय काम गर्नको लागि | **वासुदेवकलानन्तः** = सर्वव्यापी भगवान्कै अंश अनन्त | **भविता** = जन्मनुहुनेछ |

**वाक्यार्थ–** भगवान् श्रीहरिकै प्रिय काम सघाउनका लागि सर्वव्यापी भगवान्कै अंश स्वयंप्रकाश हजारमुखी अनन्त भगवान् अगाडि नै जेठो दाजुको रूपमा जन्मनुहुनेछ।

**विष्णोर्माया भगवती यया सम्मोहितं जगत् ।**
**आदिष्टा प्रभुणांशेन कार्यार्थे सम्भविष्यति ॥ २५ ॥**

| पदार्थ– | **विष्णोः** = भगवान् विष्णुकी | **कार्यार्थे** = भगवान्को काम पूरा गर्नका लागि |
|---|---|---|
| **यया** = जुन मायाद्वारा | **भगवती** = ऐश्वर्यशालिनी | |
| **जगत्** = संसार | **माया** = माया | **अंशेन** = अंशरूपले |
| **सम्मोहितं** = मोहमा परेको छ (त्यस्ती) | **प्रभुणा** = भगवान्बाट | **सम्भविष्यति** = (यशोदाबाट) जन्मनेछिन् |
| | **आदिष्टा** = आदेश पाएर | |

**वाक्यार्थ–** जुन मायाद्वारा सारा जगत् मोहमा परेको छ, त्यस्ती माया पनि भगवान्को काम पूरा गर्नका लागि उहाँबाट आदेश पाएर अंशरूपले जन्मनेछिन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यादिश्यामरगणान् प्रजापतिपतिर्विभुः ।**
**आश्वास्य च महीं गीर्भिः स्वधाम परमं ययौ ॥ २६ ॥**

| पदार्थ– | **इति** = यसरी | **परमं** = उत्कृष्ट |
|---|---|---|
| **प्रजापतिपतिः** = प्रजापतिहरूका पनि मालिक | **आदिश्य** = आदेश दिएर | **स्वधाम** = आफ्नो धाममा |
| | **महीं च** = पृथिवीलाई पनि | **ययौ** = जानुभयो |
| **विभुः** = सर्वसमर्थ ब्रह्माजी | **गीर्भिः** = वाणीहरूद्वारा | |
| **अमरगणान्** = देवताहरूलाई | **आश्वास्य** = आश्वासन दिएर | |

**वाक्यार्थ–** प्रजापतिहरूका मालिक ब्रह्माजीले देवताहरूलाई यस्तो आदेश दिएर र पृथिवीलाई पनि सम्झाउनुभयो र उहाँ आफ्नो उत्कृष्ट धाममा जानुभयो।

**शूरसेनो यदुपतिर्मथुरामावसन् पुरीम् ।**

**माथुराञ्छूरसेनांश्च विषयान् बुभुजे पुरा ॥ २७ ॥**

**पदार्थ–**
**पुरा** = पहिले
**यदुपतिः** = यदुहरूका राजा
**शूरसेनः** = शूरसेन
**मथुरां पुरीं** = मथुरा नगरीमा
**आवसन्** = बसेर
**माथुरान्** = माथुरमण्डललाई
**शूरसेनान्** = शूरसेन मण्डललाई
**विषयान् च** = विभिन्न देशहरूलाई पनि
**बुभुजे** = शासन गर्दथे

**वाक्यार्थ–** पहिले यदुवंशी राजा शूरसेन मथुरामा बसेर मथुराका अरू साना राज्यहरू र शूरसेन लगायत विभिन्न देशहरूको शासन गर्दथे।

**राजधानी ततः साभूत् सर्वयादवभूभुजाम् ।**

**मथुरा भगवान् यत्र नित्यं सन्निहितो हरिः ॥ २८ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**यत्र** = जहाँ
**भगवान् हरिः** = भगवान् श्रीहरि
**नित्यं** = सधैं
**सन्निहितः** = बस्नुहुन्छ
**सा** = त्यस्तो
**मथुरा** = मथुरा नगरी
**सर्वयादवभूभुजां** = सम्पूर्ण यदुवंशी राजाहरूको
**राजधानी** = राजधानी
**अभूत्** = भयो

**वाक्यार्थ–** त्यसपछि सधैं भगवान् श्रीहरिले निवास गर्ने मथुरा नगरी सारा यादव राजाहरूको राजधानी भयो।

**तस्यां तु कर्हिचिच्छौरिर्वसुदेवः कृतोद्वहः ।**

**देवक्या सूर्यया सार्धं प्रयाणे रथमारुहत् ॥ २९ ॥**

**पदार्थ–**
**कर्हिचित्** = कुनै समयमा
**तस्यां तु** = त्यो मथुरा नगरमा
**कृतोद्वहः** = विवाह गरेर
**शौरिः** = शूरका छोरा
**वसुदेवः** = वसुदेव
**सूर्यया** = नवविवाहिता पत्नी
**देवक्या सार्धं** = देवकीसहित
**प्रयाणे** = घर फर्कनका लागि
**रथं** = रथमा
**आरुहत्** = चढ्नुभएको थियो

**वाक्यार्थ–** त्यो मथुरा नगरमा कुनै समयमा शूरपुत्र वसुदेव विवाह गरेर नवविवाहिता पत्नी देवकीसहित घर फर्कन रथमा चढ्नुभएको थियो।

**उग्रसेनसुतः कंसः स्वसुः प्रियचिकीर्षया ।**

**रश्मीन् हयानां जग्राह रौक्मै रथशतैर्वृतः ॥ ३० ॥**

**पदार्थ–**
**रौक्मैः** = स्वर्णभूषित
**रथशतैः** = सयौं रथहरूद्वारा
**वृतः** = घेरिएको
**उग्रसेनसुतः** = उग्रसेनको छोरो
**कंसः** = राजकुमार कंसले

**स्वसुः** = बहिनीको
**प्रियचिकीर्षया** = खुसी चाहँदै
**हयानां** = रथका घोडाहरूको
**रश्मीन्** = लगाम
**जग्राह** = समात्यो

**वाक्यार्थ–** सयौँ स्वर्णभूषित रथहरूद्वारा घेरिएको उग्रसेनको छोरो कंसले आफ्नी बहिनी देवकीको खुसीका लागि (घर पुऱ्याउन आफैँले) रथ चलाउन घोडाको लगाम समात्यो।

**चतुःशतं पारिबर्हं गजानां हेममालिनाम्।**
**अश्वानामयुतं सार्धं रथानां च त्रिषट्शतम्॥ ३१॥**
**दासीनां सुकुमारीणां द्वे शते समलङ्कृते।**
**दुहित्रे देवकः प्रादाद् याने दुहितृवत्सलः॥ ३२॥**

**पदार्थ–**
**दुहितृवत्सलः** = छोरीलाई प्यारो गर्ने
**देवकः** = देवक (देवकीका पिता)ले
**याने** = विवाह गरेर पठाउने वेलामा
**दुहित्रे** = आफ्नी छोरीलाई
**हेममालिनाम्** = सुनका मालाले सुशोभित
**गजानां** = हात्तीहरू
**चतुःशतं** = चार सय
**अश्वानां** = घोडाहरू
**सार्धं अयुतं** = (आधा सहित दश हजार) पन्ध्र हजार
**रथानां** = रथहरू
**त्रिषट्शतम्** = (तीन गुणा छ सय) अठार सय र
**सुकुमारीणां** = सुन्दरी
**दासीनां च** = दासीहरू
**समलङ्कृते** = सिङ्गारिएका
**द्वे शते** = दुई सय
**पारिबर्हं** = दाइजोको रूपमा
**प्रादात्** = दिए

**वाक्यार्थ–** छोरीलाई प्यारो गर्ने देवकले विवाह गरेर पठाउने वेलामा सुनका माला लगाएका चार सय हात्ती, पन्ध्र हजार घोडा, अठार सय रथ र दुई सय सिङ्गारिएका सुन्दरी दासीहरू दाइजोको रूपमा दिए।

**शङ्खतूर्यमृदङ्गाश्च नेदुर्दुन्दुभयः समम्।**
**प्रयाणप्रक्रमे तावत् वरवध्वोः सुमङ्गलम्॥ ३३॥**

**पदार्थ–**
**तावत्** = त्यो
**प्रयाणप्रक्रमे** = बिदाइको समयमा
**वरवध्वोः** = वर र वधूको
**सुमङ्गलम्** = मङ्गलको लागि
**शङ्खतूर्यमृदङ्गाः** = शङ्ख, तुरही, मादल र
**दुन्दुभयः च** = दमाहाहरू पनि
**समं** = एकै चोटि
**नेदुः** = बजे

**वाक्यार्थ–** वर र वधूको बिदाइको समयमा मङ्गलका लागि शङ्ख, तुरही, मादल र दमाहाहरू पनि एकै चोटि बजे।

**पथि प्रग्रहिणं कंसमाभाष्याहाशरीरवाक्।**

**अस्यास्त्वामष्टमो गर्भो हन्ता यां वहसेऽबुध ॥ ३४ ॥**

**पदार्थ–**
**पथि** = बाटामा
**अशरीरवाक्** = आकाशवाणीले
**प्रग्रहिणं** = रथको लगाम समातेको
**कंसं** = कंसलाई
**आभाष्य** = सम्बोधन गरेर
**आह** = भन्यो
**अबुध** = हे मूर्ख
**यां** = जसलाई
**वहसे** = रथमा लिएर हिँडिरहेको छस्
**अस्याः** = यिनै देवकीको
**अष्टमः गर्भः** = आठौँ सन्तानले
**त्वां** = तँलाई
**हन्ता** = मार्नेछ

**वाक्यार्थ–** बाटामा रथको लगाम समातेको कंसलाई सम्बोधन गरेर आकाशवाणी भयो– हे मूर्ख कंस ! तैँले जसलाई रथमा लिएर हिँडिरहेको छस् यिनै देवकीको आठौँ सन्तानले तँलाई मार्नेछ।

**इत्युक्तः स खलः पापो भोजानां कुलपांसनः ।**
**भगिनीं हन्तुमारब्धः खड्गपाणिः कचेऽग्रहीत् ॥ ३५ ॥**

**पदार्थ–**
**इति उक्तः** = यस्तो भनिएको
**भोजानां** = भोजवंशको
**कुलपांसनः** = कुलको कलङ्क
**सः** = त्यो
**खलः** = मूर्ख
**पापः** = पापी कंसले
**खड्गपाणिः** = हातमा खड्ग लिएर
**भगिनीं** = बहिनी देवकीलाई
**हन्तुं** = मार्न
**आरब्धः** = आँट्यो र
**कचे** = चुल्ठामा
**अग्रहीत्** = समात्यो

**वाक्यार्थ–** यस्तो आकाशवाणी सुनेपछि भोजवंशको कुलकलङ्क त्यो मूर्ख कंसले हातमा तरबार लिएर बहिनी देवकीलाई मार्नका लागि चुल्ठामा समात्यो।

**तं जुगुप्सितकर्माणं नृशंसं निरपत्रपम् ।**
**वसुदेवो महाभाग उवाच परिसान्त्वयन् ॥ ३६ ॥**

**पदार्थ–**
**जुगुप्सितकर्माणं** = निन्दित काम गर्न लागेको
**नृशंसं** = क्रूर र
**निरपत्रपं** = लाजरहित
**तं** = त्यो दुष्ट कंसलाई
**परिसान्त्वयन्** = प्रशंसा गरेर सान्त्वना दिँदै
**महाभागः** = भाग्यशाली
**वसुदेवः** = वसुदेवले
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** अत्यन्त निन्दित काम गर्ने, क्रूर र लाजहीन त्यो कंसलाई प्रशंसा गरेर शान्त पार्दै परम भाग्यवान् वसुदेवले भन्नुभयो।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**श्लाघनीयगुणः शूरैर्भवान् भोजयशस्करः।**
**स कथं भगिनीं हन्यात् स्त्रियमुद्वाहपर्वणि॥ ३७॥**

**पदार्थ–**
**शूरैः** = वीरहरूद्वारा पनि
**श्लाघनीयगुणः** = गुणको प्रशंसा गरिएका
**भोजयशस्करः** = भोजवंशकै अलङ्कार
**सः** = त्यस्ता
**भवान्** = हजुर कंसले
**स्त्रियं** = स्त्रीलाई (त्यसमा पनि)
**भगिनीं** = बहिनीलाई (र त्यो पनि)
**उद्वाहपर्वणि** = विवाहको महोत्सवमा
**कथं** = कसरी
**हन्यात्** = मार्नुहुन्छ

**वाक्यार्थ–** वीरहरूद्वारा समेत प्रशंसा गरिने अनि भोजवंशकै अलङ्कार हुनुभएका हजुरले स्त्री, त्यसमा पनि बहिनी र फेरि विवाहको महोत्सवमा यिनलाई कसरी मार्नहुन्छ ?

**मृत्युर्जन्मवतां वीर देहेन सह जायते।**
**अद्य वाब्दशतान्ते वा मृत्युर्वै प्राणिनां ध्रुवः॥ ३८॥**

**पदार्थ–**
**वीर** = हे वीर
**जन्मवतां** = जन्मनेका लागि
**मृत्युः** = मृत्यु त
**देहेन सह** = शरीरसँगसँगै
**जायते** = जन्मन्छ वा आउँछ (फरक के छ भने)
**अद्य वा** = अथवा आज
**अब्दशतान्ते वा** = सय वर्षपछि होला (तर)
**वै** = निश्चय नै
**प्राणिनां** = प्राणीहरूको
**मृत्युः** = मृत्यु चाँहि
**ध्रुवः** = निश्चित नै छ

**वाक्यार्थ–** हे वीर ! मृत्यु त जन्मनेका लागि शरीरसँगसँगै आएको हुन्छ। आज हुने अथवा सय वर्षपछि हुने, फरक यत्ति मात्रै हो, प्राणीका लागि मृत्यु त निश्चित नै छ।

**देहे पञ्चत्वमापन्ने देही कर्मानुगोऽवशः।**
**देहान्तरमनुप्राप्य प्राक्तनं त्यजते वपुः॥ ३९॥**

**पदार्थ–**
**कर्मानुगः** = कर्मको अनुसरण गर्ने
**अवशः** = आफ्नो वशमा नभएको
**देही** = प्राणीले
**देहे** = शरीर
**पञ्चत्वम् आपन्ने** = मरेपछि
**देहान्तरं** = अर्को शरीर
**अनुप्राप्य** = प्राप्त गरेर
**प्राक्तनं** = पहिलेको
**वपुः** = शरीरलाई
**त्यजते** = त्याग्दछ

**वाक्यार्थ–** कर्मको वशमा रहेको र आफ्नो वशमा नरहेको प्राणीले मरेपछि अर्को शरीर प्राप्त गरेर यो शरीरलाई त्याग्दछ।

**व्रजंस्तिष्ठन् पदैकेन यथैवैकेन गच्छति।**

## यथा तृणजलौकैवं देही कर्मगतिं गतः ॥ ४० ॥

**पदार्थ–**
**व्रजन्** = हिँड्दै गरेको मानिस
**यथा** = जसरी
**एकेन पदा** = एउटा खुट्टाले
**तिष्ठन्** = पहिलेकै ठाउँमा बसेर
**एकेन एव** = अर्को एउटा खुट्टाले मात्र अर्को ठाउँमा टेक्दछ
**यथा** = जसरी
**तृणजलौका** = जुकाले (अर्को टेक्ने ठाउँ पाएपछि मात्र पहिले टेकेको ठाउँलाई छाड्दछ)
**एवं** = त्यसै गरी
**कर्मगतिं गतः** = कर्मगतिको आधारमा हिँडेको
**देही** = जीव पनि
**गच्छति** = (अर्को शरीरको निश्चय भएपछि मात्र यस शरीरबाट) हिँड्दछ

**वाक्यार्थ–** हिँडेको मानिसले जसरी एउटा खुट्टा पहिलेकै ठाउँमा राखेर अर्को खुट्टाले नयाँ ठाउँमा टेक्दछ, जुकाले जसरी अर्को टेक्ने ठाउँ पाएपछि मात्र पहिले टेकेको ठाउँलाई छाड्दछ, त्यस्तै कर्मगतिको आधारमा जन्म-जन्मान्तर घुम्ने जीवले पनि अर्को शरीरको निश्चय भएपछि मात्र यस शरीरलाई त्याग्दछ।

## स्वप्ने यथा पश्यति देहमीदृशं मनोरथेनाभिनिविष्टचेतनः ।
## दृष्टश्रुताभ्यां मनसानुचिन्तयन् प्रपद्यते तत् किमपि ह्यपस्मृतिः ॥ ४१ ॥

**पदार्थ–**
**दृष्टश्रुताभ्यां** = देखिएका र सुनिएका कुराहरूका आधारमा
**मनसा** = अभिलाषा युक्त मनले
**अनुचिन्तयन्** = बारम्बार चिन्तन गर्दा वा
**मनोरथेन** = मानसिक कल्पनाले
**अभिनिविष्टचेतनः** = तन्मय चित्त गराएर बसेको व्यक्तिले
**स्वप्ने** = स्वप्नावस्थामा
**यथा** = जसरी
**ईदृशं देहं** = वास्तविक यस्तो शरीर चाहिँ
**अपस्मृतिः** = बिर्सिएको (र कल्पनाअनुसारको प्राप्त भएको)
**पश्यति** = देख्दछ
**हि** = निश्चय नै (जीवले पनि)
**तत् किम् अपि** = कर्मवासनाको आधारमा कुनै अर्को देहलाई
**प्रपद्यते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** जसरी देखिएका र सुनिएका कुराहरूलाई प्राप्त गर्ने अभिलाषा राखी बारम्बार चिन्तन गर्दा तन्मय चित्त गराएर बसेको व्यक्तिले स्वप्नावस्थामा वास्तविक शरीरलाई बिर्सिएर कल्पनाअनुसारको प्राप्त भएको शरीरमा रमाउँछ त्यसै गरी कर्मको गतिलाई पछ्याउने जीवले पनि अर्को कुनै शरीरलाई प्राप्त गर्दछ (र पहिलाको शरीरलाई भुलिदिन्छ)।

**विवरण–** यस श्लोकमा संसारका सम्पूर्ण व्यवहारहरूलाई मिथ्या सिद्ध गर्ने उपाय बताइएको छ। मानिसहरूले संसारलाई व्यवहाररूपी प्रयोजन सिद्ध गर्नका लागि नै सत्य एवं स्थिर मानेका हुन्। उनीहरूको तर्क के हुन्छ भने पानी ल्याउन असली घैंटोको आवश्यकता पर्दछ, कल्पनाको भोजन गरेर कोही अघाउँदैन। संसारका सम्पूर्ण व्यवहारमा सत्य वस्तुले मात्र काम गर्दछ भने संसारका पदार्थ कसरी स्वप्न झैं मिथ्या हुन सक्छन् ? यस शङ्काको उत्तरमा विचारकहरूले के बताएका छन् भने जाग्रत्का पदार्थहरूको यो व्यवहार गर्ने प्रयोजन पनि कहीँ-कहीँ नभएको देखिन्छ। जसरी स्वप्नका पदार्थ खाएर जाग्रत्को भोक नमर्ने हुनाले तिनलाई मिथ्या मान्न तिमी तयार भएका छौ,

त्यसै गरी जाग्रत्का पदार्थ खाएर सुतेको व्यक्तिलाई सपनाको भोक लाग्दा त्यो बाहिरी भोजनले काम दिँदैन, सपनाकै भोजन चाहिन्छ। त्यसैले स्वप्नको व्यवहारको लागि जाग्रत्का पदार्थ सत्य सिद्ध हुँदैनन्, बरु मिथ्या नै बन्दछन्। प्रस्तुत श्लोकमा पनि कल्पनाको संसारमा र स्वप्नमा जाग्रत्को शरीरलाई बिर्सिइने कुरा बताइएको छ। स्मृतिको आधारमा स्वप्न र जाग्रत्को विषयमा विचार गर्ने हो भने त जाग्रत्भन्दा स्वप्न नै बलियो देखा पर्छ किनभने सपनामा देखेको घटना, ठाउँ, पात्र आदि सबै उठिसकेपछि पनि मानिसलाई सम्झना भइरहन्छ, तर जाग्रत्कालको अनुभव स्वप्नमा पुग्दैन। स्वप्नमा व्यक्ति आफू सुतेको खाट, घर, त्यो कोठामा रहेको वस्तु, अरु शरीरलाई नै बिर्सन पुग्दछ र आफूलाई कुनै अन्यत्र ठाउँमा घुमिरहेको देख्छ। मानिसहरू शरीरलाई असाध्यै मान्यता दिन्छन्। उनीहरू स्थूल शरीरलाई सर्वस्व सम्झिन्छन्, तर त्यसले स्वप्नको अर्को शरीरलाई हटाउन या असत्य साबित गर्न सक्दैन। बरु विचार गर्ने हो भने आफैं असत्य सिद्ध हुन्छ। जाग्रत्का पदार्थहरूको व्यवहारोपयोगिता स्वप्नमा समाप्त हुन्छ। यही उपायले यहाँ जाग्रत्को शरीर र पदार्थहरूलाई मिथ्या सिद्ध गरिएको छ।

**यतो यतो धावति दैवचोदितं मनो विकारात्मकमाप पञ्चसु।**
**गुणेषु मायारचितेषु देह्यसौ प्रपद्यमानः सह तेन जायते॥ ४२॥**

**पदार्थ—**
**दैवचोदितं** = प्रारब्धद्वारा प्रेरणा गरिएको
**विकारात्मकं** = विकारहरूले युक्त
**मनः** = मन
**मायारचितेषु** = मायाले सृष्टि गरेका
**पञ्चसु गुणेषु** = पाञ्चभौतिक गुणहरूमा
**यतः यतः** = जहाँ-जहाँ
**धावति** = घुम्छ (र यो मेरो हो भन्ने आफ्नो भावना गर्दछ त्यसलाई)
**आप** = प्राप्त गर्दछ र
**असौ** = यो
**देही** = जीवात्मा पनि
**तेन सह** = त्यो मनसँग
**प्रपद्यमानः** = एकीभावको अनुभव गरेर
**जायते** = जन्मन्छ

**वाक्यार्थ—** प्रारब्धद्वारा प्रेरित एवं विकारहरूले युक्त भएको मन मायाले सृष्टि गरेका पाञ्चभौतिक प्रपञ्चमा जहाँ-जहाँ घुम्दछ त्यहाँ-त्यहाँ उसले पाञ्चभौतिक गुणहरूयुक्त शरीरलाई प्राप्त गर्दछ अनि त्यसै मनसँग मिलेर यो जीवात्मा पनि सँगै जन्मन्छ।

**ज्योतिर्यथैवोदकपार्थिवेष्वदः समीरवेगानुगतं विभाव्यते।**
**एवं स्वमायारचितेष्वसौ पुमान् गुणेषु रागानुगतो विमुह्यति॥ ४३॥**

**पदार्थ—**
**यथा** = जसरी
**उदकपार्थिवेषु** = पानी राखेको भाँडाहरूमा
**अदः** = यो (प्रतिबिम्बित भएर रहेको सूर्य आदिको)
**ज्योतिः** = प्रकाश
**समीरवेगानुगतं** = हावाले पानी हल्लाउँदा हल्लिएको जस्तो
**विभाव्यते** = अनुभव हुन्छ
**एवं** = त्यसै गरी
**स्वमायारचितेषु** = आफ्नै

अविद्याको कारणले देखापरेको
**गुणेषु** = शरीर आदिमा
**असौ** = यो
**पुमान्** = जीवात्मा
**रागानुगतः** = आत्मबुद्धि गरेर
**विमुह्यति** = मोहित हुन्छ

**वाक्यार्थ–** जसरी पानी राखेको भाँडामा सूर्य आदिको प्रतिबिम्ब पर्दा हावाले पानी हल्लायो भने सूर्य आदि पनि हल्लिएको जस्तो लाग्छ, त्यसै गरी आफ्नै अविद्याको कारणले देखापरेको शरीर आदिमा यो जीवात्मा आत्मबुद्धि गरेर मोहित हुन्छ। (त्यसैले जीवात्माले शरीर जन्मँदा जन्मिएको र मर्दा मरेको अनुभव गर्छ, वास्तवमा यो कुरा साँचो होइन।)

**तस्मान्न कस्यचिद् द्रोहमाचरेत् स तथाविधः।**
**आत्मनः क्षेममन्विच्छन् द्रोग्धुर्वै परतो भयम्॥ ४४॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**आत्मनः** = आफ्नो
**क्षेमं** = कल्याण
**अन्विच्छन्** = चाहने
**तथाविधः** = त्यस्तो
**सः** = त्यो जीवात्माले (प्राणीले)
**कस्यचित्** = कसैको पनि
**द्रोहं** = द्रोह
**न आचरेत्** = नगरोस्
**वै** = निश्चय नै
**द्रोग्धुः** = अर्काको द्रोह गर्ने व्यक्तिलाई
**परतः** = परलोकबाट
**भयम्** = भय छ

**वाक्यार्थ–** त्यसैले प्राणीहरूले आफ्नो कल्याण चाहने प्राणीले अर्काको द्रोह गर्नु हुँदैन, अर्काको द्रोह गर्नेलाई परलोकबाट भय हुन्छ।

**एषा तवानुजा बाला कृपणा पुत्रिकोपमा।**
**हन्तुं नार्हसि कल्याणीमिमां त्वं दीनवत्सलः॥ ४५॥**

**पदार्थ–**
**एषा** = यिनी
**तव** = हजुरकी
**अनुजा** = बहिनी हुन्
**बाला** = सानै छिन्
**कृपणा** = अत्यन्त दुःखी पनि छिन् (वास्तवमा)
**पुत्रिकोपमा** = यिनी छोरी बराबरकी हुन्
**त्वं** = हजुर
**दीनवत्सलः** = दुःखीलाई दया गर्ने व्यक्ति हुनुहुन्छ (त्यसैले)
**कल्याणीम्** = माङ्गलिक शृङ्गारले सुशोभित
**इमां** = यिनलाई
**हन्तुं** = मार्न
**न अर्हसि** = योग्य हुनुहुन्न

**वाक्यार्थ–** यिनी त हजुरकी सानी बहिनी हुन्, एक प्रकारले यिनी छोरीसमान नै छिन् र अत्यन्त दुःखी पनि छिन्। हजुर दुःखीहरूलाई दया गर्ने हुनुहुन्छ, माङ्गलिक शृङ्गारले सुशोभित भएकी यिनलाई नमार्नुहोस् ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं स सामभिर्भेदैर्बोध्यमानोऽपि दारुणः।**
**न न्यवर्तत कौरव्य पुरुषादाननुव्रतः॥ ४६॥**

**पदार्थ–**
**कौरव्य** = हे कुरुवंशी परीक्षित्
**एवं** = यसरी
**सामभिः** = प्रशंसामूलक सामनीतिबाट
**भेदैः** = भयमूलक भेदनीतिबाट
**बोध्यमानः अपि** = वसुदेवले खुब बुझाउने प्रयास गरे पनि
**पुरुषादान्** = पुरुषभक्षी राक्षसहरूको
**अनुव्रतः** = अनुसरण गर्ने
**दारुणः** = अति डरलाग्दो
**सः** = त्यो कंस (बहिनीलाई मार्ने कर्मबाट)
**न न्यवर्तत** = निवृत्त भएन

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसरी वसुदेवले प्रशंसाद्वारा र भयद्वारा उसलाई बुझाउने प्रयास गरे पनि डर लाग्दो राक्षसी स्वभावको त्यो कंस बहिनीलाई मार्ने कर्मबाट निवृत्त भएन।

**निर्बन्धं तस्य तं ज्ञात्वा विचिन्त्यानकदुन्दुभिः।**
**प्राप्तं कालं प्रतिव्योढुमिदं तत्रान्वपद्यत ॥ ४७ ॥**

**पदार्थ–**
**आनकदुन्दुभिः** = वसुदेवले
**तस्य** = त्यो कंसको
**तं** = त्यस्तो
**निर्बन्धं** = बहिनीलाई मारेरै छाड्ने हठ
**ज्ञात्वा** = बुझेर
**प्राप्तं कालं** = त्यो (आपत्ति) प्राप्त भएको समयलाई
**प्रतिव्योढुम्** = जसरी पनि टार्न
**तत्र** = त्यहाँ
**विचिन्त्य** = विचार गर्दै
**इदं** = यस्तो
**अन्वपद्यत** = निश्चय गर्नुभयो

**वाक्यार्थ–** वसुदेवले कंसको त्यस्तो हठलाई बुझेर अब यो कष्टलाई जसरी पनि टार्नै पर्‍यो भनी यस्तो निश्चय गर्नुभयो।

**मृत्युर्बुद्धिमतापोह्यो यावद् बुद्धिबलोदयम्।**
**यद्यसौ न निवर्तेत नापराधोऽस्ति देहिनः ॥ ४८ ॥**

**पदार्थ–**
**बुद्धिमता** = बुद्धिमान् व्यक्तिले
**यावत्** = जहिलेसम्म
**बुद्धिबलोदयम्** = बुद्धि र बलले साथ दिन्छ (त्यहाँसम्म)
**मृत्युः** = मृत्युलाई
**अपोह्यः** = टार्नुपर्दछ
**यदि** = यदि कथंचित्
**असौ** = त्यो मृत्यु
**न निवर्तेत** = टर्दैन भने त्यहाँ
**देहिनः** = प्रयत्न गर्नेवालाको
**अपराधः** = दोष
**न अस्ति** = हुँदैन

**वाक्यार्थ–** बुद्धिमान् व्यक्तिले आफ्नो बल र बुद्धिले भ्याएसम्म मृत्युलाई टार्नुपर्दछ। यदि प्रयत्न गर्दागर्दै पनि मृत्यु टर्दैन भने त्यहाँ प्रयत्न गर्ने व्यक्तिको दोष हुँदैन।

**प्रदाय मृत्यवे पुत्रान् मोचये कृपणामिमाम्।**
**सुता मे यदि जायेरन् मृत्युर्वा न म्रियेत चेत् ॥ ४९ ॥**

**पदार्थ–**
**मृत्यवे** = मृत्युरूपी कंसलाई
**पुत्रान्** = छोराहरू
**प्रदाय** = बुझाएर
**कृपणाम्** = अत्यन्त दुःखी
**इमाम्** = यी देवकीलाई

**मोचये** = मुक्त गराउँछु
**यदि** = यदि पछि
**मे** = मेरा
**सुताः** = छोराहरू
**जायेरन्** = जन्मिए भने
**वा** = अथवा
**मृत्युः** = मृत्युस्वरूप यो कंस
**न म्रियेत चेत्** = मरेन भने
(बुझाइदिउँला)

**वाक्यार्थ–** मृत्युरूप यो कंसलाई छोराहरू बुझाउने प्रतिज्ञा गरेर भए पनि अहिले अत्यन्त दुःखी भएकी देवकीलाई मुक्त गराउँछु। यदि मेरा छोराहरू जन्मेछन् भने र यो दुष्ट कंस त्यस वेलासम्म बाँचिरहेछ भने त्यसै वेला बुझाइदिउँला। (कमसेकम अहिले त मुक्ति मिल्यो।)

**विपर्ययो वा किं न स्याद् गतिर्धातुर्दुरत्यया।**
**उपस्थितो निवर्तेत निवृत्तः पुनरापतेत्॥ ५०॥**

**पदार्थ–**
**विपर्ययः वा** = अथवा कुरो विपरीत भएर (छोरोले कंस मार्न पनि)
**किं न स्यात्** = किन नसक्ला र
**धातुः** = विधाताको
**गतिः** = विधान
**दुरत्यया** = पार पाई नसक्नुको छ (कहिले)
**उपस्थितः** = नजिकै आएको
मृत्यु पनि
**निवर्तेत** = हट्छ भने कहिले
**निवृत्तः** = हटेको मृत्यु पनि
**पुनः** = फेरि
**आपतेत्** = आइलाग्छ

**वाक्यार्थ–** अथवा विपरीत भएर छोरोले नै कंसलाई मार्न पनि सक्छ किनभने विधाताको खेल बुझ्निसक्नुको छ। कहिले नजिकै आएको मृत्यु पनि हट्छ भने कहिले हटेको मृत्यु पनि आइलाग्छ।

**अग्नेर्यथा दारुवियोगयोगयोरदृष्टतोऽन्यन्न निमित्तमस्ति।**
**एवं हि जन्तोरपि दुर्विभाव्यः शरीरसंयोगवियोगहेतुः॥ ५१॥**

**पदार्थ–**
**यथा** = जसरी
**अग्नेः** = जलाउने अग्निको
**दारुवियोगयोगयोः** = दाउरासित अग्निको वियोग र संयोगमा (कहिले नजिकैको पनि नजल्ने, कहिले टाढैको पनि जल्ने कुरामा)
**अदृष्टतः** = अदृष्टलाई छाडेर
**अन्यत्** = अरू
**निमित्तं** = निमित्त कारण
**न अस्ति** = छैन भने
**एवं हि** = यसै गरी
**जन्तोः अपि** = जीवको पनि
**शरीरसंयोगवियोगहेतुः** = शरीरसँग संयोग र वियोग (जन्म र मृत्यु)को कारण
**दुर्विभाव्यः** = अचिन्तनीय नै छ

**वाक्यार्थ–** जसरी आगोले डढाउँदा कहिले नजिकैको दाउरालाई पनि छाड्छ र कहिले टाढाकोलाई पनि डढाउँछ यसमा अदृष्टलाई छाडेर कुनै कारण छैन, त्यसै गरी जीवात्माको पनि शरीरसँगको संयोग र वियोगमा वा जन्म र मृत्युमा जो निमित्त छ, त्यो अचिन्तनीय नै छ।

**एवं विमृश्य तं पापं यावदात्मनिदर्शनम्।**
**पूजयामास वै शौरिर्बहुमानपुरःसरम्॥ ५२॥**

**पदार्थ–**
**शौरिः** = शूरका छोरा वसुदेवले
**एवं** = यसरी
**विमृश्य** = विचार गरेर
**यावदात्मनिदर्शनम्** = आफ्नो बुद्धिले भ्याएसम्म
**बहुमानपुरःसरम्** = खुब सम्मानपूर्वक
**तं** = त्यो
**पापं** = पापी कंसलाई
**वै** = निश्चय नै
**पूजयामास** = पूजा गर्नुभयो (बाहिरबाट प्रसन्न पार्नुभयो)

**वाक्यार्थ–** वसुदेवले यसरी सबै कुरा बुद्धिले भ्याएसम्म विचार गरेर त्यो पापी कंसलाई बाहिरबाट खुब सम्मान गरेर प्रसन्न पार्नुभयो।

**प्रसन्नवदनाम्भोजो नृशंसं निरपत्रपम्।**
**मनसा दूयमानेन विहसन्निदमब्रवीत्॥ ५३॥**

**पदार्थ–**
**दूयमानेन** = सन्तापयुक्त
**मनसा** = मन भए पनि
**प्रसन्नवदनाम्भोजः** = प्रसन्नतायुक्त मन देखाएर (कंसलाई विध्वस्त पार्न)
**विहसन्** = केही हाँस्दै वसुदेवले
**निरपत्रपम्** = लाज नभएको
**नृशंसं** = क्रूर त्यो कंसलाई
**इदं** = यसो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** भित्रभित्रै सन्ताप भएर दुःखी भए पनि कंसलाई विश्वास दिलाउन मुखमा प्रसन्नता देखाएर केही हाँस्दै त्यो निर्लज्ज र क्रूर कंसलाई वसुदेवले यसो भन्नुभयो।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**न ह्यस्यास्ते भयं सौम्य यद् वागाहाशरीरिणी।**
**पुत्रान् समर्पयिष्येऽस्या यतस्ते भयमुत्थितम्॥ ५४॥**

**पदार्थ–**
**सौम्य** = हे शान्त स्वभावका दयालु
**हि** = निश्चय नै
**यत्** = जे
**अशरीरिणी वाक्** = आकाशवाणीले
**आह** = भन्यो
**अस्याः** = यिनी देवकीबाट
**ते** = हजुरलाई
**भयं न** = भय छैन
**यतः** = जसबाट
**भयं** = डर
**उत्थितम्** = उत्पन्न हुन्छ ती
**अस्याः** = यिनी देवकीका
**पुत्रान्** = छोराहरू
**ते** = हजुरलाई नै
**समर्पयिष्ये** = समर्पण गर्नेछु

**वाक्यार्थ–** हे सौम्य ! आकाशवाणीले जे कुरा भन्यो, त्यस अनुसार हजुरलाई देवकीबाट कुनै डर छैन। डर त केवल यिनको छोराबाट हो, त्यसैले म यिनका छोराहरू हजुरलाई नै बुझाउनेछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स्वसुर्वधान्निववृते कंसस्तद्वाक्यसारवित्।**

**वसुदेवोऽपि तं प्रीतः प्रशस्य प्राविशद् गृहम् ॥ ५५ ॥**

**पदार्थ–**
**तद्वाक्यसारवित्** = ती वसुदेवको भनाइको तात्पर्य बुझ्ने (विश्वास गर्ने)
**कंसः** = कंस
**स्वसुः** = बहिनीको
**वधात्** = वध गर्ने कर्मबाट
**निववृते** = हट्यो र
**प्रीतः** = त्यसबाट प्रसन्न भएका
**वसुदेवः अपि** = वसुदेवले पनि
**तं** = ती कंसलाई
**प्रशस्य** = प्रशंसा गर्दै
**गृहम्** = आफ्नो घरमा
**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** कंसले वसुदेवको भनाइमा विश्वास गऱ्यो र ऊ बहिनीलाई मार्ने कामबाट निवृत्त भयो। त्यसपछि वसुदेव पनि प्रसन्न हुनुभयो र कंसको प्रशंसा गर्दै आफ्नो घरमा प्रवेश गर्नुभयो।

**अथ काल उपावृत्ते देवकी सर्वदेवता।**
**पुत्रान् प्रसुषुवे चाष्टौ कन्यां चैवानुवत्सरम् ॥ ५६ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**काले उपावृत्ते** = समय आएपछि
**सर्वदेवता** = सर्वदेवस्वरूपा
**देवकी** = देवकीले
**अनुवत्सरम्** = वर्षैपिच्छे
**अष्टौ पुत्रान्** = आठ छोरा र
**कन्यां च** = एउटी कन्या पनि
**प्रसुषुवे** = जन्माउनुभयो

**वाक्यार्थ–** केही समय बितेपछि सर्वदेवस्वरूपा देवकीले एक-एक वर्षको फरकमा आठ पुत्र र एक पुत्रीलाई जन्माउनुभयो।

**कीर्तिमन्तं प्रथमजं कंसायानकदुन्दुभिः।**
**अर्पयामास कृच्छ्रेण सोऽनृतादतिविह्वलः ॥ ५७ ॥**

**पदार्थ–**
**अनृतात्** = आफ्नो वचन झुट होला भनेर
**अतिविह्वलः** = ज्यादै डराएका
**सः** = ती
**आनकदुन्दुभिः** = वसुदेवले
**प्रथमजं** = पहिलोचोटि जन्मिएको
**कीर्तिमन्तं** = कीर्तिमान् नाम गरेको छोरो
**कंसाय** = कंसलाई
**कृच्छ्रेण** = अति दुःखका साथ
**अर्पयामास** = बुझाउनुभयो

**वाक्यार्थ–** आफ्नो वचन झुट होला भनेर ज्यादै डराएका वसुदेवले पहिलोचोटि जन्मिएको कीर्तिमान् नाम गरेको छोरालाई अति दुःखका साथ कंसलाई बुझाउनुभयो।

**किं दुःसहं नु साधूनां विदुषां किमपेक्षितम्।**
**किमकार्यं कदर्याणां दुस्त्यजं किं धृतात्मनाम् ॥ ५८ ॥**

**पदार्थ–**
**साधूनां** = सज्जन व्यक्तिहरूका लागि
**दुःसहं** = सहन गर्न नसकिने कुरा
**किं नु** = के हुन्छ

**विदुषां** = विद्वान्का लागि
**अपेक्षितम् किं** = केको अपेक्षा हुन्छ
**कदर्याणां** = नीच व्यक्तिका लागि
**अकार्यं** = गर्न नहुने
**किं** = के हुन्छ र
**धृतात्मनाम्** = आत्मज्ञानीका लागि
**दुस्त्यजं** = त्याग गर्न नसक्ने कुरा
**किं** = के हुन्छ र

**वाक्यार्थ–** सज्जनका लागि असह्य के हुन्छ र? विद्वान्लाई केको अपेक्षा हुन्छ र? नीच व्यक्तिका लागि गर्न नहुने भन्ने के चाहिँ हुन्छ र? अनि आत्मज्ञानीका लागि त्याग गर्न नसकिने कुरा के नै हुन्छ र?

**दृष्ट्वा समत्वं तच्छौरेः सत्ये चैव व्यवस्थितिम्।**
**कंसस्तुष्टमना राजन् प्रहसन्निदमब्रवीत्॥ ५९॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**शौरेः** = शूरपुत्र वसुदेवको
**तत्** = त्यस्तो
**समत्वं** = पुत्रको जीवनमृत्युमा समभाव र
**सत्ये** = सत्यमा
**व्यवस्थितिम् च** = पूर्ण निष्ठा
**दृष्ट्वा** = देखेर
**तुष्टमनाः** = प्रसन्न मन भएको
**कंसः** = कंसले
**प्रहसन्** = हाँस्दै
**इदं** = यस्तो
**अब्रवीत्** = भन्यो

**वाक्यार्थ–** हे परीक्षित्! आफ्नो छोराको जीवन र मृत्युमा वसुदेवको समभाव देखेर र सत्यमा उनको पूर्ण निष्ठा देखेर अति प्रसन्न भएको कंसले हाँस्दै भन्यो।

**प्रतियातु कुमारोऽयं न ह्यस्मादस्ति मे भयम्।**
**अष्टमाद् युवयोर्गर्भान्मृत्युर्मे विहितः किल॥ ६०॥**

**पदार्थ–**
**अयं** = यो
**कुमारः** = पहिलो छोरो
**प्रतियातु** = जाओस्
**मे** = मलाई
**अस्मात्** = यसबाट
**भयम्** = डर
**न हि** = छैन
**युवयोः** = तिमी दुईको
**अष्टमात्** = आठौँ
**गर्भात्** = गर्भबाट
**मे** = मेरो
**मृत्युः** = मरण हुने कुरा
**किल** = निश्चय नै
**विहितः** = (आकाशवाणीद्वारा) विधान गरिएको
**अस्ति** = छ

**वाक्यार्थ–** वसुदेव! यो पहिलो छोरो फिर्ता लैजाऊ, यसबाट मलाई डर छैन। मलाई त तिमीहरूको आठौँ पुत्रबाट डर छ भनेर आकाशवाणीले तोकेको छ।

**तथेति सुतमादाय ययावानकदुन्दुभिः।**
**नाभ्यनन्दत तद्वाक्यमसतोऽविजितात्मनः॥ ६१॥**

**पदार्थ–**
**आनकदुन्दुभिः** = वसुदेवले
**तथा इति** = ठीकै छ भनेर

**सुतं** = आफ्नो छोरोलाई
**आदाय** = लिएर
**ययौ** = जानुभयो (तर)
**असतः** = दुष्ट
**अविजितात्मनः** = चित्त स्थिर नभएको कंसको
**तद्वाक्यं** = त्यो भनाइमा
**न अभ्यनन्दत** = विश्वास गर्नुभएन

**वाक्यार्थ–** वसुदेवले कंसको कुरा सुनेर ठीकै छ भनी आफ्नो छोरो फर्काएर लानुभयो तर चित्त स्थिर नभएको कंसको भनाइमा उहाँले विश्वास गर्नुभएन।

**नन्दाद्या ये व्रजे गोपा याश्चामीषां च योषितः।**
**वृष्णयो वसुदेवाद्या देवक्याद्या यदुस्त्रियः॥ ६२॥**
**सर्वे वै देवताप्राया उभयोरपि भारत।**
**ज्ञातयो बन्धुसुहृदो ये च कंसमनुव्रताः॥ ६३॥**

**एतत् कंसाय भगवाञ्छशंसाभ्येत्य नारदः।**
**भूमेर्भारायमाणानां दैत्यानां च वधोद्यमम्॥ ६४॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**भगवान्** = ऐश्वर्यशाली
**नारदः** = देवर्षि नारद
**अभ्येत्य** = (कंस भएको ठाउँमा) आएर
**कंसाय** = कंसलाई
**व्रजे** = गोकुलमा
**ये** = जो
**नन्दाद्याः** = नन्द आदि
**गोपाः** = गोपालहरू छन्
**अमीषां** = यिनीहरूका
**योषितः** = स्त्रीहरू छन्
**वसुदेवाद्याः** = वसुदेव आदि
**वृष्णयः** = जो वृष्णिवंशीहरू छन् तथा
**देवक्याद्याः** = देवकी आदि
**यदुस्त्रियः च** = यदुवंशका स्त्रीहरू छन् र
**उभयोः अपि** = यदुवंशी र वृष्णिवंशीका
**याः** = जति पनि
**ज्ञातयः** = सजातीय र
**बन्धुसुहृदः च** = बन्धुबान्धवहरू छन्
**ये** = जो
**कंसम्** = तपाईं कंसको
**अनुव्रताः** = सेवा गर्नेहरू छन्
**वै** = निश्चय नै
**सर्वे** = ती सबै
**देवताप्रायाः** = देवताकै अंशावतार हुन्
**भूमेः** = पृथिवीको
**भारायमाणानां** = भारको रूपमा रहेका
**दैत्यानां** = दैत्यहरूको
**वधोद्यमम् च** = विनाशको प्रयास भएको
**एतत्** = यो सबै कुरा
**शशंस** = सुनाए

**वाक्यार्थ–** हे परीक्षित्! महर्षि नारदले कंस भएको ठाउँमा गएर भने– गोकुलमा जो नन्द आदि गोपालहरू छन्, तिनीहरूका स्त्रीहरू छन्, वसुदेव आदि वृष्णिहरू छन्, देवकी आदि यदुवंशी स्त्रीहरू र दुबै पक्षका सजातीय बन्धुबान्धवहरू छन्, त्यति मात्र नभएर तपाईंकै सेवा गर्ने

जो सेवकहरू पनि छन्, ती सबै देवताका अंशावतार हुन्, यसैले अहिले पृथिवीको भार भएका सारा दैत्यहरूको वधका लागि प्रयास भएको छ।

**ऋषेर्विनिर्गमे कंसो यदून् मत्वा सुरानिति।**
**देवक्या गर्भसम्भूतं विष्णुं च स्ववधं प्रति॥ ६५॥**
**देवकीं वसुदेवं च निगृह्य निगडैर्गृहे।**
**जातं जातमहन् पुत्रं तयोरजनशङ्कया॥ ६६॥**

**पदार्थ—**
**ऋषेः** = देवर्षि नारद
**विनिर्गमे** = निस्केर गएपछि
**कंसः** = कंसले
**यदून्** = यदुवंशीहरू
**सुरान् इति** = देवता नै हुन् भन्ने
**मत्वा** = सोचेर र
**स्ववधं प्रति** = आफूलाई मार्नका लागि
**देवक्याः** = देवकीको
**गर्भसम्भूतं** = गर्भबाट जन्मने व्यक्तिलाई
**विष्णुं च** = विष्णु नै (हुने विचार गरेर)
**देवकीं** = देवकीलाई र
**वसुदेवं च** = वसुदेवलाई पनि
**निगडैः** = जन्जिरहरूद्वारा (बाँधेर)
**गृहे** = कारागृहमा
**निगृह्य** = बन्दी बनाएर
**जातं जातम्** = बारम्बार जन्मिएका
**तयोः** = ती दुई (देवकी र वसुदेव)का
**पुत्रं** = छोरालाई
**अजनशङ्कया** = विष्णु नै हो भन्ने शङ्काले
**अहन्** = मार्न थाल्यो

**वाक्यार्थ—** देवर्षि नारद फर्किएपछि कंसले यदुवंशीहरूलाई देवता भन्ठानेर अनि देवकीको गर्भबाट जन्मने व्यक्ति विष्णु नै हुने विचार गरेर देवकी र वसुदेवलाई जन्जिरले बाँधेर कारागारमा राखेर जन्मिएका छोराहरूलाई विष्णुकै शङ्का गरी मार्न थाल्यो।

**मातरं पितरं भ्रातॄन् सर्वांश्च सुहृदस्तथा।**
**घ्नन्ति ह्यसुतृपो लुब्धा राजानः प्रायशो भुवि॥ ६७॥**

**पदार्थ—**
**भुवि** = पृथिवीमा
**प्रायशः** = प्रायः गरेर
**असुतृपः** = अरूबाट आफ्नो प्राणको पोषण गर्न चाहने
**लुब्धाः** = लोभी
**राजानः** = राजाहरू
**हि** = निश्चय नै
**मातरं** = आमालाई
**पितरं** = बाबुलाई
**भ्रातॄन्** = दाजुभाइहरूलाई र
**तथा** = त्यसै गरी
**सर्वान्** = सम्पूर्ण
**सुहृदः च** = हितैषी मित्रहरूलाई पनि
**घ्नन्ति** = मार्दछन्

**वाक्यार्थ—** पृथिवीमा प्रायः अरूबाट आफ्नो प्राणको पोषण गर्न चाहने लोभी राजाहरूले स्वार्थका लागि आमा, बाबु, बन्धु, दाजुभाइहरू र आफ्ना अत्यन्त हितैषी मित्रहरूलाई पनि

मार्दछन्।

**आत्मानमिह सञ्जातं जानन् प्राग् विष्णुना हतम्।**
**महासुरं कालनेमिं यदुभिः स व्यरुध्यत ॥ ६८ ॥**

**पदार्थ–**
**सः** = त्यो कंसले
**प्राक्** = पहिलो जन्ममा
**आत्मानम्** = आफू
**कालनेमिं** = कालनेमि नामको
**महासुरं** = महासुर भएको र
**विष्णुना** = विष्णुद्वारा
**हतम्** = मारिएको (अनि फेरि)
**इह** = यहाँ
**सञ्जातं** = जन्मिएको कुरा पनि
**जानन्** = बुझेर
**यदुभिः** = यदुवंशीहरूसँग
**व्यरुध्यत** = विरोध गर्न थाल्यो

**वाक्यार्थ–** कंसले आफू पहिलो जन्ममा कालनेमि नामको दैत्य भएको र विष्णुले आफूलाई मारेको अनि अहिले फेरि जन्मिएको कुरा बुझेर यदुवंशीहरूसँग विरोध गर्न थाल्यो।

**उग्रसेनं च पितरं यदुभोजान्धकाधिपम्।**
**स्वयं निगृह्य बुभुजे शूरसेनान् महाबलः ॥ ६९ ॥**

**पदार्थ–**
**महाबलः** = अत्यन्त बलशाली कंसले
**यदुभोजान्धकाधिपम्** = यदु, भोज र अन्धकका अधिपति
**पितरं** = बाबु
**उग्रसेनं च** = उग्रसेनलाई पनि
**निगृह्य** = कारागारमा बन्द गरेर
**स्वयं** = आफैँले
**शूरसेनान्** = शूरसेन, मथुरा आदि देशलाई
**बुभुजे** = शासन गर्न थाल्यो

**वाक्यार्थ–** अत्यन्त बलशाली कंसले यदु, भोज र अन्धक वंशका अधिपति आफ्नै बाबु उग्रसेनलाई कारागारमा बन्द गरेर, शूरसेन र मथुरा आदि देशहरूको राज्य आफैँ चलाउन थाल्यो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**श्रीकृष्णावतारोपक्रमे प्रथमोऽध्यायः ॥ १ ॥**

# अथ द्वितीयोऽध्यायः

## देवताहरूद्वारा गर्भस्थ भगवान्को स्तुति

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**प्रलम्बबकचाणूरतृणावर्तमहाशनैः।**
**मुष्टिकारिष्टद्विविदपूतनाकेशीधेनुकैः॥ १॥**
**अन्यैश्चासुरभूपालैर्बाणभौमादिभिर्युतः।**
**यदूनां कदनं चक्रे बली मागधसंश्रयः॥ २॥**

पदार्थ–
**प्रलम्बबकचाणूरतृणावर्त-महाशनैः** = प्रलम्बासुर, बकासुर, चाणूर, तृणावर्त, अघासुर र
**मुष्टिकारिष्टद्विविदपूतना-केशीधेनुकैः** = मुष्टिक, अरिष्टासुर, द्विविद, पूतना, केशी र धेनुकासुर तथा
**अन्यैः च** = अरू
**बाणभौमादिभिः** = बाण, भौम आदि
**असुरभूपालैः** = असुर राजाहरूसँग
**युतः** = मिलेर
**बली** = बलवान् कंसले
**मागधसंश्रयः** = मगधनरेश जरासन्धको आश्रय पाएर
**यदूनां** = यदुवंशीहरूको
**कदनं** = विनाश
**चक्रे** = गर्न थाल्यो

**वाक्यार्थ–** प्रलम्बासुर, बकासुर, चाणूर, तृणावर्त, अघासुर, मुष्टिक, अरिष्टासुर, द्विविद, पूतना, केशी, धेनुकासुर, बाण, भौम जस्ता असुर राजाहरूसँग मिलेर मगधनरेश जरासन्धको आश्रयले बलवान् कंसले यदुवंशीहरूको विनाश गर्न थाल्यो।

**ते पीडिता निविविशुः कुरुपञ्चालकेकयान्।**
**शाल्वान् विदर्भान् निषधान् विदेहान् कोशलानपि॥ ३॥**
**एके तमनुरुन्धाना ज्ञातयः पर्युपासते।**
**हतेषु षट्सु बालेषु देवक्या औग्रसेनिना॥ ४॥**
**सप्तमो वैष्णवं धाम यमनन्तं प्रचक्षते।**
**गर्भो बभूव देवक्या हर्षशोकविवर्धनः॥ ५॥**

पदार्थ–
**पीडिताः** = कंसबाट पीडित भएका
**ते** = ती यदुवंशीहरू
**कुरुपञ्चालकेकयान्** = कुरु, पञ्चाल र केकय देशहरूमा

**शाल्वान्** = शाल्व
**विदर्भान्** = विदर्भ
**निषधान्** = निषध
**विदेहान्** = विदेह र
**कोशलान् अपि** = कोशल देशतिर पनि
**निर्विविशुः** = भागेर जान थाले
**एके** = कोही कोही
**ज्ञातयः** = यदुवंशी बन्धुबान्धवहरू भने
**तम्** = उसैको
**अनुरुन्धानाः** = अनुनय-विनय गरेर
**पर्युपासते** = उसैको सेवा गरेर बस्न थाले
**औग्रसेनिना** = उग्रसेनपुत्र कंसले
**देवक्याः** = देवकीको
**षट्सु** = छ ओटा
**बालेषु** = बच्चाहरूलाई
**हतेषु** = मारेपछि
**वैष्णवं धाम** = विष्णुकै कला
**देवक्याः** = देवकीको
**हर्षशोकविवर्धनः** = हर्ष र शोकलाई बढाउने
**सप्तमः** = सातौँ
**गर्भः** = गर्भ
**बभूव** = रह्यो
**यं** = जसलाई
**अनन्तं** = अनन्त भगवान्
**प्रचक्षते** = भन्दछन्

**वाक्यार्थ–** कंसबाट पीडित भएका ती यदुवंशीहरू कुरु, पाञ्चाल, केकय, शाल्व, विदर्भ, निषध, विदेह र कोशल आदि देशमा भागेर गए, कोही बन्धुबान्धव चाहिँ उपाय नलागेर उसैको अनुनय-विनय गरी उसैको सेवा गरेर रहन थाले। यसरी देवकीका छ ओटा बच्चाहरू कंसले मारिसकेपछि देवकीको हर्ष र शोकलाई बढाउने सातौँ गर्भ रह्यो जसलाई विष्णुको कला अनन्त भगवान् भन्दछन्।

**भगवानपि विश्वात्मा विदित्वा कंसजं भयम्।**
**यदूनां निजनाथानां योगमायां समादिशत्॥ ६॥**

**पदार्थ–**
**विश्वात्मा** = संसारका एक मात्र मालिक
**भगवान् अपि** = भगवान्ले पनि
**निजनाथानां** = आफू (भगवान्)लाई नै रक्षक मान्ने
**यदूनां** = यदुवंशीहरूको
**कंसजं** = कंसबाट
**भयम्** = डर छ भन्ने कुरा
**विदित्वा** = बुझेर
**योगमायां** = आफ्नी योगमायालाई
**समादिशत्** = आदेश दिनुभयो

**वाक्यार्थ–** विश्वात्मा भगवान् श्रीहरिले पनि भगवान्लाई नै रक्षक मान्ने यदुवंशीहरूलाई कंसबाट ठुलो डर भएको कुरा बुझेर योगमायालाई आदेश दिनुभयो।

**गच्छ देवि व्रजं भद्रे गोपगोभिरलङ्कृतम्।**
**रोहिणी वसुदेवस्य भार्यास्ते नन्दगोकुले॥**
**अन्याश्च कंससंविग्ना विवरेषु वसन्ति हि॥ ७॥**

**पदार्थ–**
**देवि** = हे देवी
**भद्रे** = हे कल्याणी (तिमी)
**गोपगोभिः** = गाई र गोपालहरूद्वारा
**अलङ्कृतम्** = सुशोभित
**व्रजं** = गोकुलमा
**गच्छ** = जाऊ
**नन्दगोकुले** = नन्दबाबाको

गोकुलमा
**वसुदेवस्य** = वसुदेवकी
**भार्या** = पत्नी
**रोहिणी** = रोहिणी
**आस्ते** = बस्दछिन् र
**हि** = निश्चय नै
**अन्याः च** = अरू पत्नीहरू पनि
**कंससंविग्ना** = कंसबाट डराएर
**विवरेषु** = कुनाकाप्चामा (लुकीछिपी)
**वसन्ति** = बसेका छन्

**वाक्यार्थ–** हे देवी ! हे कल्याणी ! तिमी गाई र गोपालहरूले सुशोभित गोकुलमा जाऊ, जुन नन्दबाबाको गोकुलमा वसुदेवकी पत्नी रोहिणी बसेकी छिन् र अरू पत्नीहरू पनि कंसबाट डराएर कुनाकाप्चामा लुकीछिपी बसेका छन्।

**देवक्या जठरे गर्भं शेषाख्यं धाम मामकम्।**
**तत्सन्निकृष्य रोहिण्या उदरे सन्निवेशय ॥ ८ ॥**

**पदार्थ–**
**देवक्याः** = देवकीको
**जठरे** = पेटमा
**शेषाख्यं** = शेष नामक
**मामकम्** = मेरै
**धाम** = अंश छ
**तत्** = त्यस
**गर्भं** = गर्भलाई
**सन्निकृष्य** = खिचेर
**रोहिण्याः** = रोहिणीको
**उदरे** = गर्भमा
**सन्निवेशय** = लैजाऊ

**वाक्यार्थ–** अहिले देवकीको पेटमा मेरै अंश, जसलाई शेष भन्दछन्, त्यो गर्भको रूपमा स्थित छ, त्यसलाई खिचेर रोहिणीको गर्भमा लैजाऊ।

**अथाहमंशभागेन देवक्याः पुत्रतां शुभे।**
**प्राप्स्यामि त्वं यशोदायां नन्दपत्न्यां भविष्यसि ॥ ९ ॥**

**पदार्थ–**
**शुभे** = हे कल्याणी
**अथ** = त्यसपछि
**अहं** = म
**अंशभागेन** = ज्ञान, ऐश्वर्य आदि अंशसहित
**देवक्याः** = देवकीको
**पुत्रतां** = छोरो बनेर
**प्राप्स्यामि** = आउनेछु
**त्वं** = तिमी पनि
**नन्दपत्न्यां** = नन्दकी पत्नी
**यशोदायां** = यशोदामा
**भविष्यसि** = जन्म लिनेछौ

**वाक्यार्थ–** हे कल्याणी ! यसपछि म ज्ञान, ऐश्वर्य आदि अंशसहित देवकीको पुत्र भएर आउनेछु, तिमी पनि नन्दपत्नी यशोदाबाट जन्मनेछौ।

**अर्चिष्यन्ति मनुष्यास्त्वां सर्वकामवरेश्वरीम्।**
**धूपोपहारबलिभिः सर्वकामवरप्रदाम् ॥ १० ॥**

**पदार्थ–**
**सर्वकामवरेश्वरीम्** = इच्छा गरेका सम्पूर्ण वस्तु प्रदान गर्न समर्थ
**सर्वकामवरप्रदाम्** = अभिलषित सम्पूर्ण वर प्रदान गर्ने
**त्वां** = तिमीलाई
**मनुष्याः** = मानिसहरू
**धूपोपहारबलिभिः** = धूप, दीप, नैवेद्य आदि सामग्रीद्वारा
**अर्चिष्यन्ति** = पूजा गर्नेछन्

**वाक्यार्थ–** इच्छा गरेका सम्पूर्ण वस्तु प्रदान गर्न समर्थ र अभिलषित वर प्रदान गर्ने तिमीलाई मानिसहरूले धूप, दीप, नैवेद्य आदि सामग्रीद्वारा पूजा गर्नेछन्।

**नामधेयानि कुर्वन्ति स्थानानि च नरा भुवि।**
**दुर्गेति भद्रकालीति विजया वैष्णवीति च ॥ ११ ॥**
**कुमुदा चण्डिका कृष्णा माधवी कन्यकेति च।**
**माया नारायणीशानी शारदेत्यम्बिकेति च ॥ १२ ॥**

**पदार्थ–**
**नराः** = मानिसहरूले
**भुवि** = पृथिवीमा
**दुर्गा इति** = दुर्गा
**भद्रकाली इति** = भद्रकाली
**विजया** = विजया
**वैष्णवी इति** = वैष्णवी
**कुमुदा** = कुमुदा
**चण्डिका** = चण्डिका
**कृष्णा** = कृष्णा
**माधवी** = माधवी
**कन्यका इति च** = कन्यका तथा
**माया** = माया
**नारायणी** = नारायणी
**ईशानी** = ईशानी
**शारदा इति च** = शारदा र
**अम्बिका इति च** = अम्बिका यी
**नामधेयानि** = नाम र
**स्थानानि च** = स्थानहरू (पीठहरू) पनि
**कुर्वन्ति** = बनाउनेछन्

**वाक्यार्थ–** मानिसहरूले पृथिवीमा तिमीलाई दुर्गा, भद्रकाली, विजया, वैष्णवी, कुमुदा, चण्डिका, कृष्णा, माधवी, कन्यका, माया, नारायणी, ईशानी, शारदा, अम्बिका यी नामले पूजा गर्नेछन् र पीठहरू पनि बनाउनेछन्।

**गर्भसङ्कर्षणात् तं वै प्राहुः सङ्कर्षणं भुवि।**
**रामेति लोकरमणाद् बलं बलवदुच्छ्रयात् ॥ १३ ॥**

**पदार्थ–**
**भुवि** = संसारमा
**गर्भसङ्कर्षणात्** = गर्भलाई खिचेर ल्याएको हुनाले (देवकीको गर्भबाट खिचेर रोहिणीको गर्भमा ल्याइएका)
**तं** = ती शेषजीलाई
**वै** = निश्चय नै
**सङ्कर्षणं** = सङ्कर्षण भनेर भन्दछन्
**लोकरमणात्** = सबैलाई रमण गराउने हुनाले
**राम इति** = राम र
**बलवदुच्छ्रयात्** = बलवान्हरूमा श्रेष्ठ भएकाले
**बलं** = बल भनेर पनि
**प्राहुः** = भन्दछन्

**वाक्यार्थ–** गर्भ सङ्कर्षण गरेर (खिचेर) ल्याइएका हुनाले ती शेषजीलाई सङ्कर्षण, सारा लोकलाई रमण (आनन्दित) गराउने भएकाले राम र अत्यधिक बल भएकाले बल भन्नेछन्।

**सन्दिष्टैवं भगवता तथेत्योमिति तद्वचः।**
**प्रतिगृह्य परिक्रम्य गां गता तत् तथाकरोत् ॥ १४ ॥**

पदार्थ–
**भगवता** = भगवान्‌द्वारा
**एवं** = यसरी
**सन्दिष्टा** = आदेश दिइएकी योगमाया
**तद्वचः** = भगवान्‌को वाणीलाई
**तथा इति** = त्यस्तै गर्नेछु र
**ओम् इति** = हवस् भन्दै
**प्रतिगृह्य** = स्वीकार गरी
**परिक्रम्य** = (भगवान्‌को) परिक्रमा गरेर
**गां** = पृथिवीमा
**गता** = गइन् र
**तत्** = त्यो कुरालाई
**तथा** = त्यस्तै गरी
**अकरोत्** = गरिन्

**वाक्यार्थ–** भगवान्‌ले यसरी आज्ञा दिइसकेपछि योगमायाले भगवान्‌को वाणीलाई आदरपूर्वक स्वीकार गरेर हवस् भन्दै परिक्रमा गरी पृथिवीमा गइन् र त्यस्तै गरिन्।

**गर्भे प्रणीते देवक्या रोहिणीं योगनिद्रया।**
**अहो विस्रंसितो गर्भ इति पौरा विचुक्रुशुः॥ १५॥**

पदार्थ–
**योगनिद्रया** = योगमायाले
**देवक्याः** = देवकीको
**गर्भे** = गर्भलाई
**रोहिणीं** = रोहिणीको गर्भमा
**प्रणीते** = लगेपछि
**अहो** = ओहो
**गर्भः** = देवकीको गर्भ (कंसको भयले गर्दा)
**विस्रंसितः इति** = तुहियो भनेर
**पौराः** = पुरवासीहरू
**विचुक्रुशुः** = आपसमा कोलाहल गर्न थाले

**वाक्यार्थ–** योगमायाले देवकीको गर्भलाई रोहिणीको गर्भमा लगेपछि पुरवासीहरूले ओहो कंसको डरले गर्दा देवकीको गर्भ तुहियो भनेर आपसमा होहल्ला गरे।

**भगवानपि विश्वात्मा भक्तानामभयङ्करः।**
**आविवेशांशभागेन मन आनकदुन्दुभेः॥ १६॥**

पदार्थ–
**भक्तानां** = आफ्ना भक्तहरूको
**अभयङ्करः** = अभय प्रदान गर्नुहुने
**विश्वात्मा** = सर्वव्यापक
**भगवान् अपि** = भगवान् पनि
**अंशभागेन** = (ज्ञान, ऐश्वर्य आदि) अंशहरू पनि लिएर (पूर्णरूपमा)
**आनकदुन्दुभेः** = वसुदेवको
**मनः** = मनमा
**आविवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भक्तहरूलाई अभय प्रदान गर्नुहुने सर्वव्यापक भगवान् पनि ज्ञान, ऐश्वर्य आदि अंशसहित वसुदेवको मनमा प्रवेश गर्नुभयो।

**स बिभ्रत् पौरुषं धाम भ्राजमानो यथा रविः।**
**दुरासदोऽतिदुर्धर्षो भूतानां सम्बभूव ह॥ १७॥**

पदार्थ–
**पौरुषं** = भगवान्‌को
**धाम** = तेजलाई
**बिभ्रत्** = धारण गरेर
**सः** = ती वसुदेव
**भ्राजमानः** = प्रचण्डरूपले

बलेको
**रविः यथा** = सूर्य झैँ
**भूतानां** = दुष्ट प्राणीहरूको लागि
**दुरासदः** = नजिक जान नसकिने र
**अतिदुर्धर्षः** = कसैले तिरस्कार पनि गर्न नसक्ने
**ह** = निश्चय नै
**सम्बभूव** = हुनुभयो

**वाक्यार्थ–** भगवान्को तेजलाई धारण गरेर वसुदेव प्रचण्ड सूर्यजस्तो कसैद्वारा नजिकबाट हेर्न र तिरस्कार गर्न नसकिने हुनुभयो।

**ततो जगन्मङ्गलमच्युतांशं समाहितं शूरसुतेन देवी।**
**दधार सर्वात्मकमात्मभूतं काष्ठा यथानन्दकरं मनस्तः॥ १८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**शूरसुतेन** = शूरपुत्र वसुदेवद्वारा
**समाहितं** = आधान गरिएको
**जगन्मङ्गलं** = जगत्को कल्याणकारक
**सर्वात्मकं** = सर्वव्यापक
**आत्मभूतं** = आत्मरूपले रहेको
**अच्युतांशं** = अच्युत भगवान्को अंशलाई
**देवी** = देवी देवकीले
**मनस्तः** = मनले नै
**आनन्दकरं** = (आनन्ददायक) चन्द्रमालाई
**काष्ठा यथा** = (पूर्व) दिशाले झैँ
**दधार** = धारण गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि वसुदेवले जगत्को मङ्गलकारक, सर्वव्यापक र सर्वात्मस्वरूप अच्युत भगवान्को अंश (ज्योतिर्मय तेज)लाई आधान गरेपछि देवी देवकीले पूर्व दिशाले चन्द्रमालाई धारण गरे झैँ आफूमा धारण गर्नुभयो।

**सा देवकी सर्वजगन्निवासनिवासभूता नितरां न रेजे।**
**भोजेन्द्रगेहेऽग्निशिखेव रुद्धा सरस्वती ज्ञानखले यथा सती॥ १९॥**

**पदार्थ–**
**सर्वजगन्निवासनिवासभूता** = सारा जगत्को निवास हुनुभएका श्रीहरिको पनि निवास बनेकी
**सा देवकी** = ती देवकी
**भोजेन्द्रगेहे** = कंसको कारागारमा
**रुद्धा सती** = थुनिनुभएको हुनाले
**अग्निशिखा इव** = (कुनै भाँडोले ढाकेको) दीपको प्रकाश जस्तो र
**ज्ञानखले** = ठग विद्वान्मा
**सरस्वती यथा** = ज्ञानराशि झैँ
**नितरां** = अति प्रकाशयुक्त भएर
**न रेजे** = सबैलाई प्रकाशित गर्न सक्नुभएन

**वाक्यार्थ–** सारा जगत्को निवासस्वरूप भगवान्लाई धारण गरेकी देवकी कंसको कारागारमा थुनिँदा उहाँको प्रकाश सबैतिर छरिन पाएन, जसरी धप्प बलेको बत्तीलाई कुनै भाँडाले ढाक्दा वा ठग विद्वान्को ज्ञान भित्रै गुम्सिन्छ त्यसै गरी उहाँको प्रकाश पनि कारागारभित्रै सीमित भयो, बाहिर सबैतिर फैलिन पाएन।

**तां वीक्ष्य कंसः प्रभयाजितान्तरां विरोचयन्तीं भवनं शुचिस्मिताम्।**
**आहैष मे प्राणहरो हरिर्गुहां ध्रुवं श्रितो यन्न पुरेयमीदृशी॥ २०॥**

**पदार्थ—**
**अजितान्तरां** = गर्भमा भगवान्‌लाई धारण गरेकी
**प्रभया** = आफ्नो कान्तिले
**भवनं** = सारा कारागारलाई नै
**विरोचयन्तीं** = प्रकाशित गर्ने
**शुचिस्मिताम्** = मन्दमुस्कानले युक्त भएकी
**तां** = ती देवकीलाई
**वीक्ष्य** = देखेर
**कंसः** = कंसले
**आह** = (मनमनै) भन्यो
**मे** = मेरो
**प्राणहरः** = प्राणहरण गर्ने
**एषः हरिः** = यो हरि
**ध्रुवं** = निश्चय नै
**गुहां** = यसको यो गर्भमा
**श्रितः** = आएको छ
**यत्** = किनभने
**इयम्** = यो देवकी
**पुरा** = पहिले
**ईदृशी** = (यस्ती) यति तेजस्वी
**न** = थिइन

**वाक्यार्थ—** भगवान्‌लाई धारण गरेकी, आफ्नो कान्तिले सारा कारागारलाई नै प्रकाशित गरिरहेकी र मन्दमुस्कानले युक्त भएकी देवकीलाई देखेर कंसले मनमनै भन्यो— अहिलेको पालोमा चाहिँ मलाई मार्ने हरि यसको गर्भमा पक्कै पनि आएको छ किनभने पहिला गर्भधारण गर्दा यो देवकी यति तेजस्वी थिइन।

**किमद्य तस्मिन् करणीयमाशु मे यदर्थतन्त्रो न विहन्ति विक्रमम्।**
**स्त्रियाः स्वसुर्गुरुमत्या वधोऽयं यशः श्रियं हन्त्यनुकालमायुः॥ २१॥**

**पदार्थ—**
**मे** = मैले
**अद्य** = आज नै
**तस्मिन्** = त्यो गर्भको शत्रुलाई
**आशु** = चाँडै नै
**किं** = केही
**करणीयं** = गर्नुपर्ला
**यत्** = किनभने
**अर्थतन्त्रः** = अत्यन्त स्वार्थी व्यक्तिले पनि
**विक्रमम्** = आफ्नो पराक्रमलाई
**न विहन्ति** = कलङ्कित गर्दैनन्
(यदि मैले)
**स्त्रियाः** = (पहिलो त) स्त्री
**गुरुमत्याः** = (त्यसमा पनि) गर्भिणी र
**स्वसुः** = (त्यहाँ माथि) आफ्नै बहिनीको
**वधः** = वध गरँ भने
**अयं** = त्यो हत्याले मेरो
**यशः** = यशलाई
**श्रियं** = सम्पत्तिलाई र
**आयुः** = आयुलाई पनि
**अनुकालं** = तुरुन्तै
**हन्ति** = नाश गर्नेछ

**वाक्यार्थ—** म आज नै गर्भस्थ शत्रुलाई के गरौँ ? (के देवकीलाई नै मारौँ ? त्यो पनि ठीक छैन।) किनभने अत्यन्त स्वार्थी व्यक्तिले पनि आफ्नो पराक्रमलाई कलङ्कित पार्ने काम गर्दैन। यदि मैले यो स्त्री, त्यसमा पनि गर्भवती र त्यसमा पनि बहिनीलाई मारँ भने त्यसले मेरो यश, सम्पत्ति र आयुलाई पनि नाश गर्नेछ।

**स एष जीवन् खलु सम्परेतो वर्तेत योऽत्यन्तनृशंसितेन।**
**देहे मृते तं मनुजाः शपन्ति गन्ता तमोऽन्धं तनुमानिनो ध्रुवम्॥ २२॥**

**पदार्थ—**
**यः** = जो व्यक्ति
**अत्यन्तनृशंसितेन** = अति क्रूर

भएर
**वर्तेत** = रहन्छ भने
**सः एषः** = त्यस्तो जो कोही पनि
**खलु** = निश्चय नै
**जीवन्** = बाँच्दा-बाँच्दै पनि
**सम्परेतः** = मरे बराबरको हो
**तनुमानिनः** = (अर्काको हिंसा गरेर) आफ्नो शरीर पोषण गर्ने त्यस्तो व्यक्तिको
**देहे मृते** = शरीर मरेपछि
**तं** = त्यसलाई
**मनुजाः** = मानिसहरूले
**शपन्ति** = सराप्छन् (र ऊ पनि)
**ध्रुवम्** = निश्चय नै
**अन्धं तमः** = अन्धकारमय नरकमा नै
**गन्ता** = जानेछ

**वाक्यार्थ–** जो व्यक्ति अति क्रूर भएर बाँच्दछ, त्यो बाँचेर पनि मरे बराबरकै हो। अर्काको हिंसा गरेर आफ्नो पोषण गर्ने त्यस्तो व्यक्तिलाई मरेपछि अरू व्यक्तिहरूले सराप्नेछन् र ऊ पनि अन्धकारमय नरकमा पुग्नेछ।

**इति घोरतमाद् भावात् सन्निवृत्तः स्वयं प्रभुः।**
**आस्ते प्रतीक्षंस्तज्जन्म हरेर्वैरानुबन्धकृत्॥ २३॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**घोरतमात्** = क्रूरतायुक्त
**भावात्** = विचारबाट
**सन्निवृत्तः** = हटेको
**हरेः** = भगवान् श्रीहरिको
**वैरानुबन्धकृत्** = बारम्बार वैरभाव गर्ने कंस
**स्वयं** = आफू
**प्रभुः** = देवकीलाई मार्न समर्थ हुँदाहुँदै पनि
**तज्जन्म** = भगवान्को जन्मको
**प्रतीक्षन्** = प्रतीक्षा गर्दै
**आस्ते** = बस्न थाल्यो

**वाक्यार्थ–** भगवान्को बारम्बार विरोध गर्ने कंस यद्यपि देवकीलाई मार्न सक्थ्यो तथापि यस्तो क्रूर विचारबाट ऊ हट्यो र ऊ भगवान्को जन्मको प्रतीक्षा गर्दै बस्न थाल्यो।

**आसीनः संविशंस्तिष्ठन् भुञ्जानः पर्यटन् महीम्।**
**चिन्तयानो हृषीकेशमपश्यत् तन्मयं जगत्॥ २४॥**

**पदार्थ–**
**आसीनः** = बस्दा
**संविशन्** = सुत्दा
**तिष्ठन्** = उभिँदा
**भुञ्जानः** = खाँदा
**महीम्** = पृथिवीमा
**पर्यटन्** = घुम्दा पनि
**हृषीकेशं** = भगवान् हृषीकेशलाई
**चिन्तयानः** = चिन्तन गर्दै
**जगत्** = सारा जगत्लाई नै
**तन्मयं** = भगवन्मय
**अपश्यत्** = देख्न थाल्यो

**वाक्यार्थ–** कंसले बस्दा, सुत्दा, उभिँदा, खाँदा, हिँड्दा जुनसुकै वेलामा पनि भगवान् हृषीकेशलाई सम्झँदै सारा जगत्लाई नै भगवन्मय देख्न थाल्यो।

**ब्रह्मा भवश्च तत्रैत्य मुनिभिर्नारदादिभिः।**
**देवैः सानुचरैः साकं गीर्भिर्वृषणमैडयन्॥ २५॥**

**पदार्थ–**
**नारदादिभिः मुनिभिः** = देवर्षि नारद आदि ऋषि तथा

**सानुचरैः** = अनुचरहरूले सहित
**देवैः साकं** = देवताहरूसँग
**ब्रह्मा** = ब्रह्माजी र
**भवः च** = शङ्करजी पनि
**तत्र** = त्यो कारागारमा
**एत्य** = आएर
**गीर्भिः** = मधुर वचनद्वारा
**वृषणं** = अभिलषित फल दिने
भगवान्को
**ऐडयन्** = स्तुति गर्न थाल्नुभयो

**वाक्यार्थ—** नारद आदि ऋषि र अनुचरहरूले सहित भएर आएका देवताहरूले सहित ब्रह्माजी र शङ्करजी त्यही कारागारमा आएर मधुर वचनद्वारा भगवान्को स्तुति गर्न थाल्नुभयो।

**सत्यव्रतं सत्यपरं त्रिसत्यं सत्यस्य योनिं निहितं च सत्ये।**
**सत्यस्य सत्यमृतसत्यनेत्रं सत्यात्मकं त्वां शरणं प्रपन्नाः॥ २६॥**

**पदार्थ—**
**सत्यव्रतं** = सत्यसङ्कल्प भएका
**सत्यपरं** = सत्य नै प्रतिज्ञा भएका
**त्रिसत्यं** = तीनै कालमा सद्रूपले रहने
**सत्यस्य** = हामीले सत्यरूपले स्वीकारेका पृथिवी आदि पाँच महाभूतको
**योनिं** = कारण
**सत्ये** = सत्रूपले स्वीकारेका पदार्थमा
**निहितं च** = अन्तर्यामीरूपले बसेका
**सत्यस्य** = दृश्यमान सत्य पदार्थका
**सत्यं** = परमार्थरूप
**ऋतसत्यनेत्रं** = मधुर र सत्य वाणीका प्रवर्तक तथा
**सत्यात्मकं** = वास्तविक सत्स्वरूप
**त्वां** = हजुरको
**शरणं** = शरणमा
**प्रपन्नाः** = परेका छौँ

**वाक्यार्थ—** जो सत्यसङ्कल्पवाला हुनुहुन्छ, जसलाई प्राप्त गर्ने साधन पनि सत्य नै हो, जो भूत, भविष्यत् र वर्तमानमा पनि सद्रूपले नै रहनुहुन्छ, जो हामीले सत्यरूपले स्वीकारेका पृथिवी आदि पाँच महाभूतको कारण र तिनभित्र पनि अन्तर्यामी र पारमार्थिकरूपले रहनुहुन्छ, जसको कारणले हामीमा मधुर र सत्य बोली बोल्ने भावना आउँछ त्यस्ता परमसत्यस्वरूप परमात्माको शरणमा हामी आएका छौँ।

**विवरण—** ब्रह्माजी आदि देवताहरूले भगवान्को स्तुति गरेको प्रसङ्ग हो यो। यस श्लोकमा भगवान् सत्यस्वरूप हुनुहुन्छ भनी बताइएको छ। भगवान्को सङ्कल्प सत्य छ। मानिसहरू आफ्नो जीवन-निर्वाहको कल्पनालाई पनि भनेजसो बनाउन सक्दैनन्, तर भगवान्ले आफ्नो सङ्कल्पमात्रले सारा संसार खडा गर्नुहुन्छ। त्यसैले उहाँलाई उपनिषद्ले **सत्यकामः सत्यसङ्कल्पः** (छान्दोग्योपनिषद् ८/७/१) अर्थात् सत्यकामना भएका र सत्य इच्छाशक्तिसम्पन्न भनेको छ। **सत्यपरम्** पदको अर्थ हुन्छ— सत्य नै छ श्रेष्ठ प्राप्तिसाधन जसको। मुण्डकोपनिषद् (३/१/५)मा यही कुरालाई **सत्येन लभ्यस्तपसा ह्येष आत्मा** अर्थात् सत्यद्वारा नै आत्मज्ञान हुन्छ भनी बताइएको छ। भगवान् **त्रिसत्य** अर्थात् सृष्टिभन्दा अघि, सृष्टिकालमा र सृष्टिपछि पनि सत्यस्वरूप नै रहनुहुन्छ। यही तीन कुरा बताउन यस श्लोकमा क्रमशः तीन विशेषण आएका छन्— **सत्यस्य योनिम्, सत्ये निहितम् र सत्यस्य सत्यम्**। **सत्यस्य योनिम्** अर्थात्, सत्यको उपादान कारण भनी जगत्को उत्पत्तिभन्दा अघि सद्रूप ब्रह्मको वर्णन गरिएको छ। **सत्ये निहितम्** भन्ने पदले जगत् देखिएको वेलामा पनि ती

पदार्थभित्र रहने ब्रह्म नै हो भनी बताएको छ। **सत्यस्य सत्यम्** भन्ने पदले चाहिँ सबै पदार्थहरू नष्ट हुँदा पनि त्यसको अधिष्ठान भई सद्रूप ब्रह्म रहने कुरा बताएको छ। **ऋतसत्यनेत्रम्** यस पदमा आएको ऋत शब्दको अर्थ मधुर एवं यथार्थ वचन र सत्य पदको अर्थ समदृष्टि भन्ने हुन्छ। यी दुवैका **नेत्र** अर्थात् नेता या प्रवर्तक भगवान् हुनुहुन्छ। यसप्रकार सबै प्रकारले सत्यस्वरूप हुनुहुने सत्यात्मक परमात्माको यहाँ स्तुति गरिएको छ।

**एकायनोऽसौ द्विफलस्त्रिमूलश्चतूरसः पञ्चविधः षडात्मा।**
**सप्तत्वगष्टविटपो नवाक्षो दशच्छदी द्विखगो ह्यादिवृक्षः॥ २७॥**

**पदार्थ–**
**असौ** = यो
**आदिवृक्षः** = संसाररूपी सनातन वृक्ष
**हि** = निश्चय नै
**एकायनः** = एक प्रकृति नै आश्रय भएको
**द्विफलः** = सुख र दुःख दुई ओटा फल भएको
**त्रिमूलः** = सत्त्व, रज र तम तीन गुणरूप फेद भएको
**चतूरसः** = धर्म, अर्थ, काम र मोक्ष चार पुरुषार्थरूप रस भएको
**पञ्चविधः** = पाँच ज्ञानेन्द्रियहरूद्वारा जानिने
**षडात्मा** = षड् भावविकार स्वभाव भएको
**सप्तत्वक्** = रस, रक्त आदि सात धातुहरू बोक्रा भएको
**अष्टविटपः** = पञ्च महाभूत, मन, बुद्धि, अहङ्काररूप आठ हाँगाहरू भएको
**नवाक्षः** = मुख आदि नौवटा द्वार टोड्का भएको
**दशच्छदी** = प्राण, अपान आदि दश प्राणरूप पात भएको
**द्विखगः** = जीवात्मा र परमात्मा दुईवटा चराद्वारा निवास गरिएको छ

**वाक्यार्थ–** यो सनातन संसाररूपी वृक्षको आधार एक प्रकृति हो; यसमा सुख र दुःख दुई फल छन्; सत्त्व आदि तीन गुण नै यसलाई धान्ने फेद हुन्; धर्म आदि चार पुरुषार्थ यसका रस हुन्; पाँच ज्ञानेन्द्रिय यसलाई जान्ने साधन हुन्; षड् भावविकार यसको स्वभाव हो; रस, रक्त आदि सात धातुहरू यसका बोक्रा हुन्; पञ्च महाभूत, मन, बुद्धि, अहङ्कार गरेर आठ ओटा यसका हाँगा छन्; मुख आदि नौ द्वार यसका टोड्का हुन्; दश प्राण यसका पातहरू हुन् अनि जीवात्मा र परमात्मा यसमा निवास गर्ने दुई चरा हुन्।

**त्वमेक एवास्य सतः प्रसूतिस्त्वं सन्निधानं त्वमनुग्रहश्च।**
**त्वन्मायया संवृतचेतसस्त्वां पश्यन्ति नाना न विपश्चितो ये॥ २८॥**

**पदार्थ–**
**अस्य** = यो
**सतः** = कार्यरूप वृक्षको
**प्रसूतिः** = जन्मको कारण
**एकः** = एउटै
**त्वं एव** = हजुर नै हुनुहुन्छ
**सन्निधानं** = लयको कारण पनि
**त्वं** = हजुर नै हुनुहुन्छ र
**अनुग्रहः च** = अनुग्रहद्वारा पालनपोषण गर्ने पनि
**त्वं** = हजुर नै हुनुहुन्छ
**ये** = जो व्यक्तिहरू
**त्वन्मायया** = हजुरको मायाले
**संवृतचेतसः** = चित्त मोहित भएका अज्ञानीहरूले

**त्वां** = हजुरलाई
**नाना** = नानारूपमा (ब्रह्मा, विष्णु, महेश्वर आदि विभिन्न रूपमा)
**पश्यन्ति** = देख्दछन्
**विपश्चितः** = विद्वान्हरूले
**न** = त्यसरी देख्दैनन् (एकत्वको अनुभव गर्दछन्)

**वाक्यार्थ–** यो कार्यरूप वृक्षको जन्म, लय र पालपोषणको कारण हजुर नै हुनुहुन्छ। जो व्यक्तिहरू हजुरको मायाले चित्त मोहित भएका छन् त्यस्ता अज्ञानीहरूले हजुरलाई नानारूपमा (ब्रह्मा, विष्णु, महेश्वर आदि रूपमा) देख्दछन् तर विद्वान्हरूले चाहिँ एउटै तत्त्वको रूपमा अनुभव गर्दछन्।

**विवरण–** माथिका दुई श्लोकमा सम्पूर्ण संसाररूपी वृक्षको उत्पत्ति परमात्माबाटै हुने बताइएको छ। संसारवृक्षको **अयन** अर्थात् आश्रय एउटै प्रकृति हो। यसमा सुख र दुःखरूपी दुई फल लाग्छन्। यो रुखको मूल जरा सत्त्व, रज र तम गरी तीन गुणहरू छन्। यसबाट चार प्रकारको रस अर्थात् पुरुषार्थ निस्कन्छ जसलाई धर्म, अर्थ, काम र मोक्ष भनिन्छ। **पञ्चविधः** पदको अर्थ हुन्छ रूपज्ञान, रसज्ञान आदि ज्ञानका पाँच साधनहरू नै जसलाई जान्ने साधन छन्। **षडात्मा** अर्थात् छ भावविकार (उत्पन्न हुनु, रहनु, परिवर्तित हुनु, बढ्नु, घट्नु र नष्ट हुनु) नै यो संसारको स्वभाव हो। **सप्तत्वक्** अर्थात् सात धातु नै यस रुखका छाला हुन्। सप्त धातु भन्नाले अन्नको रस, रगत, मासु, बोसो, हड्डी, मासी र वीर्यलाई लिनुपर्दछ। यो रुख **अष्टविटपः** अर्थात् पञ्च महाभूत, मन, बुद्धि र अहङ्कार गरी आठ हाँगा भएको छ। शरीरका नौ द्वार नै यसका टोड्का हुन्। यसमा प्राण, अपान, समान, उदान, व्यान अनि नाग, कूर्म, कृकल, देवदत्त, धनञ्जय गरी दश वायु नै दशओटा पात झैं छन्। यो **आदिवृक्षः** अर्थात् अनादि कालदेखि रहिआएको रुख हो, जसमा दुई चरा जीवात्मा र परमात्मा रहिआएका छन्।

यो सम्पूर्ण प्रपञ्चको उत्पत्ति केवल परमात्माबाट मात्र भएको हो भनी दोस्रो श्लोकमा परमात्मालाई नै सृष्टि, स्थिति र पालनकर्ताको रूपमा बताइएको छ। ब्रह्मा, विष्णु र रुद्र सृष्टि आदिका कर्ता हुन् भन्छन् नि भन्ने शङ्काको उत्तरमा भनिन्छ– **त्वन्मायया** अर्थात् हजुरको मायाद्वारा जसको चित्त **संवृत** अर्थात् आवृत भएको या ढाकिएको छ, त्यस्ता मूर्ख अज्ञानीहरू नै ब्रह्मा, विष्णु र रुद्रलाई भिन्न देखी तिनीहरूलाई सृष्टि, स्थिति आदिको कारण मान्दछन्। वास्तवमा त हजुर नै ती रूपमा देखिनुभएको हो भनी यहाँ देवताहरूले देवकीको गर्भमा रहनुभएका भगवान् श्रीहरिको स्तुति गर्नुभएको छ।

**बिभर्षि रूपाण्यवबोध आत्मा क्षेमाय लोकस्य चराचरस्य।**
**सत्त्वोपपन्नानि सुखावहानि सतामभद्राणि मुहुः खलानाम्॥ २९॥**

**पदार्थ–**
**अवबोधः** = ज्ञानस्वरूप र
**आत्मा** = आत्मस्वरूप हजुर
**चराचरस्य** = चराचर
**लोकस्य** = लोकको
**क्षेमाय** = कल्याणका लागि
**सतां** = सज्जनहरूलाई
**सुखावहानि** = सुख दिने
**सत्त्वोपपन्नानि** = सत्त्वगुणप्रधान
**खलानाम्** = दुष्टहरूको लागि
**अभद्राणि** = भयजनक
**रूपाणि** = रूपहरू

**मुहुः** = बारम्बार
**बिभर्षि** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! हजुर ज्ञानस्वरूप र आत्मस्वरूप हुनुहुन्छ। हजुर नै यो सारा चराचर जगत्को कल्याणका लागि सज्जनहरूलाई सुख दिने सत्त्वगुणप्रधान अवतार र दुष्टहरूलाई भय दिने डरलाग्दो अवतार पनि बारम्बार लिने गर्नुहुन्छ।

**त्वय्यम्बुजाक्षाखिलसत्त्वधाम्नि समाधिनावेशितचेतसैके।**
**त्वत्पादपोतेन महत्कृतेन कुर्वन्ति गोवत्सपदं भवाब्धिम्॥ ३०॥**

**पदार्थ–**
**अम्बुजाक्ष** = हे कमलनयन प्रभु
**एके** = कोही विवेकीहरू मात्र
**अखिलसत्त्वधाम्नि** = सारा प्राणीहरूको वास्तविक गतिको केन्द्रस्वरूप
**त्वयि** = हजुरमा
**समाधिना** = समाधिद्वारा
**आवेशितचेतसा** = आफ्नो चित्तलाई राखेर
**महत्कृतेन** = खुब आदरपूर्वक सेवा गरिएको
**त्वत्पादपोतेन** = हजुरको चरणकमलरूपी डुङ्गाद्वारा
**भवाब्धिम्** = यो अपार संसारसागरलाई
**गोवत्सपदं** = बाच्छाको खुरले टेक्दा बनेको डोबिल्को समान
**कुर्वन्ति** = अनुभव गर्दछन् (र सजिलै तर्दछन्)

**वाक्यार्थ–** हे कमलनयन प्रभु ! कोही त्यस्ता विवेकी मानिसहरू मात्र सारा प्राणीहरूको वास्तविक गतिस्वरूप हजुरमा समाधिद्वारा आफ्नो चित्तवृत्तिलाई राखेर खुब आदरपूर्वक सेवा गरिएको हजुरको चरणकमललाई डुङ्गा बनाएर यो अपार संसारसागरलाई पनि बाच्छाको खुरले बनाएको डोबिल्को झैं सजिलै पार गर्दछन्।

**स्वयं समुत्तीर्य सुदुस्तरं द्युमन् भवार्णवं भीममदभ्रसौहृदाः।**
**भवत्पदाम्भोरुहनावमत्र ते निधाय याताः सदनुग्रहो भवान्॥ ३१॥**

**पदार्थ–**
**द्युमन्** = हे स्वयंप्रकाश प्रभु
**अदभ्रसौहृदाः** = धेरै सहृदयता भएकाहरूले (सम्पूर्ण प्राणीहरूमा दया गर्नेहरूले)
**सुदुस्तरं** = तर्न गाह्रो
**भीमं** = डरलाग्दो
**भवार्णवं** = संसारसागरलाई
**स्वयं** = अनायासमै
**समुत्तीर्य** = तरेर
**भवत्पदाम्भोरुहनावम्** = हजुरको चरणकमलरूपी डुङ्गा
**अत्र** = यहीँ नै
**निधाय** = छाडेर
**ते** = ती
**याताः** = गएका छन् (अब यही डुङ्गाबाट अरू पनि भवसागर तर्न सक्दछन्, त्यसैले)
**भवान्** = हजुर
**सदनुग्रहः** = सज्जनको अनुग्रह गर्नेवाला हुनुहुन्छ

**वाक्यार्थ–** हे स्वयंप्रकाश प्रभु ! सम्पूर्ण प्राणीहरूमा दया गर्नेहरूले तर्न गाह्रो र डरलाग्दो संसाररूपी सागरलाई हजुरकै चरणरूपी डुङ्गाबाट सजिलै तरेर त्यो डुङ्गा यहीँ छाडेर गएका छन्। अब यही डुङ्गाबाट अरू पनि तर्न सकून् भनी हजुरले सबैलाई अनुग्रह गरिहनुभएको छ।

**येऽन्येऽरविन्दाक्ष विमुक्तमानिनस्त्वय्यस्तभावादविशुद्धबुद्धयः।**
**आरुह्य कृच्छ्रेण परं पदं ततः पतन्त्यधोऽनादृतयुष्मदङ्घ्रयः॥ ३२॥**

**पदार्थ–**
**अरविन्दाक्ष** = हे कमलनयन प्रभु
**विमुक्तमानिनः** = आफूलाई मुक्त सम्झने अभिमानी
**अन्ये** = अरू
**ये** = जो व्यक्तिहरू छन् ती
**त्वयि** = हजुरमा
**अस्तभावात्** = भक्ति नभएको हुनाले
**अविशुद्धबुद्धयः** = चित्त शुद्ध नभएका ती
**अनादृतयुष्मदङ्घ्रयः** = हजुरको चरणकमलको सेवाबाट वञ्चित भएका व्यक्तिहरू
**कृच्छ्रेण** = (तपस्या आदि) कठिन साधनद्वारा
**परं पदं** = उत्कृष्ट पदमा
**आरुह्य** = उक्लिएर पनि
**ततः** = त्यहाँबाट फेरि
**अधः** = तलतिर (जन्म, मरण युक्त संसारमा)
**पतन्ति** = खस्दछन्

**वाक्यार्थ–** हे कमलनयन प्रभु ! आफूलाई मुक्त सम्झने केही अभिमानीहरू हजुरको भक्तिबाट टाढा रहनाले तिनीहरूको चित्त शुद्ध भएको हुँदैन। हजुरको चरणकमलको सेवाबाट वञ्चित भएका ती व्यक्तिहरू तपस्या आदि कठिन साधनद्वारा उत्कृष्ट पदमा पुगेर पनि फेरि तलतिरै ( जन्म, मरण आदि युक्त संसारमा नै) खस्दछन्।

**तथा न ते माधव तावकाः क्वचिद् भ्रश्यन्ति मार्गात् त्वयि बद्धसौहृदाः।**
**त्वयाभिगुप्ता विचरन्ति निर्भया विनायकानीकपमूर्धसु प्रभो॥ ३३॥**

**पदार्थ–**
**माधव** = हे लक्ष्मीपति
**प्रभो** = हे सर्वसमर्थ (हजुरको भक्तिबाट विमुख भएका व्यक्तिहरू जसरी परम पदबाट पनि खस्दछन्)
**तथा** = त्यसै गरी
**त्वयि** = हजुरमा
**बद्धसौहृदाः** = ज्यादै प्रेमले शरणागत भएका
**ते** = ती
**तावकाः** = हजुरका भक्तहरू
**क्वचित्** = कहिल्यै पनि (तत्त्वज्ञान नभए पनि)
**मार्गात्** = मुक्तिमार्गबाट
**न भ्रश्यन्ति** = खस्दैनन् (किन्तु)
**त्वया** = हजुरद्वारा
**अभिगुप्ताः** = रक्षा गरिएका ती व्यक्तिहरू
**निर्भयाः** = भयरहित भएर
**विनायकानीकपमूर्धसु** = विघ्न ल्याउने सेनाको सेनापतिको टाउकोमा
**विचरन्ति** = घुम्छन् (त्यस्ताको टाउकामा टेकेर उच्च पदमा पुग्दछन्)

**वाक्यार्थ–** हे माधव प्रभु ! हजुरको भक्तिरहित व्यक्तिहरू जसरी सानो विघ्नले पनि परम पदबाट खस्दछन् त्यसरी हजुरमा शरणागत भएका हजुरका भक्तहरू कहिल्यै पनि मुक्तिमार्गबाट च्युत हुँदैनन्। बरु हजुरबाट सुरक्षित ती व्यक्तिहरू त भयरहित भएर विघ्न गर्न आउने सेनाका सेनापतिहरूको टाउकोमा चढेर परम पदमा पुग्दछन्।

**विवरण–** माथिका दुई श्लोकमा भक्तिविना कुनै पनि साधनले सफलता नदिने बताइएको छ। जो मानिस आफैँलाई मुक्त भन्दै हिँड्छ, तर भक्ति गर्दैन भने त्यो घमन्डी व्यक्ति पतित हुन्छ

किनभने भक्ति नभई चित्त शुद्ध नहुने हुनाले ती आफूलाई ज्ञानी भनाउने व्यक्तिहरूको ज्ञानप्राप्तिमा योग्यता पनि भएको हुँदैन। भक्तिविनाको ज्ञानले अपरोक्ष साक्षात्कार उत्पन्न गर्न सक्दैन, साथै अहङ्कार बढाएर त्यो त पतनको कारण पो बन्दछ। यहाँ ज्ञानका साधन पाएर पनि भक्तिविना व्यक्तिहरू खस्छन् या सफलता पाउँदैनन् भन्न खोजिएको हो। भगवान्को भक्त भने भगवत्कृपाद्वारा स्वतः नै मोक्षमार्गमा अग्रसर हुन्छ। उनीहरूको मुक्तिमार्गमा कुनै विघ्न आउँदैन। उनीहरू त विघ्नमाथि आफ्नो पाउ राखिदिन्छन् भनी यहाँ परमात्मसाक्षात्कारका लागि भक्तिको अनिवार्यता देखाइएको छ।

**सत्त्वं विशुद्धं श्रयते भवान् स्थितौ शरीरिणां श्रेयउपायनं वपुः।**
**वेदक्रियायोगतपःसमाधिभिस्तवार्हणं येन जनः समीहते ॥ ३४ ॥**

**पदार्थ–**
**भवान्** = हजुर
**स्थितौ** = संसारको पालनपोषण गर्दा
**शरीरिणां** = प्राणीहरूलाई
**श्रेयउपायनं** = कर्मफलप्रदान गर्ने
**विशुद्धं** = शुद्ध
**सत्त्वं** = सात्त्विक
**वपुः** = स्वरूपलाई
**श्रयते** = स्वीकार गर्नुहुन्छ (सात्त्विकरूप लिनुहुन्छ)
**येन** = जुन सात्त्विक रूपलाई (विग्रहलाई) आधार बनाएर
**जनः** = मानिसहरूले
**वेदक्रियायोगतपःसमाधिभिः** = वैदिक यज्ञ, योग तथा समाधिहरूद्वारा
**तव** = हजुरको
**अर्हणं** = पूजा
**समीहते** = गर्दछन्

**वाक्यार्थ–** हजुर संसारको पालनपोषण गर्नको लागि प्राणीहरूलाई कर्मफल प्रदान गर्ने शुद्धसत्त्वगुणी विग्रहलाई धारण गर्नुहुन्छ। जुन विग्रहलाई आधार मानेर हजुरका भक्तहरू वैदिक यज्ञहरू, ब्रह्मचर्य आदि योग तथा समाधिद्वारा हजुरको पूजा गर्दछन्।

**सत्त्वं न चेद्धातरिदं निजं भवेद् विज्ञानमज्ञानभिदापमार्जनम्।**
**गुणप्रकाशैरनुमीयते भवान् प्रकाशते यस्य च येन वा गुणः ॥ ३५ ॥**

**पदार्थ–**
**धातः** = हे सबैका पालक प्रभु
**इदं** = यो
**निजं सत्त्वं** = हजुरको सत्त्वगुणप्रधान विग्रह
**न चेत्** = यदि थिएन भने
**अज्ञानभिदापमार्जनम्** = अज्ञानलाई र अज्ञानको कारणले भएको भेदलाई नाश गर्ने
**विज्ञानं** = ज्ञानरूप (हजुरको अपरोक्ष साक्षात्कार)
**न भवेत्** = हुने नै थिएन
**येन** = जुन हजुरद्वारा
**यस्य** = हजुरको नै मायाका जो
**गुणः वा** = गुणहरू छन् (बुद्धि आदि गुण छन्, तिनीहरू)
**प्रकाशते** = प्रकाशित हुन्छन् र
**भवान्** = हजुर चाहिँ
**गुणप्रकाशैः च** = गुणमा प्रकाश दिने कुनै परमतत्त्व छ भनेर
**अनुमीयते** = अनुमानद्वारा बुझिनुहुन्छ

**वाक्यार्थ–** हे सबैका पालक प्रभु ! यदि हजुरको सत्त्वगुणप्रधान विशुद्ध विग्रह प्रकट नभएको

अज्ञानलाई र अज्ञानको कारणले भएको भेदलाई नाश गर्ने विशुद्ध विज्ञान वा हजुरको अपरोक्षानुभूति पनि हुने थिएन। सारा त्रिगुणात्मक बुद्धिवृत्तिहरूलाई हजुर नै प्रकाशित गर्नुहुन्छ तर ती बुद्धिवृत्तिद्वारा हजुर प्रकाशित वा प्रत्यक्ष हुनुहुन्न केवल अनुमानद्वारा मात्रै बुझिनुहुन्छ।

**न नामरूपे गुणजन्मकर्मभिर्निरूपितव्ये तव तस्य साक्षिणः।**
**मनोवचोभ्यामनुमेयवर्त्मनो देव क्रियायां प्रतियन्त्यथापि हि ॥ ३६ ॥**

**पदार्थ–**
**देव** = हे प्रभु
**मनोवचोभ्यां** = मन र वाणीको विषय नभएको
**अनुमेयवर्त्मनः** = अनुमानद्वारा मात्र बुझ्न सकिने
**तस्य** = त्यस्तो
**साक्षिणः** = सारा बुद्धिवृत्तिको साक्षीस्वरूप
**तव** = हजुरको
**नामरूपे** = नाम र रूपलाई
**गुणजन्मकर्मभिः** = गुण, जन्म र कर्मद्वारा
**न निरूपितव्ये** = निरूपण गर्न सकिँदैन
**अथ अपि** = तै पनि (हजुरका भक्तहरू)
**क्रियायां** = हजुरका नामकीर्तन र गुणचिन्तन आदि कार्यमा
**हि** = निश्चय नै
**प्रतियन्ति** = लागिरहेका छन् (साक्षात्कार गरिरहेका छन्)

**वाक्यार्थ–** हे प्रभु ! मन र वचनको विषय नभएका, अनुमानबाट मात्र जान्न सकिने सर्वसाक्षीस्वरूप हजुरको नाम र रूपलाई, गुण, जन्म र कर्मको आधारमा चिरूपण गर्न सकिँदैन तैपनि हजुरका भक्तहरू हजुरको नामकीर्तन र गुणचिन्तनमा लागिरहेका छन् र उनीहरूले हजुरको साक्षात्कार पनि गरिरहेका छन्।

**शृण्वन् गृह्णन् संस्मरयंश्च चिन्तयन् नामानि रूपाणि च मङ्गलानि ते।**
**क्रियासु यस्त्वच्चरणारविन्दयोराविष्टचेता न भवाय कल्पते ॥ ३७ ॥**

**पदार्थ–**
**यः** = जो व्यक्ति
**ते** = हजुरका
**मङ्गलानि** = कल्याणकारक
**नामानि** = नामहरू र
**रूपाणि च** = रूपहरू पनि
**शृण्वन्** = सुन्दै
**गृह्णन्** = सुनाउँदै
**चिन्तयन्** = चिन्तन गर्दै र
**संस्मरयन् च** = सम्झँदै तथा सम्झाउँदै
**त्वच्चरणारविन्दयोः** = हजुरको चरणारविन्दमा
**आविष्टचेताः** = चित्त लगाएको छ, त्यो व्यक्ति
**क्रियासु** = लौकिक तथा अलौकिक क्रियामा (संलग्न रहेर पनि)
**भवाय** = फेरि जन्ममरणयुक्त संसारमा आउन
**न कल्पते** = योग्य हुँदैन (आउँदैन)

**वाक्यार्थ–** हे प्रभु ! हजुरका कल्याणकारक नाम र रूपहरूलाई सुन्दै, सुनाउँदै, सम्झँदै र सम्झाउँदै रहेको व्यक्ति लौकिक क्रियाकलापमा संलग्न भए पनि हजुरको चरणारविन्दमा आफ्नो चित्त लगाएका ती भक्तहरू फेरि संसारमा आउँदैनन्।

**दिष्ट्या हरेऽस्या भवतः पदो भुवो भारोऽपनीतस्तव जन्मनेशितुः।**

**दिष्ट्याङ्कितां त्वत्पदकैः सुशोभनैर्द्रक्ष्याम गां द्यां च तवानुकम्पिताम् ॥ ३८ ॥**

**पदार्थ–**
**हरे** = हे दुःखनाशक प्रभु
**दिष्ट्या** = भाग्यले
**ईशितुः** = साराका नियामक
**तव** = हजुरको
**जन्मना** = जन्म मात्रले
**भवतः** = हजुरको
**पदः** = चरणस्वरूप
**अस्याः** = यिनी
**भुवः** = पृथिवीको
**भारः** = सारा भार
**अपनीतः** = हटेर गयो
**दिष्ट्या** = भाग्यले
**सुशोभनैः** = अत्यन्त राम्रा
**त्वत्पदकैः** = हजुरका चरणद्वारा
**अङ्कितां** = वज्र, अङ्कुश, ध्वज आदि चिह्नले युक्त भएकी
**तव** = हजुरद्वारा
**अनुकम्पिताम्** = कृपा गरिएकी (टेकिएकी)
**गां** = पृथिवी
**द्यां च** = स्वर्गलाई पनि
**द्रक्ष्यामः** = हामीले देख्नेछौँ

**वाक्यार्थ–** हे दुःखनाशक प्रभु ! भाग्यले गर्दा हजुरको जन्म मात्रले हजुरको चरणरूपा पृथिवीको सारा भार गयो। भाग्यले नै गर्दा वज्र, अङ्कुश, ध्वज आदि चिह्नले युक्त भएका हजुरका चरणले टेकेर कृपा गरिएकी पृथिवी र स्वर्गलाई पनि हामीले देख्नेभयौँ।

**न तेऽभवस्येश भवस्य कारणं विना विनोदं बत तर्कयामहे ।**
**भवो निरोधः स्थितिरप्यविद्यया कृता यतस्त्वय्यभयाश्रयात्मनि ॥ ३९ ॥**

**पदार्थ–**
**ईश** = हे सर्वसमर्थ
**अभय** = हे भयरहित
**आश्रय** = हे जगत्कै आधार प्रभु
**अभवस्य** = असंसारी
**ते** = हजुरको
**भवस्य** = अजन्मा
**कारणं** = कारण
**बत** = निश्चय नै
**विनोदं विना** = केवल हजुरको क्रीडाका लागि भन्नु बाहेक
**न तर्कयामहे** = हामीले तर्कना र विचार गरेका छैनौँ
**यतः** = किनभने
**आत्मनि** = सर्वात्मस्वरूप हजुरमा
**भवः** = (संसारको) उत्पत्ति
**निरोधः** = प्रलय र
**स्थितिः अपि** = स्थिति पनि
**अविद्यया** = अविद्याद्वारा नै
**कृताः** = भएको हो

**वाक्यार्थ–** अभयपदको दाता र सबैको आश्रय भएका हे सर्वसमर्थ प्रभु ! अजन्मा हजुरको जन्मको कारणको विषयमा विचार गर्दा हजुरको क्रीडाबाहेक अरू केही कारण छ जस्तो लाग्दैन। यथार्थमा त हजुरमा जो सारा प्रपञ्चको उत्पत्ति, स्थिति र लय भइरहेको छ, त्यो पनि केवल अविद्याकै कारणले भएको हो।

**मत्स्याश्वकच्छपनृसिंहवराहहंस-**
**राजन्यविप्रविबुधेषु कृतावतारः ।**
**त्वं पासि नस्त्रिभुवनं च तथाधुनेश**
**भारं भुवो हर यदूत्तम वन्दनं ते ॥ ४० ॥**

**पदार्थ–**
**यदूत्तम** = हे यदुश्रेष्ठ
**मत्स्याश्वकच्छपनृसिंहवराहहंस-**

**राजन्यविप्रविबुधेषु** = मत्स्य, हयग्रीव, कछुवा, नृसिंह, वराह, हंस, श्रीराम, परशुराम र वामन आदि रूपमा
**कृतावतारः** = अवतार लिनुहुने
**त्वं** = हजुरले
**नः** = हामी देवताहरूलाई र
**त्रिभुवनं** = तीनै लोकलाई
**पासि** = जसरी रक्षा गर्नुभएको थियो
**तथा** = त्यसै गरी
**अधुना च** = अहिले पनि
**ईश** = हे प्रभु
**भुवः** = पृथिवीको
**भारं** = भारलाई
**हर** = हरण गर्नुहोस्
**ते** = हजुरको चरणमा
**वन्दनम्** = नमस्कार छ

**वाक्यार्थ—** हे यदुश्रेष्ठ प्रभु ! मत्स्य, हयग्रीव, कछुवा, नृसिंह, वराह, हंस, श्रीराम, परशुराम र वामन आदि अवतार लिएर हजुरले हामी देवताहरूको र तीनै लोकको रक्षा गर्नुभएको थियो। हे प्रभु ! अहिले पनि पृथिवीको भारलाई हरण गर्नुहोस्, हामी हजुरका चरणको वन्दना गर्दछौँ।

**दिष्ट्याम्ब ते कुक्षिगतः परः पुमानंशेन साक्षाद् भगवान् भवाय नः।**
**माभूद् भयं भोजपतेर्मुमूर्षोर्गोप्ता यदूनां भविता तवात्मजः॥ ४१॥**

**पदार्थ—**
**अम्ब** = हे माता
**दिष्ट्या** = भाग्यले गर्दा
**नः** = हामीहरूको
**भवाय** = मङ्गलको लागि
**परः पुमान्** = परमपुरुष
**साक्षात् भगवान्** = साक्षात् भगवान् नारायण
**अंशेन** = ज्ञान, ऐश्वर्य आदि अंशसहित
**ते** = हजुरको
**कुक्षिगतः** = गर्भमा आइसक्नुभएको छ (त्यसैले)
**मुमूर्षोः** = अब केही दिनमैँ मर्ने
**भोजपतेः** = (भोजहरूका मालिक) कंसबाट
**भयं** = डर
**माभूत्** = नरहोस् (डर नमान्नुहोस् किनभने)
**तव** = हजुरको
**आत्मजः** = छोरो
**यदूनां** = सारा यदुवंशीहरूको
**गोप्ता** = रक्षक
**भविता** = हुनेछ

**वाक्यार्थ—** हे माता देवकी ! हाम्रो सौभाग्यले हामीहरू सबैलाई कल्याण गर्ने परमपुरुष भगवान् नारायण अंशसहित हजुरको गर्भमा आइसक्नुभएको छ। अब केही दिनमैँ मर्नेवाला यो कंसबाट हजुर नडराउनुहोस्, हजुरका छोराले सारा यदुवंशीहरूको रक्षा गर्नुहुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यभिष्टूय पुरुषं यद्रूपमनिदं यथा।**
**ब्रह्मेशानौ पुरोधाय देवाः प्रतिययुर्दिवम्॥ ४२॥**

**पदार्थ—**
**इति** = यसप्रकार
**यथा** = जसरी
**यद्रूपं** = जुन भगवान्को रूप
**अनिदं** = यस्तो छ भनेर बताउन सकिँदैन (तैपनि जानेअनुसार)
**पुरुषं** = परमपुरुष भगवान्लाई
**अभिष्टूय** = स्तुति गरेर
**देवाः** = देवताहरू
**ब्रह्मेशानौ** = ब्रह्मा र शङ्करजीलाई
**पुरोधाय** = अगाडि लगाएर
**दिवम्** = स्वर्गतिर
**प्रतिययुः** = गए

**वाक्यार्थ—** यसरी यस्तै रूपको हुनुहुन्छ भनेर बताउन नसकिने प्रभुको आफूले जानेअनुसार स्तुति

गरेर देवताहरू ब्रह्मा र शङ्करजीलाई अगाडि लगाएर स्वर्गतिर गए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**

**गर्भगतविष्णोर्ब्रह्मादिकृतस्तुतिर्नाम द्वितीयोऽध्यायः॥ २॥**

# अथ तृतीयोऽध्यायः

## भगवान् श्रीकृष्णको जन्म

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ सर्वगुणोपेतः कालः परमशोभनः।**

**यर्ह्येवाजनजन्मर्क्षं शान्तर्क्षग्रहतारकम्॥ १॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**कालः** = समय
**परमशोभनः** = अति राम्रो
**सर्वगुणोपेतः** = सारा शुभ गुणहरूले युक्त थियो
**यर्हि** = जुन समयमा
**अजनजन्मर्क्षं** = अजन्मा भगवान्को जन्म नक्षत्र (रोहिणी) थियो र
**शान्तर्क्षग्रहतारकम् एव** = आकाशमा नक्षत्र, ग्रह र ताराहरू शान्त थिए

**वाक्यार्थ—** भगवान्को जन्मने समय अति राम्रो र सारा शुभगुणहरूले युक्त भएको थियो। त्यस समयमा अजन्मा भगवान् जन्मने नक्षत्र पनि रोहिणी परेको थियो र आकाशका ग्रह, नक्षत्र र ताराहरू पनि शान्त थिए।

**दिशः प्रसेदुर्गगनं निर्मलोडुगणोदयम्।**

**मही मङ्गलभूयिष्ठपुरग्रामव्रजाकरा॥ २॥**

**पदार्थ—**
**दिशः** = दिशाहरू
**प्रसेदुः** = प्रसन्न (निर्मल) देखिए
**गगनं** = आकाश
**निर्मलोडुगणोदयम्** = स्वच्छ तारा र नक्षत्र आदिको उदयले अति सुन्दर भयो
**मही** = पृथिवी पनि
**मङ्गलभूयिष्ठपुरग्रामव्रजाकरा** = ठुला-ठुला नगर, गाउँबस्तीहरू र गाईगोठहरू सबैतिर मङ्गलमय बनिन्

**वाक्यार्थ—** दिशाहरू निर्मल देखिए, आकाशमा स्वच्छ तारामण्डल र नक्षत्रगण चम्कन थाले, पृथिवीका ठुला-ठुला नगर, गाउँबस्तीहरू र गाईगोठहरू पनि निकै मङ्गलमय भए।

**नद्यः प्रसन्नसलिला ह्रदा जलरुहश्रियः।**

**द्विजालिकुलसन्नादस्तवका वनराजयः॥ ३॥**

**पदार्थ—**
**नद्यः** = नदीहरू
**प्रसन्नसलिलाः** = निर्मल जलयुक्त बने
**ह्रदाः** = पोखरीहरू
**जलरुहश्रियः** = फूलेका कमलका शोभाले युक्त भए
**वनराजयः** = वनमा रहेका रुखका पङ्क्तिहरू
**द्विजालिकुलसन्नादस्तवकाः** = चरा र भँवराहरूको मधुर आवाज अनि रङ्गी-बिरङ्गीका

फूलका गुच्छाहरूले सुशोभित भए

**वाक्यार्थ–** नदीहरूमा निर्मल पानी बग्न थाल्यो, पोखरीहरूमा कमलका फूलहरू फुल्न थाले। वनमा रुखका पङ्क्तिहरू चरा र भँवराहरूको मधुर आवाज अनि रङ्गी–बिरङ्गी फूलका गुच्छाहरूले सुशोभित भए।

**ववौ वायुः सुखस्पर्शः पुण्यगन्धवहः शुचिः।**

**अग्नयश्च द्विजातीनां शान्तास्तत्र समिन्धत॥ ४॥**

**पदार्थ–**
**पुण्यगन्धवहः** = राम्रो र मन्द सुगन्ध बोकेको
**शुचिः** = पवित्र
**वायुः** = हावा
**सुखस्पर्शः** = प्राणीहरूलाई आनन्दकारक स्पर्श दिँदै
**ववौ** = बग्न थाल्यो
**द्विजातीनां** = ब्राह्मणहरूका
**शान्ताः** = कंसको भयले शान्त (झण्डै निभ्न खोजेका) भैसकेका
**अग्नयः च** = (यज्ञका) अग्निहरू पनि
**तत्र** = त्यो शुभ समयमा
**समिन्धत** = राम्रोसँग बल्न थाले

**वाक्यार्थ–** मन्द सुगन्धले युक्त पवित्र वायु प्राणीहरूलाई सुखस्पर्श दिँदै बहन थाल्यो। कंसको भयले ब्राह्मणहरूको यज्ञको निभ्न लागेको अग्नि पनि खुब राम्रोसँग बल्न थाल्यो।

**मनांस्यासन् प्रसन्नानि साधूनामसुरद्रुहाम्।**

**जायमानेऽजने तस्मिन् नेदुर्दुन्दुभयः दिवि॥ ५॥**

**पदार्थ–**
**अजने** = अजन्मा
**तस्मिन्** = ती परमपुरुष भगवान्
**जायमाने** = जन्मँदा
**असुरद्रुहाम्** = (असुरका शत्रुहरूका) देवताहरूका र
**साधूनां** = साधुहरूका
**मनांसि** = मनहरू
**प्रसन्नानि** = प्रसन्न
**आसन्** = थिए (त्यसै वेला)
**दिवि** = स्वर्गमा
**दुन्दुभयः** = दमाहा आदि बाजाहरू
**नेदुः** = बज्न थाले

**वाक्यार्थ–** अजन्मा परमात्मा जन्मने समयमा देवता र साधुहरूका मन प्रसन्न भए अनि स्वर्गमा दमाहा आदि बाजाहरू बज्न थाले।

**जगुः किन्नरगन्धर्वास्तुष्टुवुः सिद्धचारणाः।**

**विद्याधर्यश्च ननृतुरप्सरोभिः समं मुदा॥ ६॥**

**पदार्थ–**
**किन्नरगन्धर्वाः** = किन्नर र गन्धर्वहरूले
**जगुः** = (भगवान्को कीर्तन) गाए
**सिद्धचारणाः** = सिद्ध र चारणहरूले
**तुष्टुवुः** = स्तुति गरे
**विद्याधर्यः च** = विद्याधरहरू
**अप्सरोभिः समं** = अप्सराहरू सहित भएर
**मुदा** = खुसीले
**ननृतुः** = नाचे

**वाक्यार्थ–** किन्नर र गन्धर्वहरूले भगवान्को गुणकीर्तन गर्न थाले, सिद्ध र चारणहरूले स्तुति गर्न थाले र विद्याधरहरू अप्सराहरूसँगै खुसीले नाच्न थाले।

**मुमुचुर्मुनयो देवाः सुमनांसि मुदान्विताः।**
**मन्दं मन्दं जलधरा जगर्जुरनुसागरम्॥ ७॥**

**पदार्थ–**
**मुदान्विताः** = अति प्रसन्न भएका
**मुनयः** = मुनिहरू र
**देवाः** = देवताहरूले
**सुमनांसि** = फूलहरू
**मुमुचुः** = वृष्टि गरे
**जलधराः** = मेघहरू
**मन्दं मन्दं** = मन्द-मन्द स्वरमा
**अनुसागरम्** = सागरको आसपासमा
**जगर्जुः** = गर्जना गर्न थाले

**वाक्यार्थ–** अति प्रसन्न भएका मुनिहरू र देवताहरूले आकाशबाट पुष्पवृष्टि गरे। बादलहरूले सागरको आसपासमा गएर मन्द-मन्द स्वरले गर्जना गर्न थाले।

**निशीथे तम उद्भूते जायमाने जनार्दने।**
**देवक्यां देवरूपिण्यां विष्णुः सर्वगुहाशयः॥**
**आविरासीद् यथा प्राच्यां दिशीन्दुरिव पुष्कलः॥ ८॥**

**पदार्थ–**
**जनार्दने** = जनार्दन (मानिसलाई जन्ममृत्युबाट मुक्त गराउनुहुने भगवान्) (जन्मने वेला)
**तमः उद्भूते** = अन्धकार व्याप्त
**निशीथे** = अर्धरात्रि
**जायमाने** = भएपछि
**प्राच्यां दिशि** = पूर्व दिशामा
**यथा** = जसरी
**पुष्कलः** = पूर्ण
**इन्दुः इव** = चन्द्रमा उदाए जस्तै
**देवरूपिण्यां** = देवरूपिणी
**देवक्यां** = देवकीमा
**सर्वगुहाशयः** = सबैको हृदयमा वास गर्नुहुने
**विष्णुः** = भगवान् नारायण
**आविरासीत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** मानिसलाई जन्ममृत्युबाट मुक्त गराउने भगवान् जनार्दन जन्मने वेला अन्धकार व्याप्त अर्धरात्रिको समयमा पूर्व दिशामा पूर्ण चन्द्रमाको उदय भए जस्तै देवरूपिणी देवकीमा सर्वान्तर्यामी भगवान् नारायण प्रकट हुनुभयो।

**तमद्भुतं बालकमम्बुजेक्षणं चतुर्भुजं शङ्खगदार्युदायुधम्।**
**श्रीवत्सलक्ष्मं गलशोभिकौस्तुभं पीताम्बरं सान्द्रपयोदसौभगम्॥ ९॥**
**महार्हवैदूर्यकिरीटकुण्डलत्विषा परिष्वक्तसहस्रकुन्तलम्।**
**उद्दामकाञ्च्यङ्गदकङ्कणादिभिर्विरोचमानं वसुदेव ऐक्षत॥ १०॥**

**पदार्थ–**
**अम्बुजेक्षणं** = कमलको फूलजस्तो आँखा भएका

**चतुर्भुजं** = चारहात भएका
**शङ्खगदार्युदायुधम्** = शङ्ख, गदा र चक्र आदि धारण गरेका
**श्रीवत्सलक्ष्मं** = श्रीवत्सको चिह्नले अङ्कित
**गलशोभिकौस्तुभं** = गलामा कौस्तुभ मणिले सुशोभित
**पीताम्बरं** = पीताम्बर धारण गरेका
**सान्द्रपयोदसौभगम्** = घना मेघको जस्तो सुन्दर कान्ति भएका
**महार्हवैदूर्यकिरीटकुण्डलत्विषा** = बहुमूल्य नीलम मणि, किरीट र कुण्डलको कान्तिले
**परिष्वक्तसहस्रकुन्तलम्** = हजारौं जस्ता लाग्ने केशराशिहरू चम्किरहेका
**उद्दामकाञ्च्यङ्गदकङ्कणादिभिः** = अत्यन्त सुन्दर कटिसूत्र, बाजू, बाला आदि आभूषणहरूले
**विरोचमानं** = अति सुन्दर देखिएका
**अद्‌भुतं** = अति नै अद्‌भुत
**तं** = ती
**बालकं** = बालकलाई
**वसुदेव** = वसुदेवले
**ऐक्षत** = देख्नुभयो

**वाक्यार्थ–** कमलजस्तो सुन्दर आँखा भएका, चार हातमा शङ्ख, चक्र, गदा र पद्म धारण गरेका, छातीमा श्रीवत्स चिह्नले अङ्कित, गलामा कौस्तुभमणिले सुशोभित, पीताम्बरधारी, घना मेघजस्तो कान्तियुक्त तथा बहुमूल्य नीलम मणिजडित किरीट र कुण्डलको कान्तिले घुम्रिएका सारा केशराशि चम्किएको, अत्यन्त सुन्दर कटिसूत्र, बाजू, बाला आदि आभूषणहरूले सुन्दर देखिएका अद्‌भुत बालकलाई वसुदेवले देख्नुभयो।

**स विस्मयोत्फुल्लविलोचनो हरिं सुतं विलोक्यानकदुन्दुभिस्तदा।**
**कृष्णावतारोत्सवसम्भ्रमोऽस्पृशन्मुदा द्विजेभ्योऽयुतमाप्लुतो गवाम्॥११॥**

**पदार्थ–**
**तदा** = त्यस बखतमा
**विस्मयोत्फुल्लविलोचनः** = आश्चर्यका कारण प्रफुल्ल नेत्र भएका
**सः** = ती
**आनकदुन्दुभिः** = वसुदेवले
**हरिं** = श्रीहरिलाई
**सुतं** = छोराको रूपमा
**विलोक्य** = देखेर
**कृष्णावतारोत्सवसम्भ्रमः** = कृष्णावतार भइसकेको हुनाले उत्सव मनाउन आतुर हुँदै
**मुदा** = हर्षले
**आप्लुतः** = व्याप्त भएर
**द्विजेभ्यः** = ब्राह्मणहरूलाई
**गवाम् अयुतं** = दशहजार गाई (दान गर्न)
**अस्पृशत्** = छुनुभयो (सङ्कल्प गर्नुभयो)

**वाक्यार्थ–** त्यस बखतमा आश्चर्यका कारण प्रफुल्ल नेत्र भएका वसुदेवले श्रीहरि नै आफ्ना छोराको रूपमा आउनुभएको बुझी कृष्णावतारको उत्सव मनाउन आतुर भएर हर्षले व्याप्त भई तत्कालै ब्राह्मणहरूलाई दश हजार गाई दान गर्ने सङ्कल्प गर्नुभयो।

**अथैनमस्तौदवधार्य पूरुषं परं नताङ्गः कृतधीः कृताञ्जलिः।**
**स्वरोचिषा भारत सूतिकागृहं विरोचयन्तं गतभीः प्रभाववित्॥ १२॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित् !
**अथ** = त्यसपछि

**स्वरोचिषा** = आफ्नो कान्तिले
**सूतिकागृहं** = जन्मघर कारागारलाई
**विरोचयन्तं** = प्रकाशित गराइरहेका
**एनं** = यी (बालकको रूपमा आएका) प्रभुलाई
**परं पूरुषं** = परमात्माको रूपमा
**अवधार्य** = बुझेर
**प्रभावविद्** = भगवान्को प्रभावलाई बुझेका (त्यसैले)
**गतभीः** = निर्भय भएका
**कृतधीः** = शुद्धबुद्धि भएका वसुदेवले
**नताङ्गः** = भगवान्लाई प्रणाम गरी
**कृताञ्जलिः** = हात जोडेर
**अस्तौत्** = स्तुति गर्न थाल्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! त्यसपछि आफ्नो कान्तिले सारा कारागारलाई नै प्रकाशित गरिरहेका अद्‌भुत बालकलाई परमपुरुषकै रूपमा बुझेर निर्भय हुँदै वसुदेवले भगवान्लाई प्रणाम गर्नुभयो र हात जोडी शुद्धबुद्धिले स्तुति गर्न थाल्नुभयो।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**विदितोऽसि भवान् साक्षात् पुरुषः प्रकृतेः परः।**
**केवलानुभवानन्दस्वरूपः सर्वबुद्धिदृक् ॥ १३ ॥**

**पदार्थ–**
**भवान्** = हजुर
**प्रकृतेः** = प्रकृतिभन्दा
**परः** = पर रहेका
**पुरुषः** = पुरुष हुनुहुन्छ
**केवलानुभवानन्दस्वरूपः** = केवल अनुभव र आनन्द नै स्वरूप भएका हजुर
**सर्वबुद्धिदृक्** = सबैका बुद्धिवृत्तिको साक्षीको रूपमा हुनुहुन्छ भनेर
**साक्षात्** = प्रत्यक्षरूपले
**विदितः** = जानिएको
**असि** = हुनुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! हजुर प्रकृतिभन्दा पर रहेको पुरुष हुनुहुन्छ। हजुरलाई केवल अनुभव र आनन्दको रूपमा जान्न सकिन्छ। सारा प्राणीहरूको बुद्धिवृत्तिको साक्षीको रूपमा रहने हजुर नै हुनुहुन्छ भन्ने कुरा प्रत्यक्षरूपले बुझ्न सकिन्छ।

**स एव स्वप्रकृत्येदं सृष्ट्वाग्रे त्रिगुणात्मकम्।**
**तदनु त्वं ह्यप्रविष्टः प्रविष्ट इव भाव्यसे ॥ १४ ॥**

**पदार्थ–**
**सः एव** = तिनै (सच्चिदानन्द-स्वरूप)
**त्वं** = हजुरले
**अग्रे** = सृष्टिको आदिकालमा
**स्वप्रकृत्या** = आफ्नो शक्तिरूप प्रकृतिद्वारा
**त्रिगुणात्मकम्** = त्रिगुणात्मक
**इदं** = यो चराचर जगत्को
**सृष्ट्वा** = सृष्टि गरेर
**तदनु** = त्यसपछि
**हि** = निश्चय नै
**अप्रविष्टः** = प्रवेश नगरे पनि
**प्रविष्टः इव** = प्रवेश गरे झैँ
**भाव्यसे** = लाग्नुहुन्छ

**वाक्यार्थ–** त्यस्तो सच्चिदानन्द स्वरूप हजुर पहिला आफ्नो शक्तिरूप प्रकृतिको आधारमा त्रिगुणात्मक चराचर जगत्को सृष्टि गर्नुहुन्छ र त्यसपछि यथार्थमा हजुर त्यसमा प्रवेश नगरे पनि प्रवेश गरे झैँ लाग्नुहुन्छ।

**विवरण–** भगवान् संसारका कुनै पदार्थद्वारा सीमित भएको हुनुहुन्न। संसारका पदार्थहरू परमात्मामा आश्रित छन्, तर परमात्मा कुनै पदार्थमा पनि आश्रित हुनुहुन्न। गीता (९/४)मा पनि भगवान्ले **मत्स्थानि सर्वभूतानि न चाहं तेष्ववस्थितः** अर्थात्, सबै भूतहरू ममा रहेका छन्, म तिनीहरूमा रहेको छैन भन्नुभएको छ। उसो भए परमात्माले संसार बनाई उहाँ यसभित्र छिर्नुभयो भनी (**तत् सृष्ट्वा तदेवानुप्राविशत्**, तैत्तिरीयोपनिषद्, २/६) भनी किन बताइएको त ? भन्ने शङ्का हुँदा भनिएको छ– **प्रविष्टः इव** अर्थात् पसे झैं भएको मात्र हो। जसरी सर्वव्यापक आकाशमा घैंटोको कल्पना हुँदा त्यो घैंटो आकाशको जति भागमा आश्रित छ त्यति भागलाई घटाकाश भन्दछन्। वास्तवमा त घैंटो नै आकाशमा खडा भएको हो तर व्यवहारमा घैंटोभित्र नै आकाश रहेको भनिन्छ। सर्वव्यापक परमात्मामा जगत् उत्पन्न हुँदा पनि परमात्मा यसभित्र पस्नुभएको भन्ने व्यवहार हुन्छ। त्यसकारण भगवान् संसारका पदार्थभित्र परिच्छिन्न भएर रहेको हुनुहुन्न भन्नु यसको आशय हो।

**यथेमेऽविकृता भावास्तथा ते विकृतैः सह।**
**नानावीर्याः पृथग्भूता विराजं जनयन्ति हि॥ १५॥**
**सन्निपत्य समुत्पाद्य दृश्यन्तेऽनुगता इव।**
**प्रागेव विद्यमानत्वान्न तेषामिह सम्भवः॥ १६॥**

**पदार्थ–**
**यथा** = जसरी (सृष्टिप्रपञ्चमा परमात्माको प्रवेश छैन)
**तथा** = त्यसै गरी
**इमे** = यी
**अविकृताः भावाः** = अविकृत महत् आदि कारणहरूले
**पृथग्भूताः** = अलग-अलगरूपमा
**नानावीर्याः** = एक्लै विशिष्ट कार्यलाई उत्पन्न गराउन सक्दैनन् (त्यसैले)
**विकृतैः सह** = महाभूत आदि विकारहरूसँग
**सन्निपत्य** = मिलेर
**विराजं** = ब्रह्माण्डलाई
**हि** = निश्चय नै
**जनयन्ति** = जन्माउँछन्
**समुत्पाद्य** = यसरी ब्रह्माण्ड जन्माइसकेपछि
**ते** = ती महत्तत्त्व आदि भावहरू
**अनुगताः इव** = कार्यमा पछि अनुगत भए झैं
**दृश्यन्ते** = देखिन्छन् (तर)
**प्राक् एव** = पहिले नै
**विद्यमानत्वात्** = कार्यमा उनीहरू भएकाले
**तेषाम्** = तिनीहरूको
**इह** = यो कार्यमा प्रवेश भन्ने कुरा
**न सम्भवः** = सम्भव छैन

**वाक्यार्थ–** जसरी सृष्टिप्रपञ्चमा परमात्माको अनुप्रवेश भन्न मिल्दैन त्यसै गरी महत् आदि अविकृत भावहरूले अलग-अलग रूपले कार्य उत्पन्न गर्न नसकेर विकृत पञ्चमहाभूत आदिसँग मिलेर ब्रह्माण्डलाई जन्माउँछन्; पछि ब्रह्माण्डमा महत्तत्त्व आदिको प्रवेश जस्तो लाग्छ, तर कार्यमा उनीहरू पहिलेदेखि नै विद्यमान भएकाले प्रवेश सम्भव छैन।

**एवं भवान् बुद्ध्यनुमेयलक्षणैर्ग्राह्यैर्गुणैः सन्नपि तद्गुणाग्रहः।**

**अनावृतत्वाद् बहिरन्तरं न ते सर्वस्य सर्वात्मन आत्मवस्तुनः ॥ १७ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**भवान्** = हजुर
**बुद्ध्यनुमेयलक्षणैः** = रूप आदिको ज्ञानको आधारमा अनुमान गर्नुपर्ने स्वरूपवाला इन्द्रिय आदिले
**ग्राह्यैः** = ग्रहण गरिने
**गुणैः** = गुणहरूसँग
**सन् अपि** = विद्यमान भएर पनि
**तद्गुणाग्रहः** = ती गुणहरूको ग्रहण गर्दा हजुरको ग्रहण छैन
**सर्वस्य** = सर्वरूपले रहेको
**सर्वात्मनः** = अन्तर्यामीस्वरूप
**आत्मवस्तुनः** = पारमार्थिक वस्तु भएका
**ते** = हजुरको
**अनावृतत्वात्** = कुनै मायाको आवरण नभएको हुनाले
**बहिः** = बाहिर र
**अन्तरं** = भित्र भन्ने कुरा
**न** = हुन सक्दैन

**वाक्यार्थ–** यसप्रकार हजुर रूप आदिको ज्ञानको आधारमा अनुमान गरिने इन्द्रियादिद्वारा जानिने गुणहरूसँगै रहे पनि ती इन्द्रियादिले गुणलाई जान्दा हजुरलाई जान्न सक्दैनन् किनभने सर्वान्तर्यामी र सर्वस्वरूप हजुरमा मायाको कुनै आवरण छैन। त्यसैले स्वयंप्रकाश हजुरमा भित्र र बाहिर भन्ने व्यवहार नै हुन सक्दैन। (अनि प्रवेश र अप्रवेश भन्ने कुरा कसरी सम्भव हुन्छ र ?)

**य आत्मनो दृश्यगुणेषु सन्निति व्यवस्यते स्वव्यतिरेकतोऽबुधः।**
**विनानुवादं न च तन्मनीषितं सम्यग् यतस्त्यक्तमुपाददत् पुमान् ॥ १८ ॥**

**पदार्थ–**
**यः** = जसले
**आत्मनः** = आत्माका
**दृश्यगुणेषु** = दृश्य गुण (शरीर आदि)मा
**स्वव्यतिरेकतः** = आफूभन्दा भिन्न ठानेर
**सन् इति** = यो शरीर हो जस्तो
**व्यवस्यते** = भावना गर्दछ (त्यो)
**अबुधः** = अविवेकी व्यक्ति हो, (किनभने)
**तन्मनीषितं** = उसले (सत् भनेर) स्विकारेको वस्तु
**अनुवादं विना** = वाणीको विलास (नाम र रूप)लाई छाडेर
**सम्यक्** = वास्तविक अर्को वस्तु
**न** = हुनै सक्दैन
**यतः च** = त्यसैले
**पुमान्** = त्यो व्यक्तिले (ज्ञानीहरूद्वारा)
**त्यक्तं** = त्यागिएको अनात्मपदार्थलाई
**उपाददत्** = स्वीकार गऱ्यो

**वाक्यार्थ–** जसले आत्माका दृश्य गुण शरीर आदिलाई आफूभन्दा भिन्न ठानेर त्यसमा सद्बुद्धि गर्दछ त्यो अविवेकी व्यक्ति हो किनभने उसले सत् भनेर स्विकारेको वस्तु नाम र रूपले मात्र पृथक् र सत् जस्तो देखिएको हो। वास्तवमा उसले ज्ञानीहरूद्वारा त्यागिएको अनात्मपदार्थलाई ग्रहण गरिरहेको छ।

**त्वत्तोऽस्य जन्मस्थितिसंयमान् विभो वदन्त्यनीहादगुणादविक्रियात्।**
**त्वयीश्वरे ब्रह्मणि नो विरुध्यते त्वदाश्रयत्वादुपचर्यते गुणैः ॥ १९ ॥**

**पदार्थ–**
**विभो** = हे प्रभु
**अनीहात्** = कामनारहित

**अगुणात्** = निर्गुण
**अविक्रियात्** = निर्विकार
**त्वत्तः** = हजुरबाट
**अस्य** = यो चराचरात्मक प्रपञ्चको
**जन्मस्थितिसंयमान्** = उत्पत्ति, स्थिति र लय (हुन्छ भनेर)
**वदन्ति** = भन्दछन्
**ईश्वरे** = अचिन्त्यशक्तिवाला
**ब्रह्मणि** = व्यापक
**त्वयि** = हजुरमा
**नो विरुध्यते** = विरोध हुँदैन
**त्वदाश्रयत्वात्** = (जगदाकारमा परिणत हुने गुणहरूको) आधार नै हजुर भएकाले
**गुणैः** = तिनै गुणको आधारमा
**उपचर्यते** = गौण व्यवहार गरिन्छ

**वाक्यार्थ–** हे प्रभु ! कुनै कामनारहित निर्गुण, निर्विकार हजुरबाट यो चराचरात्मक जगत्को उत्पत्ति, स्थिति र लय हुन्छ भनेर जो भन्छन्, त्यो कुरो अचिन्त्य शक्तिवाला व्यापक हजुरमा कुनै विरोध पर्दैन; किनभने जगदाकारले परिणत हुने सारा गुणहरूको आधार हजुर नै हुनुहुन्छ, तिनै गुणहरूको आधारमा हजुरमा (सृष्टिकर्तृत्व आदि) गौण व्यवहार गरिएको हो।

**विवरण–** यस श्लोकमा भगवान् सम्पूर्ण संसारका कारण भए तापनि अविकारी नै हुनुहुन्छ भन्ने बताइएको छ। परमात्माबाट संसारको उत्पत्ति हुन्छ। कुनै पनि वस्तुबाट कसैको उत्पत्ति हुँदा त्यो वस्तुमा केही न केही परिवर्तन आउनै पर्छ। त्यसो भए जगत्को रूपमा आउँदा के ब्रह्ममा विकार आएको छ त ? भन्ने शङ्कामा भनिएको छ– **अगुणात् अविक्रियात्** अर्थात् परमात्मा निर्गुण र निर्विकार हुनुहुन्छ। **अनीहः** अर्थात् परमात्मामा सृष्टि गर्ने कुनै इच्छा पनि छैन। यहाँ फेरि शङ्का के हुन्छ भने भगवान् इच्छारहित भए सृष्टि कसरी हुन सक्यो ? किनभने कुनै पनि पदार्थ बनाउन पहिला त्यसको कर्ताले चाहना गर्नै पर्छ। फेरि कर्ता भएपछि भगवान् कसरी अविकारी हुनुभयो ? यी दुई शङ्काको उत्तरमा भनिन्छ– निर्गुण निर्विकार ब्रह्म भए पनि हजुरले मायाद्वारा ईश्वरभावले सृष्टि गर्न सम्भव छँदैछ। वास्तवमा त सृष्टि आदि मायाका गुणहरूले गर्ने हुन्, परमात्मा त निर्विकार हुनुहुन्छ। **त्वदाश्रयत्वाद्** अर्थात् ती गुणहरू परमात्मामा आश्रित भएकाले तिनले गरेको सृष्टिलाई परमात्माको भनिएको हो। परमात्माविना मायाको सत्ता सिद्ध नहुने भएकाले मायाद्वारा भएको सृष्टिलाई परमात्माबाट भएको हो भनिन्छ। यहाँ सृष्टिको विकारले निर्विकार परमात्मालाई छुँदैन भनी बताइएको छ।

**स त्वं त्रिलोकस्थितये स्वमायया बिभर्षि शुक्लं खलु वर्णमात्मनः।**
**सर्गाय रक्तं रजसोपबृंहितं कृष्णं च वर्णं तमसा जनात्यये॥ २०॥**

**पदार्थ–**
**सः त्वं** = त्यस्ता हजुर
**स्वमायया** = आफ्नो मायाद्वारा
**त्रिलोकस्थितये** = तीन लोकको रक्षाका लागि
**आत्मनः** = आफ्नो सत्त्वगुणको आधारमा
**शुक्लं वर्णम्** = सेतो वर्ण (वा विष्णुरूप)लाई
**बिभर्षि** = धारण गर्नुहुन्छ
**खलु** = निश्चय नै
**सर्गाय** = लोकको सृष्टि गर्न
**रजसा** = रजोगुणले
**उपबृंहितं** = युक्त भएको
**रक्तं** = रातो (वा ब्रह्माजीको रूप) धारण गर्नुहुन्छ र
**जनात्यये** = संहारका लागि
**तमसा च** = तमोगुणले युक्त
**कृष्णं वर्णं** = कालो वर्णवाला (रुद्रको रूप धारण गर्नुहुन्छ)

**वाक्यार्थ–** निर्गुण भएर पनि हजुर आफ्नो मायालाई लिएर तीन लोकको रक्षाका लागि सत्त्वप्रधान श्वेतवर्णयुक्त विष्णुको रूप, उत्पत्तिका लागि रजोगुणप्रधान रातोवर्णयुक्त ब्रह्माको रूप र संहारका लागि तमोगुणप्रधान कालोवर्णयुक्त रुद्रको रूप धारण गर्नुहुन्छ।

**त्वमस्य लोकस्य विभो रिरक्षिषुर्गृहेऽवतीर्णोऽसि ममाखिलेश्वर।**
**राजन्यसंज्ञासुरकोटियूथपैर्निर्व्यूह्यमाना निहनिष्यसे चमूः॥ २१॥**

**पदार्थ–**
**विभो** = हे सर्वव्यापक
**अखिलेश्वर** = हे सबैका नियामक भगवान्
**त्वं** = हजुरले
**अस्य लोकस्य** = यो लोकको
**रिरक्षिषुः** = रक्षा गर्ने इच्छाले नै
**मम** = मेरो (वसुदेवको)
**गृहे** = घरमा
**अवतीर्णः** = अवतार लिनुभएको
**असि** = छ
**राजन्यसंज्ञासुरकोटियूथपैः** = क्षत्रिय राजाका नामधारक करोडौँ असुरसमूहद्वारा
**निर्व्यूह्यमानाः** = सञ्चालन गरिएका
**चमूः** = सेनाहरूलाई
**निहनिष्यसे** = नाश गर्नुहुनेछ

**वाक्यार्थ–** हे सर्वव्यापक र सर्वनियामक प्रभु ! हजुर सारा लोकको रक्षाका लागि मेरो घरमा अवतीर्ण हुनुभएको छ। अहिलेको समयमा करोडौँ असुरसमूहहरूले क्षत्रियराजाको नाम धारण गरेका छन्। तिनीहरूले सञ्चालन गरेको सेनालाई हजुरले नै नाश गर्नुहुनेछ।

**अयं त्वसभ्यस्तव जन्म नौ गृहे श्रुत्वाग्रजांस्ते न्यवधीत् सुरेश्वर।**
**स तेऽवतारं पुरुषैः समर्पितं श्रुत्वाधुनैवाभिसरत्युदायुधः॥ २२॥**

**पदार्थ–**
**सुरेश्वर** = हे देवाधिदेव प्रभु
**असभ्यः** = अत्यन्त मूर्ख
**अयं** = यो कंसले
**नौ** = हाम्रो
**गृहे** = घरमा
**तव** = हजुरको
**जन्म** = जन्म हुन्छ भनेर
**श्रुत्वा** = सुनेपछि
**ते** = हजुरका
**अग्रजान्** = दाजुहरूलाई
**न्यवधीत्** = माऱ्यो
**सः** = त्यो कंस
**पुरुषैः** = (दूतका रूपमा रहेका) व्यक्तिहरूद्वारा
**समर्पितं** = सुनाइएको
**ते** = हजुरको
**अवतारं** = यो अवतारलाई
**श्रुत्वा** = सुनेर
**उदायुधः** = हतियार उठाएर
**अधुना एव** = अहिले नै
**अभिसरति** = आउँछ

**वाक्यार्थ–** हे देवाधिदेव प्रभु ! यो दुष्ट कंसले हाम्रो घरमा हजुरको जन्म हुन्छ भन्ने कुरो सुनेर हजुरका सबै दाजुहरूलाई माऱ्यो। अब उसलाई हजुरको जन्म भएको कुरो दूतहरूले सुनाउनेछन्। त्यो सुन्नेबित्तिकै ऊ हतियार बोकेर अहिले नै आउँछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथैनमात्मजं वीक्ष्य महापुरुषलक्षणम्।**

## देवकी तमुपाधावत् कंसाद् भीता सुचिस्मिता ॥ २३ ॥

**पदार्थ–**
**अथ** = त्यसपछि
**कंसात्** = कंसबाट
**भीता** = डराएकी
**देवकी** = देवकीले
**एनं** = यी
**आत्मजं** = आफूबाट उत्पन्न भएका पुत्रलाई
**महापुरुषलक्षणम्** = (चतुर्भुज, शङ्ख, चक्र आदि) भगवद्लक्षणले युक्त
**वीक्ष्य** = देखेर
**शुचिस्मिता** = पवित्र मुस्कान भएकी (देवकी)
**तं** = ती भगवान्को
**उपाधावत्** = नजिकै जानुभयो (र स्तुति गर्न लाग्नुभयो)

**वाक्यार्थ–** कंसबाट डराएकी देवकीले भगवद्लक्षणले युक्त भएका आफ्ना पुत्रलाई देखिसकेपछि निश्छल भावले मुस्कुराउँदै स्तुति गर्न थाल्नुभयो।

**देवक्युवाच** (देवकीले भन्नुभयो)

## रूपं यत् तत् प्राहुरव्यक्तमाद्यं ब्रह्म ज्योतिर्निर्गुणं निर्विकारम्।
## सत्तामात्रं निर्विशेषं निरीहं स त्वं साक्षाद् विष्णुरध्यात्मदीपः ॥ २४ ॥

**पदार्थ–**
**अव्यक्तं** = अव्यक्त (अतीन्द्रिय)
**आद्यं** = कारणरूप
**ब्रह्म** = व्यापक
**ज्योतिः** = चिद्रूप
**निर्गुणं** = सत्त्व आदि गुणरहित
**निर्विकारम्** = सर्वविकाररहित
**निर्विशेषं** = जाति, गुण आदि विशेषण रहित र
**सत्तामात्रं** = सत्रूप मात्र भएका
**निरीहं** = सर्वसङ्कल्प रहित भनेर
**यत् तत्** = जो हजुरको
**रूपं** = रूपलाई
**प्राहुः** = (वेदहरूले) बताएका छन्
**सः** = त्यस्तो
**साक्षात्** = साक्षात्
**अध्यात्मदीपः** = इन्द्रियादि सङ्घातको प्रकाशक
**विष्णुः** = व्यापक परमात्मा
**त्वं** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! जो हजुरको रूपलाई वेदहरूले अतीन्द्रिय, कारणरूप, व्यापक, चिद्रूप, निर्गुण, निर्विकार, जाति एवं गुण आदि विशेषणरहित, सर्वसङ्कल्पशून्य, केवल सत्तामात्र भनेर बताएका छन् त्यस्तो देहेन्द्रिय आदि सङ्घातलाई प्रकाशित गर्ने व्यापक परमात्मा हजुर नै हुनुहुन्छ।

## नष्टे लोके द्विपरार्धावसाने महाभूतेष्वादिभूतं गतेषु।
## व्यक्तेऽव्यक्तं कालवेगेन याते भवानेकः शिष्यते शेषसंज्ञः ॥ २५ ॥

**पदार्थ–**
**कालवेगेन** = कालशक्तिको प्रभावले
**द्विपरार्धावसाने** = द्विपरार्ध (ब्रह्माजीको पूरा आयु) समाप्त भएपछि
**लोके** = लोकहरू (चौधै भुवन)
**नष्टे** = नष्ट भएपछि
**महाभूतेषु** = पृथिवी आदि महाभूतहरू
**आदिभूतं** = सूक्ष्मभूत अहङ्कार आदिमा

**गतेषु** = कारण परम्पराले लीन भएपछि
**व्यक्ते** = व्यक्त महत्तत्त्व पनि
**अव्यक्तं** = अव्यक्त प्रकृतिमा
**याते** = लीन भएपछि
**शेषसंज्ञः** = शेष नाम भएको
**भवान्** = हजुर
**एकः** = एउटा मात्र
**शिष्यते** = बाँकी रहनुहुन्छ

**वाक्यार्थ–** कालको प्रभावले ब्रह्माजीको पूरा आयु द्विपरार्धको समाप्तिपछि चौधै भुवनहरू नष्ट हुनेछन्। पृथिवी आदि महाभूतहरू पनि कारणमा लीन हुँदै भूतसूक्ष्म अहङ्कार आदिमा लीन हुनेछन्। महत्तत्त्व आदि पनि अव्यक्त प्रकृतिमा र प्रकृति पनि हजुरमा लीन भएपछि शेष नाम भएको एउटा हजुरमात्र बाँकी रहनुहुनेछ।

**योऽयं कालस्तस्य तेऽव्यक्तबन्धो चेष्टामाहुश्चेष्टते येन विश्वम्।**
**निमेषादिर्वत्सरान्तो महीयांस्तं त्वेशानं क्षेमधाम प्रपद्ये॥ २६॥**

**पदार्थ–**
**अव्यक्तबन्धो** = हे प्रकृतिका प्रवर्तक प्रभु
**यः** = जो
**अयं** = यो
**निमेषादिः** = निमेषदेखि लिएर
**वत्सरान्तः** = वर्षसम्मको
**महीयान्** = विविध भागमा विस्तारित महान्
**कालः** = समय छ
**येन** = जुन कालद्वारा
**विश्वम्** = सारा विश्व नै
**चेष्टते** = चेष्टावाला बन्छ (र परिवर्तित हुन्छ, त्यस्तो काल)
**तस्य** = त्यस्ता सर्वसाक्षी
**ते** = हजुरको
**चेष्टाम्** = लीला मात्र हो भनेर
**आहुः** = भन्दछन्
**तं** = त्यस्ता
**ईशानं** = (प्रकृतिका र कालका) नियामक
**क्षेमधाम** = कल्याणको आश्रयस्वरूप प्रभुको
**प्रपद्ये** = शरणमा पर्दछु

**वाक्यार्थ–** हे प्रकृतिका प्रवर्तक प्रभु ! जो निमेष आदि सूक्ष्म रूपदेखि लिएर वर्षसम्मको विविध भागमा विभक्त महान् काल छ त्यही कालको आधारमा सारा विश्व चेष्टावाला बन्छ र परिवर्तित हुन्छ। त्यस्तो काल पनि हजुरको एउटा लीला मात्र हो भनेर विवेकीहरू भन्दछन्। म त्यस्ता प्रकृति र कालका पनि नियामक प्रभुको शरणमा पर्दछु।

**मर्त्यो मृत्युव्यालभीतः पलायन् लोकान् सर्वान् निर्भयं नाध्यगच्छत्।**
**त्वत्पादाब्जं प्राप्य यदृच्छयाद्य स्वस्थः शेते मृत्युरस्मादपैति॥ २७॥**

**पदार्थ–**
**आद्य** = हे आदिपुरुष प्रभु
**मर्त्यः** = मरणधर्मा जीवले
**मृत्युव्यालभीतः** = मृत्युरूपी महासर्पदेखि डराएर
**सर्वान्** = सम्पूर्ण
**लोकान्** = लोकलोकान्तरमा
**पलायन्** = घुम्दाघुम्दै पनि
**निर्भयं** = भयरहित ठाउँ
**न अध्यगच्छत्** = प्राप्त गर्न सकेन (आज)
**यदृच्छया** = अचानक
**त्वत्पादाब्जं** = हजुरको चरणकमललाई
**प्राप्य** = पाएर
**स्वस्थः** = निर्भय भएर
**शेते** = रहेका छन्
**अस्मात्** = हजुरको चरणकमलमा प्राप्त भएको यस व्यक्तिबाट
**मृत्युः** = काल पनि

**अपैति** = भाग्दछ

**वाक्यार्थ–** हे आदिपुरुष प्रभु ! यो मरणधर्मा जीव मृत्युरूपी महासर्पदेखि डराएर सारा लोकलोकान्तरमा निर्भयका लागि घुमिरहेको थियो, तर कतै पनि उसले भयरहित ठाउँ पाउन सकेको थिएन। आज अचानक हजुरको चरणकमललाई प्राप्त गरी ऊ निर्भय भएर रहेको छ। हजुरको चरणकमलको चिन्तन गर्ने व्यक्तिबाट स्वयं काल पनि डराएर भाग्दछ।

**विवरण–** यस प्रसङ्गमा देवकीले भगवान्लाई मृत्युभयनाशक भनी स्तुति गर्नुभएको छ। काल पनि भगवान्को चेष्टालाई पाएर नै चेष्टावान् हुने र प्रलयपछि पनि भगवान् नै शेष रहने कुरा बताई उहाँले आफ्नो हृदयभित्रको डरलाई शान्त गर्ने प्रयास गर्नुभएको छ। उहाँलाई कंसले केही गरिहाल्ला कि भन्ने डर पनि छ र सर्वसमर्थ परमात्माप्रति विश्वास पनि। तैपनि देवकीले भगवान्लाई प्रकट रूपमा नदेखिन आग्रह गर्नुभएको छ। जहाँ प्रेम हुन्छ, त्यहाँ आफ्नो व्यक्तिको अनिष्ट नहोस् भन्ने चिन्ता हुन्छ र जहिलेसुकै केही भइहाल्ला कि भन्ने शङ्का पनि रहिरहन्छ। यहाँ देवकीले पनि भगवान्को चिन्ता गरी यही मातृवात्सल्य प्रकट गर्नुभएको छ। आफ्ना छ जना छोराहरूलाई कंसले मारिसकेको सम्झिँदै उहाँले आफ्ना चतुर्भुजी नारायणरूप पुत्रलाई मृत्युभयबाट जोगाउने तत्त्वको रूपमैं प्रार्थना गर्नुभएको छ। भयत्रस्त देवकीको यही मनोभाव यस श्लोकमा प्रकट भएको छ। उहाँको त्यो डर तलका श्लोकहरूमा अरू स्पष्ट भएको देखिन्छ।

**स त्वं घोरादुग्रसेनात्मजान् नस्त्राहि त्रस्तान् भृत्यवित्रासहासि ।**
**रूपं चेदं पौरुषं ध्यानधिष्ण्यं मा प्रत्यक्षं मांसदृशां कृषीष्ठाः ॥ २८ ॥**

**पदार्थ–**
**सः** = त्यस्ता सर्वसमर्थ
**त्वं** = हजुरले
**घोरात्** = अत्यन्तर क्रूर
**उग्रसेनात्मजात्** = उग्रसेनपुत्र कंसबाट
**त्रस्तान्** = डराएका
**नः** = हामीहरूलाई
**त्राहि** = रक्षा गर्नुहोस् (हजुर)
**भृत्यवित्रासहा** = सेवकहरूको भयलाई नाश गरिदिने
**असि** = हुनुहुन्छ
**पौरुषं** = ईश्वरसम्बन्धी
**ध्यानधिष्ण्यं** = ध्यानको मात्र विषय बन्ने
**इदं** = यो
**रूपं च** = चतुर्भुजयुक्त रूपलाई
**मांसदृशां** = चर्मचक्षुवालाहरूको अगाडि
**प्रत्यक्षं** = प्रत्यक्ष
**मा कृषीष्ठाः** = नगराउनुहोस्

**वाक्यार्थ–** हे प्रभु ! अत्यन्त क्रूर कंसबाट डराएका हामीहरूको रक्षा गर्नुहोस् किनभने हजुर सेवकको भयलाई नाश गरिदिनेवाला हुनुहुन्छ। चर्मचक्षुले हेर्नेहरूको अगाडि हजुरको यो चतुर्भुजयुक्त रूपलाई नदेखाउनुहोस्। (यसलाई लुकाउनुहोस्।)

**जन्म ते मय्यसौ पापो मा विद्यान्मधुसूदन ।**
**समुद्विजे भवद्धेतोः कंसादहमधीरधीः ॥ २९ ॥**

**पदार्थ–**
**मधुसूदन** = हे मधुसूदन प्रभु
**असौ** = यो

**पापः** = पापी कंसले
**मयि** = मेरो गर्भबाट
**ते** = हजुरको
**जन्म** = जन्म भएको कुरा
**मा विद्यात्** = थाहा नपाओस्
**अहं** = म
**अधीरधीः** = धैर्यरहित भएकी र
**भवद्धेतोः** = हजुरको कारणले
**कंसात्** = कंसबाट
**समुद्विजे** = अत्यन्त डराएकी छु

**वाक्यार्थ–** हे मधुसूदन ! यो पापी कंसले मेरो गर्भबाट हजुरको जन्म भएको भन्ने कुरा थाहा नपाओस् किनभने म अधीर भएकी छु र हजुरको कारणले कंसबाट अत्यन्त डराएकी छु।

**उपसंहर विश्वात्मन्नदो रूपमलौकिकम्।**
**शङ्खचक्रगदापद्मश्रिया जुष्टं चतुर्भुजम्॥ ३०॥**

**पदार्थ–**
**विश्वात्मन्** = हे सर्वान्तिर्यामी प्रभु
**अदः** = यो
**शङ्खचक्रगदापद्मश्रिया** = शङ्ख, चक्र, गदा र पद्मको शोभाले
**जुष्टं** = युक्त भएको
**चतुर्भुजम्** = चार हात भएको
**अलौकिकम्** = अलौकिक
**रूपं** = स्वरूपलाई
**उपसंहर** = लुकाउनुहोस्

**वाक्यार्थ–** हे सर्वान्तिर्यामी प्रभु ! यो शङ्ख, चक्र, गदा र पद्मले सुशोभित चार हात भएको अलौकिक रूपलाई लुकाउनुहोस् (र सामान्य बालकको रूपमा देखिनुहोस्)।

**विश्वं यदेतत् स्वतनौ निशान्ते यथावकाशं पुरुषः परो भवान्।**
**बिभर्ति सोऽयं मम गर्भगोऽभूदहो नृलोकस्य विडम्बनं हि तत्॥ ३१॥**

**पदार्थ–**
**निशान्ते** = प्रलयपछि
**यत्** = जो
**एतत्** = यो
**विश्वं** = विश्वलाई
**स्वतनौ** = आफ्नो शरीरभित्र
**यथावकाशं** = सजिलैसँग
**बिभर्ति** = धारण गर्नुहुन्छ
**सः अयं** = त्यस्तो
**परः पुरुषः** = परमपुरुष परमात्मा
**भवान्** = हजुर
**मम** = मेरो
**गर्भगः** = गर्भमा अटाउने
**अभूत्** = हुनुभयो
**अहो** = बडो आश्चर्य छ
**हि** = निश्चय नै
**तत्** = त्यो
**नृलोकस्य** = मनुष्य लोकको
**विडम्बनम्** = अनुकरण मात्र हो (र एउटा लीला मात्र हो)

**वाक्यार्थ–** प्रलयपछि यो सारा विश्वब्रह्माण्डलाई हजुरले आफ्नै शरीरभित्र सजिलैसँग राख्नुहुन्छ। त्यस्तो विराट् परमात्मा अहिले मेरो गर्भभित्रै अटाउने हुनुभएको छ (र सामान्य बालकको रूपमा आउनुभएको छ) यो हजुरको मनुष्यको अनुकरण मात्र हो र लीला मात्र हो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**त्वमेव पूर्वसर्गेऽभूः पृश्निः स्वायम्भुवे सति।**

**तदायं सुतपा नाम प्रजापतिरकल्मषः ॥ ३२ ॥**

**पदार्थ–**
**सति** = हे देवी
**पूर्वसर्गे** = पहिलो जन्ममा
**स्वायम्भुवे** = स्वायम्भुव मन्वन्तरमा
**त्वम् एव** = तपाईं नै
**पृश्निः** = पृश्नि नामकी
**अभूः** = हुनुहुन्थ्यो र
**अयं** = यहाँ वसुदेव चाँहि
**तदा** = त्यस समयमा
**सुतपा नाम** = सुतपा नाम गरेका
**अकल्मषः** = अत्यन्त पवित्र
**प्रजापतिः** = प्रजापति हुनुहुन्थ्यो

**वाक्यार्थ–** हे देवी ! पहिलो जन्ममा स्वायम्भुव मन्वन्तरमा तपाईंको नाम पृश्नि थियो र वसुदेव चाँहि सुतपा नामका पवित्र प्रजापति हुनुहुन्थ्यो।

**युवां वै ब्रह्मणादिष्टौ प्रजासर्गे यदा ततः।**
**सन्नियम्येन्द्रियग्रामं तेपाथे परमं तपः ॥ ३३ ॥**

**पदार्थ–**
**यदा** = जब
**ब्रह्मणा** = ब्रह्माजीद्वारा
**प्रजासर्गे** = प्रजा सृष्टिका लागि
**युवां** = तपाईंहरू दुईलाई
**आदिष्टौ** = आज्ञा दिइयो,
**ततः** = त्यसपछि तपाईंहरूले
**इन्द्रियग्रामं** = इन्द्रियसमूहलाई
**सन्नियम्य** = रोकेर
**वै** = निश्चय नै
**परमं** = अत्यन्त कठिन
**तपः** = तपस्या
**तेपाथे** = गर्नुभयो

**वाक्यार्थ–** जब ब्रह्माजीले तपाईंहरूलाई प्रजा सृष्टिका लागि आज्ञा दिनुभयो, त्यसपछि तपाईंहरूले सारा इन्द्रियवृत्तिहरूलाई रोकेर अत्यन्त कठिन तपस्या गर्नुभयो।

**वर्षवातातपहिमघर्मकालगुणाननु।**
**सहमानौ श्वासरोधविनिर्धूतमनोमलौ ॥ ३४ ॥**
**शीर्णपर्णानिलाहारावुपशान्तेन चेतसा।**
**मत्तः कामानभीप्सन्तौ मदाराधनमीहतुः ॥ ३५ ॥**

**पदार्थ–**
**वर्षवातातपहिमघर्मकालगुणान्** = वर्षा, हावाहुरी, घाम, ठण्डी, गर्मी आदि समयानुसारको प्रकृतिका गुणलाई
**अनु** = क्रमैसँग निरन्तर
**सहमानौ** = सहन गर्दै
**श्वासरोधविनिर्धूतमनोमलौ** = प्राणायामद्वारा मनको कल्मषलाई हटाइसक्नुभएका (तपाईंहरूले)
**मत्तः** = मबाट
**कामान्** = अभीष्ट वस्तुको
**अभीप्सन्तौ** = इच्छा गर्दै
**शीर्णपर्णानिलाहारौ** = सुकेका पात र वायु मात्र खाँदै
**उपशान्तेन** = अत्यन्त शान्त
**चेतसा** = चित्तले
**मदाराधनं** = मेरो आराधना
**ईहतुः** = गर्नुभयो

**वाक्यार्थ–** वर्षा, हावा, घाम, ठण्डी, गर्मी आदि प्रकृतिका गुणहरूलाई निरन्तर सहेर प्राणायामद्वारा तपाईंहरूले आफ्नो मनको कल्मषलाई हटाउनुभयो। मबाट आफ्नो अभीष्ट वस्तु प्राप्त गर्ने इच्छा गर्दै तपाईंहरूले सुकेका पात र वायु सेवन गर्दै अति शान्त चित्तले मेरो आराधना गर्नुभयो।

**एवं वां तप्यतोस्तीव्रं तपः परमदुष्करम्।**

**दिव्यवर्षसहस्राणि द्वादशेयुर्मदात्मनोः॥ ३६॥**

**पदार्थ–**
**एवं** = यसरी
**परमदुष्करम्** = अति कठिन
**तपः तप्यतोः** = तपस्या गर्दै रहनुभएका
**मदात्मनोः** = ममा चित्त लगाउनुभएका
**वां** = तपाईंहरू दुईको
**द्वादशदिव्यवर्षसहस्राणि** = देवप्रमाणले बाह्र हजार वर्ष
**तीव्रं** = अत्यन्त छिटो
**ईयुः** = बिते

**वाक्यार्थ–** यसरी ममा चित्त लगाएर अति कठिन तपस्या गर्दागर्दै तपाईंहरूको दिव्य बाह्र हजार वर्ष अत्यन्त छिटै बिते।

**तदा वां परितुष्टोऽहममुना वपुषानघे।**

**तपसा श्रद्धया नित्यं भक्त्या च हृदि भावितः॥ ३७॥**

**प्रादुरासं वरदराड् युवयोः कामदित्सया।**

**व्रियतां वर इत्युक्ते मादृशो वां वृतः सुतः॥ ३८॥**

**पदार्थ–**
**अनघे** = हे पुण्यमयी देवी
**तदा** = त्यस बखतमा
**वां** = तपाईंहरू दुईले
**तपसा** = तपस्याद्वारा
**नित्यं** = सधैं
**श्रद्धया** = श्रद्धाले र
**भक्त्या** = भक्तिले
**हृदि** = हृदयमा
**भावितः** = चिन्तन गरिएको
**अहं** = म
**परितुष्टः** = प्रसन्न भएँ र
**वरदराट्** = वर दिनमा श्रेष्ठ म
**युवयोः** = तपाईंहरू दुईको
**कामदित्सया च** = कामना पूरा गरिदिन
**अमुना** = यही
**वपुषा** = चतुर्भुजयुक्त शरीरले
**प्रादुरासं** = तपाईंहरूको अगाडि प्रकट भएँ
**वां** = तपाईंहरू दुईलाई
**वरः** = वर
**व्रियतां** = माग्नुहोस् भनेर
**इति** = यसरी
**उक्ते** = मैले भनेपछि, तपाईंहरूले
**मादृशः** = मजस्तै
**सुतः** = छोरो
**वृतः** = माग्नुभयो

**वाक्यार्थ–** हे पुण्यमयी देवी ! त्यस बखतमा तपाईंहरूद्वारा तपस्या, श्रद्धा र भक्तिले हृदयमा चिन्तन गरिएको म तपाईंहरूप्रति प्रसन्न भएँ र वर दिनमा श्रेष्ठ यही चतुर्भुज स्वरूपमा तपाईंहरूलाई वर दिनको लागि प्रकट भएँ अनि 'वर माग्नुहोस्' भनेर मैले भनेपछि तपाईंहरूले

मजस्तै छोरो माग्नुभयो।

**अजुष्टग्राम्यविषयावनपत्यौ च दम्पती।**
**न वव्राथेऽपवर्गं मे मोहितौ मम मायया॥ ३९॥**

**पदार्थ–**
**अजुष्टग्राम्यविषयौ** = कहिल्यै पनि विषयको भोग नभोगेका
**अनपत्यौ च** = कुनै पनि सन्तान नभएका
**मम** = मेरो
**मायया** = मायाले
**मोहितौ** = मोहित भएका
**दम्पती** = तपाईंहरू दुई दम्पतीले
**मे** = मबाट
**अपवर्गं** = मोक्ष
**न वव्राथे** = माग्नुभएन

**वाक्यार्थ–** कहिल्यै पनि विषयभोग नभोगेका अनि कुनै सन्तान पनि नभएका तपाईंहरू दुई दम्पती मेरो मायाले मोहित हुनुभयो र त्यसैका कारणले तपाईंहरूले मबाट मोक्ष माग्नुभएन।

**गते मयि युवां लब्ध्वा वरं मत्सदृशं सुतम्।**
**ग्राम्यान् भोगानभुञ्जाथां युवां प्राप्तमनोरथौ॥ ४०॥**

**पदार्थ–**
**मयि** = म (वर दिएर)
**गते** = गएपछि
**युवां** = तपाईंहरू दुईले
**मत्सदृशं** = मजस्तै
**सुतम्** = छोरा पाउने
**वरं** = वर
**लब्ध्वा** = पाएर
**प्राप्तमनोरथौ** = मनोरथ पूर्ण भएका
**युवां** = तपाईंहरू
**ग्राम्यान्** = विषयसम्बन्धी
**भोगान्** = भोगहरू
**अभुञ्जाथाम्** = भोग्न थाल्नुभयो

**वाक्यार्थ–** वर दिएर म गएपछि मजस्तै छोरो पाउने वर प्राप्त गर्नुभएकाले तपाईंहरूको इच्छा पूर्ण भयो र तपाईंहरू विषयसम्बन्धी भोग भोग्न थाल्नुभयो।

**अदृष्ट्वान्यतमं लोके शीलौदार्यगुणैः समम्।**
**अहं सुतो वामभवं पृश्निगर्भ इति श्रुतः॥ ४१॥**

**पदार्थ–**
**लोके** = लोकमा
**शीलौदार्यगुणैः** = शील, उदारता जस्ता गुणहरूद्वारा
**समम्** = म बराबरको
**अन्यतमं** = अर्को
**अदृष्ट्वा** = नदेखेर
**अहं** = म आफैं नै
**वां** = तपाईंहरू दुईको
**पृश्निगर्भः इति** = पृश्निगर्भ नामले
**श्रुतः** = प्रसिद्ध भएको
**सुतः** = छोरो
**अभवम्** = भएँ

**वाक्यार्थ–** शील, उदारता आदि गुणका आधारमा मैले आफूबराबरको कोही पनि देखिनँ र म आफैं तपाईंहरूको पृश्निगर्भ नाम भएको छोरो भएर जन्मिएँ।

**तयोर्वां पुनरेवाहमदित्यामास कश्यपात्।**

**उपेन्द्र इति विख्यातो वामनत्वाच्च वामनः ॥ ४२ ॥**

**पदार्थ–**
**पुनः** = फेरि अर्को जन्ममा
**अहं** = म
**तयोः एव** = ती दुई
**वां** = तपाईंहरू पृश्नि र सुतपाबाट नै अर्थात्
**कश्यपात्** = सुतपाको अर्को रूप कश्यपबाट
**अदित्यां** = पृश्निको अर्को रूप अदितिमा
**उपेन्द्रः इति विख्यातः** = उपेन्द्र नामले विख्यात पुत्र भएर
**आस** = जन्मिएँ
**वामनत्वात् च** = होचो भएको हुनाले
**वामनः** = मलाई वामन पनि भन्दथे

**वाक्यार्थ–** त्यसपछि अर्को जन्ममा तपाईंहरू कश्यप र अदिति हुनुभयो, त्यस जन्ममा पनि म तपाईंहरूबाट उपेन्द्र नामको छोरो भएर जन्मिएँ। म होचो भएको हुनाले त्यस जन्ममा मलाई वामन पनि भन्दथे।

**तृतीयेऽस्मिन् भवेऽहं वै तेनैव वपुषाथ वाम्।**
**जातो भूयस्तयोरेव सत्यं मे व्याहृतं सति ॥ ४३ ॥**

**पदार्थ–**
**सति** = हे पतिव्रता देवकी
**अथ** = त्यसपछि
**भूयः** = फेरि
**तयोः एव** = ती दुई कश्यप र अदितिको
**अस्मिन्** = यो
**तृतीये** = तेस्रो
**भवे** = जन्ममा
**अहं** = म
**तेन एव** = उही
**वपुषा** = चतुर्भुजयुक्त शरीरले
**वाम्** = तपाईंहरूको पुत्र भएर
**जातः** = जन्मिएको छु
**मे** = मैले
**व्याहृतं** = बताएको सबै कुरा
**वै** = निश्चय नै
**सत्यम्** = साँचो हो

**वाक्यार्थ–** हे पतिव्रता देवकी ! फेरि तेस्रो जन्ममा पनि म उही चतुर्भुजयुक्त शरीरले तपाईंहरूको छोरो भएर जन्मिएको छु। मैले भनेको कुरा साँचो हो।

**एतद् वां दर्शितं रूपं प्राग्जन्मस्मरणाय मे।**
**नान्यथा मद्भवं ज्ञानं मर्त्यलिङ्गेन जायते ॥ ४४ ॥**

**पदार्थ–**
**प्राग्जन्मस्मरणाय** = पूर्वजन्मको कुरा सम्झाउनका लागि
**मे** = मैले
**एतत्** = यो
**रूपं** = चतुर्भुज रूप
**वां** = तपाईंहरूलाई
**दर्शितं** = देखाएँ
**अन्यथा** = नत्र
**मर्त्यलिङ्गेन** = मानवीय शरीरद्वारा
**मद्भवं** = मेरो अवतारसम्बन्धी
**ज्ञानं** = ज्ञान
**न जायते** = हुँदैन

**वाक्यार्थ–** मैले पहिलाका जन्महरूको कुरा सम्झाउनको लागि यो चतुर्भुज आदि रूप देखाएको हुँ। यस्तो रूप यदि मैले नदेखाएको भए मानवीय शरीरद्वारा मेरो अवतारसम्बन्धी ज्ञान हुने नै

थिएन।

**युवां मां पुत्रभावेन ब्रह्मभावेन चासकृत्।**
**चिन्तयन्तौ कृतस्नेहौ यास्येथे मद्गतिं पराम्॥ ४५॥**

**पदार्थ–**
**युवां** = तपाईंहरू दुई जना
**मां** = मलाई
**पुत्रभावेन** = छोराको भावनाले
**ब्रह्मभावेन च** = परब्रह्मको भावनाले पनि
**असकृत्** = बारम्बार
**चिन्तयन्तौ** = चिन्तन गर्दै
**कृतस्नेहौ** = स्नेहद्वारा
**पराम्** = सर्वोत्कृष्ट
**मद्गतिं** = मेरो धाममा
**यास्येथे** = प्राप्त हुनुहुनेछ

**वाक्यार्थ–** मलाई पुत्रभावले र ब्रह्मभावले बारम्बार स्नेहपूर्वक चिन्तन गरेर तपाईंहरू मेरो सर्वोत्कृष्ट धाममा प्राप्त हुनुहुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्त्वासीद्धरिस्तूष्णीं भगवानात्ममायया।**
**पित्रोः सम्पश्यतोः सद्यो बभूव प्राकृतः शिशुः॥ ४६॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**इति उक्त्वा** = यति भनेर
**तूष्णीं** = मौन
**आसीत्** = हुनुभयो (त्यसपछि)
**पित्रोः** = बाबुआमाले
**सम्पश्यतोः** = हेर्दाहेर्दै
**आत्ममायया** = आफ्नै मायाले
**सद्यः** = तुरुन्त
**प्राकृतः** = स्वाभाविक
**शिशुः** = बालक
**बभूव** = हुनुभयो

**वाक्यार्थ–** भगवान् श्रीहरि जब यति भनेर चुप लाग्नुभयो, त्यसपछि मातापिताले हेर्दाहेर्दै उहाँ तुरुन्तै आफ्नो मायाको प्रभावले स्वाभाविक बालक हुनुभयो।

**ततश्च शौरिर्भगवत्प्रचोदितः सुतं समादाय स सूतिकागृहात्।**
**यदा बहिर्गन्तुमियेष तर्ह्यजा या योगमायाजनि नन्दजायया॥ ४७॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
**भगवत्प्रचोदितः** = भगवान्को प्रेरणाले
**सः** = ती
**शौरिः** = शूरपुत्र वसुदेवले
**यदा** = जुन बखतमा
**सुतं** = पुत्रलाई
**समादाय** = लिएर
**सूतिकागृहात्** = सुत्केरी भएको कारागारबाट
**बहिः** = बाहिर
**गन्तुम्** = जान
**इयेष** = इच्छा गर्नुभयो
**तर्हि** = त्यसै बखतमा
**या** = जो
**अजा** = स्वाभाविक जन्मरहित
**योगमाया** = योगमाया थिइन् (तिनलाई)
**नन्दजायया** = नन्दपत्नी यशोदाले
**अजनि** = जन्माइन्

**वाक्यार्थ–** भगवान्को वचनबाट प्रेरित भई जब वसुदेवले पुत्रलाई लैजान कारागारबाट बाहिर

निस्कने विचार गर्नुभयो त्यसै बखतमा स्वाभाविक जन्मशून्य योगमायालाई नन्दपत्नी यशोदाले जन्माइन्।

**तया हृतप्रत्ययसर्ववृत्तिषु द्वाःस्थेषु पौरेष्वपि शायितेष्वथ।**
**द्वारश्च सर्वाः पिहिता दुरत्यया बृहत्कपाटायसकीलशृङ्खलैः॥ ४८॥**
**ताः कृष्णवाहे वसुदेव आगते स्वयं व्यवर्यन्त यथा तमो रवेः।**
**ववर्ष पर्जन्य उपांशुगर्जितः शेषोऽन्वगाद् वारि निवारयन् फणैः॥ ४९॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**तया** = ती योगमायाद्वारा
**हृतप्रत्ययसर्ववृत्तिषु** = सारा इन्द्रियचेतनालाई हरण गरेपछि
**द्वाःस्थेषु** = द्वारपालहरू र
**पौरेषु अपि** = सहरवासीहरू पनि
**शायितेषु** = सुतेपछि
**बृहत्कपाटायसकीलशृङ्खलैः** = ठुला-ठुला ढोकाका खापा, फलामका आग्ला र साङ्लाहरूद्वारा
**पिहिता** = बन्द गरिएका (त्यसैले)
**दुरत्यया** = निस्कन असंभवजस्ता
**सर्वाः** = सबै
**ताः** = ती
**द्वारः च** = ढोकाहरू पनि
**कृष्णवाहे** = भगवान् कृष्णलाई बोकेका
**वसुदेवे** = वसुदेव
**आगते** = आएपछि
**रवेः** = सूर्य उदाएपछि
**यथा** = जसरी
**तमः** = अन्धकार
**स्वयं** = आफैँ (हटेर जान्छ, त्यसै गरी)
**व्यवर्यन्त** = खुले
**उपांशुगर्जितः** = मन्द-मन्द गर्जना गर्दै गरेको
**पर्जन्यः** = मेघले
**ववर्ष** = वर्षा गर्न थाल्यो र
**शेषः** = शेषजी
**फणैः** = आफ्ना फणाद्वारा
**वारि** = पानीलाई
**निवारयन्** = छेक्दै (छाताजस्तो भएर)
**अन्वगात्** = पछि लाग्नुभयो

**वाक्यार्थ–** त्यसपछि योगमायाले सारा द्वारपाल र पुरवासीहरूको इन्द्रियको चेतनाशक्तिलाई हरण गरिदिइन्। भगवान् श्रीकृष्णलाई बोकेर बाहिर जान जब वसुदेव आउनुभयो, सूर्य उदाएपछि अन्धकार त्यसै हराए झैँ ठुलाठुला खापा, आग्ला र साङ्लाहरूले बन्द गरेका खोल्न असंभव ढोकाहरू पनि आफैँ खुले। मन्द-मन्द गर्जना गरिरहेका मेघहरूले पनि वर्षा गर्न थाले। अनि शेषजी आफ्नो फणाले बर्सिएको पानीलाई (छाताजस्तो भएर) छेक्दै भगवान्को पछि लाग्नुभयो।

**मघोनि वर्षत्यसकृद् यमानुजा गम्भीरतोयौघजवोर्मिफेनिला।**
**भयानकावर्तशताकुला नदी मार्गं ददौ सिन्धुरिव श्रियः पतेः॥ ५०॥**

**पदार्थ–**
**असकृत्** = बारम्बार
**मघोनि** = मेघ (इन्द्र)
**वर्षति** = वर्षा भइरहेको हुनाले
**गम्भीरतोयौघजवोर्मिफेनिला** = धेरै जलले भरिएर त्यसको वेगले छाल, तरङ्ग, फिँजहरू उठेकी
**भयानकावर्तशताकुला** = भयङ्कर सयौँ भुमरीहरूले व्याप्त भएकी
**यमानुजा** = (यमराजकी बहिनी) यमुना नामकी

**नदी** = नदीले
**श्रियः पतेः** = सीतापति
श्रीरामलाई
**सिन्धुः इव** = समुद्रले झैं
**मार्गं** = बाटो
**ददौ** = दिइन्

**वाक्यार्थ–** बारम्बार वर्षा भएकाले यमुना नदी धेरै बढेकी थिइन्। पानीले भरिपूर्ण भएकाले छाल, तरङ्ग र फिँजहरू धेरै उठेका थिए। भगवान् श्रीरामलाई समुद्रले बाटो दिए झैं भयङ्कर सयौं भुमरीहरूले व्याप्त भएकी यमुना नदीले भगवान् श्रीकृष्णलाई बाटो दिइन्।

**नन्दव्रजं शौरिरुपेत्य तत्र तान् गोपान् प्रसुप्तानुपलभ्य निद्रया।**
**सुतं यशोदाशयने निधाय तत्सुतामुपादाय पुनर्गृहानगात्॥ ५१॥**

**पदार्थ–**
**शौरिः** = शूरपुत्र वसुदेवले
**नन्दव्रजं** = नन्दबाबाको गोकुलमा
**उपेत्य** = गएर
**तत्र** = त्यहाँ
**निद्रया** = योगनिद्राको प्रभावले
**तान्** = ती
**गोपान्** = गोपगोपीहरूलाई
**प्रसुप्तान्** = निदाइरहेका
**उपलभ्य** = देखेर
**यशोदाशयने** = यशोदाको ओछ्यानमा
**सुतं** = पुत्रलाई
**निधाय** = राखेर
**तत्सुतां** = ती यशोदाकी छोरी (योगमाया)लाई
**उपादाय** = लिएर
**पुनः** = फेरि
**गृहान्** = कारागारतिर
**अगात्** = जानुभयो

**वाक्यार्थ–** वसुदेव नन्दबाबाको घरमा पुग्दा उहाँले त्यहाँ सबै गोपगोपीहरूलाई योगनिद्राको प्रभावले निदाइरहेका देख्नुभयो। त्यसै वेला उहाँले आफ्नो पुत्रलाई यशोदाको ओछ्यानमा छाड्नुभयो र यशोदाकी छोरी (योगमाया)लाई लिएर उहाँ फेरि कारागारतिर जानुभयो।

**देवक्याः शयने न्यस्य वसुदेवोऽथ दारिकाम्।**
**प्रतिमुच्य पदोर्लोहमास्ते पूर्ववदावृतः॥ ५२॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**वसुदेवः** = वसुदेवले
**देवक्याः** = देवकीको
**शयने** = ओछ्यानमा
**दारिकाम्** = बालिकालाई
**न्यस्य** = राखेर
**पदोः** = हातखुट्टामा
**लोहं** = फलामे साङ्ला
**प्रतिमुच्य** = लगाएर
**पूर्ववत्** = पहिले झैं
**आवृतः** = बन्दी बनेर
**आस्ते** = बस्नुभयो

**वाक्यार्थ–** त्यसपछि वसुदेवले बालिकालाई देवकीको ओछ्यानमा राखेर पहिले झैं हातखुट्टामा फलामे साङ्ला लगाएर बन्दी बनेर बस्नुभयो।

**यशोदा नन्दपत्नी च जातं परमबुध्यत।**
**न तल्लिङ्गं परिश्रान्ता निद्रयापगतस्मृतिः॥ ५३॥**

**पदार्थ–**
**नन्दपत्नी** = नन्दबाबाकी पत्नी
**यशोदा च** = यशोदाले पनि

**जातं** = आफूबाट बच्चा जन्मिएको कुरो
**अबुध्यत** = थाहा पाइन्
**परं** = तर
**परिश्रान्ता** = प्रसववेदनाले थाकेर र
**निद्रया** = योगमायाको प्रभावले
**अपगतस्मृतिः** = चित्त मोहित भएको हुनाले
**तल्लिङ्गं न** = त्यो बच्चा छोरा वा छोरी भन्ने कुरा थाहा पाइनन्

**वाक्यार्थ—** यता नन्दपत्नी यशोदाले बच्चा जन्मिएको कुरा थाहा त पाइन् तर आफू प्रसववेदनाले थकित भएको र योगमायाद्वारा मोहित भएको हुनाले त्यो बच्चा छोरा हो कि छोरी हो भन्ने कुरा थाहै पाइनन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**कृष्णजन्मनि तृतीयोऽध्यायः॥ ३॥**